# श्रीमद्भगवद्गीता
## यथारूप

कृष्णकृपामूर्ति

**श्री श्रीमद् ए. सी. भक्तिवेदान्त स्वामी प्रभुपाद**

संस्थापकाचार्य: अन्तर्राष्ट्रिय कृष्णभावनामृत संघ



## कृष्णकृपामय श्रीमद् ए.सी. भक्तिवेदान्त स्वामी प्रभुपादद्वारा विरचित ग्रन्थ रत्नहरू

१. श्रीमद् *भगवद्गीता* यथारूप
२. श्रीमद्भागवतम् स्कन्ध १-१२ (३० खण्डमा)
३. श्रीचैतन्य-चरितामृत (१७ खण्डमा)
४. लीलापुरूषोत्तम भगवान् श्रीकृष्ण
५. श्रीचैतन्य महाप्रभुको शिक्षामृत
६. कृष्णभक्तिको अनुपम उपहार
७. भक्तराज प्रह्लाद महाराजको शिक्षामृत
८. देवहुति नन्दन कपिलदेवको शिक्षामृत
९. प्रमेमावतार भगवान् श्रीचैतन्य महाप्रभु
१०. भगवत्दर्शन पत्रिका (संस्थापक)
११. राजविद्या
१२. कृष्णतिर
१३. श्रीउपदेशामृत
१४. योगको पूर्णता
१५. रसराज श्रीकृष्ण
१६. भक्तिरसामृत सिन्धु
१७. पारमार्थिक प्रश्नोत्तर
१८. कृष्णभावनाको आचरण
१९. कृष्णभक्तिः सर्वोच्च योग
२०. भगवद्दर्शन (मासिक पत्रिका) संस्थापक

### नेपालीमा अनुवादित पुस्तकहरू

१. श्रीमद् *भगवद्गीता* यथारूप
२. लीलापुरुषोत्तम भगवान् श्रीकृष्ण
३. जीवनबाट जीवन आउँछ
४. पूर्ण प्रश्न पूर्ण उत्तर
५. जन्म र मृत्युभन्दा पर
६. राजविद्या
७. अन्य लोकहरूको सजिलो यात्रा
८. भक्तिरसामृत सिन्धु
९. चैतन्य महाप्रभुको दिव्य उपदेश
१०. रसराज श्रीकृष्ण
११. जन्म र मृत्यु भन्दा पर
१२. हरे कृष्ण चुनौती
१३. श्रीउपदेशामृत
१४. भक्तराज प्रह्लाद महाराजको शिक्षामृत
१५. श्रीइशोपनिषद

### प्रकाशोन्मुख नेपाली अनुवादित पुस्तकहरू

१. धर्म - उत्कृष्टताको मार्ग
२. *भगवद्गीता* सार
३. उज्वल भागवत्को प्रकाश
४. अध्यात्मयोग
५. परमानन्दको मार्ग
६. महारानी कुन्तीको शिक्षा
७. अद्वितीय उपहार
८. कृष्णचेतनाको वैज्ञानिक आधार
९. आत्मसाक्षात्कारको मार्ग
१०. आत्म-विज्ञान
११. योगको पूर्णता
१२. भगवान् श्रीकृष्णतर्फ उन्मुख
१३. कृष्णचेतनातर्फ उन्मुख
१४. परमेश्वरको सन्देश
१५. जपकीर्तन गरौँ र सुखी बनौँ

विस्तृत जानकारीका लागि

**श्रीश्रीराधाकृष्ण मन्दिर, हरेकृष्णधाम, बूढानीलकण्ठ, पो. बा. ३५२०**
**काठमाडौ, नेपाल । फोनः ४३७३७८६,**
इमेल:prabhupadbooknepal@gmail.com

गीतोपनिषद्

# श्रीमद्भगवद्गीता यथारूप

मूल संस्कृत पाठ, शब्दार्थ, अनुवाद र विस्तृत तात्पर्यसहित

लेखक
कृष्णकृपामय
**श्री श्रीमद् अभयचरणारविन्द भक्तिवेदान्त स्वामी प्रभुपाद**
संस्थापकाचार्य - अन्तर्राष्ट्रिय कृष्णभावनामृत संघ

अनुवादक
वादरायण दास

सम्पादन
उदयकृष्ण दास, विष्णु दास आचार्य,
निर्दोष निताइ दास, योगेन्द्र वन्दन दास



**भक्तिवेदान्त बुक ट्रस्ट**

यस ग्रन्थको विषयवस्तु प्रति जिज्ञासु पाठकवर्गलाई भक्तिवेदान्त बुक ट्रस्टद्वारा निम्नलिखित ठेगानामा पत्र-व्यवहार गर्नकालागि आमंत्रित गरिन्छ :


भक्तिवेदान्त बुक ट्रस्ट
हरे कृष्ण धाम
जुहू, मुंबई ४०० ०४९, भारत

**वेबसाइट/ई-मेल :**

www.indiabbt.com
admin@indiabbt.com


Bhagavad-gītā As It Is (Nepali)


1st to 10th printing in India: 2,90,000 copies
11th printing, July 2019 : 1,00,000 copies





ISBN : 978-93-88883-29-0




भगवदगीता यथारुप अरबी, बंगला, चिनियाँ, डच, फ्रेंच, जर्मन, अंग्रेजी, गुजराती, हिंदी, इटालियन, जापनिज, मालयम, मराठी, पोर्तुगिज, स्पेनिस, स्वेडिस, तमिल, तेलगु तथा अन्य धेरै भाषाहरुमा मुद्रित छन्।


भक्तिवेदान्त बुक ट्रस्टद्वारा
प्रकाशित तथा मुद्रित

SJ1K

## विभिन्न विद्वान् एवं समालोचकहरूद्वारा *श्रीमद्भगवद्गीता यथारूपका* सम्बन्धमा गरिएका टिप्पणीहरू

विगत ३० वर्षभित्र संसारका १०० भन्दा बढी भाषामा अनुवादित भई एक करोडभन्दा बढी पत्रिकाहरू बिक्री भएको श्रीभक्तिवेदान्त स्वामी प्रभुपादद्वारा भाष्य गरिएको *श्रीमद्भगवद्गीता यथारूप* (Bhagavad Gita As It Is) विश्वसाहित्यमा सर्वाधिक बिक्रीसङ्ख्या भएको पूर्वीय वाङ्मयको आधिकारिक तथा अद्वितीय ग्रन्थका रूपमा विख्यात छ। उक्त ग्रन्थको प्रस्तुत नेपाली संस्करण तथा मूल अंग्रेजी संस्करणका बारेमा विश्वका शीर्षस्थ विद्वान्हरूले गरेका केही टिप्पणीहरू उहाँहरूकै शब्दमा यहाँ प्रस्तुत छ।

There is little question that this edition is one of the best books available on the Gita and on devotion. Prabhupada's translation is an ideal blend of literal accuracy and religious insight.

**Dr. Thomas J. Hopkins**
Chairman, Dept, of Religious Studies
Franklin and Marshall College

The Gita can be seen as the main literary support for the great religious civilization of India, the oldest surviving culture in the world.... The present translation and commentary is another manifestation of the permanent living importance of the Gita. Swami Bhaktivedanta brings to the West a salutary reminder that our highly activistic and one-sided culture is faced with a crisis that may end in self-destruction because it lacks the inner depth of an authentic metaphysical consciousness. Without such depth, our moral and political protestations are just so much verbiage.

**Thomas Merton**
Late Catholic theologian, monk, author

No work in all indian literature is more quoted, because none is better loved in the West than Bhagavad-Gita, Translation of such a work demands not only knowledge of Sanskrit but inward sympathy with the theme and a

verbal artistry, For the poem is a symphony in which god is seen in all things.

"His Divine Grace A.C. Bhaktivedanta Swami Prabhupada is, of course, profoundly sympathetic to the theme. He brings to it, moreover, a special interpretive insight, a powerful and persuasive presentation in the bhakti (devotional) tradition..... The Swami does a real service for students by investing the beloved Indian epic with fresh meaning. Whatever our outlook may be, we should all be grateful for the labor that has led to this illuminating work.

**Dr. Geddes MacGregor**
Emeritus Distinguished Professor of Philosophy
University of Southern California

In this beautiful translation, Srila Prabhupada has caught the deep devotional spirit of the Gita and has supplied the text with an elaborate commentary in the truly authentic tradition of Sri Krishna Caitanya, one of India's most important and influential saints.

**Dr. J. Stillson Judah**
Emeritus Professor of the History of Religions
and Director of the Library
Graduate Theological Union, Berkeley

It truth is what works, as Pierce and the pragmatists insist, there must be a kind of truth in the Bhagavad-Gita As It Is, since those who follow its teachings display a joyous serenity usually missing in the bleak and strident lives of contemoporary people.

**Dr. Elwin H. Powell**
Professor of Sociology
State University of New York

Whether the reader be an adept of Indian spirituality or not, a reading of Bhagavad-Gita As It Is will be extremely profitable, for it will allow him to understand the Gita as still today the majority of Hindus do. For many this will be the first contact with the true India, the ancient india, the eternal India.

**Dr. Francois Chenique**
Doctor of Religious Sciences
Institute of Political Studies, Paris

Bhagavad-Gita As It Is is a deeply felt, powerfully conceived and beautifully explained work.... I have never seen any other work on the Gita with such an important voice and style. It is a work of undoubted integrity.... It will occupy a significant place in the intellectual and ethical life of modern man for a long time to come.

**Dr. S. Shukla**
Assistant Professor of Linguistics
Georgetown University

# समर्पण

वेदान्त दर्शनमाथि अत्यन्त सुन्दर गोविन्दभाष्य प्रस्तुत गर्नुहुने

श्रील बलदेव विद्याभूषणलाई।

# विषय सूची

# पृष्ठभूमि

*भगवद्गीता* मूलतः स्वयम् व्यापक रूपमा प्रकाशित हुँदै र पढिँदै आएको विषय हो तैपनि यो प्राचीन संसारको ऐतिहासिक संस्कृत महाकाव्य महाभारतको एउटा घटनाका रूपमा देखा पर्दछ। महाभारतले वर्तमान कलियुगसम्मका घटनाहरू पनि ब्याख्या गर्दछ। यस कलियुगको प्रारम्भमा अर्थात् आजभन्दा झन्डै ५००० वर्षअघि भगवान् श्रीकृष्णले आफ्ना मित्र तथा भक्त अर्जुनलाई यो *भगवद्गीता* भन्नुभएको थियो।

उहाँहरूको यो वार्तालाप मानव इतिहासको एउटा महानतम् दार्शनिक तथा धार्मिक वार्ता हो। यो वार्ता धृतराष्ट्रका सय भाइ छोरा र उनका भतिजाहरू वा पाण्डुका छोराहरू बीच भएको महान् कुटुम्बघाती लडाइँ सुरु हुनुभन्दा ठीक अगाडि भएको थियो।

धृतराष्ट्र र पाण्डु कुरुवंशमा जन्मिएका दुई दाजुभाइ हुन्। यो वंश पृथ्वीका प्राचीन शासक राजा भरतबाट आएको थियो। उनैबाट यसको नाम महाभारत रहन गयो। जेठा दाजु धृतराष्ट्र जन्मले नै अन्धा भएकाले उक्त राजसिंहासन उनले नपाएर उनका भाइ पाण्डुले पाएका थिए।

उमेर नपुगीकनै पाण्डुको मृत्यु भएकाले पाण्डुका पाँच भाइ छोराहरू क्रमशः युधिष्ठिर, भीम, अर्जुन, नकुल र सहदेवको रेखदेख गर्ने काम धृतराष्ट्रका अधीनमा पर्न आयो। त्यस समय धृतराष्ट्रलाई नै केही समयका लागि राजा बनाइएको थियो। यसरी धृतराष्ट्र र पाण्डुका छोराहरू एउटै राजमहलमा हुर्किए। दुवै पक्षलाई पारङ्गत गुरु द्रोणचार्यद्वारा युद्ध कलासम्बन्धी प्रशिक्षण दिइयो र पूजनीय पितामह भीष्मबाट उनीहरूले सर-सल्लाह पाइरहन्थे।

यति हुँदाहुँदै पनि धृतराष्ट्रका छोराहरू, विशेष गरी जेठो छोरो दुर्योधन पाण्डवहरूप्रति ईर्ष्या र घृणा गर्दथ्यो र अन्धा तथा दुर्बल मनस्थिति भएका धृतराष्ट्र पाण्डुपुत्रहरूको सट्टा आफ्नै छोराहरूलाई राज्यका उत्तराधिकारी बनाउन चाहन्थे। यसरी धृतराष्ट्रको सम्मतिमा दुर्योधनले पाण्डुका युवा छोराहरूलाई मार्ने षड्यन्त्र बनाउन थाल्यो। पाँच भाई पाण्डवहरू आफ्ना काका विदुर र मामाका छोरा भगवान् श्रीकृष्णको सचेत संरक्षणमा रहेकाले जीवित रहन सके।

उता भगवान् श्रीकृष्ण कुनै सामान्य मानिस नभएर स्वयम् परमेश्वरका रूपमा उपस्थित हुनुहुन्छ, जसले यस पृथ्वीमा अवतार लिएर समानान्तर रूपमा एउटा राजकुमारको भूमिका निर्वाह गरिरहनुभएको थियो। यस भूमिकामा उहाँ

पाण्डुकी पत्नी तथा पाण्डवहरूकी आमा कुन्ती वा पृथाका भतिजा पनि हुनुहुन्थ्यो। अतः भगवान् कृष्णले एकातिर आफ्ना सम्बन्धीजन भएकाले र अर्कातिर धर्मका नित्य पालनकर्ता भएकाले पनि पाण्डुका धार्मिक छोराहरूको पक्ष लिनुभयो र उनीहरूलाई सुरक्षा प्रदान गर्नुभयो।

आखिरमा चलाख दुर्योधनले पाण्डवहरूलाई जूवा खेल्ने चुनौती दियो। जूवाको निर्णायक बाजीमा दुर्योधन र उसका भाइहरूले पाण्डवकी पतिव्रता पत्नी द्रौपदीलाई आफ्ना अधिकारमा पारे अनि उनलाई राजाहरू तथा राजकुमारहरूको सभाका बीचमा अपमान् जनक तरिकाले नाङ्गै बनाउने प्रयास गरे। भगवान् श्रीकृष्णको दैवी हस्तक्षेपले गर्दा उनी त्यो विपत्तिबाट बचिन् तर जूवा हारेका हुनाले पाण्डवहरू बलपूर्वक आफ्ना राज्यबाट च्युत भए र उनीहरू १३ वर्षका लागि वनवास जानुपऱ्यो।

वनवासबाट फर्केपछि पाण्डवहरूले न्यायबमोजिम दुर्योधनबाट आफ्नो राज्य फिर्ता मागे तर उसले त्यो दिन अस्वीकार गऱ्यो। पाँच पाण्डवहरूले अन्त्यमा पूरै राज्य नमागेर केवल पाँचवटा गाउँहरू मागे तर दुर्योधन एउटा सियोको टुप्पो राख्न पुग्ने जति जमिन पनि उनीहरूलाई दिन तयार भएन। फलस्वरूप तबसम्म अत्यन्त सहनशील भएर बसेका पाण्डवहरूलाई युद्ध नगरी नहुने भयो।

संसारभरिका राजा र राजकुमारहरू कोही धृतराष्ट्रका छोराहरूको पक्षमा थिए र कोही पाण्डवहरूका पक्षमा थिए। त्यसै समयमा भगवान् श्रीकृष्ण पाण्डवहरूका सन्देशबाहक बनेर शान्तिको याचना गर्न धृतराष्ट्रका दरबारमा जानुभयो। त्यहाँ उहाँले राख्नुभएको शान्ति प्रस्ताव अस्वीकृत भएपछि युद्ध निश्चित भयो।

उच्च नैतिक आदर्शमा स्थित रहेका पाण्डवहरूले श्रीकृष्णलाई भगवान्का रूपमा चिने तर धृतराष्ट्रका दुष्ट छोराहरूले उहाँलाई त्यस रूपमा चिन्न सकेनन्। तैपनि विपक्षीहरूकै चाहनाअनुरूप भगवान् श्रीकृष्णले युद्धमा प्रवेश गर्ने प्रस्ताव राख्नुभयो। ईश्वरकै रूपमा त उहाँले कसैसँग युद्ध गर्न उपयुक्त हुदैन्थ्यौ तर कसैले उहाँको सैन्य शक्तिको उपयोग गर्न चाहेमा गर्नसक्दथ्यो र उहाँलाई पनि आफ्नो सहयोगी तथा सल्लाहकारका रूपमा राख्न सकिन्थ्यो। तदनुसार राजनीतिमा चलाख मानिने दुर्योधनले भगवान् श्रीकृष्णको सैन्यशक्ति लियो र पाण्डवहरूले स्वयम् कृष्णलाई नै आफ्ना सल्लाहकार तथा सहयोगीका रूपमा लिए।

यस प्रकार भगवान् श्रीकृष्ण अर्जुनका सारथी बन्नुभयो र उहाँले ती

विख्यात धनुर्धारीको रथ हाँक्ने काम गर्न स्वीकार गर्नुभयो। यसरी हामी *भगवद्गीताको* शुभारम्भ हुने प्रारम्भिक बिन्दुसम्म पुग्दछौँ जहाँ दुवै पक्षका सेनाहरू युद्धका लागि तयार भएर उभिएका छन्। यसैबीच धृतराष्ट्रले आफ्ना निजी सचिव सञ्जयसँग सोधिरहेका छन्—"उनीहरूले के गरे ?"

यसरी गीताको पृष्ठभूमि तयार भयो। अब आवश्यकता भनेको यसको तथा भाष्यका विषयमा संक्षिप्त टिप्पणी गर्ने। सामान्यतया *भगवद्गीताका* अङ्ग्रेजी पाठकहरूले भगवान् श्रीकृष्णलाई बहाना बनाएर आ-आफ्ना अवधारणाहरू र दर्शनलाई एउटा पौराणिक कथाका रूपमा लिन्छन् र भगवान् श्रीकृष्णलाई कुनै अज्ञात प्रतिभाशाली व्यक्तिका विचारहरूलाई कवितात्मक रूपमा प्रस्तुत गर्ने एउटा निमित्त कारण मात्र मान्दछन्। तिनले बढीमा भगवान् श्रीकृष्णलाई एउटा सामान्य ऐतिहासिक पुरुषका रूपमा प्रस्तुत गर्दछन् तर कृष्ण स्वयम् *भगवद्गीताका* विषयवस्तु र लक्ष्य दुवै हुनुहुन्छ। यो कुरा स्वयम् गीतामा स्पष्ट पारिएको छ।

अतः यो र भाष्यको उद्देश्य पाठकलाई भगवान् श्रीकृष्णदेखि टाढा लैजानु नभएर भगवान् श्रीकृष्णतिर अग्रसर हुन प्रेरित गर्नु हो। यस दृष्टिबाट हेर्दा यो *भगवद्गीता* यथारूप ग्रन्थ अद्वितीय छ। यसरी पूर्णतया ग्राह्य र सुसङ्गत हुनु पनि यसको अर्को अनुपम गुण हो। भगवान् श्रीकृष्ण स्वयम् गीताका वक्ता हुनुहुन्छ र गीताका परमलक्ष्य पनि हुनुहुन्छ। यस महान् शास्त्रलाई यथार्थ रूपमा प्रस्तुत गर्ने यो नै एकमात्र भएकाले यसको आवश्यकता परेको हो।

*— प्रकाशक*

# प्रस्तावना

मैले पहिले पनि यसै रूपमा *'भगवद्गीता यथारूप'* लेखेको थिएँ जुन रूपमा अहिले प्रस्तुत गरिँदैछ। पहिलोपटक यसको प्रकाशन हुँदा दुर्भाग्यवश यसलाई काटछाँट गरेर ४०० पृष्ठभन्दा थोरै पारियो, फलस्वरूप *भगवद्गीताका* अधिकांश श्लोकहरूको विस्तृत व्याख्या छुट्न गयो। श्रीमद्भागवत्, श्री ईशोपनिषद् आदि सबै मेरा पुस्तकहरूमा एउटा छुट्टै तरिका अपनाइएको छ, जसअनुसार सर्वप्रथम मूल श्लोक दिइएको छ, त्यसलाई अङ्ग्रेजी लिपिमा लिप्यन्तरण गरिएको छ। अनि प्रत्येक संस्कृत शब्दको अङ्ग्रेजी समानार्थक शब्दमा पर्याय दिइएको छ, त्यसपछि सरल अनुवाद दिइएको छ र अन्त्यमा तात्पर्य दिइएको छ। यसो गर्दा पुस्तक बढी प्रामाणिक र विद्वत्तापूर्ण बन्न पुग्दछ र अर्थ स्वतः स्पष्ट हुन्छ। आफ्नो मूल पाण्डुलिपिलाई घटाएर सानो पार्दा मलाई त्यस समय खुसी लागेको थिएन तर पछि जब निरन्तर रूपले *भगवद्गीता* यथारूपको माग बढ्दै गयो अनि धेरै विद्वान्हरू तथा भक्तहरूले मसँग यो पुस्तकलाई काटछाँट नगरी मौलिक रूपमै प्रस्तुत गर्ने अनुरोध गरे। फलस्वरूप यो महान् ज्ञानग्रन्थलाई मेरै पूर्व पाण्डुलिपिअनुसारको स्वरूप प्रदान गर्न अहिले फेरि यो प्रयत्न गरियो। यो पूर्ण परम्परागत व्याख्याले युक्त छ। यसबाट कृष्णभावनामृत आन्दोलनलाई अझ पुष्ट र प्रगतिशील बनाएर स्थापित गर्न सकिन्छ।

हाम्रो कृष्णभावनामृत अभियानको मुख्य आधार *भगवद्गीता* यथारूप भएकाले यो अभियान मौलिक छ, ऐतिहासिक दृष्टिले प्रामाणिक छ, स्वाभाविक छ र दिव्य छ। यो अभियान सम्पूर्ण संसारभरि अझ विशेष गरी युवा पुस्ताका बीच क्रमशः अत्यन्त लोकप्रिय हुँदै गइरहेछ। पुरानो पुस्ताका मानिसहरूका बीचमा पनि यो झन् झन् सुरुचिपूर्ण बनिरहेको छ। प्रौढ अवस्थाका सज्जनहरू यसमा अझ रुचि राख्दैछन्। हाम्रा शिष्यहरूका बाबुबाजेहरू पनि यो महान् संस्था **अन्तर्राष्ट्रिय कृष्णभावनामृत संघको** आजीवन सदस्य बनेर हामीलाई थप उत्साह दिइरहेछन्। म लस एन्जलसमा हुँदा त्यहाँ हाम्रा शिष्यहरूका धेरै-बाबु आमाहरू मलाई भेट्न आउँथे र मैले सारा संसारभरि कृष्णभावना अभियानको नेतृत्व गरिरहेकोमा कृतज्ञताको भाव व्यक्त गर्दथे। तीमध्ये केही अमेरिकीहरू अमेरिकामा गएर मैले कृष्णभावना आन्दोलन सुरु गरिदिएकोमा आफूलाई भाग्यशाली सम्झन्थे। तर, यस आन्दोलनका आदि प्रवर्तक त स्वयम् भगवान् श्रीकृष्ण हुनुहुन्छ। धेरै लामो समय अघिदेखि यो सुरु भएको थियो र शिष्यपरम्पराका माध्यमबाट मानव समाजमा चलिरहेको थियो। यदि यसको अलिकति पनि श्रेय मलाई दिएमा त्यो

श्रेय मलाई नभएर मेरो परमपूज्य नित्य गुरु श्रीकृष्णकृपामय ओम विष्णुपाद परमहंस परिव्राजकाचार्य १०८ श्री श्रीमद् भक्तिसिद्धान्त सरस्वती गोस्वामी महाराज प्रभुपादलाई जान्छ।

यस विषयमा मेरो कुनै श्रेय भए त्यो मैले कुनै मिसावट नगरीकन *भगवद्गीतालाई* जस्ताको तस्तै प्रस्तुत गर्ने प्रयास गरेको छु। मैले *भगवद्गीता* प्रस्तुत गर्नुभन्दा पहिलेका सबैजसो *भगवद्गीताका* अङ्ग्रेजी संस्करणहरूमा व्यक्तिले आ-आफ्ना महत्वाकाङ्क्षाहरू परिपूर्ति गर्ने प्रयत्न गरेको देखिन्छ। तर, *भगवद्गीताको* यो संस्करण प्रस्तुत गर्ने हाम्रो जुन प्रयास छ त्यसमा भगवान् श्रीकृष्णकै महान् उद्देश्य पूरा गर्ने अभिप्राय छ। हाम्रो काम राजनेता, दार्शनिक, वैज्ञानिक जस्ता कुनै सांसारिक विचारकहरूको इच्छा प्रस्तुत गर्नु नभएर भगवान् श्रीकृष्णका इच्छा प्रस्तुत गर्नु हो। किनभने सांसारिक विद्वान्हरूमा अरू विषयको ज्ञान जतिसुकै भए पनि कृष्णसम्बन्धी ज्ञान अत्यन्त थोरै मात्र हुन्छ। स्वयम् भगवान् श्रीकृष्णले नै **मन्मनाभवमद्भक्तो मद्याजी मां नमस्कुरु** भन्नुभएको छ, त्यसैले भने हामी तथाकथित पण्डितहरूलेजस्तै कृष्ण र कृष्णको अन्तरात्मा भिन्दाभिन्दै हो भन्न सक्दैनौँ। भगवान् श्रीकृष्ण परमब्रह्म हुनुहुन्छ, त्यसैले उहाँको नाम, उहाँको रूप, उहाँका गुण र उहाँका लीलाहरूमा कुनै अन्तर छैन। गुरुशिष्य परम्परामा नरहेको र भक्त नभएको कुनै पनि व्यक्तिलाई भगवान् श्रीकृष्णको परमसत्ताको ज्ञान प्राप्त गर्न कठिन हुन्छ। सामान्यतया तथाकथित विद्वान्, राजनीतिज्ञ, दार्शनिक तथा स्वामीहरूले भगवान् श्रीकृष्णलाई राम्रोसँग नबुझीकन *भगवद्गीताको* भाष्य लेख्न सुरु गर्दा भगवान् श्रीकृष्णलाई नै त्यहाँबाट हटाउन या उहाँको अस्तित्व नै समाप्त पार्ने प्रयत्न गर्दछन्। *भगवद्गीतामाथि* लेखिएका यस्ता अप्रामाणिक भाष्यहरू मायावादी भाष्य भनिन्छन् र श्रीचैतन्यमहाप्रभुले यस किसिमका भाष्यहरूबाट हामीलाई सावधान गराउनुभएको छ। उहाँले भन्नुभएको छ *भगवद्गीतालाई* मायावादी दृष्टिकोणबाट बुझ्ने प्रयास गर्ने व्यक्तिले भयङ्कर ठुलो भूल गरिरहेको हुनेछ। यस्तो भ्रम वा भूलको परिणामले *भगवद्गीताका* विद्यार्थीहरू पथभ्रष्ट हुन्छन् र आध्यात्मिक मार्गदर्शनका पथबाट भ्रमित हुन्छन्। फलतः तिनीहरू भगवद्धाम फर्किन सक्दैनन्।

बद्ध अवस्थामा रहेका जिज्ञासुहरूलाई सही बाटो देखाउनका लागि *भगवद्गीतालाई* जस्ताको तस्तै प्रस्तुत गर्ने हाम्रो एकमात्र उद्देश्य हो। त्यही उद्देश्यका लागि ब्रह्माजीको दिनको एकपटक अर्थात् प्रत्येक ८,६०,००,००,००० वर्षमा एकपटक भगवान् यस धरातलमा अवतरित हुनुहुन्छ। *भगवद्गीतामा* यस उद्देश्यको चर्चा गरिएको छ र त्यसलाई हामीले

पनि त्यही रूपमा ग्रहण गर्ने प्रयत्न गर्नु पर्दछ अन्यथा *भगवद्गीता* र यसका वक्तालाई बुझ्ने प्रयास गर्नुको कुनै अर्थ रहँदैन। भगवान् श्रीकृष्णले सर्वप्रथम लाखौँ वर्षअघि सूर्यदेवतालाई *भगवद्गीताको* उपदेश दिनुभएको थियो। यस तथ्यलाई हामीले स्वीकार गर्नु पर्दछ र भगवान् श्रीकृष्णका प्रामाणिकताको गलत व्याख्या नगरीकन *भगवद्गीताको* ऐतिहासिक महत्त्वलाई बुझ्नु पर्दछ। भगवान् श्रीकृष्णका इच्छाको सन्दर्भ नदिईकन *भगवद्गीताको* व्याख्या गर्नु ठुलो अपराध हो। यस अपराधबाट बच्नका लागि श्रीकृष्णलाई त्यसै गरी भगवान्का रूपमा स्वीकार गर्नु पर्दछ, जसरी भगवान्का प्रथम शिष्य अर्जुनले उहाँलाई भगवान् मानेका थिए। *भगवद्गीताको* यस किसिमको ज्ञान यथार्थमा लाभदायक छ। जीवनको उद्देश्य पूरा गर्न चाहने मानवसमाजको कल्याणका लागि यो प्रामाणिक ज्ञान हो।

मानवसमाजका लागि यो कृष्णभावनामृत आन्दोलन अति नै आवश्यक कुरा हो किनभने, यसले जीवनको परमप्रसिद्धि प्राप्त गराउँदछ। यो कसरी हुन्छ भन्ने कुराको पूर्ण व्याख्या *भगवद्गीतामा* गरिएको छ। दुर्भाग्यवश झगडालु स्वभावका सांसारिक व्यक्तिहरूले आफ्ना आसुरी प्रवृत्तिहरूलाई अघि बढाउन र मानिसलाई जीवनको सही सिद्धान्त ठीकसँग बुझ्न नदिनका लागि पनि *भगवद्गीताको* गलत फाइदा लिन्छन्। भगवान् श्रीकृष्ण कति महान् हुनुहुन्छ र जीवात्माको वास्तविक अवस्था के हो भन्ने कुरा सबैले बुझ्नु पर्दछ। जीवात्मा शाश्वत रूपले भगवान्का दास हुन्, यो कुरा प्रत्येकले जान्नु पर्दछ। भगवान् श्रीकृष्णको सेवा नगरेसम्म जीवात्मालाई निरन्तर जन्म र मरणको चक्रमा परिरहनु पर्दछ। कतिसम्म भन्ने मायावादी विचारकहरूलाई पनि जीवन र मृत्युको त्यही चक्रमा पर्नु पर्दछ। यो ज्ञान एउटा महान् विज्ञान हो र हरेक जीवात्माले आफ्नो निजी हितका लागि पनि यसलाई सुन्नु पर्दछ।

विशेष गरी यस कलियुगका सर्वसाधारण मानिसहरू भगवान् श्रीकृष्णका बहिरङ्गा शक्तिबाट मोहित छन् र उनीहरूलाई के भ्रम परेको छ, भौतिक सुख सुविधाहरूको प्रगतिले नै हरेक मानिस सुखी हुन सक्दछ। भौतिक प्रकृति वा बहिरङ्गा प्रकृति अत्यन्त शक्तिशाली छिन् र यही भौतिक प्रकृतिको कठोर नियमले प्रत्येक प्राणीलाई नराम्रोसँग बाँधिराखेको छ भन्ने ज्ञान उसलाई हुँदैन। जीवात्मा भगवान्को खुसीका साथ रहने अंश हो र उसको स्वाभाविक काम भगवान्को नित्य सेवा गर्नु हो। मायाका अधीनमा रहेका कारणले मानिस विभिन्न रूपमा व्यक्तिगत इन्द्रियतृप्ति गरेर सुखी हुने प्रयत्न गर्दछ तर यसबाट ऊ कहिल्यै पनि सुखी हुन सक्दैन। आफ्ना निजी भौतिक इन्द्रियहरूलाई सन्तुष्ट पार्न छोडेर मानिसले भगवान्का इन्द्रियहरूलाई सन्तुष्ट पार्न खोज्नु

पर्दछ। यो नै जीवनको सर्वोच्च सिद्धि हो। भगवान् पनि यस्तै चाहना गर्नु हुन्छ र यसैको अपेक्षा गर्नु हुन्छ। मानिसले *भगवद्गीताको* यो केन्द्रीय विषयलाई बुझ्नु पर्दछ। हाम्रो कृष्णभावनामृत अभियानले सारा संसारलाई यही केन्द्रीय विषयको शिक्षा दिइरहेछ। हामीले *भगवद्गीताको* विषयवस्तुलाई दूषित बनाइरहेका छैनौँ। *भगवद्गीताको* अध्ययनबाट लाभ लिन चाहने कुनै पनि गम्भीर जिज्ञासुले भगवान्‌को प्रत्यक्ष निर्देशनमा *भगवद्गीताको* व्यावहारिक ज्ञानका लागि हाम्रो कृष्णभावनामृत अभियानबाट यससम्बन्धी सहायता प्राप्त गर्न सक्दछ। अतः यो *भगवद्गीता* यथारूप जुन रूपमा प्रस्तुत भएको छ त्यसबाट मानिसहरूले लाभ उठाउने छन् भन्ने आशा हामीले लिएका छौँ। यसबाट यदि एउटै मात्र मानिस पनि शुद्ध भक्त बन्न सकेमा हामीले आफ्नो प्रयास सफल भएको मान्ने छौँ।

A.C. Bhaktivedanta Swami

अभय चरणारविन्द भक्तिवेदान्त स्वामी

१२ मई १९७१
सिड्नी, अष्ट्रेलिया

# भूमिका

*ॐ अज्ञान तिमिरान्धस्य ज्ञानाञ्जनशलाकया ।*
*चक्षुरुन्मीलितं येन तस्मै श्री गुरवे नमः ॥*
*श्री चैतन्यमनोऽभीष्टं स्थापितं येन भूतले ।*
*स्वयं रूपः कदा मह्यं ददाति स्वपदान्तिकम् ॥*

अज्ञानरूपी अन्धकारमा परेर अन्धोजस्तो भएको मलाई, ज्ञानरूपी गाजलका कोसाले (शलाकाले) आँखा खोलिदिएर प्रकाश प्रदान गर्ने परमपूज्य गुरुदेवलाई म सादर वन्दना गर्दछु।

भगवान् श्रीचैतन्य महाप्रभुको सदिच्छा पूरा गर्न यो भौतिक जगत्मा एउटा अभियानकै शुभारम्भ गर्नुहुने श्रील रूप गोस्वामी प्रभुपादले मलाई आफ्ना चरणकमलमा कहिले शरण दिनु हुन्छ होला ?

*बन्देऽहं श्रीगुरोः श्रीयुतपदकमलं श्रीगुरुन् वैष्णवांश्च ।*
*श्रीरूपं साग्रजातं सहगणरघुनाथान्वितं तं सजीवम् ॥*
*साद्वैतं सावधूतं परिजनसहितं कृष्णचैतन्यदेवं ।*
*श्री राधाकृष्णपादान्सहगणललिताश्रीविशाखान्वितांश्च ॥*

प्रथमतः म आफ्ना गुरुदेवका चरणकमलमा श्रद्धापूर्वक वन्दना गर्दछु र समस्त वैष्णववृन्दका चरणमा हार्दिक प्रणाम गर्दछु। श्री रूप गोस्वामी तथा उहाँका अग्रज दाज्यू सनातन गोस्वामीका चरणकमलमा म शिर निहुराउँदछु। साथै रघुनाथदास, रघुनाथ भट्ट, गोपालभट्ट तथा श्रील जीव गोस्वामीका चरणकमलमा पनि प्रणाम निवेदन गर्दछु। त्यसै गरी, भगवान् श्रीकृष्णचैतन्य तथा नित्यानन्दसहित अद्वैत आचार्य, गदाधर, श्रीवास, तथा अन्य पार्षदहरूलाई पनि म सादर वन्दना गर्दछु र श्रीललिता, विशाखा आदि सखीहरूसहित श्रीमती राधारानी तथा श्रीकृष्णका चरणमा सादर वन्दना गर्दछु।

*हे कृष्ण करूणासिन्धो दीनबन्धो जगत्पते ।*
*गोपेश गोपिकाकान्त राधाकान्त नमोऽस्तुते ॥*

करूणाका सागर, दुःखीहरूका सखा, संसारका स्वामी, गोपालहरूका ईश्वर, गोपीहरूका प्रिय र राधिकाका प्यारा हे श्रीकृष्ण! म हजुरको वन्दना गर्दछु।

*तप्तकाञ्चनगौरांगि राधे वृन्दावनेश्वरी ।*
*वृषभानुसुते देवी प्रणमामि हरिप्रिये ॥*

पग्लिएको तातो सुनजस्तो सुन्दर अङ्ग भएकी, वृन्दावनकी स्वामिनी, भगवान्‌की प्यारी तथा वृषभानुकी छोरी श्रीमती राधारानीलाई म प्रणाम गर्दछु।

*वाञ्छा कल्पतरूभ्यश्च कृपासिन्धुभ्य एव च ।*
*पतितानां पावनेभ्यो वैष्णवेभ्यो नमो नमः ॥*

सबैको इच्छा पूर्ण गरिदिन सक्ने कल्पवृक्षजस्ता र पतितहरूलाई पनि पवित्र गर्नसक्ने कृपाका सागरजस्ता वैष्णवजनलाई म बारम्बार प्रणाम गर्दछु।

*श्रीकृष्ण-चैतन्य प्रभु नित्यानन्द ।*
*श्रीअद्वैत गदाधर श्रीवासादि गौरभक्तवृन्द ॥*

भगवान् श्रीकृष्ण-चैतन्यलाई, नित्यानन्द प्रभुलाई, अद्वैत आचार्यलाई, गदाधर पण्डितलाई र श्रीवास आचार्यसहित सम्पूर्ण भक्तवृन्दलाई म सादर प्रणाम गर्दछु।

*हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे ।*
*हरे राम हरे राम राम राम हरे हरे ॥*

*भगवद्गीतालाई* गीतोपनिषद् पनि भनिन्छ। यो वैदिक ज्ञानको सार हो र वैदिक साहित्यको एउटा महत्त्वपूर्ण उपनिषद हो। यो गीतोपनिषद् वा *भगवद्गीताका* यस्ता भाष्यहरू अङ्ग्रेजी भाषामा प्रशस्त उपलब्ध हुँदा-हुँदै फेरि यो अर्को भाष्यको आवश्यकता किन पऱ्यो? भन्ने प्रश्न पनि उठ्न सक्दछ। यो संस्करणको आवश्यकता किन पऱ्यो, हालसालै एउटी अमेरिकी महिलाले *भगवद्गीताको* कुनै एउटा प्रामाणिक अङ्ग्रेजी सिफारिस गरिदिन मसँग अनुरोध गरिन्। अमेरिकामा *भगवद्गीताका* धेरै अङ्ग्रेजी संस्करणहरू पाइन्छन्। तर, मलाई अमेरिकामा मात्र होइन भारतमा पनि *भगवद्गीताको* प्रामाणिक संस्करण पाउन कठिन भइरहेको थियो किनभने लगभग प्रत्येक संस्करणमा *भगवद्गीताको* यथार्थ मर्मलाई स्पर्श नगरीकनै भाष्यकारहरूले आ-आफ्नो मत प्रदर्शन गरेका छन्।

*भगवद्गीताको* मर्म *भगवद्गीतामै* व्यक्त गरिएको छ तर कुरा के हो, हामीले कुनै औषधि सेवन गर्नुपर्दा त्यसमा लेखिएका निर्देशनहरूको पालना गर्नु आवश्यक हुन्छ। हामीले आफ्नै मनपरी ढङ्गले वा मित्रको सल्लाहअनुसार औषधि सेवन गर्नु हुँदैन। औषधिको सेवन त्यहीं लेखेको निर्देशनअनुसार या डाक्टरको सल्लाहअनुसार नै गर्नु पर्दछ। त्यसै गरी *भगवद्गीतालाई* पनि यसका वक्ताद्वारा दिइएको निर्देशनअनुसार नै ग्रहण या स्वीकार गर्नु पर्दछ। भगवान् श्रीकृष्ण नै *भगवद्गीताका* वक्ता हुनुहुन्छ।

*भगवद्गीताको* पान्ना-पान्नामा उहाँको उल्लेख भगवान्कै रूपमा भएको छ। हुनत कहिलेकाहीँ भगवान् शब्दको प्रयोग कुनै शक्तिशाली व्यक्ति या कुनै शक्तिशाली देवताका लागि पनि हुने गर्दछ तैपनि यहाँ भगवान् शब्दले पुरुषोत्तम भगवान् श्रीकृष्णलाई बुझाएको छ। उहाँलाई एक महान् पुरुषका रूपमा सूचित गरिएको छ र सँगसँगै हामीले के पनि बुझ्नु पर्दछ, भगवान् श्रीकृष्ण नै परमेश्वर हुनुहुन्छ। यो तथ्यलाई शङ्कराचार्य, रामानुजाचार्य, मध्वाचार्य, निम्बार्काचार्य, श्री चैतन्य महाप्रभु तथा वैदिक ज्ञानका अन्य धेरै भारतीय विद्वान् आचार्यहरूले पनि पुष्टि गरेका छन्। भगवान्ले पनि *भगवद्गीतामा* स्वयम् आफूलाई परमेश्वर भन्नुभएको छ। ब्रह्मसंहिता तथा श्रीमद्भागवत महापुराणसहित अन्य पुराणहरूमा पनि **"कृष्णस्तु भगवान् स्वयम्"** भनेर यस तथ्यलाई स्वीकार गरिएको छ। त्यसै कारण हामीले स्वयम् भगवान्द्वारा निर्देशित गरिएअनुसार नै *भगवद्गीतालाई* यथारूप ग्रहण गर्नु पर्दछ। *भगवद्गीताको* चतुर्थ अध्यायमा भगवान् भन्नु हुन्छ—

*इमं विवस्वते योगं प्रोक्तवानहमव्ययम् ।*
*विवस्वान्मनवे प्राह मनुरिक्ष्वाकवेऽब्रवीत् ॥*
*एवं परम्पराप्राप्तमिमं राजर्षयो विदुः ।*
*स कालेनेह महता योगो नष्टः परन्तप ॥*
*स एवायं मया तेऽद्य योगः प्रोक्तः पुरातनः ।*
*भक्तोऽसि मे सखा चेति रहस्यं ह्येतदुत्तमम् ॥*

यहाँ भगवान्ले अर्जुनलाई भन्नुभएको छ— *भगवद्गीताको* यो योग-पद्धति उहाँले सर्वप्रथम सूर्यदेवलाई सुनाउनुभएको थियो, सूर्यदेवले त्यही ज्ञान मनुलाई बताउनुभयो र मनुले इक्ष्वाकुलाई। यसरी शिष्यपरम्पराद्वारा यो ज्ञान एक वक्ताबाट अर्को वक्तामा सर्दै गयो तर कालान्तरमा यो शिष्यपरम्परा छिन्नभिन्न हुनपुग्यो। त्यसकारण, यस पटक कुरुक्षेत्रको युद्धस्थलमा भगवान्ले अर्जुनलाई पुनः त्यही योगपद्धतिको विषयमा भन्नु परेको हो।

अर्जुन भगवान्का परमभक्त तथा मित्र भएका हुनाले नै यो परमरहस्य उनलाई भनिएको हो। *भगवद्गीता* नै एउटा यस्तो ग्रन्थ हो जुन भगवद्भक्तका निमित्त बनेको छ। अध्यात्मवादीहरूका तीन श्रेणी छन्— १. ज्ञानी २. योगी र ३. भक्त, अर्थात् निर्विशेषवादी, ध्यानी र भक्त। यहाँ भगवान्ले अर्जुनलाई नै यो नवीन शिष्यपरम्पराको प्रथम पात्र बनाइएको कुरा प्रष्ट पार्नुभएको छ, किनभने प्राचीन परम्परा खण्डित भइसकेको थियो। त्यसैले सूर्यदेवबाट चलिआएको विचारधारामा एउटा अर्को परम्परा स्थापित गर्ने इच्छा भगवान्को थियो। यो

शिक्षा नयाँ ढङ्गले अर्जुनबाट अघि बढोस् भन्ने चाहना भगवान्को थियो र अर्जुन *भगवद्गीतारूपी* ज्ञानका विद्वान् होऊन् भन्ने इच्छा पनि उहाँको थियो, तसर्थ यहाँ विशेष रूपमा अर्जुनलाई नै *भगवद्गीताको* उपदेश दिइएको देखिन्छ किनभने अर्जुन नै भगवान्का भक्त, प्रत्यक्ष शिष्य तथा घनिष्ठ मित्र थिए। त्यसैले अर्जुनको जस्तो गुण वा योग्यता भएको व्यक्तिमा नै *भगवद्गीताको* मर्म बुझ्ने सबैभन्दा बढी सामर्थ्य हुन्छ। यसको अर्थ के हो, भक्त भगवान्सँग प्रत्यक्ष रूपले सम्बन्धित हुनु पर्दछ। भगवान्को भक्त हुनासाथ भगवान्सँग मानिसको प्रत्यक्ष सम्बन्ध जोडिन पुग्छ। यो एउटा अत्यन्त विशद विषय हो, तैपनि संक्षेपमा भक्त र भगवान्का बीचमा सामान्यतया पाँच प्रकारका सम्बन्धहरू हुने गर्छन्—

१. कुनै निष्क्रिय अवस्थामा भगवान्का भक्त हुन्छन्।
२. कुनै सक्रिय अवस्थामा भक्त हुन सक्दछन्।
३. कुनै मित्र-रूपमा भगवान्को हरू हुन सक्दछन्।
४. कुनै माता-पिताका रूपमा भक्त बन्न सक्दछन्।
५. कुनै दाम्पत्य-प्रेमीका रूपमा पनि भगवान्का भक्त हुन सक्दछन्।

अर्जुन र श्रीकृष्णबीचको सम्बन्ध साथी-साथीको जस्तो थियो। वास्तवमा यो मित्रता तथा भौतिक जगत्मा पाइने मित्रतामा आकाश-पातालको भिन्नता छ। यस्तो दिव्य मित्रता सबैलाई प्राप्त हुन सक्दैन। हुन त भगवान्सँग प्रत्येक व्यक्तिको प्रत्यक्ष सम्बन्ध छ तर यस्तो सम्बन्ध भक्तिको पूर्णताबाटै जागृत हुने गर्दछ। तर, वर्तमान जीवनमा हामीले परमेश्वरलाई भुल्यौं-भुल्यौं साथै उहाँसँग रहेको आफ्नो शाश्वत सम्बन्धलाई पनि बिर्सिदियौं। लाखौं करोडौं जीवात्माहरूमध्ये कुनै एउटा दुईटा जीवले मात्र भगवान्सँग शाश्वत सम्बन्ध स्थापित गर्न सक्दछन्। यसलाई स्वरूप भनिन्छ। भक्तियोगको प्रक्रियाद्वारा यो स्वरूपलाई जागृत पार्न सकिन्छ। स्वरूप जागृतिको यो अवस्थालाई स्वरूप-सिद्धि पनि भनिन्छ। यसलाई स्वरूपको पूर्णता वा स्वाभाविक स्थिति वा मूलभूत स्थितिको पूर्णता पनि भन्न सकिन्छ। अर्जुन भक्त थिए। आफ्नो भक्ति र मैत्रीका कारणले गर्दा नै उनी परमेश्वरका सम्पर्कमा रहन पाएका थिए।

अर्जुनले *भगवद्गीतालाई* कसरी ग्रहण गरेका थिए भन्ने कुरामा हामीले विशेष ध्यान पुऱ्याउनु पर्दछ। यसको वर्णन दशौं अध्यायको १२-१४ श्लोकमा यसप्रकार गरिएको छ—

अर्जुन उवाचः-

*परं ब्रह्म परं धाम पवित्रं परमं भवान् ।*
*पुरुषं शाश्वतं दिव्यमादिदेवमजं विभुम् ॥ १२॥*

*आहुस्त्वामृषयः सर्वे देवर्षिर्नारदस्तथा ।*
*असितो देवलो व्यासः स्वयं चैव ब्रवीषि मे ॥ १३ ॥*
*सर्वमेतदृतं मन्ये यन्मां वदसि केशव ।*
*न हि ते भगवन्व्यक्तिं विदुर्देवा न दानवाः ॥ १४ ॥*

अर्जुन भन्दछन्— "हे कृष्ण! हजुर भगवान् हुनुहुन्छ, परमधाम हुनुहुन्छ, पवित्रतम् हुनुहुन्छ र परमसत्य हुनुहुन्छ। हजुर शाश्वत, दिव्य, आदि पुरुष, अजन्मा तथा महानतम् हुनुहुन्छ। नारद, असित, देवल तथा व्यास जस्ता महामुनिहरूले पनि हजुरका विषयमा यही सत्यको पुष्टि गरेका छन् र अहिले स्वयम् हजुरले पनि मसँग यसै कुराको घोषणा गर्दै हुनुहुन्छ। हे कृष्ण! हजुरले जे भन्नुभएको छ म त्यसलाई पूर्णरूपले सत्य मान्दछु। हे प्रभु! हजुरको स्वरूपलाई न देवताहरूले न असुरहरूले नै बुझ्न सक्छन्।

भगवान्बाट *भगवद्गीता* सुनिसकेपछि अर्जुनले कृष्णलाई परमब्रह्मका रूपमा स्वीकार गरे। प्रत्येक जीव ब्रह्म हो तर भगवान् परमजीव वा परमब्रह्म हुनुहुन्छ। उहाँ नै सबैका परमआश्रय या परमधाम हुनुहुन्छ। उहाँ पवित्रतम् हुनुहुन्छ अर्थात् उहाँ अति शुद्ध हुनुहुन्छ, त्यसैले कुनैपनि भौतिक कल्मष वा संक्रमणले उहाँलाई छुनसकेको छैन। अनि **'पुरुषम्'** भन्ने शब्दले उहाँ परमभोक्ता हुनुहुन्छ भन्ने जनाउँदछ। यसरी नै **'शाश्वतम्'** भनेको आदि तथा सनातन हो। **'दिव्यम्'** भनेको दिव्य वा अलौकिक हो, **'आदिदेव'** भनेको भगवान् हो, **'अजम्'** भनेको अजन्मा हो र **'विभुम्'** भन्नाले महानतम् भन्ने अर्थ बुझिन्छ।

कसैले के पनि सोच्न सक्दछन् अर्जुन कृष्णका मित्र थिए त्यसैले यी भनाइहरू उनले आफ्ना मित्र कृष्णको चाप्लुसी गर्नका लागि मात्र भनेका हुन्। तर, *भगवद्गीता* पढ्ने पाठकहरूको मनमा उत्पन्न हुन सक्ने यस्ता शङ्काहरू निर्मूल गर्नका लागि स्वयम् अर्जुन यहाँ भन्छन्— मैले मात्र श्रीकृष्णलाई भगवान् मानेको नभएर नारद, असित, देवल तथा व्यासदेवजस्ता महापुरुषहरूले पनि उहाँलाई भगवान् भनेर स्वीकार गरेका छन्। यस्ता धेरै महापुरुषहरू छन् जसले समस्त आचार्यहरूद्वारा स्वीकृत वैदिक ज्ञानको प्रचार-प्रसार गरेका छन्। त्यसै गरी, अर्जुन पनि भगवान् श्रीकृष्णले जे-जस्तो भन्नुभएको छ त्यसलाई पूर्णरूपले सत्य मान्दछन्। **'सर्वमेतदृतं मन्ये'** अर्थात् हजुर जे भन्नु हुन्छ म त्यसलाई सत्य मान्दछु। अर्जुन फेरि भन्दछन्— "भगवान्को व्यक्तित्वलाई बुझ्न अत्यन्त कठिन छ। ठुलाठुला देवताहरू पनि उहाँलाई चिन्न असमर्थ हुन्छन्। मनुष्यभन्दा महान् व्यक्तित्वहरूले उहाँलाई जान्न सक्दैनन् र उहाँको परमभक्त नबनी कसरी एउटा सामान्य मानिसले उहाँलाई चिन्न सक्ला?"

त्यसैकारण, प्रथमतः *भगवद्गीताको* उपदेशलाई भक्तिभावपूर्वक ग्रहण गर्नु पर्दछ। कसैले पनि आफूलाई भगवान् श्रीकृष्णसमान सम्झनु हुँदैन र भगवान् श्रीकृष्णलाई सामान्य पुरुष वा कुनै एउटा ठुला मानिससरह पनि ठान्नु हुँदैन। भगवान् श्रीकृष्ण साक्षात् पुरुषोत्तम हुनुहुन्छ। तसर्थ, *भगवद्गीताको* भनाईअनुसार र *भगवद्गीताको* मर्म बुझेका अर्जुनको भनाइअनुसार पनि श्रीकृष्ण साक्षात् भगवान् हुनुहुन्छ भन्ने सिद्धान्तलाई हामीले स्वीकार गर्नु पर्दछ। यही विनम्रताद्वारा मात्र हामी *भगवद्गीतालाई* बुझ्न सक्दछौँ। जबसम्म विनम्र भावले *भगवद्गीताको* पाठ गरिँदैन तबसम्म त्यसको मर्म पनि बुझ्न सकिँदैन, किनभने यो एउटा महान् रहस्य हो।

त्यसो भए, *भगवद्गीता* के हो त? मानिसलाई भौतिक संसारको अज्ञानताबाट उद्धार गर्ने साधन नै *भगवद्गीता* हो। यस संसारमा प्रत्येक व्यक्ति विभिन्न प्रकारका विपत्तिहरूमा फँसिरहेको हुन्छ। अर्जुनले पनि कुरुक्षेत्रको युद्धमा एक किसिमको आपत्तिको सामना गर्दै थिए। त्यस समय अर्जुन कृष्णको शरणमा परे। फलस्वरूप, यो *भगवद्गीताको* प्रवचन प्रारम्भ भयो। अर्जुन मात्र होइन हामीजस्ता प्रत्येक व्यक्ति यो भौतिक जगत्का समस्याहरूले पीडित छौँ। हाम्रो अस्तित्व नै अनस्तित्वको वातावरण रहेको छ। तर, यथार्थमा अनस्तित्व वा मृत्युबाट हामी कहिल्यै भयभीत हुनु हुँदैन। हाम्रो अस्तित्व सनातन छ तैपनि कुनै न कुनै कारणवश हामी असत्मा धकेलिएका छौँ। जसको अस्तित्व छैन त्यसलाई असत् भनिन्छ।

संसारमा कष्ट भोगिरहेका मानिसहरू धेरै छन् र तीमध्ये थोरैले मात्र "म यस्तो विषम परिस्थितिमा किन आउनुपरेको हो?" भन्ने जिज्ञासा गर्छन्। जबसम्म मानिसमा आफ्नो कष्टप्रति जिज्ञासा उत्पन्न हुँदैन अनि जबसम्म उसलाई कष्ट भोग्नुभन्दा कष्टबाट मुक्त हुने उपाय खोज्नुमा अभिरुचि जाग्दैन तबसम्म त्यसलाई पूर्ण मानवका रूपमा सम्झिनु पनि हुँदैन। जहिलेदेखि मनमा यस प्रकारको जिज्ञासा जाग्न थाल्दछ त्यसै समयदेखि मानिसमा सही मानवता सुरु हुन्छ। ब्रह्म-सूत्रमा यस्तो जिज्ञासालाई ब्रह्म-जिज्ञासा भनिएको छ— **अथातो ब्रह्म जिज्ञासा**। मनुष्यका सम्पूर्ण कार्यकलापहरू तबसम्म असफल भएको मान्नु पर्दछ जबसम्म उसले ब्रह्मको स्वभावका विषयमा जिज्ञासा गर्न सुरु गर्दैन। जसका मनमा आफू कहाँबाट आएको हो? यस्तो कष्ट किन उठाउनु परिरहेको छ? मरिसकेपछि जाने ठाउँ कुन हो? आदि प्रश्नहरू उठ्न सुरु हुन्छन् तिनीहरू नै *भगवद्गीतालाई* सम्झन सक्ने सुपात्र विद्यार्थी हुन्। निष्ठावान् विद्यार्थीमा भगवान्प्रति दृढ आदरभाव पनि हुनु पर्दछ। अर्जुन यस्तै एक विद्यार्थी थिए।

जब मानिसले आफ्नो जीवनको वास्तविक प्रयोजन बिर्सिदिन्छ तब भगवान् श्रीकृष्णले विशेष रूपमा त्यही प्रयोजनलाई पुनर्स्थापना गर्नका लागि अवतार लिनु हुन्छ। असङ्ख्य जागृत व्यक्तिहरूमध्ये कुनै एकाध व्यक्तिले मात्र वास्तवमा आफ्नो स्थिति जानेका हुन्छन्। यो *भगवद्गीता* तिनीहरूकै लागि भनेर दिइएको हो। वास्तवमा हामीहरू सबै अविद्यारूपी बाघद्वारा लखेटिएका छौँ। तर, भगवान् जीवात्माहरूप्रति, विशेष गरी मानवजातिप्रति अत्यन्त कृपालु हुनुहुन्छ। त्यसकारण, उहाँले आफ्ना परममित्र अर्जुनलाई आफ्नो शिष्य बनाएर *भगवद्गीताको* प्रवचन दिनुभएको हो।

भगवान् श्रीकृष्णका पार्षद भएका हुनाले अर्जुन सबै प्रकारका अज्ञानबाट मुक्त थिए। तैपनि कुरुक्षेत्रको युद्धस्थलमा अज्ञानीजस्ता बनेर उनले भगवान् श्रीकृष्णसँग जीवनका कठिनाइहरूबारे धेरै प्रश्नहरू गरे। भगवान्बाटै जीवनका यी मूलभूत समस्याहरूको समाधानसम्बन्धी व्याख्या भएमा त्यसबाट आगामी पुस्ताका मानिसहरू लाभान्वित हुनेछन् र तिनका जीवनमा नयाँ रूपरेखा कोरिनेछ अनि त्यसैअनुसार अरू मानिसले पनि कर्म गर्नेछन् र आ-आफ्नो जीवनको लक्ष्य पूर्ण गर्नेछन् भन्ने उद्देश्य अर्जुनको थियो।

*भगवद्गीताको* विषयवस्तु पाँच मौलिक सत्यमा आधारित छ। यसमा सर्वप्रथम ईश्वर-विज्ञानको चर्चा छ अनि जीवहरूको वैधानिक वा मौलिक स्वरूपबारे विवेचना गरिएको छ। ईश्वर हुनुहुन्छ, ईश्वर भनेको नियन्त्रक हुनुहुन्छ अनि जीवहरू पनि छन् र तिनीहरू ईश्वरद्वारा नियन्त्रित हुन्छन्। अतः यदि कुनै जीवले आफूलाई कसैबाट पनि नियन्त्रित नभएको ठान्दछ र "म स्वतन्त्र छु" भन्ने ठान्छ त्यो पक्कै उन्मादी हो भन्ने बुझ्नु पर्दछ। जीव कुनै न कुनै प्रकारले सधैँ नियन्त्रित हुन्छ, विशेष गरी बद्ध अवस्थामा ऊ झन् नियन्त्रित हुन्छ। त्यसैले, *भगवद्गीताको* विषयवस्तु पनि नियन्त्रक ईश्वर तथा नियन्त्रित जीवसँग नै सम्बन्धित छ। यसमा प्रकृति (भौतिक प्रकृति), काल (सम्पूर्ण ब्रह्माण्ड अथवा भौतिक प्रकृतिको अभिव्यक्तिको समयावधि) र कर्मको पनि व्याख्या गरिएको छ। यो दृश्य जगत् विभिन्न किसिमका क्रियाकलापहरूले भरिएको छ। सम्पूर्ण जीवहरू भिन्दा भिन्दै कर्ममा लागेका छन्। *भगवद्गीताबाट* हामीले ईश्वर भनेको को हुनुहुन्छ? जीव भनेको के हो? प्रकृति के हो? दृश्य जगत् के हो? यी सबै कालद्वारा कसरी नियन्त्रित छन्? अनि जीवहरूका क्रियाकलापहरू के के हुन्? आदि कुरा सिक्नु पर्दछ।

*भगवद्गीताका* यी पाँच मूलभूत विषयद्वारा के स्थापित भएको छ— भगवान् कृष्ण नै ब्रह्म हुनुहुन्छ, परमनियन्त्रक हुनुहुन्छ, परमात्मा हुनुहुन्छ र उहाँ नै सबैभन्दा महान् हुनुहुन्छ। गुणका दृष्टिकोणले हेर्दा जीवहरू पनि

परम-नियन्त्रक भगवान्समान नै छन्। उदाहरणका लागि *भगवद्गीताका* विभिन्न अध्यायहरूमा भगवान् नै भौतिक प्रकृतिका सम्पूर्ण क्रियाकलापमाथि नियन्त्रण राख्नुहुन्छ भन्ने कुराको वर्णन गरिएको छ। भौतिक प्रकृति स्वतन्त्र छैन। प्रकृतिले परमेश्वरको अध्यक्षतामा कार्य गर्ने गर्दछिन्। भगवान् श्रीकृष्ण भन्नु हुन्छ **"मयाध्यक्षेण प्रकृतिः सूयते सचराचरम्"** अर्थात्, "भौतिक प्रकृतिले मेरो अध्यक्षतामा कार्य गर्दछिन्।" यो दृश्य जगत्मा विचित्र-विचित्रका घटनाहरू घटेको देख्दा यस जगत्का पछाडि यसका परमनियन्त्रको हात हुनुपर्छ भन्ने कुरा ज्ञात हुन्छ। कहीँ पनि कसैको नियन्त्रणबिना कुनै पनि घटना हुन सक्दैन। त्यसैले नियन्त्रकलाई मान्दिनँ भन्नु केटाकेटीपन हो। उदाहरणका लागि कुनै बालक एउटा सवारी-साधनलाई घोडाले वा अरू कुनै जनावरले नतानी आफैँ चलेको देख्दा छक्क पर्न सक्दछ तर त्यो सवारी-साधनको इन्जिनीयरिङ व्यवस्था बुझेको मानिस त्यो देखेर छक्क पर्दैन। उसलाई त्यो यन्त्रका पछाडि मानिस वा कुनै सञ्चालक छ भन्ने जानकारी हुन्छ। ठीक त्यसै गरी, परमेश्वर नै त्यो चालक हुनुहुन्छ जसका निर्देशनमा प्रत्येक वस्तुले कर्म गरिरहेको हुन्छ। जीवहरूलाई भगवान्ले आफ्नै अंशका रूपमा स्वीकार गर्नुभएको छ जसको चर्चा पछिका अध्यायहरूमा गरिने छ। सुनको एउटा कण पनि सुन नै हुन्छ र समुद्रको एक थोपा पानी पनि समुद्रजस्तै नुनिलो हुन्छ। त्यसै गरी, हामी जीवात्माहरू पनि परमनियन्त्रक ईश्वर वा भगवान् श्रीकृष्णका अंश भएकाले हामीमा पनि सूक्ष्म मात्रामा परमेश्वरका गुणहरू विद्यमान छन्। हामी पनि परमेश्वरका अधीनमा रहेका सूक्ष्म ईश्वर नै हौँ। हामी प्रकृतिमाथि नियन्त्रण कायम गर्ने प्रयत्न गर्दैछौँ। वर्तमानमा हामीहरू आकाशीय ग्रहहरू तथा अन्तरिक्षमाथि पनि आफ्नो आधिपत्य कायम गर्ने साहस गरिरहेका छौँ। वस्तुलाई आफ्नो नियन्त्रणमा राख्ने प्रवृत्ति भगवान् श्रीकृष्णमा छ, त्यसैले, हामीमा पनि त्यो प्रवृत्ति विद्यमान छ। प्रकृतिमाथि शासन गर्ने प्रवृत्ति हामीमा निहित भए तापनि हामी नै परमनियन्त्रक होइनौँ भन्ने कुरा जानिराख्नु आवश्यक छ। *भगवद्गीतामा* पनि यसको व्याख्या गरिएको छ।

भौतिक प्रकृति के हो ? यो अपरा प्रकृति हो। *भगवद्गीतामा* यसको व्याख्या गरिएको छ। त्यहाँ जीवलाई पराप्रकृति भनिएको छ। प्रकृति परा हुन् वा अपरा तिनी सधैँ परमेश्वरका नियन्त्रणमा रहेकी हुन्छिन्। प्रकृति स्त्री-स्वरूपा हुन् त्यसैले पतिद्वारा पत्नी नियन्त्रित भएजस्तै प्रकृति पनि परमेश्वरद्वारा नियन्त्रित छिन्। प्रकृति सधैँ परमेश्वरका अधीनमा रहन्छिन्। उनीमाथि भगवान्को प्रभुत्व हुन्छ किनकि भगवान् नै प्रभु हुनुहुन्छ। जीव र प्रकृति दुवै परमेश्वरद्वारा शासित र नियन्त्रित छन्। सम्पूर्ण जीवहरू परमेश्वरकै अंश हुन्

तैपनि गीताले तिनीहरूलाई प्रकृति नै मानेको छ। गीताको सातौँ अध्यायमा यस कुरालाई यसरी स्पष्ट गरिएको छ— **"अपरेयमितस्त्वन्यां प्रकृतिं विद्धि मे पराम्। जीव भूताम्........।"** अर्थात्, यो भौतिक प्रकृति मेरै अपरा प्रकृति हो तर योभन्दा पनि पर अर्को प्रकृति छ, त्यो 'जीव भूताम्' अर्थात् जीव हो।

प्रकृति स्वयम् तीन गुणबाट बनेको छ, सत्वगुण, रजोगुण र तमोगुण। यी गुणहरूभन्दा माथि शाश्वत समय छ र प्रकृतिका गुणहरू तथा शाश्वत समयको विस्तार एवं नियन्त्रणको संयोगबाट विभिन्न क्रियाकलापहरू उत्पन्न हुन्छन् जसलाई कर्म भन्ने गरिन्छ। यी क्रियाकलापहरू अनादिकालदेखि नै चलिआएका छन्। हामी पनि आफ्ना-आफ्ना कर्मका अनुसार सुख या दुःख भोगिरहेका छौँ। उदाहरणार्थ, एकै क्षणका लागि मानौँ, म एक व्यापारी हूँ त्यसैले मैले आफ्नो बुद्धिद्वारा कठोर परिश्रम गरेर धेरै धन-सम्पत्ति जोडेँ। म त्यो सम्पत्तिको सुख भोग्ने भोक्ता भएँ। त्यस्तै, यदि व्यापारमा घाटा लागेर नोक्सान भए त्यसबाट हुने दुःखको भोक्ता पनि म नै भएँ। यस्तै प्रकारले जीवनका हरेक क्षेत्रमा हामी आफ्नो-आफ्नो कर्मको फलअनुसार सुख र दुःखका भागी हुन पुग्दछौँ। यसैलाई कर्म भनिन्छ।

*भगवद्गीतामा* ईश्वर वा परमेश्वरको व्याख्या गरिएको छ। जीव तथा प्रकृतिको अनि काल र कर्मको पनि व्याख्या गरिएको छ। यी पाँचमध्ये ईश्वर, जीव, प्रकृति र काल शाश्वत हुन्। प्रकृतिको अभिव्यक्ति क्षणभङ्गुर हुन सक्दछ तर यो झूटो हुन सक्दैन। कतिपय दार्शनिकहरू प्रकृतिको अभिव्यक्तिलाई झूटो हो भन्दछन् तर *भगवद्गीता* र वैष्णव दर्शनअनुसार त्यो कुरा सत्य होइन। जगत्को अभिव्यक्तिलाई झूटो मान्न सकिँदैन। यसलाई वास्तविक तर क्षणभङ्गुर मान्न सकिन्छ। यो आकाशमा घुमिरहने बादलजस्तै हो। अथवा अन्नको पोषण गर्ने वर्षा ऋतुको आगमनजस्तै हो। जब वर्षा ऋतु सकिन्छ, बादल पनि हराउँदछ, अनि वर्षाको पानीद्वारा पोषित बाली-नाली पनि सुक्न थाल्दछन्। त्यसै गरी, यो भौतिक सृष्टि पनि कुनै ठाउँमा कुनै समय प्रकट हुन्छ, केही समयसम्म रहन्छ अनि फेरि लुप्त हुन्छ वा हराउँदछ। प्रकृतिका लीला यस्तै हुन्छन्। तर, यो चक्र निरन्तर चलिरहन्छ। अतः प्रकृति झूटो होइन। यो शाश्वत छ। भगवान्ले यसलाई "मेरी प्रकृति" भन्नुभएको छ। यो अपरा (भौतिक) प्रकृति परमेश्वरकै अलग्गिएको शक्ति हो। त्यसै गरी, जीव पनि परमेश्वर कै शक्ति हो। जीव भिन्न शक्ति नभए पनि भगवान्सँग नित्यरूपमा सम्बद्ध शक्ति हो। तसर्थ, भगवान्, जीव, प्रकृति र काल परस्पर सम्बन्धित छन् र शाश्वत पनि छन्। तर, अर्को वस्तु कर्म शाश्वत छैन। यद्यपि कर्मको फल अत्यन्त पुरानो पनि हुन सक्दछ। अनादिकालदेखि

हामी आफ्ना शुभ-अशुभ कर्मफलहरू भोग्दै आइरहेका छौँ। हामी आफ्ना कर्महरूको फललाई परिवर्तन गर्न सक्दछौँ र यो परिवर्तन हाम्रो ज्ञानमाथि निर्भर गर्दछ। हामी विविध प्रकारका कर्महरूमा व्यस्त रहन्छौँ। तर, कस्तो प्रकारको कर्म गर्नाले यी सारा कर्मफलबाट मुक्ति पाइन्छ भन्ने ज्ञान हामीलाई छैन। *भगवद्गीतामा* यस कुराको वर्णन गरिएको छ।

परमेश्वर परमचैतन्यस्वरूप हुनुहुन्छ। ईश्वरकै अंश भएको हुँदा जीवात्मा पनि चेतन हुन्। जीव र भौतिक प्रकृति दुवैलाई प्रकृति भनिएको छ किनभने दुवै परमेश्वरका शक्ति हो। यीमध्ये जीव चेतन हो प्रकृति अचेतन हो। भिन्नता यत्ति छ। त्यसैले, जीव-प्रकृतिलाई उत्कृष्ट मानिएको हो किनभने यो जीव भगवान्कोजस्तै चेतनाले युक्त छ। भगवान् परमचैतन्य हुनुहुन्छ तर जीवले आफूलाई परमचैतन्य हूँ भन्न सुहाउँदैन। जीव आफ्नो सिद्धावस्थामा पनि परमचैतन्य हुन सक्दैन। यदि कसैले जीव पनि परमचैतन्य हुन सक्दछ भन्दछ भने त्यो भ्रामक सिद्धान्त हो। जीव चेतन हुन सक्दछ तर परमचैतन्य हुन सक्दैन।

जीव र ईश्वरबीचको अन्तरबारे विशद वर्णन *भगवद्गीताको* तेह्रौँ अध्यायमा गरिएको छ। ईश्वर क्षेत्रज्ञ हुनुहुन्छ, उहाँ चेतन हुनुहुन्छ। हुनत जीव पनि चेतन छ तर ऊ आफ्नो शरीरप्रति मात्र सचेत छ र ईश्वर समग्र शरीरहरूप्रति नै सचेत हुनुहुन्छ। उहाँ प्रत्येक जीवका हृदयमा निवास गर्नु हुन्छ, त्यसैले उहाँ जीव विशेषका हरेक मानसिक गतिशीलता वा गतिविधिसँग परिचित हुनुहुन्छ। उहाँ प्रत्येक जीवका हृदयमा ईश्वर या नियन्त्रकका रूपमा रहेर जीवलाई उसको इच्छानुसार काम गर्ने निर्देशन दिइरहनु हुन्छ। यो कुरा हामीले बिर्सनु हुँदैन। आफूले के गर्नुपर्ने हो भन्ने कुरा नै जीवलाई थाहा हुँदैन। ऊ सर्वप्रथम कुनै पनि तरिकाबाट कर्म गर्ने सङ्कल्प गर्दछ तर पछि आफ्नै कर्म र कर्मफलको बन्धनमा बाँधिन पुग्दछ। ऊ लुगा परिवर्तन गरे जस्तै एक प्रकारको शरीर छोडेर अर्को शरीरमा प्रवेश गर्छ। यसरी उसको आत्माले देहान्तरद्वारा आफूले पूर्वजन्ममा गरेका कर्महरूको फलको भोग गरिरहन्छ। सत्वगुणमा पुगेपछि मात्र जीवले यी कर्महरूलाई परिवर्तन गर्न सक्छ र कस्तो कर्म गर्नुपर्छ भन्ने कुरा बुझ्न थाल्दछ। सत्वगुणमा स्थित भएर तदनुसार कर्म गर्ने मानिसका पूर्वजन्ममा उसले गरेका कर्मका सबै फलहरू परिवर्तन हुन् सक्छन्। किनभने कर्म शाश्वत वस्तु होइन। त्यसैले ईश्वर, जीव, प्रकृति, काल तथा कर्म यी पाँच विषयमध्ये चारवटा शाश्वत हुन् र कर्म शाश्वत होइन।

यसप्रकार, परमचेतन ईश्वरसँग जीवको समानता रहेको देखिन्छ। भगवान् र जीव दुवैको चेतना दिव्य छ। यो चेतना पदार्थको संयोगबाट उत्पन्न

भएको होइन। पदार्थबाट चेतनाको जन्म हुन्छ भन्ने सोचाइ भ्रमपूर्ण छ। *भगवद्‌गी ताले* भौतिक तत्त्वहरूको विशेष संयोगबाट चेतनाको विकास हुन्छ भन्ने सिद्धान्तलाई स्वीकार गर्दैन। जसरी रङ्‌गीन काँचबाट परावर्तित प्रकाश काँचकै रङ्‌गजस्तो देखिन्छ, त्यसै गरी यो चेतना पनि भौतिक परिस्थितिका आवरणले गर्दा विकृत रूपमा प्रतिविम्बित भएजस्तो देखिन्छ। भगवान् श्रीकृष्ण भन्नु हुन्छ, "**मयाध्यक्षेण प्रकृतिः।**" भगवान्‌ले यो भौतिक जगत्‌मा अवतार लिनु हुन्छ तर उहाँको चेतनामा कुनै भौतिक प्रभाव परेको हुँदैन। यदि उहाँमा यस्तो प्रभाव पर्ने भए अलौकिक विषयका सम्बन्धमा उहाँ यसरी बोल्न सक्नुहुने थिएन जसरी उहाँले *भगवद्‌गीतामा* बोल्नुभएको छ। भौतिक कल्मषद्वारा ग्रस्त चेतनाबाट मुक्त नभई कसैले पनि दिव्य जगत्‌का विषयमा केही बोल्न सक्दैन। तसर्थ, भगवान् कहिल्यै पनि भौतिक रूपले संक्रमित हुनु हुन्न। वर्तमान परिवेशमा हाम्रो चेतना भौतिक रूपले दूषित भएको छ र *भगवद्‌गीताले* हामीलाई यस्तै कलुषित चेतनाबाट मुक्त हुने शिक्षा दिएको छ। चेतना शुद्ध भएका हाम्रा सारा कर्महरू परमेश्वरकै इच्छाअनुसार चल्न थाल्नेछन् र हामी पनि सुखी हुन सक्नेछौँ। तर, यसको अर्थ हामीले आफ्ना सबै कार्यहरू पूर्णतया छोड्नुपर्छ भन्ने होइन बरु हामीले आफ्ना कर्महरूलाई पवित्र बनाउन पर्दछ भन्ने हो। किनभने पवित्र कर्मलाई नै भक्ति भनिन्छ। भक्तिमा रहेर गरिने कर्महरू सामान्य कर्मजस्ता देखिए पनि ती भौतिक कल्मषद्वारा संक्रमित हुँदैनन्। एउटा अज्ञानी मानिसले कुनै भक्तले गरेको कर्म देख्दा सामान्य व्यक्तिले गरेको कर्मजस्तै ठान्न सक्छ किनभने भक्त वा भगवान्‌का कर्महरू अशुद्ध चेतना र पदार्थद्वारा कहिल्यै संक्रमित हुँदैनन् भन्ने कुरा त्यस मूर्खलाई थाहा हुँदैन। भगवान् त्रिगुणातीत हुनुहुन्छ। जे होस् हामीले यहाँ हाम्रो चेतना संक्रमित छ भन्ने कुरा जानिराख्नु पर्दछ।

जब हामी भौतिक प्रभावबाट संक्रमित हुन पुग्दछौँ, त्यस समय हामी बद्ध भनिन्छौँ। हामीले आफूलाई प्रकृतिको उत्पादन मान्दछौँ, त्यसैले हामीमा झूटो चेतना प्रकट हुन्छ। यो झूटो अहङ्कार हो। जसले आफूलाई शरीर मात्र हूँ भन्ने ठान्दछ, त्यसले आफ्नो स्वरूप चिन्न सक्दैन। *भगवद्‌गीताको* प्रवचन पनि मानिसहरूलाई शरीरको अवधारणा रूपी बुद्धिबाट मुक्त गर्नका लागि गरिएको थियो। यही ज्ञान प्राप्त गर्नका लागि अर्जुनले पनि आफूलाई भगवान्‌का अगाडि त्यसरी प्रस्तुत गरिरहेका थिए। मानिसले आफूलाई शरीरको अवधारणा रूपी बुद्धिबाट मुक्त पार्नु पर्दछ। अध्यात्मवादीको प्राथमिक कर्तव्य नै यही हो। जो मुक्त हुन चाहन्छ, जो स्वच्छन्द रहन चाहन्छ उसले सर्वप्रथम आफूलाई शरीरको अवधारणा रूपी बुद्धिबाट मुक्त गर्नै पर्दछ। मुक्तिको अर्थ हो

भौतिक चेतनाबाट स्वतन्त्र हुनु। *श्रीमद्भागवत्मा* पनि मुक्तिको परिभाषा दिँदै भनिएको छ—**"मुक्तिर्हित्वान्यथारूपं स्वरूपेण व्यवस्थितिः।"** मुक्तिको अर्थ यो भौतिक जगत्को संक्रमित चेतनाबाट मुक्त भएर शुद्ध चेतनामा स्थिर हुनु हो। *भगवद्गीताको* समग्र उपदेश यही शुद्ध चेतनालाई जागृत पार्ने कुरामा केन्द्रित छ। यसैले गीताको अन्त्यमा भगवान्ले अर्जुनलाई विशुद्ध चेतना प्राप्त भयो कि भएन भनेर प्रश्न गरिरहनुभएको हामी पाउँदछौँ। शुद्ध चेतनाको अर्थ हो भगवान्को आदेशअनुसार कर्म गर्नु। शुद्ध चेतनाको सार पनि यही हो। भगवान्कै अंश भएको हुँदा हामीमा चेतना पहिलेदेखि नै विद्यमान छ, साथै निकृष्ट गुणबाट प्रभावित हुने प्रवृत्ति पनि हामीमा विद्यमान छ तर परमेश्वर भएका कारणले भगवान्लाई यस्ता गुणद्वारा प्रभावित हुनुपर्दैन। क्षुद्र जीव र परमेश्वरका बीचमा रहेको भिन्नता यही हो।

यो चेतना के हो ? यो "म हूँ" भन्ने जान्नुहो। त्यसो भए "म हूँ" भनेको के हो ? संक्रमित चेतनामा रहँदा "म हूँ" को अर्थ म नै सर्वेसर्वा हूँ र म नै भोक्ता हूँ भन्ने हुन्छ। प्रत्येक प्राणीले विचार गर्दछ कि यो भौतिक संसारको सृष्टिकर्ता र स्वामी ऊ नै हो। यही कारणले गर्दा नै यो संसार चलिरहेको छ। भौतिक चेतनाका दुईवटा मनोवैज्ञानिक विभाग छन्। एउटाले भन्छ—म नै स्रष्टा हूँ र अर्कोले भन्छ म नै भोक्ता हूँ। वास्तवमा स्रष्टा र भोक्ता एक मात्र परमेश्वर हुनुहुन्छ। परमेश्वरको अंश मात्र भएको हुनाले जीव स्रष्टा पनि होइन र भोक्ता पनि होइन। जीव सहयोगी मात्र हो। ऊ सृजित हो र भुक्त हो। जसरी यन्त्रको कुनै एउटा पूर्जा सम्पूर्ण यन्त्रको सहयोगी हुन्छ, त्यसै गरी शरीरको कुनै एउटा अङ्ग पनि पूरै शरीरको अभिन्न सहायक हुन्छ। हात, खुट्टा, आँखाहरू शरीरका अङ्ग मात्र हुन् वास्तविक भोक्ता यिनीहरू होइनन्। भोक्ता पेट हो। खुट्टाले हिँडेर, हातले खुवाएर, दाँतले चबाएर र अरू अवयवहरूले पनि आफ्नो आफ्नो कार्य गरेर संयुक्त रूपमा पेटलाई नै सन्तुष्ट पार्ने काम गरिरहेका हुन्छन्। किनभने पेटले नै शारीरिक संरचनालाई पुष्ट पार्ने कार्य गर्दछ। तसर्थ सबै खाद्यवस्तु पहिले पेटमै पुऱ्याइन्छ। जसरी जरामा पानी हालेर वृक्षलाई हुर्काइन्छ त्यसरी नै पेटको भरणद्वारा शरीरको पोषण गराइन्छ। शरीरलाई स्वस्थ राख्न शरीरका सबै अङ्ग-प्रत्यङ्गहरूले पेट भर्ने कार्यमा सहयोग पुऱ्याउनु पर्दछ। त्यसै गरी, परमेश्वर नै हाम्रा स्रष्टा र भोक्ता हुनुहुन्छ। हामी उहाँका अधीनमा रहेर उहाँलाई प्रसन्न पार्ने कार्यमा सहयोगी हुने सहायक मात्र हौँ। यस्तो सहयोगबाट हामीलाई त्यस्तै लाभ हुन्छ जस्तो पेट भर्नाले सबै अङ्गलाई लाभ हुन्छ। यदि हातका औंलाहरूले भोजन मुखमा नपुऱ्याई आफैँ खान्छु भन्न लागे तिनीहरू निराश हुनुपर्ने छ। सृजना र

भोगका केन्द्रविन्दु नै परमेश्वर हुनुहुन्छ र सारा जीवहरू उहाँका सहयोगी मात्र हुन्। यस्तो समझदारीबाट नै जीव तथा भगवान् आनन्दित हुन्छन्। यो सम्बन्ध स्वामी तथा सेवकको जस्तो छ। स्वामी सन्तुष्ट भए सेवक पनि सन्तुष्ट हुन्छ। जीवमा भौतिक जगत्को स्रष्टा पनि आफैँ हुने र भोक्ता पनि आफैँ हुने प्रवृत्ति हुन्छ। यस्ता प्रवृत्तिलाई छोडेर उसले परमेश्वरलाई नै सन्तुष्टि दिने कर्म गर्नु पर्दछ। हुनत यस दृश्यजगत्का स्रष्टा परमेश्वरमा त्यस किसिमको प्रवृत्ति भएको हुनाले जीवमा पनि त्यस्तो प्रवृत्ति देखापरेको हो।

*भगवद्गीतामा* केवल भगवान् मात्रै पूर्ण हुनुहुन्छ भनिएको छ। परमनियन्त्रक, नियन्त्रित जीव, दृश्यजगत्, शाश्वत काल तथा कर्महरू आदि सबै उहाँमा समाहित छन्। गीताको मूल पाठमा यी सबै कुराहरूको व्याख्या दिइएको छ। यी सबै मिलेर पूर्णको निर्माण गर्दछन्। यही पूर्णलाई नै परमब्रह्म या परमसत्य भनिन्छ । यही पूर्ण एवं परमसत्य नै भगवान् श्रीकृष्ण हुनुहुन्छ। उहाँकै विभिन्न शक्तिहरूका कारणले यो दृश्य जगत् अभिव्यक्त भएको हो, एक मात्र उहाँ नै पूर्ण हुनुहुन्छ।

*भगवद्गीतामा* ब्रह्म पनि पूर्ण परमपुरुषका अधीनमा हुनुहुन्छ भन्ने उल्लेख पाइन्छ। जस्तै **'ब्रह्मणो हि प्रतिष्ठाऽहम्'**। ब्रह्म-सूत्रले ब्रह्मलाई सूर्यको एक किरणजस्तै हुन् भनेको छ। अर्थात् निर्विशेष ब्रह्म भनेको भगवान्का प्रभामय किरणहरूको समूह मात्र हो। निर्विशेष ब्रह्म भन्नु पूर्ण ब्रह्मको अपूर्ण अनुभूति मात्र हो र परमात्माको धारणा पनि यस्तै हो। गीताको पन्ध्रौँ अध्यायमा भनिएको छ— भगवान् पुरुषोत्तम निर्विशेष ब्रह्म तथा परमात्माको आंशिक अनुभूतिभन्दा पनि माथि हुनुहुन्छ। भगवान् पुरुषोत्तमलाई सच्चिदानन्दविग्रह भनिएको छ। ब्रह्मसंहिताको शुभारम्भ पनि यसरी भएको छ— **"ईश्वरः परमः कृष्णः सच्चिदानन्द विग्रहः अनादिरादिर्गोविन्दः सर्वकारण कारणम्"** अर्थात्, गोविन्द तथा भगवान् श्रीकृष्ण नै सबै कारणका मूल कारण हुनुहुन्छ। उहाँ नै आदि कारण हुनुहुन्छ र सत्, चित् आनन्दस्वरूप हुनुहुन्छ। निर्विशेष ब्रह्म उहाँकै सत् (शाश्वत) स्वरूपको एउटा अनुभूति हो र परमात्मा सत्-चित्त (शाश्वत-ज्ञान) को अनुभूति हो। तर, भगवान् श्रीकृष्ण समस्त दिव्य स्वरूपका परिपूर्ण अनुभूति हुनुहुन्छ र सत्-चित्-आनन्दका पूर्ण मूर्ति हुनुहुन्छ।

अल्पज्ञानी मानिसहरू परमसत्यलाई निर्गुण ठान्दछन् तर परमसत्य निर्गुण नभई एक दिव्य पुरुष हुनुहुन्छ। समस्त वैदिक ग्रन्थहरूले यसको पुष्टि गरेका छन्— **"नित्यो नित्यानां चेतनश्चेतनानाम्"** (*कठोपनिषद्* २.२.१३)। जसरी हामी सबै जीव हौँ र हामी सबैको आफ्नो-आफ्नो वैयक्तिक सत्ता छ त्यसरी नै परमसत्य पनि अनन्त पुरुष हुनुहुन्छ र भगवान्को अनुभूति भन्नु नै उहाँकै

पूर्ण स्वरूपमा समस्त दिव्य लक्षणहरूको अनुभूति हो। यो पूर्णता रूपविहीन (निराकार) छैन। यदि त्यो निराकार वा कुनै अन्य वस्तुभन्दा घटी भएको भए पूर्ण हुन सक्दैनथ्यो। जो पूर्ण छ त्यो हाम्रा लागि अनुभवगम्य र अनुभवातीत हरेक वस्तुहरूबाट युक्त हुनु पर्दछ अन्यथा त्यो कसरी पूर्ण हुन सक्दछ? पूर्ण भगवान्मा अपार शक्तिहरू छन् (**परास्य शक्तिर्विविधैव श्रूयते**)।

भगवान् श्रीकृष्ण कसरी आफ्ना विभिन्न शक्तिहरूद्वारा क्रियाशील हुनुहुन्छ भन्ने कुराको व्याख्या पनि *श्रीमद्भगवद्गीतामा* गरिएको छ। हामीले निवास गरिरहेको यो दृश्य जगत् पनि स्वयम्मा पूर्ण छ। साङ्ख्य दर्शनअनुसार जुन चौबीस तत्त्वहरूद्वारा यो नश्वर ब्रह्माण्डको निर्माण भएको छ ती तत्त्वहरू यस ब्रह्माण्डको पालन र धारणका लागि आवश्यक पर्ने सबै साधनहरूद्वारा पूर्णतया समन्वित छन्। यसमा कुनै विजातीय तत्त्व पनि छैन र यसका लागि कुनै अर्को वस्तुको आवश्यकता पनि पर्दैन। यो सृष्टिको आफ्नो निजी नियतकाल पनि छ। यसको निर्धारण परमेश्वरकै शक्तिद्वारा हुन्छ। जब यो काल पूर्ण हुन्छ अनि त्यस पूर्ण व्यवस्थाबाट यो क्षणभङ्गुर सृष्टिको पनि विनाश हुन्छ। तर, क्षुद्र भएपनि जीवात्मालाई पूर्णताको अनुभव गर्ने सुविधा प्राप्त छ। पूर्णतालाई अनुभव गर्ने ज्ञानको अभावले गर्दा नै सबै प्रकारका अपूर्णताहरूको अनुभव हुनगएको हो। *भगवद्गीताबाट* वैदिक विद्याको सम्पूर्ण ज्ञान प्राप्त गर्न सकिन्छ।

समष्टि रूपमा वैदिक ज्ञान अमोघ (अच्युत) छ। सम्पूर्ण हिन्दूहरू यस ज्ञानलाई पूर्ण र अमोघ मान्दछन्। उदाहरणार्थ— गोबर एक प्रकारको पशुको मल हो। स्मृति एवं वैदिक विधानअनुसार कसैले पशुको मल छोएमा त्यो नुहाएपछि मात्र शुद्ध हुन्छ। तर, वैदिक शास्त्रमा गाईको गोबरलाई पवित्र पार्ने साधन मानिएको छ। यसलाई विरोधाभास मान्न सकिन्छ। तथापि यो वैदिक आदेश हुनाले यसमा त्रुटि छैन र शंका पनि गर्नुपर्दैन। अब आधुनिक विज्ञानको परीक्षणबाट पनि गाईको गोबरमा जीवाणु-नाशक गुण रहेको तथ्य प्रमाणित भइसकेको छ। अतएव वैदिक ज्ञान पूर्ण छ किनभने सबै प्रकारका शंका र त्रुटिबाट यो मुक्त छ। अनि यो *भगवद्गीता* त्यही समस्त वैदिक ज्ञानको नौनी (सार) हो।

वैदिक ज्ञान शोधको विषय होइन। हाम्रो शोधकार्य नै अपूर्ण छ किनभने हामी अपूर्ण इन्द्रियहरूका माध्यमबाट शोध (अनुसन्धान) गर्न चाहन्छौँ। हामीले *भगवद्गीतामा* भनिएजस्तै पहिलेदेखि नै चलिआएको पूर्ण ज्ञानलाई परम्पराद्वारा स्वीकार गर्नु पर्दछ। त्यस ज्ञानलाई हामीले उपयुक्त स्रोत र उपयुक्त परम्पराबाट ग्रहण गर्नु पर्दछ। यो ज्ञान गुरुस्वरूप साक्षात् भगवान्बाट प्रारम्भ भएर गुरु-शिष्य परम्पराअनुसार अघि बढिरहन्छ। अर्जुनले शिष्यका रूपमा

भगवान् श्रीकृष्णबाट शिक्षा ग्रहण गरेका छन् र निर्विरोध रूपमा भगवान् श्रीकृष्णका सबै कुरा स्वीकार गरेका छन्। कसैलाई *भगवद्गीताको* एउटा अंश स्वीकार गर्ने र अर्को अंशलाई अस्वीकार गर्ने अनुमति दिन सकिँदैन। हामीले *भगवद्गीतालाई* भाष्य-मुक्त (टीका टिप्पणीरहित) तथा संशोधनरहित अवस्थामा स्वीकार गर्नु पर्दछ, विषयवस्तुको मनोमानी व्याख्यामा लाग्नु हुँदैन। गीतालाई हामीले वैदिक ज्ञानको सर्वोत्कृष्ट र परिपूर्ण अभिव्यक्तिका रूपमा हेर्नु पर्दछ। वैदिक ज्ञान दिव्य श्रोतबाट प्राप्त हुन्छ। यसको पहिलो प्रवचन स्वयम् भगवान्ले गर्नुभएको हो। भगवान्द्वारा बोलिएका शब्दहरूलाई अपौरूषेय भनिन्छ। भगवान्ले उच्चारण गर्नुभएको वचन र संसारी व्यक्तिले बोलेको वचनमा भिन्नता हुनु स्वाभाविक हो। किनभने संसारी व्यक्तिमा चार प्रकारका दोषहरू हुन्छन्।

(१) संसारी मानिसहरूले अवश्य त्रुटि गर्दछन्। (२) उनीहरू मोहग्रस्त पनि हुन्छन्। (३) उनीहरूमा अरूलाई धोका दिने प्रवृत्ति हुन्छ। (४) उनीहरूका इन्द्रियहरूमा अपूर्णता हुन्छ। यिनै चारओटा दोषहरूले गर्दा मानिसमा सर्वव्यापी ज्ञानलाई पूर्णरूपले प्रकट गर्ने सामर्थ्य हुँदैन।

यस्ता दोषपूर्ण व्यक्तिहरूद्वारा वैदिक ज्ञान प्राप्त हुन सक्दैन। यो वैदिक ज्ञान सर्वप्रथम ब्रह्माजीका हृदयमा प्रदान गरियो किनभने ब्रह्माजी नै सबभन्दा अगाडि उत्पन्न हुनुभएका प्रथम जीव हुन्। अनि ब्रह्माले यो ज्ञान आफ्ना छोरा एवं शिष्यहरूलाई त्यही रूपमा प्रदान गर्नुभयो जुन रूपमा भगवान्बाट उहालाई प्राप्त भएको थियो। भगवान् पूर्ण हुनुहन्छ त्यसैले उहाँ प्रकृतिका नियमको अधीनमा रहने प्रश्नै उठ्दैन। भगवान् नै यस ब्रह्माण्डका एकमात्र स्वामी हुनुहुन्छ भन्ने ज्ञान मानिसलाई हुनैपर्छ। भगवान् आदि स्रष्टा तथा ब्रह्माका पनि सृष्टिकर्ता हुनुहुन्छ। एघारौँ अध्यायमा भगवान्लाई प्रपितामह भनेर सम्बोधन गरिएको छ किनभने उहाँ पितामह ब्रह्माजीका पनि सृष्टिकर्ता हजुरबुवा हुनुहुन्छ। तसर्थ कसैले पनि आफूलाई कुनै वस्तुको स्वामी ठान्नु हुँदैन। उसले ती वस्तुहरूलाई मात्र आफ्ना हुन् भन्ने ठान्नु पर्दछ जुन वस्तु उसका पोषणका निमित्त भगवान्ले अलग गरिदिनुभएको छ।

भगवान्ले हाम्रा लागि प्रदान गर्नुभएका वस्तुहरू कसरी सदुपयोग गर्नु पर्दछ भन्ने अनेक उदाहरणहरू यहाँ दिइएका छन्। यसको व्याख्या *भगवद्गीतामा* पनि गरिएको छ। पहिले अर्जुनले पनि कुरुक्षेत्रको युद्धमा आफू नलड्ने निश्चय गरेका थिए। यो उनको आफ्नो निर्णय थियो। आफ्नै नाता सम्बन्धीहरूलाई मारेर राज्य गर्ने चाहना आफूलाई नभएको कुरा अर्जुनले भगवान्सँग गरेका थिए। उनको यो निर्णय शरीरमा (देहात्मबुद्धिमा) आधारित

थियो। किनभने उनले आफूलाई शरीर हूँ भन्ने ठानेका थिए। त्यसैले आफ्ना भाइ, भतिजा, साला, पितामहहरूसँग आफ्नो शारीरिक नातासम्बन्ध भएको कुरा उनले अनुभव गरे। अतः उनी आफ्ना शारीरिक चाहनाहरूलाई सन्तुष्ट पार्न चाहन्थे। यिनको यस्तो दृष्टिकोणलाई परिवर्तन गर्नकै लागि भगवान्ले *भगवद्गीताको* प्रवचन गर्नुभएको हो र अन्त्यमा अर्जुनले पनि **"करिष्ये वचनं तव"** अर्थात् म हजुरको आदेशअनुसार चल्दछु भन्दै युद्ध गर्ने निर्णय गरे।

मानिसहरू कुकुर-बिरालोजस्तै लडाइँ गर्न भनेर यो संसारमा आएका होइनन्। मानिसले मानवजीवनको महत्त्व बुझ्नु पर्दछ र सामान्य पशुको जस्तो आचरण गर्नु हुँदैन। मानिसले आफ्नो जीवनको उद्देश्य पनि बुझ्नु पर्दछ। वैदिक ग्रन्थहरूमा यसको निर्देशन गरिएको छ र *भगवद्गीतामा* त्यसको सार दिइएको छ। वैदिक ग्रन्थ मानिसहरूका लागि हो, पशुहरूका लागि होइन। एउटा पशुले अर्को पशुको हत्या गर्दछ र त्यसलाई कुनै पाप लाग्दैन। तर यदि मानिसले आफ्नो अनियन्त्रित स्वादले जिब्रोको सन्तुष्टिका निमित्त पशुवध गरेमा त्यसले प्रकृतिको नियम उल्लङ्घन दायित्व वहन गर्नु पर्दछ। प्रकृतिका गुणअनुसार कर्महरू सात्त्विक, राजसिक र तामसिक गरी तीन प्रकारका हुन्छन् भनेर *भगवद्गीतामा* स्पष्ट उल्लेख गरिएको छ। त्यसै गरी आहार पनि सात्त्विक, राजसिक र तामसिक गरी तीन प्रकारका छन्। यी सबैको विशद वर्णन पनि गीतामा गरिएको छ। *भगवद्गीताका* उपदेशहरू राम्रोसँग पालन गरेमा हाम्रो सम्पूर्ण जीवन शुद्ध हुन सक्छ र अन्त्यमा हामी यो भौतिक आकाश भन्दा पनि पर रहेको आफ्नो गन्तव्यमा पुग्न सक्नेछौँ। **( यद्गत्वा ननिवर्तन्ते तद्धाम परमं मम )**

यस गन्तव्यलाई सनातन आकाश या नित्य चिन्मय आकाश पनि भनिन्छ। यस संसारका प्रत्येक पदार्थ क्षणिक छन्। यिनीहरू उत्पन्न हुन्छन्, केही समयसम्म रहन्छन, केही गौण वस्तुहरू उत्पन्न गर्छन्, क्षीण हुन्छन् र अन्त्यमा हराउँदछन्। यो भौतिक संसारको नियम नै यस्तै छ। त्यो शरीर होस् या फल या अन्य कुनै वस्तु होस् सबैको गति यही हो। तर, यो क्षणिक संसारभन्दा पर एउटा अर्कै संसार छ जसको जानकारी हामीलाई छैन। त्यस संसारको प्रकृति पनि अर्कै छ र त्यो प्रकृति सनातन छ। त्यहाँका जीवहरू पनि सनातन हुन्छन्। एघारौँ अध्यायमा भगवान्लाई पनि सनातन भनिएको छ। भगवान्सँग हाम्रो घनिष्ठ सम्बन्ध रहेको छ किनभने गुणात्मक रूपले सनातन-धाम, सनातन परमपुरुष र सनातन जीवात्मा सबै एकसमान छौँ र जीवको शाश्वत प्रवृत्ति भएको हुँदा त्यही सनातन धर्म वा प्रवृत्तिलाई पुर्नजागृत गर्नु नै गीताको सम्पूर्ण उद्देश्य हो। हामी विभिन्न प्रकारका क्षणिक क्रियाकलापमा

लागेका छौं। यदि यी क्षणिक क्रियाकलापहरूलाई छोडेर परमेश्वरले निर्देशन दिनुभएको कर्म गर्न थाले हाम्रा सारा कर्महरू शुद्ध हुनेछन्। यसैलाई भनिन्छ, शुद्ध जीवन।

परमेश्वर र उहाँको दिव्य धाम—यी दुवै सनातन छन्। जीवात्माहरू पनि सनातन छन्। सनातन-धाममा फर्केर जीवात्माको परमेश्वरसँग संयुक्त सङ्गति हुनु नै मानव जीवनको पूर्णता हो। भगवान् जीवहरूप्रति अत्यन्त दयालु हुनुहुन्छ किनभने जीवहरू पनि उहाँकै सन्तान हुन्। भगवान् कृष्णले *भगवद्गीतामा* घोषणा नै गर्नुभएको छ—"सर्व योनिषु.......अहं बीज प्रदः पिता" अर्थात् म सबैको पिता हुँ। आफ्ना आफ्नै विविध कर्मअनुसार विभिन्न प्रकारका जीवयोनिहरू छन् तैपनि भगवान् कृष्ण भन्नु हुन्छ—"म ती सबैको पिता हूँ"। तसर्थ, भगवान्ले पनि यी समस्त बद्ध जीवहरूको उद्धार गर्ने उद्देश्य लिएरै तिनीहरूलाई आफ्नो सनातन धाममा बोलाउनका लागि पृथ्वीमा अवतार लिनु हुन्छ, जसले गर्दा सनातन जीवले निरन्तर भगवान्को सङ्गतिमा रहेर आफ्नो सनातन स्थिति प्राप्त गर्न सक्नेछन्। यस कार्यका लागि भगवान् स्वयम् विभिन्न अवतार लिएर आउनु हुन्छ वा आफ्ना विश्वसनीय सेवक, पुत्र, पार्षद वा आचार्यहरूलाई पनि यस्ता बद्ध जीवहरूको उद्धार गर्नका लागि पठाउने गर्नु हुन्छ।

तसर्थ, यो सनातन धर्म कुनै पनि धर्मको साम्प्रदायिक स्वरूप होइन। यो शाश्वत जीवहरूको शाश्वत परमात्मासँग सम्बन्धित शाश्वत क्रियाकलापहरूको सूचक हो। सनातन धर्म भनेकै जीवको शाश्वत वृत्ति हो। श्रीपाद रामानुजाचार्यका शब्दमा 'सनातन' को अर्थ त्यो हो "जसको न आदि छ न अन्त्य"। त्यसैले, सनातन धर्मका विषयमा कुरा गर्नुपर्दा हामीले श्रीपाद रामानुजाचार्यकै प्रमाणको आधारमा यसको आदि र अन्त्य नहुने रहेछ भन्ने मान्नु पर्दछ।

अङ्ग्रेजीको 'रिलिजन' शब्द 'सनातन-धर्म' भन्दा अलिकति भिन्दै छ। रिलिजनले विश्वास भन्ने अर्थ जनाउँदछ। अनि यो विश्वास परिवर्तन पनि हुनसक्छ। कुनै एक विशेष प्रक्रिया वा विधिप्रति रहेको विश्वासलाई छोडेर कसैले अर्को विश्वास पनि ग्रहण गर्न सक्दछ, तर सनातन-धर्मले त्यस्ता कर्मलाई सूचित गर्छ, जसलाई परिवर्तन गर्न सकिँदैन। उदाहरणार्थ—पानीलाई उसको तरलताबाट अलग गर्न सकिँदैन। त्यस्तै आगोबाट उसको उष्णता पनि अलग गर्न सकिँदैन। यसरी नै जीवलाई उसको शाश्वत कर्म र जैवीसत्ताबाट अलग गर्न सकिँदैन। किनभने सनातन धर्म जीवको शाश्वत अङ्ग हो। तसर्थ, हामीले सनातन-धर्मको व्याख्या गर्नुपर्दा श्रीपाद रामानुजाचार्यकै प्रमाणअनुसार

यो 'आदि र अन्त्यरहित' सत्ता हो भन्ने मान्नु पर्दछ। जसको कुनै आदि पनि छैन र अन्त्य पनि छैन त्यसलाई सीमाभित्र बाँध्न पनि सकिँदैन र त्यो कुनै सम्प्रदाय पनि हुन सक्दैन। कुनै सम्प्रदायसँग सम्बन्धित रहेको मानिसले मात्र सनातन-धर्मलाई पनि साम्प्रदायिक मान्ने भूल गर्न सक्दछ। तर यस विषयमा हामीले आधुनिक विज्ञानको प्रकाशमा गम्भीरतापूर्वक सोचविचार गरे यो सनातन धर्म यस संसारको मात्र नभई समस्त ब्रह्माण्डकै जीवहरूको धर्म रहेछ भन्ने तथ्य सहजै अनुमान गर्न सक्दछौँ।

मानव इतिहासमा असनातन धार्मिक विश्वास हुनेहरूको मात्र कुनै प्रारम्भिक बिन्दु हुन सक्दछ तर सनातन धर्मका इतिहासमा कुनै प्रारम्भिक बिन्दु छैन। किनभने यो सनातन धर्म जीवहरूसँगै शाश्वत रूपमा चलिआएको छ। जहाँसम्म जीवात्माको कुरा छ— प्रामाणिक शास्त्रअनुसार जीवको न कहिल्यै जन्म हुन्छ न मृत्यु नै हुन्छ। गीतामा पनि भनिएको छ— जीव न कहिल्यै जन्मन्छ न कहिल्यै मर्दछ। जीवात्मा शाश्वत र अविनाशी छ र यो नाशवान् शरीर नष्ट हुँदा पनि त्यो रहिरहन्छ। सनातन धर्मको स्वरूपका प्रसङ्गमा हामीले संस्कृतको मूल धातुअनुसार धर्मको अर्थ धारण गर्नु हो भन्ने सम्झनु पर्दछ। पदार्थ-विशेषमा निरन्तर रहने स्वभाव नै त्यसको धर्म हो। हाम्रो निष्कर्ष भनेको अग्निसँग त्यसको उष्मा र प्रकाश नित्य रूपमा रहन्छ। यसो नभएमा अग्नि शब्दको कुनै अर्थ रहँदैन। यसै गरी हामीले जीवको त्यही अत्यावश्यक पक्षलाई खोज्नु पर्दछ जुन उसको नित्य सहचर हो। यो अभिन्न साहचर्य उसको शाश्वत गुण हो र यही शाश्वत गुण नै उसको शाश्वत धर्म पनि हो।

एक पटक सनातन गोस्वामीले श्रीचैतन्य महाप्रभुसँग प्रत्येक जीवको स्वरूपबारे प्रश्न गर्दा श्रीचैतन्य महाप्रभुले जीवको स्वरूप वा स्वाभाविक स्थिति भन्नु नै भगवान्‌को सेवा गर्नु हो भन्ने उत्तर दिनुभएको थियो। महाप्रभुको यो उद्घोषप्रति विचार गरेर हेरेमा हामी एउटा जीव अर्को जीवको सेवामा लागिरहेको देख्नेछौँ। एकले अर्कोलाई गर्ने सेवा विभिन्न प्रकारको हुन सक्दछ। यसरी नै जीवले आफ्नो जीवनयापन गरिरहेको हुन्छ। सेवकले स्वामीको सेवा गरेजस्तै निम्न कोटिका जनावरहरूले मानव जगत्‌लाई सेवा पुर्‍याइरहेका हुन्छन्। जस्तै 'क' भन्नेले 'ख' नामको स्वामीलाई सेवा पुर्‍याउँछ अनि 'ख' ले 'ग' भन्ने स्वामीको सेवा गर्दछ र 'ग' ले 'घ' भन्ने स्वामीको सेवा गर्दछ। यसरी नै हामी के देख्दछौँ एक मित्रले अर्को मित्रको सेवा गरिरहेको छ, आमाले छोराको सेवा गरिरहेकी छिन्, पत्नीले पतिको र पतिले पत्नीको सेवा गरिरहेका छन्। यसरी खोज्दै जाँदा समाजमा एउटा पनि यस्तो अपवाद पाइनेछैन जो पारस्परिक सेवामा संलग्न नभएको होस्।

राजनैतिक नेताहरू पनि आफूले जनतालाई सेवा पुऱ्याउँछु भनेर घोषणा-पत्र प्रस्तुत गर्ने गर्दछन्। फलस्वरूप उसले समाजको महत्त्वपूर्ण सेवा गर्दछ कि भनेर मतदाताहरूले उसलाई भोट दिने गर्दछन्। व्यापारीले आफ्ना ग्राहकहरूको सेवा गर्दछ, शिल्पकारले पूँजीपतिको सेवा गर्दछ। पूँजीपतिले आफ्ना परिवारको सेवा गर्दछ र परिवारले राज्यको सेवा गर्दछ। यसरी सनातन जीवात्माको सनातन रूपमा सेवा गर्ने क्षमताका आधारमा यिनीहरूले परस्परमा सेवाको आदन-प्रदान गरिरहेका हुन्छन्। यस प्रकार के देखिन्छ कुनै पनि जीव अर्को जीवको सेवा नगरी रहन सक्दैन। अतएव हामी के निष्कर्षमा पुग्दछौँ सेवा नै जीवको नित्य सहचर हो र सेवा गर्नु नै जीवको सनातन धर्म हो।

मानिसले विशेष समय र परिस्थितिको प्रभावमा कुनै एउटा विशेष प्रकारको विश्वासलाई अङ्गीकार गरेर आफूलाई हिन्दू, मुसलमान, ईसाई, बौद्ध वा अन्य कुनै सम्प्रदायको अनुयायीका रूपमा राख्दछ। यस्ता उपाधिहरू सनातन धर्म होइनन्। एउटा हिन्दू आफ्नो विश्वास परिवर्तन गरेर मुस्लिम हुन सक्दछ, एउटा मुस्लिम आफ्नो विश्वास परिवर्तन गरेर हिन्दू बन्न सक्छ। त्यसै गरी, कुनै एउटा ईसाईले पनि आफ्नो विश्वास परिवर्तन गरी हिन्दू वा मुसलमान बन्न सक्दछ। तर, यी सबै परिस्थितिमा मानिसले धार्मिक विश्वास परिवर्तन गरे पनि एकले अर्कालाई सेवा गर्ने आफ्नो शाश्वत धर्म (प्रवृत्ति) परित्याग गर्न सक्दैन। हिन्दू, मुसलमान या ईसाई जे भए पनि मानिस हरेक परिस्थितिमा कसै न कसैका सेवक भएकै हुन्छन्। अतः कुनै विशेष विश्वासलाई अङ्गीकार गर्दैमा आफ्नो सनातन धर्मलाई अङ्गीकार गरेको मान्न सकिँदैन। किनभने सेवा प्रदान गर्नु नै सनातन धर्म हो।

वास्तवमा हामी सेवाको माध्यमद्वारा नै भगवान्सँग सम्बन्धित भएका छौँ। परमेश्वर परमभोक्ता हुनुहुन्छ अनि हामी सबै जीव उहाँकै सेवक हौँ। हामी उहाँकै प्रसन्नताका लागि उत्पन्न भएका हौँ। यदि हामी भगवान्को लीलानन्दमा सहभागी हुनसके अवश्य पनि सुखी रहन सक्नेछौँ। यसबाहेक अरू कुनै तरिकाबाट हामी सुखी हुन सक्दैनौँ। व्यक्तिगत रूपमा हामीले यस प्रकारको सुख प्राप्त गर्न सक्दैनौँ। जसरी शरीरको कुनै पनि अङ्गले उदरपूर्तिमा सहयोग नगरी एक्लै सुखी रहन सक्दैन त्यसरी नै परमेश्वरको दिव्य प्रेमभक्ति नगरी कुनै पनि जीव सुखी रहन सक्दैन।

*भगवद्गीतामा* विभिन्न देवताहरूको पूजा र सेवा गर्ने कार्यलाई अनुमोदन गरिएको छैन। सातौँ अध्यायको बीसौँ श्लोकमा भनिएको छ।

*कामैस्तैस्तैर्हृतज्ञाना: प्रपद्यन्तेऽन्यदेवता: ।*
*तं तं नियममास्थाय प्रकृत्या नियता: स्वया ॥*

(*भगवद्गीता* ७.२०)

अर्थात् "जसको बुद्धि भौतिक इच्छाद्वारा हरण भएको छ, तिनीहरू नै देवताहरूका शरणमा जान्छन् र आफ्नै प्रकृतिअनुसार पूजाका विभिन्न विधिविधानहरूको अनुसरण गर्न थाल्दछन्"। यहाँ के प्रष्ट पारिएको छ काम-वासनाद्वारा निर्देशित हुने मानिसहरू भगवान् श्रीकृष्णको पूजा नगरी देवताहरूको पूजा गर्दछन्। हामीले भगवान् श्रीकृष्णको नाम लिँदा कुनै साम्प्रदायिक नाम लिइरहेका हुँदैनौं। किनभने श्रीकृष्णको अर्थ नै सर्वोच्च आनन्द हो र परमेश्वर श्रीकृष्ण नै समग्र आनन्दका सागर हुनुहुन्छ। यस कुराको पुष्टि अघि नै भइसकेको छ। हामी सबै आनन्दको खोजीमा लागिरहेका हुन्छौं। "**आनन्दमयोऽभ्यासात्**" (वेदान्त सूत्र १.१.१२)। जीव पनि भगवान् जस्तै चेतनाले पूर्ण भएका हुनाले ऊ सुखको खोजीमा लागिरहेको हुन्छ। भगवान् नित्य सुखी हुनुहुन्छ। भगवान्को सङ्गतिमा रहेर उहाँकै सेवामा संलग्न रहेमा जीवहरू पनि सुखी हुन सक्नेछन्।

भगवान् आफ्ना आनन्दमय वृन्दावन-लीलाहरू प्रदर्शन गर्नकै लागि यो मृत्यु-संसारमा अवतार लिने गर्नु हुन्छ। वृन्दावनमा रहँदा आफ्ना गोप-मित्रहरू, गोपिका-सखीहरू, गाईहरू तथा वृन्दावनका अन्य निवासीहरूका बीचमा भगवान् श्रीकृष्णका लीलाहरू आनन्दले भरीपूर्ण रहेका थिए। वृन्दावनका सारा नरनारीहरू कृष्णबाहेक अरू कसैलाई पनि जान्दैनथे। कृष्ण स्वयम् भगवान् हुनुहुन्थ्यो। त्यसैले उहाँले आफ्ना पिता नन्द महाराजलाई इन्द्रदेवको पूजा गर्नबाट निरूत्साहित पार्नुभयो। उहाँ कुनै पनि देवताको पूजा गर्ने आवश्यकता छैन भन्ने परम्परा स्थापित गर्न चाहनुहुन्थ्यो। मानिसहरूले एक मात्र परमेश्वरकै पूजा गर्नुपर्छ किनभने मानिसको परमलक्ष्य त भगवत्-धाममै फर्कनु हो।

*भगवद्गीताको* पन्ध्रौं अध्यायको छैटौं श्लोकमा भगवान् श्रीकृष्णको धामको वर्णन यसरी गरिएको छ—

*न तद्भासयते सूर्यो न शशांको न पावक: ।*
*यद् गत्वा न निवर्तन्ते तद्धाम परमं मम ॥*

"मेरो परमधाम न सूर्य तथा चन्द्रद्वारा प्रकाशित छ न अग्नि वा बिजुलीद्वारा प्रकाशित छ। त्यो स्वयम् प्रकाशित छ। जो त्यहाँ पुग्दछ ऊ फेरि यो भौतिक जगत्मा फर्केर आउँदैन।"

यस श्लोकमा परव्योम वा परमधामको वर्णन गरिएको छ। यहाँ व्योम (आकाश) भन्नाले हामी सूर्य, चन्द्रसहितको भौतिक आकाश होला भन्ने कल्पना गर्न सक्दछौँ। तर यस श्लोकमा भगवान्ले भन्नुभएको व्योम शाश्वत व्योम हो। त्यहाँ सूर्य, चन्द्र, अग्नि वा बिजुलीको कुनै आवश्यकता पर्दैन। त्यो व्योम त परमेश्वरबाट निःसृत हुने ब्रह्मज्योतिद्वारा स्वयम् प्रकाशित छ। हामी अरू विभिन्न लोकहरूमा पुग्न जति कठिन परिश्रम गरिरहेका छौँ तर भगवान्को धाममा पुग्न त्यत्ति कठिन परिश्रम गरिरहनु पर्दैन। त्यो *भगवद्धामलाई* गोलोक भनिन्छ। ब्रह्मसंहिता (५.३७) मा पनि "गोलोक एव निवसत्यखिलात्म भूतः" भनेर यसको सुन्दर वर्णन गरिएको छ। अर्थात्, भगवान् आफ्नो गोलोक धाममा नित्य निवास गर्नु हुन्छ। यसै संसारमा रहेर गरिने साधनाबाट पनि भगवान्समक्ष पुग्न सकिन्छ। यही उद्देश्यले भगवान् पनि आफ्नो वास्तविक सच्चिदानन्दमय स्वरूपमा यस संसारमा प्रकट भइदिने गर्नु हुन्छ। उहाँले यसरी आफूलाई प्रकट गराएको देखिसकेपछि उहाँको रूप कस्तो होला भनेर हामीले फेरि कल्पना गरिरहनु पर्दैन। यस्तै कल्पनालाई निरुत्साहित पार्नका लागि भगवान्ले स्वयम् अवतार लिएर आफ्नो श्यामसुन्दर स्वरूपको प्रदर्शन गर्नु हुन्छ। तर दुर्भाग्यवश, अज्ञानीहरू भगवान्लाई उहाँ पनि हामीजस्तै मानिस भएर जन्मने अनि हामीसँगै खेल्ने, दौडने मनुष्य हुनुहुन्छ भनेर उपहास गर्दछन्। यसरी भगवान् पनि हामीजस्तै हुनुहुन्छ भन्ने धारण राख्नु हुँदैन। उहाँ आफैँ सर्वशक्तिमान् हुनुभएकाले आफ्नो वास्तविक स्वरूपमा हाम्रो अगाडि प्रकट भएर आफ्ना लीलाहरू प्रदर्शन गर्ने गर्नु हुन्छ। ती लीलाहरू उहाँको आफ्नै धाममा हुने लीलाहरूकै प्रतिरूपजस्ता हुन्छन्।

आध्यात्मिक आकाशका तेजस्वी किरणहरू अर्थात् ब्रह्मज्योतिमा असङ्ख्य लोकहरू तैरिइरहेका छन्। ब्रह्मज्योति कृष्णलोक वा परमधामबाट उत्पन्न हुन्छ। भौतिकताभन्दा भिन्न आनन्दमय र चिन्मय लोकहरू (वैकुण्ठलोकहरू) तिनै किरणहरूमा लहराइरहेका छन्। भगवान् भन्नु हुन्छ—

*न तद् भासयते सूर्यो न शशांको न पावकः।*
*यद्गत्वा न निवर्तन्ते तद्धाम परमं मम ॥*

*भगवद्गीता* १५.६

यस्तो आध्यात्मिक आकाशसम्म पुग्न समर्थ भएको व्यक्तिलाई यस भौतिक आकाशमा फर्कने आवश्यकता नै पर्दैन। यो भौतिक आकाशमा रहँदासम्म हामीले चन्द्रलोक मात्र होइन सर्वोच्च ब्रह्मलोक नै प्राप्त गरे पनि जन्म, मृत्यु, रोग तथा बुढ्यौली जस्ता जीवनका चारवटा मूलभूत कष्टहरू भोग्नै पर्दछ।

भौतिक ब्रह्माण्डका कुनै पनि लोकहरू संसारका यी चारवटा नियमबाट मुक्त छैनन्। त्यसै कारण *भगवद्गीतामा* श्रीभगवान् भन्नु हुन्छ—

*"आब्रह्म भुवनाल्लोकाः पुनरावर्तिनोऽर्जुन"*

*भगवद्गीता* ८-१६

सबै जीवहरू एउटा लोकबाट अर्को लोकमा विचरण गर्दछन्। यो प्रक्रिया आफूलाई जहाँ जान मन लाग्यो त्यहीँ जान सकिने यान्त्रिक व्यवस्थामा आधारित छैन। यहाँ हरेक लोकमा जानका लागि विशेष आध्यात्मिक विधि-विधानको व्यवस्था गरिएको छ। श्रीकृष्ण भन्नु हुन्छ, **"यान्ति देवव्रता देवान् पितृन् यान्ति पितृव्रताः।"** हामीलाई एउटा लोकबाट अर्को लोकमा जानका लागि कुनै यान्त्रिक व्यवस्थाको आवश्यकता पर्दैन। *भगवद्गीताको* निर्देश छ, **"यान्ति देवव्रता देवान्"**। चन्द्र, सूर्य तथा यस्तै अरू उच्चतर लोकहरूलाई स्वर्गलोक भनिएको छ। लोकहरू पनि तीन तहका छन्— उच्च, मध्य र निम्न। पृथ्वी मध्यलोकमा पर्दछ। अतः *भगवद्गीताले* **"यान्ति देवव्रता देवान्"** भन्ने सूत्रका आधारमा सजिलैसँग देवलोकजस्तो उच्चतर लोकमा पुग्न सकिने कुराको सङ्केत गरेको छ। ती लोकहरूमा पुग्न मानिसले सम्बन्धित लोकका अधिष्ठाता देवताको पूजा गर्नु पर्दछ। यसरी मानिस चन्द्रलोक, सूर्यलोक या अरू कुनै उच्चतर लोकमा पुग्न सक्छ।

तैपनि *भगवद्गीताले* हामीलाई यो भौतिक जगत्का कुनै पनि लोकमा जाने सल्लाह दिएको छैन। हामी कुनै यानबाट चालीस हजार वर्षसम्म लगातार यात्रा गरेर ब्रह्मलोकजस्तो उच्चतर लोकमा किन नपुगौँ, त्यहाँ पनि हामी जन्म, मृत्यु, रोग र बुढ्यौली जस्ता भौतिक बन्धनहरूबाट मुक्ति पाउन सक्नेछैनौँ। अनि फेरि त्यत्रो चालिस हजार वर्षसम्म को बाँचिरहन्छ र? तर परमलोक वा कृष्णलोकमा या आध्यात्मिक आकाशका कुनै पनि लोकमा पुगेपछि मानिसले भौतिक लोकमा हुने जन्म, मृत्यु, जरा, रोगजस्ता असुविधाहरू भोग्नु पर्दैन। आध्यात्मिक आकाशमा जति पनि लोकहरू छन् तीमध्ये गोलोक वृन्दावन सबैभन्दा श्रेष्ठ छ। किनभने त्यो आदिपुरुष भगवान् श्रीकृष्णको आफ्नै धाम हो। *भगवद्गीतामा* यी सबै कुराहरूको जानकारी दिइएको छ र साथै हामीले कसरी यो भौतिक जगत् छोडेर आध्यात्मिक आकाशमा पुगेर वास्तविक आनन्दमय जीवन बिताउन सक्छौँ भन्ने कुराको शिक्षा र सूचना पनि यहाँ दिइएको छ।

*भगवद्गीताको* पन्ध्रौँ अध्यायमा भौतिक जगत्को यथार्थ वा सजीव चित्रण गर्दै भनिएको छ—

*ऊर्ध्वमूलमधः शाखमश्वत्थं प्राहुरव्ययम्।*
*छन्दांसि यस्य पर्णानि यस्तं वेद स वेदवित् ॥*

यहाँ भौतिक जगत्लाई एउटा यस्तो पीपलको रूखको रूपमा वर्णन गरिएको छ जसको मूल माथितिर र शाखा-प्रशाखाहरू तलतिर फैलिएका छन्। वैदिक ऋचाहरूले यस वृक्षका पातको काम गरेका छन्। जसले यो वृक्षलाई जानेको छ त्यो नै वेदको ज्ञाता हो। हामी पनि यदि कुनै नदी या पोखरीका किनारमा उभिएर हेरेमा किनारका रूखहरूको विपरीत प्रतिविम्ब पानीमा परेको देख्न सक्छौँ। त्यहाँ वृक्षका शाखा-प्रशाखाहरू तलतिर र मूल माथितिर फर्केको देखिन्छ। यस्तो अनुभव हामीले गरेका छौँ। त्यसै गरी, यो भौतिक जगत् पनि आध्यात्मिक जगत्को प्रतिविम्ब हो। यो जगत् वास्तविकताको प्रतिविम्ब मात्र हो। प्रतिविम्बमा कुनै वास्तविकता या सारतत्त्व हुँदैन तथापि प्रतिविम्बबाट त्यसको मूल वस्तुको वास्तविकता जान्न सकिन्छ। यसै प्रकार मरुभूमिमा जल हुँदैन तर मृगमरीचिकाले गर्दा त्यहाँ पानीजस्तै वस्तु देखिन्छ। त्यो दृष्टिभ्रम मात्र हो। यो मरुभूमिरूपी भौतिक जगत्मा सुखरूपी पानी छैन। अर्थात्, यहाँ यस संसारमा सुख छैन तर आध्यात्मिक जगत्मा वास्तविक सुखरूपी पानी छ वा यथार्थ जल छ।

*भगवद्गीता* (१५.५) मा आध्यात्मिक उपलब्धि हासिल गर्नका निमित्त निम्नानुसारका सुझावहरू भगवान्ले हामीलाई दिनुभएको छ—

*निर्मानमोहा जितसंगदोषा अध्यात्मनित्या विनिवृत्त कामाः ।*
*द्वन्द्वैर्विमुक्ताः सुखदुःख संज्ञैर्गच्छन्त्यमूढाः पदमव्ययं तत् ॥*

त्यो अव्यय पद अर्थात् सनातन राज्य वा परमधाममा त्यही व्यक्ति पुग्न सक्दछ, जो **'निर्मान-मोह'** मा अभ्यस्त भएको छ। यसको अर्थ के हो ? हामी उपाधिहरूका पछि लागिरहेका छौँ, कोही श्रीमान् हुन चाहन्छन्, कोही प्रभु बन्न चाहन्छन्, कोही राष्ट्रपति हुन चाहन्छन्, कोही धनवान् हुन चाहन्छन्, कोही राजा हुने चाहना राख्दछन्। तर, जबसम्म हामी यी उपाधिहरूसँग टाँसिइरहन्छौँ तबसम्म हामी शरीरप्रति आसक्त भइरहनेछौँ। किनभने यस्ता उपाधिहरू शरीरसँग सम्बन्धित रहेका हुन्छन्। तर हामी शरीर होइनौँ। यसको अनुभूति हुनु नै आत्मसाक्षात्कारको प्रथम चरण हो। हामी प्रकृतिका तीन गुणहरूको संसर्गद्वारा बाँधिएका छौँ। भगवद्भक्तिद्वारा हामी त्यसबाट मुक्त हुनु पर्दछ। यदि हामीमा भगवद्भक्तिप्रति आसक्ति जाग्रत नभए प्रकृतिका गुणहरूको बन्धनबाट छुटकारा पाउन सक्दैनौँ। उपाधि र आसक्तिहरू हाम्रै

कामवासना र इच्छा तथा प्रकृतिमाथि प्रभुत्व जमाउने चाहनाका उपजहरू हुन्। जबसम्म हामीले प्रकृतिमाथि प्रभुत्व जमाउने प्रवृत्तिलाई त्याग गर्दैनौँ तबसम्म भगवान्‌को राज्य सनातन धाममा फर्कन पनि सक्दैनौँ। जो भूटो भौतिक भोगहरूको आकर्षणमा मोहित नभई भगवद्भक्तिमा लागिरहन्छ त्यही व्यक्ति नै त्यो शाश्वत तथा अविनाशी धाममा पुग्न सफल हुन्छ। त्यस्तो व्यक्तिले सजिलैसँग परमधाम प्राप्त गर्न सक्दछ। *भगवद्गीताको* अर्को एक ठाउँमा भनिएको छ—

*अव्यक्तोऽक्षर इत्युक्तस्तमाहुः परमां गतिम् ।*
*यं प्राप्य न निवर्तन्ते तद्धाम परमं मम ॥*

*भगवद्गीता* ८.२१

अव्यक्तको अर्थ हो अप्रकट। हाम्रा अगाडि यो भौतिक जगत् पनि पूर्णरूपमा प्रकट हुन सक्दैन। हाम्रा इन्द्रियहरू नै अपूर्ण छन् जसले गर्दा हामी यो ब्रह्माण्डका सबै नक्षत्रहरूलाई एकपटकमा देख्न सक्दैनौँ। वैदिक साहित्यबाट हामीले यस्ता सबै लोकहरूका विषयमा यथेष्ट जानकारी प्राप्त गर्न सक्दछौँ। तिनीहरूमाथि विश्वास गर्नु या नगर्नु हाम्रै इच्छा हो। *श्रीमद्भागवत* आदि वैदिक ग्रन्थहरूमा सम्पूर्ण महत्त्वपूर्ण लोकहरूको वर्णन गरिएको छ। यो भौतिक आकाशभन्दा पर आध्यात्मिक जगत् रहेको छ जुन अव्यक्त या अप्रकट अवस्थामा छ। मानिसले यदि कुनै कामना या इच्छा राख्नु हुदैन र भगवद्धाममा फर्किने कामना राख्नु पर्दछ किनभने त्यहाँ पुगेपछि फेरि यो भौतिक जगत्‌मा फर्कनु पर्दैन।

फेरि प्रश्न गर्न सकिन्छ, त्यस्तो भगवद्धामसम्म पुग्ने कसरी हो? यसको उत्तर *भगवद्गीताको* आठौँ अध्यायको पाँचौँ श्लोकमा यसरी दिइएको छ—

*अन्तकाले च मामेव स्मरन्मुक्त्वा कलेवरम् ।*
*यः प्रयाति स मद्भावं याति नास्त्यत्र संशयः ॥*

अर्थात्, "जसले मर्ने समयमा मेरो नाम स्मरण गर्दै आफ्नो शरीर त्याग गर्दछ उसले तत्काल मेरै स्वभाव वा प्रकृतिलाई प्राप्त गर्दछ। यसमा कुनै सन्देह छैन।" जसले मृत्युकालमा भगवान् श्रीकृष्णको चिन्तन गर्दछ त्यो श्रीकृष्णमै प्राप्त हुन्छ। अतएव मानिसले भगवान् श्रीकृष्णकै स्वरूपको चिन्तन गरिरहनु पर्दछ किनभने यसरी श्रीकृष्णको रूपको चिन्तन गर्दागर्दै शरीर त्याग गर्ने अवसर प्राप्त भए निश्चित रूपले भगवद्धाममा पुग्न सकिन्छ। **'मद्भावम्'** भन्ने शब्द नै परमपुरुषकी परमप्रकृतिको बोधक हो। परमपुरुष सच्चिदानन्द-विग्रह हुनुहुन्छ। उहाँको स्वरूप शाश्वत ज्ञान तथा आनन्दले परिपूर्ण छ।

हाम्रो वर्तमान शरीर सच्चिदानन्दमय छैन। यो सत् पनि होइन, यो असत् हो। यो शाश्वत होइन, नाशवान् छ। हाम्रो यो चित्त ज्ञानले पूर्ण छैन, अज्ञानद्वारा ढाकिएको छ। हामीलाई न भगवद्धामको पूर्ण ज्ञान छ न यो भौतिक जगत्को। यहाँ पनि हामीले नजानेका कैयौँ वस्तुहरू छन्। यो शरीर पनि निरानन्दमय छ, यो आनन्दले भरिपूर्ण हुनुको विपरीत दुःखैदुःखले भरिएको छ। यस संसारमा हामीलाई अनुभव हुने जति दुःखहरू छन् ती सबै शरीरकै कारणले उत्पन्न भएका हुन्। तर, जसले निरन्तर भगवान् श्रीकृष्णको चिन्तन गरेर आफ्नो शरीर छोड्दछ, त्यसले तत्काल सच्चिदानन्दमय शरीर प्राप्त गर्दछ।

यस भौतिक संसारमा यो शरीर त्याग गरेर अर्को शरीर प्राप्त गर्ने प्रक्रियाको पनि सम्यक व्यवस्था छ। मानिस त्यसै समयमा मर्दछ जुन समय उसले अर्को योनिमा कस्तो शरीर प्राप्त गर्ने हो भन्ने कुरा निश्चित भइसकेको हुन्छ। यसको निर्णय स्वयम् जीवबाट नभएर उच्च अधिकारीबाट मात्र हुन्छ। जीवनको उन्नति र अवनति पनि आफ्नै कर्मअनुसार निर्धारित हुन्छन्। यो जीवन अर्को जीवनको तयारी हो। यस जीवनमा रहँदा हामीले भगवद्धाममा बस्ने राम्रो तयारी गरे निश्चय नै शरीर त्याग गरेपछि हामीले भगवान्कै जस्तो आध्यात्मिक शरीर प्राप्त गर्नेछौँ।

अगाडि वर्णन गरिएअनुसार विभिन्न प्रकारका अध्यात्मवादीहरू छन्-जस्तै— ब्रह्मवादी, परमात्मावादी तथा भक्त। अनि ब्रह्मज्योति (आध्यात्मिक आकाश) मा असङ्ख्य लोकहरू छन् भनेर पनि अगाडि नै उल्लेख गरियो। यस्ता लोकहरूको सङ्ख्या भौतिक जगत्का लोकहरूको सङ्ख्याभन्दा कैयौँ गुणा बढी छ। यो भौतिक जगत् विशाल सृष्टिको एक चौथाई मात्र छ( **एकांशेन स्थितो जगत्** )। यो भौतिक खण्डमा लाखौँ-करोडौँ ब्रह्माण्डहरू छन् जसमा अरबौँ सूर्य, तारा अनि चन्द्रमाहरू छन्। तथापि यो समग्र भौतिक सृष्टि सम्पूर्ण सृष्टिको एउटा अंश मात्र हो। अधिकांश सृष्टिहरू आध्यात्मिक आकाशमा नै विद्यमान छन्। जुन व्यक्ति परब्रह्ममा एकाकार वा लीन हुन चाहन्छ उसलाई तत्काल परमेश्वरको ब्रह्मज्योतिमा प्रवेश दिइन्छ र यसरी उसले आध्यात्मिक आकाशमा स्थान पाउँछ। भगवान्को सान्निध्य प्राप्त गर्न चाहने भक्त त्यही वैकुण्ठलोकमा प्रवेश गर्दछ। त्यस्ता लोकहरू असङ्ख्य छन्। त्यहाँ भगवान् चतुर्भुज नारायण आफ्ना विभिन्न पूर्ण अंशसहित प्रद्युम्न, अनिरुद्ध, गोविन्द आदि विभिन्न नामहरूका रूपमा भक्तहरूसँगै विराजमान भएर रहनु हुन्छ। त्यसै कारण, अध्यात्मवादीहरू मृत्युकालमा ब्रह्मज्योति, परमात्मा वा भगवान् श्रीकृष्णको चिन्तन गरिरहन्छन्। यी तीनमध्ये कुनै पनि एकको चिन्तन गरिरहेमा तिनीहरूले आध्यात्मिक आकाशमा प्रवेश पाउनेछन्। तर तीमध्ये भगवान्सँग

प्रत्यक्ष सम्पर्क भएका भगवद्भक्तहरू मात्रै वैकुण्ठलोक वा गोलोक वृन्दावनमा प्रवेश पाउन सक्दछन्। भगवान् अगाडि भन्नु हुन्छ—"यसमा कुनै सन्देह छैन"। यस भनाइमा दृढ विश्वास राख्नु पर्दछ। कुनै पनि कुरा हाम्रो अनुमानसँग मेल खाएन भन्दैमा त्यसलाई अस्वीकार गर्न हुँदैन। हाम्रो मनोवृत्ति अर्जुनको जस्तै हुनु पर्दछ। अर्जुन भन्दछन्—"हजुर जे भन्नु हुन्छ म त्यसलाई विश्वास गर्दछु"। त्यसै कारण, मृत्युको समयमा जसले ब्रह्म, परमात्मा या भगवान्का रूपमा उहाँको चिन्तन गर्दछ त्यसले निश्चित रूपमा आध्यात्मिक आकाशमा प्रवेश गर्दछ भनेर भगवान्ले भन्नुभएको वाणीमा कुनै शंका हुदैन। यसप्रति अविश्वास गर्ने प्रश्नै उठ्दैन।

*भगवद्गीता* (८.६) मा मृत्युकालमा भगवान्को चिन्तनद्वारा आध्यात्मिक जगत्मा प्रवेश गर्न सकिने सामान्य नियमहरूको व्याख्या गरिएको छ, जुन यस प्रकार छ—

*यं यं वापि स्मरन् भावं त्यजत्यन्ते कलेवरम्।*
*तं तमेवैति कौन्तेय सदा तद्भाव भावितः ॥*

अर्थात्, "आफ्नो शरीर त्याग्ने समयमा मानिसले जुन भावको स्मरण गरेको हुन्छ अर्को जन्ममा निश्चय नै उसले त्यस्तै योनि प्राप्त गर्दछ।" अब हामीले सर्वप्रथम यो भौतिक प्रकृति पनि परमेश्वरकै कुनै एउटा शक्तिको प्रदर्शन मात्र हो भन्ने बुझ्नु पर्दछ। विष्णुपुराण (६.७.१६) मा भगवान्का समग्र शक्तिहरूको वर्णन यसरी गरिएको छ—

*विष्णुशक्तिः परा प्रोक्ता क्षेत्रज्ञाख्या तथा परा ।*
*अविद्या कर्म संज्ञान्या तृतीया शक्तिरिष्यते ॥*

परमेश्वरका शक्तिहरू विभिन्न किसिमका र असङ्ख्य छन्। ती हाम्रा बुद्धिभन्दा पर छन्। ठुलाठुला विद्वान् मुनिहरू तथा मुक्तात्माहरूले यी शक्तिहरूको अध्ययन गरेर उक्त शक्तिलाई तीन भागमा विभाजन गरेका छन्। सबै शक्तिहरू विष्णु-शक्ति हुन् अर्थात् ती भगवान् विष्णुकै विभिन्न शक्तिहरू हुन्। पहिलो शक्तिलाई परा या आध्यात्मिक शक्ति भन्दछन्। जीवहरू पनि पराशक्ति नै हुन् जसको व्याख्या अगाडि नै गरिसकिएको छ। अरू शक्तिहरू अर्थात् भौतिक शक्तिहरू तामसिक शक्ति हुन्। मृत्युकालमा हामी कि यही अपरा शक्तिरूपी संसारमा रहन्छौँ कि आध्यात्मिक जगत्को पराशक्तिमा स्थानान्तरित हुन पुग्दछौँ।

*भगवद्गीतामा* भनिएको छ—

*यं यं वापि स्मरन् भावं त्यजत्यन्ते कलेवरम् ।*
*तं तमेवैति कौन्तेय सदा तद्भाव भावितः ॥*

*भगवद्गीता* ८.६

अर्थात्, जीवनको अन्त्यमा जे-जस्तो भावको स्मरण गर्दै मानिसले शरीर त्याग्दछ आगामी जन्ममा उसले ठीक त्यही भावअनुसारको शरीर उसले प्राप्त गर्दछ।

जीवनमा हामी या भौतिक शक्तिका बारेमा या आध्यात्मिक शक्तिका बारेमा विचार गर्ने बानी परिसकेका छौँ। हामीले आफ्ना विचारहरूलाई कसरी भौतिक शक्तिबाट आध्यात्मिक शक्तितर्फ ल्याउन सक्दछौँ? पत्र-पत्रिका तथा उपन्यास आदि कैयौँ यस्ता साहित्यहरू छन् जसले हाम्रा विचारलाई भौतिक शक्तिद्वारा भरिदिन्छन्। अब हामीले यस प्रकारका साहित्यमा तल्लीन आफ्ना चिन्तनहरूलाई वैदिक साहित्यतिर मोड्नु पर्दछ। ठुलाठुला ऋषिमुनिहरूले विभिन्न वैदिक साहित्यहरू तथा पुराणहरूको रचना गरेका छन्। यी पुराणहरू काल्पनिक होइनन् बरु ऐतिहासिक अभिलेख हुन्। चैतन्य चरितामृत (मध्य २०.१२२) मा भनिएको छ—

*मायामुग्ध जीवेर नाहि स्वतः कृष्ण ज्ञान ।*
*जीवेरे कृपाय कैला कृष्ण वेद-पुराण ॥*

विस्मरणशील जीव अर्थात् बिर्सने बद्ध जीवहरूले परमेश्वरसँग रहेको आफ्नो सम्बन्धलाई भुलेका छन् र भौतिक क्रियाकलापकै चिन्तन-मननमा मग्न भएका छन्। यिनीहरूको चिन्तनशक्तिलाई आध्यात्मिक आकाशतर्फ प्रवाहित गर्नकै लागि कृष्णद्वैपायन व्यासले प्रचुर मात्रामा वैदिक साहित्यको रचना गर्नुभयो। सर्वप्रथम, उहाँले वेदलाई चार भागमा विभक्त गर्नुभयो र त्यसको व्याख्या गरेर पुराणहरूको रचना गर्नुभयो। अनि अल्पज्ञहरूका लागि उहाँले 'महाभारत' ग्रन्थ लेख्नुभयो। 'महाभारत' मा नै *भगवद्गीता* समावेश गरिएको छ। त्यसपछि उहाँले समग्र वैदिक साहित्यको सारस्वरूप वेदान्त-सूत्रको प्रतिपादन गर्नुभयो। अनि भावी पुस्ताको पथप्रदर्शनका लागि वेदान्तसूत्रकै सरल भाष्यका रूपमा *श्रीमद्भागवत्* ग्रन्थको रचना गर्नुभयो। हामीले पनि सधैँ यिनै वैदिक ग्रन्थहरूको अध्ययनमा आफ्नो चित्त लगाउनु पर्दछ। जसरी भौतिकवादी मानिसहरू विभिन्न प्रकारका समाचार-पत्रहरू, पत्रिकाहरू एवं अन्य सांसारिक साहित्यहरूको अध्ययनमा ध्यान दिन्छन् त्यसरी नै हामीले पनि व्यासदेवद्वारा रचित साहित्यको अध्ययनमा ध्यान लगाउनु पर्दछ। यसो गरे मात्र हामीले मृत्युको समयमा परमेश्वरको स्मरण गर्न सक्नेछौँ। यो नै

भगवान्द्वारा प्रदान गरिएको एक मात्र उपाय हो र उहाँले यसको प्रतिफलको प्रत्याभूति पनि दिनुभएको छ। "यसमा कुनै शंका छैन"

*तस्मात् सर्वेषु कालेषु मामनुस्मर युध्य च ।*
*मय्यर्पित मनो बुद्धिर्मामेवैष्यस्य संशयः ॥*

*भगवद्गीता ८-७*

"त्यसै कारण हे अर्जुन! तिमी सधैँ यही कृष्णरूपमा मेरो चिन्तन गरिराख र युद्धरूपी आफ्नो निर्धारित कर्मलाई अघि बढाऊ। तिम्रा सबै कर्महरू मलाई अर्पण गर र आफ्नो मन र बुद्धि पनि सधैँ ममा स्थिर गर। यसो गरेमा तिमीले निश्चय नै मलाई प्राप्त गर्नेछौ।"

भगवान्ले अर्जुनलाई आफ्नो पेशा नै परित्याग गरेर केवल "मलाई मात्र सम्झिराख" भन्नुभएको होइन। भगवान्ले कहिल्यै पनि कुनै अव्यावहारिक काम गर्ने सल्लाह दिनुहुन्न। यस जगत्मा आफ्नो शरीरको पालनपोषण गर्न पनि मानिसले कर्म गर्नै पर्दछ। कर्मअनुसार मानवसमाज चार वर्ग तथा वर्णमा विभाजित छ— ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र। ब्राह्मण अर्थात् बुद्धिजीवी वर्गले एक प्रकारको कर्म गर्दछ, क्षत्रिय अर्थात् प्रशासक वर्गका मानिसले अर्कै प्रकारका कर्म गर्दछन्। त्यसै गरी व्यापारी वर्ग र श्रमजीवी वर्गले पनि आफ्नो-आफ्नो निर्धारित कर्म गर्दछन्। मानवसमाजमा कुनै श्रमिक होस्, व्यापारी होस्, प्रशासक होस् या किसान होस् या सर्वोच्च वर्णको साहित्यकार, वैज्ञानिक वा धर्मशास्त्रवेत्ता नै किन नहोस् उसले पनि आफ्नो जीवनयापनका लागि कर्म गर्नै पर्दछ। तसर्थ, भगवान्ले अर्जुनलाई आफ्नो कर्मको त्याग गर्ने होइन बरू आफ्नो कर्म पनि गरिरहने र साथसाथै श्रीकृष्णको नाम पनि लिइरहने (**मामनुस्मर**) साल्लाह दिनुभएको छ। यदि जीवनमा सङ्घर्ष पनि गर्दै रहने र साथै भगवान् श्रीकृष्णको नाम पनि स्मरण गर्दै रहने अभ्यास नगरे मृत्युकालमा श्रीकृष्णको नाम स्मरण गर्न सम्भव हुँदैन। भगवान् चैतन्य महाप्रभुले पनि यस्तै उपदेश दिनुभएको छ। उहाँ भन्नु हुन्छ— "**कीर्तनीय सदा हरिः**"। अर्थात्, मानिसले सधैँ भगवान् हरिको नाम उच्चारण गर्ने अभ्यास गरिरहोस्। भगवान् र उहाँको नाममा कुनै भिन्नता छैन, अतः अर्जुनलाई भगवान्ले "मलाई स्मरण गरिराख" भन्ने शिक्षा दिनु र भगवान् चैतन्य महाप्रभुले "भगवान् श्रीकृष्णको नाम निरन्तर कीर्तन गर" भनेर दिनुभएको उपदेश एउटै हो। यसमा कुनै अन्तर छैन। किनभने भगवान् कृष्ण तथा श्रीकृष्णको नाममा कुनै भिन्नता छैन। परमसत्यको स्तरमा नाम र नामधारी बीच कुनै भिन्नता हुँदैन। त्यसै कारण हामीले चौबीसै घण्टा



कृष्णकृपामूर्ति

**श्री श्रीमद् ए.सी. भक्तिवेदान्त स्वामी प्रभुपाद**

अन्तर्राष्ट्रिय कृष्णभावनामृत संघका संस्थापक आचार्य।

विश्वभरिमा वैदिक ज्ञानका अद्वितीय प्रचारक



**श्रील जगन्नाथ दास बाबाजी महाराज**
श्रील भक्तिविनोद ठाकुरका
आध्यात्मिक शिक्षा गुरु।



**श्रील भक्तिविनोद ठाकुर**
कृष्णभावनामृतबाट सम्पूर्ण
जगत्लाई लाभान्वित गराउने
कार्यक्रमका प्रणेता



**श्रील भक्तिसिद्धान्त सरस्वती गोस्वामी महाराज**
श्रील भक्तिवेदान्त स्वामी प्रभुपादका
आध्यात्मिक गुरु तथा
आफ्ना समयका प्रखर विद्वान् एवं भक्त



**श्रील गौरकिशोर दास बाबाजी महाराज**
श्रील भक्तिसिद्धान्त सरस्वती गोस्वामी
महाराजका आध्यात्मिक गुरु
तथा श्रील भक्तिविनोद ठाकुरका
अन्तरंग शिष्य



यस कलियुगमा पर्याप्त बुद्धि भएका मानिसले आफ्ना पार्षदगणले युक्त भगवान्को आराधना संकिर्तन यज्ञद्वारा गर्नेछन्। (३.१०)



**पट्टी एक :** धृतराष्ट्रले भने, "हे संजय! धर्मभूमि कुरूक्षेत्रमा युद्धका इच्छाले एकिकृत मेरा तथा पाण्डुका पुत्रले के गरे ?" (१.१)



पट्टी दुई : भगवान् श्रीकृष्णले भन्नुभयो, "जसरी मान्छेले पुराना वस्त्रहरु त्यागेर नया वस्त्र धारण गर्दछ, त्यसैगरी आत्माले पनि पुराना तथा व्यर्थका शरीरहरूलाई त्यागी नवीन भौतिक शरीर धारण गर्दछ।" (२.२२)



**पट्टी तीन :** प्रत्येक व्यक्ति यो भौतिक शरीररूपी रथमा यात्री हुन्, अनी यसको सारथी बुद्धि हो। मन यसको लगाम हो र इन्द्रियहरू यसका घोडा हुन्। यस प्रकार मन तथा इन्द्रियहरूका संगतिमा रहने यो आत्मा सुख वा दु:खको भोक्ता हो। (६.३४ तात्पर्य)



**पट्टी चार :** संसारका सबै भौतिक क्रियाकलापहरू प्रकृतिका तीन गुणहरूका अधीनमा सञ्चालित हुने गर्दछन्। प्रकृतिका गुणहरू परमेश्वर श्रीकृष्णबाट उत्पन्न हुन्छन् तापनि भगवान् श्रीकृष्ण तिनका अधीनमा छैनन्। (७.१२ तात्पर्य)



**पट्टी पाँच :** कम बुद्धि भएका मानिसहरूले देवताहरूबाट अनुग्रह पाउने आशा गर्दछन्, अनि यस्ता वस्तुहरू प्राप्त गर्दछन् जुन अस्थायी छन् तथा मृत्युका बेला खोसिन्छन्। वास्तवमा यी सबै लाभहरू परम भगवान्‌द्वारा नै प्रदान गरिन्छन्। (७.२२ तात्पर्य)



**पट्टी छौ :** योगाभ्यासमा उन्नत योगीहरूले आफ्ना शरीर त्याग गर्ने समय र स्थानको व्यवस्था गर्न सक्दछन्। अन्य कसैको यसमा कुनै नियन्त्रण हुँदैन। (८.२४ तात्पर्य)



**पट्टी सात :** म सम्पूर्ण आध्यात्मिक तथा भौतिक जगत्को उत्पत्तिको श्रोत हूँ, हरेक वस्तु मबाट नै पैदा हुन्छ। यी कुरा बुझेका बुद्धिमान् जनहरू मेरो प्रेमाभक्तिमा संलग्न हुन्छन् र सहृदय मेरो पूजा गर्दछन्। (१०.८)



**पट्टी आठ :** भगवान् श्रीकृष्णको विश्वरूप दर्शन गर्दा अर्जुन आश्चर्यचकित भए र भने, "हे विश्वेश्वर, हे विश्वरूप! म तपाईंको शरीरका अनेकानेक हाथ, पेट, मुख तथा आँखाहरू देख्दैछु, जुन कुनै मर्यादा बिना सर्वत्र फैलेका छन्। म तपाईंमा अन्त, मध्य तथा आदि, केही देखदिन।" (११.१६)




**पट्टी नौ :** भौतिक जगत्‌रूपी वृक्ष आध्यात्मिक जगत्‌रूपी वास्तविक वृक्षको प्रतिबिम्ब मात्र हो। यस भौतिक जगत्‌रूपी वृक्षमा आसक्त रहने व्यक्तिको मुक्तिको कुनै सम्भावना हुँदैन तर जो व्यक्तिले यसलाई बुझ्दछ, ऊ यसलाई विरक्तिको हथियारले काटी मुक्ति पाउन सक्दछ। (१५.१ तात्पर्य)





**पट्टी दश :** मर्ने बेलामा जीवद्वारा विकसित चेतनाले उसलाई आगामी शरीरमा लैजान्छ। (१५.८ तात्पर्य)





**पट्टी एघार :** यदि जीवले आफनो चेतना पशु जस्तो बनाई राखेको छ भने उसले पशुको शरीर पाउनु निश्चित छ। (१५.९)



**पट्टी बाह्र :** म प्रत्येक जीवात्माको हृदयमा विराजमान छु र मद्वारा नै ज्ञान, स्मृति तथा विस्मृति हुने गर्दछन्। वेदहरुद्वारा जान्न योग्य पनि म नै हूँ। निस्सन्देह म नै वेदान्तको संकलनकर्ता तथा समस्त वेदहरूको ज्ञाता हूँ। (१५.१५)



**पट्टी तेह्र :** भगवान् श्रीकृष्णले भन्नुभयो "सधैँभरि मेरो चिन्तन गर, मेरो भक्त बन, मेरो पुजा गर, मलाई नै नमस्कार गर। यसो गर्नाले तिमी मसगँ आउने छौ। तिमी मेरा अत्यन्त प्रिय मित्र भएकाले म तिमीलाई यो वचन दिन्छु।" (१८.६५)

भगवान्का नामको कीर्तन गरेर श्रीकृष्णको स्मरण गर्ने अभ्यासमा लागिरहनु पर्दछ। यसरी हामीले आफूलाई सदा भगवान् श्रीकृष्णको स्मरण गरिरहन सक्ने बनाउनु पर्दछ।

यसो गर्न कसरी सम्भव छ? यो विषयमा आचार्यहरूले यस्तो उदाहरण दिनुभएको छ—यदि कुनै विवाहिता नारी परपुरुषसँग आसक्त हुन्छे या कुनै पुरुष आफ्नी पत्नी छोडेर अर्काकी पत्नीसँग आसक्त हुन्छ, तिनीहरूको आसक्ति अत्यन्त प्रबल हुन्छ। यस्तो आसक्ति राख्नेहरू जुनसुकै समयमा पनि आफ्नै प्रेमी वा प्रेमिकाका विषयमा सोचिरहन्छन्। आफ्नै प्रेमीको विषयमा मात्र सोचिरहने आइमाईले आफ्नो घरको काम गर्दा पनि प्रेमीसँग भेट हुने कुराकै चिन्तन गरिरहेकी हुन्छे। वास्तवमा ऊ आफ्नो घरका काम कति नै सावधानी पूर्वक गरेपनि उसको पतिले पनि ऊ परपुरूष सँग आसक्त छे भन्ने कुरा सोच्न सक्दैन। यसरी ऊ आफ्नी पत्नीमाथि सन्देह गर्न शंका। ठीक यस्तै प्रकारले हामीले पनि हाम्रा परमप्रेमी भगवान् श्रीकृष्णलाई सधैँ सम्झिराख्नु पर्दछ र साथसाथै आफ्नो कर्तव्य पनि सुचारु रूपमा पालन गरिरहनु पर्दछ। यसका लागि यहाँ प्रेमको प्रगाढ भावना उत्पन्न हुनु आवश्यक छ। यदि हामीमा परमेश्वरप्रति प्रगाढ प्रेम भए हामी आफ्नो कर्म गर्दागर्दै पनि भगवान्लाई सम्झिरहन सक्दछौँ। अतः हामीले भगवान्प्रति प्रेमभावको विकास गर्ने कार्यमा लाग्नु पर्दछ। उदाहरणार्थ, अर्जुनले सधैँ भगवान् श्रीकृष्णकै चिन्तन गरिरहन्थे। उनी श्रीकृष्णका अभिन्न मित्र पनि थिए र साथसाथै योद्धा पनि थिए। भगवान् श्रीकृष्णले अर्जुनलाई युद्ध गर्न छोडेर जङ्गलमा ध्यान गर्न जाने सल्लाह कहिल्यै दिनुभएन। बरु भगवान् श्रीकृष्णले योगपद्धतिका बारेमा उपदेश दिँदा अर्जुनले उक्त योगपद्धतिको अभ्यास गर्नु आफूलाई सम्भव नहुने कुरा बताए।

अर्जुनले भने—

*योऽयं योगस्त्वया प्रोक्तः साम्येन मधुसूदन ।*
*एतस्याहं न पश्यामि चञ्चलत्वात् स्थितिं स्थिराम् ॥*

*भगवद्गीता ६.३३*

अर्थात्, "हे मधुसूदन! हजुरले जुन योग-पद्धतिको संक्षेपमा वर्णन गर्नुभयो, त्यो मेरा लागि अव्यावहारिक तथा असह्यजस्तो लागेको छ। किनभने मेरो मन अस्थिर एवं चञ्चल छ।" तर भगवान् भन्नु हुन्छ—

*योगिनामपि सर्वेषां मद्गतेनान्तरात्मना ।*
*श्रद्धावान् भजते यो मां स मे युक्ततमो मतः ॥*

*भगवद्गीता ६.४७*

"सम्पूर्ण योगीहरूमध्ये त्यही योगी सर्वश्रेष्ठ हो जो श्रद्धावान् छ, जो भक्तियोगमा रहेर निरन्तर मेरो आज्ञाको पालन गर्दछ, जसले आफ्ना अन्तःकरणमा सधैँ मेरै बारेमा चिन्तन गरिरहन्छ र जो मेरै दिव्य प्रेमभक्तिद्वारा अत्यन्त घनिष्टतापूर्वक ममा तल्लीन रहन्छ। यो मेरो मत हो।" तसर्थ, जो सधैँ परमेश्वरको चिन्तन गर्दछन् तिनीहरू नै एकै साथ सबैभन्दा ठुला योगी, सर्वश्रेष्ठ ज्ञानी र महान् भक्त हुन्। अर्जुन क्षत्रिय भएकाले उनले युद्धको त्याग गर्नु हुँदैन भन्ने भनाइ भगवान् श्रीकृष्णको थियो। अतः अर्जुनले श्रीकृष्णलाई स्मरण गर्दै युद्धमा संलग्न रहे मात्र मृत्युकालमा उनले श्रीकृष्णको नाम स्मरण गर्न सक्नेछन्। तसर्थ, मृत्युकालमा भगवान्को स्मरण गर्न सकियोस् भन्नाका लागि नै मानिसले भगवान्को दिव्य प्रेमभक्तिमा आफूलाई समर्पित गर्नु पर्दछ।

वास्तवमा हामी आफ्नो शरीरले मात्र होइन, मन र बुद्धिले पनि काम गर्दछौँ। त्यसैले, यदि हाम्रो मन र बुद्धि धरैँ परमेश्वरकै विचारमा मग्न रहिरहे इन्द्रियहरू पनि स्वाभाविक रूपले भगवान्कै सेवामा लागिरहने छन्। इन्द्रियहरूको क्रियाकलाप बाहिरबाट हेर्दा समान देखिए पनि यसद्वारा मानिसको भित्री चेतनामा परिवर्तन आउँदछ। *भगवद्गीताले* पनि हामीलाई कसरी आफ्ना मन र बुद्धि भगवान्मा लीन गराइराख्न सकिन्छ भन्ने कुरा सिकाएको छ। यस्तो तन्मयताले मानिसलाई भगवद्धाममा पुग्न सक्षम बनाउँदछ। मन भगवान् श्रीकृष्णको सेवामा लागे इन्द्रियहरू स्वतः उहाँकै सेवामा संलग्न हुन थाल्दछन्। यो एउटा यस्तो कला हो जसद्वारा मानिस भगवान् श्रीकृष्णको चिन्तनमा पूर्ण रूपले मग्न रहन सक्छ। *भगवद्गीताको* रहस्य पनि यही हो।

आधुनिक मानिसले चन्द्रमासम्म पुग्नका लागि कठोर सङ्घर्ष गरेको छ तर उसले आफ्नो आध्यात्मिक उत्थानका लागि त्यस्तो कठिन प्रयास गरेकै छैन। मानिसले आफू अझै पचास वर्ष बाँच्ने सम्भावना भए पनि अहिल्यैदेखि आफ्नो केही समय भगवान्को नाम स्मरण गर्ने अभ्यासमा लगाउनु पर्दछ। यस्तो अभ्यास नै भक्तियोग हो।

*श्रवणं कीर्त्तनं विष्णोः स्मरणं पाद सेवनम् ।*
*अर्चनं वन्दनं दास्यं सख्यमात्म निवेदनम् ॥*

*श्रीमद्भागवत्* ७.५.२३

भक्तिका यी नौवटा विधिहरू छन्। तीमध्ये कुनै सिद्ध व्यक्तिबाट *भगवद्गीताको* श्रवण गर्नु सबैभन्दा सजिलो विधि हो। यो श्रवणविधिले मानिसलाई कृष्ण-चिन्तनमा अग्रसर बनाउँदछ। यसबाट जीवनको अन्त्यमा भगवान् श्रीकृष्णको

स्मरण गर्न सकिन्छ र फलस्वरूप शरीर छोडेपछि जीवले परमेश्वरको सङ्गति पाउन उपयुक्त हुने आध्यात्मिक शरीर प्राप्त गर्दछ। भगवान् फेरि अगाडि भन्नु हुन्छ—

*अभ्यासयोग युक्तेन चेतसा नान्यगामिना ।*
*परमं पुरुषं दिव्यं याति पार्थानुचिन्तयन् ॥*

*भगवद्गीता* ८.८

"हे अर्जुन! जसले यो पथबाट विचलित नभईकन आफ्नो मनलाई निरन्तर मेरै स्मरण गर्ने कार्यमा व्यस्त राख्दछ र भगवान्‌का रूपमा मेरो ध्यान गर्दछ, त्यसले अवश्य पनि मलाई प्राप्त गर्दछ।"

यो त्यति कठिन विधि होइन तैपनि यसलाई कुनै अनुभवी व्यक्तिबाट सिक्नु उपयुक्त हुन्छ। **"तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत्"** अर्थात्, जसले आफूभन्दा पहिलेदेखि यो विधिको अभ्यास गरिरहेको छ त्यसैसँग गएर सिक्नुपर्छ। मानिसको मन सधैँ यताउति उडिरहन्छ, तैपनि यसलाई निरन्तर भगवान् श्रीकृष्णको रूप वा उहाँको नामध्वनिमा केन्द्रित गरिरहने अभ्यास गर्नु पर्दछ। मन स्वभावैले चञ्चल हुन्छ, कहिले यता र कहिले उता दौडिइरहन्छ, तर भगवान् श्रीकृष्णको नामध्वनिमा यो स्थिर हुन सक्दछ। त्यसैले हामीले परमधाम वा आध्यात्मिक जगत्‌मा विराजमान हुनुभएका परमपुरुष अर्थात् श्रीभगवान्‌को ध्यान गर्नु पर्दछ र यसरी उहाँलाई प्राप्त गर्नु पर्दछ। *भगवद्गीतामा* परम उपलब्धि वा परमअनुभूतिका मार्ग र उपायहरू बताइएको छ। यी ज्ञानका ढोकाहरू सबैका लागि खुला छन्। त्यहाँ कसैलाई पनि निषेध छैन। भगवान्‌को स्मरण गर्दै र उहाँको चिन्तन गर्दै हरेक तहका मानिस भगवान् श्रीकृष्णसम्म पुग्न सक्दछन्। उहाँका बारेमा श्रवण गर्नु र चिन्तन गर्नु सबैका लागि सम्भव छ।

*भगवान्* अगाडि भन्नु हुन्छ—

*मां हि पार्थ व्यपाश्रित्य येऽपि स्यु पापयोनयः ।*
*स्त्रियो वैश्यास्तथा शूद्रास्तेऽपि यान्ति पराम् गतिम् ॥*
*किं पुनर्ब्राह्मणाः पुण्या भक्ता राजर्षयस्तथा ।*
*अनित्यमसुखं लोकमिमं प्राप्य भजस्व माम् ॥*

*भगवद्गीता* ९.३२-३३

यस प्रकार भगवान् भन्नु हुन्छ— वैश्य, पतित स्त्री, श्रमिक (श्रमजीवी)

या अधम योनिमा जन्म लिएका मानिसले पनि भगवान्‌लाई प्राप्त गर्न सक्दछन्। यसका लागि मानिसलाई धेरै ठुलो बुद्धिको आवश्यकता पर्दैन। जसले भक्तियोगको सिद्धान्त स्वीकार गर्दछ, जसले परमेश्वरलाई जीवनको परमआश्रयका रूपमा ग्रहण गर्दछ र भगवान्‌लाई नै सर्वोच्च लक्ष्य या परमगति मान्दछ त्यसले आध्यात्मिक आकाशमा भगवान्‌को सान्निध्य प्राप्त गर्नेछ। *भगवद्गीतामा* बताइएको सिद्धान्तको अनुसरण गर्ने मानिसले आफ्नो जीवनलाई परिपूर्ण बनाउन सक्दछ र उसले आफ्ना जीवनका समग्र समस्याहरूको स्थायी समाधान पनि प्राप्त गर्न सक्दछ। यही हो *भगवद्गीताको* सार सर्वश्व।

सारांश के हो भने *भगवद्गीता* अलौकिक साहित्य हो र यसको ध्यानपूर्वक अध्ययन गर्नु पर्दछ।

*गीताशास्त्रमिदं पुण्यं यः पठेत् प्रयतः पुमान् ।*
*विष्णोपदमवाप्नोति भयशोकादिवर्जित ॥*

*गीता महात्म्य* १

*भगवद्गीताको* उपदेशलाई राम्रोसँग पालना गर्ने मानिसले जीवनका सबै दुःख कष्टहरूबाट मुक्ति पाउन सक्दछ। '**भयशोकादिवर्जितः**।' त्यस्तो मानिस यसै जीवनमा समस्त भयबाट मुक्त हुनपुग्छ र उसको अर्को जीवन पनि आध्यात्मिक हुनेछ। गीता-अध्ययनको एउटा अर्को पनि लाभ छ—

*गीताध्ययन शीलस्य प्राणायामपरस्य च ।*
*नैव सन्ति हि पापानि पूर्वजन्म कृतानि च ॥*

*गीता महात्म्य* २

"अत्यन्त निष्ठा र गम्भीरतापूर्वक *भगवद्गीताको* अध्ययन गर्ने मानिस भगवान्‌का कृपाले आफ्ना पूर्वजन्मका समस्त दुष्कर्मका प्रतिफलबाट बच्दछ। *भगवद्गीताको* आखिरी अंशमा जोड दिंदै भगवान् भन्नु हुन्छ—

*सर्वधर्मान्यपरित्यज्य मामेकं शरणं व्रज ।*
*अहं त्वां सर्वपापेभ्यो मोक्षयिष्यामि मा शुचः ॥*

*गीता* १८.६६

"सबै किसिमका धर्महरूलाई छोडिदेऊ र मेरा शरणमा आऊ। म तिमीलाई सबै पापहरूबाट मुक्त पारिदिनेछु, नडराऊ।" यसरी आफ्नो शरणमा आउने भक्तहरूको पूरै उत्तरदायित्व भगवान् आफैंले वहन गर्नु हुन्छ र यस्ता मानिसका सबै पापहरूलाई उहाँले क्षमा गरिदिनु हुन्छ।

*मलनिर्मोचनं पुंसां जलस्नानं दिने दिने ।*
*सुकृद् गीतामृतस्नानं संसारमल नाशनम् ॥*

*गीता महात्म्य* ३

दिनहुँ पानीमा स्नान गर्नाले मानिसले आफूलाई सफा वा स्वच्छ बनाउँदछ तर यदि जीवनमा एकै पटक पनि गीतारूपी पवित्र जलले स्नान गरे मानिसको सम्पूर्ण सांसारिक फोहोरहरू सबै नष्ट हुन्छन् वा हराउँदछन्।

*गीता सुगीता कर्त्तव्या किमन्यैः शास्त्रविस्तरैः ।*
*या स्वयं पद्मनाभस्य मुखपद्माद्विनिःसृता ॥*

*गीता महात्म्य* ४

किनभने *भगवद्गीता* भगवान्‌ले भन्नुभएको दिव्य वाणी हो, त्यसैले वैदिक साहित्यहरूको अध्ययन गरिरहनुपर्ने कुनै आवश्यकता छैन। मानिसले केवल *भगवद्गीताको* ध्यानपूर्वक र निरन्तर श्रवण गर्ने र अध्ययन गर्ने गर्न पर्दछ। वर्तमान युगका मानिसहरू सांसारिक काममा अति नै व्यस्त हुने हुनाले तिनलाई सबै वैदिक साहित्यहरूको अध्ययन गर्नु सम्भव छैन, त्यसो गर्नु आवश्यक पनि छैन। तिनीहरूका लागि एउटै *भगवद्गीता* मात्र पर्याप्त छ किनभने यो नै सम्पूर्ण वैदिक ग्रन्थहरूको सार हो र बिशेष गरेर भगवान् स्वयम्‌ले गर्नुभएको हो। भनिएको पनि छ—

*भारतामृतसर्वस्वं विष्णुवक्त्राद्विनिःसृतम् ।*
*गीता-गङ्गोदकं पीत्वा पुनर्जन्म न विद्यते ॥*

*गीता महात्म्य* ५

सामान्यतया, गङ्गाको जलपान गर्ने व्यक्ति मुक्त हुन्छ, भने *भगवद्गीतारूपी* अमृतजलपान गर्ने व्यक्तिको बारेमा के नै भन्नु? *भगवद्गीता* महाभारतको अमृतमय सारतत्त्व हो र यसलाई स्वयम् भगवान् श्रीकृष्णले नै सुनाउनुभएको हो। अतः *भगवद्गीता* भगवान्‌का मुखारविन्दबाट निस्किएको दिव्य वाणी हो। त्यसै गरी, गङ्गा भगवान्‌का चरणकमलबाट प्रवाहित भएको पावन जल हो। निश्चय नै भगवान्‌का मुखारविन्द तथा चरणारविन्दमा कुनै विशेष अन्तर छैन तैपनि निष्पक्ष भएर भन्नुपर्दा चरणबाट प्रवाहित भएको गङ्गाजलभन्दा मुखारविन्दबाट प्रवाहित भएको *भगवद्गीतारूपी* अमृतजल नै अधिक महत्त्वपूर्ण छ। भनिएको छ,—

*सर्वोपनिषदो गावो दोग्धा गोपालनन्दनः ।*
*पार्थो वत्सः सुधीर्भोक्ता दुग्धं गीतामृतं महत् ॥*

*गीता महात्म्य* ६

"यो गीतोपनिषद् अर्थात् *भगवद्गीता* सम्पूर्ण उपनिषद्हरूको सार हो। उपनिषद्हरू गाई हुन् र यो गीता तिनै गाईहरूको अमृतमय दूध हो। ग्वालबालका रूपमा विख्यात भगवान् श्रीकृष्णले यसलाई दुहुने काम गर्नुभएको छ र अर्जुन बाच्छोजस्ता बनेर दूध पगारिरहेछन्। अनि *भगवद्गीतारूपी* यो अमृतमय दूधपान गर्ने जति सबै विद्वान् तथा शुद्ध भक्तहरू हुन्।

*एकं शास्त्रं देवकी पुत्र गीतम् ।*
*एको देवो देवकी पुत्र एव ॥*
*एको मन्त्रस्तस्य नामानि यानि ।*
*कर्माप्येकं तस्य देवस्य सेवा ॥*

वर्तमान युगका मानिसहरू एउटै शास्त्र, एउटै ईश्वर, एउटै धर्म तथा एउटै वृत्तिका लागि अत्यन्त उत्सुक भइरहेका छन्। अतएव '**एकं शास्त्रं देवकी-पुत्र गीतम्**' अर्थात्, *भगवद्गीता* नै संसारभरिका मानिसहरूको एक मात्र शास्त्र होओस्। '**एको देवो देवकी पुत्र एव**' अर्थात्, भगवान् श्रीकृष्ण नै सारा विश्वका लागि एकमात्र उपासना गर्ने देव हुनुहोस्। '**एको मन्त्रस्तस्य नामानि यानि**' अर्थात्, भगवान् कृष्णको नाम "**हरे कृष्ण, हरे कृष्ण, कृष्ण कृष्ण हरे हरे। हरे राम हरे राम, राम राम हरे हरे**" नै संसारभरिका मानिसहरूको एकमात्र मन्त्र बनोस्। '**कर्माप्येकं तस्य देवस्य सेवा**' अर्थात्, उनै भगवान् श्रीकृष्णको सेवा गर्नु नै संसारभरिका मानिसहरूको एकमात्र कर्म बनोस्।

*गीता महात्म्य* ७

# गुरु परम्परा

**"एवं परम्परा प्राप्तमिमं राजर्षयो विदुः"**

(*भगवद्गीता* ४.२)

यो "*भगवद्गीता* यथारूप" निम्नानुसारको गुरु परम्पराबाट प्राप्त भएको छ—

(१) भगवान् श्रीकृष्ण
(२) ब्रह्माजी
(३) नारदजी
(४) व्यास
(५) मध्वाचार्य
(६) पद्मनाभ
(७) नृहरि
(८) माधव
(९) अक्षोभ्य
(१०) जयतीर्थ
(११) ज्ञानसिन्धु
(१२) दयानिधि
(१३) विद्यानिधि
(१४) राजेन्द्र
(१५) जयधर्म
(१६) पुरुषोत्तम
(१७) ब्रह्मण्यतीर्थ
(१८) व्यासतीर्थ
(१९) लक्ष्मीपति
(२०) माधवेन्द्र पुरी
(२१) ईश्वर पुरी-
(नित्यानन्द र अद्वैताचार्य)
(२२) श्रीचैतन्य महाप्रभु
(२३) श्रीरूप गोस्वामी र
सनातन गोस्वामी
(२४) रघुनाथ, जीव गोस्वामी
(२५) कृष्णदास कविराज गोस्वामी
(२६) नरोत्तमदास ठाकुर
(२७) विश्वनाथ चक्रवर्ती ठाकुर
(२८) (बलदेव)जगन्नाथदास
बाबाजी महाराज
(२९) भक्तिविनोद ठाकुर
(३०) गौर किशोरदास
बाबाजी महाराज
(३१) भक्ति सिद्धान्त सरस्वती
ठाकुर
(३२) अभय चरणारविन्द
भक्तिवेदान्त स्वामी प्रभुपाद।

## अध्याय-एक

# कुरुक्षेत्रका युद्धभूमिमा सैनिकहरूको निरीक्षण

धृतराष्ट्र उवाच
**धर्मक्षेत्रे कुरुक्षेत्रे समवेता युयुत्सवः ।**
**मामकाः पाण्डवाश्चैव किमकुर्वत सञ्जय ॥१॥**

धृतराष्ट्र **उवाच** — राजा धृतराष्ट्रले भने; **धर्मक्षेत्रे** — तीर्थस्थल; **कुरुक्षेत्रे** — कुरुक्षेत्रमा; **समवेताः** — जम्मा भएका; **युयुत्सवः** — युद्ध गर्ने इच्छाले; **मामकाः** — मेरा छोराहरू र; **पाण्डवाः** — पाण्डुका छोराहरूले; **च** — र; **एव** — निश्चय नै; **किम्** — के; **अकुर्वत** — गरे; **सञ्जय** — हे सञ्जय!

**धृतराष्ट्रले भने — हे सञ्जय! युद्ध गर्ने इच्छाले कुरुक्षेत्रको धार्मिक स्थलमा जम्मा भएका मेरा र पाण्डुका छोराले के गरे?**

तात्पर्य : *भगवद्गीता* धेरैले अध्ययन गर्ने एउटा अध्यात्म-विज्ञान हो। गीतामाहात्म्यमा यसको महिमाको सारांश दिइएको छ। त्यहाँ भनिएको छ— *भगवद्गीतालाई* भगवान् श्रीकृष्णका भक्तहरूको सहयोग लिएर अत्यन्त गहन रूपले अध्ययन गर्नु पर्दछ र व्यैयक्तिक स्वार्थ — प्रेरित व्याख्या नगरीकन यसलाई जस्ताको तस्तै बुझ्ने प्रयास गर्नु पर्दछ। गीतालाई स्पष्ट रूपले बुझेको उदाहरण स्वयम् *भगवद्गीतामा* नै छ। जसरी अर्जुनले भगवान्का मुखारविन्दबाट सीधै यो गीताको उपदेश सुनेर ग्रहण गरे हामीले पनि त्यही रूपमा यसलाई बुझ्नु पर्दछ। यदि कुनै मानिसलाई शिष्य परम्परामा रहेर र मनगढन्ते व्याख्याबाट बचेर *भगवद्गीता* बुझ्ने पर्याप्त अवसर प्राप्त हुन्छ भने त्यो व्यक्ति सम्पूर्ण वैदिक ज्ञान तथा संसारका सबै शास्त्रहरू पढेर पारङ्गत भएजत्तिकै हुन्छ। *भगवद्गीतामा* पाठकले अन्य सबै शास्त्रहरूमा भए जति कुराहरू पाउँदछन् र साथै ती कुराहरू पनि पाउँदछन् जो अन्यत्र कतै पाइँदैनन्। यही नै *भगवद्गीताको* विशिष्ट स्तर हो। भगवान् श्रीकृष्णबाट सीधै भनिएको हुनाले यो पूर्ण अध्यात्म-विज्ञान हो।

महाभारतमा वर्णन गरिएको र धृतराष्ट्र तथा सञ्जयद्वारा छलफल गरिएको विषय नै यो महान् दर्शनको आधारभूत सिद्धान्त हो। वैदिक युगदेखि नै पवित्र तीर्थस्थलका रूपमा रहेको कुरुक्षेत्रको युद्धभूमिमा यो दर्शनको जन्म भएको

मानिन्छ। मानव जातिको मार्गदर्शनका लागि भगवान् श्रीकृष्ण स्वयम् यस पृथ्वीमा उपस्थित रहनुभएका समयमा उहाँले नै यसको प्रवचन गर्नुभएको हो।

यहाँ यो धर्मक्षेत्र (धार्मिक कार्यहरू सम्पन्न गरिने ठाउँ) शब्द अत्यन्त अर्थपूर्ण छ, किनभने कुरुक्षेत्रको युद्धभूमिमा भगवान् श्रीकृष्ण स्वयम् अर्जुनका तर्फबाट उपस्थित हुनुहुन्थ्यो। कौरवहरूका पिता धृतराष्ट्र आफ्ना छोराहरूकै विजय हुन्छ भन्ने कुरामा उनलाई निकै शंका थियो। यही शंकाका कारणले उनले आफ्ना निजी सचिव सञ्जयसँग "तिनीहरूले के गरे?" भनेर सोधे। उनी आफ्ना छोरा र आफ्ना भाइ पाण्डुका छोराहरू एउटा निर्णयात्मक युद्ध लड्ने सङ्कल्पका साथ कुरुक्षेत्रमा जम्मा भएका छन् भन्ने कुरामा विश्वस्त थिए। तैपनि यहाँ उनले प्रश्न गर्नु अर्थपूर्ण छ। उनी आफ्ना छोराहरू र भतिजाहरूका बीचमा कुनै सम्झौता होस् भन्ने चाहँदैनथे, त्यसैले युद्धभूमिमा आफ्ना छोराहरूको भाग्यका विषयमा आश्वस्त हुन चाहन्थे। किनभने यो युद्ध कुरुक्षेत्रमा हुन लागिरहेको थियो र कुरुक्षेत्र स्वर्गका देवताहरूका लागि पनि तीर्थस्थल रहेको कुरा वैदिक साहित्यमा उल्लेख छ, त्यसैले युद्धको परिणाममाथि यो पवित्र धर्मक्षेत्रको कस्तो प्रभाव पर्ने हो भन्ने कुरा सोचेर धृतराष्ट्र अत्यन्त भयभीत थिए। अर्जुनसहित पाण्डुका अरू छोराहरू स्वभावैले पुण्यात्मा भएका हुनाले उनीहरूमाथि यो धर्मक्षेत्रको अवश्यै अनुकूल प्रभाव पर्नेछ भन्ने कुरा धृतराष्ट्रलाई राम्रोसँग थाहा थियो। सञ्जय श्रील व्यासदेवका शिष्य थिए। व्यासका कृपाले उनी धृतराष्ट्रका बैठकमा बसेर पनि कुरुक्षेत्रको युद्ध देख्न सक्दथे। त्यसै कारणले धृतराष्ट्रले युद्धस्थलको स्थितिका बारेमा सञ्जयसँग सोधे।

हुनत पाण्डवहरू र धृतराष्ट्रका छोराहरू एउटै परिवारका सदस्य हुन् तर यहाँ धृतराष्ट्रको प्रश्नबाट उनका मनमा के रहेछ भन्ने कुरा दर्शिएको छ। उनले यहाँ जानीबुझी आफ्ना छोराहरूलाई मात्रै कौरव भनेर पाण्डवहरूलाई त्यो उत्तराधिकारबाट अलग्याउन खोजे। यसबाट आफ्ना भतिजाहरू अर्थात् पाण्डुका छोराहरूसँग धृतराष्ट्रको सम्बन्धको विशेष स्थिति कस्तो थियो भन्ने बुझ्न सकिन्छ। जसरी धानको खेतबाट अनावश्यक झारहरूलाई उखेलेर फ्याँकिन्छ, त्यसै गरेर धर्मका पिता भगवान् श्रीकृष्णले यो पावन कुरुक्षेत्रबाट धृतराष्ट्रको छोरो दुर्योधनजस्ता अवाञ्छित झारलाई उखेलेर फ्याँकिदिनु हुन्छ र युधिष्ठिरद्वारा नेतृत्व गरिएका विशेष धार्मिक व्यक्तिहरूलाई स्थापित गर्नु हुन्छ भन्ने आशा यस विषयमा धेरै अगाडिदेखि नै गरिएको थियो। यही नै धर्मक्षेत्रे र कुरुक्षेत्रे शब्दको विशिष्ट सार्थकता हो, जो वैदिक र ऐतिहासिक महत्त्वभन्दा भिन्न छ।

सञ्जय उवाच
**दृष्ट्वा तु पाण्डवानीकं व्यूढं दुर्योधनस्तदा ।**
**आचार्यमुपसंगम्य राजा वचनमब्रवीत् ॥ २ ॥**

**सञ्जय उवाच** — सञ्जयले भने; **दृष्ट्वा** — देखेर; **तु** — तर; **पाण्डव अनीकम्** — पाण्डवहरूका सेनालाई; **व्यूढम्** — सैन्य मोर्चा; **दुर्योधनः** — राजा दुर्योधनले; **तदा** — त्यस समय; **आचार्यम्** — गुरुका; **उपसंगम्य** — नजिक पुगेर; **राजा** — हे राजा; **वचनम्** — वचन; **अब्रवीत्** — भने।

**सञ्जयले भने — हे राजन्! पाण्डुका छोराहरूले गरेको सैनिक सैन्य मोर्चा देखेर राजा दुर्योधन आफ्ना गुरुका नजिक गएर यसरी भने।**

**तात्पर्य :** धृतराष्ट्र जन्मैदेखि अन्धा थिए र दुर्भाग्यले उनी आध्यात्मिक दृष्टिबाट पनि वञ्चित थिए। उनी आफूजस्तै आफ्ना छोराहरू पनि धर्मका विषयमा उत्तिकै अन्धा छन् भन्ने ठान्दथे। त्यसैले, उनी आफ्ना छोराहरू कहिल्यै पनि पाण्डवहरूसँग सम्झौता गर्न जाँदैनन् भन्ने कुरामा विश्वस्त थिए किनभने पाण्डवहरू जन्मैदेखि पवित्र थिए, गुणवान् थिए। यसो हुँदाहुँदै पनि धृतराष्ट्रलाई तीर्थस्थलको प्रभावका विषयमा शंका थियो। युद्धभूमिको स्थितिका बारेमा धृतराष्ट्रले गरेका प्रश्नबाट सञ्जयले उनको इच्छा बुझे। त्यसैले सञ्जय ती निराश राजालाई उत्साहित गराउन चाहन्थे। उनका छोराहरू उक्त तीर्थस्थलको प्रभावका कारणले पाण्डवहरूसँग कुनै प्रकारको सम्झौता गर्न गइरहेका छैनन् भन्ने विश्वास सञ्जयले धृतराष्ट्रलाई दिन चाहन्थे। सञ्जयले धृतराष्ट्रलाई सूचित गरे — उनका छोरा दुर्योधनले पहिले पाण्डवहरूको सैनिक शक्तिको अवलोकन गरे र त्यसपछि स्थितिको यथार्थ जानकारी दिनका लागि तुरुन्तै आफ्ना सेनापति द्रोणाचार्यकहाँ गए। दुर्योधनलाई राजा भनेर सम्बोधन गरिएको भए पनि स्थिति गम्भीर भएको हुनाले उनी स्वयम् सेनापति भएका ठाउँमा जानुपऱ्यो। दुर्योधन राजनीतिज्ञ बन्नका लागि एकदम उपयुक्त थिए तैपनि पाण्डवहरूको सैन्यव्यवस्था देखेपछि उनले आफ्नो डरलाई कूटनीतिक व्यवहारद्वारा पनि लुकाउन सकेनन्।

**पश्यैतां पाण्डुपुत्राणामाचार्य महतीं चमूम् ।**
**व्यूढां द्रुपदपुत्रेण तव शिष्येण धीमता ॥ ३ ॥**

**पश्य** — हेर्नुहोस्; **एताम्** — यो; **पाण्डुपुत्राणाम्** — पाण्डुका छोराहरूको; **आचार्य** — हे गुरु; **महतीम्** — विशाल; **चमूम्** — सैन्यशक्ति; **व्यूढाम्** — व्यवस्थित; **द्रुपदपुत्रेण** — द्रुपदका छोराद्वारा; **तव** — तपाईंको; **शिष्येण** — शिष्यद्वारा; **धीमता** — अति बुद्धिमान्।

**हे गुरु! हे आचार्य! हजुरको बुद्धिमान् शिष्य द्रुपदको छोराले व्यवस्थित गरेको पाण्डवहरूको विशाल सैन्य शक्तिलाई एक पटक हेर्नुहोस्।**

**तात्पर्य :** महान् कूटनीतिक दुर्योधन महान् ब्राह्मण सेनापति द्रोणाचार्यका कमजोरीहरू औँल्याउन चाहन्थे। अर्जुनका ससुरा तथा द्रौपदीका पिता राजा द्रुपदसँग पहिल्यै द्रोणाचार्यको केही राजनीतिक झगडा परेको थियो। यो झगडाको फलस्वरूप द्रुपदले एउटा विशालयज्ञ सम्पन्न गरे, जसबाट उनले द्रोणाचार्यको वध गर्नसक्ने छोरो पाउने वरदान पाए। यो कुरा द्रोणाचार्यलाई राम्रोसँग थाहा थियो। तैपनि उनी साह्रै उदार प्रकृतिका ब्राह्मण थिए त्यसैले द्रुपदको छोरो धृष्टद्युम्न सैन्यशिक्षा प्राप्त गर्न उनीकहाँ आउँदा उनले नहिच्किचाईकन धृष्टद्युम्नलाई युद्ध-विद्याका सम्पूर्ण गोपनीय पक्षहरू पनि सिकाइदिए। अहिले त्यही धृष्टद्युम्न कुरुक्षेत्रको युद्धभूमिमा पाण्डवहरूको पक्षबाट लडाइँ गर्न उभिएका थिए र उसैले त्यो सैनिक व्यूहको रचना गरेका थिए, जुन व्यूह रचनाको कला उनले गुरु द्रोणाचार्यबाट सिकेका थिए। द्रोणाचार्यले यो युद्धमा कुनै सम्झौता नगरून् र सतर्क रहून् भन्ने उद्देश्यले दुर्योधनले उनका गल्तीहरूलाई औँल्याइदिएका हुन्। त्यसै गरी द्रोणाचार्यले आफ्ना प्रिय शिष्य पाण्डवहरूप्रति युद्धका समयमा उदार भइदिने भूल नगरून् भन्ने कुरा पनि दुर्योधन सूचित गर्न चाहन्थे। विशेष गरी अर्जुन द्रोणाचार्यका अति प्रिय तथा प्रतिभाशाली शिष्य थिए। आफ्ना शिष्यप्रति यस्तो उदारता देखाउन थालेमा युद्धमा पराजय पनि हुन सकिन्छ भन्ने कुराको दुर्योधन चेतावनी दिन चाहन्थे।

**अत्र शूरा महेष्वासा भीमार्जुनसमा युधि ।**
**युयुधानो विराटश्च द्रुपदश्च महारथः ॥ ४ ॥**

**अत्र** — यहाँ; **शूरा** — वीरहरू; **महेष्वासा** — महान् धनुर्धर; **भीमार्जुन** — भीम र अर्जुन; **समाः** — समान; **युधि** — लडाइँमा; **युयुधानः** — युयुधान; **विराटः** — विराट; **च** — पनि; **द्रुपदः** — द्रुपद; **च** — पनि; **महारथः** — ठुला योद्धा।

**यहाँ यो पाण्डवसेनामा भीम र अर्जुन समानका लडाइँ गर्ने महारथी युयुधान, विराट तथा द्रुपद जस्ता अनेक वीर धनुर्धारीहरू छन्।**

**तात्पर्य :** हुनत द्रोणाचार्यको अत्यन्त ठुलो सैन्यशक्तिका अगाडि धृष्टद्युम्न धेरै महत्त्वपूर्ण बाधक थिएनन् तैपनि त्यहाँ अरू महान् योद्धाहरू थिए जसबाट तिनलाई डर थियो, तीमध्ये हरेक योद्धाहरू भीम र अर्जुनकै बराबरीका दुर्जेय वा जित्न नसकिने थिए। तिनलाई दुर्योधनले विजयका बाटोमा ठुलो अवरोध

मानेका थिए। दुर्योधनलाई भीम र अर्जुनको बल कति छ भन्ने कुरा थाहा थियो त्यसैले यी दुई भाइसँग उनले अरूको तुलना गरेका हुन्।

**धृष्टकेतुश्चेकितानः काशिराजश्च वीर्यवान् ।**
**पुरूजित् कुन्तिभोजश्च शैव्यश्च नरपुङ्गवः ॥ ५ ॥**

**धृष्टकेतुः** — धृष्टकेतु; **चेकितानः** — चेकितान; **काशिराजः** — काशिराज; **च** — पनि; **वीर्यवान्** — अत्यन्त शक्तिशाली; **पुरूजित** — पुरूजित्; **कुन्ति-भोजः** — कुन्तिभोज; **च** — तथा; **शैव्यः** — शैव्य; **च** — र; **नरपुङ्गवः** — मानव समाजमा वीर।

**महान् वीरहरू तथा धृष्टकेतु, चेकितान, काशिराज, पुरूजित, कुन्तिभोज र शैव्य जस्ता शक्तिशाली योद्धाहरू पनि त्यहाँ छन्।**

**युधामन्युश्च विक्रान्त उत्तमौजाश्च वीर्यवान् ।**
**सौभद्रो द्रौपदेयाश्च सर्व एव महारथाः ॥ ६ ॥**

**युधामन्युः** — युधामन्यु; **च** — तथा; **विक्रान्तः** — पराक्रमी; **उत्तमौजाः** — उत्तमौजा; **च** — र; **वीर्यवान्** — अत्यन्त शक्तिशाली; **सौभद्रः** — सुभद्राको छोरो; **द्रौपदेयाः** — द्रौपदीका छोरा; **च** — एवं; **सर्वे** — सबै; **एव** — निश्चय नै; **महारथाः** — महारथी।

**त्यहाँ पराक्रमी युधामन्यु, अत्यन्त शक्तिशाली उत्तमौजा, सुभद्राको छोरा र द्रौपदीका छोराहरू छन्। यी सबै योद्धाहरू महारथी हुन्।**

**अस्माकं तु विशिष्टा ये तान्निबोध द्विजोत्तम ।**
**नायका मम सैन्यस्य संज्ञार्थं तान्ब्रवीमि ते ॥ ७ ॥**

**अस्माकम्** — हाम्रो; **तु** — तर; **विशिष्टः** — विशेष शक्तिशाली; **ये** — जो; **तान्** — तिनीहरूलाई; **निबोध** — चिन्नुहोस्; जानकारी लिनुहोस्; **द्विज उत्तम** — हे ब्राह्मणहरूमा श्रेष्ठ; **नायकाः** — सेनापति; **मम** — मेरा; **सैन्यस्य** — सैनिकहरूको; **संज्ञा अर्थम्** — सूचनाका लागि; **तान्** — तिनीहरूलाई; **ब्रवीमि** — भन्दैछु ; **ते** — तपाईँलाई।

**हे ब्राह्मण श्रेष्ठ! तपाईँको जानकारीका लागि म सैनिकहरूको सञ्चालनमा विशेष दक्ष मेरा सेनापतिहरूका बारेमा पनि केही भन्दछु।**

**भवान् भीष्मश्च कर्णश्च कृपश्च समितिञ्जयः ।**
**अश्वत्थामा विकर्णश्च सौमदत्तिस्तथैव च ॥ ८ ॥**

**भवान्** — तपाई; **भीष्मः** — पितामह भीष्म; **च** — पनि; **कर्णः** — कर्ण; **च** — तथा; **कृपः** — कृपाचार्य; **च** — र; **समितिञ्जयः** — लडाइँमा सधैँ विजयी हुने; **अश्वत्थामा** — अश्वत्थामा; **विकर्णः** — विकर्ण; **च** — एवं; **सोमदत्तः** — सोमदत्तका छोरा; **तथा** — तथा; **एव** — निश्चय नै; **च** — पनि।

**मेरा सैनिकहरूमा सदा-सर्वदा विजयी हुने — तपाई स्वयम्, भीष्म, कर्ण, कृपाचार्य, अश्वत्थामा, विकर्ण र सोमदत्तका छोरा भूरिश्रवा आदि हुनुहुन्छ ।**

**तात्पर्य :** दुर्योधनले यहाँ सधैँ विजयी हुने सबै अद्वितीय योद्धाहरूको उल्लेख गरेका छन्। विकर्ण दुर्योधनकै भाइ हुन्। अश्वत्थामा द्रोणाचार्यका छोरा हुन्। सौमदत्ति वा भूरिश्रवा वाल्हिकहरूका राजाका छोरा हुन्। कर्ण, राजा पाण्डुसँग विवाह हुनुभन्दा अगाडि नै कुन्तीबाट जन्मिएका हुनाले अर्जुनका भङ्केलो दाजु हुन् र कृपाचार्य द्रोणाचार्यका जेठान (पत्नीका दाजु) हुन्, अर्थात् कृपाचार्यकी जुम्ल्याही बहिनी कृपीको विवाह द्रोणाचार्यसँग भएको थियो।

**अन्ये च बहवः शूरा मदर्थे त्यक्तजीविताः ।**
**नानाशस्त्रप्रहरणाः सर्वे युद्धविशारदाः ॥ ९ ॥**

**अन्ये** — अरूहरू; **च** — पनि; **बहवः** — धेरै; **शूराः** — वीरहरू; **मत् अर्थे** — मेरा लागि; **त्यक्तजीविताः** — जीवन दिन तयार; **नाना** — विभिन्न; **शस्त्र** — हतियारहरू; **प्रहरणा** — ले सजिएका; **सर्वे** — सबै; **युद्ध विशारदाः** — युद्ध-विद्यामा निपुण।

**मेरा लागि आफ्नो ज्यानसम्म पनि दिन तयार हुने त्यस्ता अरू वीरहरू पनि छन् । ती सबै विभिन्न प्रकारका हतियारहरूद्वारा सुसज्जित छन् र युद्ध विद्यामा पारङ्गत पनि छन् ।**

**तात्पर्य :** जहाँसम्म अरू वीरहरूको कुरा छ, जयद्रथ, कृतवर्मा र शल्य सबै दुर्योधनका लागि जीवन त्यागसमेत सङ्कल्प गरेका व्यक्तिहरू हुन्। अर्को शब्दमा पापी दुर्योधनका पक्षमा लागेका हुनाले तीमध्ये सबै कुरुक्षेत्रको युद्धभूमिमा मर्नेछन् भन्ने कुरा पहिले नै निश्चित थियो। अवश्य नै आफ्ना साथीहरूको संयुक्त शक्तिका कारणले गर्दा दुर्योधन आफ्नै विजय हुने कुरामा विश्वस्त थिए।

**अपर्याप्तं तदस्माकं बलं भीष्माभिरक्षितम् ।**
**पर्याप्तं त्विदमेतेषां बलं भीमाभिरक्षितम् ॥ १० ॥**

**अपर्याप्तम्** — नाप्नै नसकिने; **तत्** — त्यो; **अस्माकम्** — हाम्रो; **बलम्** —

शक्ति; **भीष्म** — भीष्म पितामहद्वारा; **अभिरक्षितम्** — राम्रोसँग संरक्षित; **पर्याप्तम्** — सीमित; **तु** — तर; **इदम्** — यो; **एतेषाम्** — पाण्डवहरूको; **बलम्** — शक्ति; **भीम** — भीमद्वारा; **अभिरक्षितम्** — सावधानीपूर्वक संरक्षित।

**हाम्रो शक्ति नाप्न नसकिने छ र हामी पूर्णरूपमा भीष्म-पितामहद्वारा संरक्षित छौँ र भीमद्वारा सावधानीपूर्वक संरक्षित पाण्डवहरूको शक्ति सीमित छ ।**

**तात्पर्य :** यहाँ दुर्योधनले शक्तिको तुलनात्मक अनुमान प्रस्तुत गरेका छन्। उनका विचारमा अत्यन्त अनुभवी सेनापति भीष्म-पितामहद्वारा विशेष किसिमले सुरक्षा गरिएको उनको सैन्यशक्ति अपरिमित छ र अर्कातिर थोरै अनुभव भएका सेनापति भीमले रक्षा गरिएको पाण्डवहरूको सैनिक शक्ति सीमित मात्र छ, त्यसमा पनि भीम भीष्मका अगाडि केही होइनन्। दुर्योधन सधैँ भीमको ईर्ष्या गर्थे, किनभने यदि आफू मर्नै परे भीमद्वारा नै मारिने कुरा उनले राम्रोसँग बुझेका थिए। भीष्म साह्रै उच्च कोटिका सेनापति भएका हुनाले भीष्मका उपस्थितिमा निश्चित रूपले आफ्नै विजय हुने कुरामा दुर्योधन विश्वस्त थिए। यसरी दुर्योधनले युद्धमा जसरी पनि आफ्नै विजय हुन्छ भन्ने निष्कर्ष निकालेका थिए।

**अयनेषु च सर्वेषु यथाभागमवस्थिताः ।**
**भीष्ममेवाभिरक्षन्तु भवन्तः सर्व एव हि ॥ ११॥**

**अयनेषु** — मोर्चाहरूमा; **च** — पनि; **सर्वेषु** — सबै ठाउँमा; **यथाभागम्** — भिन्न रूपले व्यवस्था भएअनुसार; **अवस्थित** — रहेर; **भीष्मम्** — भीष्म पितामहलाई; **एव** — नै; **अभिरक्षन्तु** — सहायता पुऱ्याउनु पर्दछ; **भवन्तः** — तपाईंहरू; **सर्वे** — सबैले; **एव हि** — निश्चय नै।

**तपाईंहरू सबैले यो सैन्यव्यूहमा आफ्नो ठाउँ वा मोर्चामा रहेर सबैतिरबाट पितामह भीष्मलाई सहायता पुऱ्याउनु पर्दछ ।**

**तात्पर्य :** भीष्मको पराक्रमको प्रशंसा गरिसकेपछि दुर्योधनले अरू योद्धाहरूले आफूहरूलाई कम महत्त्व दिइयो भन्ने नठानून् भन्ने कुरा पनि विचार गरे, त्यसैले आफ्नो सहज कूटनीतिक किसिमले स्थितिलाई मिलाउनका लागि उपर्युक्त शब्दहरू उनले प्रयोग गरे। भीष्मदेव निःसन्देह महान् वीर हुनुहुन्छ भन्ने कुरामा उनले विशेष जोड दिए र भने, तर उहाँ वृद्ध हुनुभएकाले सबैले सबैतिरबाट उहाँको सुरक्षामा विशेष ध्यान पुऱ्याउनु पर्दछ। उहाँ एकातिरबाट लडाइँमा व्यस्त भएको समयमा अन्यतिरबाट शत्रुहरूले उहाँको यस

व्यस्तताबाट फाइदा नउठाऊन्। अतः अरू सबै योद्धाहरू आफ्नो स्थितिमा मोर्चाहरूमा अडिग रहून् र शत्रुलाई यो सैन्यव्यूह भङ्ग गर्न नदिऊन्। दुर्योधनले कौरवहरूको विजय भीष्मदेवको उपस्थितिमै निर्भर छ भन्ने स्पष्ट अनुभव गरेका थिए। उनलाई यो युद्धमा भीष्मदेव र द्रोणाचार्यको पूर्ण सहयोग पाउने विश्वास थियो, किनभने पूर्ण सभामा ठुलाठुला सेनापतिहरूका अगाडि नाङ्गै पार्ने प्रयत्न गरिएकी अर्जुनकी पत्नी द्रौपदीले असहाय भएर न्यायको भीख माग्दा पनि भीष्म र द्रोणाचार्य केही बोलेका थिएनन्। यो कुरा दुर्योधनलाई राम्रै थाहा थियो। यी दुईजना सेनापतिहरूको पाण्डवहरूप्रति विशेष स्नेह छ भन्ने कुरा थाहा पाएर पनि दुर्योधनले के आशा गरेका थिए— अहिले उहाँहरूले पाण्डवहरूप्रतिको स्नेहलाई त्यसरी नै छोडिदिनु हुन्छ, जसरी जूवा खेल्ने समयमा उहाँहरूले पाण्डवको पक्ष लिनुभएन।

**तस्य सञ्जनयन् हर्षं कुरुवृद्धः पितामहः ।**
**सिंहनादं विनद्योच्चैः शंखं दध्मौ प्रतापवान् ॥ १२ ॥**

**तस्य** — उसको; **सञ्जनयन्** — बढाउँदै; **हर्षम्** — हर्ष; **कुरुवृद्ध** — कुरुवंशका वयोवृद्ध (भीष्म); **पितामह** — हजुरबुबा; **सिंहनादम्** — सिंहको जस्तो गर्जना गर्दै; **विनद्य** — गर्जँदै; **उच्चै** — उच्च स्वरले; **शंखम्** — शङ्ख; **दध्मौ** — बजाए; **प्रतापवान्** — साहसिलो।

**कुरुवंशका अत्यन्त प्रतापी वयोवृद्ध तथा योद्धाहरूका पितामह (हजुरबुवा) भीष्मले दुर्योधनलाई आनन्द दिने आफ्नो शङ्ख सिंह गर्जेजस्तै गरी अत्यन्त उच्च स्वरले बजाउनुभयो।**

**तात्पर्य :** कुरुवंशका वयोवृद्ध पितामहलाई आफ्नो नाति दुर्योधनको भित्री मनको कुरा थाहा थियो र उनीमाथि आफ्नो स्वाभाविक दया भएको हुनाले उहाँले सिंह गर्जेजस्तै गरी अन्त्यन्त उच्च स्वरले शङ्ख बजाएर उनलाई खुसी पार्ने प्रयत्न गर्नुभयो। अप्रत्यक्ष रूपले शङ्खको प्रतीकात्मक ध्वनिबाट उहाँले आफ्नो निराश नाति दुर्योधनलाई युद्धमा विजयको सम्भावना नरहेको कुरा बताइदिनुभयो, किनभने अर्कातिर स्वयम् भगवान् श्रीकृष्ण उपस्थित हुनुहुन्थ्यो। तैपनि युद्ध सञ्चालन गर्ने कर्तव्य उहाँको थियो। आफ्नो यो कर्तव्य पूरा गर्ने सम्बन्धमा उहाँले कुनै कुरा बाँकी राख्नुभएन।

**ततः शंखाश्च भेर्यश्च पणवानकगोमुखाः ।**
**सहसैवाभ्यहन्यन्त स शब्दस्तुमुलोऽभवत् ॥ १३ ॥**

**ततः** — त्यसपछि; **शंखाः** — शङ्खहरू; **च** — पनि; **भेर्यः** — ठुलाठुला ढोलहरू; **च** — र; **पणव-आनक** — साना ढोलक र नगराहरू; **गोमुखाः** —

सीङहरू; **सहसा** — अचानक; **एव** — निश्चय नै; **अभ्यहन्यन्त** — एकै साथ बजाइए; **स** — त्यो; **शब्दः** — सबै मिलेको ध्वनि; **तुमुलः** — भयङ्कर; **अभवत्** — भयो।

**त्यसपछि शङ्खहरू, ढोलहरू, सीङहरू, नगराहरू, तुरहीहरू सबै अचानक बज्नथाले र त्यो सबैको संयुक्त स्वर अत्यन्त भयङ्कर सुनियो।**

**ततः श्वेतैर्हयैर्युक्ते महति स्यन्दने स्थितौ ।**
**माधवः पाण्डवश्चैव दिव्यौ शंखौ प्रदध्मतुः ॥ १४ ॥**

ततः — त्यसपछि; **श्वेतैः** — सेता; **हयैः** — घोडाहरू; **युक्ते** — नारिएको; **महति** — विशाल; **स्यन्दने** — रथमा; **स्थितौ** — बसेर; **माधवः** — कृष्ण (लक्ष्मीका पति); **पाण्डवः** — अर्जुन (पाण्डुका छोरा); **च** — पनि; **एव** — निश्चय नै; **दिव्यौ** — अलौकिक; **शंखौ** — शङ्खहरू; **प्रदध्मतुः** — बजाए।

**त्यसपछि सेता घोडाहरू नारिएको विशाल रथमा विराजमान भएर भगवान् श्रीकृष्ण र अर्जुनले आफ्ना दिव्य शङ्खहरू बजाउनु भयो।**

**तात्पर्य :** भीष्मदेवले बजाएको शङ्खका तुलनामा भगवान् श्रीकृष्ण र अर्जुनका हातमा रहेका शङ्खहरू अलौकिक थिए भनिएको छ। ती दिव्य शङ्खका ध्वनिले के सङ्केत गरिरहेको थिए, पाण्डवका पक्षमा भगवान् श्रीकृष्ण हुनु भएको हुनाले अर्को पक्षको विजयको कुनै आशा थिएन। **"जयस्तु पाण्डुपुत्राणां येषां पक्षे जनार्दनः"** — विजय सधैँ पाण्डुका छोराहरू जस्तैकै हुन्छ, किनभने उनीहरूका साथमा भगवान् श्रीकृष्ण रहनु हुन्छ। जहाँ जहाँ भगवान् रहनु हुन्छ लक्ष्मी पनि त्यहीँ रहनु हुन्छ, किनभने लक्ष्मीजी आफ्ना पति बिना रहनै सक्नु हुन्न। अतः विजयकी लक्ष्मीले अर्जुनकै प्रतीक्षा गरि रहनु भएको थियो। यो कुराको सङ्केत विष्णु वा भगवान् श्रीकृष्णद्वारा बजाइएको शङ्खको दिव्य ध्वनिले गरिसकेको थियो। त्यसबाहेक भगवान् श्रीकृष्ण र अर्जुन जुन रथमा चढ्नुभएको थियो त्यो रथ अग्निदेवले अर्जुनलाई दिनु भएको थियो। यसले पनि के सङ्केत गरिरहेको थियो भने, तीनै लोकमा जहाँ जहाँ त्यो रथ जान्छ, विजय पनि सबैतिरबाट त्यही पक्षको हुन्छ।

**पाञ्चजन्यं हृषीकेशो देवदत्तं धनञ्जयः ।**
**पौण्ड्रं दध्मौ महाशंखं भीमकर्मा वृकोदरः ॥ १५ ॥**

**पाञ्चजन्यं** — पाञ्चजन्य नाम गरेको शङ्ख; **हृषीक ईश** — हृषीकेश (भगवान् कृष्ण, जो भक्तहरूका इन्द्रियहरूलाई निर्देशन दिनु हुन्छ); **देवदत्तम्** — देवदत्त

नामको शङ्ख; **धनम्-जय** — धनञ्जय (अर्जुनः धनका विजेता); **पौण्ड्रम्** — पौण्ड्र नामको शङ्ख; **दध्मौ** — बजाए; **महाशंखम्** — भीषण शङ्ख; **भीमकर्मा** — असाधारण काम गर्ने; **वृकोदर** — अति धेरै खाने (भीम)।

**भगवान् श्रीकृष्णले आफ्नो पाञ्चजन्य शङ्ख बजाउनुभयो, अर्जुनले देवदत्त नामको शङ्ख बजाए र असाधारण कार्य गर्ने धेरै भोजन गर्ने (ठुलो आहारा भएका) भीमले पनि पौण्ड्र नामक डरलाग्दो शङ्ख बजाए ।**

**तात्पर्य :** यस श्लोकमा भगवान् श्रीकृष्णलाई हृषीकेश भनिएको छ, किनभने उहाँ सम्पूर्ण इन्द्रियहरूका स्वामी हुनुहुन्छ। जीवात्माहरू उहाँकै अंशरूप भएकाले जीवका इन्द्रियहरू पनि उहाँकै इन्द्रियहरूका अंशरूप हुन्। निराकारवादीहरू जीवात्माका इन्द्रियहरूको कारणका बारेमा भन्न सक्दैनन् त्यसैले उनीहरू सम्पूर्ण जीवात्मालाई इन्द्रियविहीन वा निराकार भनेर वर्णन गर्न उत्सुक हुन्छन्। भगवान् प्रत्येकका हृदयमा निवास गर्नु हुन्छ र तिनका इन्द्रियहरूलाई निर्देशन दिनु हुन्छ। सामान्य जीवलाई भगवान्मा समर्पित हुनका लागि निर्देशन दिनु हुन्छ र विशेष शुद्ध भक्तहरूलाई प्रत्यक्ष रूपले नै उनीहरूका इन्द्रियहरू नियन्त्रण गरिदिनु हुन्छ। यहाँ यो कुरुक्षेत्रको युद्धभूमिमा त भगवान्ले सीधै अर्जुनका दिव्य इन्द्रियहरूलाई निर्देशित गर्नुभएको छ, त्यसैले उहाँलाई हृषीकेश भनिएको हो। भगवान्का विभिन्न क्रियाकलापअनुसारका विभिन्न नामहरू छन्। उदाहरणका लागि — मधु नाम गरेको असुरलाई मार्नुभएको हुनाले उहाँको एउटा नाम मधुसूदन भयो। गाईहरूलाई र इन्द्रियहरूलाई आनन्द दिने हुनाले उहाँको नाम गोविन्द भयो। वसुदेवका छोराका रूपमा उहाँको जन्म भएको हुनाले उहाँलाई वासुदेव पनि भनिन्छ। देवकीलाई आमा बनाउनु भएका हुनाले उहाँलाई देवकीनन्दन भनिन्छ। वृन्दावनमा आफ्ना बाललीलाहरूद्वारा यशोदालाई आनन्द प्रदान गर्नुभएको हुनाले उहाँको नाम यशोदानन्दन भयो। आफ्ना मित्र अर्जुनको रथ हाँक्ने काम गर्नुभएकाले उहाँ पार्थसारथी नामबाट पनि चिनिनु हुन्छ। यसै गरी कुरुक्षेत्रको युद्धभूमिमा अर्जुनलाई निर्देशन दिनुभएको हुनाले उहाँलाई हृषीकेश भनियो।

यस श्लोकमा अर्जुनलाई धनञ्जय भनिएको छ, किनभने उनले आफ्ना जेठा दाजु युधिष्ठिरलाई विभिन्न यज्ञहरू गर्दा खर्च गर्नका लागि आवश्यक पर्ने धन ल्याउनमा सहायता गरेका थिए। यसै गरी भीम वृकोदर नामले प्रसिद्ध छन्, किनभने उनले असुर हिडिम्बालाई मार्ने जस्ता मानिसले गर्नै नसक्ने काम गरिदिन्थे, त्यसका लागि खानेकुरा पनि अति धेरै खान्थे। पाण्डवहरूका तर्फबाट भगवान् श्रीकृष्णलगायतका विभिन्न व्यक्तिहरूले आफ्ना शङ्खहरू

बजाउँदा सम्पूर्ण योद्धा सैनिकहरू खुब उत्साहित भए। अर्कोतिर विपक्षीहरूका तर्फबाट यस्तो केही भएन किनभने त्यो पक्षमा न भगवान् श्रीकृष्णजस्ता कुनै परमनिर्देशक नै थिए न सौभाग्यकी देवी लक्ष्मी नै हुनुहुन्थ्यो। अतः उनीहरूको पराजय पूर्वनिश्चित थियो र शङ्खका ध्वनिले पनि मानौं यही सूचना दिइरहेका थिए।

**अनन्तविजयं राजा कुन्तीपुत्रो युधिष्ठिरः ।**
**नकुलः सहदेवश्च सुघोषमणिपुष्पकौ ॥ १६ ॥**
**काश्यश्च परमेष्वासः शिखण्डी च महारथः ।**
**धृष्टद्युम्नो विराटश्च सात्यकिश्चापराजितः ॥ १७ ॥**
**द्रुपदो द्रौपदेयाश्च सर्वशः पृथिवीपते ।**
**सौभद्रश्च महाबाहुः शंखान् दध्मुः पृथक् पृथक् ॥ १८ ॥**

**अनन्तविजयम्** — अनन्तविजय नामक शङ्ख; **राजा** — राजा; **कुन्तीपुत्रः** — कुन्तीका छोरा; **युधिष्ठिरः** — युधिष्ठिर; **नकुलः** — नकुल; **सहदेवः** — सहदेव; **च** — र; **सुघोषमणिपुष्पकौ** — सुघोष र मणिपुष्पक नामका शङ्खहरू; **काश्यः** — काशीका राजा; **च** — तथा; **परमेष्वासः** — महान् धनुर्धर; **शिखण्डी** — शिखण्डी; **च** — पनि; **महारथः** — हजारौँ सैनिकहरूसँग एक्लै लड्न सक्ने; **धृष्टद्युम्नः** — धृष्टद्युम्न (राजा द्रुपदका छोरा); **विराटः** — विराट (गुप्तवासका समयमा पाण्डवहरूलाई शरण दिने राजा); **च** — पनि; **सात्यकिः** — सात्यकि (युयुधान जस्तै भगवान् कृष्णको सारथी); **च** — र; **अपराजितः** — जो कहिल्यै पनि पराजित हुँदैन; **द्रुपदः** — द्रुपद (पाञ्चालका राजा); **द्रौपदेयः** — द्रौपदीका छोराहरू; **च** — पनि; **सर्वशः** — सबै; **पृथिवीपते** — हे राजा; **सौभद्रः** — अभिमन्यु (सुभद्राका छोरा); **च** — पनि; **महाबाहुः** — बलिया (लामा) हात भएका; **शंखान्** — शङ्खहरू; **दध्मुः** — बजाए; **पृथक् पृथक्** — अलग-अलग।

**हे राजा! कुन्तीका छोरा युधिष्ठिरले अनन्तविजय नामको शङ्ख बजाए अनि नकुल र सहदेवले सुघोष र मणिपुष्पक नामका शङ्खहरू बजाए। महान् धनुर्धारी काशीराज, महान् योद्धा शिखण्डी, धृष्टद्युम्न, विराट, अजेय सात्यकि, द्रुपद, द्रौपदीका छोराहरू र सुभद्राका बलवान् छोराहरू यी सबैले अलग-अलग आफ्ना शङ्खहरू बजाए।**

**तात्पर्य :** पाण्डुका छोराहरूलाई धोका दिएर आफ्ना छोराहरूलाई राजगद्दीमा बसाल्ने धृतराष्ट्रको अविवेकपूर्ण नीति प्रशंसनीय होइन भन्ने कुरा सञ्जयले बडो चलाखीपूर्ण तरिकाले उनलाई भने। त्यो महायुद्धमा सम्पूर्ण कुरुवंश मारिन्छन् भन्ने कुराको सङ्केत पहिले नै विभिन्न लक्षणहरूले दिइसकेका

थिए। पितामह भीष्मदेखि लिएर अभिमन्यु जस्ता अरू नातिहरूसम्मका व्यक्ति तथा संसारका अनेक देशहरूबाट आएका राजाहरू समेत, जो जो त्यहाँ उपस्थित थिए, सबैको मृत्यु निश्चित थियो। सम्पूर्ण दुर्घटना धृतराष्ट्रकै कारणले हुन लागिरहेको थियो, किनभने धृतराष्ट्रले आफ्ना छोराहरूले अप्नाएको गलत नीतिलाई प्रोत्साहन दिँदैथिए।

**स घोषो धार्तराष्ट्राणां हृदयानि व्यदारयत् ।**
**नभश्च पृथिवीं चैव तुमुलोऽभ्यनुनादयन् ॥ १९ ॥**

**स** — त्यो; **घोषः** — आवाज; **धार्तराष्ट्राणां** — धृतराष्ट्रका छोराहरूका; **हृदयानि** — हृदयलाई; **व्यदारयत्** — चिर्दै; **नभः** — आकाश; **च** — पनि; **पृथिवीम्** — पृथ्वीको सतह; **च** — पनि; **एव** — निश्चय नै; **तुमुल** — कोलाहलपूर्ण; **अभ्यनुनादयन्** — प्रतिध्वनित हुँदै।

**विभिन्न किसिमका शङ्खहरू बज्दा भएको त्यो कोलाहलपूर्ण आवाजले आकाश र पृथ्वीलाई गुञ्जायमान तुल्याउँदै धृतराष्ट्रका छोराहरूको हृदय चिर्न थाल्यो ।**

**तात्पर्य :** जब दुर्योधनका पक्षबाट भीष्म र अरूहरूले आफ्ना शङ्ख बजाए, त्यो सुनेर पाण्डवपक्षको हृदय चिरिएन। यस्तो प्रसङ्गको उल्लेख छैन तर यो श्लोकमा पाण्डव पक्षकाहरूले बजाएको शङ्खध्वनिद्वारा धृतराष्ट्रका छोराहरूको हृदय विदीर्ण भएको उल्लेख छ। पाण्डवहरूको भगवान्प्रतिको विश्वासका कारणले यस्तो भएको हो। भगवान्को शरण लिनेलाई ठुलोभन्दा ठुलो सङ्कटको अवस्थामा पनि कुनै कुराको डर हुँदैन।

**अथ व्यवस्थितान् दृष्ट्वा धार्तराष्ट्रान् कपिध्वजः ।**
**प्रवृत्ते शस्त्रसम्पाते धनुरुद्यम्य पाण्डवः ।**
**हृषीकेशं तदा वाक्यमिदमाह महीपते ॥ २० ॥**

**अथ** — त्यसपछि; **व्यवस्थितान्** — रहेको; **दृष्टा** — देखेर; **धार्तराष्ट्रान्** — धृतराष्ट्रका छोराहरू; **कपिध्वजः** — जसका झन्डामा हनुमानको चित्र अङ्कित छ; **प्रवृत्ते** — तयार; **शस्त्रसम्पाते** — वाण छोड्नका लागि; **धनुः** — धनु; **उद्यम्य** — उठाएर; **पाण्डवः** — पाण्डुका छोराले (अर्जुनले); **हृषीकेशम्** — भगवान् कृष्णलाई; **तदा** — त्यस समय; **वाक्यम्** — वचन; **इदम्** — यी; **आह** — भने; **महीपते** — हे राजा!

**त्यसपछि हे राजा! हनुमान्को चित्र अङ्कित झन्डा भएको रथमा बसेर पाण्डुपुत्र अर्जुनले आफ्नो धनु उठाएर वाण प्रहार गर्न लागेको समयमा**

**धृतराष्ट्रका छोराहरूलाई सैनिक व्यूहमा उभिएको देखेर भगवान् श्रीकृष्णलाई यी कुराहरू भने।**

**तात्पर्य :** युद्ध सुरु हुनैलागेको थियो। पाण्डवहरूद्वारा अप्रत्यासित रूपमा व्यवस्थित गरिएको सैन्यशक्तिलाई देखेर धृतराष्ट्रका छोराहरू निरूत्साहित भएको कुरा माथि नै उल्लेख गरियो। पाण्डवहरू युद्धभूमिमा भगवान् श्रीकृष्णका निर्देशनहरूबाट निर्देशित थिए। झन्डामा हनुमान्को चिन्ह विजयको अर्को सङ्केत थियो, किनभने राम र रावणको युद्ध हुँदा हनुमान्ले रामचन्द्रको सहायता गरेका थिए र भगवान् रामको विजय भएको थियो। अहिले उनै रामचन्द्र र हनुमान् अर्जुनको सहायता गर्नका लागि उनका रथमा उपस्थित हुनुहुन्थ्यो। भगवान् श्रीकृष्ण स्वयम् रामचन्द्र हुनुहुन्छ र जहाँ भगवान् राम रहनु हुन्छ त्यहाँ उहाँका सनातन भक्त हनुमान् र उहाँकी शाश्वत सङ्गिनी सीता, लक्ष्मीजी उपस्थित भइहाल्नुहुन्छ। अतः अर्जुनलाई कुनै पनि शत्रुसँग डराउनुपर्ने केही कारण थिएन। अझ त्यसमाथि इन्द्रियहरूका स्वामी भगवान् श्रीकृष्ण प्रत्यक्ष उपस्थित भएर उनलाई निर्देशन दिइरहनुभएको थियो। यस प्रकार युद्ध सम्पादन गर्ने विषयमा सम्पूर्ण राम्रा सल्लाहहरू अर्जुनलाई उपलब्ध थिए। भगवान्ले आफ्नो सनातन भक्तका लागि व्यवस्था मिलाइदिनु भएको यस्तो पावन परिस्थितिमा अवश्यम्भावी विजयका लक्षणहरू उपस्थित थिए।

अर्जुन उवाच

**सेनयोरूभयोर्मध्ये रथं स्थापय मेऽच्युत ।**
**यावदेतान्निरीक्षेऽहं योद्धुकामानवस्थितान् ॥ २१ ॥**
**कैर्मया सह योद्धव्यमस्मिन् रणसमुद्यमे ॥ २२ ॥**

**अर्जुन उवाच** — अर्जुनले भने; **सेनयोः** — सेनाहरूका; **उभयोः** — दुवै; **मध्ये** — बीचमा; **रथम्** — रथ; **स्थापय** — अड्याउनुहोस्; **मे** — मेरो; **अच्युतः** — हे अच्युत; **यावत्** — जबसम्म; **एतान्** — यी सबैलाई; **निरीक्षे** — हेर्न सकूँ; **अहं** — म; **योद्धुकामान्** — युद्ध गर्न चाहने; **अवस्थितान्** — युद्धभूमिमा जम्मा भएका; **कैः** — कस कसका; **मया** — मैले; **सह** — साथमा; **योद्धव्यम्** — युद्ध गर्नुपर्दछ; **अस्मिन्** — यो; **रण** — युद्ध; **समुद्यमे** — प्रयत्नमा।

**अर्जुनले भने — हे अच्युत! कृपा गरेर यो मेरो रथ दुवै सेनाहरूका बीचमा लगेर अड्याउनुहोस्। त्यहाँ यो सङ्घर्षको मैदानमा युद्ध गर्ने इच्छा लिएर जम्मा भएका, को को सङ्ग मैले शस्त्रास्त्रहरूको परीक्षामा प्रतिस्पर्धा गर्नु पर्दछ, हेर्नसकूँ।**

**तात्पर्य :** श्रीकृष्ण स्वयम् भगवान् भए पनि आफ्नो अहैतुकी कृपाले गर्दा उहाँ आफ्ना मित्रको सेवामा संलग्न हुनुभएको थियो। उहाँ आफ्ना भक्तहरूप्रति स्नेह प्रदर्शन गर्न कहिल्यै चुक्नुहुन्न, त्यसैले यहाँ उहाँलाई अच्युत भनेर सम्बोधन गरिएको हो। सारथी भएका हुनाले उहाँले अर्जुनको आदेश पालन गर्नुपर्थ्यो र यसमा उहाँलाई कुनै सङ्कोच पनि थिएन। आफ्ना भक्तका लागि सारथीको पद ग्रहण गरे पनि उहाँको भगवत्ता यथावत रहिरह्यो। सबै परिस्थितिमा उहाँ भगवान् हुनुहुन्छ र सबै इन्द्रियहरूका स्वामी हृषीकेश हुनुहुन्छ। भगवान् र भक्तका बीचको सम्बन्ध साह्रै मधुर र दिव्य हुन्छ। सेवक सधैँ भगवान्को सेवा गर्न तत्पर हुन्छ र भगवान् पनि त्यसरी नै सधैँ भक्तहरूलाई केही सेवा पुऱ्याउने अवसर खोजिरहनु हुन्छ। आफू आज्ञा दिने हुनुभन्दा आफ्ना भक्तहरूले त्यो आज्ञा दिने पद ग्रहण गरेर आज्ञादाता बनेको देख्दा भगवान्लाई धेरै आनन्द हुन्छ। भगवान् सबैका स्वामी हुनुहुन्छ। हरेकले उहाँका अधीनमा रहेर उहाँको आज्ञा पालन गर्दछन्। उहाँलाई आज्ञा दिने उहाँभन्दा माथिको कोही छैन। तर, जब उहाँका शुद्धभक्तहरूले उहाँलाई केही कर्म गर्ने अनुरोध गर्दछन् त्यस समय उहाँले एउटा दिव्य आनन्दको अनुभव गर्नु हुन्छ। हुनत उहाँ कुनै पनि परिस्थितिमा कहिल्यै च्युत नहुने स्वामी हुनुहुन्छ।

भगवान्को शुद्ध भक्त भएको हुनाले अर्जुनलाई आफ्ना भाइ-भतिजासँग युद्ध गर्ने कुनै इच्छा थिएन तर कुनै पनि किसिमको शान्तिपूर्ण समझदारीमा कहिल्यै सहमत नहुने दुर्योधनको दुराग्रहले गर्दा नै अर्जुन युद्धभूमिमा आउन बाध्य भएका थिए। त्यसैले उनी युद्धभूमिमा कस-कसले नेतृत्व गर्दैछन् भन्ने हेर्न अति उत्सुक थिए। युद्धभूमिमा शान्ति स्थापना गर्ने प्रयासको कुनै सम्भावना थिएन तैपनि उनी त्यो युद्धस्थललाई फेरि हेर्न चाहन्थे र साथै के पनि हेर्न चाहन्थे भने, यो अनावश्यक युद्धका लागि तिनीहरू कतिसम्म तयार भएका छन्।

**योत्स्यमानानवेक्षेऽहं य एतेऽत्र समागताः ।**
**धार्तराष्ट्रस्य दुर्बुद्धेर्युद्धे प्रियचिकीर्षवः ॥ २३ ॥**

**योत्स्यमानान्** — युद्ध गर्न चाहनेहरूलाई; **अवेक्षे** — हेर्दछु; **अहम्** — म; **ये** — जो; **एते** — तिनीहरू; **अत्र** — यहाँ; **समागताः** — जम्मा भएका; **धार्तराष्ट्रस्य** — धृतराष्ट्रका छोराहरूका लागि; **दुर्बुद्धे** — खराब बुद्धि भएका; **युद्धे** — युद्धमा; **प्रिय** — राम्रा; **चिकीर्षव** — चाहनेहरू।

**धृतराष्ट्रको खराब बुद्धि भएको छोरो दुर्योधनलाई प्रसन्न पार्नका लागि जो यिनीहरू यहाँ लडाइँ गर्न आएका छन्, तिनलाई म हेर्दछु ( हेर्न चाहन्छु )।**

**तात्पर्य :** आफ्ना बाबु धृतराष्ट्रको सहायता लिएर कपटपूर्ण योजनाद्वारा दुर्योधन पाण्डवहरूको राज्य हत्याउन चाहन्थ्ये। यो कुरा सबैलाई थाहा थियो। अतः उसको पक्षका योद्धाहरू सबै नै त्यस्तै प्रकारको हुनु पर्दछ, त्यसैले युद्ध सुरु हुनुभन्दा अगाडि युद्धभूमिमा को को आएका रहेछन् भन्ने जान्नका लागि अर्जुनले तिनीहरूलाई हेर्न चाहन्थे तर उनीहरूसँग शान्ति सम्झौताको प्रस्ताव राख्ने उनको कुनै इच्छा थिएन। भगवान् श्रीकृष्ण आफ्नै नजिक विराजमान हुनुभएकाले युद्धमा आफ्नै विजय हुने कुरामा अर्जुन ढुक्क थिए तैपनि जुन शक्तिसँग आफूले सामना गर्नुपर्ने हो त्यसको अनुमान गर्नका लागि अर्जुन उनीहरूलाई हेर्न चाहन्थे, यो कुरा सत्य हो।

सञ्जय उवाच

**एवमुक्तो हृषीकेशो गुडाकेशेन भारत ।**
**सेनयोरूभयोर्मध्ये स्थापयित्वा रथोत्तमम् ॥ २४ ॥**

**सञ्जय उवाच** — सञ्जयले भने; **एवम्** — यस प्रकार; **उक्त** — भनिएको; **हृषीकेशः** — भगवान् श्रीकृष्ण; **गुडाकेशेन** — अर्जुनद्वारा; **भारत** — हे भरतका वंशज; **सेनयोः** — सेनाहरूको; **उभयो** — दुवै; **मध्ये** — बीचमा; **स्थापयित्वा** — अड्याएर; **रथ-उत्तमम्** — उत्तम रथलाई।

**सञ्जयले भने — हे भरतवंशी राजा! अर्जुनद्वारा यसरी सम्बोधन गरिएका भगवान् श्रीकृष्णले अर्जुन चढेको त्यो उत्तम रथ दुवै पक्षका सैनिकहरूका बीचमा लगेर अड्याउनुभयो।**

**तात्पर्य :** यस श्लोकमा अर्जुनलाई गुडाकेश भनिएको छ 'गुडाक' को अर्थ निद्रा हुन्छ र जसले निद्रालाई जित्छ त्यसलाई गुडाकेश भनिन्छ। निद्रा पनि अज्ञान नै हो। भगवान् श्रीकृष्णसँग अर्जुनको मित्रता भएको हुनाले अर्जुनले निद्रा र अज्ञान दुवैलाई जितेका थिए। एउटा महान् भक्त भएका हुनाले उनले एक मिनटका लागि पनि भगवान् श्रीकृष्णलाई बिर्सन सक्दैनथे। भक्तहरूको स्वभावै त्यस्तो हुन्छ। हिँड्दा होस् या सुत्दा, भगवान्‌को भक्त श्रीकृष्णका नाम, रूप, गुण र लीलाहरूको चिन्तन गर्न कहिल्यै छोड्दैन। यसरी निरन्तर भगवान् श्रीकृष्णको चिन्तनद्वारा एउटा कृष्णभक्तले निद्रा र अज्ञान दुवैलाई जित्न सक्दछ। यसैलाई कृष्णभावना वा समाधि भनिन्छ। प्रत्येक जीवात्माका मन तथा इन्द्रियहरूका निर्देशक वा हृषीकेश हुनुभएको हुनाले भगवान् श्रीकृष्णले दुवै सेनाहरूका बीचमा रथ लगेर राख्नुहोस् भन्ने अर्जुनका भनाइको आशय बुझ्नु हुन्थ्यो। उहाँले पनि त्यसै गर्नुभयो र यसरी भन्नुभयो —

**भीष्मद्रोणप्रमुखतः सर्वेषां च महीक्षिताम् ।**
**उवाच पार्थ पश्यैतान्समवेतान्कुरूनिति ॥ २५ ॥**

**भीष्म** — पितामह भीष्म; **द्रोण** — गुरु द्रोणाचार्य; **प्रमुखतः** — अघि; **सर्वेषाम्** — सबै; **च** — पनि; **महीक्षिताम्** — संसारभरिका राजा; **उवाच** — भने; **पार्थ** — हे पृथाका छोरा; **पश्य** — हेर; **एतान्** — ती सबैलाई; **समवेतान्** — जम्मा भएका; **कुरून्** — कुरुवंशी सदस्यहरू; **इति** — यसरी।

**भीष्म, द्रोण र सारा संसारभरिका राजाहरूका अगाडि भगवान् श्रीकृष्णले भन्नुभयो — हे पार्थ! यसरी यहाँ जम्मा भएका सम्पूर्ण कुरुहरूलाई हेर।**

**तात्पर्य :** भगवान् श्रीकृष्ण सम्पूर्ण जीवहरूका परमात्मा हुनुहुन्छ। अर्जुनका मनमा के भइरहेको छ भन्ने कुरा उहाँ जान्नु हुन्छ। यहाँ प्रयोग भएको हृषीकेश शब्दले उहाँ सबै कुरा जान्नु हुन्छ भन्ने जनाउँछ। त्यसैले अर्जुनका लागि प्रयोग भएको पार्थ शब्द (अर्थात्, पृथा वा कुन्तीका छोरा) पनि महत्त्वपूर्ण छ। अर्जुन भगवान् श्रीकृष्णका पिताजी वसुदेवकी बहिनीका छोरा थिए, त्यसैले उहाँले उनको सारथी बन्न स्वीकार गर्नुभएको हो भन्ने कुरा पनि मित्रका रूपमा उहाँले अर्जुनलाई भन्नुभयो। तर, जब भगवान् श्रीकृष्णले अर्जुनलाई "कुरुहरूलाई हेर" भन्नुभयो, यसमा उहाँको अभिप्राय के थियो? अर्जुन त्यहीं रोकिएर युद्ध गर्न चाहन्नथे र? आफ्नी फुपूका छोराबाट उहाँले कहिल्यै पनि यस्तो आशा गर्नुभएको थिएन। यसरी भगवान् श्रीकृष्णले परिहासकै रूपमा आफ्ना मित्र अर्जुनको मनस्थितिका बारेमा पूर्व जानकारी दिनुभयो।

**तत्रापश्यत् स्थितान् पार्थः पितृनथ पितामहान् ।**
**आचार्यान् मातुलान् भ्रातृन् पुत्रान् पौत्रान् सखींस्तथा ।**
**श्वशुरान्सुहृदश्चैव सेनयोरूभयोरपि ॥ २६ ॥**

**तत्र** — त्यहाँ; **अपश्यत्** — देखे; **स्थितान्** — उभिएका; **पार्थः** — अर्जुन; **पितृन्** — बाबु पर्नेहरू; **अथ** — पनि; **पितामहान्** — हजुरबुवाहरू; **आचार्यान्** — गुरुहरू; **मातुलान्** — मामाहरू; **भ्रातृन्** — दाजुभाइहरू; **पुत्रान्** — छोराहरू; **पौत्रान्** — नातिहरू; **सखीन्** — साथीहरू; **तथा** — पनि; **श्वशुरान्** — ससुराहरू; **सुहृदः** — शुभचिन्तकहरू; **च** — पनि; **एव** — निश्चय नै; **सेनयोः** — सेनाहरूको; **उभयोः** — दुवै पक्षका; **अपि** — लगायत।

**दुवै पक्षका सैनिकहरूका बीचमा उभिएर हेर्दा अर्जुनले त्यहाँ आफ्ना बाबुहरू, हजुरबुवाहरू, गुरुहरू, मामाहरू, दाइभाइहरू, छोराहरू, नातिहरू, मित्रहरू, ससुराहरू र शुभचिन्तकहरूलाई देखे।**

**तात्पर्य :** युद्धभूमिमा अर्जुनले सबै नातेदारहरूलाई देखे। उनले आफ्ना पिताका समकालीन भूरिश्रवा जस्ता व्यक्तिहरूलाई देखे, भीष्म र सोमदत्त जस्ता हजुरबुवालाई देखे, कृपाचार्य र द्रोणाचार्य जस्ता गुरुहरूलाई देखे, शल्य र शकुनिजस्ता मामाहरूलाई पनि देखे। दुर्योधनजस्ता दाजुभाइहरू, लक्ष्मणजस्ता छोराहरू, अश्वत्थामाजस्ता मित्रहरू र कृतवर्मा जस्ता शुभचिन्तकहरूलाई पनि उनले युद्धभूमिमा देखे। उनले त्यो सैन्यसमूहलाई पनि देखे, जहाँ उनका विभिन्न साथीहरू सम्मिलित भएका थिए।

**तान्समीक्ष्य स कौन्तेयः सर्वान्बन्धूनवस्थितान् ।**
**कृपया परयाविष्टो विषीदन्निदमब्रवीत् ॥ २७॥**

तान् — ती सबैलाई; **समीक्ष्य** — देखेर; **स** — ती; **कौन्तेय** — कुन्तीपुत्र; **सर्वान्** — सबै प्रकारका; **बन्धून्** — नातेदारहरूलाई; **अवस्थितान्** — उभिएका; **कृपया** — दयाले गर्दा; **परया** — अत्यधिक; **आविष्ट** — अभिभूत भएर; **विषीदन्** — चिन्ता गर्दै; **इदम** — यस प्रकार; **अब्रवीत्** — भने।

**विभिन्न वर्गका यी साथी नातेदारहरूलाई युद्धभूमिमा देखेपछि कुन्तीपुत्र अर्जुन करुणाले अभिभूत भएर यसरी भन्नथाले।**

अर्जुन उवाच
**दृष्ट्वेमं स्वजनं कृष्ण युयुत्सुं समुपस्थितम् ।**
**सीदन्ति मम गात्राणि मुखं च परिशुष्यति ॥ २८॥**

**अर्जुन उवाच** — अर्जुनले भने; **दृष्ट्वा** — देखेर; **इमम्** — यी सबैलाई; **स्वजनम्** — आफन्तहरू; **कृष्ण** — हे कृष्ण; **युयुत्सुम्** — युद्ध गर्ने इच्छा लिएर; **समुपस्थितम्** — उपस्थित भएका; **सीदन्ति** — कामिरहेका छन्; **मम** — मेरा; **गात्राणि** — शरीरका अङ्गहरू; **मुखम्** — मुख; **च** — पनि; **परिशुष्यति** — सुकिरहेको छ।

**अर्जुनले भने — हे कृष्ण! लडाइँ गर्नका लागि मेरा अगाडि उपस्थित भएका यी आफ्नै साथी नातेदारहरूलाई देखेर मेरो शरीर कामिरहेको छ र मेरो मुख पनि सुकिरहेको छ।**

**तात्पर्य :** भगवान्प्रति जसको वास्तविक भक्ति छ, त्यस्ता व्यक्तिसँग सन्त पुरुष वा देवताहरूमा पाइने सबै असल गुणहरू हुन्छन् तर अभक्तहरू शिक्षा र संस्कृतिद्वारा भौतिक उन्नतिमा जतिसुकै अगाडि बढेका भएपनि तिनमा त्यस्ता ईश्वरीय गुणहरूको अभाव हुन्छ। आफ्ना आफन्तजन, साथीहरू र

सम्बन्धीहरूलाई युद्धभूमिमा देखेर उनीहरूप्रतिको करुणाभावले अर्जुन तुरून्त बिह्वल भए। ती सबै परस्पर युद्ध गर्ने निश्चय गरेर आएका थिए। जहाँसम्म अर्जुनका सैनिकहरूको कुरा छ, उनी आफ्ना सैनिकहरूप्रति सुरुदेखि नै दयालु थिए तर त्यहाँ मृत्युको निकट पुगेका विरोधी पक्षका सैनिकहरूलाई देखेर पनि उनको हृदय करुणाले भरियो। यसरी सोच्दासोच्दै अर्जुनका शरीरका अङ्गहरू काम्न थाले र उनको मुख पनि सुक्नथाल्यो। सबैलाई लडाइँका लागि तत्पर देखेर उनले धेरै-थोरै आश्चर्यको अनुभव पनि गरे। लगभग सबै नातेदारहरू र जो-जोसँग उनको रगतको सम्बन्ध थियो ती सबै उनीसँग युद्ध गर्नका लागि आएका थिए। अर्जुनजस्ता भक्तहरूमा यस किसिमको करुणा हुनु अस्वाभाविक होइन। त्यहाँ अर्जुनको शरीर मात्रै कामेन, उनको मुख मात्रै सुकेन, उनी करुणावश रोए पनि। हुन त यो कुराको उल्लेख यहाँ छैन तर यो सहजै अनुमान गर्न सकिन्छ। उनी कमजोर भएर उनमा यस्ता लक्षणहरू देखिएका होइनन्। यो उनको कोमल हृदयका कारणले भएको हो। यो भगवान्का शुद्ध भक्तहरूको एउटा विशेषता नै हो। भनिएको पनि छ—

*यस्यास्तिभक्तिर्भगवत्यकिञ्चना सर्वैर्गुणैस्तत्र समासते सुराः ।*
*हरावभक्तस्य कुतो महद्गुणा मनोरथेनासति धावतो बहिः ॥*

*भागवत्* (५.१८.१२)

"भगवान्प्रति अविचल भक्ति हुने व्यक्तिमा सबै असल दैवी गुणहरू हुन्छन् तर जो व्यक्ति भगवान्को भक्त छैन त्यसमा केवल भौतिक गुणहरू मात्र पाइन्छन्, जसको मूल्य साह्रै थोरै हुन्छ। यसको कारण के हो भने, यस्तो व्यक्ति केवल मानसिक स्तरमै भौँतारिइरहन्छ र चमक्दार भौतिक माया शक्तिद्वारा आकृष्ट भइहाल्छ"।

**वेपथुश्च शरीरे मे रोमहर्षश्च जायते ।**
**गाण्डीवं स्रंसते हस्तात् त्वक्चैव परिदह्यते ॥ २९ ॥**

**वेपथुः** — शरीरको कम्पन; **च** — पनि; **शरीरे** — शरीरमा; **मे** — मेरो; **रोमहर्षः** — रौँ ठडिनु (रोमाञ्च); **च** — पनि; **जायते** — भइरहेको छ; **गाण्डीवम्** — अर्जुनको धनु; **स्रंसते** — खस्दैछ; **हस्तात्** — हातबाट; **त्वक्** — छाला; **च** — पनि; **एव** — निश्चय नै; **परिदह्यते** — पोलिरहेको छ।

**मेरो सम्पूर्ण शरीरमा कम्प भइरहेको छ, शरीर रोमाञ्चित भइरहेको छ (रौँहरू ठडिइरहेका छन्), मेरो गाण्डीव धनु हातबाट चिप्लिँदैछ र मेरो छाला पोलिरहेछ।**

**तात्पर्य :** शरीरमा दुई प्रकारको कम्प हुन्छ र दुई प्रकारको रोमाञ्च हुन्छ। यस्तो लक्षण कि महान् आध्यात्मिक आनन्दका कारणबाट उत्पन्न हुन्छ, कि ठुलो भौतिक डरबाट। दिव्य आत्मसाक्षात्कार हुँदा यस्तो कुनै भय रहँदैन। यस अवस्थामा अर्जुनमा जुन लक्षणहरू देखापरेका छन् ती सांसारिक डर, विशेष गरी मरिन्छ भन्ने डरका कारणले उत्पन्न भएका हुन्। अन्य लक्षणहरूबाट पनि यो कुरा स्पष्ट हुन्छ। अर्जुन कति आत्तिएका थिए भने उनका हातबाट गाण्डीव धनु चिप्लिरहेको थियो र उनको हृदय पोलिरहेको हुनाले छाला पोलेको अनुभव भइरहेको थियो। यी सबै शारीरिक अवधारणको बुद्धिको परिणाम हुन्।

**न च शक्नोम्यवस्थातुं भ्रमतीव च मे मनः ।**
**निमित्तानि च पश्यामि विपरीतानि केशव ॥ ३० ॥**

न — न; **च** — पनि; **शक्नोमि** — सक्दछु; **अवस्थातुं** — उभिन; **भ्रमति** — बिर्सिरहेको; **इव** — जस्तै; **च** — र; **मे** — मेरो; **मन** — मन; **निमित्तानि** — कारणहरू; **च** — पनि; **पश्यामि** — देख्छु; **विपरीतानि** — एकदम उल्टो; **केशव** — हे केशी नामक असुरलाई संहार गर्ने! (कृष्ण)

**हे केशव! हे कृष्ण! अब यहाँ धेरै समय उभिने सामर्थ्य पनि ममा छैन। मैले आफैँलाई बिर्सदैछु, मेरो मन घुमिरहेको छ, म त केवल अमङ्गल (अशुभ) मात्रै देखिरहेछु।**

**तात्पर्य :** आफ्नै व्याकुलताले गर्दा अर्जुन युद्धभूमिमा उभिनै सकेनन् र यही मानसिक कमजोरीले गर्दा उनलाई आत्मविस्मृति भयो। भौतिक विषयप्रतिको अत्यधिक आसक्तिले गर्दा मानिस यस किसिमको मोहग्रस्त अवस्थामा पुग्दछ। '**भयं द्वितीयाभिनिवेशतः स्यात्**' (*भागवत्* ११.२.३७) — भौतिक परिस्थितिबाट अत्यधिक प्रभावित भएका व्यक्तिहरूमा नै यस किसिमको डर र मानसिक असन्तुलन देखा पर्दछ। अर्जुन युद्धभूमिमा केवल दुःखदायी पराजयमात्रै देख्दथे। लाग्थ्यो, उनी शत्रुमाथि विजय गरेर पनि सुखी हुने छैनन्। "**निमित्तानि विपरीतानि**" भन्ने यी दुई शब्द महत्त्वपूर्ण छन्। जब मानिस आफ्ना आशाहरू विफल भएको मात्र भएको देख्छ अनि ऊ सोच्न थाल्छ— "म किन यहाँ छु" हरेक मानिस आफू र आफ्नो हित हुने कुरामा अभिरूचि राख्दछ। परमात्माप्रति कसैले अभिरूचि राख्दैन। भगवान् श्रीकृष्णकै इच्छाले अर्जुनले आफ्नो वास्तविक स्वार्थरूपी अज्ञान देखाइरहेका थिए। मानिसको साँचो स्वार्थ त भगवान् विष्णु वा कृष्णमा निर्भर छ। बद्धजीवले यो कुरा बिर्सिन्छ, त्यसैले ऊ भौतिक कष्टहरूबाट पीडित हुन्छ। अर्जुनले सोचे— "युद्धमा मेरो जित भए पनि त्यो जित मेरा लागि केवल शोकको कारण हुनेछ।"

**न च श्रेयोऽनुपश्यामि हत्वा स्वजनमाहवे ।**
**न काङ्क्षे विजयं कृष्ण न च राज्यं सुखानि च ॥ ३१॥**

**न** — न त; **च** — पनि; **श्रेयः** — कल्याण; **अनुपश्यामि** — देखिरहेको छु; **हत्वा** — मारेर; **स्वजनम्** — आफ्ना नातेदारहरूलाई; **आहवे** — युद्धमा; **न** — न त; **काङ्क्षे** — चाहन्छु; **विजयम्** — विजय; **कृष्ण** — हे कृष्ण; **न** — न त; **च** — पनि; **राज्यम्** — राज्य; **सुखानि** — त्यसका सुखहरू; **च** — पनि।

**हे कृष्ण! युद्धमा आफ्ना नाता-सम्बन्धीहरूलाई मारेर न म आफ्नो कुनै कल्याण देख्दछु न त जितेपछि पाइने राज्य र राज्यसुखको इच्छा नै ममा छ।**

**तात्पर्य :** बद्धजीवहरू भगवान् विष्णु वा कृष्णमा नै आफ्नो साँचो स्वार्थ निहित छ भन्ने जान्दैनन्। त्यसैले उनीहरू यस्तो अवस्थाबाट सुख पाइन्छ कि भन्ने आशा राख्दै शारीरिक सम्बन्धमा आसक्त हुन्छन्। जीवनप्रतिको यस्तो अन्धो धारणामा परेर उनीहरूले भौतिक सुखहरूका कारणलाई पनि बिर्सिदिन्छन्। यहाँ अर्जुनले क्षत्रियको नैतिक धर्म पनि बिर्सिएजस्तो देखिन्छ। भनिन्छ, दुई प्रकारका मानिसहरू मात्र अत्यन्त शक्तिशाली तथा जाज्वल्यमान् सूर्यलोकमा प्रवेश गर्नयोग्य हुन्छन्, ती हुन्— भगवान् श्रीकृष्णका आज्ञाले युद्धभूमिमा प्रत्यक्ष प्राण त्याग्ने व्यक्ति र पूर्णतया आध्यात्मिक संस्कारमा समर्पित भएको संन्यासी। अर्जुनले आफ्ना नातेदारहरूलाई मात्र होइन शत्रुहरूलाई पनि मार्ने इच्छा गरिरहेका थिएनन्। आफ्ना नातेदारहरूलाई मारेर जीवनमा कुनै सुख हुँदैन भन्ने उनको विचार थियो। त्यसैले भोक नलागेको व्यक्ति भोजन पकाउन तयार नभएजस्तै अर्जुन पनि युद्ध गर्ने इच्छा गरिरहेका थिएनन्। उनले एकान्तमा गएर निराशापूर्ण जीवन बिताउनका लागि वनतिर जाने निश्चय गरेका थिए। तर, एउटा क्षत्रिय हुनाले उनलाई जीविका चलाउनका लागि पनि राज्यको आवश्यकता पर्थ्यो किनभने क्षत्रियहरू आफूलाई कुनै अर्को पेसामा संलग्न गर्न सक्दैनन्। तर, अर्जुनको कुनै राज्य थिएन। उनले आफ्ना पिताको उत्तराधिकारमा आएको राज्य पनि भाइ-भतिजाहरूसँग लडाइँ गरेर लिनुपरेको थियो। उनका लागि राज्य प्राप्त गर्ने यही एउटा अवसर थियो तर लडाइँ गर्न उनी चाँहदैनथे। त्यसैले उनले आफूलाई निराशापूर्ण एकान्त जीवन बिताउन वनमा जान उपयुक्त सम्झे।

**किं नो राज्येन गोविन्द किं भोगैर्जीवितेन वा ।**
**येषामर्थे काङ्क्षितं नो राज्यं भोगाः सुखानि च ॥ ३२॥**

**त इमेऽवस्थिता युद्धे प्राणांस्त्यक्त्वा धनानि च ।**
**आचार्याः पितरः पुत्रास्तथैव च पितामहाः ॥ ३३ ॥**
**मातुलाः श्वशुराः पौत्राः श्यालाः सम्बन्धिनस्तथा ।**
**एतान्न हन्तुमिच्छामि घ्नतोऽपि मधुसूदन ॥ ३४ ॥**
**अपि त्रैलोक्यराज्यस्य हेतोः किं नु महीकृते ।**
**निहत्य धार्तराष्ट्रान्नः का प्रीतिः स्याज्जनार्दन ॥ ३५ ॥**

**किम्** — के लाभ; **नो** — हामीलाई; **राज्येन** — राज्यबाट; **गोविन्द** — हे कृष्ण!; **किम्** — के; **भोगैः** — भोगबाट; **जीवितेन** — जीवित रहनाले; **वा** — अथवा; **येषाम्** — जसका; **अर्थे** — लागि; **काङ्क्षितम्** — इच्छित छ; **नः** — हामीबाट; **राज्यम्** — राज्य; **भोगाः** — भौतिक भोग; **सुखानि** — सबै सुखहरू; **च** — पनि; **ते** — ती सबै; **इमे** — यिनीहरू; **अवस्थिताः** — उभिएका छन्; **युद्धे** — युद्धभूमिमा; **प्राणान्** — जीवन; **त्यक्त्वा** — त्यागेर; **धनानि** — धनलाई; **च** — पनि; **आचार्याः** — गुरुहरू; **पितरः** — बाबुहरू; **पुत्राः** — छोराहरू; **तथा** — तथा; **एव** — निश्चय नै; **च** — पनि; **पितामहाः** — हजुरबुबाहरू; **मातुलाः** — मामाहरू; **श्वशुराः** — ससुराहरू; **पौत्राः** — नातिहरू; **श्यालाः** — सालाजेठानहरू; **सम्बन्धिनः** — सम्बन्धीहरू; **तथा** — एवं; **एतान्** — यी सबै; **नहन्तुम्** — कहिल्यै पनि नमार्न; **इच्छामि** — चाहन्छु; **घ्नतः** **अपि** — मारिए पनि; **मधुसूदनः** — हे मधु असुरका संहारकर्ता कृष्ण; **अपि** — तैपनि; **त्रैलोक्य** — तीनै लोकको; **राज्यस्य** — राज्यको; **हेतोः** — निमित्त; **किं नु** — के कुरा; **महीकृते** — पृथ्वीका लागि; **निहत्य** — मारेर; **धार्तराष्ट्रान्** — धृतराष्ट्रका छोराहरूलाई; **नः** — हामीलाई; **का** — के; **प्रीति** — प्रसन्नता; **स्यात्** — होला र; **जनार्दन** — हे समस्त जीवहरूका पालनकर्ता।

**हे गोविन्द! जसका लागि हामीलाई राज्य, भोग र सुखहरू चाहिएको हो तिनीहरू नै आफ्नो प्राण र धनको आशा मारेर लडाइँ गर्न युद्धभूमिमा उभिएका छन् भने त्यो राज्य, त्यो भोग र त्यो जीवनसमेतले हामीलाई के लाभ भयो? त्यसैले हे मधुसूदन! मलाई विजय पनि चाहिएन, राज्य र सुख पनि चाहिएन। गुरुहरू, हजुरबुबाहरू, बुबाहरू, छोराहरू, नातिहरू, मामाहरू, साला-जेठानहरू, ससुराहरू र अन्य नातेदारहरू साराका सारा युद्ध गर्न मेरा अगाडि उभिएका छन्। पृथ्वीको राज्यको के कुरा स्वर्ग, मर्त्य र पाताल यी तीनै लोकको राज्य पाए पनि म यिनीहरूलाई मार्न चाहन्न। यिनीहरूले नै मलाई मार्दछन् भने मारून्। यी धृतराष्ट्रका छोराहरूलाई मारेर हामीलाई के आनन्द होला र?**

**तात्पर्य :** यहाँ अर्जुनले भगवान् श्रीकृष्णलाई गोविन्द भनेर सम्बोधन गरेका छन्, किनभने गाईहरू तथा इन्द्रियहरूका सम्पूर्ण सुखका विषय नै भगवान् श्रीकृष्ण हुनुहुन्छ। यो अर्थपूर्ण शब्द प्रयोग गरेर अर्जुनले आफ्ना इन्द्रियहरू कसरी सन्तुष्ट हुन्छन् त्यो कुरा भगवान् श्रीकृष्णले बुझ्नु पर्दछ भनेर सङ्केत गर्न खोजेका हुन्। तर, गोविन्द शब्दको अर्थ हाम्रा इन्द्रियहरूको सन्तुष्टिका लागि होइन। यदि हामीले भगवान् गोविन्दका इन्द्रियहरूलाई सन्तुष्ट पार्ने प्रयास गरे हाम्रा इन्द्रियहरू स्वतः सन्तुष्ट भइहाल्छन्। भौतिक रूपले हरेक व्यक्तिले आफ्नै इन्द्रियलाई तृप्त पार्न चाहन्छ र यस्तो इन्द्रियतृप्ति गर्ने काममा भगवान्ले आज्ञाकारी जस्तो भएर सहायता गरून् भन्ने चाहन्छ। भगवान्ले जीवात्मालाई त्यति नै इन्द्रियतृप्ति प्रदान गर्नु हुन्छ, जतिका अधिकारी तिनीहरू हुन्छन् तर लोभवश तिनीहरू जति चाहन्छन् त्यति होइन। जब व्यक्तिले यसको विपरीत बाटो अपनाउँछ अर्थात्, जो आफ्ना इन्द्रियतृप्तिको वास्ता नगरी भगवान् गोविन्दका इन्द्रियतृप्तिका लागि प्रयत्न गर्दछ, त्यस अवस्थामा गोविन्दका कृपाले त्यस प्राणीका सम्पूर्ण चाहनाहरू परिपूर्ण हुन्छन्। आफ्नो जाति र पारिवारिक सदस्यहरूप्रति अर्जुनको गहिरो स्नेह थियो त्यसैले गर्दा अर्जुनले उनीहरूप्रति स्वाभाविक करुणा देखाएका हुन्। अतः उनी युद्धका लागि तैयार थिएनन्। हरेक व्यक्ति आफ्ना साथीहरू र सम्बन्धीहरूलाई आफ्नो वैभव देखाउन चाहन्छ तर अर्जुन आफ्ना सम्बन्धी र साथीहरू युद्धभूमिमा मर्नेछन् र विजयपछि उनीहरूका साथमा बसेर ऐश्वर्यको उपभोग गर्न पाइनेछैन भनेर डराएका छन्। यो पनि भौतिक जीवनको एक किसिमको लेखाजोखा हो। आध्यात्मिक जीवन योभन्दा एकदमै भिन्न हुन्छ। आध्यात्मिक व्यक्ति केवल भगवान्को इच्छा पूर्ण गर्न मात्रै चाहन्छ। भगवान्का इच्छाको अनुकूल भएमा उहाँकै सेवाका लागि उसले सबै ऐश्वर्य स्वीकार गर्न पनि सक्दछ र भगवान्को इच्छा विपरीत भएमा उसले कत्ति पनि र केही पनि स्वीकार गर्दैनन्। अर्जुन आफ्ना नातेदारहरूलाई मार्न चाहन्नथे। यदि तिनीहरूलाई मार्नैपर्ने भएमा स्वयम् श्रीकृष्णले नै मारे हुन्छ भन्ने उनको इच्छा थियो। यहाँ युद्धभूमिमा आउनुभन्दा अघि नै भगवान् श्रीकृष्णले उनीहरूलाई मारिसक्नुभएको थियो र उनी श्रीकृष्णका एउटा उपकरण (निमित्त) मात्र भएर उभिएका हुन् भन्ने कुरा अर्जुनलाई स्वयम् थाहा थिएन। यो यथार्थता आगामी अध्यायमा स्पष्ट हुनेछ। भगवान्का स्वाभाविक भक्त भएका हुनाले अर्जुनले आफ्ना दुष्ट भाइ-भतिजाहरू विरुद्ध कुनै प्रतिशोध लिन चाहेनन्। तर, ती दुष्टहरूको मृत्यु अवश्यम्भावी थियो, किनभने भगवान्को योजना नै त्यस्तै थियो।

भगवान्का भक्त दुष्कर्मीहरूसँग पनि प्रतिकार गर्न खोज्दैनन् तर आफ्ना

भक्तहरूलाई दुष्टहरूले कुनै किसिमको अपकार गरेको भगवान्‌ले सहन सक्नुहुन्न। स्वयम् भगवान्‌कै नोक्सान गर्नेलाई बरु भगवान्‌ले क्षमा गरिदिनु हुन्छ, तर भगवान्‌का भक्तहरूप्रति नराम्रो गर्नेहरूलाई उहाँ कहिल्यै क्षमा गर्नुहुन्न। त्यसैले अर्जुनले क्षमा दिन चाहे पनि भगवान्‌ले ती दुष्टहरूलाई मार्ने नै सङ्कल्प गर्नुभएको थियो।

**पापमेवाश्रयेदस्मान्हत्वैतानाततायिनः ।**
**तस्मान्नार्हा वयं हन्तुं धार्तराष्ट्रान्सबान्धवान् ।**
**स्वजनं हि कथं हत्वा सुखिनः स्याम माधव! ॥ ३६ ॥**

**पापमेव** — पापमात्रै; **आश्रयेत्** — लाग्ला; **अस्मान्** — हामीलाई; **हत्वा** — मारेर; **एतान्** — यी सबै; **आततायिनः** — आततायीहरूलाई; **तस्मात्** — त्यसै कारणले; **नार्हा** — योग्य छैनौँ; **वयम्** — हामीहरू; **हन्तुम्** — मार्न; **धार्तराष्ट्रान्** — धृतराष्ट्रका छोराहरूलाई; **सबान्धवान्** — साथीहरूसहित; **स्वजनम्** — आफन्तहरूलाई; **हि** — निश्चय नै; **कथम्** — कसरी; **हत्वा** — मारेर; **सुखिनः** — सुखी; **स्याम** — हामी हौंला; **माधव** — हे लक्ष्मीपति कृष्ण!

**यस्ता आततायीहरूलाई मारे हामीलाई पाप लाग्नेछ, त्यसैले धृतराष्ट्रका छोराहरू र अरू हाम्रा मित्रहरूलाई मार्नु हाम्रा लागि उचित छैन। हे लक्ष्मीपति कृष्ण! यी आफन्तहरूलाई मारेर हामीलाई के लाभ होला र, के सुख होला र?**

**तात्पर्य :** वैदिक भनाईअनुसार आततायीहरू छः प्रकारका हुन्छन्, — १. विष खुवाउने, २. घरमा आगो लगाइदिने, ३. घातक हतियारले आक्रमण गर्ने, ४. धन-सम्पत्ति लुट्ने, ५. अर्काको जग्गा हडप्ने र ६. अर्काकी पत्नी अपहरण गर्ने। यस्ता आततायीहरूलाई तुरून्त मारिदिनु पर्दछ। यस्ता आततायीहरूलाई मार्नाले कुनै पाप लाग्दैन। कुनै सामान्य मानिसले यस किसिमका आततायीहरूलाई मार्न सुहाउँदछ, तर अर्जुन कुनै सामान्य व्यक्ति थिएनन्। अर्जुन चरित्रले सन्त स्वभावका थिए त्यसैले उनले ती पापिष्टहरूसँग पनि सन्तजस्तो व्यवहार गर्न चाहन्थे। यस्तो साधुपना क्षत्रियहरूका लागि सुहाउँदैन, हुनत राज्यको प्रशासन गर्ने जिम्मेवारी लिएको मानिस सन्तस्वभावको हुनु आवश्यक छ। त्यस्तो व्यक्ति डरपोक हुनु हुँदैन। उदाहरणका लागि — भगवान् राम साह्रै सन्तस्वभावका हुनुहुन्थ्यो, जसले गर्दा मानिसहरू अहिले पनि रामराज्यका लागि उत्सुक छन् तर भगवान् रामले कहिल्यै पनि कुनै काँतरता देखाउनुभएन। रावण भगवान् रामको आततायी थियो, किनभने रावणले भगवान् रामकी

पत्नी सीताको अपहरण गरेको थियो। त्यसैले भगवान् रामले उसलाई यस्तो सजाय दिनुभयो जुन संसारको इतिहासमै महान् छ। अर्जुनका विषयमा कुरा अलि भिन्दै छ। अर्जुनका आततायीहरू विशेष किसिमका छन्। विशेष गरी उनका आफ्नै हजुरबुवा, गुरु, साथीहरू, छोराहरू, नातिहरू आदि नै उनका विरोधी छन्। त्यसैले सामान्य आततायीहरूका विरोधमा आवश्यक पर्ने कडा व्यवहार उनीहरूप्रति गर्नु हुँदैन भन्ने विचार अर्जुनको थियो। त्यसमा पनि अझ साधुजनले त क्षमा नै गरिदिनु राम्रो हो भनिएको छ। यस्ता निर्देशनहरू सन्तपुरुषहरूलाई कुनै पनि राजनीतिक आपतकालभन्दा बढ्ता महत्त्वपूर्ण हुन्छन्। अर्जुनका विचारमा राजनीतिक कारणले यसरी आत्मीयहरूलाई मार्नुभन्दा धर्म तथा सदाचारका स्तरमा पुगेर उनीहरूलाई क्षमा गरिदिनु राम्रो हो। अतः क्षणिक शारीरिक सुखका लागि यसरी आफन्तहरूलाई मार्नु लाभदायक छैन भन्ने कुरा अर्जुनले सोचे। आखिरमा गएर सम्पूर्ण राज्य तथा त्यसबाट पाइने सुख कुनै पनि स्थायी होइनन् त्यसैले आफ्ना मान्छेहरूलाई मारेर आफ्नै जीवनलाई शाश्वत मुक्तिबाट विचलित बनाउने खतरामा किन पार्ने ? यस सम्बन्धमा अर्जुनले भगवान् श्रीकृष्णलाई माधव वा लक्ष्मीपति भनेर सम्बोधन गर्नु पनि महत्त्वपूर्ण छ। सौभाग्यका अधिपति श्रीकृष्णले आफूलाई दुर्भाग्यतिर लैजाने काममा प्रेरित नगरे हुन्थ्यो भन्ने इच्छा अर्जुनको थियो र उनी श्रीकृष्णलाई यही कुरा भन्न चाहन्थे। भगवान् श्रीकृष्णले कहिल्यै पनि कसैलाई दुर्भाग्यतिर लैजानु हुन्न, झन् आफ्ना भक्तहरूलाई उहाँले त्यसतर्फ प्रेरित गर्ने त कुरै भएन।

**यद्यप्येते न पश्यन्ति लोभोपहतचेतसः।**
**कुलक्षयकृतं दोषं मित्रद्रोहे च पातकम् ॥ ३७॥**
**कथं न ज्ञेयमस्माभिः पापादस्मान्निवर्तितुम्।**
**कुलक्षयकृतं दोषं प्रपश्यद्भिर्जनार्दन ॥ ३८॥**

**यदि** — यदि; **अपि** — पनि; **एते** — ती कौरवहरू; **नपश्यन्ति** — देख्दैनन्; **लोभ** — लोभले; **उपहत चेतसः** — बुद्धि भ्रष्ट भएका; **कुलक्षय** — सम्पूर्ण वंशलाई मार्न; **कृतम्** — गरिएको; **दोषम्** — दोष; **मित्रद्रोहे** — मित्रहरूसँगको झगडामा; **च** — तथा; **पातकम्** — पापपूर्ण कार्यलाई; **कथम्** — किन; **न ज्ञेयम्** — न जानौं; **अस्माभि** — हामीहरूद्वारा; **पापात्** — पापहरूबाट; **अस्मात्** — यी; **निवर्तितुम्** — छुट्टन; **कुलक्षय** — वंशको नाश; **कृतम्** — गरेको; **दोषम्** — अपराधलाई; **प्रपश्यद्भिः** — देख्न सक्नेले; **जनार्दन** — हे कृष्ण!

**हे जनार्दन! यी मानिसहरूको बुद्धि लोभले गर्दा भ्रष्ट भएको छ। यिनीहरू आफ्ना परिवारलाई मार्ने र मित्रहरूसँग झगडा गर्ने कुरामा पनि कुनै दोष देख्दैनन् तर कुलको विनाशमा ठुलो अपराध देख्ने हामीहरू किन यी पापपूर्ण कार्यमा संलग्न भइरहने ?**

**तात्पर्य :** कुनै विरोधी पक्षले युद्ध वा जूवाका लागि निमन्त्रण गरे क्षत्रियहरू त्यस्तो निमन्त्रणालाई अस्वीकार गर्दैनन्। स्वीकार गर्नु अनिवार्य जस्तै हुन्छ। यस्तो अनिवार्यतामा अर्जुनले पनि युद्धलाई अस्वीकार गर्न सक्दैनथे, किनभने दुर्योधनका पक्षबाट उनलाई युद्धको चुनौती दिइएको थियो। यस किसिमको चुनौतीको परिणामका विषयमा विपक्षीहरू अनभिज्ञ पनि हुन सक्दछन् भन्ने विचार अर्जुनको थियो। युद्धको दुष्परिणाम देखिरहेका हुनाले अर्जुनले उक्त चुनौती स्वीकार गर्न सक्दैनथे। परिणाम राम्रो हुने भएमा त्यस्तो काम गर्नु अनिवार्य हुन्छ अन्यथा त्यस्तो काम गर्नैपर्ने बाध्यता हुँदैन। यी सबै कुराको विचार गरेर नै अर्जुनले लडाइँ नगर्ने निश्चय गरेका हुन्।

**कुलक्षये प्रणश्यन्ति कुलधर्माः सनातनाः ।**
**धर्मे नष्टे कुलं कृत्स्नमधर्मोऽभिभवत्युत ॥ ३९ ॥**

**कुलक्षये** — कुलको नाश भएमा; **प्रणश्यन्ति** — विनाश हुनेछ; **कुलधर्माः** — वंशगत परम्परा; **सनातनाः** — शाश्वत; **धर्मे** — धर्म; **नष्टे** — नाश भएमा; **कुलम्** — कुल; **कृत्स्नम्** — सम्पूर्ण; **अधर्मः** — अधर्म; **अभिभवति** — परिवर्तन हुन्छ; **उत** — यस्तो भनिन्छ।

**वंशको विनाशसँगै शाश्वत कुलपरम्परा पनि नाश हुन जान्छ र यसरी बाँकी रहेको परिवार पनि अधर्ममा संलग्न हुन पुग्दछ।**

**तात्पर्य :** वर्णाश्रम व्यवस्थामा परिवारका सदस्यहरूलाई राम्रोसँग उन्नति गर्न र आध्यात्मिक मूल्य प्राप्त गर्न सहायता पुऱ्याउनका लागि धेरै धार्मिक परम्परा तथा नीति-नियमहरू छन्। एउटा परिवारमा जन्मदेखि मृत्युसम्मका सबै संस्कारका लागि त्यस परिवारका वृद्धहरू नै जिम्मेवार हुन्छन्। परिवारका यी वयोवृद्ध मूल पुरुषहरूको मृत्यु भएपछि संस्कारसँग सम्बन्धित पारिवारिक रीति-रिवाज रोकिन पुग्दछन् र बाँकी रहेका परिवारका युवा सदस्यहरूमा अधार्मिक चरित्रको विकास हुन सक्दछ। अतः कुनै पनि अवस्थामा परिवारका वयोवृद्धजनलाई मार्न ठीक हुँदैन।

**अधर्माभिभवात्कृष्ण प्रदुष्यन्ति कुलस्त्रियः ।**
**स्त्रीषु दुष्टासु वार्ष्णेय जायते वर्णसङ्करः ॥ ४० ॥**

**अधर्म** — अधर्म; **अभिभवात्** — प्रमुख हुनाले; **कृष्ण** — हे कृष्ण!; **प्रदुष्यन्ति** — दूषित हुन जान्छन्; **कुलस्त्रिय** — कुलका स्त्रीहरू; **स्त्रीषु** — नारीत्वबाट; **दुष्टासु** — दूषित भएमा; **वार्ष्णेय** — हे वृष्णिवंशी कृष्ण!; **जायते** — उत्पन्न हुन्छन्; **वर्णसङ्करः** — नचाहिएका सन्तान।

**हे कृष्ण! कुलमा अधर्म बढ्न सुरु भएपछि कुलका स्त्रीहरू दूषित हुन्छन् र यसरी स्त्रीहरू आफ्नो सतीत्वबाट पतित भएपछि हे वृष्णिवंशी कृष्ण! नचाहिएका सन्तानहरू उत्पन्न हुन्छन्।**

**तात्पर्य :** मानवसमाजमा असल सन्तानहरूको जन्म भए मात्रै जीवनमा सुख-शान्ति तथा आध्यात्मिक उन्नति हुन सक्दछ। राष्ट्र र जनसमुदायको आध्यात्मिक उन्नति गर्नका लागि समाजमा असल सन्तानहरू उत्पन्न गराउने उद्देश्यले नै वर्णाश्रम व्यवस्थाका नियमहरू बनाइएको हो। असल सन्तानको जन्म स्त्रीहरूको सतीत्व र निष्ठामा निर्भर गर्दछ। जसरी बालकहरू सजिलैसँग नराम्रो बाटोतिर लाग्छन् त्यसै गरी स्त्रीहरू पनि पतन हुनेतर्फ उन्मुख हुन्छन्, त्यसैले बालकहरू र आइमाईहरू दुवैलाई समाजका वयोवृद्धजनको संरक्षणको आवश्यकता पर्दछ। विभिन्न धार्मिक रीति-रिवाजमा लागिरहे स्त्रीहरू व्यभिचारिणी हुन पाउँदैनन्। चाणक्य पण्डितका अनुसार आइमाईहरू सामान्यतया धेरै बुद्धिमान हुँदैनन् अतः उनीहरू विश्वास गर्न योग्य पनि हुँदैनन्। त्यसैले तिनीहरूलाई कुल-परम्पराका विभिन्न धार्मिक रीतिरिवाजहरूमा संलग्न गराइ राख्नु पर्दछ। यसो गर्नाले उनीहरूमा सतीत्व र भक्तिभाव रहिरहन्छ अनि उनीहरूबाट असल सन्तान जन्मिन्छन् र ती सन्तानहरू वर्णाश्रम व्यवस्थामा भाग लिन योग्य हुन्छन्। यदि वर्णाश्रम धर्मको नाश भएमा आइमाईहरू स्वच्छन्दतापूर्वक लोग्नेमानिसहरूसँग सम्बन्ध बढाउँछन्। यसबाट व्यभिचार बढ्दछ अनि वर्णसङ्कर (अवाञ्छित) सन्तान जन्मिन्छन्। अनुत्तरदायी मानिसहरूले पनि समाजमा व्यभिचार बढाउन सहयोग गर्दछन्, यसरी अनावश्यक वर्णसङ्कर सन्तानहरूको वृद्धि हुन्छ। यसबाट मानव जातिमाथि धेरै युद्ध र महामारीको सङ्कट आइ पर्दछ।

**सङ्करो नरकायैव कुलघ्नानां कुलस्य च ।**
**पतन्ति पितरो ह्येषां लुप्तपिण्डोदकक्रियाः ॥ ४१ ॥**

**सङ्कर** — यस्ता अवाञ्छित सन्तान; **नरकाय** — नारकीय जीवनका लागि; **एव** — निश्चय नै; **कुलघ्नानाम्** — कुलको संहार गर्नेहरू; **कुलस्य** — कुलको; **च** — पनि; **पतन्ति** — गिर्दछन्; **पितरः** — पितृहरू; **हि** — निश्चय नै; **एषाम्** — यिनीहरूका; **लुप्त** — रोकिन्छ; **पिण्डोदक** — पिण्ड; **क्रियाः** — कर्म।

**वर्णसङ्कर सन्तानहरूको वृद्धिबाट परिवारलाई र पारिवारिक परम्परा दुवैलाई नाश गर्ने दुवै प्रकारका कुलघातीहरू नर्कमा पर्दछन्। यस्ता कुलघातीहरूका पितृहरू पनि श्राद्ध तर्पण जस्ता पितृकार्यको लोप हुनाले नरकमा खस्दछन्।**

**तात्पर्य :** नर्कमा सकाम कर्मका विधिविधानअनुसार कुलका पितृहरूलाई समय-समयमा पिण्ड तथा तर्पण दिनु पर्दछ। भगवान् विष्णुको पूजाद्वारा यो कार्य सम्पन्न गरिन्छ किनभने भगवान् विष्णुलाई अर्पण गरिएको उच्छिष्ट (प्रसाद) खानाले सबै पापबाट मुक्त भइन्छ। कहिलेकाहीँ पितृहरू पनि विभिन्न किसिमका पाप-कर्महरूबाट ग्रस्त हुन सक्दछन् र कहिलेकाहीँ तीमध्ये केही पितृहरू स्थूल शरीर प्राप्त गर्न नसकेर प्रेतका रूपमा सूक्ष्म शरीर धारण गर्न बाध्य हुन्छन्, यदि छोरा-नातिले आफ्ना ती पितृहरूलाई भगवान्को प्रसाद अर्पण गरिदिए तिनीहरू दुःखमय प्रेतयोनि तथा अन्य कष्टमय जीवनबाट मुक्त हुन्छन्। यस किसिमको पितृश्राद्ध गर्नु एउटा कुलपरम्परा नै हो। जो व्यक्ति भक्त बनेको छैन त्यस्ता व्यक्तिले यो कर्म गर्नै पर्दछ। तर, भक्तिमार्गमा लागेको भक्तले यस्ता कर्महरू गर्नु आवश्यक छैन। उसले केवल भगवान्को भक्ति गर्नाले मात्र आफ्ना सयौँ हजारौँ पितृहरूलाई यस्ता सङ्कटपूर्ण जीवनबाट सजिलै उद्धार गर्न सक्दछ। *श्रीमद्भागवत्* एकादश स्कन्ध पाँच अध्यायको ४१ औँ श्लोकमा भनिएको छ—

*देवर्षि भूताप्तनृणां पितृणां न किंकरो नायमृणी च राजन् ।*
*सर्वात्मना यः शरणं शरण्यं गतो मुकुन्दं परिहृत्य कर्तम् ॥*

अर्थात्, जो व्यक्ति आफ्ना अरू सबै कर्महरूलाई छाडेर मुक्तिदाता भगवान् मुकुन्दका चरणारविन्दको शरणमा परेको छ र उक्त भक्तिमार्गमा अत्यन्त सावधानीसँग हिँडेको छ, त्यो व्यक्ति देवताहरू, ऋषिमुनिहरू, सामान्य जीवात्माहरू, पितृहरू, इष्टमित्रहरू वा मनुष्यहरूप्रति गर्नुपर्ने कर्तव्य वा ऋणबाट मुक्त हुन्छ। भगवान्को सेवा गर्नाले मात्रै पनि यस्ता सबै दायित्वहरू स्वतः पूरा हुन्छन्।

**दोषैरेतैः कुलघ्नानां वर्णसङ्करकारकैः ।**
**उत्साद्यन्ते जातिधर्माः कुधर्माश्च शाश्वताः ॥ ४२ ॥**

**दोषै** — यस्ता दोषहरूले; **एतैः** — यी सबै; **कुलघ्नानाम्** — कुलको विनाश गर्नेहरूको; **वर्णसङ्कर** — अवाञ्छित सन्तानहरूका; **कारकैः** — कारणहरूले गर्दा; **उत्साद्यन्ते** — नष्ट हुन्छन्; **जातिधर्माः** — सामुदायिक योजनाहरू; **कुलधर्माः** — पारिवारिक परम्पराहरू; **च** — पनि; **शाश्वताः** — सनातन।

**आफ्ना कुलपरम्परालाई नाश गर्ने व्यक्तिहरूको गलतकार्यहरूबाट वर्णसङ्कर सन्ततिहरू उत्पन्न हुन्छन् र तिनका नराम्राकार्यहरूबाट सबै प्रकारका सामुदायिक योजनाहरू तथा पारिवारिक कल्याणका कार्यहरूसमेत नष्ट हुन्छन्।**

**तात्पर्य :** मानिसले आफ्नो परमपुरुषार्थरूपी मोक्ष प्राप्त गर्न सकोस् भनेर नै मानव समाजका चारै वर्णका लागि सनातन धर्म वा वर्णाश्रम धर्मले तिनका सामुदायिक योजनाहरू र पारिवारिक कल्याणका कार्यहरूको समेत व्यवस्था गरेको छ। यदि समाजका अनुत्तरदायी नेताहरूले सनातन धर्मको परम्परालाई नै विखण्डित पारिदिए त्यसबाट समाजमा अव्यवस्था फैलिन्छ। फलस्वरूप मानिसहरूले जीवनको मूल उद्देश्य भगवान् विष्णुलाई नै बिर्सन्छन्। यस्ता नेताहरूलाई नै अन्धा भनिन्छ र यिनीहरूका पछि लाग्नेहरू अवश्य नै अस्तव्यस्तको स्थितिमा पुग्दछन्।

**उत्सन्नकुलधर्माणां मनुष्याणां जनार्दन ।**
**नरके नियतं वासो भवतीत्यनुशुश्रुम ॥ ४३ ॥**

**उत्सन्न** — नाश भएको; **कुलधर्माणाम्** — पारिवारिक परम्परा हुनेहरू; **मनुष्याणाम्** — मानिसहरूका; **जनार्दन** — हे कृष्ण!; **नरके** — नर्कमा; **नियताम्** — सधैँ; **वासः** — निवास; **भवति** — हुन्छ; **इति** — यस प्रकार; **अनुशुश्रुम** — गुरुपरम्पराबाट मैले सुनेको छु।

**हे प्रजापालक कृष्ण! कुलधर्मलाई विनाश गर्नेहरू सधैँभरि नर्कमा बास गर्दछन् भन्ने कुरा मैले गुरुपरम्पराबाट सुनेको छु।**

**तात्पर्य :** अर्जुनका तर्कहरू उनका आफ्नै अनुभवमा आधारित नभएर आचार्यहरूबाट सुनेका कुरामा आधारित छन्। ज्ञान प्राप्त गर्ने वास्तविक विधि यही हो। पहिलादेखि ज्ञानको अवस्थामा पुगिसकेका व्यक्तिको सहायता नपाईकन कसैले पनि यथार्थ ज्ञान प्राप्त गर्न सक्दैन। वर्णाश्रम धर्मको नियमअनुसार मर्नुभन्दा अगाडि व्यक्तिले आफूले गरेका पापकर्महरूको प्रायश्चित गर्नु पर्दछ। पापकर्मीहरूले यो विधिलाई पूरा गर्नै पर्दछ। यदि यस्तो प्रायश्चित नगरे त्यो पापी व्यक्तिलाई अवश्य पनि नर्कमा पठाइन्छ। त्यहाँ पुगेर उक्त व्यक्तिले पाप कर्म गरेको हुनाले कष्टमय जीवन भोग्नु पर्दछ।

**अहो वत महत्पापं कर्तुं व्यवसिता वयम् ।**
**यद्राज्यसुखलोभेन हन्तुं स्वजनमुद्यताः ॥ ४४ ॥**

**अहो** — ओहो !; **वत** — कति अचम्म हो; **महत्** — महान्; **पापम्** — पापकर्म; **कर्तुं** — गर्नका लागि; **व्यवसिता** — निश्चय गरेका छौँ; **वयम्** — हामीले; **यत्** — किनभने; **राज्यसुखलोभेन** — राज्यसुखको लोभमा परेर; **हन्तुम्** — मार्नका लागि; **स्वजनम्** — आफ्नै सम्बन्धीहरूलाई; **उद्यताः** — तत्पर भएका छौँ।

**अहो! कति आश्चर्यको कुरा हो, हामी राज्यको सुख भोग्ने लोभमा परेर आफ्नै आफन्तहरूलाई मार्न तयार भएर ठुलो पापकर्म गर्न खोजिरहेका छौँ।**

**तात्पर्य :** स्वार्थी मनोवृत्तिद्वारा प्रेरित भएर मानिस आफ्ना दाजुभाइ, आमाबाबुलाई मार्नेजस्तो पापकर्म पनि गर्न तत्पर हुन्छ। संसारको इतिहासमा यस्ता धेरै उदाहरणहरू छन्। तर, अर्जुन भगवान्का सज्जन भक्त हुन्। त्यसैले, उनी आफ्ना सदाचारप्रति जागरूक छन्, त्यसैले उनी यस्ता कर्मबाट बच्ने प्रयत्न गर्दैछन्।

**यदि मामप्रतीकारमशस्त्रं शस्त्रपाणयः ।**
**धार्तराष्ट्रा रणे हन्युस्तन्मे क्षेमतरं भवेत् ॥ ४५ ॥**

**यदि** — यदि; **माम्** — मलाई; **अप्रतीकारम्** — प्रतिरोध नगरेका कारणले; **अशस्त्रम्** — कत्ति हतियार नलिएको; **शस्त्रपाणयः** — हातमा हतियारहरू लिएका; **धार्तराष्ट्रा** — धृतराष्ट्रका छोराहरूले; **रणे** — युद्धभूमिमा; **हन्युः** — मारून्; **तत्** — त्यो; **मे** — मेरा लागि; **क्षेमतरम्** — भन्दा राम्रो; **भवेत्** — हुनेछ।

**हातमा शस्त्र लिएका धृतराष्ट्रका छोराहरूले हतियार पनि नलिएको र युद्धमैदानमा कुनै प्रतिरोध पनि नगर्ने मलाई मारून्। मेरा लागि त्यो श्रेयस्कर हुनेछ।**

**तात्पर्य :** क्षत्रियहरूको युद्धका नियमअनुसार हतियार नलिएको र युद्ध गर्न नचाहने व्यक्तिमाथि आक्रमण गर्न हुन्न। अर्जुनले "यो विषम अवस्थामा शत्रुले ममाथि आक्रमण गरून् तर म उनीहरूसँग लडाइँ गर्दिन" भन्ने निश्चय गरे। विरोधी पक्ष युद्ध गर्नका लागि कति तत्पर छ भन्ने कुरा उनले विचारै गरेनन्। भगवान्का महान् भक्त भएका कारणले उनको हृदय अति कोमल छ, त्यसै हुनाले उनमा यी सबै लक्षणहरू देखिएका हुन्।

सञ्जय उवाच

**एवमुक्त्वार्जुनः संख्ये रथोपस्थ उपाविशत् ।**
**विसृज्य सशरं चापं शोकसंविग्नमानसः ॥ ४६ ॥**

**सञ्जय उवाच** — सञ्जयले भने; **एवम्** — यस प्रकारले; **उक्त्वा** — भनेर; **अर्जुनः** — अर्जुन; **संख्ये** — युद्धभूमिमा; **रथ** — रथको; **उपस्थ** — आसनमा; **उपविशत्** — बसे; **विसृज्य** — एकातिर राखेर; **सशरम्** — वाणसहितको; **चापम्** — धनु; **शोक** — शोकले; **संविग्नमानस** — उद्विग्न मन भएका।

**सञ्जयले भने — युद्धभूमिमा अर्जुनले यिनै कुरा भनेर आफ्नो वाणसहितको धनु एकातिर पन्छाएर मनमा शोक सन्तप्त हुँदै फेरि रथमा गएर बसे।**

**तात्पर्य :** आफ्ना शत्रुहरूको अवस्थाको निरीक्षण गर्ने समयमा अर्जुन रथमा उभिएका थिए तर चिन्ताले साह्है आत्तिएर उनले आफ्नो त्यो धनुष पनि एकातिर राखेर फेरि रथमा बसे। भगवान्को सेवामा संलग्न भएका यस्ता कोमल हृदय भएका दयालु व्यक्ति नै आत्मज्ञान पाउनयोग्य हुन्छन्।

यस प्रकार *श्रीमद्भगवद्गीता* ग्रन्थअन्तर्गत 'कुरुक्षेत्रका युद्धभूमिमा सैनिकहरूको निरीक्षण' सम्बन्धी पहिलो अध्यायको भक्तिवेदान्त तात्पर्य समाप्त भयो।

# अध्याय-दुई

# गीताको सारसंक्षेप

सञ्जय उवाच

**तं तथा कृपयाविष्टमश्रुपूर्णाकुलेक्षणम् ।**
**विषीदन्तमिदं वाक्यमुवाच मधुसूदनः ॥ १ ॥**

**सञ्जय उवाच** — सञ्जयले भने; **तम्** — अर्जुनलाई; **तथा** — यसरी; **कृपया** — करुणाद्वारा; **आविष्टम्** — अभिभूत; **अश्रुपूर्णाकुल** — आँसुले भरिएका; **ईक्षणम्** — आँखाहरू; **विषीदन्तम्** — शोकले युक्त भएर; **इदम्** — यी; **वाक्यम्** — शब्दहरू; **उवाच** — भने; **मधुसूदनः** — मधु नामक असुरलाई मार्ने श्रीकृष्णले।

**सञ्जयले भने — करुणाले भरिएका, शोकले व्याकुल भएका र आँखाभरि आँसु लिएका अर्जुनलाई देखेर मधुसूदन कृष्णले निम्नलिखित शब्दहरू भन्नुभयो।**

**तात्पर्य :** भौतिक करुणा, शोक र आँसु यी सबै आत्माको अज्ञानका चिन्हहरू हुन् र सनातन आत्माप्रतिको करुणा नै आत्मसाक्षात्कार हो। यस श्लोकमा 'मधुसूदन' शब्द महत्त्वपूर्ण छ। भगवान् श्रीकृष्णले 'मधु' नामक असुरलाई वध गर्नुभएको थियो। अर्जुनले यस समय आफूलाई कर्तव्यबाट विमुख गराउने अज्ञानरूपी असुरलाई पनि भगवान् श्रीकृष्णले नै मारिदिए हुन्थ्यो भन्ने चाहेका छन्। करुणा कहाँ गर्नु पर्दछ भन्ने कुरा कसैले जान्दैनन्। पानीमा डुबिरहेको मानिसको वस्त्रप्रति करुणा गर्नु मूर्खता हो। अज्ञानका सागरमा डुबेकालाई तिनको बाहिरी लुगा वा स्थूल शरीरको रक्षा गरेर मात्र बचाउन सकिँदैन। जसले यो कुरा बुझ्दैन र बाहिरी शरीरका लागि चिन्ता गर्दछ त्यसलाई शूद्र भनिन्छ र त्यस्तो शोक अनावश्यक हो। अर्जुन क्षत्रिय थिए। उनीबाट यस्तो व्यवहारको आशा गरिएको थिएन। भगवान् श्रीकृष्णले अज्ञानी मानिसहरूको शोकलाई नष्ट गर्न सक्नुहुन्थ्यो र यही उद्देश्यका लागि उहाँले *भगवद्गीता* गाउनुभएको हो। यो अध्यायले हामीलाई भौतिक शरीर र आध्यात्मिक आत्माको विश्लेषणात्मक अध्ययनद्वारा आत्मसाक्षात्कार गर्ने उपदेश दिन्छ। यसको व्याख्या स्वयम् भगवान् श्रीकृष्णले नै गर्नुभएको छ। आसक्तिरहित भएर निष्काम भावले कर्म गर्नेलाई र सही आत्मबोधको स्थितिमा स्थिर भएकाहरूलाई यो साक्षात्कार सम्भव छ।

श्रीभगवानुवाच
**कुतस्त्वा कश्मलमिदं विषमे समुपस्थितम् ।**
**अनार्यजुष्टमस्वर्ग्यमकीर्तिकरमर्जुन ॥ २ ॥**

**श्रीभगवानुवाच** — भगवान्‌ले भन्नुभयो; **कुतः** — कहाँबाट; **त्वा** — तिमीमा; **कश्मलम्** — मनको खिन्नता; **इदम्** — यो शोक; **विषमे** — यो सङ्कट-कालमा; **समुपस्थितम्** — आइपुग्यो; **अनार्य** — जीवनको मूल्य नबुझ्ने व्यक्तिहरूले; **जुष्टम्** — गरिने; **अस्वर्ग्यम्** — स्वर्गमा नलैजाने; **अकीर्ति** — अपयश; **करम्** — गराउने; **अर्जुन** — हे अर्जुन।

**श्रीभगवान्‌ले भन्नुभयो — प्रिय अर्जुन! तिमीमा यी खिन्नताहरू कसरी आए। जीवनको मूल्य बुझ्ने मानिसका लागि यी कुराहरू सुहाउँदैनन्, यसबाट न स्वर्गीय लोकहरूको प्राप्ति हुन्छ न राम्रो कीर्ति नै रहन्छ।**

**तात्पर्य :** श्रीकृष्ण र भगवान्‌मा भिन्नता छैन, त्यसैले गीताभरि श्रीकृष्णलाई भगवान् भनिएको छ। भगवान् परिपूर्ण र परमसत्य हुनुहुन्छ। ज्ञानका तीन अवस्थामा परमसत्यको अनुभव हुन्छ— १. सर्वव्यापक निराकार आत्मा वा ब्रह्म, २. परमात्मा वा समस्त जीवात्माका हृदयमा विद्यमान तत्त्व, र ३. भगवान् श्रीकृष्ण। *श्रीमद्भागवत्* (१.२.११) मा परमसत्यसम्बन्धी यो धारणालाई यसरी व्याख्या गरिएको छ।

*वदन्ति तत्तत्वविदस्तत्त्वं यज्ज्ञानमद्वयम् ।*
*ब्रह्मेति परमात्मेति भगवानीति शब्द्यते ॥*

"परमसत्यका ज्ञाताहरूले तीन अवस्थामा परमसत्यको साक्षात्कार गर्दछन् र यी तीनै अवस्थामा कुनै भिन्नता छैन। परमसत्यका यी तीन अवस्थालाई ब्रह्म, परमात्मा तथा भगवान् भनिएको छ।"

यी तीन किसिमका दिव्य पक्षहरूलाई सूर्यको उदाहरणद्वारा स्पष्ट पार्न सकिन्छ। सूर्यका पनि प्रकाश, सूर्यधरातल र स्वयम् सूर्यलोक गरी तीनवटा भिन्न-भिन्न पक्षहरू हुन्छन्। सूर्यका प्रकाशको मात्रै अध्ययन गर्ने व्यक्तिलाई नवसिकारू वा प्राथमिक स्तरको विद्यार्थी भनिन्छ। जसले सूर्यसतहलाई बुझ्दछ त्यसलाई अलि अगाडि बढेको मानिन्छ र सूर्यलोकभित्रै प्रवेश गर्नसक्ने विद्यार्थीलाई उच्च कोटिको मानिन्छ। सूर्यको प्रकाश, त्यसको विश्वव्यापकता र निराकार प्रकृतिको अखण्ड तेजको मात्र अध्ययन गर्नेहरूलाई परमसत्यको ब्रह्म स्वरूपको मात्र साक्षात्कार गर्नसक्ने व्यक्तिसँग तुलना गर्न सकिन्छ। जो व्यक्ति त्योभन्दा अलि बढी जानेको छ वा जसले सूर्यविम्बका बारेमा

जानेको छ त्यसको तुलना भगवान्‌को परमात्मा स्वरूपलाई जान्ने व्यक्तिसँग गर्न सकिन्छ र सूर्यलोकको हृदयमै प्रवेश गर्नसक्ने विद्यार्थीको तुलना परमसत्यस्वरूप स्वयम् भगवान्‌को अनुभव गर्ने व्यक्तिसँग गर्न सकिन्छ। अतः यसरी परमसत्यको अध्ययनमा संलग्न हुने सबै विद्यार्थीहरूको अध्ययनको विषय एउटै भए पनि परमसत्यको भगवान् स्वरूपलाई साक्षात्कार गर्ने भक्त वा अध्यात्मवादी नै सर्वश्रेष्ठ अध्यात्मवादी हुन्। सूर्यको प्रकाश, सूर्यको विम्ब र सूर्यलोकको आन्तरिक वस्तुलाई एक अर्काबाट अलग गर्न सकिँदैन तैपनि यी तीन अवस्थाको भिन्दाभिन्दै अध्ययन गर्ने विद्यार्थीहरू एउटै श्रेणीका वा समान स्तरका हुँदैनन्।

व्यासदेवका पिता पराशर मुनिले संस्कृत शब्द "भगवान्" को व्याख्या गर्नुभएको छ। जोसँग समस्त धन-सम्पत्ति, सम्पूर्ण शक्ति, सम्पूर्ण यश, सम्पूर्ण सुन्दरता, सम्पूर्ण ज्ञान र सम्पूर्ण त्याग छ, त्यो परमपुरुषलाई भगवान् भनिन्छ। यस्ता धेरै मानिसहरू छन् जो कोही अति धनी छन्, कोही अति शक्तिशाली छन्, कोही अत्यन्त सुन्दर छन्, कोही अति विख्यात छन्, कोही अति विद्वान् छन् र कोही अत्यन्त विरक्त पनि छन् तर कसैले पनि पूर्णरूपले मसँग सम्पूर्ण धन, सम्पूर्ण शक्ति आदि छन् भन्न सक्दैन। एक मात्र भगवान् श्रीकृष्णले यस्तो दाबी गर्न सक्नु हुन्छ, किनभने उहाँ स्वयम् भगवान् हुनुहुन्छ। ब्रह्माजी, शिवजी या नारायण आदि कुनै पनि जीव श्रीकृष्णसमान पूर्ण ऐश्वर्यशाली छैनन्। त्यसैले ब्रह्मसंहितामा स्वयम् ब्रह्माजीले श्रीकृष्णलाई भगवान् भन्नुभएको छ। न कोही श्रीकृष्णभन्दा ठुलो छ न कोही श्रीकृष्णसमान नै छ। गोविन्दका नामले पनि चिनिनुहुने भगवान् श्रीकृष्ण सबै कारणहरूका पनि परमकारण आदिपुरुष हुनुहुन्छ।

*ईश्वरः परमः कृष्णः सच्चिदानन्दविग्रहः ।*
*अनादिरादिर्गोविन्दः सर्वकारणकारणम् ॥*

*ब्रह्मसंहिता* (५.१)

"भगवान्‌का केही गुणहरूले युक्त भएका धेरै व्यक्तिहरू संसारमा छन् तर श्रीकृष्ण परमपुरुष हुनुहुन्छ किनभने उहाँभन्दा अधिक र उहाँसमान कोही छैन। उहाँ परमपुरुष हुनुहुन्छ, उहाँको शरीर नित्य छ, ज्ञानमय छ र आनन्दमय छ। उहाँ नै समस्त कारणहरूका पनि कारण आदिपुरुष भगवान् गोविन्द हुनुहुन्छ"। श्रीमद्‌भागवत्‌मा पनि भगवान्‌का धेरै अवतारहरूको सूची छ तर श्रीकृष्णलाई मूल भगवान् भनिएको छ र उहाँबाटै धेरै-धेरै अवतारहरू र भगवान्‌का धेरै रूपहरूको विस्तार हुन्छ, भनिएको छ—

*एते चांशकलाः पुंसः कृष्णस्तु भगवान् स्वयम् ।*
*इन्द्रारिव्याकुलं लोकं मृडयन्ति युगे-युगे ॥*

*भागवत्* (१.३.२८)

यहाँ प्रस्तुत गरिएको भगवान्का अवतारहरूको सूची या भगवान्का अंश कला हुन् या पूर्णकला तर श्रीकृष्ण स्वयम् भगवान् हुनुहुन्छ। अतः श्रीकृष्ण नै मूल भगवान् हुनुहुन्छ र उहाँ नै परमसत्य परमात्मा र निराकार ब्रह्म दुवैका स्रोत हुनुहुन्छ।

स्वयम् भगवान्को उपस्थितिमा अर्जुनले आफ्ना मानिसहरूका लागि शोक गर्नु अवश्य नै शोभनीय होइन, त्यसैले भगवान् श्रीकृष्णले यहाँ कुतः शब्दद्वारा आफ्नो आश्चर्य प्रकट गर्नुभएको हो। आर्यका रूपमा प्रसिद्ध यस्ता सुसभ्य श्रेणीका मानिसहरूबाट यस किसिमको कल्मषयुक्त आचरणको कहिल्यै आशा राखिँदैन। जो व्यक्ति आध्यात्मिक अनुभूतिका आधारमा सभ्य भएका छन् र जो जीवनको मूल्य जान्दछन् तिनलाई नै आर्य भनिन्छ। जो व्यक्ति जीवनको भौतिकवादी दृष्टिकोणबाट सञ्चालित छन्, जसलाई परमसत्य विष्णु वा भगवान्को साक्षात्कार नै जीवनको लक्ष्य हो भन्ने कुराको जानकारी छैन, जो भौतिक प्रकृतिको बाह्य स्वरूपद्वारा मोहित छन्, जसलाई मुक्ति भनेको के हो, थाहै छैन र जसलाई भौतिक बन्धनबाट मुक्त हुने ज्ञान छैन त्यस्ता व्यक्तिहरूलाई अनार्य भनिन्छ। अर्जुन क्षत्रिय थिए, उनी युद्धलाई अस्वीकार गरेर आफ्नो निर्धारित कर्तव्यबाट विचलित हुँदैथिए। यस किसिमको कायरतापूर्ण कार्य अनार्यहरूले मात्र गर्न सुहाउँदछ। यसरी आफ्नो निर्धारित कर्तव्यबाट हुने विचलनले न आध्यात्मिक जीवनको प्रगतिमा सहायता पुऱ्याउँदछ न यसबाट सांसारिक ख्याति नै पाउन सकिन्छ। आफन्तहरूका लागि अर्जुनले देखाएको यो तथाकथित करुणालाई भगवान् श्रीकृष्णले समर्थन गर्नुभएन।

**क्लैब्यं मा स्म गमः पार्थ नैतत्त्वय्युपपद्यते ।**
**क्षुद्रं हृदयदौर्बल्यं त्यक्त्वोत्तिष्ठ परन्तप ॥ ३ ॥**

**क्लैब्यम्** — नपुंसकता; **मा स्म गमः** — नलिउ; **पार्थ** — हे पृथापुत्र!; **नैतत्** — न त यो; **त्वयि** — तिमीलाई; **उपपद्यते** — सुहाउँछ; **क्षुद्रम्** — तुच्छ; **हृदय** — हृदयको; **दौर्बल्यम्** — दुर्बलता; **त्यक्त्वा** — छोडेर; **उत्तिष्ठ** — उठ; **परन्तप** — हे शत्रुहरूका विनाशक, अर्जुन!

**हे पृथापुत्र अर्जुन! नपुंसक नबन, तिमीजस्तो वीरलाई यो शोभा दिँदैन। हे शत्रु दमनकर्ता! हृदयको क्षुद्र दुर्बलतालाई त्यागेर युद्ध गर्न उठ।**

**तात्पर्य :** यहाँ अर्जुनलाई पार्थ (पृथापुत्र) भनेर सम्बोधन गरिएको छ। पृथा भगवान् श्रीकृष्णका पिताजी वसुदेवकी बहिनी थिइन्। अतः अर्जुनसँग श्रीकृष्णको रगतको नाता थियो। यदि क्षत्रियको छोरोले युद्ध गर्न नमाने त्यो नाममात्रको क्षत्रिय हो र ब्राह्मणको छोरो अपवित्र कार्यमा लागे त्यो नाममात्रको ब्राह्मण हो। त्यस्ता क्षत्रिय र त्यस्ता ब्राह्मणपुत्रहरू आफ्ना बाबुहरूका अयोग्य सन्तान हुन्। अतः भगवान् श्रीकृष्णले अर्जुनलाई एउटा अयोग्य क्षत्रिय सन्तति भएको देख्न चाहनु हुन्नथ्यो। अर्जुन श्रीकृष्णका घनिष्ठ मित्र थिए तथा श्रीकृष्णले प्रत्यक्ष रूपले रथमा अर्जुनलाई मार्गदर्शन गरिरहनुभएको थियो। यति हुँदाहुँदै पनि यदि अर्जुनले लडाइँ नगरे उनी बडो निन्दनीय हुनेथिए। त्यसैले, भगवान् श्रीकृष्णले भन्नुभयो, यस्तो प्रवृत्ति अर्जुनलाई सुहाउँदैन। अत्यन्त आदरणीय भीष्म र आफ्ना इष्टमित्रहरूप्रतिको उदार दृष्टिकोणका कारणले युद्धभूमि परित्याग गर्ने तर्क अर्जुनले पेश गर्दछन् तर भगवान् श्रीकृष्णले यस किसिमको उदारतालाई केवल हृदयको दुर्बलता मात्रै मान्नु हुन्छ। कुनै पनि शास्त्रले यस्तो झूटो उदारताको समर्थन गर्दैनन्। त्यसैले, भगवान् श्रीकृष्णका अगाडि अर्जुनले यस प्रकारको उदारता र तथाकथित अहिंसाको परित्याग गरिदिनु पर्दछ।

अर्जुन उवाच

**कथं भीष्ममहं संख्ये द्रोणं च मधुसूदन ।**
**इषुभिः प्रतियोत्स्यामि पूजार्हावरिसूदन ॥ ४ ॥**

**अर्जुन उवाच** — अर्जुनले भने; **कथम्** — कसरी; **भीष्मम्** — भीष्मलाई; **अहम्** — मैले; **संख्ये** — युद्धमा; **द्रोणं च** — द्रोणाचार्यलाई पनि; **मधुसूदन** — हे मधुका संहारकर्ता; **इषुभि** — वाणहरूले; **प्रतियोत्स्यामि** — प्रतिप्रहार गरूँ; **पूजार्हौ** — पूजनीय; **अरिसूदन** — हे शत्रुहरूका संहारकर्ता।

**अर्जुनले भने — हे शत्रुहरूका संहारकर्ता हे मधुसूदन! मैले कसरी युद्धभूमिमा भीष्म र द्रोणजस्ता पूजनीय व्यक्तिहरूमाथि वाणले प्रतिप्रहार गरूँ।**

**तात्पर्य :** पितामह भीष्म र गुरु द्रोणाचार्य जस्ता आदरणीय अग्रजहरू सधैँ पूजनीय छन्। यदि उनीहरूले आक्रमण गरे पनि आफूले उनीहरूमाथि प्रति-आक्रमण गर्नु हुँदैन। यो एउटा सामान्य शिष्टाचार हो। अरू त के कुरा गुरुजनसँग वाक्‌युद्ध गर्नु पनि राम्रो हुँदैन। यदि उनीहरूले कहिलेकाहीँ कडा व्यवहार गर्नुभए पनि आफूले उनीहरूप्रति त्यस्ता कडा व्यवहार गर्नु हुँदैन। यस्तो जान्दा-जान्दै अर्जुनले उनीहरूमाथि कसरी वाण प्रहार गर्न सक्दथे ? के

भगवान् श्रीकृष्णले आफ्ना हजुरबुवा उग्रसेन तथा गुरु सान्दीपनि मुनिमाथि कहिल्यै आक्रमण गर्न सक्नु हुन्छ? यिनै र यस्तै केही तर्कहरू अर्जुनले श्रीकृष्णका अगाडि राखे।

**गुरूनहत्वा हि महानुभावान्**
**श्रेयो भोक्तुं भैक्ष्यमपीह लोके ।**
**हत्वार्थकामांस्तु गुरूनिहैव**
**भुञ्जीय भोगान् रुधिरप्रदिग्धान् ॥ ५ ॥**

**गुरून्** — मान्यजनहरूलाई; **अहत्वा** — नमारीकन; **हि** — निश्चय नै; **महानुभावन्** — महान् आत्माहरूलाई; **श्रेयः** — राम्रो हो; **भोक्तुं** — भोग्न (खान); **भैक्ष्यम्** — भीख मागेर; **अपि** — पनि; **इह** — यो जीवनमा; **लोके** — यो संसारमा; **हत्वा** — मारेर; **अर्थ** — लाभका; **कामान्** — इच्छाले; **तु** — तर; **गुरून्** — मान्यजनलाई; **इह** — यस संसारमा; **एव** — निश्चय नै; **भुञ्जीय** — भोग्नु पर्दछ; **भोगान्** — भोग गर्ने वस्तुहरू; **रुधिर** — रगतले; **प्रदिग्धान्** — मुछिएको।

**ठुला महानुभाव गुरुजनहरूलाई मार्नुभन्दा बरु यो संसारमा भीक्षा मागेर बाँच्नु राम्रो हो। सांसारिक लाभका इच्छुक भए पनि उहाँहरू मेरा गुरुहरू हुन्। यदि उनीहरू मारिए हामीले भोग गर्ने हरेक वस्तु रगतले मुछिएको रक्तरञ्जित हुनेछ।**

**तात्पर्य :** शास्त्रको भनाईअनुसार निन्दनीय कार्यमा संलग्न रहेका र विवेक हराएका गुरुहरूलाई त्यागिदिए पनि हुन्छ। दुर्योधनबाट आर्थिक सहायता लिइरहेका हुनाले भीष्म र द्रोण उसको पक्षमा लाग्न बाध्य थिए। हुन त केवल आर्थिक सहायता पाएकै कारणले उनीहरूले त्यसो गर्नु हुँदैनथ्यो। यस्तो परिस्थितिमा उनीहरूले गुरुको मर्यादा गुमाएका थिए। यति हुँदाहुँदै पनि उनीहरूलाई अर्जुनले गुरु नै मानिरहेका थिए र उनीहरूलाई मारेर भौतिक उपलब्धिहरूको भोग गर्नुको अर्थ अर्जुनका विचारमा रगतले मुछिएको अवाञ्छित वस्तुको भोग गर्नु हो।

**न चैतद्विद्मः कतरन्नो गरीयो**
**यद्वा जयेम यदि वा नो जयेयुः ।**
**यानेव हत्वा न जिजीविषाम-**
**स्तेऽवस्थिताः प्रमुखे धार्तराष्ट्राः ॥ ६ ॥**

**न** — न त; **च** — पनि; **एतत्** — यो; **विद्मः** — जान्दछौँ; **कतरत्** — कुन; **नः** — हामीलाई; **गरीयः** — राम्रो; **यद् वा** — यदि; **जयेम** — हामीले जित्छौँ;

**यदि** — यदि; **वा** — अथवा; **नः** — हामीलाई; **जयेयुः** — तिनीहरूले जित्छन्; **यान्** — जसलाई; **एव** — नै; **हत्वा** — मारेर; **न जिजीविषामः** — बाँच्न चाहँदैनौँ; **ते** — ती सबै; **अवस्थिताः** — उभिएका छन्; **प्रमुखे** — अगाडि; **धार्तराष्ट्राः** — धृतराष्ट्रका छोराहरू।

**हामीले उनीहरूलाई जिते राम्रो हुने हो कि उनीहरूले हामीलाई जिते राम्रो हुने हो, यो पनि हामीलाई थाहा छैन। हामी जुन धृतराष्ट्रका छोराहरूलाई मार्न चाहँदैनौँ तिनीहरू नै अहिले हाम्रा अगाडि युद्धभूमिमा उभिइरहेका छन्।**

**तात्पर्य :** क्षत्रिय भएको हुनाले युद्ध गर्नु अर्जुनको कर्तव्य भए पनि युद्ध गरेर अनावश्यक रक्तपातको भागी बन्ने हो कि युद्धबाट विमुख भएर भिक्षा मागेर जीवन बिताउने हो, अर्जुनले निश्चित गर्न सकेनन्। यदि उनले नजिते भिक्षाटन गर्नु नै जीवनको एकमात्र सहारा हुनेछ। जितिन्छ भन्ने पनि कुनै निश्चय थिएन किनभने दुई पक्षमध्ये कसैले पनि जित्न सक्दथ्यो। न्यायका पक्षमा भएका हुनाले उनकै विजय भए पनि युद्धमा धृतराष्ट्रका छोराहरू अवश्य नै मर्दथे। फेरि तिनीहरूका अनुपस्थितिमा बाँच्न पनि पाण्डवहरूलाई अति कठिन हुने थियो। यस्तो परिस्थितिमा अर्जुनको अर्को प्रकारको पराजय हुनेछ। अर्जुनद्वारा व्यक्त गरिएका यी विचारहरूबाट के सिद्ध हुन्छ, उनी भगवान्‌का एक महान् भक्त मात्रै थिएनन्, उनी मन र इन्द्रियहरूमाथि पूर्ण नियन्त्रण भएका अति प्रबुद्ध व्यक्ति थिए। राजपरिवारमा जन्मिएका भएर पनि भिक्षा मागेर जीवन बिताउने उनको इच्छा विरक्तिको अर्को चिन्ह हो। यी गुणहरू र (आफ्ना आध्यात्मिक गुरु) भगवान् श्रीकृष्णका वचनमा विश्वास, यी सबै मिलेर के देखाइरहेछन् उनी एक सच्चा पुण्यात्मा हुन्। यसबाट के निष्कर्ष आउँछ, अर्जुन मुक्तिका लागि सधैँ नै उपयुक्त थिए। इन्द्रियहरूमा नियन्त्रण नभएसम्म ज्ञानको स्तरमा पुग्न गाह्रो हुन्छ र ज्ञान तथा भक्तिबिना मुक्ति पाउन सकिँदैन। अर्जुन आफ्ना भौतिक सम्बन्धका असीम गुणहरूका अतिरिक्त यी आध्यात्मिक गुणमा पनि त्यति नै दक्ष थिए।

**कार्पण्यदोषोपहतस्वभावः**
**पृच्छामि त्वां धर्मसम्मूढचेताः ।**
**यच्छ्रेयः स्यान्निश्चितं ब्रूहि तन्मे**
**शिष्यस्तेऽहं शाधि मां त्वां प्रपन्नम् ॥ ७॥**

**कार्पण्य** — बौद्धिक दुर्बलतारूपी; **दोषः** — दोषले; **उपहत** — ग्रस्त भएको; **स्वभावः** — स्वभाव; **पृच्छामि** — सोधिरहेको छु; **त्वां** — हजुरसँग; **धर्म** —

धर्म; **सम्मूढचेताः** — मोहग्रस्त हृदय; **यत्** — जुन; **श्रेय** — कल्याणकारी; **स्यात्** — हुनेछ; **निश्चितम्** — निश्चित; **ब्रूहि** — भन्नुहोस्; **तत्** — त्यो; **मे** — मलाई; **शिष्यः** — शिष्य; **ते** — हजुरको; **अहम्** — म; **शाधि** — उपदेश दिनुहोस्; **माम्** — मलाई; **त्वाम्** — हजुरको; **प्रपन्नम्** — शरणमा परेको।

**अहिले विवेकको दुर्बलताले गर्दा मैले मेरो कर्तव्य के हो निश्चित गर्न सकिरहेको छैन र म आफ्नो सम्पूर्ण धैर्य पनि गुमाउँदैछु। यस्तो अवस्थामा मैले हजुरसँग सोधिरहेको छु मेरा लागि सबैभन्दा राम्रो के हुन्छ, त्यही भन्नुहोस्। म हजुरकै शिष्य हूँ र हजुरकै शरणमा आएको छु, अतः कृपा गरेर मलाई समुचित उपदेश दिनुहोस्।**

**तात्पर्य :** भौतिक क्रियाकलापका सम्पूर्ण गतिविधि नै प्रत्येकका लागि चिन्ताको स्रोत हो। यो प्रकृतिकै नियम हो। यहाँ पाइला-पाइलामा विचलन छ। त्यसैले मानिसलाई एउटा सुयोग्य गुरुका शरणमा जानु आवश्यक छ। गुरुले उसलाई जीवनको उद्देश्य पूरा गर्नका लागि सही मार्गनिर्देशन दिनु हुन्छ। हामीले नचाहँदा नचाहँदै पनि जीवनमा आइपर्ने विभिन्न झन्झटहरूबाट मुक्ति पाउनका लागि गुरुका शरणमा जाने सल्लाह हामीलाई सबै वैदिक साहित्यहरूले दिन्छन्। जीवनका यी झन्झटहरू कसैले नलगाईकनै वनमा लागेको डढेलोजस्ता हुन्छन्। यो संसारको चलन नै कस्तो छ, यहाँ नचाहेर पनि जीवनमा स्वतः विभिन्न समस्याहरू उत्पन्न हुन्छन्। जङ्गलमा आगो लागोस् भनेर कोही चाहँदैन तैपनि आगो लाग्दछ र हामी आत्तिन्छौँ। त्यसकारण जीवनका जटिलताको समाधान गर्नका लागि र उक्त समाधानको विज्ञान बुझ्नका लागि गुरु शिष्य परम्परामा रहेका गुरुका शरणमा जानु पर्दछ भन्ने कुरा वैदिक वाङ्मयमा उल्लेख गरिएको छ। प्रामाणिक गुरुका साथमा रहेको व्यक्तिले सबै कुरा जान्दछ। अतः मानिस सांसारिक जटिलतामा नरहेर योग्य गुरुका शरणमा जानु पर्दछ। यही नै यो श्लोकको तात्पर्य हो।

सांसारिक जटिलतामा फँसेको व्यक्ति को हो? त्यो त्यही व्यक्ति हो जो जीवनको समस्यालाई बुझ्दैन। *बृहदारण्यक उपनिषद्*-३.८.१० मा सांसारिक जटिलताहरूबाट व्याकुल मानिसको वर्णन यसरी गरिएको छ— **"यो वा एतदक्षरं गार्ग्यविदित्वास्माँल्लोकात्प्रैति स कृपणः।"** अर्थात्, जसले मानवका रूपमा रहेर आफ्ना जीवनका समस्याहरूको समाधान गर्न सक्दैन र जसले आत्मसाक्षात्कारको विज्ञान नबुझीलाई कुकुर-बिरालाले जस्तै संसार त्याग्छ त्यो कृपण हो। जीवात्माका लागि मानिसको शरीर एउटा बहुमूल्य सम्पत्ति हो। उसले आफ्ना जीवनका समस्याको समाधान गर्ने कार्यमा यो

शरीरको उपयोग गर्न सक्दछ। जसले यो अवसरको समुचित उपयोग गर्दैन त्यो कृपण हो, कञ्जुस हो। अर्कातिर जसले जीवनका समस्याहरूको समाधान गर्ने कार्यमा यो मानव शरीरको उपयोग गर्दछ त्यो पर्याप्त बुद्धिमान् हो वा ब्राह्मण हो। **"य एतदक्षरं गार्गि विदित्वास्माँल्लोकात्प्रैति स ब्राह्मणः।"**

शारीरिक अवधारणाको भएका कृपण मानिसहरू परिवार, समाज, देश आदिप्रति अत्यन्त स्नेहशील हुँदै आफ्नो अमूल्य समय नष्ट गर्दछन्। "छालाको रोगका" आधारमा मानिस आफ्नो पारिवारिक जीवन, विशेष गरी पत्नी, छोराछोरी तथा अन्य इष्टमित्रप्रति आसक्त हुन्छ। कृपण व्यक्ति या आफ्ना पारिवारिकजनलाई मृत्युबाट बचाउँदछु भन्ने ठान्दछ या उसका परिवार तथा समाजले उसलाई मृत्युको मुखबाट बचाउन सक्दछन् भन्ने ठान्दछ। यस किसिमका पारिवारिक आसक्ति तल्लो तहका पशुहरूमा पनि पाइन्छ। उनीहरू पनि आफ्ना छोराछोरीको रेखदेख गर्दछन्। अर्जुन बुद्धिमान् व्यक्ति थिए। पारिवारिकजनप्रतिको उनको प्रेम र मृत्युबाट उनीहरूको रक्षा गर्ने चाहना नै उनको चिन्ताको कारण हो भन्ने कुरा उनी बुझ्न सक्दथे। लडाइँ गर्नु उनको कर्तव्य हो र उक्त कर्तव्यले उनको प्रतीक्षा गरिरहेको छ भन्ने कुरा पनि उनी बुझ्दथे तर विवेकहीन कमजोरीले गर्दा उनी आफ्नो कर्तव्यपालन गर्न सकिरहेका थिएनन्। त्यसैले, निश्चित समाधान निकाल्नका लागि उनी परमगुरु भगवान् श्रीकृष्णसँग अनुरोध गर्दैछन्। उनी शिष्य बनेर आफूलाई श्रीकृष्णमा समर्पित गर्दैछन्। उनी अब भगवान् श्रीकृष्णसँग मित्रवत् होइन शिष्यवत् कुराकानी गर्न चाहन्छन्। गुरु र शिष्यबीचका कुराकानीहरू गम्भीर हुन्छन्। अहिले अर्जुन आफ्ना आदरणीय गुरु भगवान् श्रीकृष्णसँग अति गम्भीरतापूर्वक कुरा गर्न चाहन्छन्। भगवान् श्रीकृष्ण *भगवद्गीतारूपी* विज्ञानका मूलगुरु हुनुहुन्छ र अर्जुन यो गीताज्ञान बुझ्ने पहिलो शिष्य हुन्। अर्जुनले कसरी यो गीताज्ञान बुझे यो कुराको वर्णन यही गीतामै गरिएको छ। यति हुँदाहुँदै पनि मूर्ख सांसारिक विद्वान्हरू व्यक्ति भगवान् श्रीकृष्णको शरणमा होइन अव्यक्त श्रीकृष्णको शरणमा पर्नु पर्दछ भन्ने व्याख्या गर्दछन्। साकार श्रीकृष्ण र निराकार श्रीकृष्णमा कुनै भिन्नता छैन। भगवान् श्रीकृष्ण भित्र र बाहिर एकै हुनुहुन्छ। जोसँग यस किसिमको ज्ञान छैन तिनीहरूले *भगवद्गीता* बुझ्न खोज्नु सबैभन्दा ठुलो मूर्खता हो।

**न हि प्रपश्यामि ममापनुद्याद्**<br>
**यच्छोकमुच्छोषणमिन्द्रियाणाम् ।**<br>
**अवाप्य भूमावसपत्नमृद्धं**<br>
**राज्यं सुराणामपि चाधिपत्यम् ॥ ८॥**

**न** — होइन; **हि** — निश्चय नै; **प्रपश्यामि** — देख्दछु; **मम** — मेरो; **आपनुद्यात्** — हटाउन सकोस्; **यत्** — जो; **शोकम्** — शोक; **उच्छोषणम्** — सुकाउने (शोषण गर्ने); **इन्द्रियाणाम्** — इन्द्रियहरूको; **अवाप्य** — पाएर; **भूमौ** — पृथ्वीमा; **असपत्नं** — शत्रुविहीन; **ऋद्धम्** — समृद्ध; **राज्यम्** — राज्य; **सुराणाम्** — देवताहरूको; **अपि** — चाहे; **च** — पनि; **आधिपत्यम्** — प्रभुत्व।

**मेरा इन्द्रियहरूलाई सुकाउने यो शोक हटाउने कुनै उपाय म देख्दिनँ। स्वर्गमा देवताहरू जस्तै यो पृथ्वीमा संसारभरिको निष्कण्टक र धन-धान्यपूर्ण राज्य पाए पनि म यो शोकलाई हटाउन सक्दिनँ।**

**तात्पर्य :** हुनत अर्जुनले नैतिक तथा धार्मिक सिद्धान्तको ज्ञानमा आधारित धेरै तर्कहरू प्रस्तुत गरिरहेका थिए तैपनि आफ्ना आध्यात्मिक गुरु भगवान् श्रीकृष्णको सहयोगबिना उनले आफ्नो वास्तविक समस्याको समाधान गर्न सकिरहेका थिएनन्। आफ्नो सम्पूर्ण अस्तित्वलाई नै सुकाउन खोज्ने समस्याहरूलाई हटाउन उनको तथाकथित ज्ञान असमर्थ भइरहेको अनुभव उनले गरेका थिए। भगवान् श्रीकृष्णजस्ता गुरुको सहायताबिना उनका चिन्ताहरूको समाधान हुन पनि सम्भव थिएन। जीवनका समस्याहरूको समाधानमा प्राज्ञिकता, विद्वत्ता, उच्च पदजस्ता कुनै कुरा काम लाग्दैनन्। भगवान् श्रीकृष्णजस्ता गुरुले मात्र यस्ता कुरामा सहायता पुऱ्याउन सक्नु हुन्छ। अतः निष्कर्ष के हो, शतप्रतिशत कृष्णभावनाभावित गुरु नै आधिकारिक गुरु हुन सक्नु हुन्छ र त्यस्ता आध्यात्मिक गुरुले मात्रै जीवनका समस्याहरूको समाधान दिन सक्नु हुन्छ। भगवान् चैतन्य महाप्रभु भन्नु हुन्छ— जुनसुकै जातको भएपनि जुन व्यक्ति कृष्णभावनाको विज्ञानमा पारङ्गत छ त्यो व्यक्ति नै वास्तविक गुरु हुन सक्दछ।

*किवा विप्र किवा न्यासी शूद्र केने नय ।*
*येइ कृष्णतत्त्ववेत्ता, सेइ 'गुरु' हय ॥*

"व्यक्ति विप्र (वैदिक ज्ञानमा पारङ्गत) होस्, तल्लो जातिको (शूद्र) होस्, संन्यासी होस्, यदि ऊ कृष्णसम्बन्धी विज्ञानमा दक्ष भए पूर्ण वा आधिकारिक गुरु हुन सक्दछ।" (*चैतन्यचरितामृत, मध्यलीला* ८.१२८) तर कृष्णविज्ञानमा दक्ष नभएसम्म कोही पनि गुरु बन्न योग्य हुँदैन। वैदिक साहित्यमा पनि यस कुराको उल्लेख गरिएको छ—

*षट्कर्मनिपुणो विप्रो मन्त्रतन्त्रविशारदः ।*
*अवैष्णवो गुरुर्नस्यात् वैष्णवः श्वपचो गुरुः ॥*

यदि "विद्वान् ब्राह्मण छ र सम्पूर्ण वैदिक ज्ञानका विषयवस्तुमा दक्ष छ, तैपनि यदि वैष्णव वा कृष्णभावनामा पारङ्गत भएको छैन त्यो गुरु बन्नयोग्य हुँदैन। तर, कुनै व्यक्ति तल्लो जातको परिवारमा जन्मिएको छ, तैपनि वैष्णव वा कृष्णभावनाभावित भए त्यो गुरु हुन सक्दछ।" (पद्म पुराण) आर्थिक विकास गरेर र धन-सम्पत्ति जम्मा गरेर मात्रै जन्म, मृत्यु, वृद्धावस्था र रोगजस्ता जीवनका समस्याहरूलाई रोक्न सकिँदैन। विश्वका धेरै भागमा यस्ता धेरै राज्यहरू छन्, जो जीवनका सुख-सुविधाबाट परिपूर्ण छन्, धनधान्यले पूर्ण छन् र आर्थिक रूपले विकसित छन्, तर त्यहाँ पनि सांसारिक जीवनका समस्याहरू जस्ताका तस्तै विद्यमान छन्। तिनीहरू विभिन्न तरिकाबाट शान्तिको खोजी गर्दैछन् तर त्यो शान्ति तिनीहरूले त्यस समय मात्रै पाउन सक्नेछन् जब तिनीहरू भगवान् श्रीकृष्णको सम्पर्कमा आउनेछन् वा कृष्णतत्त्वको विज्ञान प्रतिपादन गरिएका *भगवद्गीता* र *श्रीमद्भागवत्* पढ्नेछन् वा कृष्णभावनामा आबद्ध श्रीकृष्णका आधिकारिक प्रतिनिधिहरूका सम्पर्कमा आउनेछन्।

यदि आर्थिक विकास र भौतिक सुविधाले मनुष्यको पारिवारिक, सामाजिक तथा राष्ट्रिय र अन्तर्राष्ट्रिय उन्मादसम्बन्धी शोकलाई हटाउन सक्ने भए अर्जुनले स्वर्गमा देवताले राज्य गरेजस्तै पृथ्वीमा अद्वितीय साम्राज्य पाए पनि मेरो शोक हट्न सक्दैन भन्ने थिएनन्। त्यसैले अर्जुन कृष्णभावनाको आश्रय लिन पुगे। शान्ति र समन्वयका लागि यही नै उपयुक्त बाटो हो। आर्थिक विकास वा संसारमाथिको प्रभुत्व प्राकृतिक प्रलयद्वारा कुनै पनि समय नष्ट हुन सक्दछ। मानिसले चन्द्रलोकजस्ता उच्च लोकहरूमा पुग्ने जुन प्रयास अहिले गरिरहेको छ, त्यो पनि एकै झट्कामा समाप्त हुन सक्दछ। *भगवद्गीतामा* यस कुराको पुष्टि गरिएको छ—"**क्षीणे पुण्ये मर्त्यलोकं विशन्ति।**" जब पवित्र कर्मको फल समाप्त हुन्छ अनि मानिस सुखको शिखरबाट जीवनको निम्न स्तरमा झर्दछ। संसारका ठुलाठुला राजनेताहरू यसै गरी पतित भएका छन्। यस्ता पतनहरू अझ बढी शोकका कारण बन्दछन्। त्यसैले यदि हामी सधैँका लागि शोकबाट मुक्त हुन चाहने भने हामीले पनि अर्जुनले जस्तै भगवान् श्रीकृष्णको शरण लिनुपर्दछ। अतः यहाँ अर्जुनले आफ्ना समस्याको वास्तविक समाधानका लागि भगवान् श्रीकृष्णसँग अनुरोध गरे। कृष्णभावनाको मार्ग वा विधि पनि यही नै हो।

सञ्जय उवाच

**एवमुक्त्वा हृषीकेशं गुडाकेशः परन्तपः ।**
**न योत्स्य इति गोविन्दमुक्त्वा तूष्णीं बभूव ह ॥ ९ ॥**

**सञ्जय उवाच** — सञ्जयले भने; **एवम्** — यस प्रकार; **उक्त्वा** — भनेर; **हृषीकेशम्** — इन्द्रियका स्वामी कृष्णलाई; **गुडाकेश** — अज्ञानलाई दमन गर्ने अर्जुनले; **परन्तप** — शत्रुहरूको दमन गर्ने; **नयोत्स्य** — लडाइँ गर्दिनँ; **इति** — यस प्रकार; **गोविन्दम्** — इन्द्रियहरूलाई आनन्द प्रदान गर्ने श्रीकृष्णसँग; **उक्त्वा** — भनेर; **तूष्णीम्** — चुपचाप; **बभूव** — भए; **ह** — निश्चय नै।

**सञ्जयले भने — यति भनेपछि शत्रुहरूलाई दमन गर्ने अर्जुनले भगवान् श्रीकृष्णसँग "गोविन्द! म लडाइँ गर्दिनँ" भनेर चुप लागेर बसे।**

**तात्पर्य :** अर्जुन युद्ध गर्न गइरहेका छैनन्, बरु युद्धभूमि परित्याग गरेर भिक्षावृत्ति अँगाल्न लागिरहेका छन् भन्ने कुराको जानकारी पाएर धृतराष्ट्रलाई निकै प्रसन्नताको अनुभव भएको हुनु पर्दछ। तर, सञ्जयले अर्जुन परन्तप हुन्, उनी शत्रुहरूलाई मार्न निपुण छन् भन्ने कुरा गरिदिएर उनलाई फेरि निराश बनाइदिए। अर्जुन केही समयका लागि पारिवारिक स्नेहका कारणले उत्पन्न शोकबाट अभिभूत भए पनि उनी शिष्य बनेर परमगुरु भगवान् श्रीकृष्णका शरणमा परेका छन्। यसले के देखाउँछ, उनी पारिवारिक स्नेहबाट उत्पन्न शोकबाट छिट्टै नै मुक्त हुन्छन् र आत्मसाक्षात्कारको पूर्ण ज्ञान वा कृष्णभावनाबाट प्रदीप्त भएर अवश्य लडाइँ गर्नेछन्। यसरी भगवान् श्रीकृष्णबाट शिक्षित भएर अन्त्यमा अर्जुनले लडाइँ गर्नेछन् भन्ने कुराले धृतराष्ट्रको खुशियासमाप्त हुनेछ।

**तमुवाच हृषीकेशः प्रहसन्निव भारत ।**
**सेनयोरुभयोर्मध्ये विषीदन्तमिदं वचः ॥ १० ॥**

**तम्** — उसलाई; **उवाच** — भने; **हृषीकेशः** — इन्द्रियहरूका स्वामी कृष्णले; **प्रहसन्** — हाँस्दै; **इव** — जस्तै; **भारत** — हे भरतवंशी धृतराष्ट्र; **सेनयोः** — सेनाहरूको; **उभयोः** — दुवै पक्षका; **मध्ये** — बीचमा; **विषीदन्तम्** — शोकमग्न भएका; **इदम्** — यी (निम्नलिखित); **वचः** — शब्दहरू।

**हे भरतवंशी! त्यस समय दुवैतर्फका सैनिकहरूका बीचमा शोकमग्न भएका अर्जुनलाई भगवान् श्रीकृष्णले हाँस्दै यी शब्दहरू भन्नुभयो।**

**तात्पर्य :** दुई घनिष्ठ मित्रहरू हृषीकेश र गुडाकेशका बीचमा वार्तालाप भइरहेको थियो। मित्रका हैसियतले ती दुवै समान स्तरमा थिए तर ती दुईमा एकजना स्वेच्छाले अर्को मित्रको शिष्य बन्नपुगे। एउटा साथी शिष्य बन्नलागेको देखेर भगवान् श्रीकृष्ण मुस्कुराउनुभयो। श्रीकृष्ण प्रत्येकका स्वामी हुनुहुन्छ त्यसैले उहाँको पद सबैभन्दा माथि छ तापनि उहाँ आफ्ना भक्तहरूको चाहनाअनुसार कसैको साथी, कसैको छोरा र कसैको प्रेमी बनिदिनु हुन्छ। तर, जब उहाँलाई

गुरुका रूपमा स्वीकार गरियो, उहाँले पनि तुरुन्तै गुरुको भूमिका निर्वाह गर्दै आवश्यकता अनुसार शिष्यसँग गम्भीरतापूर्वक कुरा गर्न सुरु गर्नुभयो। लाग्दछ, गुरु-शिष्य बीचको यो वार्तालाप दुवै पक्षका सैनिकहरूका बीचमा खुल्ला रूपले भएको थियो त्यसैले यसबाट सबै लाभान्वित भए। त्यसैले भन्न सकिन्छ यो *भगवद्गीताको* संवाद कुनै एक व्यक्ति, समाज र जातिविशेषका लागि गरिएको नभएर सबैका लागि गरिएको हो। अतः शत्रु होस् वा मित्र सबैलाई समान रूपले यो गीता संवाद सुन्ने अधिकार छ।

श्रीभगवानुवाच

**अशोच्यानन्वशोचस्त्वं प्रज्ञावादाँश्च भाषसे ।**
**गतासूनगतासूँश्च नानुशोचन्ति पण्डिताः ॥ ११॥**

**श्रीभगवानुवाच** — भगवान्ले भन्नुभयो; **अशोच्यान्** — शोक गर्नयोग्य नभएकालाई; **अन्वशोचः** — तिमी शोक गर्दैछौ; **त्वम्** — तिमी; **प्रज्ञावादान्** — पण्डित वा ज्ञानीहरूका जस्ता कुराहरू; **च** — पनि; **भाषसे** — भन्दछौ; **गत** — गएको; **असून्** — प्राण; **अगत** — नगएको; **असून** — प्राण; **च** — पनि; **न अनुशोचन्ति** — शोक गर्दैनन्; **पण्डिताः** — विद्वान्हरू।

**भगवान्ले भन्नुभयो — तिमी कुरा विद्वान्का जस्ता गर्छौ तर जसका लागि शोक गर्नु आवश्यक छैन त्यसैका लागि शोक गरिरहेछौ। पण्डितहरू न जिउँदाका लागि शोक गर्दछन् न मरेकाका लागि नै शोक गर्दछन्।**

**तात्पर्य :** भगवान्ले तुरुन्तै गुरुको स्थान ग्रहण गर्नुभयो र अप्रत्यक्ष रूपले आफ्नो शिष्यलाई मूर्ख भन्दै झपार्नुभयो। भगवान्ले भन्नुभयो — तिमीले विद्वान्को जस्तो कुरा गरिरहेका छौ तर जो विद्वान् छ त्यसले शरीर के हो र आत्मा के हो भन्ने कुरा जानेको हुन्छ र शरीरको जीवित वा मृत कुनै अवस्थाका लागि शोक गर्दैन भन्ने कुरा बुझेका छैनौ। ज्ञानको अर्थ पदार्थ र आत्मा दुवैलाई जान्नु हो र यी दुवै कुराका नियन्त्रकलाई चिन्नु हो। यो कुरा आगामी अध्यायहरूमा स्पष्ट हुँदैजानेछ। राजनीति र समाजनीतिभन्दा बढ्ता महत्त्व धर्मनीतिलाई दिनु पर्दछ भन्ने तर्क अर्जुनले बुझेका छन् तर पदार्थ, आत्मा तथा परमेश्वरको ज्ञानलाई धर्मनीतिलाई भन्दा पनि बढी महत्त्व दिनु पर्दछ भन्ने कुरा उनले बुझेका छैनन्। यस किसिमको ज्ञानको अभाव भएको हुनाले उनले आफूलाई विद्वान् भएजस्तो देखाउन हुँदैनथ्यो। उनी धेरै ठुला ज्ञानी थिएनन्। त्यसैले उनले जुन कुराका लागि शोक नगर्नुपर्ने हो त्यसका लागि पनि शोक गरे। यो शरीर जन्मिन्छ र आज वा भोलि निश्चित रूपले यसको विनाश पनि हुन्छ। अतः शरीर आत्मा

जत्तिको महत्त्वपूर्ण वस्तु होइन। जसले यो कुरा बुझेको छ त्यो यथार्थमा विद्वान् हो र त्यस्तो विद्वान्का लागि भौतिक शरीरको अवस्थाका बारेमा चिन्तित भएर शोक गर्नुपर्ने कुनै कारण छैन।

**न त्वेवाहं जातु नासं न त्वं नेमे जनाधिपाः ।**
**न चैव न भविष्यामः सर्वे वयमतः परम् ॥ १२ ॥**

**न** — होइन; **तु** — तर; **एव** — निश्चय नै; **अहम्** — म; **जातु** — कुनै समयमा; **न आसम्** — थिइन; **न** — न त; **त्वम्** — तिमी; **न** — न त; **इमे** — यी; **जनाधिपा** — राजाहरू; **न** — होइन; **च** — पनि; **एव** — निश्चय नै; **न भविष्यामः** — हुनेछैनौं; **सर्वे वयम्** — हामी सबै; **अतःपरम्** — यसपछि।

**योभन्दा अघि पनि म नभएको, तिमी नभएको र यी राजाहरू नभएको कुनै समय थिएन र पछि भविष्यमा पनि हामी सबैको अस्तित्व नभएको कुनै समय हुनेछैन।**

**तात्पर्य :** वेद, कठोपनिषद् र श्वेताश्वतर उपनिषद्मा पनि भनिएको छ— जुन भगवान् असङ्ख्य जीवहरूलाई तिनीहरूको कर्म र कर्मफलअनुसार विभिन्न परिस्थितिमा पालन गर्नु हुन्छ, उनै भगवान् अंश रूपमा हरेक जीवात्माका हृदयमा पनि निवास गर्नु हुन्छ। जसले उही परमेश्वरलाई भित्र पनि र बाहिर पनि समान रूपले देख्न सक्दछ तिनै सन्तपुरुषहरूले वास्तविक पूर्ण र शाश्वत शान्ति प्राप्त गर्न सक्दछन्।

*नित्योनित्यानां चेतनश्चेतनानाम् एको बहूनां यो विदधाति कामान् ।*
*तमात्मस्थं येऽनुपश्यन्ति धीरास्तेषां शान्तिः शास्वती नेतरेषाम् ॥*

(*कठोपनिषद्* २.२.१३)

जुन वैदिक ज्ञान अर्जुनलाई दिइयो, त्यही ज्ञान संसारका सबै व्यक्तिहरूलाई दिइयो, यथार्थमा आफूसँग ज्ञानको भण्डार साह्रै कम हुने व्यक्तिले आफूलाई ठुलो बुद्धिमान ठान्ने गर्दछन्। भगवान्ले स्पष्टसँग भन्नुभयो— उहाँ स्वयम्, अर्जुन र त्यस युद्धभूमिमा जम्मा भएका सबै राजाहरू शाश्वत जीव हुन् र भगवान् ती जीवहरूका मुक्त र बद्ध दुवै अवस्थाका नित्य पालनकर्ता हुनुहुन्छ। भगवान् परमपुरुष हुनुहुन्छ र अर्जुन उहाँका नित्य सखा हुन्। साथै त्यहाँ एकत्र भएका राजाहरू सबै शाश्वत पुरुषवैयक्तिक, हुन्। भूत कालमा पनि उनीहरूको स्वतन्त्र अस्तित्व थियो र अब पनि उनीहरूको स्वतन्त्र अस्तित्व रहिरहने छ। विगतमा पनि उनीहरूको पृथक अस्तित्व थियो र त्यो पृथकता निर्बाध रूपले भविष्यमा पनि रहिरहने छ। त्यसैले कसैका लागि पनि शोक गर्नुपर्ने कुनै कारण छैन।

मुक्तिपछि आत्मा माया वा भ्रमको आवरणबाट अलग हुन्छ र निराकार ब्रह्ममा विलीन हुन्छ अनि उसको पृथक अस्तित्व नै लोप हुन्छ भन्ने मायावादी सिद्धान्तलाई परमआधिकारिक व्यक्तित्व भगवान् श्रीकृष्णले यहाँ समर्थन गर्नुभएको छैन। बद्ध अवस्थामा मात्र हामी पृथकताको चिन्तन गर्छौं भन्ने सिद्धान्तको समर्थन पनि यहाँ भएको छैन। भगवान् श्रीकृष्णले यहाँ स्पष्टसँग भन्नुभएको छ—भविष्यमा पनि आत्मा र परमात्माको पृथकता यथावत रूपमा निरन्तर रहिरहने छ। उपनिषद्हरूमा पनि यस कुराको पुष्टि गरिएको छ। श्रीकृष्णको यो भनाई प्रामाणिक छ, किनभने उहाँ मायाको विषय हुन सक्नुहुन्न। यदि यो पृथकता (द्वैत) सत्य नहुने भए भविष्यका लागि समेत भगवान् श्रीकृष्णले यति जोड दिनुहुन्नथ्यो। श्रीकृष्णले भन्नुभएको पृथकता आध्यात्मिक नभएर भौतिक हो भन्ने तर्क मायावादीहरूले गर्न सक्दछन्। यदि पृथकता भौतिक नै हो भन्ने तर्क स्वीकार गर्ने भए पनि मानिसले भगवान् श्रीकृष्णको पृथक व्यक्तित्वको पहिचान कसरी गर्न सक्दछ? भगवान् श्रीकृष्ण भूत कालमा पनि आफ्नो सत्ता पृथक रहेको र भविष्यमा पनि आफ्नो सत्ता पृथकै रहने कुरा भन्नुभएको छ। उहाँले कैयौँ तरिकाबाट आफ्नो पृथक सत्ताको पुष्टि गर्नुभएको छ र निराकार ब्रह्म पनि उहाँकै अधीनमा रहेको घोषणा गर्नुभएको छ। श्रीकृष्णले सधैँ आफ्नो आध्यात्मिक पृथक सत्तालाई कायमै राख्नुभएको छ। यदि भगवान् श्रीकृष्णलाई सामान्य चेतना भएको एउटा सामान्य बद्धजीव (आत्मा) मान्ने भए प्रामाणिक शास्त्रका रूपमा उहाँको *भगवद्गीताको* कुनै मूल्य रहने छैन। सामान्य मानिसमा चार किसिमका मानवीय दोषहरू हुने हुनाले उसले सुन्नयोग्य ज्ञान सिकाउन सक्दैन तर गीता यस्ता साहित्यहरूभन्दा धेरै माथि छ। कुनै सांसारिक किताबसँग *भगवद्गीताको* तुलना गर्न सकिँदैन। भगवान् श्रीकृष्णलाई एउटा सामान्य मानिस सम्झनासाथ उहाँको गीताको सारा महत्त्व समाप्त हुन्छ। मायावादीहरू तर्क गर्दछन्, यो श्लोकमा जुन द्वैतको उल्लेख छ, त्यो परम्परागत हो र शरीरका लागि भनिएको हो। तर, यस्तो शरीरसम्बन्धी धारणालाई योभन्दा पहिलाको श्लोकमै निन्दा गरिसकिएको छ। प्राणीको शारिरीक अवधारणाको बुद्धि सम्बन्धी धारणाको निन्दा गरिसकेपछि भगवान् श्रीकृष्णले फेरि त्यही शरीरमाथिको परम्परागत प्रस्ताव दोहोर्‍याउन कसरी सम्भव थियो? अतः यो पृथकताको उल्लेख आध्यात्मिक क्षेत्रकै लागि गरिएको हो र रामानुज तथा अन्य महान् आचार्यहरूले पनि यो कुराको पुष्टि गर्नु भएको छ। केवल भगवान्‌का भक्तहरूले मात्रै यो पृथक आध्यात्मिक सत्तालाई बुझ्न सक्दछन् भन्ने स्पष्ट उल्लेख *भगवद्गीतामा* धेरै ठाउँमा गरिएको छ। भगवान् श्रीकृष्णको ईर्ष्या गर्नेहरूको यस महान् साहित्यमा आधिकारिक पहुँच

हुनै सक्दैन। गीताको उपदेशमा अभक्तहरूको पहुँच माहुरीले महको बन्द बोतल चाटेजस्तो हुन्छ। बोतल नखोली कसैले पनि महको स्वाद लिन सक्दैन। ठीक त्यसै गरी केवल भक्तहरूले मात्रै यो *भगवद्गीताको* रहस्य बुझ्न सक्दछन्, अरूले यसको स्वाद लिन सक्दैनन्। यो कुराको उल्लेख यसै पुस्तकको चौथो अध्यायमा गरिएको छ। भगवान्को सर्वव्यापक अस्तित्वको विरोध गर्नेहरूले पनि गीताको रहस्य बुझ्न सक्दैनन्। त्यसैले मायावादीहरूद्वारा गरिएको गीताको व्याख्या सम्पूर्ण सत्यकै सबभन्दा भ्रमपूर्ण प्रस्तुतीकरण हो। चैतन्य महाप्रभुले हामीलाई मायावादीहरूद्वारा गरिएको भाष्य पढ्न निषेध गर्नुभएको छ र चेतावनी दिनुभएको छ— जसले मायावादी दर्शनको व्याख्यालाई ग्रहण गर्दछ, त्यसले गीताको सही रहस्यलाई बुझ्ने सम्पूर्ण शक्ति गुमाउँदछ। यदि यो पृथकताले अनुभवगम्य संसारको बोध गराउने भए भगवान्का उपदेशहरूको केही आवश्यकता नै रहेन। आत्मा र परमात्माको पृथकता वा द्वैतभाव नै शाश्वत सत्य हो। माथि भनिएअनुसार वेदहरूद्वारा यसको पुष्टि हुन्छ।

**देहिनोऽस्मिन् यथा देहे कौमारं यौवनं जरा ।**
**तथा देहान्तरप्राप्तिर्धीरस्तत्र न मुह्यति ॥ १३ ॥**

**देहिनः** — शरीर धारण गर्नेहरूको; **अस्मिन्** — यसमा; **यथा** — जसरी; **देहे** — शरीरमा; **कौमारम्** — बाल्यावस्था (कुमारावस्था); **यौवनम्** — युवावस्था; **जरा** — वृद्धावस्था; **तथा** — त्यसै गरी; **देहान्तर** — शरीर परिवर्तन; **प्राप्तिः** — उपलब्धि; **धीर** — धीर पुरुष; **तत्र** — त्यस्ता कुरामा; **न मुह्यति** — मोहित हुँदैनन्।

**जसरी यो शरीरधारण गर्ने आत्मा निरन्तर बाल्यावस्थाबाट युवावस्थामा र युवावस्थाबाट वृद्धावस्थातिर परिवर्तन भइरहन्छ, त्यसै गरी यो आत्मा एउटा शरीरको मृत्युपछि अर्को शरीरमा स्थानान्तरित हुने गर्दछ। यस किसिमको परिवर्तनलाई देखेर धीर पुरुषहरू मोहित हुँदैनन्।**

**तात्पर्य :** प्रत्येक प्राणी एउटा पृथक आत्मा हो। प्रत्येक प्राणीले क्षणक्षणमा आफ्नो शरीर परिवर्तन गरिरहेका हुन्छन्। ती कहिले बालक बन्दछन्, कहिले युवा हुन्छन् र कहिले बूढा हुन्छन्। तर, त्यो बालक युवा र वृद्धमा आत्मा एउटै छ, त्यसमा कुनै परिवर्तन हुँदैन। यो व्यष्टि आत्माले एउटा शरीरको मृत्युपछि अर्को शरीर परिवर्तन गर्दछ। यसरी आगामी जन्ममा त्यो भौतिक होस् वा आध्यात्मिक, अर्को शरीर निश्चित नै पाइने भएपछि अर्जुनले भीष्मका लागि होस्, द्रोणाचार्यका लागि होस्, शोक गर्नुपर्ने कुनै कारण देखिँदैन। बरु अर्जुन उहाँहरूले बूढो शरीर छोडेर नयाँ शरीर र नयाँ जीवन, नयाँ शक्ति प्राप्त

गर्न लाग्नुभएकोमा खुसी हुनपर्ने हो। यसरी शरीर परिवर्तन हुँदा जीवनमा गरिएका कर्मअनुसार नाना प्रकारका सुखभोग र दुःखभोगको लेखाजोखा हुन्छ। भीष्म र द्रोण महान् आत्मा हुन्, त्यसैले उनीहरूले आगामी जन्ममा अवश्य पनि आध्यात्मिक शरीर प्राप्त गर्नेछन् वा त्यो नभए कम्तीमा पनि सांसारिक सुखभन्दा श्रेष्ठ स्वर्गीय सुखभोगका लागि स्वर्गीय शरीर प्राप्त गर्ने नै छन्। यस अर्थमा पनि उनीहरूका लागि शोक गर्नुपर्ने कुनै कारण छैन।

जसलाई आत्मा, परमात्मा र भौतिक तथा आध्यात्मिक प्रकृतिको पूर्ण ज्ञान छ त्यसलाई धीर भनिन्छ। यस्ता मानिसहरू शरीरको परिवर्तनबाट मोहित हुँदैनन्। खण्ड खण्ड भएर आत्मा टुक्रिन सक्दैन भन्ने आधारमा आत्मा एउटै हो भन्ने मायावादी सिद्धान्त मान्य हुन सक्दैन। यदि त्यसलाई स्वीकार गर्ने भए विभिन्न व्यष्टि आत्माको विभाजनले परमात्मालाई पनि विभाज्य र परिवर्तनीय बनाउँछ जुन कुरा परमात्मा अपरिवर्तशील छ भन्ने सिद्धान्तको विरुद्ध हुनजान्छ। गीतामा पुष्टि गरिएजस्तै परमात्माको विखण्डित अंश पनि सनातन छ वा नित्य अस्तित्ववान् छ र त्यसलाई क्षर भनिन्छ, किनभने तिनीहरूमा भौतिक प्रकृतितिर अधःपतन हुने प्रवृत्ति हुन्छ। यी विखण्डित अंशहरू नित्यनिरन्तर विखण्डित अवस्थामै रहन्छन्। मुक्ति प्राप्त गरिसकेपछि पनि व्यष्टि आत्माहरू विखण्डित रूपमै विद्यमान रहन्छन्। तर, एक पटक मुक्त भइसकेपछि उक्त व्यष्टि आत्मा परमात्माका साथमा सच्चिदानन्दमय रूपमा रहन पाउँदछ। परमात्मा नामले जानिने र हरेक शरीरमा उपस्थित रहने परमआत्मामाथि प्रतिविम्बवादको सिद्धान्त लागू हुन सक्दछ। परमात्मा व्यष्टि प्राणीहरूभन्दा भिन्न हुनुहुन्छ। पानीमा आकाशको प्रतिविम्ब पर्दा त्यहाँ सूर्य, चन्द्र तथा ताराहरूको प्रतिविम्ब पनि देखिन्छ। ताराहरूको तुलना व्यष्टि जीवात्मासँग र सूर्य तथा चन्द्रमाको तुलना परमात्मासँग गर्न सकिन्छ। यहाँ व्यष्टि तथा खण्ड आत्माको प्रतिनिधित्व अर्जुनद्वारा भएको छ र परमात्माको प्रतिनिधित्व भगवान् श्रीकृष्णद्वारा भएको छ। श्रीकृष्ण र अर्जुन समान स्तरका हुनुहुन्न यो कुरा चौथो अध्यायको सुरुमै स्पष्ट हुनेछ। यदि अर्जुन श्रीकृष्णकै समान स्तरका भएको भए र भगवान् श्रीकृष्ण अर्जुनभन्दा श्रेष्ठ नभएको भए उहाँहरू बीचको शिक्षक र विद्यार्थीको सम्बन्धको कुनै अर्थ रहने थिएन। यदि उहाँहरू दुवैजना मायाबाट मोहित हुनेभए एकजना शिक्षक र अर्को शिक्षार्थी बन्नुपर्ने कुनै आवश्यकता नै थिएन। मायाको बन्धनमा बाँधिएको व्यक्ति आधिकारिक शिक्षक हुन नसक्ने भएकाले उसको शिक्षा पनि अर्थहीन हुन्छ। यस्तो परिस्थितिमा के मान्नु पर्दछ भने, भगवान् श्रीकृष्ण परमेश्वर हुनुहुन्छ। उहाँ मायाद्वारा विस्मृत हुने अर्जुनजस्ता जीवात्माको स्तरभन्दा माथि हुनुहुन्छ, श्रेष्ठ हुनुहुन्छ।

**मात्रास्पर्शास्तु कौन्तेय शीतोष्णसुखदुःखदाः ।**
**आगमापायिनोऽनित्यास्तांस्तितिक्षस्व भारत ॥ १४ ॥**

**मात्रास्पर्शाः** — इन्द्रिय र विषयका सम्बन्धहरू; **तु** — त (केवल); **कौन्तेय** — हे कुन्तीपुत्र; **शीतः** — जाडो; **उष्ण** — गर्मी; **सुख** — सुख; **दुःख** — दुःख; **दा** — दिने; **आगम** — प्रकट हुनु र; **अपायिनः** — नदेखिनु; **अनित्याः** — अनित्य; **तान्** — ती सबैको; **तितिक्षस्व** — सहने कोशिश गर; **भारत** — हे भरतवंशी अर्जुन।

**हे कुन्तीपुत्र! दुःख र सुख भन्ने कुरा कालक्रममा आउने र जाने जाडो र गर्मी ऋतुजस्ता अस्थायी विषय हुन् र यी इन्द्रियबोधबाट उत्पन्न हुन्छन्। अतः हे भरतवंशी अर्जुन! यस्ता कुरालाई मानिसले विचलित नभई सहन गर्न सिक्नु पर्दछ।**

**तात्पर्य :** राम्रोसँग आफ्नो कर्तव्य निर्वाह गर्ने क्रममा अस्थायी रूपले आउने र जाने सुख र दुःखलाई मानिसले सहन गर्न सिक्नु पर्दछ। वैदिक निर्देशनअनुसार मानिसले माघ महिनामा पनि प्रत्येक बिहान स्नान गर्नै पर्दछ। त्यस समय धेरै जाडो हुन्छ। तैपनि धार्मिक नियमहरू पालन गर्ने व्यक्ति नुहाउन हिच्किचाउँदैन। यसै गरी ग्रीष्म ऋतुका सबभन्दा गर्मी महिना बैशाख जेठका दिनहरूमा पनि गृहिणीहरू भान्सामा खाना पकाउन हिच्किचाउँदैनन्। जलवायुसम्बन्धी असुविधाहरू रहँदारहँदै पनि मानिसले आफ्नो कर्तव्यको पालन गर्नु पर्दछ। त्यसरी नै, लडाइँ गर्नु क्षत्रियहरूको धर्म नै हो त्यसैले एउटा क्षत्रियले मित्रहरूसँग तथा सम्बन्धीहरूसँग लड्नु पर्‍यो भनेर आफ्नो निर्धारित कर्तव्यबाट विचलित हुनु हुँदैन। ज्ञानका स्तरसम्म उठ्नका लागि मानिसले धार्मिक नियमहरूका निर्धारित विधिविधानको अनुसरण गर्नै पर्दछ किनभने, ज्ञान र भक्तिद्वारा मात्रै मानिसले आफूलाई मायाको बन्धनबाट मुक्त गर्न सक्दछ।

यहाँ अर्जुनलाई दुईवटा भिन्दाभिन्दै नामले सम्बोधन गरिएको छ जुन अर्थपूर्ण छ। "कौन्तेय" भनेर सम्बोधन गर्नाले उनको मातृकुलतर्फको महान् रक्तसम्बन्ध जाहेर हुन्छ र "भारत" भनेर सम्बोधन गर्दा उनको पितृकुलतर्फको महानता प्रकट हुन्छ। दुवैतर्फका महानताको निर्वाह उनले गर्नु छ। यो महान् पुर्ख्यौली उत्तराधिकारले राम्रोसँग कर्तव्यपालन गर्ने उत्तरदायित्व उनीमाथि आएको छ, त्यसैले अर्जुन युद्धबाट विमुख हुन सक्दैनन्।

**यं हि न व्यथयन्त्येते पुरुषं पुरुषर्षभ ।**
**समदुःखसुखं धीरं सोऽमृतत्वाय कल्पते ॥ १५ ॥**

**यम्** — जसलाई; **हि** — निश्चय नै; **न व्यथयन्ति** — दुःखी गराउन सक्दैनन्; **एते** — यी सबै; **पुरुषम्** — पुरुषलाई; **पुरुषर्षभ** — हे पुरुषहरूमा श्रेष्ठ अर्जुन; **सम** — समान भएको; **दुःखम्** — दुःखमा र; **सुखम्** — सुखमा; **धीरम्** — धीर पुरुष; **स** — त्यो; **अमृतत्वाय** — मुक्तिका लागि; **कल्पते** — योग्य मानिन्छ।

**हे पुरुष श्रेष्ठ अर्जुन! जुन व्यक्ति सुख र दुःखबाट विचलित हुँदैन र दुवै अवस्थामा समान रहन्छ त्यो व्यक्ति निश्चय नै मुक्ति पाउनयोग्य हुन्छ।**

**तात्पर्य :** जो व्यक्ति अध्यात्मसाक्षात्कारको उच्च अवस्था प्राप्त गर्ने प्रतिज्ञामा दृढ छ र जसले सुख र दुःखको प्रहारलाई समान रूपले सहन गर्न सक्दछ निश्चय नै त्यो व्यक्ति मुक्ति पाउनयोग्य हुन्छ। वर्णाश्रम पद्धति अनुसार जीवनको चौथो अवस्था अर्थात् संन्यास आश्रम कष्टकर हुन्छ। तर, जसले आफ्नो जीवनलाई परिपूर्ण बनाउन चाहन्छ उसले यी सबै कठिनाइहरू हुँदाहुँदै पनि अवश्य नै संन्यास ग्रहण गर्नेछ। यी कठिनाइहरू विशेष गरी पारिवारिक सम्बन्धको विच्छेदनबाट वा पत्नी-छोराछोरीहरूसँग सम्बन्ध विच्छेद गर्दा उत्पन्न हुन्छन्। तर, यस्ता कठिनाइहरू सहन समर्थ हुने व्यक्तिको आध्यात्मिक अनुभूतिको बाटो अवश्य नै निष्कण्टक हुन्छ। आफ्ना स्वजनसँग वा अन्य प्रियजनसँग युद्ध गर्न अति नै कठिन हुन्छ तैपनि यहाँ अर्जुनलाई आफ्नो क्षत्रिय धर्मको पालन गर्ने कार्यमा दृढ रहने सल्लाह दिइएको छ। आफूमा पूर्ण आश्रित किशोरी पत्नी र वृद्धा आमाको रेखदेख गर्ने जिम्मेवारी हुँदाहुँदै पनि भगवान् चैतन्य महाप्रभुले २४ वर्षको कलिलो उमेरमा संन्यास लिनुभयो। आफ्नो एउटा उच्चतम आदर्श स्थापित गर्नका लागि उहाँले संन्यास लिनुभएको थियो र उहाँ आफ्नो कर्तव्य पालनमा सधैँ दृढ रहनुभयो। यस सांसारिक भव-बन्धनबाट मुक्ति पाउने बाटो पनि यही हो।

**नासतो विद्यते भावो नाभावो विद्यते सतः।**
**उभयोरपि दृष्टोऽन्तस्त्वनयोस्तत्त्वदर्शिभिः ॥ १६ ॥**

**न** — न त; **असतः** — असत् वस्तुको; **विद्यते** — छ; **भाव** — स्थायित्व; **न** — न त; **अभावः** — अभाव; **विद्यते** — छ; **सतः** — सत्य वस्तुको; **उभयोः** — दुवैको; **अपि** — पनि; **दृष्टः** — देखिएको; **अन्तः** — निष्कर्ष; **तु** — अवश्य नै; **अनयोः** — यिनीहरूको; **तत्त्वदर्शिभिः** — सत्यलाई देख्नेहरूद्वारा।

**असत् वस्तु ( भौतिक शरीर )को कुनै चिरस्थायित्व छैन र सत् वस्तुको ( आत्माको ) कुनै परिवर्तन नै हुँदैन। आत्मा र शरीर यी दुवैका प्रकृतिको अध्ययन गरेर तत्त्वदर्शीहरूले यस्तो निष्कर्ष निकालेका छन्।**

**तात्पर्य :** परिवर्तनशील शरीरको कुनै स्थायित्व छैन। विभिन्न कोषहरूको क्रिया र प्रतिक्रियाद्वारा क्षणक्षणमा शरीर परिवर्तित भइरहन्छ भन्ने कुरा आधुनिक चिकित्सा विज्ञानले पनि स्वीकार गरेको छ। यसरी नै शरीर बढ्छ र वृद्ध हुन्छ। तर, शरीर र मन निरन्तर परिवर्तित भइरहे पनि आत्मा स्थायी रूपले जस्ताको तस्तै रहिरहन्छ। पदार्थ र आत्मामा यही भिन्नता छ। स्वभावैले शरीर नित्य परिवर्तनशील छ र आत्मा शाश्वत छ। साकारवादी वा निराकारवादी दुवै प्रकारका तत्त्वदर्शीहरूले यही निष्कर्षको स्थापना गरेका छन्। विष्णु पुराण (२.१२.३८) मा भनिएको छ— भगवान् विष्णु र उहाँको धाम स्वयम्प्रकाशित छ (**ज्योतींषि विष्णुर्भुवनानि विष्णुः**) सत् र असत् यी शब्दले नै आत्मा र भौतिक वस्तुको बोध गराउँछन्। सम्पूर्ण तत्त्वदर्शीहरूको यही मान्यता छ।

अज्ञानका प्रभावले भ्रमित भएका जीवात्मालाई भगवान्ले उपदेश दिने काम यहीँबाट सुरु गर्नु हुन्छ। अज्ञानलाई हटाउनका लागि पूजनीय र पूजक वा सेव्य र सेवकबीचको शाश्वत सम्बन्धलाई पुनर्स्थापित गर्नु पर्दछ र अंश रूपमा रहेका जीव र भगवान्का बीचको अन्तरलाई बुझ्नु पर्दछ। आफ्नै आत्माको अध्ययनद्वारा मानिसले परमेश्वरको स्वभावलाई बुझ्न सक्दछ। आत्मा र परमात्माबीचको भिन्नता अंश र पूर्णबीचको सम्बन्धजस्तै हो भन्ने बुझ्नु पर्दछ। वेदान्तसूत्र तथा श्रीमद्भागवत्मा पनि भगवान्लाई सम्पूर्ण सृष्टिका मूल मानिएको छ। परा प्रकृति र अपरा प्रकृतिको क्रमद्वारा यस्तो उद्भव प्रक्रियाको अनुभव गर्न सकिन्छ। जीवात्माको सम्बन्ध परा प्रकृतिसँग हुन्छ। यो कुरा सातौँ अध्यायमा स्पष्ट हुनेछ। शक्ति र शक्तिमानमा भिन्नता छैन तापनि शक्तिमानलाई श्रेष्ठ र शक्तिलाई त्यसको अधीनस्थ मानिन्छ। अतः जसरी सेवक स्वामीका अधीनमा र शिष्य गुरुका अधीनमा रहन्छ, त्यसै गरी जीवात्माहरू सधैँ परमात्माका अधीनमा रहन्छन्। अज्ञानका प्रभावमा रहेर यस्तो स्वच्छ ज्ञान पाउन सम्भव छैन। त्यसैले यस्तो अज्ञानलाई हटाउन र जीवात्मालाई सधैँ प्रबुद्ध बनाउनका लागि भगवान्ले *भगवद्गीताको* उपदेश दिनुभएको हो।

**अविनाशि तु तद्विद्धि येन सर्वमिदं ततम् ।**
**विनाशमव्ययस्यास्य न कश्चित्कर्तुमर्हति ॥ १७ ॥**

**अविनाशि** — नाश नहुने; **तु** — तर; **तत्** — त्यो; **विद्धि** — जान; **येन** — जसबाट; **सर्वम्** — सबै शरीर; **इदम्** — यो; **ततम्** — व्याप्त; **विनाशम्** — विनाश; **अव्ययस्य** — अविनाशीको; **अस्य** — यसको; **न कश्चित्** — कोही पनि छैन; **कर्तुम्** — गर्न; **अर्हति** — समर्थ।

**जो सम्पूर्ण शरीरहरूमा व्याप्त छ त्यसैलाई तिमीले अविनाशी सम्झनु पर्दछ। त्यो अव्यय आत्मालाई कसैले पनि नष्ट गर्न सक्दैन।**

**तात्पर्य :** यस श्लोकले सम्पूर्ण शरीरमा फैलिएर रहेको आत्माको स्वभावलाई अझ स्पष्टसँग व्याख्या गरेको छ। सम्पूर्ण शरीरमा फैलिएर रहेको तत्त्व चैतन्य हो भन्ने सबैलाई थाहा छ। शरीरको कुनै अङ्गमा वा सम्पूर्ण शरीरमा हुने सुख र दु:खको अनुभूति सबैलाई हुन्छ। चेतनाको यो फैलावट मानिसको आफ्नै शरीरमा मात्र सीमित हुन्छ। एउटा शरीरको कष्ट र आनन्द अर्को शरीरलाई थाहा हुँदैन। अत: प्रत्येक शरीरमा आत्माको एक-एकवटा प्रतिरूप छ र आत्माको उपस्थितिको लक्षण व्यष्टि चेतनाको रूपमा देखा पर्दछ। यो आत्माको परिमाण वा आकार एउटा रौँको टुप्पाको दश हजार भागको एक भाग जति छ भन्ने उल्लेख पाइन्छ। श्वेताश्वतर उपनिषद (५.९) मा यस कुराको पुष्टि गर्दै भनिएको छ—

*बालाग्रशतभागस्य शतधा कल्पितस्य च।*
*भागो जीव: स विज्ञेय: स चानन्त्याय कल्पते॥*

एउटा रौँको टुप्पालाई सय भागमा बाँडेर फेरि प्रत्येक भागलाई सय खण्डमा टुक्र्याउँदा जत्रो भाग बाँकी रहन्छ, आत्माको आकार त्यत्रै छ। यसै गरी निम्नलिखित श्लोकमा पनि यही भनाइ पाइन्छ—

*केशाग्रशतभागस्य शतांश: सादृशात्मक:।*
*जीव: सूक्ष्मस्वरूपोऽयं संख्यातीतो हि चित्कण:॥*

आत्मारूपी परमाणुहरूका अनन्त कणहरू छन्, जसको आकार रौँको टुप्पाको दश हजार भागको एक भाग जत्रो छ।"

अत: आत्माको व्यष्टि अंश भनेको एउटा आध्यात्मिक परमाणु हो। यो परमाणु भौतिक परमाणुभन्दा पनि सानो छ र यस्ता परमाणुहरू असङ्ख्य छन्। यो अति नै सानो आत्मारूपी झिल्को नै भौतिक शरीरको मूल आधार हो। कुनै सक्रिय औषधिको प्रभाव सम्पूर्ण शरीरमा फैलिएजस्तै यस किसिमको आध्यात्मिक परमाणु वा आत्मारूपी कणको प्रभाव पनि सारा शरीरभरि फैलिन्छ। आत्मकणको यो विद्युतप्रवाह चेतनाको रूपमा सारा शरीरभरि अनुभव गर्न सकिन्छ। यही नै आत्माको अस्तित्त्वको प्रमाण हो। यो भौतिक शरीर चेतनाशून्य भएका अवस्थामा मुर्दा हुन्छ भन्ने कुरा सामान्यभन्दा सामान्य मानिसले पनि जान्दछ। यो चेतनालाई कुनै पनि भौतिक उपायले शरीरमा फेरि फर्काएर ल्याउन सकिँदैन। अत: यो चेतना तत्त्व कुनै भौतिक पदार्थको

संयोजनबाट होइन आत्मा भएका कारणले उपस्थित रहेको हो। मुण्डक उपनिषद्को ३.१.९ मा यो आणविक आत्माको अझ विवेचना गरिएको छ—

*एषोऽणुरात्मा चेतसा वेदितव्यो यस्मिन्प्राणः पञ्चधा संविवेश ।*
*प्राणैश्चित्तं सर्वमोतं प्रजानां यस्मिन् विशुद्धे विभवत्येष आत्मा ॥*

"आत्मा आकारमा परमाणुतुल्य छ र यसलाई परिपूर्ण बुद्धिले मात्र जान्न वा देख्न सकिन्छ। यो अणु आत्मा पाँच प्रकारका वायुहरू — प्राण, अपान, व्यान, समान र उदानमा तैरिरहेको हुन्छ। यो हृदयभित्र विद्यमान छ र शरीरधारण गरेको जीवात्माका सम्पूर्ण शरीरमा आफ्नो प्रभाव फैलाइरहेको छ। यी पाँच प्रकारका वायुहरूको कल्मषबाट शुद्ध भएपछि मात्र आत्माको आध्यात्मिक प्रभाव प्रदर्शित हुन्छ।"

विभिन्न किसिमका आसनहरूद्वारा पवित्र आत्मालाई घेरेर बसेका पाँच प्रकारका वायुहरूमाथि नियन्त्रण गर्ने विधि नियमहरू हठयोगले सिकाउँछ। यो योग कुनै भौतिक लाभका लागि नभएर भौतिक वातावरणका बन्धनबाट सूक्ष्म आत्मालाई मुक्त पार्नका लागि हो। अतः अणु आत्माको अवस्थालाई सबै वैदिक साहित्यहरूले स्वीकार गरेका छन् र सन्त पुरुषहरूले व्यावहारिक अनुभवद्वारा यसको प्रत्यक्ष अनुभूति पनि गरेका छन्। केवल ज्ञानी मानिसले मात्रै यो आणविक आत्मालाई सर्वव्यापी विष्णु तत्त्वका रूपमा सोच्न सक्दछन्।

अणु आत्माको प्रभाव सम्पूर्ण शरीरभरि फैलिन सक्दछ। मुण्डक उपनिषद् अनुसार यो अणु आत्मा हरेक जीवात्माका हृदयमा विद्यमान छ र यो अणु आत्माको परिमाण भौतिक वैज्ञानिकहरूको मूल्याङ्कनको क्षमताभन्दा पर रहेको हुनाले तिनीहरूमध्ये केहीले आत्मा छँदैछैन पनि भन्छन्। यो व्यष्टि अणु आत्मा निस्सन्देह परमात्माका साथ हरेकका हृदयमा अवस्थित छ, त्यसैले शारीरिक गतिविधिका सबै शक्तिहरू शरीरको यही स्थानबाट उत्पन्न भइरहन्छन्। फोक्सोबाट अक्सिजन लिएर जाने रक्तकणहरूले आत्माबाटै शक्तिसञ्चय गर्दछन्। आत्मा आफ्नो स्थितिबाट बाहिर निस्केपछि रक्त उत्पादन र विलयनको प्रक्रिया पनि स्वतः बन्द हुन्छ। औषधि विज्ञानले राता रक्तकणहरूको महत्त्वलाई स्वीकार गर्दछ तर शक्तिको स्रोत आत्मा हो भन्ने निश्चय गर्न सक्दैन। औषधिविज्ञानले शरीरका सम्पूर्ण शक्तिहरूको आधार हृदय नै हो भन्ने कुरा मान्दछ।

पूर्ण आत्माका यस्ता अणुकणहरूको तुलना सूर्यकिरणका अणु-कणसँग गर्न सकिन्छ। सूर्यकिरणमा असङ्ख्य प्रकाशवान् कणहरू हुन्छन्। यसै गरी परमेश्वरका खण्ड अंशहरू उहाँकै किरणका अणु-झिल्का हुन्

जसलाई पराशक्ति वा प्रभा भनिन्छ। अतः कसैले वैदिक ज्ञान अथवा भौतिक विज्ञानलाई अनुसरण गरोस्, उसले शरीरमा आत्माको अस्तित्वलाई अस्वीकार गर्न सक्दैन। आत्माको यस विज्ञानको स्पष्ट व्याख्या स्वयम् भगवान्ले *भगवद्गीतामा* गर्नुभएको छ।

**अन्तवन्त इमे देहा नित्यस्योक्ताः शरीरिणः।**
**अनाशिनोऽप्रमेयस्य तस्माद्युध्यस्व भारत ॥१८॥**

**अन्तवन्त** — नाशवान्; **इमे** — यी सबै; **देहा** — भौतिक शरीरहरू; **नित्यस्य** — नित्य रहने; **उक्ताः** — भनिएका छन्; **शरीरिणः** — शरीर धारण गर्ने आत्माका; **अनाशिनः** — कहिल्यै नाश नहुने; **अप्रमेयस्य** — अपरिमेय (नाप्न नसकिने); **तस्मात्** — त्यसैले; **युध्यस्व** — लडाइँ गर; **भारत** — हे भरतवंशी अर्जुन!

**अविनाशी, अपरिमेय र शाश्वत जीवात्माको भौतिक शरीर नाशवान् छ, त्यसैले हे भरतवंशी अर्जुन! तिमी युद्ध गर।**

**तात्पर्य :** भौतिक शरीर स्वभावैले नाशवान् छ। यो तुरून्तै पनि नाश हुन सक्दछ र सय वर्षपछि पनि नाश हुन सक्दछ। केवल समयको कुरा मात्रै हो। यसलाई अनन्त कालसम्म बचाइराख्न सम्भव छैन तर आत्मा अत्यन्त सूक्ष्म भएकाले यसलाई मार्न सकिँदैन र यसलाई शत्रुहरूले देख्नसम्म पनि सक्दैनन्। पहिलेका श्लोकहरूमा भनिएजस्तै यो आत्मा कति सानो छ र कसैले यसका आयामहरूलाई कसरी नाप्ने हो भन्ने कुरा सोच्न पनि सक्दैन। एकातिर जीवात्मालाई कसैले मार्न पनि नसक्ने र अर्कातिर उसको भौतिक शरीरलाई स्थायी रूपमा वा समयको कुनै निश्चित अवधिसम्म सुरक्षित राख्न पनि नसकिने हुनाले दुवै दृष्टिकोणबाट उसका लागि चिन्ता गर्नुपर्ने कुनै कारण देखिँदैन। पूर्ण आत्माको सूक्ष्म कणलाई आफ्नो कर्मअनुसार भौतिक शरीरको आवश्यकता पर्दछ। त्यसैले जीवात्माले धार्मिक कर्तव्यहरूको राम्रोसँग पालना गर्नु पर्दछ। वेदान्त सूत्रमा जीवात्मालाई प्रकाशका रूपमा चिनाइएको छ किनभने जीवात्मा उनै परमप्रकाशको सूक्ष्म अंश हो। जसरी सूर्यको प्रकाशले सारा ब्रह्माण्डको रक्षा गरेको छ त्यसै गरी आत्माको प्रकाशले यो भौतिक शरीरलाई बचाइरहेको छ। जब आत्मा यो भौतिक शरीरबाट बाहिर निस्कन्छ तब शरीर सड्न थाल्छ। त्यसैले भन्न सकिन्छ आत्मा नै यो शरीरको रक्षक हो। शरीर स्वयम्‌मा महत्त्वपूर्ण छैन त्यसैले भौतिक शरीरको चिन्ताले गर्दा धर्मको बलिदान नहोस् भन्ने उद्देश्यले नै यहाँ अर्जुनलाई लडाइँ गर्ने उपदेश दिइएको हो।

**य एनं वेत्ति हन्तारं यश्चैनं मन्यते हतम् ।**
**उभौ तौ न विजानीतो नायं हन्ति न हन्यते ॥ १९ ॥**

**य** — जो; **एनम्** — यसलाई; **वेत्ति** — जान्दछ; **हन्तारम्** — मार्ने; **यः** — जो; **च** — पनि; **एनम्** — यसलाई; **मन्यते** — मान्दछ; **हतम्** — मरेको; **उभौ** — दुवै; **तौ** — तिनीहरू; **न विजानीत** — जान्दैनन्; **न** — न त; **अयं** — यो; **हन्ति** — मर्छ; **न** — न त; **हन्यते** — मारिन्छ।

**जसले यो जीवात्मालाई मार्ने ठान्दछ र जसले यसलाई मर्नेवाला ठान्दछ ती दुवै अज्ञानी हुन्। यो आत्मा न मर्दछ न मारिन्छ।**

**तात्पर्य :** कुनै शरीरधारण गरेको जीवात्मा एउटा घातक हतियारबाट घाइते हुँदा उक्त शरीरभित्र रहेको जीवात्मा मरेको मानिँदैन। आत्मा साह्रै सानो छ। कुनै भौतिक हतियारले यसलाई मार्न सम्भव छैन। यो कुरा आगामी श्लोकहरूमा स्पष्ट हुनेछ। आफ्नै आध्यात्मिक स्वरूपका कारणले जीवात्मा मार्न नसकिने छ। जसलाई मरेको मानिन्छ र जसलाई मारिन्छ त्यो शरीर मात्र हो। यसको अर्थ शरीरलाई मार्न प्रोत्साहित गर्नु होइन। **"मा हिंस्यात् सर्वभूतानि"** अर्थात, कुनै पनि जीवात्मालाई नमार भन्ने वेदको उपदेश छ। जीवात्मा मार्न नसकिने छ भनेर पशुहरूको हिंसा गर्न प्रोत्साहन दिइएको पनि होइन। अनाधिकार कुनै पनि जीवको हत्या गर्नु निन्दनीय हो र यो काम राज्यको कानुन र भगवान्को कानुनद्वारा पनि दण्डनीय छ। तर, यहाँ अर्जुनलाई आफ्नो इच्छाअनुसार होइन धर्मसिद्धान्तकै लागि लडाइँ गर्न लगाइएको छ।

**न जायते म्रियते वा कदाचिन्**
**नायं भूत्वा भविता वा न भूयः ।**
**अजो नित्यः शाश्वतोऽयं पुराणो**
**न हन्यते हन्यमाने शरीरे ॥ २० ॥**

**न जायते** — न जन्मिन्छ; **म्रियते** — मर्छ; **वा** — अथवा; **कदाचित्** — कहिल्यै (भूत, वर्तमान या भविष्यमा); **न अयम्** — न यो; **भूत्वा** — भएर; **भविता** — हुन आउने छ; **वा** — अथवा; **न** — न त; **भूयः** — फेरि हुनेछ; **अजः** — न जन्मिने; **नित्यः** — सधैँ रहिरहने; **शाश्वतः** — स्थायी; **अयम्** — यो; **पुराणः** — सबभन्दा पुरानो; **न हन्यते** — न मारिन्छ; **हन्यमाने** — मारिएर; **शरीरे** — शरीरमा।

**आत्माका लागि न कहिल्यै जन्म छ न मृत्यु। आत्मा कहिल्यै जन्मिएन, जन्मिँदैन र जन्मिने छैन। ऊ अजन्मा छ, नित्य छ शाश्वत छ र पुरातन छ। शरीर मर्दा पनि ऊ मर्दैन।**

**तात्पर्य :** गुणका दृष्टिले परमात्माको अणु अंश परमात्माकै समान हुन्छ। ऊ शरीरजस्तै परिवर्तित हुँदैन। कहिलेकाहीँ आत्मालाई स्थायी वा कूटस्थ पनि भनिन्छ। शरीरमा छः प्रकारको रूपान्तरण वा परिवर्तन भइरहन्छ, सर्वप्रथम यो शरीर आमाका गर्भबाट जन्मिन्छ, केही समय शिशु अवस्थामा रहन्छ, अनि बढ्दछ र ठुलो हुन्छ अनि केही प्रभाव देखाउन थाल्दछ। फेरि विस्तारै क्षीण हुँदै जान्छ र अन्त्यमा नष्ट हुन्छ र विस्मृतिका गर्भमा बिलीन हुन्छ। तर, आत्मामा यस्तो परिवर्तन हुँदैन। आत्मा जन्मदैन, यसले भौतिक शरीर ग्रहण गर्दछ। अतः शरीर जन्मिन्छ तर आत्मा जन्मदा पनि जन्मदैन र मर्दा पनि मर्दैन। जसको जन्म हुन्छ त्यसको मृत्यु पनि हुन्छ। आत्मा अजन्मा भएको हुनाले उसको भूत, भविष्य र वर्तमान पनि हुँदैन। आत्मा नित्य छ, शाश्वत छ र अनादि छ। आत्माले जन्म लिएको कुनै ऐतिहासिक प्रमाण छैन। शरीरको प्रभावमा आएर हामीले आत्माको जन्म-मृत्युको इतिहास खोज्दछौँ। आत्मा शरीरजस्तै कहिल्यै बूढो हुँदैन। त्यसैले तथाकथित बूढो मानिसले पनि स्वयम्मा आफ्नो बाल्यकाल र यौवन अवस्थामा जस्तै अनुभूति गरिरहेको हुन्छ। शरीरको परिवर्तनले आत्मामा कुनै प्रकारको प्रभाव पार्दैन। आत्मा रूख वा अन्य भौतिक वस्तुजस्तै क्षीण हुँदैन। आत्माको कुनै सह उत्पादन छैन। शरीरको सह उत्पादन मानिने छोराछोरीजस्ता कुरा पनि भिन्दाभिन्दै व्यष्टि आत्मा हुन् र शरीरकै कारणले तिनीहरू कुनै विशेष मानिसका सन्तानजस्ता देखिन्छन्। आत्माको उपस्थितिका कारणले नै शरीरको विकास भएको हो। आत्माको न त कुनै हाँगाबिँगा हुन्छ न त परिवर्तन नै। अतः आत्मा शरीरका छः किसिमका परिवर्तनबाट मुक्त छ। कठोपनिषद्को १.२.१८ मा पनि हामी यस्तै आशय भएको एउटा श्लोक प्राप्त गर्दछौँ, जुन यस प्रकार छ—

*न जायते म्रियते वा विपश्चिन्नायं कुतश्चिन्न बभूव कश्चित् ।*
*अजो नित्यः शाश्वतोऽयं पुराणो न हन्यते हन्यमाने शरीरे ॥*

यस श्लोकको अर्थ र तात्पर्य पनि गीताकै श्लोकको जस्तो छ तर यो श्लोकमा एउटा '**विपश्चित्**' भन्ने विशिष्ट शब्दको प्रयोग भएको छ, जसको अर्थ हुन्छ 'विद्वान् वा ज्ञानमय'। आत्मा ज्ञान वा चेतनाले सधैँ परिपूर्ण रहन्छ, अतः चेतना नै आत्माको लक्षण हो। यदि कसैले हृदयमा रहेको आत्मालाई प्राप्त गर्न नसके पनि उसले चेतनाको उपस्थिति भएका कारणले त्यहाँ आत्माको उपस्थिति पनि छ भन्ने बुझ्दछ। कहिलेकाहीँ हामीले बादलले ढाकिनाले वा अन्य कुनै कारणले आकाशमा सूर्यको विम्बलाई देख्दैनौँ तैपनि सूर्यको प्रकाश त्यहाँ रहिरहन्छ। यसैबाट हामीलाई यो दिनको समय हो भन्ने विश्वास

हुन्छ। बिहान आकाशमा अलिकति मात्रै भए पनि सूर्यको प्रकाश देखिँदा आकाशमा सूर्य छ भन्ने कुरा हामीले थाहा पाउछौँ। यसै गरी मानिसको शरीर होस् वा पशुको शरीर, यदि त्यसमा अलिकति पनि चेतना भए त्यहाँ आत्माको पनि उपस्थिति छ भन्ने हामी बुझ्दछौँ। यति हुँदाहुँदै पनि जीवात्माको चेतना परमात्माको चेतनाभन्दा भिन्न छ। परमात्माको चेतना सर्वज्ञ छ। त्यो परमचेतना भूत, भविष्य र वर्तमानका सम्पूर्ण ज्ञानले परिपूर्ण छ तर जीवात्माको व्यष्टि चेतना विस्मरणशील वा बिर्सने छ। आफ्नो सही स्वभावलाई बिर्सन पुगेको जीवात्माले फेरि भगवान् श्रीकृष्णको परमज्ञानबाट शिक्षा पाएर आफ्नो स्वरूपको बोध गर्दछ। तर, श्रीकृष्ण जीवात्मा जस्तो विस्मरणशील हुनु हुन्न। यदि उहाँ त्यस्तो हुनुभएको भए उहाँले दिनुभएको *भगवद्गीताको* उपदेश पनि अर्थहीन हुने थियो।

आत्मा दुई प्रकारका छन्— सूक्ष्म अणु आत्मा र परमात्मा वा विभु आत्मा। यो कुराको पुष्टि कठोपनिषद् (१.२.२०) मा यसरी गरिएको छ—

*अणोरणीयान्महतो महीयानात्मास्य जन्तोर्निहितो गुहायाम् ।*
*तमक्रतुः पश्यति वीतशोको धातुः प्रसादान्महिमानमात्मनः ॥*

"अणु आत्मा र परमात्मा दुवै त्यही शरीररूपी वृक्षमा जीवात्माका हृदयमा विद्यमान छन्। समस्त इच्छाहरूबाट र शोकबाट पनि मुक्त भएको मानिसले मात्र भगवान्‌को कृपा पाएर आत्माको महिमालाई बुझ्न सक्दछ।" भगवान् श्रीकृष्ण परमात्माका पनि उद्गम स्रोत हुनुहुन्छ। यो कुरा आगामी अध्यायहरूमा स्पष्ट पारिने छ। अर्जुन आफ्नो वास्तविक स्वरूपलाई नै बिर्सिएका एउटा अणु आत्मा हुन्, त्यसैले उनलाई भगवान् श्रीकृष्णद्वारा या उनका प्रामाणिक प्रतिनिधि (गुरु) द्वारा प्रबुद्ध तुल्याउनुपर्ने आवश्यकता छ।

**वेदाविनाशिनं नित्यं य एनमजमव्ययम् ।**
**कथं स पुरुषः पार्थ कं घातयति हन्ति कम् ॥ २१॥**

**वेद** — जान्दछ; **अविनाशिनम्** — अविनाशीलाई; **नित्यम्** — शाश्वत; **य** — जो; **एनम्** — यो (आत्मा); **अजम्** — नजन्मिने; **अव्ययम्** — विकृत नहुने; **कथम्** — कसरी; **स** — त्यो; **पुरुषः** — पुरुष; **पार्थ** — हे पार्थ (अर्जुन); **कम्** — कसलाई; **घातयति** — मार्दछ; **हन्ति** — मार्छ; **कम्** — कसलाई।

**हे पार्थ! जसले यो आत्मा अविनाशी छ, नित्य छ, अजन्मा छ र अव्यय छ भन्ने जान्दछ त्यसले कसरी कसैलाई मार्ला वा मार्न लगाउन सक्ला?**

**तात्पर्य** : प्रत्येक वस्तुको आफ्नै एउटा उपयोगिता हुन्छ र पूर्ण ज्ञानमा

अवस्थित भएको मानिसले कुन वस्तुलाई कहाँ कसरी प्रयोग गर्नु पर्दछ भन्ने कुरा राम्ररी बुझेको हुन्छ। हिंसाको पनि आफ्नो उपयोगिता छ र यो हिंसाको उपयोग कसरी गर्ने हो भन्ने कुरा पनि ज्ञानीले जानेको हुन्छ। अर्काको हत्या गर्ने व्यक्तिलाई न्यायसंहिताले मृत्युदण्डको सजाय दिन्छ, तर दण्ड सुनाउने न्यायाधीशलाई दोषी मान्न सकिँदैन, किनभने उसले कानुनअनुसार नै अर्को व्यक्तिलाई मार्ने आदेश दिएको हुन्छ। मानव जातिकै न्यायसंहिता मानिने मनुस्मृतिमा हत्यारालाई मृत्युदण्ड दिने व्यवस्थाको समर्थन गरिएको छ। यसो गर्नाले उक्त हत्याराले आगामी जन्ममा आफ्नो पापकर्मको फल भोग्नु पर्दैन। अतः हत्यारालाई फाँसी दिने राजदण्डलाई एक किसिमले लाभदायक नै भन्न सकिन्छ। यसै गरी भगवान् श्रीकृष्णले पनि अर्जुनलाई युद्ध गर्ने आदेश दिनु हुन्छ। यसबाट के बुझ्नु पर्दछ भने, यो हिंसा परमन्यायका लागि हो। त्यसैले अर्जुनले उहाँको आदेश पालन गर्नै पर्दछ किनभने, भगवान् श्रीकृष्णका लागि गरिएको युद्धमा हिंसा हुने कुरै छैन, त्यसमा पनि मानिस वा आत्मालाई मार्न कहाँ सकिन्छ र? अतः न्याय गर्नका लागि त्यस किसिमको तथाकथित हिंसा गर्ने अनुमति शास्त्रले दिन्छ। शल्यक्रिया (अप्रेशन) गर्नुको तात्पर्य रोगीलाई मार्नु वा दुःख दिनु नभएर उसलाई निको पार्नु हो। अतः भगवान् श्रीकृष्णको आदेशअनुसार अर्जुनद्वारा गरिने युद्ध पूर्ण ज्ञानसहित जानीबुझी गरिने युद्ध हुनाले त्यसबाट पाप लाग्ने सम्भावना छैन।

**वासांसि जीर्णानि यथा विहाय**
**नवानि गृह्णाति नरोऽपराणि ।**
**तथा शरीराणि विहाय जीर्णा**
**न्यन्यानि संयाति नवानि देही ॥ २२ ॥**

**वासांसि** — वस्त्रहरू; **जीर्णानि** — पुराना र फाटेका; **यथा** — जसरी; **विहाय** — त्यागेर; **नवानि** — नयाँ वस्त्र; **गृह्णाति** — ग्रहण गर्दछ; **नरः** — मानिसले; **अपराणि** — अरू; **तथा** — त्यसै गरी; **शरीराणि** — शरीरहरू; **विहाय** — छोडेर; **जीर्णानि** — बूढो र काम नलाग्ने; **अन्यानि** — अरू नै; **संयाति** — स्वीकार गर्दछ; **नवानि** — नयाँ; **देही** — शरीरधारी आत्माले।

**जसरी मानिसले पुराना वस्त्रहरू त्यागेर नयाँ वस्त्र धारण गर्दछ त्यसै गरी आत्माले पनि पुराना र काम नलाग्ने शरीरलाई त्यागेर नयाँ भौतिक शरीर धारण गर्दछ।**

**तात्पर्य :** अणु आत्माले स्थूल शरीर परिवर्तन गर्दछ भन्ने कुरा सर्वस्वीकृत तथ्य हो। आत्माको अस्तित्वमाथि विश्वास नगर्ने आधुनिक वैज्ञानिकहरू

पनि हृदयबाट आउने शक्तिको स्रोतको व्याख्या गर्न सक्दैनन्। उनीहरू पनि बाल्य अवस्थाबाट कुमार अवस्था, कुमार अवस्थाबाट युवा अवस्था र युवा अवस्थाबाट वृद्धावस्थामा हुने शारीरिक परिवर्तनलाई स्वीकार गर्न बाध्य छन्। यो परिवर्तनको क्रम वृद्धावस्थाबाट अर्को शरीरमा स्थानान्तरित हुन्छ भन्ने कुराको व्याख्या पहिलेको श्लोकमा (२.१३)मा भइसकेको छ।

अणु आत्मा एउटा शरीरबाट अर्को शरीरमा स्थानान्तरित हुने काम परमात्माको कृपाले मात्रै सम्भव हुन्छ। जसरी एउटा मित्रले अर्को मित्रको इच्छा पूर्ण गरिदिन्छ त्यसै गरी परमात्माले जीवात्माका इच्छाहरू परिपूर्ति गरिदिनु हुन्छ। मुण्डक उपनिषद् र श्वेताश्वतर उपनिषद्मा आत्मा र परमात्माको तुलना एउटै रूखमा बसेका दुईवटा मित्र पक्षीहरूसँग गरिएको छ। यी दुई पक्षी (चराहरू) मध्ये एउटा चराले (अणु आत्माले) वृक्षको फल पनि खाइरहेको छ र अर्को चराले (परमात्मा श्रीकृष्णले) आफ्नो साथीलाई हेरिरहनु भएको हुन्छ। हुनत ती दुवै चराहरू समान गुणका छन् तैपनि एउटा भौतिक वृक्षका फलप्रति आकर्षित छ र अर्को आफ्ना साथीका क्रियाकलापहरूको साक्षी मात्र भएर बसेको छ। यहाँ भगवान् श्रीकृष्ण साक्षी भएर बस्ने चरा हुनुहुन्छ र अर्जुन फल खाने चरा हुन्। हुनत ती दुवै चराहरू मित्र हुन् तैपनि तीमध्ये एउटा स्वामी हुनुहुन्छ र अर्को सेवक हुन्। अणु आत्माले परमात्मासँगको आफ्नो सम्बन्धलाई बिर्सिएको हुनाले नै उसलाई एउटा रूखबाट अर्को रूखमा अर्थात् एउटा शरीरबाट अर्को शरीरमा जानुपरेको हो। जीवात्माले भौतिक शरीररूपी वृक्षमा अत्यन्त सङ्घर्षपूर्ण जीवन बिताइरहेको छ। यदि अर्जुनले भगवान् श्रीकृष्णलाई गुरु मानेर स्वेच्छाले श्रीकृष्णका शरणमा परेजस्तै त्यो चराले आफ्ना साथमा रहेको अर्को चरालाई गुरु मानेर उपदेश पाउनका लागि उसका शरणमा जाने भए ऊ तुरुन्तै सम्पूर्ण शोकबाट मुक्त हुन्छ। मुण्डक उपनिषद् (३.१.२) र श्वेताश्वतर उपनिषद् (४.७) ले समान रूपले यस तथ्यको पुष्टि यसरी गरेका छन्—

*समाने वृक्षे पुरुषो निमग्नोऽनीशया शोचति मुह्यमानः ।*
*जुष्टं यदा पश्यत्यन्यमीशमस्य महिमानमिति वीतशोकः ॥*

दुवै चराहरू एउटै वृक्षमा बसेका छन् तैपनि फलखाने चरा वृक्षका फलको भोक्ता बनेर चिन्ता र विषादमा पूर्णतया डुबेको छ। यदि कुनै तरिकाले उक्त चरा परमात्माका रूपमा रहेको आफ्नो साथीतिर फर्किएर परमात्माको महिमालाई बुझ्दछ, ऊ सम्पूर्ण चिन्ताहरूबाट मुक्त हुन्छ। अहिले अर्जुन आफ्ना शाश्वत मित्र भगवान् श्रीकृष्णतर्फ फर्केका छन् र उहाँबाट *भगवद्गीताको* सदुपदेश

ग्रहण गरिरहेका छन्। यसरी भगवान् श्रीकृष्णबाट उपदेश ग्रहण गरिसकेपछि अर्जुनले भगवान्को परममहिमा बुझ्नेछन् र शोकबाट मुक्त हुनेछन्।

यहाँ भगवान्ले अर्जुनलाई आफ्ना हजुरबुवा र गुरुको शरीर परिवर्तन-सम्बन्धी विषयलाई लिएर चिन्ता नगर भन्ने उपदेश दिनुभएको छ। अझ अर्जुन धर्मयुद्धमा आफ्ना हजुरबुवा र गुरुको वृद्ध शरीर नष्ट गर्न पाएकोमा प्रसन्न हुनुपर्ने हो, किनभने यसरी शरीरलाई मारिदिँदा उनीहरू विभिन्न किसिमका शारीरिक क्रियाकलापका परिणामबाट पनि तुरुन्त मुक्त हुन सक्दछन्। जसले धर्मयुद्धका वेदीमा आफ्नो शरीरको बलि चढाउँछ त्यसका शारीरिक पापहरू तुरुन्त पखालिन्छन् र जीवनको उच्चतर अवस्थामा त्यस व्यक्तिको उन्नति हुन्छ। अतः यस सम्बन्धमा अर्जुनले चिन्ता गर्नुपर्ने कुनै कारण थिएन।

**नैनं छिन्दन्ति शस्त्राणि नैनं दहति पावकः ।**
**न चैनं क्लेदयन्त्यापो न शोषयति मारुतः ॥ २३ ॥**

न एनं — न यो आत्मालाई; **छिन्दन्ति** — टुक्रा टुक्रा पारेर काट्न सकिन्छ; **शस्त्राणि** — हतियारहरूले; **न एनं** — न त यसलाई; **दहति** — डढाउन सकिन्छ; **पावकः** — आगोले; **न च एनं** — न त यो आत्मालाई; **क्लेदयन्ति** — भिजाउन सक्दछ; **आपः** — पानीले; **न** — न त; **शोषयति** — सुकाउँछ; **मारुतः** — हावाले।

**यो आत्मालाई न कहिल्यै कुनै हतियारले टुक्र्याउन सकिन्छ न आगोले डढाउन सकिन्छ, न पानीले भिजाउन सकिन्छ न हावाद्वारा नै सुकाउन सकिन्छ।**

**तात्पर्य :** तरवार, आग्नेयास्त्र, पर्जन्यास्त्र, वायव्यास्त्र आदि सबै किसिमका हात-हतियारहरूको प्रयोगले पनि आत्मालाई मार्न सकिँदैन। लाग्दछ, त्यस समयमा आधुनिक आग्नेयास्त्रका अतिरिक्त माटो, पानी, हावा, आकाशबाट पनि विभिन्न किसिमका हतियारहरू बन्दथे। आधुनिक युगको नाभिकीय हतियारहरूलाई पनि आग्नेयास्त्रको श्रेणीमा राखिएको छ, यसबाहेक प्राचीनकालमा पार्थिव तत्त्वबाट बनेका अरू विभिन्न हतियारहरू पनि थिए। आग्नेयास्त्रलाई पर्जन्यास्त्रले निष्क्रिय पारिन्थ्यो, यो पर्जन्यास्त्रको ज्ञान आधुनिक विज्ञानलाई छैन। अहिलेका वैज्ञानिकहरूलाई वायव्यास्त्रको ज्ञान पनि छैन। जेहोस् आत्मालाई काटेर टुक्र्याउन सकिँदैन र वैज्ञानिक उपायद्वारा तयार गरिएका जतिसुकै हतियार प्रहार गरेर पनि यसलाई संहार गर्न सकिँदैन।

व्यष्टि जीव कसरी आफ्नै अज्ञानका कारणले उत्पन्न भयो र त्यसपछि मायाको शक्तिद्वारा ढाकिन पुग्यो भन्ने कुराको व्याख्या मायावादीहरूले गर्न सक्दैनन्। आदि परमात्माबाट व्यष्टि जीवात्मालाई छुट्याउन पनि सम्भव छैन।

यी व्यष्टि आत्माहरू शाश्वत रूपले भिन्न रहेका परमात्माकै अंश हुन्। तिनीहरू शाश्वत वा सनातन रूपमा रहेका भिन्नभिन्न अणु आत्मा भएका हुनाले, मायाद्वारा ढाकिने उनीहरूको स्वाभाविक प्रवृत्ति हुन्छ। यसरी उनीहरू भगवान्को सङ्गतबाट अलग हुन पुग्दछन्। आगो र आगोको झिल्कामा समान गुण भए पनि आगोबाट अलग हुनेबित्तिकै आगोको झिल्को निभिहाल्छ। वराह पुराणमा जीवात्मालाई परमात्माका भिन्न अंशहरू हुन् भनिएको छ। *भगवद्गीताका* अनुसार पनि उनीहरू शाश्वत रूपमा त्यस्तै छन्। अतः मोह वा मायाबाट मुक्त हुँदा पनि जीवात्माको स्वतन्त्र अस्तित्व रहिरहन्छ। भगवान् श्रीकृष्णले अर्जुनलाई दिनुभएको उपदेशबाट पनि यो कुरा स्पष्ट हुन्छ। श्रीकृष्णको उपदेशले गर्दा अर्जुन मायाबाट मुक्त भए तर कहिल्यै पनि श्रीकृष्णमा नै एकाकार भएनन्।

**अच्छेद्योऽयमदाह्योऽयमक्लेद्योऽशोष्य एव च ।**
**नित्यः सर्वगतः स्थाणुरचलोऽयं सनातनः ॥२४॥**

**अच्छेद्यः** — नफुट्ने वा नभाँचिने; **अयम्** — यो आत्मा; **अदाह्यः** — नडढ्ने; **अयम्** — यो आत्मा; **अक्लेद्यः** — नभिज्ने वा नपग्लिने; **अशोष्य** — नसुक्ने; **एव** — अवश्य नै; **च** — तथा; **नित्यः** — सधैँ रहिरहने; **सर्वगतः** — सर्वव्यापी; **स्थाणु** — अपरिवर्तनशील; **अचलः** — अचल; **अयम्** — यो आत्मा;; **सतानतः** — सधैँ एकनास छ।

**यो व्यष्टि आत्मा कहिल्यै नफुट्ने, नडढ्ने, नभिज्ने र नसुक्ने हुन्छ। यो आत्मा सधैँ रहिरहन्छ, सर्वव्यापक छ, अपरिवर्तनशील छ, अचल छ र सधैँ एकैनासको छ।**

**तात्पर्य :** अणु आत्माका यी सारा गुणहरूले निश्चित रूपमा के सिद्ध गर्दछन् भने यो आत्मा पूर्ण आत्मा वा परमात्माकै एउटा अणु अंश हो र यो परिवर्तित नभई सधैँ एकैनास रहिरहन्छ। यस प्रसङ्गमा अद्वैतवादी सिद्धान्त लागु गर्न साह्रै गाह्रो छ किनभने व्यष्टि आत्मा कहिल्यै पनि परमात्मासँग एकाकार हुन सक्दैन। भौतिक दोषहरूबाट मुक्त भएपछि सामान्य अणु आत्मा भगवान्को दिव्य तेजका किरणमा एउटा आध्यात्मिक झिल्को बनेर रहन्छ तर बुद्धिमान् जीवात्मा भगवान्को सङ्गत प्राप्त गर्नका लागि वैकुण्ठ धाममा प्रवेश गर्दछ।

यहाँ प्रयोगभएको सर्वगत अर्थात् सर्वव्यापक भन्ने शब्द महत्त्वपूर्ण छ, किनभने जीवात्माहरू भगवान्का सृष्टिमा सर्वत्र विद्यमान छन्। जीवात्माहरू स्थलमा पनि छन्, जलमा पनि छन्, हावामा पनि छन्, पृथ्वीभित्र पनि छन् र आगोमा पनि छन्। आगोमा जीवात्मा रहँदैन भन्ने कुरा स्वीकार्य छैन। किनभने

यहाँ जीवात्मालाई आगोले पनि डढाउन सक्दैन भनिएको छ। अतः सूर्य ग्रहमा पनि उपयुक्त शरीरमा जीवात्माहरू छन् भन्ने कुरामा शंका छैन। सूर्य ग्रहमा जीवात्माहरूको अस्तित्व नहुने भए यो "**सर्वगत**" अर्थात् आत्मा सर्वव्यापक छ भन्ने कुरा निरर्थक हुनजान्छ।

**अव्यक्तोऽयमचिन्त्योऽयंमविकार्योऽयमुच्यते ।**
**तस्मादेवं विदित्वैनं नानुशोचितुमर्हसि ॥ २५ ॥**

**अव्यक्तः** — अदृश्य; **अयम्** — यो आत्मा; **अचिन्त्यः** — अकल्पनीय; **अयम्** — यो आत्मा; **अविकार्यः** — विकृत नहुने; **अयम्** — यो आत्मा; **उच्यते** — भनिन्छ; **तस्मात्** — त्यस कारणले; **एवम्** — यस प्रकार; **विदित्वा** — राम्ररी जानेर; **एनम्** — यो आत्माका लागि; **न** — छैनौ; **अनुशोचितम्** — शोक गर्न; **अर्हसि** — योग्य।

**यो आत्मालाई अव्यक्त, अचिन्त्य र अपरिवर्तनीय भनिन्छ। यो कुरा बुझेर पनि तिमीले शरीरका लागि शोक गर्नु हुँदैन।**

**तात्पर्य :** पहिला भनिएअनुसार आत्माको परिमाण अत्यन्त सानो छ, भौतिक उपायले यसलाई नाप्न सकिँदैन। अत्यन्त शक्तिशाली सूक्ष्मदर्शक यन्त्रद्वारा पनि यसलाई देख्न सकिँदैन त्यसैले यो आत्मा अदृश्य छ। जहाँसम्म आत्माको अस्तित्वको सम्बन्ध छ, श्रुतिको प्रमाण वा वैदिक ज्ञानबाहेक अन्य कुनै पनि प्रयोग-परीक्षणद्वारा यसको अस्तित्व सिद्ध गर्न सकिँदैन। आत्मा अनुभव गर्नसकिने सत्य वस्तु भए पनि वैदिक ज्ञानबाहेक यसको अस्तित्वलाई बुझ्ने अर्को साधन वा स्रोत छैन। यो तथ्यलाई हामीले स्वीकार गर्नु पर्दछ। धेरै कुरा हामीले हामीभन्दा माथिका सन्त पुरुषहरूद्वारा भनिएको आधारमा स्वीकार गर्नुपर्ने हुन्छ। आफ्नी आमाको प्रामाणिकताका आधारमा कसैले पनि बाबुको अस्तित्व अस्वीकार गर्न सक्दैन। बाबुको परिचय दिनका लागि आमाबाहेक अर्को आधिकारिक माध्यम छैन। त्यसै गरी वेदको अध्ययनबाहेक आत्माको अस्तित्वलाई बुझ्ने अर्को कुनै स्रोत छैन। अर्को शब्दमा भन्दा मानिसका व्यावहारिक ज्ञानद्वारा आत्मालाई बुझ्न सकिँदैन। आत्मा चेतना पनि हो र चैतन्य पनि हो। वेदको यस भनाइलाई हामीले स्वीकार गर्नै पर्दछ। शरीरमा परिवर्तन भएजस्तै आत्मामा कुनै परिवर्तन हुँदैन। आत्मा कहिल्यै परिवर्तन नहुने वस्तु भए पनि यो अनन्त परमात्माको तुलनामा साह्रै सानो अणुका रूपमा रहन्छ। परमात्मा अनन्त हुनुहुन्छ तर आत्मा अति नै सूक्ष्म छ, त्यसैले सूक्ष्म आत्मा अविकारी भए पनि यो भगवान्‌को वा परमात्मा समान हुन कहिल्यै सक्दैन। आत्मा स्थायी छ भन्ने धारणाको पुष्टिका लागि वेदमा विभिन्न किसिमले यो कुरा दोहोऱ्याइएको

छ। कुनै विषयवस्तुलाई गल्ती नगरी राम्ररी बुझियोस् भन्नका लागि नै उक्त कुरालाई बारम्बार दोहोऱ्याउने गरिन्छ।

**अथ चैनं नित्यजातं नित्यं वा मन्यसे मृतम् ।**
**तथापि त्वं महाबाहो नैनं शोचितुमर्हसि ॥२६॥**

**अथ** — यदि; **च** — पनि; **एनम्** — यो आत्मा; **नित्य जातम्** — सधैँ जन्मिने; **नित्यम्** — जहिलेसुकै; **वा** — अथवा; **मन्यसे** — माने पनि; **मृतम्** — मरेको; **तथापि** — तैपनि; **त्वं** — तिमीले; **महाबाहो** — हे महाबाहु (शक्तिशाली हात भएका); **न** — छैन; **एनम्** — यो आत्माका सम्बन्धमा; **शोचितुम्** — शोक गर्न; **अर्हसि** — योग्य।

**यदि तिमीले आत्मालाई सधैँ जन्मिइरहने र सधैँ मरिरहने ठाने पनि हे महाबाहु! तिमीले यसका लागि शोक गर्नुपर्ने कुनै कारण छैन।**

**तात्पर्य :** दार्शनिकहरूको एउटा यस्तो वर्ग छ, जो बुद्धमार्गीहरूले जस्तै शरीरभन्दा पर आत्माको भिन्नै अस्तित्व छ भन्ने कुरा मान्दैनन्। लाग्दछ, भगवान् श्रीकृष्णले *भगवद्गीताको* उपदेश गर्नुभएका समयमा पनि लोकायतिक, वैभाषिक नामका दार्शनिकहरू थिए। यस्ता दार्शनिकहरूका विचारमा भौतिक तत्त्वहरूको संयोगबाटै जीवनको लक्षण उत्पन्न हुन्छ भन्ने रहेको छ। आधुनिक वैज्ञानिकहरू तथा भौतिकवादी दार्शनिकहरूको सोचाइ पनि यस्तै छ। उनीहरूका अनुसार शरीर भौतिक तत्त्वहरूकै संयोग हो र एउटा विशेष अवस्थामा, तिनै भौतिक र रासायनिक तत्त्वहरूमा अन्तर्क्रिया हुँदा जीवको विकास हुन्छ। मानवशास्त्र यही दर्शनमा आधारित छ। यस समयमा अमेरिकामा प्रचारित भइरहेका अनेक भूटा धर्महरू पनि यही दर्शनमा दृढ छन् र साथै यिनीहरू यही शून्यवादी अभक्त बुद्धमार्गीहरूको अनुसरण गर्दछन्।

वैभाषिक दर्शनको धारणाअनुरूप यदि अर्जुनलाई आत्माको अस्तित्वमा विश्वास नभएको भए पनि उनले शोक गर्नुपर्ने कुनै कारण छैन। यदि मानव शरीर भौतिक पदार्थको रासायनिक सम्मिश्रणबाट निर्मित भएको मान्ने भए पनि अलिकति रासायनिक पदार्थ नष्ट हुँदा कसैले पनि आफ्नो निर्धारित कर्तव्य नै छोडेर शोक गर्दैन। अर्कातिर आधुनिक विज्ञान तथा वैज्ञानिकहरू युद्धमा शत्रुहरूलाई पराजित गर्नका लागि कैयौँ टन रासायनिक पदार्थ नष्ट गर्दछन्। वैभाषिक दर्शनले शरीर समाप्त भएपछि आत्मा पनि समाप्त हुन्छ भन्ने मान्दछ। अतः वैदिक मान्यताअनुसार अणु आत्मालाई अविनाशी र वैभाषिक दर्शनअनुसार आत्मालाई विनाशशील माने पनि यी दुवै अवस्थामा अर्जुनले शोक गर्नुपर्ने कारण छैन। यो दर्शनअनुसार प्रत्येक क्षण अनगिन्ती

जीवात्माहरू पदार्थबाट उत्पन्न भइरहन्छन् र त्यसै गरी प्रत्येक क्षण त्यस्ता असङ्ख्य जीवहरूको विनाश पनि भइरहन्छ, त्यसैले यस किसिमको घटनाका लागि चिन्ता गर्नुपर्ने पनि कुनै आवश्यकता देखिँदैन। यदि आत्माको पुनर्जन्म हुँदैन भन्ने मान्ने भए पनि अर्जुनले आफ्ना हजुरबुवा तथा गुरुलाई मारेको पापफलबाट प्रभावित भएर डराउनुपर्ने कुनै कारण छैन। तर, कृष्णले अर्जुनलाई यहाँ महाबाहु भनेर व्यङ्ग्यपूर्वक सम्बोधन गर्नुभएको छ, किनभने अर्जुनलाई वैदिक ज्ञानको प्रतिकूल वैभाषिक दर्शनको सिद्धान्त स्वीकार्य थिएन। एउटा क्षत्रिय भएका हुनाले पनि अर्जुन वैदिक संस्कृतिसँग सम्बन्धित थिए र निरन्तर यही सिद्धान्तलाई अनुसरण गरिरहनु नै उनका लागि उपयुक्त थियो।

**जातस्य हि ध्रुवो मृत्युर्ध्रुवं जन्म मृतस्य च ।**
**तस्मादपरिहार्येऽर्थे न त्वं शोचितुमर्हसि ॥ २७॥**

**जातस्य** — जन्म लिनेको; **हि** — निश्चय नै; **ध्रुवः** — सत्य छ; **मृत्युः** — मरण; **ध्रुवं** — यो पनि सत्य हो; **जन्म** — जन्म; **मृतस्य** — मरेकाको; **च** — पनि; **तस्मात्** — त्यसै कारणले; **अपरिहार्ये** — प्रतिकार गर्नै नसकिने; **अर्थे** — कुरामा; **न** — छैनौ; **त्वं** — तिमी; **शोचितुम्** — शोक गर्न; **अर्हसि** — लायक।

**जो जन्मिएको छ, त्यो अवश्यै मर्छ र मरेपछि फेरि अवश्य जन्मिन्छ। अतः आफ्नो नगरी नहुने कर्तव्यको पालन तिमीले गर्नै पर्दछ र यसमा शोक गर्नु हुँदैन।**

**तात्पर्य :** आफ्ना जीवनका क्रियाकलापअनुसार मानिसले जन्म ग्रहण गर्नु पर्दछ र एउटा जीवनको कर्म अवधि पूरा गरेपछि उसले फेरि अर्को जन्म लिनका लागि मर्नु पर्दछ। यसरी मुक्ति प्राप्त नगरेसम्म जन्म र मृत्युको यो चक्र चली नै रहन्छ। जन्म र मृत्युको यो स्वाभाविक चक्रले हत्या, वध र युद्धको समर्थन गर्दैन तैपनि सँगसँगै मानव समाजमा शान्ति र सुव्यवस्था बनाइराख्नका लागि यस किसिमका युद्ध वा हिंसा पनि अपरिहार्य हुन्छ।

कुरुक्षेत्रको युद्ध भगवान्‌का इच्छाले भएको थियो। त्यसैले त्यो अपरिहार्य थियो र सत्यका लागि लड्नु क्षत्रियको कर्तव्य पनि हो। यस्तो अवस्थामा आफ्नो कर्तव्य पालन गर्ने क्रममा इष्टमित्रहरू मर्छन् कि भनेर अर्जुनले किन डराउनु वा शोक गर्नुपर्थ्यो ? अर्जुन नियम भङ्ग गर्न उचित ठान्दैनथे। यसो गर्दा उनी पापकर्मका प्रतिक्रियाको भागी बन्नुपर्थ्यो, त्यसैले उनी यति धेरै डराइरहेका थिए। राम्ररी आफ्नो कर्तव्य पालन गर्न छोडेर आफ्ना सम्बन्धीहरूको मृत्युलाई रोक्न पनि उनी सक्दैनथे र कर्तव्यबाट विचलित भएर असत् बाटोमा लाग्दा पनि भ्रष्ट वा पतित भइन्छ कि भन्ने डर उनलाई थियो।

**अव्यक्तादीनि भूतानि व्यक्तमध्यानि भारत ।**
**अव्यक्तनिधनान्येव तत्र का परिदेवना ॥ २८ ॥**

**अव्यक्त आदीनि** — सुरुमा अव्यक्त; **भूतानि** — समस्त प्राणीहरू; **व्यक्त** — प्रकट भए; **मध्यानि** — बीचमा; **भारत** — हे भरतवंशी; **अव्यक्त** — अप्रकट हुन्छन्; **निधनानि** — मरेपछि; **एव** — यसो हुनाले; **तत्र** — अतः; **का** — के; **परिदेवना** — चिन्ता।

**जन्मिनुभन्दा अगाडि सबै जीवहरू अव्यक्त अवस्थामा हुन्छन्, जन्मेर नमरेसम्मको मध्य अवस्थामा तिनीहरू व्यक्त हुन्छन् र मरेपछि फेरि अव्यक्त नै हुन्छन्। अतः यसमा शोक गर्नुपर्ने के आवश्यकता छ?**

**तात्पर्य :** दार्शनिकहरू दुई किसिमका हुन्छन्। एक किसिमका दार्शनिकहरू आत्माको अस्तित्वलाई स्वीकार गर्दछन् र अर्का किसिमका दार्शनिकहरू आत्माको अस्तित्वलाई मान्दैनन्। यी दुवै अवस्थामा शोक गर्नुपर्ने कुनै कारण देखिँदैन। वेदान्तवादीहरू आत्माको अस्तित्व नमान्ने दार्शनिकहरूलाई नास्तिक भन्दछन्। यदि तर्ककै लागि यो नास्तिकवादी सिद्धान्तलाई मान्ने भए पनि मृत्युमा शोक गर्नुपर्ने कारण छैन। आत्माको स्वतन्त्र अस्तित्वभन्दा भिन्न सम्पूर्ण भौतिक पदार्थहरू सृष्टिभन्दा अगाडि अदृश्य अवस्थामा रहन्छन्। अदृश्य रहने यही सूक्ष्म अवस्थाबाट नै दृश्य अवस्था आउने गर्दछ, जस्तै — आकाशबाट हावा र हावाबाट आगो प्रकट हुन्छ, आगोबाट पानी उत्पन्न हुन्छ र पानीबाट पृथ्वी प्रकट हुन्छ। पृथ्वीबाट विभिन्न प्रकारका वस्तुहरू प्रकट हुन्छन्। उदाहरणका लागि एउटा गगनचुम्बी महल पृथ्वीबाटै प्रकट हुन्छ अनि जब त्यसलाई भत्काइन्छ त्यो अदृश्य हुन्छ र परमअवस्थामा त्यो अणुका रूपमा विद्यमान रहन्छ। समयानुसार वस्तुहरू प्रकट वा अप्रकट अवस्थामा रहे पनि शक्ति संरक्षणको नियम यथावत रहिरहन्छ, भिन्नता यत्ति हो। त्यसैले कुनै वस्तु प्रकट वा अप्रकट हुँदा चिन्तित हुनुपर्ने कारण केही छैन। अप्रकट अवस्थामा पनि वस्तुको सूक्ष्म अस्तित्व समाप्त हुँदैन। सुरुको र अन्त्यको दुवै अवस्थामा सम्पूर्ण तत्त्वहरू अप्रकट नै रहन्छन्। केवल बीचको अवस्थामा मात्रै तिनीहरू प्रकट हुन्छन्। त्यसैले यसबाट भौतिक रूपमा पनि कुनै विशेष अन्तर पर्दैन।

यदि *भगवद्गीतामा* भनिएबमोजिमको वैदिक ज्ञानको निष्कर्षलाई मान्ने भए पनि भौतिक शरीर समयका क्रममा (**अन्तवन्त इमे देहाः**) नाश हुने किसिमको छ र आत्मा (**नित्यस्योक्ताः शरीरिणः**) शाश्वत छ। अतः हामीले सधैँभरि के कुरा ध्यानमा राख्नु पर्दछ भने यो शरीर आत्माको परिधान

वा लुगा-कपडा जस्तो हो। त्यसो भए, कपडा परिवर्तन गर्दा शोक किन? शाश्वत आत्माको तुलनामा भौतिक शरीरको अस्तित्व क्षणभङ्गुर छ। शरीरको अस्तित्व सपनाजस्तो हो। सपनामा हामी आकाशमा उडिरहेका हुन सक्दछौँ, राजा बनेर रथमा बसिरहेका हुन सक्दछौँ तर जब हामी उठ्दछौँ त्यस समय न हामी आकाशमा उडिरहेका हुन्छौँ न रथमा बसिरहेका हुन्छौँ। वैदिक ज्ञानले भौतिक शरीरको अस्तित्वविहीनताका आधारमा मानिसलाई आत्मसाक्षात्कार गर्न उत्साहित गरेको छ। अतः हामीले आत्माको अस्तित्वलाई माने पनि नमाने पनि दुवै स्थितिमा शरीरको विनाश भयो भनेर शोक गर्नुपर्ने कुनै कारण छैन।

**आश्चर्यवत् पश्यति कश्चिदेनम्-**
**आश्चर्यवद् वदति तथैव चान्यः ।**
**आश्चर्यवच्चैनमन्यः शृणोति**
**श्रुत्वाप्येनं वेद न चैव कश्चित् ॥ २९ ॥**

**आश्चर्यवत्** — आश्चर्यजनक रूपमा; **पश्यति** — हेर्छन्; **कश्चित्** — कसैले; **एनम्** — यो आत्मालाई; **आश्चर्यवत्** — आश्चर्यजनक रूपमा; **वदति** — भन्दछन्; **तथा** — यसरी; **एव** — निश्चय नै; **च** — पनि; **अन्य** — अर्काले; **आश्चर्यवत्** — यस्तै आश्चर्यका रूपमा; **च** — पनि; **एनम्** — यो आत्मालाई; **अन्यः** — अरूले; **शृणोति** — सुन्दछन्; **श्रुत्वा** — सुनेर; **अपि** — पनि; **एनम्** — यो आत्मालाई; **वेद** — जान्दछन्; **न** — होइन; **च** — तथा; **एव** — निश्चय नै; **कश्चित्** — कसैले।

**यो आत्मालाई कसैले आश्चर्यका रूपमा हेर्दछन्, कसैले आश्चर्यका रूपमा व्याख्या गर्दछन्, कसैले आश्चर्यकै रूपमा यसका बारेमा सुन्दछन् तर कोही यसका बारेमा सुनेर पनि केही बुझ्न सक्दैनन्।**

**तात्पर्य :** गीतोपनिषद् विशेष गरी उपनिषद्हरूकै सिद्धान्तमा आधारित भएको हुनाले कठोपनिषद्को (१.२.७) मा पनि यो श्लोक हुनु कुनै आश्चर्यको कुरा होइन—

*श्रवणयापि बहुभिर्यो न लभ्यः श्रृण्वन्तोऽपि बहवो यम् न विद्युः ।*
*आश्चर्यो वक्ता कुशलोऽस्य लब्धा आश्चर्योऽस्य ज्ञाता कुशलानुशिष्टः ॥*

यो अणु आत्मा विशाल शरीर भएका पशुहरूका शरीरमा पनि छ, विशाल वरको वृक्षभित्र पनि छ र केवल एक इन्च ठाउँमा करोडौँका सङ्ख्यामा अँटाउने अति सूक्ष्म कीटाणुभित्र पनि यो आत्मा विद्यमान छ। वास्तवमा यो अति आश्चर्यजनक कुरा हो। अज्ञानी र असाधु व्यक्तिले आत्माको यो

आश्चर्यजनक अणुरूपी झिल्कोको आश्चर्यलाई बुझ्न सक्दैनन्, तिनलाई संसारको पहिलो प्राणी ब्रह्माजीलाई पनि शिक्षा दिनसक्ने महाज्ञानीले नै किन नसम्झाउने। वस्तुहरूको स्थूल भौतिक धारणाबाट प्रभावित भएका यस युगका अधिकांश मानिसहरू कसरी यति सानो कणरूपी आत्मा त्यति विशाल र त्यति सूक्ष्म हुन सक्दछ भनेर कल्पना नै गर्न सक्दैनन्। अतः मानिसले आत्माको आश्चर्यजनक स्वभावलाई या त उसको शारीरिक गठनका आधारमा हेर्दछन् या वर्णन गरिएका आधारमा हेर्ने गर्दछन्। भौतिक शक्तिद्वारा मोहित मानिसहरू इन्द्रियतृप्तिका लागि नै विषयवस्तुमा लिप्त हुन्छन्। आत्मज्ञानका कुरा बुझ्ने समय उनीहरूलाई अति थोरै हुन्छ। यद्यपि सत्य कुरा के हो भने, आत्मज्ञानबिना जीवन बाँच्नका लागि गरिएका सम्पूर्ण क्रियाकलाप व्यर्थ हुन्। आत्मज्ञानबिनाको जीवनसङ्घर्षको एउटै परिणाम पराजय हो। हुन सक्दछ उनीहरूमा मानिसले आत्मचिन्तन गर्नै पर्दछ र यसरी नै भौतिक सङ्कटहरूको समाधान खोज्नु पर्दछ भन्ने चेतना आएको छैन।

आत्माका विषयमा सुन्ने चाहना भएका केही मानिसहरू राम्रो सङ्गत पाएर प्रवचनहरूमा पनि उपस्थित हुन्छन् तर कहिलेकाहीँ अज्ञानवश उनीहरू परमात्मा र अणु-आत्मालाई एउटै मान्ने भूल गर्दछन्। परमात्माको स्थिति, अणु आत्माको अवस्था, तिनका आफ्ना क्रियाकलाप, आत्मा-परमात्माबीचको सम्बन्ध र अरू सम्पूर्ण साना-ठुला कुराहरूको पूर्ण जानकारी भएको मानिस भेट्न निकै कठिन छ। आत्मज्ञानबाट पूर्ण लाभ प्राप्त गरेको र विभिन्न पक्षबाट आत्माको विश्लेषण गर्नसक्ने व्यक्ति खोजेर पाउन झन् कठिन छ। यदि कुनै किसिमले कुनै व्यक्तिले आत्मासम्बन्धी विषयवस्तुलाई बुझ्नसके त्यसको जीवन सफल भयो भन्ने ठान्नु पर्दछ।

अन्य कुनै पनि किसिमका मत र सिद्धान्तहरूबाट विचलित नभई परमआधिकारिक व्यक्तित्व भगवान् श्रीकृष्णद्वारा दिइएको *भगवद्गीताको* उपदेशलाई ग्रहण गर्नु नै आत्माको विषयलाई बुझ्ने सबैभन्दा सजिलो उपाय हो। तर, यसरी कृष्णलाई भगवान्‌का रूपमा स्वीकार गर्नसक्ने हुनका लागि पनि यो जन्म वा पूर्वजन्ममा कुनै ठूलै तपस्या वा यज्ञहरू गरेको हुनु पर्दछ। शुद्ध भक्तहरूको अहैतुकी कृपाद्वारा नै कृष्णलाई भगवान्‌का रूपमा बुझ्न सकिन्छ। योबाहेक भगवान्‌लाई बुझ्ने अर्को उपाय छैन।

**देही नित्यमवध्योऽयं देहे सर्वस्य भारत ।**
**तस्मात्सर्वाणि भूतानि न त्वं शोचितुमर्हसि ॥३०॥**

**देही** — भौतिक शरीरको स्वामी; **नित्यम्** — शाश्वत रूपमा; **अवध्यः** — मार्न

नसकिने छ; **अयम्** — यो आत्मा; **देहे** — शरीरमा; **सर्वस्य** — सबैका; **भारत** — हे भरतका वंशधर; **तस्मात्** — त्यसैले; **सर्वाणि** — सबै; **भूतानि** — प्राणीहरू (जो जन्मिएका छन्); **न** — छैन; **त्वं** — तिमी; **शोचितुम्** — शोक गर्न; **अर्हसि** — योग्य।

**हे भरतवंशी अर्जुन! शरीरमा रहने शरीरका स्वामीलाई कहिल्यै मार्न सकिँदैन, त्यसैले कुनै पनि जीवात्माका लागि तिमीले शोक गर्नु पर्दैन।**

**तात्पर्य :** अब भगवान् अविनाशी आत्माका सम्बन्धमा दिने उपदेशको प्रसङ्गलाई टुङ्ग्याउन चाहनु हुन्छ। विभिन्न कोणबाट आत्माको अमरताको व्याख्या गर्दै भगवान् श्रीकृष्णले आत्मा अविनाशी छ र शरीर नाशवान् छ भन्ने सिद्धान्त स्थापित गर्नुभएको छ। अतः एउटा क्षत्रिय भएका हुनाले अर्जुनले युद्धमा आफ्ना पितामह र गुरु, भीष्म र द्रोणको मृत्यु हुन्छ भन्ने डरले आफ्नो कर्तव्य छोड्नु हुँदैन। भगवान् श्रीकृष्णलाई प्रमाण मानेर आत्मा भौतिक शरीरभन्दा भिन्न वस्तु हो भन्ने कुरामा विश्वास मान्नु पर्दछ तर आत्मा भन्ने कुनै वस्तु नै छैन वा रासायनिक अन्तर्क्रियाबाट भौतिक परिपक्वताको फलस्वरूप जीवनको विकास हुन्छ भन्ने धारणालाई मान्नु हुँदैन। आत्मा अमर छ भनेर हिंसालाई उत्साहित गरिएको होइन तैपनि युद्धका समयमा या युद्ध नगरीनहुने अवस्थामा हिंसाको निषेध पनि गर्न सकिँदैन। यस्तो आवश्यकतालाई भगवान्को स्वीकृति भएमा मात्र उपयुक्त मान्न सकिन्छ, मनोमानी किसिमले होइन।

**स्वधर्ममपि चावेक्ष्य न विकम्पितुमर्हसि।**
**धर्म्याद्धि युद्धाच्छ्रेयोऽन्यत् क्षत्रियस्य न विद्यते ॥ ३१॥**

**स्वधर्मम्** — आफ्नो धार्मिक सिद्धान्तलाई; **अपि** — पनि; **च** — निश्चय नै; **अवेक्ष्य** — विचार गरेर; **न विकम्पितुम्** — सङ्कोच नगर्न; **अर्हसि** — योग्य छौ; **धर्म्यात्** — धर्मका लागि; **हि** — अवश्य नै; **युद्धात्** — युद्धभन्दा; **श्रेयः** — राम्रो अवसर; **अन्यत्** — अरू कुनै; **क्षत्रियस्य** — क्षत्रियका लागि; **न विद्यते** — छैन।

**एउटा क्षत्रियले गर्नुपर्ने विशिष्ट कर्तव्यलाई विचार गरेर, धर्मका लागि युद्ध गर्नुभन्दा राम्रो अरू कुनै कार्य छैन भन्ने कुरा तिमीले बुझ्नु पर्दछ र यस्तो कार्य गर्न तिमीले कुनै सङ्कोच मान्नु हुँदैन।**

**तात्पर्य :** सामाजिक सुव्यवस्थाका चार तहमध्ये, कुशल प्रशासन सम्बन्धी दोस्रो तहलाई क्षत्रिय भनिन्छ। '**क्षत**' को अर्थ हो चोट वा क्षति। जसले क्षति वा

चोटबाट मानिसलाई बचाउँछ, त्यसलाई क्षत्रिय भनिन्छ। क्षत्रियहरूलाई वनमा शिकार खेल्ने प्रशिक्षण पनि दिइन्छ। क्षत्रियहरू जङ्गलमा गएर बाघलाई पनि चुनौती दिन्छन् र तरवार लिएर बाघसँग प्रत्यक्ष लडाइँ गर्दछन्। यसरी बाघ मारिएमा राजकीय तरिकाले त्यस मृत बाघको अन्त्येष्टि गरिन्छ। अहिलेसम्म पनि जयपुर राज्यका क्षत्रिय राजकुलले यो प्रचलनलाई छोडेका छैनन्। यस प्रकारले चुनौती दिने र मार्ने कामका लागि क्षत्रियहरूलाई प्रशिक्षण नै दिइन्छ, किनभने यस्तो धार्मिक हिंसा कहिलेकाहीं अनिवार्य जस्तै हुन्छ। यसै कारणले गर्दा क्षत्रियहरूलाई सीधै संन्यास लिने विधान छैन। राजनीतिमा अहिंसा एउटा कूटनीति हुन सक्दछ तर राजनीतिक सिद्धान्तकै कारक हुन सक्दैन। धार्मिक नियमका पुस्तकहरूमा यस्तो उल्लेख पाइन्छ—

*आहवेषु मिथोऽन्योन्यं जिघांसन्तो महीक्षितः ।*
*युद्धमानाः परं शक्त्या स्वर्गं यान्त्यपराङ्मुखाः ॥*
*यज्ञेषु पशवो ब्रह्मन् हन्यन्ते सततं द्विजैः ।*
*संस्कृताः किल मन्त्रैश्च तेऽपि स्वर्गमवाप्नुवन् ॥*

जसरी यज्ञमा ब्राह्मणहरूद्वारा अभिमन्त्रित भएर बलिदान गरिएका पशुहरू स्वर्गमा जान्छन्, त्यसै गरी अन्य विरोधी राजाहरूसँग युद्धभूमिमा लड्दा-लड्दै मरेका क्षत्रियहरू पनि स्वर्गीय लोकमा पुग्न सक्षम हुन्छन्। त्यसैले धर्मरक्षाका लागि युद्धमा क्षत्रियहरूलाई मार्नु र यज्ञाग्निमा पशुहरूलाई मार्नुलाई हिंसाकर्म मानिँदैन किनभने यो पनि एउटा धार्मिक कार्य नै हो। यस्तो धार्मिक कार्यबाट दुवै लाभान्वित हुन्छन्। यज्ञमा बलिदान भएका पशुहरूले जीवको क्रमविकास प्रक्रियामा नपरी तुरुन्तै मानिसको जीवन प्राप्त गर्दछन् र त्यसै गरी युद्धमा मर्ने क्षत्रियहरूले पनि यज्ञहरू सम्पादन गरेर ब्राह्मणहरूले प्राप्त गर्ने स्वर्गलोक तुरुन्त प्राप्त गर्दछन्।

स्वधर्म अर्थात् विशिष्ट कर्तव्य, दुई प्रकारका छन्। जबसम्म मानिसले मुक्ति प्राप्त गर्दैन, तबसम्म उसले धार्मिक नियमपूर्वक शरीरअनुसारको कर्तव्य गर्नै पर्दछ। जब मानिस मुक्त हुन्छ, त्यस समय उसको स्वधर्म आध्यात्मिक हुन पुग्दछ र त्यस्तो व्यक्तिमा शारीरिक अवधारणाको बुद्धि रहँदैन। शारीरिक अवधारणाको बुद्धि रहेसम्म ब्राह्मण होस् वा क्षत्रिय, उसले आफ्नो स्वधर्मको पालन गर्नै पर्दछ। स्वधर्मको विधान भगवान्‌ले बनाउनुभएको छ, जसको स्पष्ट व्याख्या चतुर्थ अध्यायमा गरिने छ। शारीरिक स्तरमा वर्णाश्रम धर्मलाई नै स्वधर्म भनिन्छ। यो नै अध्यात्मबोधको सिँढी हो। मानवीय सभ्यताको आरम्भ वर्णाश्रम धर्मबाटै हुन्छ। यो स्वधर्म प्रकृतिबाट प्रदान गरिएको विशिष्ट

शारीरिक गुणमा आधारित हुन्छ। जुनसुकै क्षेत्रमा पनि आफ्नो निर्धारित कर्तव्य (स्वधर्म) पालन गर्नाले जीवनको उच्चतम अवस्था प्राप्त गर्न सकिन्छ।

**यदृच्छया चोपपन्नं स्वर्गद्वारमपावृतम्।**
**सुखिनः क्षत्रियाः पार्थ लभन्ते युद्धमीदृशम् ॥ ३२ ॥**

**यदृच्छया** — स्वतः; **च** — पनि; **उपपन्नम्** — प्राप्त भएको; **स्वर्गद्वारम्** — स्वर्गको ढोका; **अपावृतम्** — खुलेको; **सुखिनः** — अति सुखी; **क्षत्रियाः** — राजकुलका सदस्यहरूले; **पार्थ** — हे पृथाका छोरा (अर्जुन); **लभन्ते** — पाउँदछन्; **युद्धम्** — युद्ध; **ईदृशम्** — यस प्रकारको।

**हे पार्थ! स्वतः प्राप्त हुन आएको, स्वर्गको खुलेको ढोकाजस्तो यस्तो युद्धको अवसर अत्यन्त सुखी वा भाग्यशाली क्षत्रियहरूले मात्र प्राप्त गर्दछन्।**

**तात्पर्य :** भगवान् श्रीकृष्ण संसारका परमगुरु हुनुहुन्छ। उहाँले अर्जुनको "यो युद्धमा म कुनै राम्रो कुरा पाउँदिनँ। यो त स्थायी रूपले नर्कमा बास गराउने कारण मात्र हुनेछ।" भन्ने भनाइको भर्त्सना गर्नुभयो। अज्ञानका कारणले नै अर्जुनले यस्तो भनेका हुन्। उनी अहिंसक बनेर आफ्नो विशिष्ट कर्तव्य पालन गर्न चाहन्थे। युद्ध मैदानमा उभिएको क्षत्रियले अहिंसक हुनखोज्नु मूर्खहरूको दर्शन अँगाल्नु हो। व्यासदेवका पिता महर्षि पराशरले बनाउनुभएको पराशर स्मृति नामक धर्मग्रन्थमा भनिएको छ—

*क्षत्रियो हि प्रजारक्षन् शस्त्रपाणि प्रदण्डयन् ।*
*निर्जित्य परसैन्यादीन् क्षितिं धर्मेण पालयेत् ॥*

"आफ्ना नागरिकहरूलाई सबै प्रकारका कठिनाइहरूबाट रक्षा गर्नु क्षत्रियको कर्तव्य हो। यसरी शान्ति सुरक्षा कायम गर्नका लागि उसले कहिलेकाहीँ हिंसा पनि गर्नु पर्दछ। उसले शत्रु राजाहरूका सैनिकमाथि विजय प्राप्त गरेर संसारमा धर्मपूर्वक सुशासन गर्नु पर्दछ।" यसरी सबै पक्षबाट विचार गर्दा अर्जुन युद्धबाट विमुख हुनुपर्ने कुनै कारण देखिँदैन। शत्रुमाथि विजय गर्नसकेमा राज्यको भोग गर्न पाइने र युद्धमा मर्न परे भने पनि स्वर्ग जान पाइने र उनका लागि स्वर्गको ढोका खुलिरहने हुनाले दुवै दृष्टिबाट अर्जुनका लागि यो युद्ध लाभदायक सिद्ध हुन्छ।

**अथ चेत्त्वमिमं धर्म्यं संग्रामं न करिष्यसि।**
**ततः स्वधर्मं कीर्तिं च हित्वा पापमवाप्स्यसि ॥ ३३ ॥**

**अथ** — केही गरी; **चेत्** — यदि; **त्वम्** — तिमीले; **इमम्** — यो; **धर्म्यम्** — धार्मिक कार्यका रूपमा; **संग्रामम्** — युद्ध; **न** **करिष्यसि** — नगरे; **ततः** — त्यसपछि; **स्वधर्मम्** — आफ्नो धार्मिक कर्तव्य; **कीर्तिम्** — यश; **च** — पनि; **हित्वा** — गुमाएर; **पापम्** — पापपूर्ण प्रतिफल; **अवाप्स्यसि** — पाउने छौ।

**यदि केही गरेर तिमीले यो युद्धरूपी धार्मिक कर्तव्य पूरा नगरे, तिमीलाई आफ्नो कर्तव्य पालन नगरेको पाप लाग्ने छ र तिमीले योद्धाका रूपमा पाएको यश पनि गुमाउने छौ।**

**तात्पर्य :** अर्जुन एउटा प्रसिद्ध योद्धा थिए। उनले भगवान् शिवसहित धेरै देवताहरूसँग लडेर ठुलो नाम कमाएका थिए। शिकारीका भेषमा आउनुभएका शिवजीलाई युद्धमा पराजित गरेर अर्जुनले उहाँलाई खुसी पारे र उहाँबाट पुरस्कारका रूपमा पाशुपतास्त्र प्राप्त गरे। अर्जुन महान् लडाकू थिए भन्ने कुरा हरेकलाई थाहा थियो। द्रोणाचार्यले पनि उनलाई आशीर्वाद दिएका थिए र विशिष्ट प्रकारको हतियार दिएर पुरस्कृत गरेका थिए। त्यो हतियारले उनले आफ्नै गुरुलाई पनि मार्न सक्दथे। अर्जुनले आफ्नै धर्मपिता स्वर्गका राजा इन्द्रलसहितका धेरै आधिकारिक व्यक्तित्वहरूबाट सैन्य प्रमाणपत्र तथा मान पदवी प्राप्त गरेका थिए। तर अहिले यदि अर्जुनले युद्ध नगर्ने भए उनलाई क्षत्रियका रूपमा आफ्नो विशिष्ट कर्तव्यको उपेक्षा गरेको दोष लाग्ने मात्र होइन अझ उनको सम्पूर्ण इज्जत समेत जानेछ र उनी नर्क जाने राजमार्गको तयारी गरिरहेका हुनेछन्। अर्को शब्दमा उनी युद्ध गरेका कारणले होइन युद्धबाट भागेका कारणले नर्कजाने हुनेछन्।

**अकीर्तिं चापि भूतानि कथयिष्यन्ति तेऽव्ययाम् ।**
**सम्भावितस्य चाकीर्तिर्मरणादतिरिच्यते ॥ ३४ ॥**

**अकीर्तिम्** — अपयश; **च** — पनि; **अपि** — त्यसमाथि; **भूतानि** — सबै मानिसहरू; **कथयिष्यन्ति** — वर्णन गर्नेछन्; **ते** — तिम्रो; **अव्ययम्** — जहिले पनि; **सम्भावितस्य** — सम्मानित मानिसका लागि; **च** — पनि; **अकीर्तिः** — अपयश; **मरणात्** — मृत्युभन्दा पनि; **अतिरिच्यते** — बढी हुन्छ।

**मानिसहरूले सधैँ तिम्रो अपयशको वर्णन गर्नेछन्। एउटा सम्मानित व्यक्तिका लागि अपयश भन्ने कुरा मृत्युभन्दा पनि बढ्ता कष्टकर हुन्छ।**

**तात्पर्य :** अर्जुनका मित्र तथा दार्शनिक गुरु भगवान् श्रीकृष्णले अर्जुनलाई युद्ध अस्वीकार नगर्ने सम्बन्धमा आफ्नो अन्तिम निर्णय दिनुभयो। भगवान्ले

भन्नुभयो—"अर्जुन! यदि तिमीले युद्ध सुरु हुनुभन्दा अगावै युद्धभूमि त्यागेमा मानिसहरूले तिमीलाई कायर भन्नेछन्। मानिसहरूले गाली नै गरून् तर युद्धभूमिबाट भागेर मैले ज्यान बचाउँछु भन्ने तिमीले सोचेका भए त्यो पनि राम्रो होइन। योभन्दा तिमी बरु युद्धभूमिमै मर्नु वेश हुनेछ। मेरो यही सुझाव छ। तिमीजस्ता सम्मानित मानिसका लागि निन्दित हुने विषय मृत्युभन्दा पनि खराब हो। त्यसैले मरिन्छ कि भन्ने डरले तिमीले युद्धमैदानबाट भाग्नु हुँदैन। योभन्दा युद्धमै मर्नु राम्रो हो। यसबाट तिमी मेरो मित्रताको दुरुपयोग गर्ने र समाजमा आफ्नो प्रतिष्ठा गुमाउनेजस्ता अपजसबाट बच्नेछौ।" यसरी युद्धबाट भाग्नुभन्दा युद्धमा मर्नु राम्रो हो भन्ने अन्तिम निर्णय भगवान्‌ले अर्जुनलाई दिनुभयो।

**भयाद्रणादुपरतं मंस्यन्ते त्वां महारथाः ।**
**येषां च त्वं बहुमतो भूत्वा यास्यसि लाघवम् ॥ ३५ ॥**

**भयात्** — डरले; **रणात्** — युद्धस्थलबाट; **उपरतम्** — विमुख हुनुलाई; **मंस्यन्ते** — मान्ने छन्; **त्वाम्** — तिमीलाई; **महारथाः** — ठुलाठुला महारथीहरूले; **येषाम्** — जसका लागि; **च** — पनि; **त्वम्** — तिमी; **बहुमतः** — अत्यन्त सम्मानित; **भूत्वा** — भएर; **यास्यसि** — जानेछौ; **लाघवम्** — मूल्यहीन।

**जुन जुन महारथीहरूले तिम्रो नाम र प्रतिष्ठालाई अत्यन्त आदर गरेका छन्, तिनैले तिमीलाई युद्धबाट डराएर भागेको ठानेर तिमीलाई तुच्छ मान्नेछन्।**

**तात्पर्य** : भगवान् श्रीकृष्णले अर्जुनलाई आफ्नो निर्णय सुनाउँदै भन्नु हुन्छ—"दुर्योधन, कर्ण तथा अन्य महारथीहरूले तिमीले आफ्ना भाइहरू र पितामहमाथि दया गरेर युद्ध छोडेका हौ भन्ने कुरा सोच्ने छैनन्। तिनीहरूले तिमीले आफ्नै प्राण जाने डरले गर्दा युद्धमैदान छोडेका हौ भन्ने मात्र सोच्ने छन्। यसले गर्दा उनीहरूले अत्यन्त आदर गरेको तिम्रो व्यक्तित्व नष्ट हुनेछ।

**अवाच्यवादांश्च बहून् वदिष्यन्ति तवाहिताः ।**
**निन्दन्तस्तव सामर्थ्यं ततो दुःखतरं नु किम् ॥ ३६ ॥**

**अवाच्यवादान्** — नराम्रा वचनहरू; **च** — पनि; **बहून्** — धेरै; **वदिष्यन्ति** — भन्नेछन्; **तव** — तिम्रा; **अहिताः** — शत्रुहरू; **निन्दन्तः** — निन्दा गर्दै; **तव** — तिम्रो; **सामर्थ्यम्** — शक्तिलाई; **ततः** — त्योभन्दा; **दुःखतरम्** — बढी दुःखदायी कुरा; **नु** — निश्चय नै; **किम्** — अरू के होला र?

**तिम्रा शत्रुहरूले तिम्रो पुरुषार्थको उपहास गर्दै अनेकौँ दुर्वचनहरू भनेर तिम्रो निन्दा गर्नेछन्, त्योभन्दा कष्टदायी कुरा तिम्रा लागि अरू के होला?**

**तात्पर्य :** अर्जुनको नचाहिँदो करुणाभाव देखेर भगवान् श्रीकृष्णलाई सुरुमै आश्चर्य लागेको थियो र उहाँले अर्जुनको त्यस्तो करुणाभाव आर्यहरूलाई नसुहाउने भनेर टिप्पणी गर्नुभएको थियो। अहिले अर्जुनको त्यही तथाकथित करुणाभावका विरोधमा भगवान्‌ले आफूले भनेका शब्दहरूलाई प्रमाणित गरिदिनुभयो।

**हतो वा प्राप्स्यसि स्वर्गं जित्वा वा भोक्ष्यसे महीम् ।**
**तस्मादुत्तिष्ठ कौन्तेय युद्धाय कृतनिश्चयः ॥ ३७॥**

**हतो वा** — मारियौ भने; **प्राप्स्यसि** — पाउने छौ; **स्वर्गम्** — स्वर्गलोक; **जित्वा वा** — विजयी भयौ भने; **भोक्ष्यसे** — भोग्ने छौ; **महीम्** — पृथ्वीलाई; **तस्मात्** — त्यसैले; **उत्तिष्ठ** — उठ; **कौन्तेय** — हे कुन्तीपुत्र; **युद्धाय** — युद्ध गर्नका लागि; **कृतनिश्चयः** — दृढ निश्चय गर।

**हे कुन्तीपुत्र! यदि युद्धमा मारे तिमीले स्वर्गलोक पाउने छौ र यदि युद्ध नै तिमीले जिने पृथ्वीको राज्य भोग्न पाउने छौ, त्यसैले दृढसङ्कल्पका साथ उठ र युद्ध गर।**

**तात्पर्य :** हुनत अर्जुनले नै युद्ध जित्दछन् भन्ने कुराको कुनै निश्चितता थिएन तैपनि उनले युद्ध गर्नै पर्थ्यो, किनकि यदि उनी युद्धमा मारिए उनी स्वर्ग जान पाउँथे।

**सुखदुःखे समे कृत्वा लाभालाभौ जयाजयौ ।**
**ततो युद्धाय युज्यस्व नैवं पापमवाप्स्यसि ॥३८॥**

**सुख** — सुखमा; **दुःखे** — दुःखमा; **समे** — समान; **कृत्वा** — गरेर; **लाभ-अलाभौ** — लाभ र हानि दुवैमा; **जय-अजयौ** — जय र पराजय दुवैमा; **ततः** — त्यसपछि; **युद्धाय** — युद्ध गर्नका लागि; **युज्यस्व** — लाग; **न** — छैनौ; **एवम्** — यस प्रकारले; **पापम्** — पाप; **अवाप्स्यसि** — पाउँदछौ।

**सुख-दुःख, लाभ-हानि, विजय-पराजय सम्बन्धी विचारै नगरी तिमी युद्धका लागि युद्ध गर, यसो गरेमा तिमीलाई कुनै पाप लाग्ने छैन।**

**तात्पर्य :** भगवान् श्रीकृष्ण अब सीधै भन्नु हुन्छ— अर्जुनले युद्धकै लागि युद्ध गर्नु पर्दछ, किनभने यो युद्ध भगवान्‌को इच्छा हो। कृष्णभावनामय क्रियाकलापमा सुख-दुःख, लाभ-हानि, जय-पराजयको कुनै विचार गरिँदैन। हरेक काम भगवान् श्रीकृष्णका निमित्त भनेर गरिनु पर्दछ। यही हो दिव्यचेतना वा कृष्णभावना। यसो गर्दा भौतिक क्रियाकलापको जस्तो प्रतिक्रिया हुँदैन। जसले

आफ्ना इन्द्रियहरूको तृप्तिका लागि सतोगुण वा रजोगुणमा रहेर काम गर्दछ त्यसले राम्रा वा नराम्रा प्रतिफल पाउँदछ, तर जसले आफूलाई कृष्णभावनामय कार्यमा पूर्णत समर्पित गर्दछ त्यसले सामान्य कर्म गर्नेले जस्तै कसैप्रति कृतज्ञ र कसैप्रति ऋणी हुनु पर्दैन। *भगवत्* (११.५.४१) मा भनिएको छ—

*देवर्षिभूताप्तनृणां पितृणां न किङ्करो नायमृणी च राजन् ।*
*सर्वात्मना यः शरणं शरण्यं गतो मुकुन्दं परिहृत्य कर्तम् ।*

देवता, ऋषि, सामान्य मानिस, पारिवारिकजन, मानव जाति वा उसका पूर्वज ती जोसुकै हुन् तर जसले आफ्ना सबै कर्तव्यहरूलाई छोडेर पूर्णरूपले भगवान् श्रीकृष्ण वा मुकुन्दमा आफूलाई समर्पित गरेको छ त्यसले कसैप्रति कृतज्ञ हुनु पनि पर्दैन र कसैको ऋणी पनि हुनु पर्दैन। यो श्लोकमा भगवान् श्रीकृष्णले अर्जुनलाई अप्रत्यक्ष रूपमा यही कुराको सङ्केत गर्नुभएको छ। यस विषयको व्याख्या निम्नलिखित श्लोकमा अझ स्पष्ट रूपले गरिने छ।

**एषा तेऽभिहिता सांख्ये बुद्धिर्योगे त्विमां श्रृणु ।**
**बुद्ध्या युक्तो यया पार्थ कर्मबन्धं प्रहास्यसि ॥ ३९ ॥**

**एषा** — यी सबै; **ते** — तिम्रा लागि; **अभिहिता** — वर्णन गरिए; **सांख्ये** — विश्लेषणात्मक अध्ययनद्वारा; **बुद्धि** — बुद्धि; **योगे** — निष्काम कर्ममा; **तु** — तर; **इमाम्** — यो; **श्रृणु** — सुन; **बुद्ध्या** — बुद्धिद्वारा; **युक्तः** — सहित; **यया** — जसबाट; **पार्थ** — हे पृथापुत्र!; **कर्मबन्धं** — कर्मफलको बन्धनबाट; **प्रहास्यसि** — मुक्त हुन सक्नेछौ।

**यसरी विश्लेषणात्मक अध्ययनद्वारा मैले तिमीलाई यो ज्ञानको वर्णन गरेँ। अब म निष्काम कर्मको व्याख्या गर्छु, सुन। हे पार्थ! यदि तिमीले यही ज्ञानमा रहेर कर्म गरेमा तिमीले आफूलाई कर्मबन्धनबाट मुक्त गर्न सक्दछौ।**

**तात्पर्य :** निरुक्ति वा वैदिक शब्दकोश अनुसार विस्तारपूर्वक वस्तुहरूको वर्णन गर्ने विद्यालाई साङ्ख्य भनिन्छ र साङ्ख्य त्यो दर्शन हो जसले आत्माको साँचो स्वभावको व्याख्या गर्दछ। योगले इन्द्रियहरूलाई नियन्त्रण गर्ने काम गर्दछ। अर्जुनको नलड्ने प्रस्ताव इन्द्रियतृप्तिमा आधारित थियो। उनी आफ्नो प्रमुख कर्तव्य नै बिर्सेर युद्धबाट विमुख हुन चाहन्थे। उनले के विचार गरे भने आफ्ना बन्धु-बान्धव, धृतराष्ट्रका छोराहरूमाथि विजय प्राप्त गरेपछि पाइने राज्य-भोगको सुखभन्दा आफ्ना इष्टमित्रलाई नमारी पाइने सुख ठुलो हो। यी दुवै कुराको आधारभूत सिद्धान्त इन्द्रियतृप्ति हो। उनीहरूलाई जितेर

पाइने सुख र आफ्ना इष्टमित्रलाई जीवित देख्न पाउँदा प्राप्त हुने सुख यी दुवै वैयक्तिक इन्द्रियतृप्तिमा आधारित छन्। यसमा बुद्धि र कर्तव्य दुवैको बलिदान हुन पुग्दछ। त्यसैले भगवान् श्रीकृष्णले अर्जुनलाई के भन्न चाहनु हुन्छ भने, उनका पितामहको शरीर मारिए पनि उनको वास्तविक आत्मा मर्दैन। श्रीकृष्ण अगाडि भन्नु हुन्छ— स्वयम् भगवान् सहित सम्पूर्ण जीवहरू शाश्वत छन्। भूत कालमा पनि ती सबै जीवात्माको पृथक् अस्तित्व थियो, वर्तमान कालमा पनि छ र भविष्यमा पनि तिनीहरूको पृथक अस्तित्व यथावत् रहिरहने छ, किनभने हामी सबै शाश्वत व्यष्टि आत्मा हौँ। हामी विभिन्न प्रयोजनमा केवल आफ्नो शारीरिक भेष मात्र परिवर्तन गर्छौँ तर यथार्थमा यो भौतिक भेषको बन्धनबाट मुक्ति पाएपछि पनि हाम्रो पृथक् अस्तित्व रहिरहन्छ। भगवान् श्रीकृष्णले आत्मा र शरीरको अति स्पष्ट विश्लेषण गर्नुभएको छ। निरुक्ति कोशका आधारमा विभिन्न दृष्टिकोणबाट गरिने आत्मा र शरीरको विश्लेषणात्मक ज्ञानलाई यहाँ साङ्ख्य भनिएको छ। यो साङ्ख्यको, नास्तिक कपिलको साङ्ख्य दर्शनसँग कुनै सम्बन्ध छैन। पाखण्डी कपिलको साङ्ख्य योगभन्दा धेरै अगाडि भगवान् श्रीकृष्णकै अवतार मानिनु हुने भगवान् कपिलदेवले आफ्नी आमा देवहूतीलाई साँचो साङ्ख्ययोगको व्याख्या गर्नुभएको थियो। यसको उल्लेख *श्रीमद्भागवत्मा* छ। उहाँले त्यहाँ स्पष्ट व्याख्या गर्नुभएको छ— पुरुष अर्थात् परमेश्वर सक्रिय हुनुहुन्छ र प्रकृतिमाथि दृष्टिपात गरेर उहाँले सृष्टि गर्नु हुन्छ। वेद र गीतामा यो कुरालाई स्वीकार गरिएको छ। वेदमा गरिएको वर्णनले के सङ्केत गर्दछ भने, भगवान्ले प्रकृतिमाथि दृष्टिपात गर्नुभयो र प्रकृतिमा आणविक व्यष्टि आत्माहरूको गर्भाधान गर्नुभयो। यी सम्पूर्ण आत्माहरू इन्द्रियतृप्तिका निमित्त भौतिक संसारमा कार्यरत् छन् र भौतिक शक्तिका वशमा परेर तिनीहरूले आफूलाई नै भोक्ता ठानिरहेका छन्। यस मानसिकताले जीवात्मालाई मुक्तिको अन्तिम अवस्थासम्म पुर्‍याउँदछ जहाँ ऊ भगवान्मा विलीन हुन्छ। यो नै मायाको अर्थात् इन्द्रियतृप्तिजन्य मोहको अन्तिम पासो हो। यस प्रकारका इन्द्रियतृप्तिबाट धेरै धेरै जन्महरू व्यतीत गरिसकेपछि मात्र कुनै महान् आत्मा वासुदेव, भगवान् श्रीकृष्णका शरणमा पर्दछ। यहाँ पुगेपछि उसको परमसत्यको खोज परिपूर्ण हुन्छ।

**"शिष्यस्तेऽहं शाधि मां त्वां प्रपन्नम्"** भन्दै अर्जुनले पहिले नै भगवान् श्रीकृष्णलाई गुरु मानेर उहाँका शरणमा परेका थिए। फलस्वरूप श्रीकृष्णले अब उनलाई बुद्धियोग वा कर्मयोगको कार्यप्रणालीका बारेमा वा शब्दान्तरमा भन्दा भगवान्का इन्द्रियतृप्तिका लागि मात्र सम्पन्न गरिने भक्तियोगको विधिका बारेमा भन्नु हुन्छ। यो बुद्धियोगको स्पष्ट व्याख्या

गीताको दश अध्यायको दसौँ श्लोकमा गरिएको छ, जसअनुसार बुद्धियोग भनेको हरेक प्राणीका हृदयमा परमात्मा रूपले निवास गर्ने भगवान्सँग प्रत्यक्ष रूपले समागम हुनु हो तर यस्तो एकात्मक समागम भक्तियोगबिना सम्भव छैन। अतः जो व्यक्ति भगवान्को दिव्य प्रेमाभक्तिमा अवस्थित छ वा अर्को शब्दमा जो व्यक्ति कृष्णभावनामा संलग्न छ त्यसले मात्र भगवान्को विशेष कृपाले बुद्धियोगको स्तर प्राप्त गर्दछ। त्यसैले भगवान् भन्नु हुन्छ— जो दिव्य प्रेमपूर्वक भगवद्भक्तिमा लागिरहन्छ त्यसैलाई नै भगवान्ले भक्तिको शुद्ध ज्ञान प्रदान गर्नु हुन्छ। यस प्रकार भक्त सजिलैसँग भगवान्को सच्चिदानन्दमय दिव्य धाममा पुग्न सक्दछ।

यस प्रकार यो श्लोकमा उल्लेख गरिएको बुद्धियोग भगवान्को भक्ति नै हो र यहाँ उल्लेख भएको साङ्ख्य शब्दको नास्तिक कपिलद्वारा प्रतिपादन गरिएको अनीश्वरवादी साङ्ख्ययोगसँग कुनै सम्बन्ध छैन। अतः यहाँ उल्लेख भएको साङ्ख्ययोगसँग अनीश्वरवादी साङ्ख्यको कुनै सम्बन्ध होला भन्ने भ्रम कसैमा हुनु हुँदैन। त्यस समय त्यस्तो नास्तिक साङ्ख्यदर्शनको कुनै प्रभाव पनि थिएन र भगवान् श्रीकृष्णले पनि त्यस्तो ईश्वरविहीन दार्शनिक चिन्तनको उल्लेख गर्नुभएन। वास्तविक साङ्ख्यदर्शनको वर्णन भगवान् कपिलले *श्रीमद्भागवत्मा* गर्नुभएको छ। वर्तमान प्रसङ्गमा उपरोक्त साङ्ख्यको कुनै सम्बन्ध छैन। यहाँ साङ्ख्यको अर्थ शरीर र आत्माको विश्लेषणात्मक वर्णन हो। भगवान् श्रीकृष्णले अर्जुनलाई बुद्धियोग वा भक्तियोगको बाटोमा ल्याउनका लागि यहाँ आत्माको विश्लेषणात्मक वर्णन गर्नुभएको छ। अतः भगवान् श्रीकृष्णको साङ्ख्य र भागवत्मा वर्णन गरिएको भगवान् कपिलको साङ्ख्य एउटै र एकै हुन्। ती सबै भक्तियोग नै हुन्। त्यसैले भगवान् श्रीकृष्ण भन्नु हुन्छ— अल्पज्ञानी वर्गका मानिसहरूले मात्र साङ्ख्ययोग र भक्तियोगमा भेद गर्दछन् ( **साङ्ख्य योगौ पृथग्बालाः प्रवदन्ति न पण्डिताः** )।

अवश्य नै भक्तियोगसँग नास्तिक साङ्ख्ययोगको कुनै सम्बन्ध छैन, तैपनि अल्पज्ञानी व्यक्तिहरू *भगवद्गीतामा* उही अनीश्वरवादी साङ्ख्यको चर्चा भएको हो भन्ने दाबी गर्दछन्। तर के बुझ्नु पर्दछ भने, बुद्धियोग भनेको भक्तिमय ज्ञान र आनन्दमा डुबेर कृष्णभावनामा संलग्न रहनु हो। जसले भगवान्को सन्तुष्टिका लागि मात्र कर्म गर्दछ, त्यो काम जतिसुकै कठिन किन नहोस्, त्यसले भक्तियोगकै सिद्धान्तअनुसार कार्य गरिरहेको हुन्छ र स्वयम्मा दिव्य आनन्दको अनुभव गरिरहेको हुन्छ। यस किसिमको अलौकिक व्यस्तताद्वारा मानिसले स्वतः नै सम्पूर्ण दिव्य ज्ञान प्राप्त गर्दछ र ज्ञान आर्जनका लागि अतिरिक्त परिश्रम नगरेर नै उसले मुक्तिको पूर्णता प्राप्त गर्दछ। कृष्णभावनामा रहेर गरिने कर्ममा र फलप्राप्तिका

इच्छाले गरिने कर्ममा, अझ विशेष गरी इन्द्रियतृप्तिका लागि पारिवारिक वा भौतिक आनन्द पाउने उद्देश्यले गरिने कर्ममा निकै अन्तर छ। त्यसैले बुद्धियोग भन्नु हामीले गर्ने कर्मकै दिव्य गुण हो।

**नेहाभिक्रमनाशोऽस्ति प्रत्यवायो न विद्यते ।**
**स्वल्पमप्यस्य धर्मस्य त्रायते महतो भयात् ॥ ४० ॥**

**न** — छैन; **इह** — यस योगमा; **अभिक्रम** — परिश्रम गर्नमा; **नाशः** — हानि; **अस्ति** — छ; **प्रत्यवायः** — बिघ्नबाधाहरू; **न विद्यते** — छैन; **स्वल्पम्** — थोरै; **अपि** — पनि; **अस्य** — यस योगको; **धर्मस्य** — धर्मको; **त्रायते** — मुक्त गर्दछ; **महतः** — महान्; **भयात्** — डरबाट।

**यस प्रयासमा न कुनै हानि छ न बिघ्न नै। यो मार्गमा गरिएको सानो प्रगतिले पनि व्यक्तिलाई अत्यन्त भयानक किसिमको भयबाट मुक्त गराइदिन्छ।**

**तात्पर्य :** इन्द्रियतृप्तिको अपेक्षा नगरी, कृष्णभावनामा रहेर भगवान् श्रीकृष्णका लागि गरिने कार्य नै सबैभन्दा उच्च र दिव्य गुणयुक्त कार्य हुन्। यस्ता कार्यको आरम्भ सानै प्रकारको भए पनि त्यसमा कुनै बिघ्न पर्दैन र त्यस्ता कार्यको सानो भाग पनि कहिल्यै नाश हुँदैन। भौतिक योजना अनुसार सुरु भएका कुनै काम पूर्ण गरिनु पर्दछ। अन्यथा सम्पूर्ण प्रयास विफल हुन्छन् तर कृष्णभावना अनुसार सुरु भएका कुनै पनि कार्यको, उक्त कार्य पूर्ण नभएको भए पनि त्यसको स्थायी प्रभाव रहिरहन्छ। अतः यस प्रकार कृष्णभावनामय कार्य गर्नेहरूलाई उक्त कार्य अधुरै रहे पनि कुनै किसिमको हानि हुँदैन। कृष्णभावनामा रहेर गरिएको एक प्रतिशत कामको पनि स्थायी प्रतिफल हुन्छ र आगामी कार्य दुई प्रतिशतबाट सुरु हुन्छ जबकि भौतिक कार्यमा शतप्रतिशत सफलता नपाएसम्म कुनै लाभ हुँदैन। अजामिलले कृष्णभावनाको केही प्रतिशत कार्य मात्रै पूर्ण गरेको थिए तर भगवान्का कृपाले उनले त्यस कार्यको शतप्रतिशत प्रतिफल भोग्न पाए। यस सम्बन्धमा *श्रीमद्भागवत्मा* एउटा सुन्दर श्लोक छ—

*त्यक्त्वा स्वधर्मं चरणाम्बुजं हरेर्भजन्नपक्वोऽथ पतेत्ततो यदि ।*
*यत्र क्व वा भद्रमभूदमुष्य किं को वार्थ आप्तोऽभजतां स्वधर्मतः ।*

यदि कसैले आफ्नो व्यावसायिक कर्तव्य नै छोडेर कृष्णभावनामा काम गर्न सुरु गर्दछ र काम पूरा गर्न नसकेर तल झरे पनि त्यसमा उसको हानि नै के हुन्छ र? त्यसै गरी यदि कसैले आफ्नो भौतिक कार्य पूर्ण गरे पनि त्यसबाट

उसलाई फाइदा के ?" अथवा ईसाईहरूले भनेजस्तै यदि कसैले आफ्नो शाश्वत आत्मालाई गुमाएर सम्पूर्ण संसार नै पाए पनि यसबाट उसलाई के फाइदा होला ?

भौतिक कर्म र तिनको प्रतिफल शरीरको समाप्तिसँगै समाप्त हुन्छ तर कृष्णभावनामा गरिएको कर्मले यो शरीरको विनाश भए पनि मानिसलाई कृष्णभावनामृतसम्म पुऱ्याई छोड्दछ। केही नभए पनि उसले आगामी जन्ममा या त सुसंस्कृत ब्राह्मण परिवारमा या धनाढ्य कुलमा सुन्दर मानव शरीरमा जन्म अवश्य पाउँदछ। यसबाट उसलाई भविष्यमा माथि उठ्ने अवसर प्राप्त हुन सक्दछ। कृष्णभावनामा रहेर गरिने कर्मका अनुपम गुणहरू यस्तै हुन्छन्।

**व्यवसायात्मिका बुद्धिरेकेह कुरुनन्दन ।**
**बहुशाखा ह्यनन्ताश्च बुद्धयोऽव्यवसायिनाम् ॥ ४१ ॥**

**व्यवसायात्मिका** — कृष्णभावनामा स्थिर; **बुद्धिः** — बुद्धि; **एका** — एउटै छ; **इह** — यस संसारमा; **कुरुनन्दन** — हे कुरुहरूका प्रिय पुत्र; **बहुशाखा** — धेरै शाखाहरू भएको; **हि** — निश्चय नै; **अनन्ताः** — असीमित; **च** — पनि; **बुद्धयः** — बुद्धिहरू; **अव्यवसायिनाम्** — कृष्णभावनामा नलागेकाहरूको।

**जो व्यक्ति यो मार्गमा लागेका छन्, जो आफ्नो लक्ष्यमा दृढ छन् तिनको उद्देश्य एउटै हुन्छ। हे कुरुनन्दन! तर जो दृढप्रतिज्ञ छैनन् तिनीहरूको बुद्धि विभिन्न शाखाहरूमा विभाजित हुन्छ।**

**तात्पर्य :** कृष्णभावनाद्वारा नै मनुष्य जीवनको सर्वोच्च सिद्धि सम्भव छ भन्ने बलियो विश्वासलाई व्यवसायात्मिका बुद्धि भनिन्छ। 'चैतन्यचरितामृत' (मध्यलीला २२.६२) मा भनिएको छ—

*'श्रद्धा' शब्दे विश्वास कहे सुदृढ निश्चय ।*
*कृष्णे भक्ति कैले सर्वकर्म कृत हय ॥*

कुनै महान् वस्तुमा अटूट विश्वास हुनुलाई नै श्रद्धा भनिन्छ। कृष्णभावनारूपी कर्तव्यमा संलग्न भएको व्यक्तिलाई भौतिक संसारसँग सम्बन्धित रहेर पारिवारिक परम्परा, मानवता, राष्ट्रियता आदिका लागि काम गर्नुपर्ने बाध्यता रहँदैन। पूर्वजन्ममा गरिएका राम्रा वा नराम्रा कर्मको प्रतिफलले नै मानिसलाई सकाम कर्ममा लगाउँदछ तर कृष्णभावनामा जागृत भइसकेको व्यक्तिलाई आफ्ना कर्मको शुभ फलका लागि प्रयत्नशील हुनु आवश्यक छैन, किनभने कृष्णभावनामा लागेका व्यक्तिका सबै कामहरू आध्यात्मिक स्तरमै हुन्छन्। उनीहरूमा राम्रो र नराम्राको द्वैतभाव नै रहँदैन। शारीरिक अवधारणाको बुद्धिको

परित्याग नै कृष्णभावनाको सर्वोच्च सिद्धि हो। कृष्णभावनामा उन्नति गर्नाले यो स्तर स्वतः प्राप्त हुन्छ।

कृष्णभावनामा रहेको व्यक्तिको दृढ निश्चय ज्ञानमा आधारित हुन्छ। "**वासुदेवः सर्वमिति स महात्मा सुदुर्लभः**" अर्थात् कृष्णभावनामा रहेको व्यक्ति एउटा दुर्लभ महात्मा हो, किनभने उसलाई समस्त सृष्टिको मूल कारण नै वासुदेव श्रीकृष्ण हुनुहुन्छ भन्ने कुराको ज्ञान भइसकेको हुन्छ। जसरी रूखको फेदमा पानी हाल्नाले त्यो पानी स्वतः त्यस रूखका हाँगाबिँगा र पातहरूसम्म पुग्दछ, त्यसै गरी कृष्णभावनाभावित मनुष्य आफ्नो परिवार, समाज, मानवता अर्थात् प्रत्येक प्राणीको स्वतः हितकारी सेवक बन्न पुग्दछ। यदि कुनै मानिसको कर्मबाट भगवान् श्रीकृष्ण प्रसन्न हुनुभएमा भने, त्यसबाट प्रत्येक व्यक्ति सन्तुष्ट हुन पुग्नेछ।

गुरुका समक्ष उहाँको मार्गनिर्देशनमा रहेर नै भगवान्को उत्कृष्ट सेवा गर्न सकिन्छ। गुरु भगवान् श्रीकृष्णका प्रामाणिक प्रतिनिधि हुनुहुन्छ। गुरुले आफ्ना शिष्यको स्वभावलाई बुझ्नुभएको हुन्छ र उसलाई कृष्णभावनामय कार्यमा लगाउन सक्नु हुन्छ। अतः कृष्णभावनामा पारङ्गत हुनका लागि मानिसले दृढतापूर्वक कार्य गर्नु पर्दछ र भगवान् श्रीकृष्णका प्रतिनिधिस्वरूप गुरुको आज्ञा पालन गर्नु पर्दछ। गुरुका उपदेशलाई नै मानिसले आफ्नो जीवनको लक्ष्य मान्नु पर्दछ। आफ्नो प्रसिद्ध गुरुस्तुतिमा विश्वनाथ चक्रवर्ती ठाकुर हामीलाई उपदेश दिँदै भन्नु हुन्छ—

*यस्यप्रसादात् भगवत्प्रदो*
*यस्याप्रसादान्न गतिः कुतोऽपि ।*
*ध्यायांस्तुवंस्तस्य यशस्त्रिसन्ध्यं,*
*वन्दे गुरोः श्रीचरणारविन्दम् ॥*

"गुरु प्रसन्न हुनुभए भगवान् पनि प्रसन्न हुनुहुन्छ। गुरुलाई प्रसन्न नबनाई कृष्णभावनाको स्तरसम्म पुग्नु सम्भव छैन। अतः हामीले गुरुको चिन्तन गर्नु पर्दछ र दिनमा तीन पटक गुरुकृपाको याचना गर्नु पर्दछ, अनि आफ्ना गुरुलाई सादर वन्दना गर्नु पर्दछ।" यो सम्पूर्ण प्रक्रिया शारीरिक अवधारणाको बुद्धिभन्दा पर पूर्ण आत्मज्ञानमा आधारित छ। यो सैद्धान्तिक मात्र नभएर व्यावहारिक पनि छ। सकाम कर्ममा इन्द्रियतृप्तिको कुनै सम्भावना छैन तर जो मानिस मानसिक रूपले दृढ छैन त्यही मानिस विभिन्न किसिमका सकाम कर्महरूतिर आकर्षित हुन्छ।

**यामिमां पुष्पितां वाचं प्रवदन्त्यविपश्चितः ।
वेदवादरताः पार्थ नान्यदस्तीति वादिनः ॥ ४२ ॥
कामात्मनः स्वर्गपरा: जन्मकर्मफलप्रदाम् ।
क्रियाविशेषबहुलां भोगैश्वर्यगतिं प्रति ॥ ४३ ॥**

याम् इमाम् — यी सबै; **पुष्पिताम्** — अलङ्कारमय; **वाचम्** — शब्दहरू; **प्रवदन्ति** — भन्दछन्; **अविपश्चितः** — अल्पज्ञ व्यक्तिहरू; **वेदवादरताः** — वेदका अनुयायी मानिने; **पार्थ** — हे पृथापुत्र; **न** — छैन; **अन्यत्** — अरू केही; **अस्ति** — छ; **इति** — यस प्रकार; **वादिनः** — समर्थक; **कामात्मनः** — इन्द्रियतृप्तिका इच्छुक; **स्वर्गपराः** — स्वर्ग जान चाहने; **जन्मकर्मफलप्रदाम्** — राम्रो जन्म र अन्य सकाम कर्म प्रदान गर्ने; **क्रियाविशेष** — आडम्बरयुक्त उत्सव; **बहुलाम्** — विभिन्न किसिमका; **भोग** — इन्द्रियभोगमा; **ऐश्वर्य** — सम्पन्नता; **गतिम्** — प्रगति; **प्रति** — तर्फ।

**अल्पज्ञानी व्यक्तिहरू वेदका आलङ्कारिक वचनहरूप्रति अति आसक्त हुन्छन्। त्यहाँ स्वर्ग प्राप्ति गराउने र राम्रो जन्म, शक्ति र यस्तै अन्य कुराहरू प्राप्त गराउने धेरै किसिमका सकाम कर्महरूको वर्णन छ। इन्द्रियभोग र सम्पन्न जीवनको चाहना राख्ने व्यक्तिहरू योभन्दा ठुलो अरू केही छैन भन्ने गर्दछन्।**

**तात्पर्य :** सामान्यतया मानिसहरू बुद्धिमान् हुँदैनन्, अज्ञानताका कारणले नै तिनीहरू वेदको कर्मकाण्ड विभागमा वर्णन गरिएका सकाम कर्महरूप्रति बढी आसक्त हुन्छन्। तिनीहरू स्वर्गमा आनन्द भोग गराउने इन्द्रियतृप्तिका साधनहरूभन्दा बढी केही चाहँदैनन्। स्वर्गमा मदीरा र सुन्दरीको अभाव हुँदैन र त्यहाँ भौतिक सम्पन्नता भन्ने कुरा अति सामान्य हुन्छ। वेदमा स्वर्गप्राप्तिका लागि धेरै धेरै यज्ञ-अनुष्ठानहरूको व्यवस्था छ। त्यसमा पनि ज्योतिष्टोम यज्ञ विशेष हो। भनिएको छ— जसले स्वर्ग प्राप्तिको चाहना राख्छ उसले अवश्य नै यी यज्ञहरू सम्पन्न गर्नै पर्दछ। यसै कुरालाई लिएर अल्पज्ञानी मानिसहरू वैदिक ज्ञानको सम्पूर्ण अभिप्राय नै यही हो भन्ने ठान्दछन्। यस्ता अनुभवशून्य व्यक्तिहरूका लागि कृष्णभक्तिका कार्यमा दृढ रहने कुरा धेरै कठिन हुन्छ। मूर्खहरू विषवृक्षको फूलहरूप्रति आसक्त हुन्छन्, उनीहरू यसको परिणाम जान्दैनन्। यसै गरी अज्ञानी अभक्तहरू पनि यस किसिमका इन्द्रियतृप्तिजन्य स्वर्गीय ऐश्वर्यप्रति आसक्त हुन्छन्।

वेदको कर्मकाण्ड खण्डमा भनिएको छ— "**अपाम सोममृता अभूम**" तथा "**अक्षय्यं ह वै चातुर्मास्ययाजिनः सुकृतं भवति।**" अर्थात् जसले

चातुर्मास्य तप गर्दछ त्यो व्यक्ति सधैँ अमर र प्रसन्न हुनका लागि सोमरस पिउनयोग्य हुन्छ। यस पृथ्वीमा पनि मानिसहरू इन्द्रियतृप्ति पाउन र शारीरिक शक्ति प्राप्त गर्न अत्यन्त उत्सुक हुन्छन्। सांसारिक बन्धनबाट मुक्ति पाउने विषयमा विश्वास नभएका यस्ता व्यक्तिहरू वैदिक यज्ञहरूको चकाचौंधतिर आकर्षित हुन्छन्। यस्ता व्यक्तिहरू सामान्यतया विषयी हुन्छन् र जीवनको स्वर्गीय सुखभन्दा बढ्ता अरू कुनै कुराको चाहना गर्दैनन्। भनिन्छ— स्वर्गमा 'नन्दन कानन' नामक बगैंचा छ। त्यहाँ स्वर्गीय सुन्दरी तरुणीहरू र सोमरसको पर्याप्त उपभोग गर्न पाइन्छ। यस्ता शारीरिक सुखहरू निश्चय नै ऐन्द्रियिक हुन्छन् र यस किसिमको शारीरिक सुख चाहने व्यक्तिहरू सांसारिक अस्थायी सुखहरूप्रति आसक्त बनेर भौतिक जगत्का स्वामी बन्न चाहन्छन्।

**भोगैश्वर्यप्रसक्तानां तयापहृतचेतसाम् ।**
**व्यवसायात्मिका बुद्धिः समाधौ न विधीयते ॥ ४४ ॥**

**भोग** — भौतिक भोग; **ऐश्वर्य** — सम्पन्नताप्रति; **प्रसक्तानाम्** — आसक्त हुनेहरूका लागि; **तया** — यस्ता वस्तुहरूले; **अपहृत-चेतसाम्** — मोहग्रस्त मन भएका; **व्यवसाय-आत्मिका** — दृढ निश्चयी; **बुद्धिः** — भगवान्को भक्ति; **समाधौ** — समाधि अवस्थामा; **न विधीयते** — दृढ हुँदैन।

**जसको मन इन्द्रियभोग र सांसारिक वैभवप्रति अत्यधिक आसक्त छ र जसलाई यस्ता वस्तुहरूले मोहित गर्दछ त्यस्ता व्यक्तिहरू भगवान्को अटल भक्तिमा दृढ हुन सक्दैनन्।**

**तात्पर्य :** समाधिको अर्थ स्थिर चित्त हो। वैदिक शब्दकोश निरुक्ति भन्दछ— **"सम्यक् आधीयतेऽस्मिन्नात्मतत्त्वयाथात्म्यम्"** अर्थात् जब मन आत्मालाई बुझ्नका लागि स्थिर हुन्छ, त्यही अवस्थालाई समाधि भनिन्छ। समाधि न भौतिक इन्द्रियभोगमा रुचि राख्नेहरूका लागि सम्भव छ न यस्ता अस्थायी वस्तुहरूबाट मोहित हुनेहरूका लागि सम्भव छ। तिनीहरू अलिकति भौतिक शक्तिका प्रभावले दूषित भएकै हुन्छन्।

**त्रैगुण्यविषया वेदा निस्त्रैगुण्यो भवार्जुन ।**
**निर्द्वन्द्वो नित्यसत्त्वस्थो निर्योगक्षेम आत्मवान् ॥ ४५ ॥**

**त्रैगुण्य** — भौतिक प्रकृतिका तीन गुणहरूसँग सम्बन्धित; **विषया** — विषयवस्तुमा; **वेदाः** — वैदिक साहित्य; **निस्त्रैगुण्यः** — प्रकृतिका तीन गुणहरूभन्दा पर; **भव** — होऊ; **अर्जुन** — हे अर्जुन; **निर्द्वन्द्वः** — द्वैत भाव नभएको; **नित्य सत्वस्थः** — शुद्ध आध्यात्मिक सत्तामा स्थित भएको; **निर्योगक्षेम** — सुरक्षा र लाभको भावनाबाट मुक्त; **आत्मवान्** — आफैँमा स्थित।

**वेदमा मुख्य गरी प्रकृतिका तीन गुणहरूका सम्बन्धमा उल्लेख छ, त्यसैले हे अर्जुन! तिमी यी तीन गुणभन्दा पर जाऊ। सम्पूर्ण द्वैतभावबाट मुक्त होऊ, समस्त लाभ र सुरक्षाका चिन्ताबाट पनि मुक्त होऊ र आत्मामा स्थित होऊ।**

**तात्पर्य :** सम्पूर्ण भौतिक कार्यहरू प्रकृतिका तीन गुणहरूका क्रिया-प्रतिक्रियामा समाहित छन्। तिनीहरूको उद्देश्य सकाम कर्म हो र यही सकाम कर्म नै भौतिक जगत्मा बन्धनको कारण हुन्छ। सकाम कर्महरूका माध्यमबाट वेदले विस्तारै साधारण मानिसलाई इन्द्रियतृप्तिका स्तरबाट उठाएर आध्यात्मिक स्तरसम्म पुऱ्याइदिन्छ। भगवान् श्रीकृष्ण आफ्ना शिष्य तथा मित्र अर्जुनलाई ब्रह्मजिज्ञासा वा परमआध्यात्मिक तत्त्वको प्रश्नबाट सुरु हुने वेदान्त-दर्शनको दिव्य स्थितिसम्म उठ्ने सल्लाह दिनु हुन्छ। यस संसारका सम्पूर्ण प्राणीहरू आफ्नो अस्तित्वका लागि अति कठिन सङ्घर्ष गरिरहेका छन्। भगवान्ले यो भौतिक जगत्को सृष्टि गरिसकेपछि तिनीहरूका लागि वैदिक ज्ञान प्रदान गर्नुभयो। यो वैदिक ज्ञानले मानिसलाई जीवनयापन गर्ने कला र भवबन्धनबाट छुट्ने विधिसमेतको बोध गराउँदछ। जब इन्द्रियतृप्तिका कार्यहरू वा कर्मकाण्डहरू समाप्त हुन्छन्, उपनिषद्का रूपमा आध्यात्मिक अनुभूतिको अवसर प्रदान गरिन्छ। उपनिषदहरू विभिन्न वेदहरूकै अङ्ग हुन्। *भगवद्गीता* पनि महाभारत नामक पाँचौ वेदको अङ्ग हो। उपनिषद् आध्यात्मिक जीवन प्रारम्भ भएको सङ्केत हो।

जहिलेसम्म यो भौतिक शरीर रहन्छ, तबसम्म भौतिक गुणहरूको क्रिया-प्रतिक्रिया भइरहन्छ। मानिसले सुख र दुःख, जाडो र गर्मी जस्ता द्वन्द्व वा द्वैतलाई सहन गर्न सिक्नु पर्दछ। यस्ता द्वैतहरूलाई सहेर नै ऊ लाभ र हानिसँग सम्बन्धित दुःखबाट मुक्त हुन सक्दछ। जब मानिस पूर्णतः भगवान् श्रीकृष्णको इच्छामा निर्भर हुन थाल्दछ, अनि मात्र उसले कृष्णभावनाले परिपूर्ण भएको दिव्य अवस्थालाई प्राप्त गर्न सक्दछ।

**यावानर्थ उदपाने सर्वतः सम्प्लुतोदके ।**
**तावान् सर्वेषु वेदेषु ब्राह्मणस्य विजानतः ॥ ४६ ॥**

**यावान्** — त्यो सबै; **अर्थ** — प्रयोजन; **उदपाने** — पानीको कूवामा; **सर्वतः** — सबै प्रकारबाट; **सम्प्लुतोदके** — विशाल जलाशयमा; **तावान्** — त्यसै गरी; **सर्वेषु** — सबै; **वेदेषु** — वैदिक साहित्यमा; **ब्राह्मणस्य** — परमब्रह्मलाई जान्ने मानिसको; **विजानतः** — पूर्ण ज्ञानी।

**जसरी एउटा सानो कूवाको काम विशाल जलाशयबाट तुरुन्त पूरा**

**हुन्छ त्यसै गरी वेदका पछाडि रहेको प्रयोजन परमब्रह्मलाई जानेपछि स्वतः पूर्ण हुन्छ।**

**तात्पर्य :** वैदिक साहित्यको कर्मकाण्ड खण्डमा उल्लेख गरिएका यज्ञ—अनुष्ठानहरूको उद्देश्य त व्यक्तिमा विस्तारै आत्मसाक्षात्कारको विकासलाई उत्साहित गर्नु हो। *भगवद्गीता* (१५.१५) मा आत्मसाक्षात्कारको उद्देश्यको स्पष्ट वर्णन छ। वेदाध्ययनको उद्देश्य नै भगवान् श्रीकृष्णलाई जान्नु हो। भगवान् श्रीकृष्ण प्रत्येक वस्तुका आदि कारण हुनुहुन्छ। अतः आत्मसाक्षात्कारको तात्पर्य श्रीकृष्णलाई जान्नु र श्रीकृष्णसँग रहेको आफ्नो आन्तरिक सम्बन्धलाई बुझ्नु हो। जीवात्मासँग भगवान् श्रीकृष्णको के सम्बन्ध छ भन्ने कुराको उल्लेख *श्रीमद्भगवद्गीता* (१५.७) मा गरिएको छ। जीवात्माहरू भगवान् श्रीकृष्णका अंश हुन्, त्यसैले प्रत्येक व्यष्टि जीवले आफूमा कृष्णभावनालाई जागृत गराउनु नै वैदिक ज्ञानको परिपूर्ण अवस्था हो। *श्रीमद्भागवत्* (३.३३.७) मा यही कुराको पुष्टि गर्दै भनिएको छ।

*अहो वत श्वपचोऽतो गरीयान् यज्जिह्वाग्रे वर्तते नाम तुभ्यम् ।*
*तेपुस्तपस्ते जुहुवुः सस्नुरार्या ब्रह्मानूचुर्नाम गृणन्ति ये त ॥*

हे प्रभु! जसले हजुरका पवित्र नामहरूको कीर्तन गर्दछ त्यो व्यक्ति सबैभन्दा नीच चाण्डाल (कुकुरभक्षी) कुलमा जन्मिएको भए पनि आत्मसाक्षात्कारको सर्वोच्च स्थितिमा रहेको मानिन्छ। यस्तो व्यक्तिलाई वैदिक अनुष्ठानअनुसार सबै प्रकारका तपस्या र यज्ञहरू सम्पन्न गरिसकेको मानिने छ र धेरै पटक सबै पवित्र तीर्थस्थलहरूमा स्नान गरेर वैदिक साहित्यको अध्ययन गरेको मानिने छ। यस्ता व्यक्तिलाई सर्वश्रेष्ठ आर्यसन्तति मानिने छ।

अतः यज्ञ कार्यमा मात्र आसक्त नभएर र असल किसिमको इन्द्रियभोगका लागि स्वर्गीय लोकहरूमा जाने मात्र चाहना नराखी मानिसले वैदिक ज्ञानको उद्देश्यलाई बुझ्न सक्ने बुद्धिमान् बन्नु पर्दछ। यो युगमा सर्वसाधारण मानिसहरूका लागि न वैदिक यज्ञ कार्यका सबै विधिविधानहरूको पालना गर्नु सम्भव छ न राम्रोसँग वेदान्त र उपनिषदहरूको अध्ययन गर्नु नै सम्भव छ। वेदको उद्देश्यलाई परिपूर्ति गर्नका लागि पर्याप्त समय, शक्ति, ज्ञान र साधनहरूको आवश्यकता पर्दछ। यी कर्महरू यो युगमा अत्यन्त कष्टपूर्ण छन्। तर, वैदिक संस्कृतिको सर्वोच्च लक्ष्य भगवन्नामको कीर्तनद्वारा पूर्ण गर्न सकिन्छ। यो कुराको समर्थन पतित आत्माका परमउद्धारक भगवान् चैतन्य महाप्रभुले गर्नुभएको छ। एकपटक एकजना वैदिक विद्वान् प्रकाशानन्द सरस्वतीले भगवान् चैतन्यसँग सोधेका थिए— तपाईंले किन वेदान्तको

अध्ययन नगरेर एउटा भावुक व्यक्तिले जस्तै केवल भगवन्नामको जप गर्दै हिँड्नु हुन्छ? यो सुनेर श्रीचैतन्यले उत्तर दिनुभएको थियो—"मलाई मेरा गुरुले ठुलो मूर्ख व्यक्ति ठानेर भगवान् श्रीकृष्णको पवित्र नाम जप गर्ने आदेश दिनुभएको छ। त्यसैले मैले यसो गरेको हूँ र पागलजस्तै नामसङ्कीर्तनमा प्रेमोन्मत्त भएको हूँ।" यस कलियुगमा अधिकांश मानिसहरू मूर्ख छन्। तिनीहरूले वेदान्त दर्शनलाई बुझ्न सक्ने पर्याप्त शिक्षा पाएका छैनन्। निर्वाध रूपमा पवित्र भगवन्नामको उच्चारण गर्नाले वेदान्तदर्शनको सर्वोच्च लक्ष्य पूर्ण हुन्छ। वेदान्त, वैदिक ज्ञानको पराकाष्ठा हो र वेदान्तदर्शनका मूल प्रवर्तक तथा ज्ञाता भगवान् श्रीकृष्ण हुनुहुन्छ। सबैभन्दा ठुलो वेदान्ती महात्मा त्यही हो जसले भगवन्नामको पावन कीर्तनमा आनन्द पाउँदछ। सम्पूर्ण वैदिक रहस्यवादको परमउद्देश्य यही हो।

**कर्मण्येवाधिकारस्ते मा फलेषु कदाचन ।**
**मा कर्मफलहेतुर्भूर्मा ते सङ्गोऽस्त्वकर्मणि ॥ ४७ ॥**

**कर्मणि** — कर्तव्य कर्ममा; **एव** — निश्चय नै; **अधिकारः** — अधिकार; **ते** — तिम्रो; **मा** — छैन; **फलेषु** — फलमा; **कदाचन** — कहिल्यै पनि; **मा** — छैन; **कर्मफल** — कर्मको फलमा; **हेतु** — कारण; **भू** — होऊ; **मा** — होइन; **ते** — तिम्रो; **सङ्गः** — आसक्ति; **अस्तु** — हुनु पर्दछ; **अकर्मणि** — निर्धारित कर्म नगर्नमा।

**तिमीलाई आफ्नो निर्धारित कर्म गर्ने मात्र अधिकार छ तर कर्मको फल पाउने-नपाउने कुरा तिम्रो अधीनमा छैन। तिमीले आफूलाई कर्मफलको कारण पनि कहिल्यै नसोच र कर्तव्य गर्नबाट विमुख पनि कहिल्यै नहोऊ।**

**तात्पर्य :** यहाँ तीनवटा विचारणीय कुरा छन्—कर्तव्य कर्म, स्वेच्छाचारी कर्म र अकर्म। कर्तव्य कर्म ती हुन्, जो व्यक्तिद्वारा आर्जित भौतिक प्रकृतिका गुणहरूबाट निर्देशित हुन्छन्। स्वेच्छाचारी कर्म (विकर्म) को तात्पर्य त्यस्तो अनाधिकृत कर्म हो जसको अनुमति महापुरुषहरूले दिएका छैनन् र अकर्मको अर्थ आफ्नो निर्धारित कर्म नगर्नु हो। भगवान्ले अर्जुनलाई कर्म नगरी नसक्न र फलप्रति आसक्त नभई आफ्नो निर्धारित कर्म सम्पन्न गर्ने सल्लाह दिनुभएको छ। आफ्ना कर्मको फलप्रति आसक्त हुनु पनि एउटा कर्मबन्धन नै हो। यसो गर्नाले कर्ता आफूद्वारा गरिएका कर्मका फलको भोक्ता बन्दछ।

जहाँसम्म निर्धारित कर्महरूको सम्बन्ध छ, तिनलाई तीनवटा उपविभागमा बाँड्नु उपयुक्त हुन्छ—नित्य कर्म, आपत्कालीन कर्म र इच्छित कर्म।

नित्य कर्म शास्त्रहरूको निर्देशनअनुसार सत्त्व गुणमा रहेर फलको आशा नराखी गरिन्छ। फलको आशा राखेर गरिने कर्म बन्धनका कारण हुन्छन्। यस्ता कर्मलाई पवित्र कर्म मानिँदैन, आफ्नो निर्धारित कर्म गर्नु प्रत्येकको अधिकारको कुरा हो। तर त्यस्तो कर्म गर्दा फलको आसक्ति नराखी गर्नु पर्दछ। कर्तव्यप्रतिको यस किसिमको अनासक्तिले मानिसलाई निस्सन्देह मुक्तिका मार्गमा लैजान्छ।

भगवान्ले अर्जुनलाई कर्मफलप्रति आसक्त नभई लडाइँलाई कर्तव्यकै विषय ठानेर युद्ध गर्ने सल्लाह दिनुभएको छ। युद्धमा उनको असहभागिता पनि आसक्तिकै अर्को पक्ष हो। यस किसिमको आसक्तिले व्यक्तिलाई कहिल्यै पनि मुक्तिको मार्गमा लैजाँदैन। कुनै पनि किसिमको आसक्ति — त्यो सकारात्मक होस् या नकारात्मक, त्यो बन्धनको कारण हुन्छ। काम नगर्नु पाप हो। त्यसैले अर्जुनका लागि कर्तव्य कर्मका रूपमा युद्ध गर्नु नै मुक्तिको एकमात्र पवित्र मार्ग हो।

**योगस्थः कुरु कर्माणि सङ्‌ग त्यक्त्वा धनञ्जय ।**
**सिद्ध्यसिद्ध्योः समो भूत्वा समत्वं योग उच्यते ॥ ४८ ॥**

**योगस्थः** — समभावमा रहेर; **कुरु** — गर; **कर्माणि** — कर्महरू; **सङ्‌गम्** — आसक्तिलाई; **त्यक्त्वा** — त्यागेर; **धनञ्जय** — हे अर्जुन!; **सिद्धिअसिद्ध्योः** — सफलता वा असफलतामा; **समः** — समान; **भूत्वा** — भएर; **समत्वं** — समतालाई नै; **योगः** — योग; **उच्यते** — भनिन्छ।

**हे अर्जुन! सफलता वा असफलताका सम्पूर्ण आसक्तिलाई त्याग गरेर समभावमा रहेर आफ्नो कर्तव्य गर। यही समभावलाई नै योग भनिन्छ।**

**तात्पर्य :** भगवान् श्रीकृष्ण अर्जुनलाई योगमा रहेर कर्म गर्ने सल्लाह दिनु हुन्छ। त्यसोभए योग भनेको के हो त? योगको अर्थ — सदा चञ्चल रहने इन्द्रियहरूलाई नियन्त्रणमा राखेर मनलाई परमात्मामा केन्द्रित गर्नु हो। परमात्मा भनेको को हुनुहुन्छ? परमात्मा भगवान् हुनुहुन्छ। स्वयम् भगवान्ले नै अर्जुनलाई युद्ध गर भनिराख्नुभएकाले युद्धको परिणामसँग अर्जुनको कुनै सरोकार छैन। जय र पराजयको कुरा भगवान् श्रीकृष्णसँग सम्बन्धित छ। अर्जुनले केवल श्रीकृष्णको निर्देशनअनुसार लडाइँ मात्र गर्नु छ। भगवान् श्रीकृष्णका निर्देशनको पालन गर्नु नै वास्तविक योग हो। कृष्णभावनामृत नामक पद्धतिमा यसको अभ्यास गराइन्छ। कृष्णभावनाका माध्यमबाट मात्रै व्यक्तिमा हुने स्वामित्वभावको परित्याग गर्न सकिन्छ। यसका लागि व्यक्ति भगवान् श्रीकृष्णको दास बन्नु पर्दछ वा श्रीकृष्णका दासको दास बन्नु पर्दछ।

कृष्णभावनामा रहेर कर्म गर्ने एकमात्र विधि यही हो। यसै विधिद्वारा योगमा स्थित रहेर कर्म गर्न सकिन्छ।

अर्जुन क्षत्रिय हुन् त्यसैले उनी वर्णाश्रम धर्मका अनुयायी पनि हुन्। विष्णुपुराणमा भनिएको छ— भगवान् विष्णुलाई प्रसन्न बनाउनु नै वर्णाश्रम धर्मको एकमात्र उद्देश्य हो। सबैभन्दा पहिला आफूलाई सन्तुष्ट पार्न खोज्नु सांसारिक नियम हो तर यहाँ पहिले आफूलाई होइन भगवान् श्रीकृष्णलाई सन्तुष्ट पार्न खोजिन्छ। भगवान् श्रीकृष्णलाई सन्तुष्ट नबनाईकन कसैले पनि वर्णाश्रम धर्मको पालन गर्न सक्दैन। यहाँ अप्रत्यक्ष रूपले भगवान् श्रीकृष्णले भने अनुसारको कर्म गर्ने सल्लाह अर्जुनलाई दिइएको छ।

**दूरेण ह्यवरं कर्म बुद्धियोगाद्धनञ्जय ।**
**बुद्धौ शरणमन्विच्छ कृपणाः फलहेतवः ॥ ४९ ॥**

**दूरेण** — टाढैबाट छोडिदेऊ; **हि** — निश्चय नै; **अवरम्** — निन्दित; **कर्म** — कामहरू; **बुद्धियोगात्** — कृष्णभावनाको बलमा; **धनञ्जय** — हे अर्जुन; **बुद्धौ** — यस किसिमको चेतनामा; **शरणम्** — पूर्ण समर्पण हुने; **अन्विच्छ** — प्रयास गर; **कृपणाः** — कञ्जूसहरू हुन्; **फलहेतवः** — फलका इच्छाले कर्म गर्नेहरू।

**हे धनञ्जय! भक्तिमय सेवाद्वारा सम्पूर्ण निन्दित कर्मबाट टाढा बस र त्यही सेवाभावमा रहेर भगवान्को शरणमा पर। आफ्ना सकाम कर्महरूको फल भोग्न चाहनेहरू कृपण वा विवेकहीन हुन्, तुच्छ विचारका हुन्।**

**तात्पर्य :** जसले भगवान्को शाश्वत सेवकका रूपमा आफ्नो वास्तविक अस्तित्वलाई राम्ररी बुझ्दछ त्यो व्यक्तिले अरू सबै कुरालाई छोडेर आफूलाई कृष्णभावनाभावित कार्यमा लगाइरहन्छ। बुद्धियोगको तात्पर्य भगवान्को दिव्य प्रेमाभक्ति हो भन्ने कुरा पहिल्यै भनिसकियो। यस्तै प्रकारको भक्तिसेवा नै जीवात्माहरूको सही कर्मपथ हो। केवल तुच्छ बुद्धि भएका कृपण व्यक्तिहरूले मात्रै आफूले गरेका कर्महरूको फल भोग्न चाहन्छन्, जसले गर्दा उनीहरू यो भवबन्धनमा अझ बढी फँस्दछन्। कृष्णभावनामा रहेर गरिने कर्महरूबाहेक अरू सबै क्रियाकलापहरू घृणित छन्, किनभने ती कर्महरूले कर्तालाई निरन्तर जन्म र मृत्युको चक्रमा बाँधिरहन्छन्। अतः मानिसले आफू कर्मको कारण बन्ने इच्छा कहिल्यै राख्नु हुँदैन। प्रत्येक कार्य भगवान् श्रीकृष्णका सन्तुष्टिका लागि कृष्णभावनामा रहेर गर्नु पर्दछ। कृपणहरू कठिन परिश्रम वा सौभाग्यद्वारा आर्जित धन-सम्पत्तिको उपभोग कसरी गर्नु पर्दछ भन्ने कुरा नै जान्दैनन्। व्यक्तिले आफ्नो सम्पूर्ण शक्ति कृष्णभावनामा रहेर क्रियाशील हुँदै खर्च गर्नु

पर्दछ, यसो गर्नाले नै उसको जीवन सफल बन्दछ। कृपणहरूले जस्तै एक अभागी व्यक्तिले पनि आफ्नो मानवीय शक्तिलाई भगवान्‌का सेवामा लगाउँदैन।

**बुद्धियुक्तो जहातीह उभे सुकृतदुष्कृते ।**
**तस्माद्योगाय युज्यस्व योगः कर्मसु कौशलम् ॥ ५० ॥**

**बुद्धियुक्तः** — भक्ति-सेवामा तल्लीन भएको व्यक्ति; **जहाति** — मुक्त हुन सक्दछ; **इह** — यसै जीवनमा; **उभे** — दुवै; **सुकृतदुष्कृते** — राम्रो वा नराम्रो परिणामबाट; **तस्मात्** — त्यसैले; **योगाय** — भक्तिपूर्ण सेवाका लागि; **युज्यस्व** — यसरी तल्लीन होऊ; **योगः** — कृष्णभावना; **कर्मसु** — सबै कर्महरूमा; **कौशलम्** — कुशलता हो।

**भगवद्भक्तिमा लागेको मानिसले यही जीवनमा नै आफूलाई राम्रा र नराम्रा दुवै कर्मबाट मुक्त गराउँदछ, त्यसैले तिमी भक्तियोग प्राप्त गर्ने प्रयत्न गर, किनभने सम्पूर्ण कर्ममा कुशलता नै योग हो।**

**तात्पर्य** : अनादि कालदेखि जीवात्माले आफ्ना राम्रा र नराम्रा कर्मका विभिन्न प्रतिफलहरू सञ्चित गर्दै आएको छ, जसले गर्दा ऊ निरन्तर आफ्नो स्वरूपबाट अनभिज्ञ छ। *भगवद्गीताको* उपदेशबाट यो अज्ञानलाई हटाउन सकिन्छ। गीताले हामीलाई सबैतिरबाट भगवान् श्रीकृष्णका शरणमा जान सिकाउँदछ र जन्म-जन्मान्तरसम्म रहने कर्मफलको बन्धनबाट मुक्त हुने उपाय बताउँदछ। त्यसैले यहाँ अर्जुनलाई कृष्णभावनामा रहेर कर्म गर्ने सल्लाह दिइएको छ। यही नै कर्मफलको प्रक्रियाबाट पवित्र हुने उपाय हो।

**कर्मजं बुद्धियुक्ता हि फलं त्यक्त्वा मनीषिणः ।**
**जन्मबन्धविनिर्मुक्ताः पदं गच्छन्त्यनामयम् ॥ ५१ ॥**

**कर्मजम्** — सकाम कर्मका कारणले; **बुद्धियुक्ताः** — भक्तिसेवामा तल्लीन रहेर; **हि** — निश्चय नै; **फलम्** — प्रतिफल; **त्यक्त्वा** — त्यागेर; **मनीषिणः** — महान् ऋषिहरू वा भक्तहरू; **जन्मबन्ध** — जन्म र मृत्युको बन्धनबाट; **विनिर्मुक्ताः** — मुक्त भएको; **पदम्** — स्थितिमा; **गच्छन्ति** — पुग्दछन्; **अनामयम्** — कष्टरहित भएर।

**यसरी भगवान्‌को भक्तिमा तल्लीन रहेर महर्षिहरू वा भक्तहरूले आफूलाई सांसारिक कर्मका प्रतिफलबाट मुक्त गर्दछन् र यसरी नै जन्म-मृत्युका चक्रबाट मुक्त भएर तिनीहरूले सम्पूर्ण दुःखभन्दा परको अवस्था ( भगवद्धाम ) प्राप्त गर्दछन्।**

**तात्पर्य :** मुक्त भएका जीवात्माहरू त्यस ठाउँमा पुग्दछन् जहाँ कुनै किसिमको भौतिक कष्ट हुँदैन। *श्रीमद्भागवत्* (१०.१४.५८)मा भनिएको छ—

*समाश्रिता ये पदपल्लवप्लवं महत्पदं पुण्ययशो मुरारेः ।*
*भवाम्बुधिर्वत्सपदं परं पदं पदं पदं यद्विपदां न तेषाम् ॥*

जसले चराचर जगत्का एकमात्र आश्रय हुनुभएका, मुकुन्द नामले विख्यात सबैका मुक्तिदाता श्रीभगवान्का चरणकमलरूपी डुङ्गालाई समातेको छ, उसका लागि यो भौतिक संसाररूपी समुद्र गाईका बाच्छाका खुरले बनाएको खाल्डोमा जम्मा भएको पानीको कुण्डजस्तै सामान्य हुन्छ। उसको लक्ष्य हुन्छ— परमपद, अर्थात वैकुण्ठ, जहाँ भौतिक कष्टहरू छैनन्। त्यस ठाउँमा यहाँजस्तै पाइला पाइलामा कष्ट हुँदैन।

अज्ञानका कारणले गर्दा मानिसले यो भौतिक जगत् दुःखमय छ र यहाँ प्रत्येक पाइलामा खतरा छ भन्ने कुरा बुझ्दैन। अज्ञानकै कारणले अल्पबुद्धि मनुष्यहरू सकाम कर्मद्वारा नै सुख पाइन्छ भन्ने ठानेर त्यस्तै कर्म गर्दै परिस्थितिसँग सामञ्जस्य गर्ने प्रयत्न गर्दछन्। तिनीहरू यो संसारमा कहीँ पनि दुःखरहित जीवन दिनसक्ने कुनै भौतिक शरीर छैन भन्ने कुरा बुझ्दैनन्। जन्म, मृत्यु, बुढ्यौली र रोगजस्ता जीवनका कष्टहरू यो संसारमा जहाँतहीँ विद्यामान छन्। तर, जसले भगवान्को नित्य सेवकका रूपमा आफ्नो वास्तविक अस्तित्वलाई बुझेको छ, र यसै गरी जसले भगवान्को स्वरूपलाई पनि बुझेको छ, त्यही व्यक्तिले आफूलाई भगवान्को प्रेमाभक्तिमा संलग्न गराउन सक्दछ। अनि मात्र त्यो व्यक्ति वैकुण्ठलोकमा जानयोग्य हुन्छ। वैकुण्ठलोकमा भौतिक जगत्मा जस्तो कष्टमय जीवन छैन र त्यहाँ समय र मृत्युको प्रभाव पनि हुँदैन। आफ्नो वास्तविक स्वरूपको जानकारी पाउनुको अर्थ भगवान्को अलौकिक स्वरूपको पनि जानकारी पाउनु हो। जसले भ्रमवश जीवात्माको अवस्थालाई र परमात्माको अवस्थालाई एउटै स्तरको भन्ने बुझेको छ, त्यो व्यक्ति अन्धकारमा छ भन्ने बुझ्नु पर्दछ र ऊ आफूलाई भगवान्को भक्तिमा लगाउन पनि असमर्थ हुन्छ। जसले आफूलाई भगवान् ठान्दछ त्यसले बारम्बार दोहोरिने जन्म र मृत्युको बाटोलाई अझ पछ्याउँदै छ भन्ने बुझ्नु पर्दछ। तर, जसले आफूलाई भगवान्को सेवक ठानेर, सेवामा लगाउँछ त्यो व्यक्ति तुरुन्त वैकुण्ठलोकमा जानयोग्य हुन्छ। भगवान्को सेवालाई नै कर्मयोग वा बुद्धियोग भनिन्छ। अझ स्पष्ट शब्दमा यसलाई भक्तिसेवा भन्न सकिन्छ।

**यदा ते मोहकलिलं बुद्धिर्व्यतितरिष्यति ।**
**तदा गन्तासि निर्वेदं श्रोतव्यस्य श्रुतस्य च ॥ ५२ ॥**

**यदा** — जब; **ते** — तिम्रो; **मोह** — भ्रमको; **कलिलम्** — घना जङ्गलमा; **बुद्धिः** — बुद्धियुक्त दिव्य सेवा; **व्यतितरिष्यति** — पार गर्नेछ; **तदा** — त्यस समय; **गन्तासि** — जानेछौ; **निर्वेदम्** — वैराग्यलाई; **श्रोतव्यस्य** — सुन्नुपर्नेप्रति; **श्रुतस्य** — सुनिसकिएका; **च** — पनि।

**जब तिम्रो बुद्धिले मोहरूपी घना जङ्गललाई पार गर्नेछ, त्यस समय तिमी पहिल्यै सुनिसकिएका र सुन्नुपर्ने सबै कुराप्रति विरक्त हुनेछौ।**

**तात्पर्य :** भगवान्को भक्तिले गर्दा वैदिक कर्मकाण्डहरूप्रति विरक्ति भएका धेरै उदाहरणहरू भगवान्का महान् भक्तहरूका जीवनमा देख्न पाइन्छ। जब मानिस भगवान् श्रीकृष्णलाई र श्रीकृष्णसँग रहेको आफ्नो सम्बन्धलाई वास्तविक रूपले बुझ्न थाल्दछ, त्यस समय ऊ एउटा अनुभवी ब्राह्मण नै भए पनि सकाम कर्मका रीति-रिवाजप्रति पूर्णतः विरक्त हुन्छ। यस भक्तिमार्गका महान् भक्त तथा आचार्य श्रीमाधवेन्द्र पुरी भन्नु हुन्छ—

*सन्ध्यावन्दन भद्रमस्तु भवतां भोः स्नान तुभ्यं नमो ।*
*भो देवाः पितरश्च तर्पणविधौ नाहं क्षमः क्षम्यताम् ॥*
*यत्र क्वापि निषद्य यादवकुलोत्तमस्य कंसद्विषः ।*
*स्मारं स्मारमघं हरामि तदलं मन्ये किमन्येन मे ॥*

"हे मेरा त्रिकाल सन्ध्यावन्दनहरू! तिम्रो जय होस्, हे स्नान! तिमीलाई पनि म प्रणाम गर्छु। हे देवताहरू! पितृहरू! तपाईंहरूप्रति सम्मान अर्पण गर्न नसकेकोमा मलाई क्षमा दिनुहोस्। अहिले म जहाँ बस्दछु त्यही यदुकुलका महान् सन्तति तथा कंसका शत्रु भगवान् श्रीकृष्णको मात्र सम्झना आइरहन्छ। मलाई लाग्दछ, यसैबाट म आफूलाई सम्पूर्ण पापमय बन्धनहरूबाट मुक्त पार्न सक्दछु। मेरा विचारमा मलाई यही नै पर्याप्त छ।"

वैदिक विधिविधानअन्तर्गत पर्ने सबै किसिमका त्रिकाल सन्ध्याहरू, प्रातःकालीन स्नान, पितृतर्पण, इत्यादि कुराहरू नवदीक्षितहरूका लागि मात्र अनिवार्य हुन्छन् तर जो पूर्णरूपले कृष्णभावनामा छ, भगवान् श्रीकृष्णकै दिव्य सेवामा संलग्न छ त्यो व्यक्ति यी सारा विधिविधानप्रति उदासीन रहेको हुन्छ, किनभने यसबाट पाइने पूर्णता उसले पहिले नै प्राप्त गरिसकेको हुन्छ। यदि कुनै व्यक्ति भगवान् श्रीकृष्णको सेवा गरेर ज्ञानका स्तरमा पुगेमा उसले शास्त्रहरूमा भनिएका विविध किसिमका तपस्या र यज्ञहरू सम्पादन गरिरहनु आवश्यक छैन। यसै गरी यदि कसैले वेदको लक्ष्य भगवान् श्रीकृष्णसम्म पुग्नु हो भन्ने कुरा बुझेको छैन र यस्तै यज्ञ कार्यमा लागिरहेमा, त्यसले निरर्थक समय नष्ट गरिरहेछ

भन्ने बुझ्नु पर्दछ। कृष्णभावनामा रहेको व्यक्ति शब्दब्रह्मको सीमाभन्दा पनि पर पुगेको हुन्छ वा वेद र उपनिषद्हरूको परिधिभन्दा पनि माथि उठिसकेको हुन्छ।

**श्रुतिविप्रतिपन्ना ते यदा स्थास्यति निश्चला ।**
**समाधावचला बुद्धिस्तदा योगमवाप्स्यसि ॥ ५३ ॥**

**श्रुति** — वैदिक ज्ञानको; **विप्रतिपन्ना** — सकाम प्रतिफलबाट अप्रभावित रहेर; **ते** — तिम्रो; **यदा** — जब; **स्थास्यति** — रहनेछ; **निश्चला** — अचल; **समाधौ** — दिव्य चेतनामा; **अचला** — स्थिर; **बुद्धिः** — बुद्धि; **तदा** — त्यस समय; **योगम्** — आत्मसाक्षात्कार (आत्मानुभूति), **अवाप्स्यसि** — पाउने छौ।

**जब तिम्रो मन वेदका आलङ्कारिक भाषाबाट विचलित हुनेछैन र आत्माको अनुभूतिमा एकाग्र भएर स्थिर रहने छ तब मात्र तिमीले दिव्य चेतना प्राप्त गर्नेछौ।**

**तात्पर्य :** कुनै व्यक्ति समाधिमा छ भन्नुको अर्थ पूर्णतया कृष्णभावनामा भावित भएको छ, भन्ने हुन्छ अर्थात् पूर्ण समाधिमा रहँदा उसले ब्रह्म वा परमात्मा वा भगवान्‌को अनुभूति गरिरहेको हुन्छ। व्यक्तिले आफूलाई भगवान् श्रीकृष्णको शाश्वत सेवक सम्झिनु नै आत्मसाक्षात्कारको सर्वोच्च पूर्णता हो र कृष्णभावनामा रहेर कर्म गर्नु नै उसको एकमात्र कर्तव्य हो। कृष्णभावनाभावित वा भगवान्‌को एकनिष्ठ भक्त वेदहरूका आलङ्कारिक भाषाबाट विचलित हुनु हुँदैन र स्वर्गीय लोकहरू प्राप्त गर्ने अभिप्रायले सकाम कर्ममा लाग्नु पनि हुँदैन। कृष्णभावनामा मानिस प्रत्यक्ष रूपले भगवान् श्रीकृष्णका सम्पर्कमा आउँदछ, र यही दिव्य स्थितिमा रहेर नै उसले श्रीकृष्णका सारा उपदेशहरूलाई बुझ्न सक्दछ। यस किसिमको क्रियाकलापबाट ऊ निश्चय नै निर्णायक ज्ञान प्राप्त गर्न सक्ने हुन्छ। यसका लागि उसले भगवान् श्रीकृष्णको वा श्रीकृष्णका प्रतिनिधिस्वरूप गुरुको आज्ञा पालन मात्रै गरे हुन्छ।

अर्जुन उवाच
**स्थितप्रज्ञस्य का भाषा समाधिस्थस्य केशव ।**
**स्थितधीः किं प्रभाषेत किमासीत व्रजेत किम् ॥ ५४ ॥**

**अर्जुन उवाच** — अर्जुनले भने; **स्थितप्रज्ञस्य** — कृष्णभावनामा स्थिर रहेका व्यक्तिको; **का** — कस्तो; **भाषा** — भाषा; **समाधिस्थस्य** — समाधिमा रहेका व्यक्तिको; **केशव** — हे कृष्ण; **स्थितधीः** — कृष्णभावनामा दृढ रहेको व्यक्ति; **किम्** — के; **प्रभाषेत** — बोल्दछ; **किम्** — कसरी; **आसीत** — रहन्छ; **व्रजेत** — हिँड्छ; **किम्** — कसरी।

**अर्जुनले सोधे — हे कृष्ण! अध्यात्ममा लीन भएका व्यक्तिको पहिचान के हो? ती कसरी बोल्दछन्? तिनको भाषा कस्तो हुन्छ? ती कसरी बस्दछन्, अनि कसरी हिँड्दछन्?**

**तात्पर्य :** जसरी प्रत्येक व्यक्तिको, उसको व्यक्तिगत स्थिति अनुरूपको एउटा विशेष लक्षण वा पहिचान हुन्छ, त्यसै गरी कृष्णभावनाभावित व्यक्तिको पनि बोलाइ, हिँडाइ, सोचाइ र अनुभव गराइमा आफ्नै किसिमको विशिष्ट स्वभाव हुन्छ। जसरी एउटा धनी मानिसका केही विशेष लक्षण हुन्छन्, जसका आधारमा त्यो धनी मानिस हो भन्ने बुझिन्छ, जसरी एउटा रोगीका केही विशेष लक्षणहरू हुन्छन् जसद्वारा ऊ रोगी छ भन्ने बुझिन्छ, जसरी एउटा विद्वान्का आफ्नै लक्षण वा पहिचान हुन्छन्, त्यसै गरी दिव्य कृष्णभावनामा लागेका व्यक्तिका कतिपय व्यवहारमा पनि त्यस किसिमको विशिष्ट लक्षण देख्न सकिन्छ। *भगवद्गीताको* अध्ययनबाट उसका यी विशिष्ट लक्षणहरू जान्न सकिन्छ। सबभन्दा महत्त्वपूर्ण कुरा भनेको कृष्णभावनामा लागेको व्यक्ति कसरी बोल्दछ? किनभने बोली नै कुनै पनि मानिसको सबभन्दा महत्त्वपूर्ण गुण हो। भनिन्छ, बोलीबाट मूर्खको पहिचान हुन्छ। साँच्चै नै राम्रो पोशाक लगाएको एउटा मूर्खलाई तबसम्म चिन्न सकिँदैन जबसम्म ऊ बोल्दैन, तर जब ऊ बोल्दछ तुरुन्त उसको वास्तविक रूप प्रकट हुन्छ। कृष्णभावनाभावित व्यक्तिलाई तुरुन्त चिन्ने उपाय भनेको ऊ भगवान् श्रीकृष्णका बारेमा मात्र कुरा गर्दछ र श्रीकृष्णसँग सम्बन्धित विषयमा मात्र बोल्दछ। उसका बाँकी लक्षणहरू विस्तारै स्वतः प्रकट हुँदै जान्छन्, जसको उल्लेख तल गरिन्छ।

श्रीभगवानुवाच

**प्रजहाति यदा कामान् सर्वान् पार्थ मनोगतान् ।**
**आत्मन्येवात्मना तुष्टः स्थितप्रज्ञस्तदोच्यते ॥ ५५ ॥**

**श्रीभगवानुवाच** — भगवान्ले भन्नुभयो; **प्रजहाति** — छोड्दछ; **यदा** — जब; **कामान्** — इन्द्रियभोगको इच्छा; **सर्वान्** — सबै किसिमका; **पार्थ** — हे पृथापुत्र; **मनोगतान्** — मनमा रहेका; **आत्मनि** — आत्माको शुद्ध अवस्थामा; **एव** — निश्चय नै; **आत्मना** — विशुद्ध मनले; **तुष्ट** — सन्तुष्ट; **स्थितप्रज्ञः** — अध्यात्ममा अवस्थित; **तदा** — त्यस समय; **उच्यते** — भनिन्छ।

**भगवान्ले भन्नुभयो — हे पार्थ! जब मानिसले मानसिक चिन्तनबाट इन्द्रियतृप्तिका लागि उठ्ने सबै किसिमका इच्छाहरूलाई त्यागिदिन्छ र त्यसरी पवित्र भएको उसको मनले आफ्नै आत्मामा परम् सन्तुष्टि प्राप्त**

**गर्न थाल्दछ अनि मात्र त्यस्तो व्यक्तिलाई पावन तथा दिव्य चेतनामा अवस्थित ( स्थितप्रज्ञ ) मानिन्छ।**

**तात्पर्य :** *श्रीमद्भागवत्मा* भनिएको छ— पूर्णरूपले कृष्णभावनामा वा भगवद्भक्तिमा रहेको व्यक्तिमा महान् ऋषिमा हुने सबै असल गुणहरू विद्यमान् हुन्छन् तर जो व्यक्ति कृष्णभावनामा अवस्थित छैन, त्योसँग राम्रो योग्यता हुनै सक्दैन किनभने ऊ आफ्नै मानसिक चिन्तनको आश्रयमा रहेको हुन्छ। त्यसैले यहाँ ठीक भनिएको छ— मानिसले मानसिक चिन्तनद्वारा उत्पन्न भएका सम्पूर्ण विषयवासनालाई त्याग्नु पर्दछ। कृत्रिम साधनले यिनलाई रोक्नु सम्भव छैन। यदि कोही कृष्णभावनामा संलग्न रहेको व्यक्ति भएमा अतिरिक्त परिश्रमबिना नै उसका इन्द्रियजन्य चाहनाहरू स्वतः साम्य हुन्छन्। त्यसैले मानिसले नहिच्किचाइकन कृष्णभावनामा लाग्नु पर्दछ किनभने यस किसिमको भक्तिले उसलाई दिव्य चेतना प्राप्त गराउन सहयोग गर्दछ। अत्यन्त उन्नत अवस्थामा पुगेका महात्माहरू आफूलाई परमेश्वरका शाश्वत सेवकका रूपमा अनुभव गरेर आत्मसन्तुष्ट हुन्छन्। यस्ता दिव्य रूपमा अवस्थित व्यक्तिमा भौतिकताबाट उत्पन्न भएका विषयवासनाहरू रहँदै-रहँदैनन्, बरु उनीहरू आफूलाई भगवान्का नित्य सेवक मानेर सहज रूपमा सधैँ प्रसन्न रहन्छन्।

**दुःखेष्वनुद्विग्नमनाः सुखेषु विगतस्पृहः ।**
**वीतरागभयक्रोधः स्थितधीर्मुनिरुच्यते ॥ ५६ ॥**

**दुःखेषु** — तीन किसिमका तापहरूमा; **अनुद्विग्नमनाः** — मन विचलित नहुने; **सुखेषु** — सुखमा; **विगतस्पृहः** — अनुराग नहुने; **वीतराग** — आसक्तिबाट मुक्त; **भय** — डर; **क्रोधः** — रीस; **स्थितधीः** — मन स्थिर भएको; **मुनिः** — ऋषि; **उच्यते** — भनिन्छ।

**तीन तापहरूका बीचमा रहँदा पनि जसको मन विचलित हुँदैन, वा सुखमा हुँदा जसको मन प्रफुल्लित हुँदैन र जो डर, क्रोध र आसक्तिबाट मुक्त छ त्यसैलाई स्थितप्रज्ञ सन्त भनिन्छ।**

**तात्पर्य :** वास्तविक निष्कर्षमा नपुगी मानसिक तर्क-वितर्कद्वारा विभिन्न किसिमले मनलाई उत्तेजित पार्नु नै **मुनि** शब्दको अर्थ हो। भनिन्छ— प्रत्येक मुनिको दृष्टिकोण भिन्दाभिन्दै हुन्छ। जबसम्म एउटा मुनि अन्य मुनिहरूभन्दा भिन्न देखिँदैन तबसम्म त्यसलाई सही अर्थमा मुनि नै मान्न सकिँदैन। **'न चासावृषिर्यस्य मतं नभिन्नम्** (महाभारत, वनपर्व ३१३,११७) तर भगवान्द्वारा यहाँ उल्लेख गरिएको **'स्थितधीः मुनि'** सामान्य मुनिभन्दा भिन्न हो। **'स्थितधीः'** मुनि सधै कृष्णभावनामा रहन्छ र ऊ आफ्ना सम्पूर्ण

सृजनात्मक तर्क-वितर्कभन्दा माथि उठिसकेको हुन्छ। उसलाई **'प्रशान्त निःशेष मनोरथान्तर'** (स्तोत्र रत्न ४३) भनिन्छ। अथवा, त्यस्तो व्यक्तिले मानसिक चिन्तनको स्तरलाई पार गरिसकेको हुन्छ र वासुदेव कृष्ण नै सबै हुनुहुन्छ भन्ने निष्कर्षमा पुगिसकेको हुन्छ—**"वासुदेवः सर्वमिति स महात्मा सुदुर्लभः।"** त्यस्तालाई स्थितप्रज्ञ मुनि भनिन्छ। यस प्रकारको पूर्ण कृष्णभावनाभावित व्यक्ति तीन किसिमका तापका आघातबाट कहिल्यै विचलित हुँदैन। उसले सम्पूर्ण कष्टलाई भगवत्कृपाको रूपमा स्वीकार गर्दछ र आफूलाई पूर्वजन्मका नराम्रा कर्मका कारणले अझ बढी कष्ट भोग्नयोग्य भएको ठान्दछ अनि आफूले पाएको कष्टलाई भगवान्ले कृपा गरेर थोरै बनाइदिनुभएको हो भन्ने सम्झन्छ। त्यसै गरी जब उसले सुख पाउँदछ त्यस समय पनि उसले उक्त सुखको श्रेय भगवान्लाई नै दिन्छ र आफूलाई सुख पाउन अयोग्य ठान्दछ। उसले भगवान्को कृपाले गर्दा त्यस्तो सुख भएको हो भन्ने ठान्दछ र त्यस्ता सुखपूर्ण अवस्थामा अझ राम्रोसँग भगवान्को सेवा गर्नु पर्दछ भन्ने सोच्दछ। भगवान्को सेवाका लागि ऊ सधैँ सक्रिय र साहसी बनिरहन्छ र राग र विरागबाट पनि अप्रभावित रहन्छ। राग वा आसक्तिको अर्थ हो आफ्ना इन्द्रियतृप्तिका लागि वस्तुहरू ग्रहण गर्नु र विराग वा अनासक्तिको अर्थ हो यस किसिमको इन्द्रियभोगजन्य अनुरागको अभाव। तर, कृष्णभावनामा दृढ रहेका व्यक्तिलाई न कुनै कुराप्रति आसक्ति नै हुन्छ न अनासक्ति नै, किनभने उसको जीवन भगवान्का सेवामा समर्पित भइसकेको हुन्छ। फलस्वरूप आफ्ना सबै प्रयासहरू असफल हुँदा पनि त्यो व्यक्ति रिसाउँदैन। सफल भएपनि विफल भएपनि, कृष्णभावनामा लागेको व्यक्ति आफ्नो सङ्कल्पमा दृढ हुन्छ।

**यः सर्वत्रानभिस्नेहस्तत्तत्प्राप्य शुभाशुभम् ।**
**नाभिनन्दति न द्वेष्टि तस्य प्रज्ञा प्रतिष्ठिता ॥ ५७॥**

**यः** — जो; **सर्वत्र** — सबै ठाउँमा; **अनभिस्नेहः** — स्नेहरहित; **तत्तत्** — त्यो त्यो वस्तु; **प्राप्य** — पाएर; **शुभ अशुभम्** — राम्रो र नराम्रो; **न अभिनन्दति** — प्रशंसा गर्दैन; **न द्वेष्टि** — न द्वेष गर्दछ; **तस्य** — त्यसको; **प्रज्ञा** — पूर्ण ज्ञान; **प्रतिष्ठिता** — अचल मानिन्छ।

**यस भौतिक संसारमा जसले असल कुरा प्राप्त हुँदा हर्षित हुने र अशुभ कुरा आइपर्दा घृणा गर्ने गर्दैन, त्यही नै पूर्ण ज्ञानमा अवस्थित भएको व्यक्ति हो।**

**तात्पर्य :** भौतिक जगत्मा सधैँ केही न केही उथलपुथल भई नै रहन्छ त्यो शुभ होस् या अशुभ। जो व्यक्ति यस्ता उथलपुथलबाट उत्तेजित हुँदैन, जो व्यक्ति शुभ र अशुभद्वारा अप्रभावित रहन्छ त्यस्ता व्यक्तिलाई कृष्णभावनामा दृढ रहेको सम्झिनु पर्दछ। जबसम्म मानिस यो भौतिक जगत्मा रहन्छ तबसम्म निरन्तर राम्रो र नराम्रो भइरहने सम्भावना हुन्छ, किनभने यो जगत् द्वन्द्वपूर्ण छ तर जो व्यक्ति कृष्णभावनामा स्थिर छ, त्यो व्यक्ति शुभ र अशुभद्वारा प्रभावित हुँदैन किनकि त्यस समय ऊ सर्वमङ्गलमय भगवान् श्रीकृष्णका साथमा रहेको हुन्छ। श्रीकृष्णमा अवस्थित यस्तो चेतनाले मानिसलाई पूर्ण दिव्यताको स्थितिमा पुऱ्याउँदछ, जसलाई समाधि भनिन्छ।

**यदा संहरते चायं कूर्मोङ्गानीव सर्वशः ।**
**इन्द्रियाणीन्द्रियार्थेभ्यस्तस्य प्रज्ञा प्रतिष्ठिता ॥ ५८ ॥**

**यदा** — जब; **संहरते** — खिँच्दछ; **च** — पनि; **अयम्** — यो; **कूर्मः** — कछुवा; **अङ्गानि** — शरीरका अङ्गहरू; **इव** — जस्तै; **सर्वशः** — एकैसाथ; **इन्द्रियाणि** — इन्द्रियहरू; **इन्द्रियार्थेभ्यः** — इन्द्रियका विषयहरूबाट; **तस्य** — त्यसको; **प्रज्ञा** — चेतना; **प्रतिष्ठिता** — स्थिर हो।

**जसरी कछुवाले आफ्ना अङ्गहरूलाई खुम्च्याएर खोलभित्र समेट्छ त्यसै गरी जसले आफ्ना इन्द्रियहरूलाई तिनका विषयबाट खिँच्दछ, त्यही व्यक्ति नै दृढतापूर्वक पूर्ण चेतनामा स्थिर रहन्छ।**

**तात्पर्य :** जसले आफ्नो योजनाअनुसार आफ्ना इन्द्रियहरूलाई नियन्त्रण गर्न सक्दछ त्यही नै योगी, भक्त वा आत्मसिद्ध व्यक्तिको परीक्षा हो। धेरैजसो मानिसहरू इन्द्रियहरूका दास हुन्छन् र इन्द्रियहरूकै निर्देशनको पालन गर्दछन्। योगी कसरी रहन्छ भन्ने प्रश्नको उत्तर यही हो। इन्द्रियहरूको तुलना विषालु सर्पहरूसँग गर्न सकिन्छ। यी इन्द्रियहरू बन्धनहीन भएर काम गर्न चाहन्छन्। योगी वा भक्तहरू इन्द्रियरूपी सर्पहरूलाई नियन्त्रणमा लिने, धेरै शक्तिशाली सर्प खेलाउने व्यक्तिजस्तो हुनु पर्दछ। इन्द्रियहरूलाई स्वतन्त्रतापूर्वक काम गर्न दिनु हुन्न। शास्त्रहरूमा यस्ता धेरै नियमहरू, निर्देशनहरू छन् जसमध्ये केही नगर भन्ने निषेधमूलक छन् र केही गर भन्ने विधिमूलक छन्। जबसम्म कुनै व्यक्ति यी विधि र निषेधलाई राम्ररी पालन गर्न सक्षम हुँदैन र इन्द्रियभोगमाथि संयम गर्न समर्थ हुँदैन तबैसम्म त्यो व्यक्ति कृष्णभावनामा दृढ हुन पनि सम्भव छैन। यस सम्बन्धमा सबभन्दा राम्रो उदाहरण यहाँ कछुवाको दिइएको छ। कछुवाले कुनै पनि समय आफ्ना इन्द्रियहरूलाई (अङ्गहरूलाई) खिँचेर खोलभित्र खुम्च्याउन सक्दछ र कुनै विशेष उद्देश्यका लागि फेरि ती अङ्गहरूलाई बाहिर

फैलाएर देखाउन पनि सक्दछ। त्यसै गरी, कृष्णभावनामा लागेका व्यक्तिका इन्द्रियहरू पनि भगवान्को सेवा गर्ने विशेष प्रयोजनका लागि मात्र उपयोग गरिन्छन् र अधिपछि अरू काममा तिनलाई निष्क्रिय राखिन्छन्। यहाँ अर्जुनलाई आफ्नो निजी सन्तुष्टिका लागि काम गर्नुको सट्टा इन्द्रियहरूलाई भगवान्का सेवामा लगाउने उपदेश दिइएको छ। इन्द्रियहरूलाई सधैँ भगवान्का सेवामा लगाइराख्ने कुराको उदाहरण कछुवासँग मिल्दोजुल्दो छ। कछुवाले आफ्ना अङ्गहरूलाई आफैँभित्र समेटेर राख्दछ।

**विषया विनिवर्तन्ते निराहारस्य देहिनः ।**
**रसवर्जं रसोऽप्यस्य परं दृष्ट्वा निवर्तते ॥ ५९ ॥**

**विषयाः** — इन्द्रियभोगका विषयहरू; **विनिवर्तन्ते** — भिन्नतामा रहनमा अभ्यस्त; **निराहारस्य** — निषेधात्मक प्रतिबन्धहरूबाट; **देहिन** — शरीर धारण गरेका निमित्त; **रसवर्जम्** — स्वादलाई त्याग गर्दै; **रसः** — भोग गर्ने चाहना; **अपि** — यद्यपि छ; **अस्य** — उसको; **परम्** — अति उत्कृष्ट वस्तुहरू; **दृष्ट्वा** — अनुभव गरेर; **निवर्तते** — बाट छुट्दछ।

**कुनै शरीर धारण गरेका जीव इन्द्रियभोगबाट मुक्त भए पनि उसमा त्यसको वासना रहिरहन्छ तर यदि त्योभन्दा उत्कृष्ट रसको स्वाद उसले पाएमा विषयभोगको अभिरुचि समाप्त हुन्छ र ऊ कृष्णचेतनामा स्थिर हुन्छ।**

**तात्पर्य :** अध्यात्मरसको स्वाद नपाउँदासम्म मानिस इन्द्रियभोगबाट निवृत्त हुन सम्भव छैन। मानिसलाई विधि-विधानहरूद्वारा इन्द्रियभोगबाट रोक्ने प्रक्रिया कुनै विशेष किसिमको खाने वस्तुबाट बिरामीलाई रोक्नुजस्तै हो। तर, यसबाट न भोजनप्रति बिरामीको रुचि समाप्त हुन्छ, न ऊ यस किसिमको प्रतिबन्धमा रहन चाहन्छ। त्यसै गरी अल्पज्ञानी व्यक्तिहरूका निम्ति इन्द्रियसंयम गर्नका लागि भनेर यम, नियम, आसन, प्राणायम, प्रत्याहार, धारणा, ध्यान, समाधिजस्ता अष्टाङ्ग योगविधिको सिफारिस गरिएको छ। तर, जसले कृष्णभावनामृतको मार्गमा प्रगति गर्दै गएर भगवान् श्रीकृष्णको सौन्दर्यरस पान गरिसकेको छ, त्यस्ता व्यक्तिका लागि यी सार नभएका भौतिक वस्तुप्रति कुनै अभिरुचि नै हुँदैन। अतः आध्यात्मिक जीवनमा लगाइएका यी प्रतिबन्धहरू केवल अल्पज्ञानी नवदीक्षितहरूका लागि हुन्। कृष्णभावनामा रुचि जागृत नहुँदासम्मका लागि मात्र यस्ता प्रतिबन्धहरु ठीक हुन्छन्। मानिसमा कृष्णभावनाप्रति अभिरुचि जाग्न थाले पछि भौतिक विषयवस्तुप्रति उसको अरुचि स्वतः बढ्न थाल्दछ।

**यततो ह्यपि कौन्तेय पुरुषस्य विपश्चितः ।**
**इन्द्रियाणि प्रमाथीनि हरन्ति प्रसभं मनः ॥ ६० ॥**

**यततः** — प्रयास गर्दागर्दै; **हि** — निश्चय नै; **अपि** — पनि; **कौन्तेय** — हे कुन्तीपुत्र!, **पुरुषस्य** — मानिसको; **विपश्चित** — विवेकपूर्ण; **इन्द्रियाणि** — इन्द्रियहरू; **प्रमाथीनि** — उत्तेजित; **हरन्ति** — फ्याँक्दछन्; **प्रसभम्** — बलपूर्वक; **मनः** — मनलाई।

**हे अर्जुन! इन्द्रियहरू कति बलवान् र वेगवान् छन् भने तिनीहरूलाई नियन्त्रण गर्ने प्रयन्तशील विवेकी मानिसको मनलाई पनि तिनले बलपूर्वक हरण गरिदिन्छन्।**

**तात्पर्य :** धेरै विद्वान्, ऋषि, दार्शनिक तथा अध्यात्मवादीहरू इन्द्रियमाथि विजय पाउने प्रयास गर्दछन् तर प्रयत्न गर्दागर्दै पनि कहिलेकाहीँ तिनीहरूमध्येका केही महानतम् व्यक्तिहरू पनि मानसिक विचलनले गर्दा भौतिक इन्द्रियभोगका सिकार बन्न पुग्दछन्। विश्वामित्रजस्ता महान् ऋषि तथा पूर्णयोगी पनि मेनकाद्वारा पथभ्रष्ट भए र कामभोगमा लागे, यद्यपि उनी इन्द्रियनियन्त्रणका लागि विभिन्न किसिमका योग-साधना र तपश्यामा लागिरहेका थिए। अवश्य नै संसारको इतिहासमा यस्ता धेरै उदाहरणहरू पाइन्छन्। अतः कृष्णभावनाभावित नभई मन र इन्द्रियहरूलाई नियन्त्रण गर्न साह्रै कठिन छ। मनलाई भगवान् श्रीकृष्णमा नलगाई कोही पनि यस किसिमको भौतिक आसक्तिबाट मुक्त हुन सक्दैनन्। महान् सन्त तथा भक्त श्रीयमुनाचार्यले एउटा व्यावहारिक उदाहरण दिनुभएको छ। उहाँ भन्नु हुन्छ—

*यदवधि मम चेतः कृष्णपादारविन्दे*
*नव-नव-रसधामन्युद्यतं रन्तुमासीत् ।*
*तदवधि बत नारीसंगमे स्मर्यमाणे*
*भवति मुखविकारः सुष्ठु निष्ठीवनं च ॥*

"भगवान् श्रीकृष्णका चरणकमलमा मन लागेदेखि मैले नयाँ-नयाँ दिव्यरसको अनुभूति गर्दैआएको छु। जब म स्त्री सहवासको कुरा सोच्दछु, तुरुन्तै मेरो अनुहार त्यताबाट फर्किन्छ र त्यस्तो विचारलाई थुक्न मन लाग्दछ।" कृष्णभावना भनेको कति राम्रो दिव्य वस्तु हो भने, यसको स्वाद पाइसकेपछि भौतिक विषयको भोग स्वादहीन बन्दछ। यो एउटा भोकाएको मानिसले पर्याप्त मात्रामा पौष्टिक खाद्य पदार्थ पाएर आफूलाई तृप्त बनाएजस्तै हो। महाराज अम्बरीषले पनि महायोगी दुर्वासा मुनिमाथि विजय पाएका थिए, किनभने

राजाको मन कृष्णभावनामा लागेको थियो। (स वै मनः कृष्ण पदारविन्दयोः वचांसि वैकुण्ठगुणानुवर्णने)।

**तानि सर्वाणि संयम्य युक्त आसीत मत्परः ।**
**वशे हि यस्येन्द्रियाणि तस्य प्रज्ञा प्रतिष्ठिता ॥ ६१॥**

**तानि** — ती इन्द्रियहरू; **सर्वाणि** — सबै; **संयम्य** — नियन्त्रणमा राखेर; **युक्त** — लागेको; **आसीत** — स्थित हुनु पर्दछ; **मत्परः** — ममा लागेको; **वशे** — पूर्ण अधीनमा; **हि** — निश्चय नै; **यस्य** — जसका; **इन्द्रियाणि** — इन्द्रियहरू; **तस्य** — त्यसको; **प्रज्ञा** — चेतना; **प्रतिष्ठिता** — स्थिर।

**जुन व्यक्तिले आफ्ना इन्द्रियहरूलाई पूर्णतया नियन्त्रणमा राखेको छ र आफ्नो चेतनालाई ममा स्थिर गरेको छ, त्यही व्यक्ति स्थितप्रज्ञ भनिन्छ।**

**तात्पर्य :** योगसिद्धिको सर्वोच्च अनुभूति नै कृष्णभावना हो भन्ने कुरा यो श्लोकमा स्पष्टसँग व्याख्या गरिएको छ। कृष्णभावनाभावित नभई कसैले पनि आफ्ना इन्द्रियहरूलाई नियन्त्रण गर्न सक्दैन। माथि नै भनिसकियो — एक पटक महर्षि दुर्वासा मुनिको महाराज अम्बरीषसँग झगडा भएको थियो। दुर्वासा मुनि अहङ्कारका कारण अनावश्यक रूपले अम्बरीषसँग रिसाए। एकातिर उनले आफ्ना इन्द्रियलाई नियन्त्रण गर्न सकेनन्, अर्कातिर राजा मुनिजस्ता शक्तिशाली योगी थिएनन् तर उनी भगवान्का भक्त थिए। त्यसैले मुनिद्वारा गरिएका सबै अन्यायलाई उनले चुपचाप सहे। यसले गर्दा उनी विजयी भए। *श्रीमद्भागवत्मा* उल्लेख गरिएका निम्नलिखित योग्यताहरू भएका हुनाले राजाले आफ्ना इन्द्रियहरूलाई नियन्त्रण गर्नसके।

*स वै मनः कृष्णपदारविन्दयोर्वचांसि वैकुण्ठगुणानुवर्णने ।*
*करौ हरेर्मन्दिरमार्जनादिषु श्रुतिं चकाराच्युतसत्कथोदये ॥*
*मुकुन्दलिङ्गालयदर्शने दृशौ तद्भृत्यगात्रस्पर्शेऽङ्गसङ्गमम् ।*
*घ्राणं च तत्पादसरोजसौरभे श्रीमत्तुलस्या रसनां तदर्पिते ॥*
*पादौ हरेः क्षेत्रपदानुसर्पणे शिरो हृषीकेशपदाभिवन्दने ।*
*कामं च दास्ये न तु कामकाम्यया यथोत्तमश्लोकजनाश्रया रतिः ॥*

'राजा अम्बरीषले आफ्नो मनलाई भगवान् श्रीकृष्णका चरणकमलमा स्थिर गरेका थिए, आफ्नो वाणीलाई भगवान्को विषयमा चर्चा गर्ने कार्यमा लगाएका थिए, आफ्ना हातहरूलाई भगवान्को मन्दिर सफा गर्ने काममा लगाएका थिए, कानहरूलाई भगवान्का लीलाहरू श्रवण गर्ने कार्यमा लगाएका थिए, आफ्ना

आँखालाई भगवान्‌का श्रीविग्रहको दर्शन गर्ने काममा लगाएका थिए, आफ्नो शरीरलाई भक्तहरूको शरीर स्पर्श गर्ने र तिनको सेवा गर्ने काममा लगाएका थिए, आफ्ना नाकलाई भगवान्‌का चरणमा अर्पण गरिएका फूलहरूको सुगन्ध लिने काममा लगाएका थिए, आफ्नो जिब्रोलाई भगवान्‌मा अर्पण गरिएका तुलसीपत्रको स्वाद लिने कार्यमा लगाएका थिए, आफ्ना गोडाहरूलाई भगवान्‌का मन्दिरहरू रहेका पवित्र स्थानमा भ्रमण गर्ने कार्यमा लगाएका थिए, आफ्नो शिर भगवान्‌लाई दण्डवत् प्रणाम गर्ने काममा लगाएका थिए र आफ्ना इच्छालाई भगवान्‌का इच्छा पूरा गर्ने कार्यमा लगाएका थिए। यी सम्पूर्ण योग्यताहरूले उनलाई भगवान्‌का **'मत्पर भक्त'** वा समर्पित भक्त बन्नयोग्य बनाएका थिए।

यस सम्बन्धमा यो 'मत्पर' शब्द अत्यन्त सार्थक छ। कुनै व्यक्ति 'मत्पर' वा समर्पित भक्त कसरी हुन सक्दछ भन्ने कुरा महाराज अम्बरीषको जीवनमा वर्णन गरिएको छ। यही 'मत्पर' परम्पराका एकजना महान् विद्वान् तथा आचार्य श्रील बलदेव विद्याभूषण भन्नु हुन्छ— **"मद्‌भक्ति प्रभावेन सर्वेन्द्रियविजयपूर्विका स्वात्मदृष्टि सुलभेति भावः।"** कृष्णभक्तिको बलले मात्रै इन्द्रियहरूलाई वशमा गर्न सकिन्छ।" यस सम्बन्धमा कहिलेकाहीँ आगोको उदाहरण पनि दिने गरिन्छ। जसरी दन्किरहेको आगोले कोठाभित्र रहेका सबै वस्तु डढाएर भष्म पारिदिन्छ त्यसै गरी योगीका हृदयमा विद्यमान भगवान् विष्णुले सबै प्रकारका अपवित्रताहरूलाई जलाइदिनु हुन्छ। योगसूत्रले पनि भगवान् विष्णुको ध्यान गर्न भनेको छ, शून्यको होइन। विष्णुपदलाई छोडेर अरू कुराको ध्यान गर्ने तथाकथित योगीहरू केवल मृगमरीचिकाको खोजीमा लागेर समय नष्ट गरिरहेका हुन्छन्। हामी कृष्णभावनाभावित हुनु पर्दछ, भगवान्‌मा समर्पित हुनु पर्दछ। यही नै योगको वास्तविक उद्देश्य हो।

**ध्यायतो विषयान्पुंसः संङ्गस्तेषूपजायते।**
**संङ्गात्सञ्जायते कामः कामात्क्रोधोऽभिजायत्ते॥ ६२॥**

**ध्यायतः** — चिन्तन गर्दागर्दै; **विषयान्** — इन्द्रियका विषयहरूको; **पुंस** — मानिसको; **सङ्गः** — आसक्ति; **तेषु** — ती विषयहरूमा; **उपजायते** — विकसित हुन्छ; **सङ्गात्** — आसक्तिबाट; **सञ्जायते** — विकास हुन्छ; **कामः** — इच्छा; **कामात्** — इच्छाबाट; **क्रोधः** — रीस; **अभिजायते** — उत्पन्न हुन्छ (प्रकट हुन्छ)।

**इन्द्रियका विषयहरूको चिन्तन गर्दागर्दै मानिस तिनै विषयमा आसक्त हुन्छ, यस्तो आसक्तिबाट काम उत्पन्न हुन्छ र कामबाट क्रोध उत्पन्न हुन्छ।**

**तात्पर्य :** जो व्यक्ति कृष्णभावनामा भावित छैन त्यो व्यक्ति इन्द्रियका भोग्य विषयहरूको चिन्तन गर्दागर्दै स्वयम् भौतिक चाहनाको नियन्त्रणमा पुग्दछ। इन्द्रियहरूलाई कुनै विशेष कार्यमा संलग्न गराइराख्नु पर्दछ। यदि ती इन्द्रियहरूलाई भगवान्को दिव्य सेवाभक्तिमा नलगाए भने तिनीहरू निश्चय नै भौतिकतावादी सेवामा लाग्न खोज्दछन्। यो भौतिक संसारमा भगवान् शिव र भगवान् ब्रह्मासहित सबै प्राणीहरू इन्द्रियका विषयहरूको अधीनमा छन्। स्वर्गमा बस्ने अरू देवताहरूको झन् कुरै गर्नु परेन। भौतिक संसारको यो जञ्जालबाट मुक्ति पाउने एउटै मात्र उपाय हो— कृष्णभावनामा भावित हुनु। भगवान् शिव गहिरो ध्यानमा हुनुहुन्थ्यो तर जब पार्वतीले इन्द्रियसुखका लागि उहाँलाई उत्तेजित पार्नुभयो तब उहाँ पनि पार्वतीको प्रस्तावमा सहमत हुनुभयो। फलस्वरूप कार्तिकेयको जन्म भयो। हरिदास ठाकुर जब भगवान्का युवाभक्त हुनुहुन्थ्यो, उहाँलाई पनि माया देवीको अवतारद्वारा त्यसरी नै मोहित पार्न खोजिएको थियो तर भगवान्का शुद्ध भक्त भएको हुनाले हरिदासले त्यो परीक्षा सजिलै उत्तीर्ण गर्नुभयो। माथि उल्लेख गरिएको श्री यमुनाचार्यको श्लोकमा प्रकाश पारिएजस्तै भगवान्का नैष्ठिक भक्तले भगवान्को सङ्गतमा रहेर आध्यात्मिक आनन्दको रसको स्वाद लिएको चाखेको हुनाले सम्पूर्ण भौतिक इन्द्रिय सुखहरूलाई छोडिदिन सक्दछ। यही नै सफलताको रहस्य हो। अतः जो व्यक्ति कृष्णभावनामा लागेको छैन त्यो व्यक्ति कृत्रिम दमनद्वारा इन्द्रियहरूलाई नियन्त्रण गर्ने कार्यमा जतिसुकै शक्तिशाली देखियोस्, आखिरमा गएर असफल नै हुन्छ, किनभने विषयसुखको एउटा सानो विचारले पनि उसलाई इन्द्रियतृप्तिका निमित्त उत्तेजित पारिदिन्छ।

**क्रोधाद्भवति सम्मोहः सम्मोहात्स्मृतिविभ्रमः।**
**स्मृतिभ्रंशात् बुद्धिनाशो बुद्धिनाशात्प्रणस्यति॥ ६३॥**

**क्रोधात्** — क्रोधबाट; **भवति** — हुन्छ; **सम्मोहः** — पूर्ण मोह; **सम्मोहात्** — मोहबाट; **स्मृतिविभ्रमः** — स्मरण शक्ति भ्रमित हुन्छ; **स्मृतिभ्रंशात्** — स्मरण शक्ति भ्रष्ट भएपछि; **बुद्धिनाशः** — बुद्धि नाश हुन्छ; **बुद्धिनाशात्** — बुद्धिको नाश भएपछि; **प्रणश्यति** — अधःपतन हुन्छ।

**क्रोधबाट पूर्ण मोह उत्पन्न हुन्छ, मोहबाट स्मरणशक्ति भ्रमित हुन्छ, स्मरणशक्ति भ्रमित भएपछि बुद्धि नाश हुन्छ, जब बुद्धि हराउँदछ, मानिस यो संसाररूपी कूवामा फेरि खस्दछ।**

**तात्पर्य :** श्रील रूप गोस्वामीले हामीलाई यस्तो निर्देशन दिनुभएको छ—

*प्रापञ्चिकतया बुद्ध्या हरिसम्बन्धिवस्तुनः ।*
*मुमुक्षुभिः परित्यागो वैराग्यं फल्गु कथ्यते ॥*

(*भक्तिरसामृत सिन्धु* १.२.२५८)

कृष्णभावनाको विकासद्वारा मानिसले प्रत्येक वस्तुको उपयोग भगवान्को सेवामा गर्नु पर्दछ भन्ने कुरा बुझ्न सक्दछ। कृष्णभावनाको ज्ञान नहुनेहरू कृत्रिम तरिकाले भौतिक विषयवस्तुबाट बच्ने प्रयास गर्दछन्। फलस्वरूप सांसारिक बन्धनबाट मुक्त हुने चाहना राख्दाराख्दै पनि तिनीहरू वैराग्यको चरम अवस्थालाई प्राप्त गर्न सक्दैनन्। तिनीहरूको तथाकथित वैराग्यलाई फल्गु वा कम महत्त्वपूर्ण भनिन्छ। अर्कातिर कृष्णभावनाभावित व्यक्तिले भगवान्का सेवामा प्रत्येक वस्तुको उपयोग कसरी गर्नु पर्दछ भन्ने कुरा जानेको हुन्छ, त्यसैले ऊ भौतिक चेतनाको शिकार हुँदैन। उदाहरणका लागि निराकारवादीहरू भगवान् वा परमात्मा निराकार हुनुहुन्छ उहाँ कुनै कुरा खान सक्नुहुन्न भन्दछन्। त्यसैले निराकारवादीहरू राम्रो खाद्यपदार्थको पनि उपेक्षा गर्दछन् तर भक्तहरू भगवान् श्रीकृष्णलाई परमभोक्ता मान्दछन् र भक्तिपूर्वक अर्पण गरिएको वस्तु उहाँले ग्रहण गर्नु हुन्छ भन्ने मान्दछन्। यसरी असल भोज्य पदार्थ भगवान्लाई अर्पण गरिसकेपछि त्यो अवशेषलाई भक्तले प्रसादका रूपमा ग्रहण गर्दछ। यसो गर्नाले प्रत्येक वस्तु अध्यात्मीकरण बन्दछ र उसको अधःपतन हुने कुनै खतरा रहँदैन। भक्तले कृष्णभावनामा रहेर प्रसाद ग्रहण गर्दछ र अभक्तले भौतिक वस्तु ठानेर यसलाई तिरस्कार गर्दछ। आफ्नो कृत्रिम वैराग्यका कारणले गर्दा निराकारवादीहरू ठीकसँग जीवन भोग्न सक्दैनन्। त्यसै कारणले मनको हल्का उत्तेजनाले पनि उनीहरूलाई फेरि संसाररूपी कूवामा खसालिदिन्छ। भनिन्छ, यस किसिमको जीवात्मा मुक्तिको स्तरसम्म उठेको भए पनि भक्तिको आश्रय नहुनाले फेरि तल झर्दछ।

**रागद्वेषवियुक्तैस्तु विषयानिन्द्रियैश्चरन् ।**
**आत्मवश्यैर्विधेयात्मा प्रसादमधिगच्छति ॥ ६४ ॥**

**राग** — आसक्ति; **द्वेष** — र विरक्तिबाट; **वियुक्तैः** — रहित भएको; **तु** — तर; **विषयान्** — इन्द्रियका विषयहरू; **इन्द्रियैः** — इन्द्रियहरूद्वारा; **चरन्** — भोग गर्दै; **आत्मवश्यैः** — आफ्नो वशमा; **विधेयात्मा** — नियमित स्वतन्त्रताको पालना गर्ने व्यक्ति; **प्रसादम्** — भगवान्को कृपा; **अधिगच्छति** — प्राप्त गर्दछ।

**तर सम्पूर्ण राग र द्वेषबाट मुक्त भएको र स्वतन्त्र नीति-नियमहरूद्वारा आफ्ना इन्द्रियहरूलाई नियन्त्रण गर्न सक्ने व्यक्तिले भगवान्को पूर्ण कृपा प्राप्त गर्न सक्दछ।**

**तात्पर्य :** पहिला नै भनिसकिएको छ—इन्द्रियहरूलाई बाह्यरूपमा कृत्रिम पद्धतिद्वारा पनि नियन्त्रण गर्न सकिन्छ, तर ती इन्द्रियहरूलाई भगवान्का अलौकिक सेवामा संलग्न नगराएसम्म मानिसमा तल झर्ने सम्भावना रहिरहन्छ। कृष्णभावनामा लागेको व्यक्तिलाई सामान्यतया हेर्दा विषयभोगको स्तरमा रहेजस्तो देखिए पनि यथार्थमा कृष्णभावनाभावित भएका कारणले विषयबाट उत्पन्न क्रियाकलापप्रति ऊ अनासक्त नै रहन्छ। उसको एउटै मात्र उद्देश्य हुन्छ—भगवान् श्रीकृष्णलाई प्रसन्न पार्नु। त्यसबाहेक उसको अरू कुनै चाहना हुँदैन। त्यसैले ऊ सम्पूर्ण आसक्ति र अनाशक्तिभन्दा पर हुन्छ। भगवान् श्रीकृष्णको इच्छा भएमा भक्तले सामान्यतया अवाञ्छित जस्तो देखिने कार्य पनि गरिदिन्छ र भगवान् श्रीकृष्णको इच्छा नभएमा आफ्नो सन्तुष्टिका लागि सामान्यतया गरिने गरेका कार्य पनि उसले गर्दैन। त्यसैले कुनै पनि कार्य गर्नु र नगर्नु उसकै नियन्त्रणभित्र रहन्छन्। किनभने उसले केवल भगवान् श्रीकृष्णको निर्देशनका अधीनमा रहेर मात्र काम गर्ने गर्दछ। यही चेतना नै भगवान्को अहैतुकी कृपा हो। यो कृपा भक्तले इन्द्रियका स्तरमा आसक्त रहेका अवस्थामा पनि प्राप्त गर्न सक्दछ।

**प्रसादे सर्वदुःखानां हानिरस्योपजायते ।**
**प्रसन्नचेतसो ह्याशु बुद्धिः पर्यवतिष्ठते ॥ ६५ ॥**

**प्रसादे** — भगवान्को अहैतुकी कृपा प्राप्त भएमा; **सर्व** — सबैको; **दुःखानाम्** — भौतिक कष्टहरू; **हानिः** — नाश; **अस्य** — उसको; **उपजायते** — हुन्छ; **प्रसन्नचेतसः** — प्रसन्न चित्त भएकाहरूको; **हि** — निश्चय नै; **आशु** — धेरै छिटो; **बुद्धिः** — बुद्धि; **परि** — पर्याप्त; **अवतिष्ठते** — स्थिर हुन्छ।

**यसरी कृष्णभावनामा सन्तुष्ट रहने व्यक्तिका लागि संसारका तीनै किसिमका भौतिक कष्टहरू धेरै समय रहन सक्दैनन्। यस किसिमको तृप्त चेतनामा रहने व्यक्तिको बुद्धि चाँडै नै स्थिर हुन्छ।**

**नास्ति बुद्धिरयुक्तस्य न चायुक्तस्य भावना ।**
**न चाभावयतः शान्तिरशान्तस्य कुतः सुखम् ॥ ६६ ॥**

**नास्ति** — हुन सक्दैन; **बुद्धिः** — दिव्य बुद्धि; **अयुक्तस्य** — कृष्णभावनामा एकाग्र नभएका व्यक्तिको; **न** — हुँदैन; **च** — तथा; **अयुक्तस्य** — कृष्णभावना नभएका व्यक्तिको; **भावना** — स्थिरचित्त (सुखमा); **न** — हुँदैन; **च** — तथा; **अभावयतः** — स्थिर भावना नभएका व्यक्तिको; **शान्तिः** — शान्ति; **अशान्तस्य** — अशान्त हुनेको; **कुतः** — कहाँ छ; **सुखम्** — सुख।

**जो व्यक्ति कृष्णभावनामा रहेर भगवान्सँग जोडिएको छैन त्यो व्यक्तिको न बुद्धि नै दिव्य हुन सक्दछ न मन नै स्थिर हुन सक्दछ। अस्थिर मन भएका व्यक्तिले शान्ति प्राप्त गर्नु सम्भव छैन र शान्तिबिना सुख कसरी पाउन सकिन्छ र ?**

**तात्पर्य :** कृष्णभावनामा भावित नभई शान्ति पाउने कुनै सम्भावना नै छैन। गीताको पाचौँ अध्यायको उनन्तीसौँ श्लोकमा यसको पुष्टि गरिएको छ। जब मानिसले यज्ञ तथा तपस्याको उत्तम फलका एकमात्र परमभोक्ता भगवान् श्रीकृष्ण नै हुनुहुन्छ भन्ने कुरा बुझ्दछ, साथै श्रीकृष्ण नै सम्पूर्ण ब्रह्माण्डका स्वामी हुनुहुन्छ र उहाँ नै सम्पूर्ण जीवात्माका सही मित्र हुनुहुन्छ भन्ने बुझ्दछ त्यसले मात्र वास्तविक शान्ति प्राप्त गर्दछ। जुन व्यक्ति कृष्णभावनामा भावित छैन, उसको मनमा कुनै अन्तिम लक्ष्य पनि हुन सक्दैन। मनको चञ्चलताको एकमात्र कारण अन्तिम लक्ष्यको अभाव हुनु हो। भगवान् श्रीकृष्ण नै एकमात्र भोक्ता, स्वामी र सबैका मित्र हुनुहुन्छ भन्ने अनुभव भएपछि मात्र मानिसको चित्त स्थिर हुन्छ र उसले शान्तिको अनुभव गर्न सक्दछ। अतः जो व्यक्ति भगवान् श्रीकृष्णसँग सम्बन्धित नभएर कार्य गर्दछ त्यो निश्चय नै दुःखी र अशान्त हुन्छ, उसले जीवनमा शान्ति र आध्यात्मिकताको जतिसुकै देखावटी किन गरेको नहोस्। कृष्णभावना स्वतः प्रकट हुने शान्तिपूर्ण अवस्था हो, जो केवल भगवान् श्रीकृष्णसँगको सम्बन्धले मात्र पाइन्छ।

**इन्द्रियाणां हि चरतां यन्मनोऽनुविधीयते ।**
**तदस्य हरति प्रज्ञां वायुर्नावमिवाम्भसि ॥ ६७ ॥**

**इन्द्रियाणम्** — इन्द्रियहरूको; **हि** — निश्चय नै; **चरताम्** — विचरण गर्दै; **यत्** — जोसँग; **मनः** — मन; **अनुविधीयते** — निरन्तर लागिरहन्छ; **तत्** — त्यो; **अस्य** — यसको; **हरति** — हरण गर्दछ; **प्रज्ञाम्** — बुद्धिलाई; **वायुः** — हावाले; **नावम्** — नाउ (डुँगा); **इव** — जस्तै; **अम्भसि** — पानीमा।

**जसरी पानीमाथिको डुङ्गालाई शक्तिशाली हावाले हुत्याएर एकातिर पुऱ्याइदिन्छ, त्यसै गरी विचरणशील इन्द्रियहरूमध्ये कुनै एकमा एकाग्र भएको मनले मानिसको बुद्धिलाई नै हरण गर्दछ।**

**तात्पर्य :** जबसम्म सम्पूर्ण इन्द्रियहरू भगवान्का सेवामा लाग्दैनन्, अर्थात् तीमध्ये कुनै एउटा इन्द्रिय मात्र पनि आफ्नो इन्द्रियतृप्तिमा लागेको हुन्छ त्यसले पनि भक्तलाई दिव्य उन्नतिको मार्गबाट विचलित बनाइदिन्छ। महाराज अम्बरीषको जीवनमा पनि यो कुराको उल्लेख गरिएको छ। मानिसका समस्त

इन्द्रियहरू कृष्णभावनामा नै संलग्न रहेको हुनु पर्दछ, किनभने मनलाई नियन्त्रण गर्ने सही विधि यही नै हो।

**तस्माद्यस्य महाबाहो निगृहीतानि सर्वशः ।**
**इन्द्रियाणीन्द्रियार्थेभ्यस्तस्य प्रज्ञा प्रतिष्ठिता ॥ ६८ ॥**

**तस्मात्** — त्यसै कारणले; **यस्य** — जसको; **महाबाहो** — हे अर्जुन!, **निगृहीतानि** — यसरी वशीभूत; **सर्वशः** — सबैतिर; **इन्द्रियाणि** — इन्द्रियहरू; **इन्द्रियार्थेभ्यः** — विषयवस्तुतिरबाट; **तस्य** — त्यसको; **प्रज्ञा** — बुद्धि; **प्रतिष्ठिता** — स्थिर हो।

**त्यसैले हे महाबाहु! जसका इन्द्रियहरू आफ्ना विषयबाट पूर्णतः हटेर नियन्त्रणमा आएका छन् त्यसैको बुद्धिलाई निस्सन्देह स्थिर बुद्धि मान्नु पर्दछ।**

**तात्पर्य :** कृष्णभावनाद्वारा वा सम्पूर्ण इन्द्रियहरूलाई भगवान्‌को दिव्य प्रेमाभक्तिमा संलग्न गराएर मात्रै इन्द्रियतृप्तिको शक्तिलाई नियन्त्रण गर्न सकिन्छ। जसरी कुनै शत्रुको दमन त्योभन्दा शक्तिशाली सेनाबाट गरिन्छ, इन्द्रियहरूलाई पनि त्यसै गरी दमन गर्नु पर्दछ। केवल मानिसको प्रयासले मात्रै इन्द्रियदमन हुन सक्दैन। तिनलाई त भगवान्‌का सेवामा संलग्न गराइरहेर मात्र नियन्त्रण गर्न सकिन्छ। जसले कृष्णभावनामृतद्वारा मात्रै वास्तवमा बुद्धि स्थिर हुन्छ भन्ने कुरा बुझेको छ र सुयोग्य गुरुका अधीनमा बसेर जसले यो कलाको अभ्यास गरेको छ, त्यसैलाई साधक भनिन्छ वा मुक्तिका लागि उपयुक्त पात्र वा व्यक्ति भनिन्छ।

**या निशा सर्वभूतानां तस्यां जागर्ति संयमी ।**
**यस्यां जाग्रति भूतानि सा निशा पश्यतो मुनेः ॥ ६९ ॥**

**या** — जो; **निशा** — रात्री छ; **सर्व** — सम्पूर्ण; **भूतानाम्** — प्राणीहरूको; **तस्याम्** — त्यसमा; **जागर्ति** — जागा रहन्छ; **संयमी** — आत्मसंयम भएको व्यक्ति; **यस्याम्** — जसमा; **जाग्रति** — जाग्दछन्; **भूतानि** — प्राणीहरू; **सा** — त्यो; **निशा** — रात्री; **पश्यतो** — आत्मदर्शी; **मुनेः** — मुनि।

**जुन समय सबै जीवहरूका लागि रात्री हुन्छ, त्यसमा आत्मसंयमी पुरुष जागा हुन्छन् र सबै जीवहरू जागेको समय आत्मदर्शी मुनिका लागि रात्री हुन्छ।**

**तात्पर्य :** बुद्धिमान् व्येक्तिहरूको दुईवटा वर्ग हुन्छ। पहिलो वर्गका बुद्धिमान्‌हरू

इन्द्रियतृप्तिका लागि गरिने भौतिक क्रियाकलापमा विज्ञ हुन्छन् तेस्रो वर्गका आत्मदर्शी हुन्छन् र आत्मसाक्षात्कारको विकासका निमित्त जागा रहन्छन्। विचारवान् पुरुष वा आत्मदर्शी मुनिका क्रियाकलापहरू भौतिकतामा डुबेका व्यक्तिहरूका निमित्त रात्रीजस्ता हुन्छन्। यस किसिमको रात्रीमा आत्मसाक्षात्कारको अज्ञानका कारणले भौतिकवादी व्यक्तिहरू निद्रामा रहन्छन्। भौतिकवादी मानिसहरूको रात्रीमा आत्मदर्शी ऋषिहरू सतर्क रहन्छन्। आध्यात्मिक विकासमा क्रमिक उन्नति हुँदैजाँदा आत्मदर्शी मुनिहरूले दिव्य आनन्दको अनुभूति गर्दछन। तर, भौतिकवादी क्रियाकलापमा लागेको व्यक्ति आत्मसाक्षात्कारप्रति सुषुप्त रहेर विभिन्न प्रकारका इन्द्रियसुखका सपनाहरू देख्न थाल्दछ र त्यही सुप्त अवस्थामा कहिले सुख र कहिले दुःखको अनुभव गरिरहन्छ। आत्मदर्शी व्यक्ति भौतिक सुख र दुःखमा सधैँ असंलग्न रहन्छ। यस्तो व्यक्ति भौतिक प्रतिक्रियाहरूबाट अविचलित रहँदै आत्मसाक्षात्कारका कर्महरूमा लागिरहन्छ।

**आपूर्यमाणमचलप्रतिष्ठं**
**समुद्रमापः प्रविशन्ति यद्वत् ।**
**तद्वत्कामा यं प्रविशन्ति सर्वे**
**स शान्तिमाप्नोति न कामकामी ॥ ७० ॥**

**आपूर्यमाणम्** — नित्य परिपूर्ण; **अचलप्रतिष्ठम्** — दृढतापूर्वक रहेको; **समुद्रम्** — समुद्रमा; **आपः** — पानी; **प्रविशन्ति** — प्रवेश गर्दछन्; **यद्वत्** — जसरी; **तद्वत्** — त्यसरी नै; **कामा** — इच्छाहरू; **यम्** — जसमा; **प्रविशन्ति** — प्रवेश गर्दछन्; **सर्वे** — सबै; **स** — त्यो व्यक्ति; **शान्तिम्** — शान्ति; **आप्नोति** — प्राप्त गर्दछ; **न** — पाउँदैन; **कामकामी** — इच्छा पूरा गर्न चाहनेले।

**जसरी सधैँ परिपूर्ण र अचल रूपमा प्रतिष्ठित समुद्रमा नदीहरू प्रवेश गर्दछन्, त्यसै गरी स्थिर चित्त भएका व्यक्तिका हृदयमा विभिन्न इच्छाहरू नित्य प्रवेश गर्दछन् र बिलाउँदछन्। त्यस्तै स्थिर व्यक्तिले मात्र शान्ति प्राप्त गर्दछन् तर विषयको इच्छा भएका व्यक्तिले त्यो शान्ति पाउँदैनन्।**

**तात्पर्य :** महासागर सधैँभरि जलले परिपूर्ण नै रहन्छ, विशेष गरी वर्षायाममा अझ बढी पानीका कारणले झन् परिपूर्ण हुनुपर्ने हो तर समुद्र सधैँभरि एकैनास र स्थिर रहन्छ। न यो कहिल्यै उत्तेजित हुन्छ न कहिल्यै आफ्नो किनारको सीमालाई नै उल्लङ्घन गर्दछ। यस्तै स्थिति हुन्छ कृष्णभावनाभावित व्यक्तिको

पनि। जबसम्म मानिसको भौतिक शरीर रहन्छ, तबसम्म इन्द्रियतृप्तिका लागि हुने शरीरको माग पनि रहिरहन्छ। आफ्नो परिपूर्णताको कारणले गर्दा भक्तहरू यस किसिमका इच्छाहरूबाट विचलित हुँदैनन्। कृष्णभावनाभावित व्यक्तिलाई कुनै कुराको आवश्यकता हुँदैन, किनभने उसका सबै भौतिक आवश्यकताहरू भगवान्ले नै परिपूर्ति गरिदिनु हुन्छ, त्यसैले ऊ सधै आफैँमा परिपूर्ण रहने समुद्रजस्तै गम्भीर हुन्छ। समुद्रमा मिस्सिन आउने नदीहरूजस्तै इच्छाहरू उसका मनमा पनि आउन सक्दछन् तर ऊ आफ्नो कार्यमा दृढ रहिरहन्छ। इन्द्रियतृप्तिका चाहनाले ऊ अलिकति पनि विचलित हुँदैन। चाहनाहरू रहँदारहँदै पनि भौतिक इन्द्रियहरूको तृप्तिका लागि ऊ कत्ति उन्मुख हुँदैन। यही नै कृष्णभावनाभावित व्यक्तिहरूको लक्षण हो। कृष्णभावनाभावित व्यक्ति भगवान्को दिव्य प्रेमाभक्तिमा सन्तुष्ट रहन्छ, ऊ समुद्रजस्तै स्थिर रहन्छ, त्यसैले उसले पूर्ण शान्तिको उपभोग गर्दछ। अरूहरू, जसले भौतिक सफलता मात्र होइन, मुक्तिको सीमासम्म आफ्ना इच्छाहरूलाई लैजान्छन्, तिनीहरूले कहिल्यै पनि शान्ति पाउँदैनन्। सकाम कर्मीहरू, मुक्तिवादीहरू र योगीहरू, जो सिद्धिका पछि लाग्दछन्, आफ्ना चाहनाहरू परिपूर्ण नहुनाले तिनीहरू सबै दुःखी नै रहिरहन्छन्। तर, भगवान्को सेवामा लागेको कृष्णभावनाभावित व्यक्ति सधैँ प्रसन्न रहन्छ। उसका पूर्ण हुनुपर्ने कुनै चाहना नै हुँदैनन्। यथार्थमा उसले तथाकथित सांसारिक बन्धनबाट मुक्ति पाउने चाहना पनि राख्दैन। भगवान् श्रीकृष्णका भक्तहरूको कुनै भौतिक चाहना हुँदैन, त्यसैले उनीहरू पूर्णतया शान्त रहन्छन्।

**विहाय कामान् यः सर्वान् पुमांश्चरति निःस्पृहः ।**
**निर्ममो निरहङ्कारः स शान्तिमधिगच्छति ॥ ७१॥**

**विहाय** — छोडेर; **कामान्** — इन्द्रियतृप्तिका भौतिक चाहनाहरू; **यः** — जो; **सर्वान्** — सबै; **पुमान्** — पुरुष; **चरति** — रहन्छ; **निःस्पृहः** — इच्छारहित; **निर्ममः** — ममतारहित; **निरहङ्कार** — अहङ्काररहित; **स** — त्यसले; **शान्तिम्** — पूर्ण शान्ति; **अधिगच्छति** — पाउँदछ।

**जसले इन्द्रियतृप्तिका सबै चाहनाहरूलाई छोडेक छ, जो इच्छाहरूबाट मुक्त छ, जसले सम्पूर्ण ममतालाई पनि छोडेक छ र अहङ्कारशून्य बनेको छ त्यही व्यक्तिले मात्र वास्तविक शान्ति प्राप्त गर्न सक्दछ।**

**तात्पर्य :** निस्पृह हुनुको अर्थ इन्द्रियतृप्तिका लागि कुनै वस्तुको चाहना नगर्नु हो। अर्को शब्दमा कृष्णभावनायुक्त हुने इच्छा गर्नु भनेको वास्तवमा निस्पृह हुनु वा चाहनाशून्य हुनु हो। यो भौतिक शरीरलाई नै आत्मा ठान्ने भ्रूटो

विचार छोडेर र संसारका कुनै वस्तुको स्वामी 'म हूँ' भन्ने झूटो भावनालाई त्यागेर आफूलाई भगवान् श्रीकृष्णको शाश्वत दास सम्झिनु नै कृष्णभावनाको परिपूर्ण अवस्था हो। यो पूर्णताको स्तरमा अवस्थित व्यक्तिले मात्रै भगवान् श्रीकृष्ण नै प्रत्येक वस्तुका स्वामी हुनुहुन्छ र हरेक वस्तुको उपयोग श्रीकृष्णको सन्तुष्टिका लागि गर्नु पर्दछ भन्ने जानेको हुन्छ। अर्जुन आफ्नो सन्तुष्टिका लागि युद्ध गर्न चाहँदैनथे तर जब उनी पूर्णतया कृष्णभावनायुक्त भए, उनले युद्ध गरे, किनभने भगवान् श्रीकृष्ण चाहनुहुन्थ्यो अर्जुनले युद्ध गरून्। आफ्ना लागि युद्ध गर्ने अर्जुनको इच्छा थिएन तर तिनै अर्जुनले श्रीकृष्णका लागि भनेर आफ्नो सामर्थ्यले सकेसम्म युद्ध गरे। भगवान् श्रीकृष्णको सन्तुष्टिको इच्छा नै वास्तविक इच्छाशून्यता हो। मानिसका इच्छाहरूलाई नष्ट गर्ने कुनै कृत्रिम उपाय यो होइन। जीवात्मा कहिल्यै पनि इच्छाशून्य र इन्द्रियशून्य हुनै सक्दैन तर उसले आफ्नो इच्छाको स्वरूपलाई परिवर्तन गर्नु पर्दछ। भौतिक रूपले इच्छाविहीन व्यक्ति प्रत्येक वस्तु भगवान् श्रीकृष्णको हो भन्ने जान्दछ, **ईशावास्यमिदं सर्वम्**। त्यसैले उसले कुनै वस्तुमाथि आफ्नो स्वामित्वको दाबी गर्दैन। यो दिव्य ज्ञान आत्मसाक्षात्कारमा आधारित छ। प्रत्येक जीव भगवान् श्रीकृष्णको शाश्वत अंश हो, यही नै उसको आध्यात्मिक परिचय हो। जीव कहिल्यै पनि भगवान् श्रीकृष्णको स्तर बराबर हुन सक्दैन न भगवान् श्रीकृष्णभन्दा ठुलो नै हुन सक्दछ। कृष्णभावनाको यो ज्ञान नै वास्तविक शान्तिको आधारभूत सिद्धान्त हो।

**एषा ब्राह्मी स्थितिः पार्थ नैनां प्राप्य विमुह्यति ।**
**स्थित्वास्यामन्तकालेऽपि ब्रह्मनिर्वाणमृच्छति ॥ ७२ ॥**

**एषा** — यो; **ब्राह्मी** — आध्यात्मिक; **स्थितिः** — अवस्था; **पार्थ** — हे पृथापुत्र अर्जुन!; **न** — हुँदैन; **एनां** — यसलाई; **प्राप्य** — पाएर; **विमुह्यति** — मोहित हुन्छ; **स्थित्वा** — स्थित भएर; **अस्याम्** — यसमा; **अन्तकाले** — जीवनका अन्त्यमा; **अपि** — पनि; **ब्रह्मनिर्वाणम्** — भगवान्को आध्यात्मिक राज्य; **ऋच्छति** — प्राप्त गर्दछ।

**यो आध्यात्मिक तथा ईश्वरीय जीवनको मार्ग हो जसलाई प्राप्त गरेपछि मानिस मोहित हुँदैन। हे पृथापुत्र अर्जुन! जीवनको अन्तिम अवस्थामा पनि यस्तो स्थितिमा पुग्ने मानिस भगवान्को धाममा प्रवेश गर्न सक्दछ।**

**तात्पर्य :** हुन सक्दछ, कुनै व्यक्तिले तुरुन्तै वा एक सेकेण्डमा पनि दिव्य जीवन वा कृष्णभावनायुक्त जीवन प्राप्त गर्न सकोस् वा कसैले लाखौँलाख जन्मपछि पनि यस्तो स्थिति पाउन नसकोस्, यो केवल सत्यलाई स्वीकार्ने र

बुझ्ने विषय हो। महाराज खट्वाङ्गले आफ्नो मृत्युको केहीक्षण अगाडिमात्र भगवान् श्रीकृष्णमा समर्पित भएर जीवनको यही दिव्य अवस्था प्राप्त गरेका थिए। निर्वाणको अर्थ भौतिक जीवन प्रक्रियाको समाप्ति हो। बौद्ध दर्शनअनुसार यो भौतिक जीवन समाप्त भएपछि केवल शून्य मात्र बाँकी रहन्छ तर *भगवद्गीताको* शिक्षा योभन्दा भिन्न छ। जसअनुसार यो भौतिक जीवनको समाप्तिपछि नै वास्तविक जीवन सुरु हुन्छ। स्थूल दृष्टि भएका भौतिकवादीहरूका लागि यो भौतिक जीवनपद्धति एक दिन समाप्त हुन्छ भन्ने जान्नु नै पर्याप्त छ। तर, आध्यात्मिक रूपले उन्नत व्यक्तिहरूका लागि यो भौतिक जीवनपछि पनि अर्को जीवन छ। यो जीवनको अन्त्य हुनुभन्दा अगाडि यदि कसैले सौभाग्यवश कृष्णचेतना प्राप्त गर्न सकेमा त्यसले तुरुन्तै ब्रह्मनिर्वाणको स्थिति प्राप्त गर्दछ। भगवान्को प्रेमाभक्ति र भगवद्धाममा कुनै अन्तर छैन। ती दुवै परमपद भएका हुनाले भगवान्को दिव्य प्रेमाभक्तिमा संलग्न हुनु नै आध्यात्मिक धाम प्राप्त गर्नु हो। भौतिक जगत्मा इन्द्रियतृप्तिका लागि काम हुने गर्दछ र आध्यात्मिक जगत्मा कृष्णभावनामय कार्यहरू हुन्छन्। यो जीवनमै कृष्णभावनाको प्राप्ति हुनु तत्काल ब्रह्मप्राप्ति हुनुजस्तै हो। कृष्णभावनामा अवस्थित भएको व्यक्तिलाई निश्चित रूपले पहिले नै भगवद्धाममा प्रवेश गरिसकेको मान्नु पर्दछ।

ब्रह्म भौतिक पदार्थको ठीक विपरीत वस्तु हुनुहुन्छ। त्यसैले '**ब्राह्मी स्थितिः**' को अर्थ हुन्छ भौतिक क्रियाकलापका स्तरमा नहुनु भन्ने हुन्छ। *भगवद्-गीतामा* भगवान्को भक्तिलाई मुक्त अवस्था मानिएको छ। (**स गुणान्समतीत्यैतान् ब्रह्म-भूयाय कल्पते**) अतः ब्राह्मी स्थिति भनेको भौतिक बन्धनबाट मुक्ति हो।

श्रील भक्तिविनोद ठाकुरले *भगवद्गीताको* यो दोस्रो अध्यायलाई सम्पूर्ण ग्रन्थकै सारका रूपमा लिनुभएको छ। *भगवद्गीतामा* कर्मयोग, ज्ञानयोग र भक्तियोगका विषयवस्तु छन्। यो दोस्रो अध्यायमा पनि कर्मयोग र ज्ञानयोगको स्पष्ट व्याख्या गरिएको छ र सम्पूर्ण ग्रन्थको अन्तर्विषयका रूपमा भक्तियोगको झलक पनि यहाँ दिइएको छ।

यस प्रकार *श्रीमद्भगवद्गीता* ग्रन्थअन्तर्गत 'गीताको सारसंक्षेप' शीर्षक दोस्रो अध्यायको भक्तिवेदान्त तात्पर्य समाप्त भयो।

# अध्याय-तीन

# कर्मयोग

अर्जुन उवाच

**ज्यायसी चेत्कर्मणस्ते मता बुद्धिर्जनार्दन ।**
**तत्किं कर्मणि घोरे मां नियोजयसि केशव ॥ १ ॥**

**अर्जुन उवाच** — अर्जुनले भने; **ज्यायसी** — भन्दा राम्रो; **चेत्** — यदि; **कर्मणः** — सकाम कर्मभन्दा; **ते** — हजुरद्वारा; **मता** — मानिएको छ; **बुद्धिः** — बुद्धि; **जनार्दन** — हे कृष्ण!; **तत्** — त्यसो भए; **किम्** — किन ?; **कर्मणि** — कर्ममा; **घोरे** — भयङ्कर; **माम्** — मलाई; **नियोजयसि** — लगाउनु हुन्छ; **केशव** — हे कृष्ण!

**अर्जुनले भने — हे जनार्दन! हे कृष्ण! हजुरका विचारमा यदि सकाम कर्मभन्दा बुद्धियोग नै ठुलो भए किन मलाई यो भयङ्कर युद्ध कार्यमा लगाउन चाहनु हुन्छ ?**

**तात्पर्य :** अघिल्लो अध्यायमा भगवान् श्रीकृष्णले आफ्ना घनिष्ठ मित्र अर्जुनलाई संसारको शोकसागरबाट उद्धार गर्नका लागि आत्माको स्वरूपका सम्बन्धमा विस्तारपूर्वक व्याख्या गर्नुभएको छ र बुद्धियोग वा कृष्णभावना नै आत्मसाक्षात्कारको मार्ग हो भन्नुभएको छ। कहिलेकाहीँ गल्तीले कृष्णभावनालाई अकर्मण्यताका रूपमा पनि लिने गरिन्छ र यस्तो गलत बुझाइ भएको मानिस नामजपद्वारा पूर्णरूपले कृष्णभावनाभावित हुने उद्देश्यले एकान्त ठाउँमा गएर बस्ने पनि गर्दछन्। तर, कृष्णभावनामृत दर्शनको राम्रो ज्ञान नपाई एकान्तमा गएर नामजप गर्नु ठीक होइन। यसो गर्दा अल्पज्ञ मानिसहरूबाट सस्तो पूजा वा प्रशंसा पाउन सकिन्छ तर आत्मोन्नति ठीकसँग हुँदैन। अर्जुनलाई पनि कृष्णभावना वा बुद्धियोग भनेको त सक्रिय जीवनबाट संन्यास लिएर एकान्त ठाउँमा गई तपस्या गर्ने अभ्यास हो भन्ने लागेको थियो। अर्को शब्दमा अर्जुन कृष्णभावनामा लाग्ने निहुँ पारेर चतुरतापूर्वक युद्धबाट बच्न चाहन्थे तर निष्ठावान् तथा इमानदार शिष्य भएका हुनाले उनले यो कुरा आफ्ना गुरु भगवान् श्रीकृष्णका समक्ष राखे र उहाँसँग सबैभन्दा उत्तम कार्यविधिका बारेमा जिज्ञासा गरे। उनको त्यही जिज्ञासाको उत्तर दिँदै भगवान् श्रीकृष्णले यो तेस्रो अध्यायमा कर्मयोगको अर्थात् कृष्णभावनाभावित कर्मको विस्तृत व्याख्या गर्नुभएको छ।

**व्यामिश्रेणेव वाक्येन बुद्धिं मोहयसीव मे ।**
**तदेकं वद निश्चित्य येन श्रेयोऽहमाप्नुयाम् ॥ २ ॥**

**व्यामिश्रेण** — विभिन्न अर्थ; **एव** — निश्चय नै; **वाक्येन** — शब्दले (भनाइले); **बुद्धिम्** — बुद्धि; **मोहयसि** — मोहित गराइरहनुभएको छ; **इव** — जस्तै; **मे** — मेरो; **तत्** — त्यसैले; **एकम्** — एउटै मात्र; **वद** — भन्नुहोस्; **निश्चित्य** — निश्चय गरेर; **येन** — जसले; **श्रेयः** — वास्तविक लाभ; **अहम्** — मैले; **आप्नुयाम्** — पाउन सकूँ।

**हजुरका विभिन्न अर्थ लाग्ने उपदेशद्वारा मेरो बुद्धि अल्मलियो, त्यसैले निश्चित गरेर मलाई त्यही कुरा भन्नुहोस् जसबाट मेरो वास्तविक हित हुन्छ।**

**तात्पर्य :** अघिल्लो अध्यायमा *भगवद्गीताको* प्रस्तावनाका रूपमा साङ्ख्ययोग, बुद्धियोग अर्थात् बुद्धिद्वारा इन्द्रिय नियन्त्रण, फलको चाहना नराखी कर्म गर्न र नव सिकारूको अवस्थाजस्ता धेरै प्रकारका मार्गहरूको व्याख्या भएको थियो। यी सबै कुरा त्यहाँ अलि अव्यवस्थित किसिमले प्रस्तुत गरिएको थियो। यसलाई बुझ्न र तदनुसार कार्य गर्न अझ बढी व्यवस्थित किसिमको मार्गनिर्देशन हुनु आवश्यक थियो, त्यसैले अर्जुनले यो शंका हुने विषयवस्तुलाई अझ स्पष्ट पार्नखोजे। यसो भएमा मात्र सर्वसाधारण मानिसले अपव्याख्यामा नपरी स्पष्ट कुरा बुझ्न सक्दछ। हुनत भगवान् श्रीकृष्णले शब्दजालमा पारेर अर्जुनलाई अल्मल्याउन खोज्नुभएको होइन, तैपनि अर्जुनले जडतावश भनौँ वा सक्रिय सेवावश भनौँ कृष्णभावनाको प्रक्रियालाई बुझ्न सकेनन्। अर्को शब्दमा भन्दा, अर्जुनले यी प्रश्नहरू सोधेर *भगवद्गीताको* रहस्यलाई गम्भीरतापूर्वक बुझ्नचाहने विद्यार्थीहरूलाई स्पष्ट मार्ग देखाइदिएका छन्।

श्रीभगवानुवाच

**लोकेऽस्मिन्द्विविधा निष्ठा पुरा प्रोक्ता मयानघ ।**
**ज्ञानयोगेन सांख्यानां कर्मयोगेन योगिनाम् ॥ ३ ॥**

**श्रीभगवानुवाच** — भगवान्ले भन्नुभयो; **लोके** — संसारमा; **अस्मित्** — यो; **द्विविधा** — दुई प्रकारका; **निष्ठा** — विश्वास; **पुरा** — पहिले; **प्रोक्ता** — भनिसकियो; **मया** — मद्वारा; **अनघ** — हे निष्पाप; **ज्ञानयोगेन** — ज्ञानद्वारा; **सांख्यानाम्** — अनुभवी दार्शनिकहरूको; **कर्मयोगेन** — भक्तियोगको पद्धतिद्वारा; **योगिनाम्** — भक्तहरूको।

**भगवान्ले भन्नुभयो — हे निष्पाप अर्जुन! मैले पहिला नै भनिसकेँ-**

**आत्मसाक्षात्कार गर्नचाहने व्यक्तिहरू दुई प्रकारका हुन्छन्। एक प्रकारका ज्ञानीहरू हुन्, जो अनुभवसिद्ध दार्शनिक चिन्तनद्वारा भगवान्लाई बुझ्न खोज्दछन् र अर्का प्रकारका भक्तहरू भक्तिसेवाद्वारा भगवान्लाई जान्ने प्रयास गर्दछन्।**

**तात्पर्य :** यही गीताको दोस्रो अध्यायको ३९ औँ श्लोकमा साङ्ख्ययोग र कर्मयोग वा बुद्धियोग यी दुई प्रकारका पद्धतिहरूको व्याख्या भगवान्ले गर्नुभएको छ। यस श्लोकमा पनि भगवान् त्यही विषयलाई अझ स्पष्टसँग व्याख्या गर्नु हुन्छ। पदार्थ र आत्माका स्वभावको विश्लेषणात्मक अध्ययन वा साङ्ख्ययोग र दर्शन वा व्यावहारिक ज्ञानद्वारा विषयवस्तुलाई बुझ्न र चिन्तन गर्नचाहने व्यक्तिहरूका लागि हो। अर्का प्रकारका मानिसहरू दोस्रो अध्यायको एकसठ्ठीऔँ श्लोकमा वर्णन गरिएजस्तै कृष्णभावनामा रहेर काम गर्दछन्। दोस्रो अध्यायको उनन्चालिसौँ श्लोकमा पनि भगवान्ले भन्नुभएको छ— बुद्धियोग वा कृष्णभावनाको नियमद्वारा कार्य गर्ने व्यक्ति कर्मका बन्धनबाट मुक्त हुन सक्दछ। यस पद्धतिमा अरू कुनै त्रुटि छैन। यही सिद्धान्तलाई एकसठ्ठीऔँ श्लोकमा अझ स्पष्ट तरिकाले व्याख्या गरिएको छ। यो बुद्धियोग सम्पूर्ण रूपले भगवान्मा, विशेषतः भगवान् श्रीकृष्णमा आश्रित छ र यही विधिद्वारा नै सबै इन्द्रियहरूलाई सजिलैसँग वशमा राख्न सकिन्छ। अतः यी दुवै प्रकारका योगविधिहरू धर्म र दर्शनका रूपमा एक अर्कामा अन्योन्याश्रित छन्। दर्शन बिनाको धर्म भावुकता वा धर्मान्धता मात्र हुन्छ र धर्मबिनाको दर्शन पनि मानसिक तर्क-वितर्क मात्र बन्दछ। मानिसको अन्तिम लक्ष्य भगवान् श्रीकृष्ण नै हुनुहुन्छ, किनभने निरन्तर परमसत्यको खोजी गरिरहने दार्शनिकहरू पनि अन्त्यमा कृष्णभावनामृतमा पुग्दछन्। यसको उल्लेख पनि *भगवद्गीतामा* पाइन्छ। परमात्मासँग आत्माको सम्बन्धको वास्तविक स्थिति बुझ्नु नै सम्पूर्ण योग-पद्धतिहरूको उद्देश्य हो। दार्शनिक चिन्तन पनि एउटा अप्रत्यक्ष विधि हो, जसद्वारा विस्तारै कृष्णभावनामृतसम्म पुग्न सकिन्छ र अर्को प्रत्यक्ष विधि पनि छ, त्यो कृष्णभावनामृतमै रहेर प्रत्येक वस्तुसँग आफ्नो सम्बन्ध कायम गर्नु हो यी दुईवटा मार्गहरूमा कृष्णभावना नै उत्तम मार्ग हो, किनभने यसमा दार्शनिक विधिद्वारा इन्द्रियहरूलाई शुद्धीकरण गरिराख्नु पर्दैन। कृष्णभावना स्वयम्मा नै एउटा शुद्धीकरण प्रक्रिया हो। यो भक्तिसेवा भगवत्प्राप्तिको प्रत्यक्ष विधि हो, सँगसँगै यो सजिलो पनि छ र दिव्य पनि छ।

**न कर्मणामनारम्भान्नैष्कर्म्यं पुरुषोऽश्नुते ।**
**न च संन्यसनादेव सिद्धिं समधिगच्छति ॥ ४ ॥**

**न** — होइन; **कर्मणाम्** — निर्धारित कर्मको; **अनारम्भात्** — सम्पादन नगर्नाले; **नैष्कर्म्यम्** — कर्मफलबाट मुक्ति; **पुरुषः** — मानिस; **अश्नुते** — प्राप्त गर्दछ; **न** — होइन; **च** — पनि; **संन्यसनात्** — त्यागद्वारा; **एव** — निश्चय नै; **सिद्धिं** — सफलता; **समधिगच्छति** — प्राप्त गर्दछ।

**मानिसले न त कर्मबाट विमुख भएर मात्रै कर्मफलबाट मुक्ति पाउन सक्दछ, न त संन्यास वा त्यागद्वारा मात्रै जीवनको पूर्णता प्राप्त गर्न सक्दछ।**

**तात्पर्य :** भौतिकतावादी मानिसहरूका हृदयलाई पवित्र पार्नका लागि शास्त्रमा जे-जस्ता कर्तव्य पालन गर्ने कुराको व्यवस्था गरिएको छ, ती सबै कर्तव्यहरू पालन गरेर हृदय पवित्र भएको व्यक्तिले मात्र संन्यास लिन सक्दछ। हृदय शुद्ध नभई संन्यास ग्रहण गर्दा त्यसमा सफलता पाउन सकिँदैन। अनुभवसिद्ध दार्शनिकहरू भन्दछन् — संन्यास ग्रहण गरेपछि वा सकाम कर्मबाट विरक्त भएपछि मानिस नारायणसमान बन्दछ। तर, यो सिद्धान्तलाई भगवान् श्रीकृष्णले अनुमोदन गर्नुभएको छैन। हृदयलाई शुद्ध नबनाइ लिइने संन्यासले सामाजिक व्यवस्थामा असन्तुलन मात्र उत्पन्न गर्दछ। अर्कातिर आफ्ना निर्धारित कर्तव्यकर्महरू पूरा नगरी पनि यदि कोही भगवान्‌को दिव्य सेवामा लाग्दछ त्यस क्षेत्रमा उसले जे जति उन्नति गर्न सक्दछ त्यो भगवान्‌द्वारा स्वीकार्य हुन्छ (बुद्धियोग)। '**स्वल्पमप्यस्य धर्मस्य त्रायते महतो भयात्**' अर्थात्, यस किसिमका नियमहरू अलिकति मात्र पालन गर्नाले पनि मानिस ठुलोभन्दा ठुलो कठिनाइबाट पार पाउनसक्ने हुन्छ।

**न हि कश्चित्क्षणमपि जातु तिष्ठत्यकर्मकृत् ।**
**कार्यते ह्यवशः कर्म सर्वः प्रकृतिजैर्गुणैः ॥ ५ ॥**

**न** — होइन; **हि** — निश्चय नै; **कश्चित्** — कोही; **क्षणम्** — एकछिन; **अपि** — पनि; **जातु** — कुनै बेला; **तिष्ठति** — रहन्छ; **अकर्मकृत्** — केही नगरीकन; **कार्यते** — गर्नका लागि बाध्य हुन्छ; **हि** — निश्चय नै; **अवशः** — विवश भएर; **कर्म** — काम; **सर्वः** — सबै; **प्रकृतिजैः** — भौतिक प्रकृतिका अवस्थाबाट उत्पन्न; **गुणैः** — गुणहरूद्वारा।

**प्रत्येक मानिसले प्रकृतिबाट आर्जित गुणहरूको अधीनमा रही तदनुसार कर्म गर्नै पर्दछ। कुनै पनि मानिस एक क्षणका लागि पनि केही न केही कर्म नगरी रहन सक्दैन।**

**तात्पर्य :** यो शरीरधारी जीवनको प्रश्न नभएर आत्माको स्वभावको कुरा हो। आत्मा सधैँ सक्रिय छ। आत्मा नहुने भए भौतिक शरीर चल्न पनि सक्दैन।

यो शरीर त आत्माद्वारा सञ्चालित हुने एउटा मृतवाहनजस्तो हो। आत्मा सधैँ क्रियाशील रहिरहन्छ र एकछिन पनि निष्क्रिय रहँदैन। त्यसैले आत्मालाई सधैँ कृष्णभावनायुक्त सद्कर्ममा लगाइराख्नु पर्दछ अन्यथा यो आत्मा मायाद्वारा निर्देशित व्यवसायमा संलग्न हुन पुग्दछ। भौतिक शक्तिका सम्पर्कमा आउनासाथ आत्माले भौतिक गुण ग्रहण गर्दछ। यस्ता आकर्षणहरूबाट आत्मालाई शुद्ध बनाइराख्नका लागि यसलाई शास्त्रसम्मत कर्तव्यमा लगाइराख्नु पर्दछ तर यदि आत्मा कृष्णभावनामृतका स्वाभाविक कार्यमा लागेमा उसले जे गर्दछ त्यसबाट उसको कल्याण नै हुन्छ। *श्रीमद्भागवत्* (१.५.१७) मा यो कुराको पुष्टि यसरी गरिएको छ—

*त्यक्त्वा स्वधर्मं चरणाम्बुजं हरेर्भजन्नपक्वोऽथ पत्तेत्ततो यदि ।*
*यत्र क्व वाभद्रमभूदमुष्य किं को वार्थ आप्तोऽभजतां स्वधर्मतः ॥*

यदि कसैले कृष्णभावनामृतलाई अँगालेको भएमा त्यसले शास्त्रसम्मत कर्म गर्न नसके पनि, राम्रोसँग भक्ति नगरेको भए पनि र आफ्नो स्तरबाट पतित भएको भए पनि त्यसलाई कुनै किसिमको अशुभ वा हानि हुँदैन। यसको विपरीत यदि कसैले समग्र शास्त्रसम्मत कार्य त गरेको छ तर ऊ कृष्णभावनाभावित छैन त्यसको केही काम छैन। अतः कृष्णभावनाको यो स्तरसम्म पुग्नका लागि शुद्धीकरणको प्रक्रिया आवश्यक छ। संन्यास वा अन्य कुनै शुद्धीकरणका प्रक्रियाहरू कृष्णभावनाको परमलक्ष्यसम्म पुऱ्याउनकै लागि हुन्, किनभने कृष्णभावनाबिना सबै कुरा अर्थहीन छन्।

**कर्मेन्द्रियाणि संयम्य य आस्ते मनसा स्मरन् ।**
**इन्द्रियार्थान्विमूढात्मा मिथ्याचारः स उच्यते ॥ ६ ॥**

**कर्मेन्द्रियाणि** — पाँचैवटा कर्मेन्द्रियहरूलाई; **संयम्य** — नियन्त्रित गरेर; **यः** — जो; **आस्ते** — बस्दछ; **मनसा** — मनद्वारा; **स्मरन्** — सम्झना गर्दै; **इन्द्रियार्थान्** — इन्द्रियका विषयहरूलाई; **विमूढ** — मूर्ख; **आत्मा** — जीव; **मिथ्याचारः** — कपटी आचरण गर्ने; **सः** — त्यो; **उच्यते** — भनिन्छ।

**जसले कर्मेन्द्रियहरूलाई अधीनमा राखेको छ तर मनले इन्द्रियका विषयहरूको मात्रै चिन्तन गरिरहन्छ त्यसलाई कपटी वा पाखण्डी भन्नु पर्दछ र त्यसले स्वयम् आफैँलाई नै धोका दिइरहेको हुन्छ।**

**तात्पर्य :** कैयौँ यस्ता ठगहरू पनि छन् जो कृष्णभावनामृतमा रहेर कार्य गर्न स्वीकार गर्दैनन् तर देखावटी ध्यान गर्ने गर्दछन्। वास्तवमा यस्ता मानिसका मनमा सधैँ इन्द्रियभोगकै चिन्तन चलिरहन्छ। यस्ता कपटीहरूले आफ्ना

अनुयायीहरूलाई कुमार्गतिर लैजाने शुष्क दार्शनिक व्याख्यान पनि दिने गर्दछन् तर ती व्यक्तिहरू यो श्लोकअनुसार सबैभन्दा ठुला ठगहरू हुन्। इन्द्रियभोगका लागि गृहस्थ वा अरू कुनै आश्रममा रहेर पनि कार्य गर्न सकिन्छ। आफ्नो अवस्था वा मर्यादा अनुरूपको विधिविधानलाई पालन गर्ने मानिसले विस्तारै आफ्नो आत्मशुद्धिका प्रक्रियामा उन्नति गर्दै जान्छ। तर, जो आफूलाई योगीका रूपमा प्रदर्शित गर्दै इन्द्रियतृप्तिका विषयको खोजीमा लागिरहन्छ त्यो सबैभन्दा ठुलो धूर्त हो, चाहे उसले कति नै दार्शनिक उपदेश किन नदेओस्। त्यस्ता व्यक्तिको ज्ञानको कुनै मूल्य हुँदैन, किनभने त्यस्ता पापपूर्ण व्यक्तिका ज्ञानको प्रभावलाई भगवान्को मायाले अपहरण गरिदिन्छिन्। त्यस्ता ठगहरूको मन सधैँ अपवित्र रहन्छ, त्यसैले तिनीहरूका यौगिक ध्यानको पनि कुनै मूल्य रहँदैन।

**यस्त्विन्द्रियाणि मनसा नियम्यारभतेऽर्जुन ।**
**कर्मेन्द्रियैः कर्मयोगमसक्तः स विशिष्यते ॥ ७ ॥**

**यः** — जो; **तु** — तर; **इन्द्रियाणि** — इन्द्रियहरूलाई; **मनसा** — मनद्वारा; **नियम्य** — नियन्त्रित गरेर; **आरभते** — सुरु गर्दछ; **अर्जुन** — हे अर्जुन; **कर्म-इन्द्रियैः** — कर्मेन्द्रियहरूद्वारा; **कर्मयोगम्** — भक्ति; **असक्तः** — अनासक्त; **सः** — त्यो व्यक्ति; **विशिष्यते** — विशेष प्रकारको हो।

**अर्कातिर मनद्वारा कर्मेन्द्रियहरूलाई नियन्त्रणमा राख्ने प्रयत्न गर्ने निष्ठावान् व्यक्तिले यदि अनासक्त रहेर कृष्णभावनामय कर्मयोग गर्दछ त्यो व्यक्ति अति श्रेष्ठ मानिन्छ।**

**तात्पर्य :** इन्द्रियतृप्तिका लागि र विलासी जीवन बिताउनका लागि देखावटी किसिमको अध्यात्मवादी हुनुभन्दा आफ्नो निजी व्यवसायमा लागेर जीवनको उद्देश्य पूर्ति गर्नु राम्रो हो। सांसारिक बन्धनबाट मुक्ति पाउनु र भगवद्धाममा प्रवेश गर्नु नै जीवनको परमउद्देश्य हो। मानिसको प्रमुख स्वार्थ वा स्वार्थगति भन्नु नै भगवान् विष्णुलाई प्राप्त गर्नु हो। जीवनको यही लक्ष्य प्राप्त गराउने उद्देश्यले नै सम्पूर्ण वर्णाश्रम व्यवस्थाको विधान गरिएको छ। एउटा गृहस्थ पनि कृष्णभावनामा रहेर नियमित सेवा गर्नाले उक्त लक्ष्यसम्म पुग्न सक्दछ। आत्मसाक्षात्कार गर्नका लागि मानिसले शास्त्रमा वर्णन गरिए अनुसार संयमित जीवनयापन गर्न पनि सक्दछ र आसक्त नबनीकन आफ्नो कर्म गर्दैरहन पनि सक्दछ। यसरी नै उसले प्रगति गर्न सक्दछ। आफूलाई धार्मिक वा आध्यात्मिक देखाएर निर्दोष मानिसहरूलाई ठग्ने भूटो पाखण्डीहरूभन्दा त निष्ठापूर्वक आफ्नै काम गरिरहने व्यक्ति धेरै उत्तम हुन्छ। आफ्नो जीविकाका लागि ध्यानको

ढोंग गर्ने पाखण्डी ध्यानीभन्दा इमानदारितापूर्वक गल्लीमा बढार्ने (कूचो लाउने) व्यक्ति धेरै नै ठुलो हुन्छ।

**नियतं कुरु कर्म त्वं कर्म ज्यायो ह्यकर्मणः ।**
**शरीरयात्रापि च ते न प्रसिद्ध्येदकर्मणः ॥ ८॥**

**नियतम्** — निर्धारित गरिएको; **कुरु** — गर; **कर्म** — कर्तव्य; **त्वम्** — तिमी; **कर्म** — काम गर्नु; **ज्यायः** — उत्तम छ; **हि** — निश्चय नै; **अकर्मणः** — काम नगर्नुभन्दा; **शरीर** — शरीर; **यात्रापि** — चलाउनका लागि; **च** — पनि; **ते** — तिम्रो; **न प्रसिद्ध्येत्** — चल्ने छैन (प्रभावकारी हुनेछैन); **अकर्मणः** — काम नगरी।

**तिमीले आफूलाई तोकिएको कर्म गर। कर्म नगर्नुभन्दा गर्नु उत्तम हो। काम नगरी तिमीले आफ्नो शरीरको पालन पोषण पनि गर्न सक्दैनौ।**

**तात्पर्य :** धेरै यस्ता छद्मभेषी (देखावटी) ध्यानीहरू छन् जसले आफूलाई उच्च कुलीन भएको झूटोवर्णन गर्दछन् र धेरै यस्ता ठुलाठुला व्यवसायी व्यक्तिहरू छन् जसले आध्यात्मिक जीवनमा प्रगति गर्नका लागि सबै कुरा त्यागिदिएको धाक लगाएर आफूलाई ठुलो देखाउन चाहन्छन्। तर, भगवान् श्रीकृष्णले अर्जुन यस्ता प्रकारका झूटो व्यक्ति बनून् भन्ने चाहनु हुन्नथ्यो। उहाँ त अर्जुनले क्षत्रियका लागि निर्धारित गरिएका कर्तव्यहरू नै गरून् भन्ने चाहनु हुन्थ्यो। अर्जुन एक गृहस्थ र एक सेनापति पनि थिए, त्यसैले अर्जुनका लागि एउटा गृहस्थ क्षत्रियका लागि निर्धारित धार्मिक कर्तव्यहरू पालन गर्नु नै राम्रो हुन्थ्यो। यस किसिमका नियमित कर्म गर्नाले सांसारिक मानिसको हृदय विस्तारै शुद्ध र सफा हुँदै जान्छ र ऊ एक दिन भौतिक कल्मषहरूबाट मुक्त हुन्छ। जीवन निर्वाहका लागि गरिने त्यस किसिमको तथाकथित त्यागलाई न त भगवान्ले नै मनपराउनु हुन्छ न त कुनै शास्त्रले नै अनुमोदन गर्दछन्। जेसुकै भए पनि मानिसले शरीर र आत्माको रक्षाका लागि केही न केही काम त गर्नै पर्दछ। भौतिक वासना वा प्रपञ्चहरूबाट शुद्ध नभई अनुत्तरदायी ढङ्गले कर्म गर्न छोड्नु हुँदैन। यस भौतिक जगत्का प्रायः सबै व्यक्ति भौतिक प्रकृतिमाथि आफ्नो प्रभुत्व कायम गर्ने वा इन्द्रिय-तृप्ति गर्ने अपवित्र प्रवृत्तिहरूबाट ग्रस्त रहन्छन्। यस किसिमका दूषित प्रवृत्तिहरू शुद्ध हुनु आवश्यक छ। निर्धारित कर्मद्वारा आफ्ना प्रवृत्तिहरूलाई शुद्ध नपारी मानिसले तथाकथित अध्यात्मवादी बन्ने प्रयास गर्नु हुँदैन र आफ्ना सम्पूर्ण कर्महरू छोडेर अर्कामा निर्भर भएर बाँच्ने प्रयास पनि गर्नु हुँदैन।

**यज्ञार्थात्कर्मणोऽन्यत्र लोकोऽयं कर्मबन्धनः ।**
**तदर्थं कर्म कौन्तेय मुक्तसङ्‌गः समाचर ॥ ९ ॥**

**यज्ञ अर्थात्** — यज्ञका लागि वा भगवान् विष्णुका लागि गरिएको; **कर्मणः** — कामभन्दा; **अन्यत्र** — अतिरिक्त; **लोकः** — संसार; **अयम्** — यो; **कर्म-बन्धनः** — कर्मले गर्दा बन्धन; **तदर्थम्** — यज्ञका निमित्त वा भगवान् विष्णुका निमित्त; **कर्म** — काम; **कौन्तेय** — हे कुन्तीपुत्र; **मुक्तस॰ः** — सङ्‌गतबाट मुक्त; **समाचर** — राम्रोसँग गर।

**भगवान् विष्णुका लागि भनेर यज्ञका रूपमा कर्म गर्नु पर्दछ अन्यथा यस संसारका हरेक कर्म बन्धनका कारण बन्दछन्, त्यसैले हे कुन्तीपुत्र! भगवान् विष्णुकै प्रसन्नताका लागि आफूलाई तोकिएको कर्म गर। त्यसो गरेमा तिमी बन्धनबाट मुक्त हुनेछौ।**

**तात्पर्य :** आफ्नो शरीरको रक्षाका लागि पनि मानिसले कर्म गर्नै पर्दछ। विशेष किसिमको सामाजिक अवस्था र गुणलाई ध्यानमा राखेर नै निर्धारित कर्मको व्यवस्था गरिएको हो। यस्ता कर्मबाट सबै सामाजिक उद्देश्यहरू पनि पूर्ण हुन्छन्। यज्ञको अर्थ भगवान् विष्णु हुनुहुन्छ वा यज्ञ सम्पादन गर्नु हो। सबै यज्ञको अर्थ पनि भगवान् विष्णुलाई सन्तुष्ट पार्नु नै हो। वेदमा भनिएको छ—**'यज्ञो वै विष्णुः।'** अर्को शब्दमा भन्दा, कसैले तोकिएका यज्ञ गरून् वा प्रत्यक्ष रूपले भगवान् विष्णुको सेवा गरून्, यी दुवै कुराबाट एउटै प्रयोजन सिद्ध हुन्छ। अतः कृष्णभावनामृत पनि एक किसिमको यज्ञ नै हो। यही कुरा यो श्लोकमा भनिएको छ। वर्णाश्रम विधानको लक्ष्य पनि भगवान् विष्णुलाई सन्तुष्ट पार्नु नै हो। **'वर्णाश्रमचारवता पुरुषेण परः पुमान्, विष्णुराराध्यते'** (*विष्णुपुराण* ३-८-८)।

त्यसैले भगवान् विष्णुको प्रसन्नताका लागि काम गर्नु पर्दछ। यसबाहेक यो संसारमा गरिने सबै कामहरू बन्धनका कारण हुनेछन्। किनभने राम्रो र नराम्रो दुवै किसिमका कर्मका आ-आफ्ना फल हुन्छन् र यस किसिमका कर्मफलले कर्म गर्ने कर्तालाई बन्धनमा पारिदिन्छ। त्यसैले भगवान् श्रीकृष्ण (विष्णु) लाई खुसी बनाउनका लागि मानिसले कृष्णभावनामा रहेर कर्म गर्नु पर्दछ। यस्तो कर्म गर्दागर्दै मानिस मुक्त अवस्थामा पुग्दछ। यही नै काम गर्ने महान् कला हो। यस पद्धतिको सुरुमा एउटा अति कुशल मार्गदर्शकको आवश्यकता हुन्छ। त्यसैले यो भगवान् श्रीकृष्णका भक्तहरूको विशिष्ट मार्गदर्शनमा रहेर नै मानिसले परिश्रमपूर्वक कर्म गर्नु पर्दछ या स्वयम् भगवान्कै प्रत्यक्ष निर्देशनमा रहेर कर्म गर्नु पर्दछ। भगवान्का प्रत्यक्ष निर्देशनमा रहेर कार्य गर्ने अवसर

अर्जुनले पाएका थिए। आफ्ना इन्द्रियतृप्तिका लागि भनेर कुनै पनि कार्य गरिनु हुँदैन बरु प्रत्येक कार्य भगवान् कृष्णका सन्तुष्टिका लागि गरिनु पर्दछ। यस्तो अभ्यासले मानिसलाई कर्मफलको बन्धनबाट रक्षा गर्ने मात्र नभएर उसलाई विस्तारै भगवान्का दिव्य प्रेमाभक्तिका स्तरसम्म पुऱ्याउँदछ र यसले मानिसलाई भगवद्धाममा समेत पुऱ्याउँदछ।

**सहयज्ञाः प्रजाः सृष्ट्वा पुरोवाच प्रजापतिः ।**
**अनेन प्रसविष्यध्वमेष वोऽस्त्विष्टकामधुक् ॥ १० ॥**

**सह** — सँगसँगै; **यज्ञाः** — यज्ञहरूसँग; **प्रजाः** — सन्ततिहरू; **सृष्ट्वा** — जन्माएर; **पुरा** — पहिल्यै; **उवाच** — भने; **प्रजापतिः** — जीवात्माका स्वामीले; **अनेन** — यसबाट; **प्रसविष्यध्वम्** — धेरै धेरै बढोस्; **एषः** — यो यज्ञ; **वः** — तिमीहरूलाई; **अस्तु** — होओस्; **इष्ट** — सम्पूर्ण वाञ्छित वस्तुहरू; **काम धुक्** — दिनेवाला।

**सृष्टिको सुरुमा समस्त प्राणीहरूका स्वामी प्रजापति ब्रह्माले भगवान् विष्णुका लागि यज्ञको सृष्टि गर्नुभयो र सँगसँगै मानिस तथा देवताहरूको पनि सृष्टि गर्नुभयो र आशीर्वाद दिँदै भन्नुभयो — तिमीहरू यो यज्ञबाट सुखी रहने छौ किनभने यज्ञ गर्नाले तिमीहरूले आनन्दपूर्वक बाँच्नका लागि चाहिने हरेक वस्तु पाउने छौ र अन्त्यमा मुक्ति पाउने छौ।**

**तात्पर्य :** प्राणीहरूका स्वामी भगवान् विष्णुले यो भौतिक सृष्टिको रचना गरेर बद्ध जीवहरूलाई आफ्नो घर भगवद्धाम फर्किने एउटा सुअवसर प्रदान गर्नुभएको छ। यस भौतिक सृष्टिका सम्पूर्ण जीवात्माहरू भौतिक प्रकृतिका बन्धनमा परेका छन्, किनभने तिनीहरूले भगवान् विष्णु वा कृष्णसँग रहेको आफ्नो सम्बन्धलाई बिर्सेका छन्। वैदिक सिद्धान्तहरूले हामीलाई भगवान्सँगको हाम्रो शाश्वत सम्बन्धलाई सम्झाइदिन मद्दत गर्दछन्। भगवान्ले *भगवद्गीतामा* भन्नुभएको छ— "**वेदैश्च सर्वैरहमेव वेद्यः।**" अर्थात्, सम्पूर्ण वेदहरूको लक्ष्य मलाई बुझ्नु हो। वैदिक ऋचाहरूमा भनिएको छ— "**पतिं विश्वस्यात्मेश्वरम्।**" अर्थात्, भगवान् विष्णु नै सम्पूर्ण प्राणीहरूका स्वामी हुनुहुन्छ। *श्रीमद्भागवत्*को २.४.२० मा पनि श्री शुकदेव गोस्वामीले भगवान्लाई विविध प्रकारले स्वामीका रूपमा यसरी बयान गर्नुभएको छ—

*श्रियः पतिर्यज्ञपतिः प्रजापतिर्धियां पतिर्लोकपतिर्धरापतिः ।*
*पतिर्गतिश्चान्धकवृष्णिसात्वतां प्रसीदतां मे भगवान् सतां पतिः ॥*

भगवान् विष्णु प्रजापति हुनुहुन्छ। उहाँ सम्पूर्ण प्राणीहरूका, सम्पूर्ण विश्वका र

सम्पूर्ण सौन्दर्यका स्वामी हुनुहुन्छ र हरेकका संरक्षक पनि हुनुहुन्छ। भगवान् विष्णुको सन्तुष्टिका लागि यज्ञहरू कसरी सम्पादन गर्नु पर्दछ भन्ने कुराको शिक्षा बद्ध जीवात्माहरूलाई प्रदान गर्ने उद्देश्यले भगवान्‌ले यो भौतिक संसारको रचना गर्नुभएको हो। यसरी भगवान् विष्णुको सन्तुष्टिका लागि यज्ञ गर्नाले जीवहरू संसारमा रहँदासम्म अत्यन्त सुविधापूर्ण तथा चिन्तारहित जीवन बाँच्न सक्नेछन् र यो भौतिक शरीर समाप्त भएपछि तिनीहरू भगवद्धाममा प्रवेश गर्न सक्नेछन्। यो सम्पूर्ण कार्यक्रम नै बद्ध जीवका लागि हो। यज्ञ गर्नाले नै जीवात्मा क्रमशः कृष्णभावनाभावित हुनेछन् र सबै पक्षबाट देवतुल्य हुनेछन्। वैदिक शास्त्रहरूले नै कलियुगमा सङ्कीर्तन यज्ञ गर्ने विधान गरेका छन् र यस युगका सबै मानिसहरूको मुक्तिका लागि भगवान् चैतन्य महाप्रभुले यस दिव्य विधिको प्रवर्तन गर्नुभयो। सङ्कीर्तन यज्ञ र कृष्णभावनाको आपसमा राम्रो सम्बन्ध छ। *श्रीमद्भागवत्* (११.४.३२) मा सङ्कीर्तन यज्ञको विशेष प्रसङ्गमा भगवान् श्रीकृष्णकै भक्तिमय स्वरूप भगवान् चैतन्यका बारेमा यस्तो वर्णन गरिएको छ—

*कृष्णवर्णं त्विषाकृष्णं सांगोपांगास्त्रपार्षदम् ।*
*यज्ञैः संकीर्तनप्रायैर्यजन्ति हि सुमेधसः ॥*

यस कलियुगमा पर्याप्त बुद्धिले युक्त भएका मानिसहरू सङ्कीर्तन यज्ञद्वारा अङ्गउपाङ्ग तथा पार्षदहरूसहित भगवान्‌को अर्चना गर्दछन्। यस युगमा वैदिक साहित्यमा उल्लेख गरिएका अन्य यज्ञहरू सम्पन्न गर्न निकै कठिन छ तर यो सङ्कीर्तन यज्ञ सजिलो र अरू सबै दृष्टिले महान् छ। *भगवद्गीताको* नवौँ अध्यायको चौधौँ श्लोकमा पनि यसको पुष्टि गरिएको छ।

**देवान् भावयतानेन ते देवा भावयन्तु वः ।**
**परस्परं भावयन्तः श्रेयः परमवाप्स्यथ ॥ ११ ॥**

**देवान्** — देवताहरूलाई; **भावयता** — प्रसन्न पारेर; **अनेन** — यसै यज्ञद्वारा; **ते** — ती; **देवा** — देवताहरू; **भावयन्तु** — प्रसन्न पार्नेछन्; **वः** — तिमीहरूलाई; **परस्परम्** — आपसमा; **भावयन्तः** — एक अर्कालाई खुसी तुल्याउँदै; **श्रेयः** — कल्याण; **परम्** — परम(अति); **अवाप्स्यथ** — पाउनेछौ।

**यज्ञहरूद्वारा सन्तुष्ट भएका देवताहरूले तिमीहरूलाई पनि सन्तुष्ट गराउने छन् र यसरी मानिस र देवताबीचको पारस्परिक सहयोगद्वारा सबैको समुन्नति हुनेछ।**

**तात्पर्य :** देवताहरू सांसारिक कार्यका लागि अधिकारप्राप्त प्रशासक हुन्। हरेक

प्राणीलाई शरीर तथा आत्मा धारण गर्नका लागि आवश्यक पर्ने हावा, प्रकाश, पानी र यस्तै अन्य वरदानहरू दिने अधिकार देवताका अधीनमा छन्। यी देवताहरू भगवान्कै शरीरका विभिन्न अङ्गहरूका असङ्ख्य सहायक हुन्। यिनीहरूको प्रसन्नता र अप्रसन्नता मानिसहरूद्वारा गरिने यज्ञमा निर्भर हुन्छ। कुनै पनि यज्ञको उद्देश्य कुनै विशेष देवतालाई खुसी बनाउनु हुन्छ। यसो भए तापनि सम्पूर्ण यज्ञका प्रमुख भोक्ताका रूपमा भगवान् विष्णुकै पूजा गरिन्छ। *भगवद्गीतामा* पनि भनिएको छ— सबै प्रकारका यज्ञहरूका भोक्ता स्वयम् भगवान् श्रीकृष्ण नै हुनुहुन्छ— **भोक्तारं यज्ञतपसाम्।** अतः सम्पूर्ण यज्ञहरूको मुख्य प्रयोजन यज्ञपति श्रीकृष्णलाई प्रसन्न बनाउनु हो। जब यी यज्ञहरू राम्ररी सम्पन्न हुन्छन्, विभिन्न विभागका प्रमुख भएर रहेका देवताहरू स्वतः प्रसन्न हुन्छन् अनि प्राकृतिक उत्पादनको आपूर्तिमा कुनै कमी हुन पाउँदैन।

यज्ञहरू गर्नाले अरू पनि धेरै लाभहरू हुन्छन्। अन्ततोगत्वा यज्ञले मानिसलाई सांसारिक बन्धनबाट मुक्ति मार्गतिर पनि लैजान्छ। यज्ञ गर्नाले मानिसका सबै क्रियाकलापहरू शुद्ध हुन्छन्। वेदहरूमा पनि यस कुराको उल्लेख गरिएको छ— **"आहारशुद्धौ सत्त्वशुद्धिः सत्त्वशुद्धौ ध्रुवास्मृति, स्मृतिलम्भे सर्व ग्रन्थीनां विप्रमोक्षः।"** यज्ञ गर्नाले मानिसको आहार (खानेकुरा) शुद्ध हुन्छ, शुद्ध भोजन गर्नाले मानिसको जीवन नै शुद्ध हुन्छ, जीवन शुद्ध भएपछि मस्तिष्कका सूक्ष्म तन्तुहरू शुद्ध हुन्छन्। यसरी जब मानिसको स्मृति शुद्ध हुन्छ अनि ऊ आफ्नो मुक्तिका बारेमा विचार गर्न सुरु गर्दछ। यी सबै कुरा मिलेर मानिसलाई कृष्णभावनातिर उन्मुख गराउँछन् र यही नै वर्तमान समाजका लागि सबभन्दा आवश्यक कुरा हो।

**इष्टान् भोगान् हि वो देवा दास्यन्ते यज्ञभाविताः ।**
**तैर्दत्तानप्रदायैभ्यो यो भुङ्क्ते स्तेन एव सः ॥ १२ ॥**

**इष्टान्** — इच्छा गरिएको; **भोगान्** — जीवनका आवश्यकताहरू; **हि** — निश्चय नै; **वः** — तिमीहरूलाई; **देवा** — देवताहरूले; **दास्यन्ते** — दिनेछन्; **यज्ञभाविताः** — यज्ञबाट प्रसन्न भएका; **तैः** — तिनीहरूले; **दत्तान्** — दिएका वस्तुहरू; **अप्रदाय** — नदिईकन; **एभ्यः** — यी देवताहरूलाई; **यः** — जसले; **भुङ्क्ते** — भोग गर्दछ; **स्तेन एव** — चोरै हो; **सः** — त्यो।

**जीवनका विभिन्न आवश्यकताहरू पूर्ति गर्ने अधिकार पाएका देवताहरूले यज्ञद्वारा सन्तुष्ट भएर तिम्रा सबै आवश्यकताहरू पूर्ति गरिदिनेछन्। तर, जसले देवताहरूद्वारा प्रदान गरिएको भोग्य सामग्रीहरू उनीहरूलाई अर्पण नगरी प्रयोग गर्दछ, त्यो चोर नै हो।**

**तात्पर्य :** देवताहरू उपभोग्य सामग्रीको आपूर्ति गर्नका लागि भगवान् विष्णुद्वारा नियुक्त गरिएका प्रतिनिधि हुन्। निर्धारित यज्ञहरू सम्पन्न गरेर उनीहरूलाई सन्तुष्ट पार्नु पर्दछ। वेदमा अलग-अलग किसिमका देवताहरूका लागि अलग-अलग किसिमका यज्ञहरू सम्पादन गर्ने विधि दिइएका छन्। तर, अन्त्यमा ती सबै कुरा भगवान् विष्णुमा नै समर्पित हुनेछन् भनिएको छ। जसले भगवान्लाई जानेको छैन तिनीहरूका लागि देवयज्ञ गर्ने विधान छ। यज्ञकर्ताका भिन्न-भिन्न भौतिक गुणहरूअनुरूप नै भिन्न-भिन्न किसिमका यज्ञहरू गर्ने विधान वेदमा छ। विभिन्न प्रकार देवताहरूको पूजा त्यही गुणकै आधारमा गरिन्छ। मांसहारीहरूका लागि देवी कालीको पूजा गर्ने विधान छ। कालि देवी भौतिक प्रकृतिकै विकरालस्वरूप हुन् र ती देवीका अगाडि पशुहरूको बलि दिने विधान छ। तर, जो सतोगुणी छ उसका लागि भगवान् विष्णुको सात्त्विक पूजा गर्ने विधान छ। अन्त्यमा गएर सबै यज्ञहरूको उद्देश्य क्रमशः दिव्य पदसम्म पुग्नु हो। सर्वसाधारण व्यक्तिका लागि कम्तीमा पनि पाँचवटा यज्ञहरू अर्थात् पञ्चयज्ञ गर्नु आवश्यक छ।

जीवनमा आवश्यक पर्ने सम्पूर्ण पदार्थहरू भगवान्कै प्रतिनिधि देवताहरूद्वारा परिपूर्ति हुन्छ भन्ने कुरा हामीले बुझ्नु पर्दछ। कसैले कुनै कुराको सृजना गर्न सक्दैन। उदाहरणका लागि मानवसमाजकै भोज्य पदार्थहरूलाई लिन सकिन्छ। यी खाद्य पदार्थहरूमा शाकाहारीहरूका लागि अन्न, फल, साग, दूध, चिनी आदि वस्तुहरू छन् र मांसाहारीहरूका लागि मासु आदि वस्तुहरू छन् तर यीमध्ये कुनै पनि वस्तुको सृजना मानिसले गर्न सक्दैन। त्यस्तै एउटा अर्को उदाहरण लिऊँ, जीवनका लागि नभई नहुने ताप, प्रकाश, पानी, हावा आदि कुनै पनि वस्तु मानिसले बनाउन सक्दैन। परमेश्वर नहुने भए न त पर्याप्त सूर्यको प्रकाश पाउन सकिन्छ न चन्द्रमाको प्रभा देख्न सकिन्छ न त बिहानको ताजा हावा नै पाउन सकिन्छ। यी कुराहरू नभए मानिस बाँच्नै पनि सक्दैन। यसबाट के स्पष्ट हुन्छ, हाम्रो सम्पूर्ण जीवन भगवान्द्वारा दिइएका वस्तुमा आधारित छ। यहाँसम्म कि हाम्रा उत्पादन केन्द्रहरूका लागि चाहिने विभिन्न कच्चा पदार्थहरू—धातु, गन्धक, पारो, म्याग्निज र यस्तै अन्य वस्तुहरू पनि भगवान्कै प्रतिनिधिहरूले हामीलाई उपलब्ध गराउँदछन्। यी वस्तुहरूको राम्रो सदुपयोग गरेर हामी आत्मसाक्षात्कारका लागि आफूलाई सक्षम र स्वस्थ बनाउन सकौँ जसबाट जीवनको परमलक्ष्य अर्थात् भौतिक जीवनसङ्घर्षबाट मुक्ति पाउन सकौँ। यही उद्देश्य राखेर भगवान्ले यी वस्तुहरू हामीलाई उपलब्ध गराउनुभएको हो। यज्ञानुष्ठानहरू सम्पन्न गर्दै गएमा मानव जीवनको यो लक्ष्य पूरा हुन सक्दछ। यदि जीवनको

वास्तविक उद्देश्यलाई नै बिर्सिएर इन्द्रियतृप्ति मात्र गर्ने उद्देश्यले भगवान्‌का प्रतिनिधिहरूबाट वस्तुहरू ग्रहण गर्दै गएमा हामी यो संसारमा झन्‌झन् बढी फँस्दै जान्छौँ। यसो गरेमा हामी चोर हुनेछौँ र प्रकृतिको विधानद्वारा दण्डित हुनछौँ। सृष्टिको उद्देश्य वास्तवमा यो होइन। चोरहरूको समाज कहिल्यै पनि सुखी रहन सक्दैन किनभने उनीहरूको जीवनको कुनै लक्ष्य नै हुँदैन। स्थूल भौतिकवादी चोरहरूका जीवनको कुनै परमलक्ष्य नै हुँदैन। तिनीहरू मात्र इन्द्रियतृप्तिका लागि निर्देशित हुन्छन्। तिनीहरूलाई कसरी यज्ञ गर्नु पर्दछ भन्ने कुराको कुनै जानकारी हुँदैन। भगवान् चैतन्य महाप्रभुले यज्ञहरू सम्पन्न गर्ने सबैभन्दा सजिलो तरिकाको उद्‌घाटन गर्नुभएको छ, त्यो हो सङ्‌कीर्तन यज्ञ। यो सङ्‌कीर्तन यज्ञ कृष्णभावनाको सिद्धान्त अपनाउने जोसुकैले पनि सम्पन्न गर्न सक्दछ।

**यज्ञशिष्टाशिनः सन्तो मुच्यन्ते सर्वकिल्बिषैः ।**
**भुञ्जते ते त्वघं पापा ये पचन्त्यात्मकारणात् ॥ १३ ॥**

**यज्ञशिष्ट** — यज्ञ सम्पन्न गरेर बाँकी रहेको; **अशिनः** — खाने; **सन्तः** — सज्जन भक्त; **मुच्यन्ते** — मुक्त हुन्छन्; **सर्वकिल्बिषैः** — सबै प्रकारका पापहरूबाट; **भुञ्जते** — भोग्दछन्; **ते** — तिनीहरू; **तु** — तर; **अघम्** — घोर पाप; **पापाः** — पापीहरू; **ये** — जो; **पचन्ति** — भोजन पकाउँछन्; **आत्मकारणात्** — आफ्नै इन्द्रियतृप्तिका लागि।

**भगवान्‌का भक्तहरू आफ्नो भोजन सर्वप्रथम यज्ञमा अर्पण गरेर मात्रै ग्रहण गर्दछन्। त्यसैले तिनीहरू सबै प्रकारका पापबाट मुक्त हुन्छन् तर जो आफ्ना स्वादका लागि मात्र भोजन तयार गर्दछ, त्यसले निश्चय नै पापमात्रै खान्छ।**

**तात्पर्य :** जो भगवान्‌का भक्त छन् वा कृष्णभावनामा लागेका छन् तिनीहरूलाई सन्त भनिन्छ। तिनीहरू सधैँ भगवान्‌कै प्रेममा निमग्न रहिरहन्छन्। ब्रह्मसंहितामा पनि भनिएको छ— **प्रेमाञ्जनच्छुरितभक्तिविलोचनेन सन्तः सदैव हृदयेषु विलोकयन्ति।** सन्तहरू सधैँ भगवान् गोविन्द (सम्पूर्ण आनन्ददाता) या मुकुन्द (मुक्तिदाता) या कृष्ण (सर्वाकर्षक व्यक्तित्व) का प्रगाढ प्रेममा मग्न रहने हुनाले तिनीहरूले कुनै पनि वस्तु भगवान्‌लाई अर्पण नगरी ग्रहण गर्दैनन्। अतः यस्ता भक्तहरू श्रवण, कीर्तन, स्मरण, अर्चना आदि भिन्न भिन्न भक्तिका साधनहरूद्वारा भगवान्‌को यज्ञ गरिरहेका हुन्छन्, जसबाट तिनीहरू संसारका सम्पूर्ण पापमय सङ्गतिका दोषहरूबाट सधैँभरि अलग्गै रहन्छन्। अन्य जो आफ्ना लागि वा आफ्नै इन्द्रियतृप्तिका लागि भोजन तयार गर्दछन्,

तिनीहरू केवल चोर मात्र नभएर सबै किसिमका पापका भोक्ता पनि हुन्। जो व्यक्ति चोर पनि छ र पापी पनि छ, त्यसले कसरी सुख पाउन सक्दछ? अतः मानिसहरूलाई सबै पक्षबाट प्रसन्न बनाउनका लागि कृष्णभावनामा रहेर सङ्कीर्तन यज्ञ सम्पन्न गर्ने सजिलो विधि सिकाउनु पर्दछ। अन्यथा यो संसारमा सुख र शान्ति भन्ने कुरा हुनै सक्दैन।

**अन्नाद् भवन्ति भूतानि पर्जन्यादन्नसम्भवः ।**
**यज्ञाद्भवति पर्जन्यो यज्ञः कर्मसमुद्भवः ॥ १४ ॥**

**अन्नात्** — अन्नबाट; **भवन्ति** — उत्पन्न हुन्छन्; **भूतानि** — भौतिक शरीरहरू; **पर्जन्यात्** — वर्षाबाट; **अन्नसम्भवः** — अन्न उत्पन्न हुन्छ; **यज्ञात्** — यज्ञ सम्पन्न गर्नाले; **भवति** — सम्भव हुन सक्दछ; **पर्जन्यः** — वर्षा; **यज्ञः** — यज्ञ; **कर्म** — निर्धारित कर्म गर्नाले; **समुद्भवः** — उत्पन्न हुन्छ।

**सबै प्राणीहरू अन्नमा आश्रित छन्, अन्न वर्षाबाट उत्पन्न हुन्छ, यज्ञहरू सम्पन्न गर्नाले वर्षा हुन्छ र यज्ञ निर्धारित कर्मबाट उत्पन्न हुन्छ।**

**तात्पर्य :** *भगवद्गीताका* महान् टीकाकार श्रील बलदेव विद्याभूषण आफ्नो टीकामा यसरी लेख्नु हुन्छ—**ये इन्द्राद्यङ्गतयावस्थितं यज्ञं सर्वेश्वरं विष्णुमभ्यर्च्य तच्छेषमश्नन्ति तेन तद्देहयात्रां सम्पादयन्ति ते सन्तः सर्वेश्वरस्य यज्ञपुरुषस्य भक्ताः सर्वकिल्बिषैरनादिकालविवृद्धैरात्मानुभव प्रतिबन्धकैर्निखिलैः पापैर्विमुच्यन्ते।** परमेश्वर स्वयम् यज्ञपुरुष हुनुहुन्छ। उहाँ सम्पूर्ण यज्ञहरूका भोक्ता हुनुहुन्छ र सबै देवताका स्वामी पनि हुनुहुन्छ। जसरी शरीरका विविध अङ्गहरूले सिङ्गै शरीरको सेवा गर्दछन् त्यसै गरी सबै देवताहरूले भगवान्को सेवा गर्दछन्। इन्द्र, चन्द्र तथा वरुणजस्ता देवताहरू भगवान्द्वारा सांसारिक कामको रेखदेख गर्नका लागि नियुक्त गरिएका अधिकृत हुन्। वेदहरूले यिनै देवताहरूलाई सन्तुष्ट पार्नका लागि यज्ञहरू गर्ने निर्देशन दिन्छन्। अनि देवताहरू यज्ञबाट सन्तुष्ट भएर अन्न उत्पादन गर्नका लागि पर्याप्त हावा, प्रकाश र जल आदि प्रदान गर्दछन्। तर, स्वयम् भगवान् श्रीकृष्णको पूजा गर्दा उहाँका अङ्गस्वरूप भएर रहेका देवताहरूको स्वतः पूजा हुने हुँदा ती देवताहरूका लागि फेरि अलग्गै पूजा गरिरहनुपर्ने आवश्यकता छैन। त्यसै कारणले कृष्णभावनामा लागेका भगवान्का भक्तहरू पहिले भगवान्लाई भोग लगाउँछन् अनि ग्रहण गर्दछन्। यो आध्यात्मिक किसिमले शरीरको पोषण गर्ने एउटा विधि हो। यसो गर्नाले पूर्वजन्ममा शरीरद्वारा गरिएका पापकर्मका प्रतिफलहरू मात्र नष्ट हुँदैनन् अझ वर्तमान शरीर पनि संसारका सम्पूर्ण प्रदूषणहरूबाट मुक्त हुन्छ। जब कहीं सङ्क्रामक

रोग फैलिन्छ, एउटा प्रतिरोधात्मक सुईले मानिसलाई त्यस किसिमको सङ्क्रामक रोगबाट बचाउँछ। त्यसै गरी भगवान् विष्णुलाई सर्वप्रथम भोग लगाएर खाएको भोजनले पनि हामीलाई सांसारिक अनुरागबाट पर्याप्त मात्रामा रक्षा गर्दछ। जो यस किसिमको विधिमा अभ्यस्त छ त्यसलाई भगवान्‌को भक्त भनिन्छ। अतः जसले कृष्णभावनामा रहेर भगवान् श्रीकृष्णलाई अर्पण गरेको भोजन मात्र ग्रहण गर्दछ त्यो व्यक्ति आत्मसाक्षात्कारका मार्गमा बाधक बनेर रहेका पूर्वजन्मका समस्त भौतिक दोषका प्रतिफलको सामना गर्न समर्थ हुन्छ। अर्कातिर जसले यसो गर्दैन त्यसले पापपूर्ण कर्मको परिमाण बढाइरहेको हुन्छ र आगामी जन्ममा कुकुर र सुँगुरको शरीर धारण गर्ने तयारी गरिरहेको हुन्छ, जहाँ पुगेर उसले समस्त पापका प्रतिफलको रूपमा आइपर्ने कष्ट भोग्नु पर्दछ। यो भौतिक जगत् दोषैदोषले भरिएको छ, जसले भगवान् विष्णुको प्रसाद ग्रहण गरेर आफूलाई बचायो त्यो व्यक्ति सांसारिक दोषहरूको आक्रमणबाट बच्यो र जसले यसो गर्दैन त्यो त्यस्तै भौतिक दोषहरूको विषय बन्दछ। अन्न तथा सागसब्जी नै मानिसका वास्तविक खाद्य पदार्थ हुन्। मानिसहरू विभिन्न किसिमका अन्न, सागसब्जी तथा फलफूल इत्यादि खाने गर्दछन् तर पशुहरू अन्नका चोकर, साग, घाँस र रूख-बिरुवा इत्यादि खाने गर्दछन्। माछा-मासु खान अभ्यस्त भएका मानिसहरूले पनि वनस्पतिहरूकै उत्पादनमा निर्भर हुनु पर्दछ, किनभने पशुहरूको आहार वनस्पति नै हो। यसरी आखिरमा गएर हामी खेतबारीमा हुने उत्पादनमा निर्भर हुन पर्दछ, ठुला कारखानाहरूका उत्पादनमा होइन। खेतबारीमा हुने उत्पादन आकाशबाट हुने पर्याप्त वर्षामा निर्भर हुन्छ र यस किसिमको वर्षाको नियन्त्रण इन्द्र, सूर्य, चन्द्रमा आदि देवताहरूले गर्दछन्। ती देवताहरू सबै भगवान्‌का सेवक हुन्। यज्ञद्वारा भगवान् प्रसन्न हुनुहुन्छ। जसले यज्ञ-आदि गर्दैन त्यसले अभावको सामना गर्नु पर्दछ। यही हो प्रकृतिको नियम। यज्ञ, विशेष गरेर सङ्कीर्तन यज्ञ नै यो कलियुगका लागि तोकिएको छ। अतः खाद्यान्न आपूर्तिको अभावबाट बच्नका लागि पनि हामीले यज्ञ गर्नै पर्दछ।

**कर्म ब्रह्मोद्‌भवं विद्धि ब्रह्माक्षरसमुद्‌भवम् ।**
**तस्मात्सर्वगतं ब्रह्म नित्यं यज्ञे प्रतिष्ठितम् ॥ १५ ॥**

**कर्म** — कर्म; **ब्रह्म** — वेदहरूबाट; **उद्‌भवम्** — उत्पन्न भएको; **विद्धि** — जान; **ब्रह्म** — वेद; **अक्षरः** — परब्रह्मबाट; **समुद्‌भवम्** — उत्पन्न भएको छ; **तस्मात्** — त्यसैले; **सर्वगतम्** — सर्वव्यापक; **ब्रह्म** — ब्रह्म; **नित्यम्** — शाश्वत रूपले; **यज्ञे** — यज्ञमा; **प्रतिष्ठितम्** — रहेको छ।

**वेदमा यज्ञ आदि नियमित कर्महरूको विधान छ र वेदहरू साक्षात् भगवान्बाट उत्पन्न भएका हुन्, त्यसैले सर्वव्यापी ब्रह्म शाश्वत रूपले यज्ञकर्महरूमा नै अवस्थित हुनुहुन्छ।**

**तात्पर्य :** यस श्लोकमा यज्ञका लागि कर्म वा भगवान् श्रीकृष्णको सन्तुष्टिका लागि मात्र कर्म गर्नु आवश्यक रहेको कुरामा धेरै जोड दिइएको छ। यदि हामीले यज्ञपुरुष विष्णुको सन्तुष्टिका लागि कर्म गरेमा उक्त कर्मको निर्देशन हामीले ब्रह्म वा दिव्य वेदहरूबाट प्राप्त गर्नु पर्दछ। वेदहरू भनेका कर्मलाई निर्देशित गर्ने संहिता हुन्। वेदको निर्देशनबिना गरिने कर्मलाई विकर्म वा अनधिकृत कर्म वा पापपूर्ण कर्म भनिन्छ। अतः कर्मफलबाट बच्नका लागि सधैँ वेदहरूबाटै निर्देशन लिएर काम गर्नु पर्दछ। जसरी सामान्य जीवनमा रहँदा राज्यको निर्देशनअनुसारको काम गर्नु पर्दछ, त्यसै गरी विशिष्ट जीवनमा भगवान्को राज्यको निर्देशनअनुसार कर्म गर्नु पर्दछ। वेदमा रहेका यस्ता निर्देशनहरू स्वयम् भगवान्का श्वासबाट उत्पन्न भएका हुन्। भनिएको छ—**"अस्य महतो भूतस्य निश्वसितम् एतद् यदृग्वेदो यजुर्वेदः सामवेदोऽथर्वाङ्गिरसः।"** चार वेदहरू क्रमशः यजुर्वेद, ऋग्वेद, सामवेद र अथर्ववेद भगवान्का श्वासबाट उत्पन्न भएका हुन् (*बृहदारण्यकोपनिषद्* ४.५.११) ब्रह्मसंहितामा भनिएअनुसार भगवान् सर्वशक्तिमान् हुनुभएकाले उहाँ श्वासद्वारा बोल्न सक्नु हुन्छ। आफ्ना प्रत्येक इन्द्रियद्वारा सबै इन्द्रियहरूको कार्य गर्न सक्नु हुन्छ। भगवान् निश्वासद्वारा बोल्न सक्नु हुन्छ, आँखाहरूद्वारा गर्भाधान गराउन सक्नु हुन्छ। वास्तवमा भनिएको पनि छ—भगवान्ले प्रकृतिमाथि दृष्टिपात गर्नुभयो र सम्पूर्ण जीवलाई जन्माउनुभयो। भौतिक प्रकृतिका गर्भमा बद्ध जीवलाई स्थापित गरिसकेपछि वा जन्माइसकेपछि भगवान्ले ती बद्ध आत्मालाई वैदिक ज्ञानका रूपमा आफ्ना निर्देशनहरू दिनुभयो, जसका माध्यमबाट उनीहरू फेरि आफ्नो घर भगवद्धाममा फर्किन सकून्। हामीले सधैँभरि के कुरा सम्झिरहनु पर्दछ, भौतिक प्रकृतिमा रहेका सबै बद्ध जीवात्माहरू सांसारिक मोजमज्जातिरै आकर्षित हुन्छन् तर वैदिक निर्देशनहरू कसरी तयार पारिएको छ भने, यसको पालन गर्नाले मानिस आफ्ना विकृत इच्छाहरूलाई सन्तुष्ट गरेर र तथाकथित सांसारिक भोग पूरा गरेर भगवान्का समीपमा आउन सक्दछन्। बद्ध आत्माले मुक्ति प्राप्त गर्ने यो एउटा अवसर हो। त्यसैले बद्ध आत्माहरूले कृष्णभावनाभावित भएर यज्ञ विधिको पालन गर्ने प्रयत्न गर्नै पर्दछ। वैदिक निर्देशनहरूको पालन गर्न नसक्नेहरूले पनि कृष्णभावनाका सिद्धान्तहरूलाई ग्रहण गर्न सक्दछन् र यसले पनि मानिसलाई वैदिक यज्ञहरू सम्पन्न गरेर पुगिने ठाउँमा पुर्‍याउँदछ।

**एवं प्रवर्तितं चक्रं नानुवर्तयतीह यः ।**
**अघायुरिन्द्रियारामो मोघं पार्थ स जीवति ॥ १६ ॥**

**एवं** — यसरी; **प्रवर्तितम्** — वेदहरूद्वारा स्थापित; **चक्रम्** — चक्र; **न अनुवर्तयति** — ग्रहण गर्दैन; **ईह** — यस जीवनमा; **यः** — जो; **अघ आयुः** — जसको जीवन पापपूर्ण छ; **इन्द्रियारामः** — इन्द्रियतृप्तिमा लम्पट; **मोघम्** — व्यर्थै; **पार्थ** — हे पृथापुत्र (अर्जुन), **स** — त्यो; **जीवति** — बाँच्दछ।

**हे प्रिय अर्जुन! जसले मानव जीवनमा वेदहरूद्वारा यसरी स्थापित यज्ञ-चक्रको अनुसरण गर्दैन त्यसले आफूलाई निश्चय नै पापपूर्ण जीवनतिर लैजान्छ। केवल इन्द्रियहरूको सन्तुष्टिका लागि मात्र बाँच्ने यस्ता व्यक्तिको जीवन नै व्यर्थ छ।**

**तात्पर्य :** 'कठोर परिश्रम गर र इन्द्रियतृप्तिको आनन्द भोग' भन्ने सांसारिक दर्शनलाई भगवान्‌ले यहाँ निन्दा गर्नुभएको छ। अतः जसले यो भौतिक संसारको भोग गर्न चाहन्छ त्यसले माथि चर्चा गरिएको यज्ञचक्र सम्पन्न गर्नु अत्यन्त आवश्यक छ। जसले उपरोक्त विधिविधानको पालन गर्दैन त्यसले अझ बढी उपेक्षित वा तिरस्कृत भएर अत्यन्त कष्टपूर्ण जीवन बिताउनु पर्दछ। प्रकृतिको नियमअनुसार प्राप्त भएको यो मनुष्य शरीरको प्रमुख लक्ष्य कर्मयोग, ज्ञानयोग वा भक्तियोग यी तीन मार्गमध्ये कुनै एउटा मार्गको अवलम्बन गरेर आत्मसाक्षात्कार गर्नु हो। पाप र पुण्यको सीमाभन्दा माथि उठिसकेका योगीहरूका निमित्त दृढतापूर्वक तोकिएका यज्ञहरू सम्पन्न गर्नैपर्ने आवश्यकता छैन तर इन्द्रियतृप्तिमै संलग्न रहेका व्यक्तिहरूका लागि आत्मशुद्धिका लागि माथि चर्चा गरिएको यज्ञचक्र पूरा गर्नु आवश्यक छ।

कर्म धेरै प्रकारका छन्। कृष्णचेतनामा नलागेका मानिसहरू विषयचेतनामा लाग्दछन् त्यसैलै तिनीहरूलाई पुण्यकर्म गर्नु आवश्यक हुन्छ। यो यज्ञचक्रको पद्धति कस्तो प्रकारले तयार पारिएको छ भने, विषय वासनामा लागेका मानिसहरू पनि त्यस्ता विषयको प्रतिफलमा नअल्भिर्छई आफ्नो इच्छापूर्ति गर्न सक्दछन्। संसारको सम्पन्नता हाम्रो आफ्नो प्रयासमा निर्भर नभएर भगवान्‌को आधारभूत व्यवस्थामा निर्भर छ, र यो कार्य प्रत्यक्ष रूपले देवताहरूले सम्पन्न गर्दछन्। त्यसैले वेदमा उल्लेख गरिएका देवताहरूलाई लक्ष्य गरेर यज्ञहरू गरिन्छन्। यो पनि अप्रत्यक्ष रूपमा कृष्णभावनाकै अभ्यास हो, किनभने जसले यज्ञ सम्पादनको कार्यमा दक्षता प्राप्त गर्दछ त्यो अवश्य कृष्णभावनाभावित हुन्छ तर यदि कुनै व्यक्ति यज्ञहरू सम्पन्न गरेर पनि कृष्णभावनाभावित हुन सक्दैन, त्यस्ता व्यक्तिका लागि यज्ञ गर्ने कार्य मात्र एउटा आचारसंहिता

बन्दछ। अतः मानिसले आफ्नो उन्नतिलाई आचारसंहिताको स्तरसम्म मात्र सीमित राख्न हुँदैन। कृष्णभावना प्राप्त गर्नका लागि त्योभन्दा पर पुग्नु पर्दछ।

**यस्त्वात्मरतिरेव स्यादात्मतृप्तश्च मानवः ।**
**आत्मन्येव च संतुष्टस्तस्य कार्यं न विद्यते ॥ १७ ॥**

**यः** — जो; **तु** — तर; **आत्मरति एव** — आत्मामा नै आनन्द लिँदै; **स्यात्** — रहन्छ; **आत्मतृप्तः** — स्वयम् प्रकाशित; **च** — तथा; **मानवः** — मानिस; **आत्मनि** — आफैँमा; **एव** — मात्र; **च** — तथा; **संतुष्टः** — पूर्णतया सन्तुष्ट; **तस्य** — त्यसको; **कार्यम्** — कर्तव्य; **न विद्यते** — रहँदैन।

**तर जो आफैँमा आनन्दित छ, जसको जीवन नै आत्मसाक्षात्कारपूर्ण छ र जो आफूमै सन्तुष्ट छ त्यस्ता पूर्णतया तृप्त भएका व्यक्तिका लागि कुनै पनि कर्तव्य बाँकी रहन्न।**

**तात्पर्य :** जो व्यक्ति पूर्णतया कृष्णभावनाभावित छ र कृष्णभावनामा रहेर गरिएका कार्यहरूबाट पूर्णतया सन्तुष्ट छ, त्यस्ता व्यक्तिका लागि गर्नुपर्ने कुनै कर्तव्य बाँकी रहँदैन। कृष्णभावनाभावित व्यक्तिभित्रका सम्पूर्ण नास्तिकता वा पाप सफा भइसकेका हुन्छन्, जुन कुरा हजारौँ यज्ञहरूका प्रभावले मात्र हुन सम्भव छ। यस प्रकार चेतनाको शुद्धिद्वारा मानिस भगवान्सँग रहेको आफ्नो शाश्वत सम्बन्धको स्थितिप्रति पूर्ण विश्वस्त हुन्छ। यसरी भगवान्को कृपाद्वारा उसका कार्यहरू आफैँ प्रकाशित हुन्छन्। यस अवस्थामा वैदिक उपदेशहरूको पालन गर्नुपर्ने बाध्यता पनि उसलाई हुँदैन। यस किसिमको व्यक्तिले भौतिक क्रियाकलापप्रति रूचि राख्दैन र सुरा-सुन्दरी र यस्तै अन्य प्रलोभनयुक्त भौतिक व्यवस्थाबाट पनि उसले कुनै आनन्द पाउन सक्दैन।

**नैव तस्य कृतेनार्थो नाकृतेनेह कश्चन ।**
**न चास्य सर्वभूतेषु कश्चिदर्थव्यपाश्रयः ॥ १८ ॥**

**न** — छैन; **एव** — निश्चय नै; **तस्य** — त्यस व्यक्तिको; **कृतेन** — कार्य सम्पादनद्वारा; **अर्थः** — प्रयोजन; **न** — छैन; **अकृतेन** — कर्तव्य नगरीकन; **इह** — यो संसारमा; **कश्चन** — जेसुकै; **न** — छैन; **च** — तथा; **अस्य** — उसको; **सर्वभूतेषु** — समस्त प्राणीहरूमा; **कश्चित्** — कुनै; **अर्थ** — प्रयोजन; **व्यपाश्रयः** — शरणागत।

**आत्मा-राम पुरुषलाई न त कुनै निर्धारित कर्तव्य गर्नेपर्ने बाध्यता हुन्छ, न त यस किसिमको कार्य सम्पन्न नगर्नुका पछाडि कुनै कारण नै हुन्छ। उसलाई कुनै अरू जीवात्मामाथि निर्भर रहने आवश्यकता समेत पर्दैन।**

**तात्पर्य :** आत्मसाक्षात्कार गरिसकेका व्यक्तिका लागि कृष्णभावनामा रहेर कर्म गर्नुबाहेक अर्को कुनै पनि कर्तव्य पालन गर्नुपर्ने बाध्यता छैन। यो कृष्णभावना भनेको निष्क्रियता वा अकर्मण्यता होइन। यो कुरा आगामी श्लोकमा भनिने छ। कृष्णभावनाभावित व्यक्तिले कुनै पनि व्यक्तिको आश्रय लिँदैन चाहे त्यो मानिस होस् वा देवता। कृष्णभावनामा रहेर उसले जे गर्दछ त्यही नै उसको पर्याप्त कर्तव्य हुन्छ।

**तस्मादसक्तः सततं कार्यं कर्म समाचर ।**
**असक्तो ह्याचरन् कर्म परमाप्नोति पूरुषः ॥ १९ ॥**

**तस्मात्** — त्यसैले; **असक्तः** — आसक्ति नराखी; **सततम्** — निरन्तर; **कार्यं** — कर्तव्यका रूपमा; **कर्म** — काम; **समाचर** — गर; **असक्तः** — अनासक्त; **हि** — निश्चय नै; **आचरन्** — गर्दा गर्दै; **कर्म** — काम; **परम** — परमपुरुषलाई; **आप्नोति** — पाउँदछ; **पूरुषः** — मानिसले।

**अतः कर्मफलमा आसक्ति नराखी नै मानिसले निरन्तर आफ्नो कर्म गर्नु पर्दछ। आसक्ति नराखी कर्म गर्नाले मानिसले परमपुरुषलाई प्राप्त गर्दछ।**

**तात्पर्य :** भक्तहरूका लागि परमेश्वर भनेका भगवान् हुनुहुन्छ र निराकार-वादीहरूका लागि परमेश्वर भनेको मुक्ति हो। अतः जसले राम्रो मार्गदर्शन प्राप्त गरेर र कर्मफलप्रति अनासक्त रहेर भगवान् श्रीकृष्णका लागि कार्य गर्दछ वा कृष्णभावनामा रहेर कार्य गर्दछ त्यसले निश्चय नै जीवनको परमलक्ष्य प्राप्तिका दिशामा प्रगति गर्दछ। भगवान् श्रीकृष्णको इच्छा पूर्ण गर्नका लागि अर्जुनलाई कुरुक्षेत्रका युद्ध-मैदानमा युद्ध गर्न भनिएको हो, किनभने श्रीकृष्ण अर्जुनले युद्ध गरून् भन्ने चाहनु हुन्थ्यो। असल व्यक्ति हुन खोज्नु र अहिंसक हुन खोज्नु पनि व्यक्तिगत आसक्ति हो तर फलको आसक्ति नराखी कर्म गर्नु भगवान्का लागि कर्म गर्नु हो। परमात्माका लागि गरिने कर्म उत्तम श्रेणीको पूर्ण कर्म हो जसको समर्थन स्वयम् भगवान् श्रीकृष्णले पनि गर्नुभएको छ।

निर्धारित यज्ञजस्ता वैदिक कार्यहरू इन्द्रियतृप्तिका लागि गरिने दूषित कर्महरूको शुद्धिका लागि सम्पन्न गरिन्छन्। तर, कृष्णभावनामय कर्महरू राम्रा र नराम्रा कर्मफलहरूभन्दा माथि हुन्छन्। कृष्णभावनाभावित व्यक्तिमा कर्मफलको आसक्ति अलिकति पनि हुँदैन। उसले त केवल भगवान् श्रीकृष्णका लागि मात्र कर्म गर्दछ। ऊ सबै किसिमका क्रियाकलापमा लागेको हुन्छ तैपनि फलप्रति पूर्णतया अनासक्त हुन्छ।

**कर्मणैव हि संसिद्धिमास्थिता जनकादयः ।**
**लोकसंग्रहमेवापि सम्पश्यन्कर्तुमर्हसि ॥ २० ॥**

**कर्मणा** — कर्मद्वारा; **एव** — पनि; **हि** — निश्चय नै; **संसिद्धिम्** — पूर्णतामा; **आस्थिता** — रहेका; **जनकादयः** — जनक र अन्य राजाहरू; **लोकसंग्रहम्** — सर्वसाधारण मानिसहरू; **एव अपि** — पनि; **सम्पश्यन्** — विचार गरेर; **कर्तुम्** — गर्नका निम्ति; **अर्हसि** — योग्य छौ।

**जनक आदि राजाहरूले केवल निर्धारित कर्म गर्नाले मात्रै पनि सिद्धि प्राप्त गरे, त्यसैले साधारण मानिसहरूलाई शिक्षा दिने उद्देश्यले पनि तिमीले कर्म गर्नै पर्दछ।**

**तात्पर्य :** जनकजस्ता राजाहरू सिद्ध आत्मा हुन्, त्यसैले उनीहरूलाई वेदमा निर्धारित गरिएका कर्तव्यहरूको पालन गर्नैपर्ने बाध्यता थिएन तैपनि उनीहरूले सर्वसाधारण मानिसहरूलाई उदाहरण प्रस्तुत गर्नका लागि सबै निर्धारित कर्महरू सम्पन्न गरे। जनक सीताजीका पिता र भगवान् रामका ससुरा हुनुहुन्थ्यो। भगवान्का महान् भक्त हुनाले उहाँको स्थिति असाधारण थियो तापनि उहाँ मिथिला (जनकपुर क्षेत्र) का राजा भएका हुनाले आफ्ना प्रजालाई कर्तव्यको पालन कसरी गर्नु पर्दछ भन्ने शिक्षा उहाँले दिनुपर्थ्यो, त्यसैले जनकले कर्मको त्याग गर्नुभएन। भगवान् श्रीकृष्ण र भगवान्का शाश्वत सखा अर्जुनलाई कुरुक्षेत्रको युद्धभूमिमा लडाइँ गर्नुपर्ने आवश्यकता थिएन तापनि सामान्य मानिसलाई पाठ सिकाउनका लागि उहाँहरू लड्नुभयो। जब राम्रा परामर्शहरू तथा प्रयासहरू असफल हुन्छन् त्यस अवस्थामा हिंसा पनि आवश्यक हुन्छ भन्ने शिक्षा दिनका लागि उहाँहरूले युद्ध गर्नुभयो। कुरुक्षेत्रमा युद्ध सुरु हुनुभन्दा अगाडि युद्ध रोक्नका लागि स्वयम् भगवान्सहितका व्यक्तिहरूबाट सबै किसिमका प्रयासहरू भए तर अर्को पक्ष लडाइँ गर्न नै तयार थियो। त्यसैले यस किसिमको उपयुक्त कारण भएकाले युद्ध गर्नु आवश्यक थियो। हुनत कृष्णभावनाभावित व्यक्तिलाई कुनै पनि सांसारिक कार्यमा रूचि हुँदैन तापनि उनीहरू सर्वसाधारणलाई कसरी कर्म गर्नु पर्दछ र कसरी रहनु पर्दछ भन्ने ज्ञान सिकाउनका लागि कर्म गरिरहन्छन्। कृष्णभावनामा रहेर कर्म गर्ने अनुभव भएका व्यक्तिहरू अरूले उनीहरूको अनुसरण गर्नसक्ने किसिमले काम गर्दछन्। यस कुराको व्याख्या तलको श्लोकमा गरिएको छ।

**यद्यदाचरति श्रेष्ठस्तत्तदेवेतरो जनः ।**
**स यत्प्रमाणं कुरुते लोकस्तदनुवर्तते ॥ २१ ॥**

**यत् यत्** — जस्तो जस्तो; **आचरति** — आचरण गर्दछन्; **श्रेष्ठः** — आदरणीय नेताले; **तत् तत्** — त्यस्तै त्यस्तै; **एव** — नै; **इतरः** — अरू सामान्य; **जनः** — व्यक्तिले; **सः** — उसले; **यत्** — जे जस्तो; **प्रमाणम्** — उदाहरण वा आदर्श; **कुरुते** — प्रस्तुत गर्दछ; **लोकः** — सारा संसारले; **तत्** — त्यसैको; **अनुवर्तते** — चरणचिन्हहरूको अनुसरण गर्दछ।

**ठुला मानिसले जे जस्तो काम गर्दछन्, सामान्य मानिसले त्यसैको अनुसरण गर्दछन्। ठुला मानिसले अनुकरणीय कार्य गरेर जस्तो आदर्श स्थापित गर्दछन्, सारा संसारले तिनै कुराको अनुसरण गर्दछ।**

**तात्पर्य :** साधारण मानिसहरूलाई व्यावहारिक आचरणद्वारा जनतालाई शिक्षा दिनसक्ने एउटा नेताको सधैँ आवश्यकता हुन्छ। स्वयम् आफैँ धूम्रपान गर्ने नेताले जनतालाई धूम्रपान नगर्ने शिक्षा दिन सक्दैन। भगवान् चैतन्य महाप्रभुले भन्नुभएको छ— शिक्षकले शिक्षा दिनुभन्दा पहिले त्यो कुरालाई आफैँले आचरण गरेर देखाउनु पर्दछ। यस किसिमको व्यावहारिक शिक्षा दिने शिक्षकलाई आचार्य भनिन्छ वा आदर्श शिक्षक भनिन्छ। त्यसैले सर्वसाधारणलाई शिक्षा दिने शिक्षकले शास्त्रका सिद्धान्तको पालना गरेको हुनु पर्दछ। एउटा शिक्षकले प्रामाणिक शास्त्रका विरुद्ध कुनै पनि नियम बनाउन सक्दैन। मनुसंहिता र यस्तै अरू प्रामाणिक शास्त्रहरू मानव समाजका लागि अनुसरण गर्नयोग्य पुस्तकहरू हुन्। तसर्थ नेता वा शिक्षकको उपदेश यस्तै प्रामाणिक शास्त्रका सिद्धान्तमा आधारित हुनु पर्दछ। आफ्नो उन्नति चाहने व्यक्तिले पूर्ववर्ती महान् आचार्यहरूले अपनाएको आदर्श नियमहरूलाई अनुसरण गर्नु पर्दछ। *श्रीमद्भागवत्मा* पनि यही कुराको पुष्टि गर्दै भनिएको छ— मानिसले महान् भक्तहरूका चरणचिन्हहरूकै अनुसरण गर्नु पर्दछ। आध्यात्मिक अनुभूतिका क्षेत्रमा उन्नति गर्ने मार्ग पनि यही नै हो। राज्यको राजा होस् या प्रशासनप्रमुख होस्, स्कूलको शिक्षक होस् या घरको बाबु होस् यी सबै सर्वसाधारण अबोध मानिसहरूका स्वाभाविक नेता मानिन्छन्। यस्ता सबै प्रकारका स्वाभाविक नेताहरूको आफ्ना आश्रितहरूप्रति एउटा ठुलो जिम्मेदारी हुन्छ। अतः तिनीहरू सबै नैतिक तथा आध्यात्मिक नियमका प्रामाणिक पुस्तकहरूसँग राम्ररी परिचित हुनु आवश्यक छ।

**न मे पार्थास्ति कर्तव्यं त्रिषु लोकेषु किञ्चन ।**
**नानवाप्तमवाप्तव्यं वर्त एव च कर्मणि ॥ २२ ॥**

**न** — छैन; **मे** — मेरो; **पार्थ** — हे पृथापुत्र !; **अस्ति** — छ; **कर्तव्यम्** — गर्नुपर्ने कार्य; **त्रिषु** — तीनैवटा; **लोकेषु** — लोकहरूमा; **किञ्चन** — केही पनि;

**न** — छैन; **अनवाप्तम्** — चाहेको; **अवाप्तव्यम्** — पाउनका लागि; **वर्त** — लागिरहेको छु; **एव** — निश्चय नै; **च** — पनि; **कर्मणि** — कर्ममा।

**हे पृथापुत्र! तीनै लोकमा मैले गर्नैपर्ने कुनै कर्तव्य छैन। न त मलाई कुनै वस्तुको चाहना छ न त कुनै कुराको आवश्यकता नै, तैपनि म आफ्नो कर्तव्यकर्ममा लागिरहन्छु।**

**तात्पर्य :** वैदिक साहित्यहरूमा भगवान्‌को वर्णन यसरी गरिएको छ—

*तमीश्वराणां परमं महेश्वरं तं देवतानां परमं च दैवतम् ।*
*पतिं पतीनां परमं परस्ताद् विदाम देवं भुवनेशमीड्यम् ॥*
*न तस्य कार्यं करणं च विद्यते न तत्समश्चाभ्यधिकश्च दृश्यते ।*
*परास्य शक्तिर्विविधैव श्रूयते स्वाभाविकी ज्ञानबलक्रिया च ॥*

"परमेश्वर अरू सबै नियन्त्रकहरूका पनि नियन्त्रक हुनुहुन्छ। उहाँ सबै लोकपालहरूमा सर्वश्रेष्ठ हुनुहुन्छ। उहाँकै अधीनमा सबै छन्। परमेश्वरबाट नै सबै जीवात्माले आफ्नो विशिष्ट शक्ति प्राप्त गर्दछन्। जीवात्मा स्वयम्‌मा श्रेष्ठ छैन। भगवान् सबै देवताहरूका पूजनीय हुनुहुन्छ र सबै निर्देशकहरूका परमनिर्देशक हुनुहुन्छ। त्यसैले उहाँ सबै प्रकारका भौतिक नेताहरू तथा प्रशासकहरूभन्दा दिव्य हुनुहुन्छ र सबैका पूजनीय पनि हुनुहुन्छ। उहाँभन्दा ठुलो तथा महान् अर्को कोही छैन। उहाँ सबै कारणहरूका कारण हुनुहुन्छ।

उहाँको शारीरिक स्वरूप साधारण जीवात्माको जस्तो छैन। उहाँको शरीर र आत्मामा कुनै भिन्नता छैन। उहाँ परमपुरुष हुनुहुन्छ। उहाँका सबै इन्द्रियहरू दिव्य छन्। उहाँको कुनै एउटा इन्द्रियले अरू इन्द्रियहरूको समेत कार्य गर्न सक्दछ। त्यसैले उहाँभन्दा ठुलो पनि कोही छैन र उहाँको बराबरीमा पुग्ने पनि कोही छैन। उहाँका शक्तिहरू बहुरूपी छन्। त्यसैले उहाँका कार्यहरू प्राकृतिक क्रमअनुसार स्वतः सम्पन्न हुँदै जान्छन्।" (*श्वेताश्वतर उपनिषद्* ६.७.८)

भगवान्‌मा हरेक वस्तु पूर्ण ऐश्वर्यमा र पूर्ण सत्यमा अवस्थित हुन्छन्। भगवान्‌ले गर्नुपर्ने कुनै कर्तव्य हुँदैन। जसलाई आफ्नो कर्मको फल प्राप्त गर्नु छ त्यसलाई केही न केही कर्म गर्नुपर्ने हुन्छ तर जसलाई यी तीनै लोकमा कुनै पनि वस्तु पाउन बाँकी छैन त्यसका लागि कर्तव्य पनि केही छैन तैपनि भगवान् श्रीकृष्ण क्षत्रियहरूका नेता बनेर कुरुक्षेत्रको युद्धभूमिमा कार्यरत हुनुहुन्छ किनभने दीन-दुःखीहरूलाई सुरक्षा प्रदान गर्नु क्षत्रियहरूको धर्म हो। हुनत भगवान् सबै शास्त्रका विधिविधानहरूभन्दा माथि हुनुहुन्छ तैपनि उहाँ शास्त्रविरुद्ध कुनै काम गर्नुहुन्न।

**यदि ह्यहं न वर्तेयं जातु कर्मण्यतन्द्रितः ।**
**मम वर्त्मानुवर्तन्ते मनुष्याः पार्थ सर्वशः ॥ २३ ॥**

**यदि** — यदि; **हि** — निश्चय नै; **अहम्** — म; **न वर्तेयम्** — नलागेमा; **जातु** — कहिल्यै; **कर्मणि** — निर्धारित कर्ममा; **अतन्द्रितः** — अति सावधानीसँग; **मम** — मेरो; **वर्त्म** — मार्गलाई; **अनुवर्तन्ते** — पछि लाग्ने छन्; **मनुष्याः** — सबै मानिसहरू; **पार्थ** — हे पृथापुत्र; **सर्वशः** — सबै प्रकारबाट।

**यदि मैले आफ्ना निर्धारित कर्तव्यकर्मलाई सावधानीपूर्वक सम्पन्न नगरे हे अर्जुन! सारा मानिसहरू मेरै अनुसरण गरेर अल्छी हुनेछन्।**

**तात्पर्य :** आध्यात्मिक जीवनमा प्रगति गर्नका लागि सामाजिक शान्तिको आवश्यकता पर्दछ र यसका लागि केही परम्परागत रीति-रिवाजहरू हुन्छन्। सबै सभ्य मानिसहरूले यस्ता रीति-रिवाजहरूको परिपालना गर्ने गर्दछन्। यस्ता विधि-नियमहरू बद्ध जीवहरूका लागि मात्र हुन्। भगवान् श्रीकृष्णका लागि यी नियमहरू होइनन् तैपनि उहाँ धार्मिक सिद्धान्तको स्थापना गर्नका लागि अवतरित हुनुभएको हुनाले उहाँले निर्दिष्ट नियमहरूको पालना गर्नुभयो। अन्यथा सर्वसाधारण मानिसहरूले पनि उहाँकै चरणचिन्हको अनुसरण गर्नेथिए किनभने उहाँ नै सबैभन्दा ठुला आधिकारिक व्यक्तित्व हुनुहुन्छ। भगवान् श्रीकृष्णले आफ्ना घरमा रहँदा र घरबाट बाहिर रहँदा पनि एउटा गृहस्थले गर्नुपर्ने सबै धार्मिक कार्यहरू गरिरहनुहुन्थ्यो भन्ने कुराको जानकारी हामीले *श्रीमद्भागवत्बाट* पाउन सक्दछौँ।

**उत्सीदेयुरिमे लोका न कुर्यां कर्म चेदहम् ।**
**संकरस्य च कर्ता स्यामुपहन्यामिमाः प्रजाः ॥ २४ ॥**

**उत्सीदेयुः** — नष्ट हुनेछन्; **इमे** — यी सबै; **लोका** — लोकहरू; **न कुर्याम्** — नगेरमा; **कर्म** — निर्धारित कर्म; **चेत्** — यदि; **अहम्** — मैले; **संकरस्य** — अवाञ्छित सन्तानहरूको; **च** — पनि; **कर्ता** — स्रष्टा; **स्याम्** — हुनेछु; **उपहन्याम्** — नाश होलान्; **इमाः** — यी सबै; **प्रजाः** — प्राणीहरू।

**यदि मैले निर्दिष्ट कर्तव्य नगरेमा सारा मानिसहरू नष्ट हुनेछन्। अनि म वर्णसङ्कर जनसङ्ख्या वृद्धिको पनि कारण बन्नेछु र यसरी सम्पूर्ण प्राणीहरूको शान्तिको विनाशक बन्नेछु।**

**तात्पर्य :** वर्णसङ्कर भनेको नचाहिएको जनसमुदाय हो र यसले सर्वसाधारणको शान्तिमा बाधा पुर्‍याउँदछ। यही सामाजिक विघ्नबाधालाई रोक्नका लागि विभिन्न विधिविधानहरूको व्यवस्था गरिएको हो। यी विधिविधानहरूद्वारा

मानिसहरू जीवनमा आध्यात्मिक उन्नति गर्नका लागि स्वतः शान्तिपूर्ण र सुसङ्गठित हुन्छन्। जब भगवान् श्रीकृष्ण अवतरित हुनुहुन्छ, यस्ता महत्त्वपूर्ण कार्यहरूको आवश्यकता र प्रतिष्ठा बनाइराख्नका लागि उहाँले पनि ती विधिविधानअनुसार आचरण गर्नु हुन्छ। भगवान् सम्पूर्ण प्राणीहरूका पिता हुनुहुन्छ। अतः यदि प्राणीहरू पथभ्रष्ट भएमा त्यसको उत्तरदायित्व अप्रत्यक्ष रूपले भगवान्मा नै जान्छ। त्यसैले जब जब धार्मिक नीतिनियमहरूको अनादर हुन थाल्छ, तब तब भगवान् स्वयम् अवतरित भएर समाजलाई ठीक गर्नु हुन्छ। हामीले एउटा कुरामा ध्यानु दिनु आवश्यक छ, त्यो भनेको — हामीले भगवान्का चरणचिन्हको अनुसरण गर्नु पर्दछ, तर उहाँको अनुकरण गर्नखोज्नु हुँदैन। त्यसो गर्न पनि सकिँदैन। अनुसरण गर्नु र अनुकरण गर्नु एउटै होइन। भगवान्ले आफ्नो बाल्यावस्थामा गोवर्धन पर्वत उचाल्नुभएको थियो तर हामी त्यसो गर्न सक्दैनौँ। मानिसका लागि यो असम्भव छ। हामीले उहाँका उपदेशहरूको अनुसरण गर्नु पर्दछ तर कहिल्यै पनि उहाँको अनुकरण गर्न खोज्नु हुँदैन। *श्रीमद्भागवत्* (१०.३३.३०-३१) मा यस कुराको पुष्टि गर्दै भनिएको छ—

*नैतत्समाचरेज्जातु मनसापि ह्यनीश्वरः ।*
*विनश्यत्याचरन् मौढ्याद्यथारुद्रोऽब्धिजं विषम् ॥*
*ईश्वराणां वचः सत्यं तथैवाचरितं क्वचित् ।*
*तेषां यत् स्ववचोयुक्तं बुद्धिमांस्तत् समाचरेत् ॥*

मानिसले भगवान्को र भगवान्द्वारा शक्तिप्रदान गरिएका भक्तहरूको उपदेशलाई पालन गर्नु पर्दछ। उनीहरूका उपदेशहरू हाम्रा लागि कल्याणकारी हुन्छन्। बुद्धिमान् मानिसले ती उपदेशलाई कार्यान्वयन गर्दछन् र उनीहरूका क्रियाकलापको अनुकरण गर्ने प्रयास नहोस् भन्ने कुरामा सतर्कता अपनाउँदछन्। भगवान् शिवको अनुकरण गरेर कसैले पनि विषको सागरलाई पिउने प्रयास गर्नु हुँदैन।

ईश्वरले सूर्य र चन्द्रमाको गतिविधिलाई समेत नियन्त्रण गर्न सक्नु हुन्छ। हामीले सधैँ ईश्वरको त्यो श्रेष्ठ अवस्थालाई विचार गर्नु पर्दछ । यस किसिमको शक्ति नभई कोही पनि ईश्वर हुन सक्दैन। ईश्वर भनेको सर्वशक्तिमान् हो। भगवान् शिवजीले समुद्रसम्म फैलिएको विषलाई पिइदिनुभयो तर कुनै सामान्य मानिसले यस किसिमको विषको एउटा सानो अंशमात्र पनि पिउने प्रयास गरेमा त्यो मरिहाल्दछ। शिवजीका यस्ता धेरै ढोँगी भक्तहरू छन् जो गाँजा र यस्तै अन्य लागूपदार्थमा लागेका छन्। तिनीहरूले आफ्नो सामर्थ्यलाई भुलेर

भगवान् शिवका कार्यको अनुकरण गर्दै मृत्युलाई नजिक बोलाइरहेका छन्। यसै गरी भगवान् श्रीकृष्णका पनि केही ढोँगी भक्तहरू छन् जो गोवर्धन पर्वत उचाल्ने आफ्नो असमर्थतालाई बिर्सिएर भगवान्को रासलीला वा प्रेमनृत्यको अनुकरण गर्न चाहन्छन्। अतः मानिसहरूले शक्तिमानको अनुकरण गर्नतर्फ नलागेर उनीहरूको उपदेशको अनुसरण गर्नु नै सबैभन्दा राम्रो हो। योग्यता नभएका व्यक्तिले उनीहरूको ठुलो पद हत्याउन खोज्नु हुँदैन। तर, अहिले भगवान्को शक्ति नभएका धेरै ईश्वरीय अवतारहरू देखिएका छन्।

**सक्ताः कर्मण्यविद्वांसो यथा कुर्वन्ति भारत ।**
**कुर्याद् विद्वांस्तथासक्तश्चिकीर्षुर्लोकसंग्रहम् ॥ २५ ॥**

**सक्ताः** — आसक्त; **कर्मणि** — तोकिएका कर्ममा; **अविद्वांसः** — अज्ञानीहरू; **यथा** — जसरी; **कुर्वन्ति** — गर्दछन्; **भारत** — हे भरतवंशी अर्जुन; **कुर्यात्** — गर्नु पर्दछ; **विद्वान्** — विद्वान्ले; **तथा** — त्यसै गरी; **असक्तः** — अनासक्त; **चिकीर्षुः** — गर्नचाहने; **लोकसंग्रहम्** — साधारण मानिस।

**जसरी एउटा अज्ञानी व्यक्तिले फलमा आसक्ति राखेर कर्म गर्दछ, विद्वान्ले पनि त्यसरी नै कर्म गर्दछ तर उसको कर्म मानिसलाई सही मार्गमा हिँडाउने उद्देश्यले अनासक्त रहेर गरिएको हुन्छ।**

**तात्पर्य :** कृष्णभावनायुक्त व्यक्ति र कृष्णभावनारहित व्यक्ति, तिनीहरूका चाहनाले नै छुट्टिन्छन्। कृष्णभावनामा लागेको व्यक्तिले कृष्णभावनाको विकासमा प्रतिकूल हुने कुनै कार्य गर्दैन। हुनत उसको कामगराइ पनि भौतिक क्रियाकलापमा अत्यन्त आसक्त भएको व्यक्तिको जस्तै हुन्छ तर भिन्नता भएका, भौतिक क्रियाकलापमा संलग्न व्यक्ति आफ्नै इन्द्रियहरूलाई तृप्त गर्नका लागि कर्म गर्दछन् र कृष्णभावनाभावित व्यक्तिले भगवान् श्रीकृष्णको सन्तुष्टिका लागि कर्म गर्दछन्। अतः साधारण मानिसलाई कसरी कर्म गर्नु पर्दछ र कर्मफललाई कसरी कृष्णभावनामा लगाउनु पर्दछ भन्ने बुझाउनका लागि पनि कृष्णभावनाभावित व्यक्तिले आफैँ उदाहरण बनेर देखाउनु पर्दछ।

**न बुद्धिभेदं जनयेदज्ञानां कर्मसंगिनाम् ।**
**जोषयेत्सर्वकर्माणि विद्वान्युक्तः समाचरन् ॥ २६ ॥**

**न** — न; **बुद्धिभेदं** — बुद्धिमा विचलन; **जनयेत्** — उत्पन्न गराओस्; **अज्ञानाम्** — अज्ञानीहरूको; **कर्मसंगिनाम्** — सकाम कर्ममा आसक्त; **जोषयेत्** — लगाओस्; **सर्वकर्माणि** — सबै कर्महरू; **विद्वान्** — विद्वान् व्यक्तिले; **युक्तः** — तत्पर; ( **योगयुक्त** ) **समाचरन्** — अभ्यास गर्दै।

**ज्ञानी पुरुषले सकाम कर्ममा आसक्त भएका अज्ञानीहरूको बुद्धिलाई विचलित पार्न हुन्न र तिनलाई कर्म गर्नबाट रोक्न हुँदैन बरु भक्तिभावले काम गर्दै तिनीहरूलाई सबै प्रकारका क्रियाकलापमा संलग्न गराउनु पर्दछ ( कृष्णभावनाको क्रमिक विकासका लागि )।**

**तात्पर्य : "वेदैश्च सर्वैरहमेववेद्यः"** वैदिक कार्यहरूको पराकाष्ठा यही हो। भौतिक गतिविधिका लागि दिइएका निर्देशनहरू सहित वेदमा व्यवस्था गरिएका सबै प्रकारका यज्ञ तथा कार्यहरूको एउटै उद्देश्य भगवान् श्रीकृष्णलाई बुझ्नु हो, किनभने भगवान् श्रीकृष्ण जीवनका परमलक्ष्य हुनुहुन्छ। तर, इन्द्रियतृप्तिभन्दा परको कुनै कुरा थाहा नभएका बद्ध जीवात्माहरू त्यही उद्देश्य पूर्तिका निमित्त वेदको अध्ययन गर्दछन्। वैदिक यज्ञ अनुष्ठानद्वारा मानिसका सकाम कर्म र इन्द्रियतृप्तिका कामहरू नियमित हुन्छन् र त्यसैबाट उसले विस्तारै कृष्णभावनाको उत्कर्ष प्राप्त गर्दछ। अतः कृष्णभावनालाई आत्मसात् गरेका व्यक्तिहरूले अरूहरूलाई तिनका क्रियाकलाप र बुझाइमा बाधा उत्पन्न गरिदिनुहुन्न। बरु उनीहरूले त सम्पूर्ण कर्मफललाई भगवान् श्रीकृष्णका सेवामा कसरी लगाउन सकिन्छ भन्ने देखाउँदै कार्य गर्नु पर्दछ। कृष्णभावनाभावित भएको व्यक्तिले गरेको यस्तो कार्य देखेर इन्द्रियतृप्तिका लागि कर्म गर्ने अज्ञानी व्यक्तिले पनि कसरी काम गर्नु पर्दछ र कसरी व्यवहार गर्नु पर्दछ भन्ने कुरा सिक्न सक्दछ। हुनत अज्ञानी व्यक्तिलाई उसले गर्नलागेका काममा बाधा पुऱ्याइदिनु ठीक हुँदैन तापनि उसमा अलिकति पनि कृष्णभावनाको विकास गराउन सकेमा त्यो व्यक्ति अरू वैदिक विधिविधानको वास्ता नगरी सीधै भगवान्को सेवामा संलग्न हुन सक्दछ। त्यस्ता भाग्यशाली व्यक्तिहरूले वैदिक विधिविधानको अनुसरण गरिरहनु पर्दैन, किनभने कृष्णभावनाद्वारा नै तिनीहरूले त्यो सम्पूर्ण फल प्राप्त गर्दछन् जुन फल निर्धारित कर्तव्यहरूको पालन गर्नाले प्राप्त हुन्छ।

**प्रकृतेः क्रियमाणानि गुणैः कर्माणि सर्वशः ।**
**अहंकारविमूढात्मा कर्ताहमिति मन्यते ॥ २७॥**

**प्रकृतेः** — भौतिक प्रकृतिको; **क्रियमाणानि** — गरिएका; **गुणैः** — गुणहरूद्वारा; **कर्माणि** — कर्महरूलाई; **सर्वशः** — सबै किसिमबाट; **अहंकार-विमूढ** — अहङ्कारले ढाकिएको; **आत्मा** — आत्मा; **कर्ता** — गर्नेवाला; **अहम्** — म हूँ; **इति** — यस्तो; **मन्यते** — मान्दछ।

**अहङ्कारका प्रभावले अभिभूत भएको जीवात्माले तीन गुणले युक्त प्रकृतिद्वारा सम्पन्न गरिएका कर्मलाई पनि आफैँले गरेको ठानेर आफूलाई नै कर्ता मान्दछ।**

**तात्पर्य :** एउटै स्तरमा रहेर काम गरिरहेका दुई प्रकारका व्यक्तिहरूमध्ये एउटा कृष्णभावनाभावित छ र अर्को सांसारिक भावनाले भरिएको छ, झट्ट हेर्दा यिनीहरू एउटै मञ्चमा काम गरिरहेजस्ता देखिन्छन् तर यी दुईको स्थितिमा आकाश जमिनको अन्तर रहेको हुन्छ। भौतिक चेतना भएको व्यक्ति अहङ्कारले गर्दा स्वयम् आफूलाई प्रत्येक कार्यको कर्ता ठान्दछ। शरीरको संरचना परमेश्वरको निरीक्षणमा भौतिक प्रकृतिबाट भएको हो भन्ने कुरा ऊ बुझ्दैन। भौतिकवादी व्यक्तिलाई अन्ततोगत्वा ऊ स्वयम् पनि भगवान् श्रीकृष्णका अधीनमा छु भन्ने कुराको ज्ञान हुँदैन। अहङ्कारी व्यक्तिले हरेक काम स्वतन्त्र रूपले आफैँले गरेको हो भन्ने देखाउन चाहन्छ र त्यसको श्रेय पनि आफैँले लिन चाहन्छ। यही नै उसको अज्ञानताको लक्षण हो। यो स्थूल शरीर र सूक्ष्म शरीरको सृष्टि भगवान्‌को आज्ञाअनुसार भौतिक प्रकृतिले गरेको हो र त्यसैले सम्पूर्ण शारीरिक र मानसिक क्रियाकलापहरू भगवान् श्रीकृष्णको सेवामा लगाउनु पर्दछ भन्ने पनि उसले बुझेको हुँदैन। अज्ञानी मानिसले भगवान् नै भौतिक शरीर र इन्द्रियहरूका स्वामी हुनुहुन्छ अर्थात्, हृषिकेश हुनुहुन्छ भन्ने कुरा बिर्सिदिन्छ। इन्द्रियतृप्ति गर्ने काममा नै लामो समयसम्म इन्द्रियहरूको दुरूपयोग गर्नाले ऊ यथार्थमा अहङ्कारद्वारा किंकर्तव्यविमूढ हुन्छ। यसैले गर्दा उसले भगवान् श्रीकृष्णसँगको आफ्नो शाश्वत सम्बन्ध नै बिर्सन्छ।

**तत्त्ववित्तु महाबाहो गुणकर्मविभागयोः ।**
**गुणा गुणेषु वर्तन्त इति मत्वा न सज्जते ॥ २८॥**

**तत्त्ववित्** — परमसत्यका ज्ञाता; **तु** — तर; **महाबाहो** — हे महाबाहु (बलिया पाखुरा भएका) अर्जुन!; **गुणकर्म** — भौतिक प्रभावमा गरिने कर्मका; **विभागयोः** — विभागको; **गुणाः** — इन्द्रियहरू; **गुणेषु** — इन्द्रियतृप्तिमा; **वर्तन्ते** — संलग्न हुन्छन्; **इति** — यस्तो; **मत्वा** — सोचेर; **न सज्जते** — आसक्त हुँदैन।

**हे महाबाहु! भक्तिमय कर्म र सकाम कर्मको अन्तर जानेर परमसत्यलाई बुझेको व्यक्तिले कहिल्यै पनि आफूलाई इन्द्रिय र इन्द्रियतृप्तिका कार्यमा लगाउँदैन।**

**तात्पर्य :** परमसत्यलाई जानेको मानिसले भौतिकताको सङ्गतबाट हुने असहज परिस्थितिलाई सहन गर्दछ। उसले 'म भगवान्‌को अंश हूँ र म सधैँ यो भौतिक जगत्‌मा रहिरहनु हुँदैन' भन्ने कुरा जानेको हुन्छ। साथै "म सच्चिदानन्दमय भगवानको अंश हूँ, यही नै मेरो सही पहिचान हो तर म अहिले कुनै कारणवश शारीरिक अवधारणाको बुद्धिका बन्धनमा परेको छु"

भन्ने अनुभूति पनि उसलाई भइरहन्छ। त्यसैले उसले आफ्नो अस्तित्वको शुद्ध अवस्थामा आफ्ना सम्पूर्ण क्रियाकलापलाई भगवान् श्रीकृष्णको भक्तिमय सेवामा समर्पित गरिदिनु पर्दछ वा मिलाइदिनु पर्दछ। यसो गर्दा कृष्णभावनामय क्रियाकलापमा उसले आफूलाई संलग्न गराउँदछ र परिस्थितिजन्य तथा अस्थायी भौतिक इन्द्रियहरूका क्रियाकलापप्रति ऊ स्वभावले अनासक्त बन्दछ। उसले आफ्नो जीवनको भौतिक अवस्था भगवान्‌को नियन्त्रणमा रहेको पाउँदछ। फलस्वरूप ऊ सबै प्रकारका भौतिक प्रतिक्रियाहरूबाट अविचलित हुन्छ र ती क्रियाकलापलाई पनि ऊ भगवान्‌कै कृपा ठान्दछ। *श्रीमद्भागवत्* अनुसार जसले परमसत्यलाई ब्रह्म, परमात्मा र भगवान् यी तीनवटा भिन्न रूपहरूमा जानेको छ त्यसलाई तत्त्ववित् भनिन्छ। उसले भगवान्‌सँग आफ्नो यथार्थ अवस्थाको के सम्बन्ध छ भन्ने कुरा पनि बुझेको हुन्छ।

**प्रकृतेर्गुणसम्मूढाः सज्जन्ते गुणकर्मसु ।**
**तानकृत्स्नविदो मन्दान्कृत्स्नविन्न विचालयेत् ॥ २९ ॥**

**प्रकृतेः** — प्रकृतिका; **गुण** — गुणमा; **सम्मूढाः** — मोहित भएका; **सज्जन्ते** — आसक्त हुन्छन्; **गुणकर्मसु** — भौतिक क्रियाकलापमा; **तान्** — ती; **अकृत्स्नविदः** — अल्पज्ञानी व्यक्तिहरू; **मन्दान्** — आत्मसाक्षात्कारको कुरा बुझ्न अल्छी गर्नेहरूलाई; **कृत्स्नवित्** — यथार्थ ज्ञानी व्यक्तिले; **न विचालयेत्** — विचलित गराउने प्रयास गर्नुहुन्न।

**प्रकृतिका गुणबाट मोहित भएका अज्ञानी व्यक्तिहरू आफूलाई भौतिक क्रियाकलापमा संलग्न गराएर त्यसैमा आसक्त हुन्छन्। अज्ञानवश गरिएका तिनका ती क्रियाकलापहरू अधम श्रेणीका हुन्छन् तापनि बुद्धिमान् व्यक्तिले तिनलाई विचलित गराउनु हुँदैन।**

**तात्पर्य :** अज्ञानी व्यक्तिहरू स्थूल भौतिक चेतनासँग आफ्नो झूटो सम्बन्ध स्थापित गर्दछन् र भौतिक उपाधियुक्त हुन्छन्। यो शरीर भौतिक प्रकृतिको उपहार हो। जो व्यक्ति शारीरिक चेतनामा नै अति आसक्त हुन्छ त्यसलाई मन्द भनिन्छ अर्थात्, त्यस्तो व्यक्तिलाई आत्मज्ञान नभएको अल्छी भन्न सकिन्छ। अज्ञानी व्यक्तिले शरीरलाई आत्मा ठान्दछ। यिनीहरू अरूहरूसँग हुने शारीरिक सम्बन्धलाई नै बन्धुत्व ठान्दछन्। जुन पृथ्वीमा उनीहरूले शरीर पाए त्यस पृथ्वीलाई पूजनीय विषय मान्दछन् र धार्मिक यज्ञ कार्यहरूको औपचारिकतालाई नै आफ्नो जीवनको लक्ष्य मान्दछन्। यस किसिमका भौतिक उपाधियुक्त मानिसहरू राष्ट्रियता, समाजसेवा तथा परोपकार जस्ता क्रियाकलापमा लाग्दछन्। यसरी भौतिक उपाधि अन्तर्गत रहेका व्यक्तिहरू सधैँ भौतिक

स्तरमै व्यस्त रहन्छन्। उनीहरूका लागि आध्यात्मिक अनुभूति भनेको एउटा काल्पनिक कथाजस्तै हुन्छ। त्यसैले तिनीहरू यसतर्फ त्यति रूचि राख्दैनन्। आध्यात्मिक जीवनमा प्रबुद्धता प्राप्त गरेका व्यक्तिले भौतिकतामा आसक्त भएका त्यस प्रकारका मानिसहरूलाई उत्तेजित वा दिग्भ्रमित तुल्याइदिनुहुन्न। उनीहरूले त चुपचापसँग आफ्नो आध्यात्मिक गतिविधिलाई अघि बढाउँदै जानु पर्दछ। भौतिकताबाट भ्रमित भएका त्यस्ता व्यक्तिहरू अहिंसा तथा परोपकारिता जस्ता जीवनका प्राथमिक नैतिक सिद्धान्तहरूमा अल्झिइरहन्छन्।

अज्ञानी व्यक्तिहरू कृष्णभावनामा रहेर गरिएका कर्महरूको प्रशंसा गर्दैनन्, त्यसैले भगवान् श्रीकृष्णले हामीलाई उपदेश दिनुभएको छ— त्यस्ता व्यक्तिहरूलाई विचलित गराउनु र त्यसमा आफ्नो मूल्यवान समय नष्ट गर्नु हुँदैन। तर, भगवान्‌का भक्तहरू भगवान्‌भन्दा पनि बढ्ता दयालु हुन्छन्, किनभने उनीहरूले भगवान्‌को अभिप्राय बुझेका हुन्छन्। त्यसैले गर्दा उनीहरू अज्ञानी व्यक्तिहरूका नजिक गएर तिनीहरूलाई कृष्णभावनामय कार्यमा संलग्न गराउने प्रयास गरेर सबै प्रकारका जोखिमहरूको सामना गर्न तयार हुन्छन्, किनभने यो मानिसमात्रका लागि परमआवश्यक छ।

**मयि सर्वाणि कर्माणि संन्यस्याध्यात्मचेतसा ।**
**निराशीर्निर्ममो भूत्वा युध्यस्व विगतज्वरः ॥ ३० ॥**

**मयि** — ममा; **सर्वाणि** — सबै किसिमका; **कर्माणि** — क्रियाकलापहरू; **संन्यस्य** — पूर्णरूपले छोडेर; **अध्यात्मचेतसा** — आत्मज्ञानयुक्त चेतनाले; **निराशीः** — लाभको चाहना नराखीकन; **निर्ममः** — स्वामित्वको भावनारहित; **भूत्वा** — भएर; **युध्यस्व** — युद्ध गर; **विगतज्वरः** — आलस्यरहित।

**अतः हे अर्जुन! तिमी आफ्ना सबै कार्यहरू ममा समर्पण गरेर, मेरो पूर्ण ज्ञानले युक्त भएर, लाभको इच्छारहित भएर र म र मेरो भन्ने भावना नराखी आलस्यरहित भएर युद्ध गर।**

**तात्पर्य :** प्रस्तुत श्लोकले *भगवद्गीताको* आशयलाई स्पष्ट रूपले सङ्केत गरेको छ। भगवान् भन्नुहन्छ— सैनिकहरूजस्तै अनुशासित भएर पूर्ण कृष्णभावनामा रही आफ्नो कर्तव्य पालन गर्नु पर्दछ। यस्ता उपदेशहरूलाई कार्यान्वयन गर्दा कतिपय साना ठुला कठिनाइहरू आइपर्न सक्दछन् तापनि भगवान् श्रीकृष्णमा आश्रित रहेर आफ्ना कर्तव्यहरूको निर्वाह गर्नु पर्दछ। जीवात्मा भगवान्‌को सहायताबिना स्वतन्त्र रूपमा सुखी रहनै सक्दैन, किनभने भगवान्‌का इच्छाको अधीनस्थ रहनु नै जीवको सही स्वरूप नै यही हो। जीवात्माको शाश्वत तथा यथार्थ स्वरूप हो त्यसैले भगवान्‌ले अर्जुनलाई

आफू नै सेनापति भएजस्तै लडाइँ गर्ने आदेश दिनुभएको हो। मानिसले भगवान्को इच्छा पूर्ण गर्नका लागि आफ्नो सबै कुरा बलिदान गर्नु पर्दछ र साथै स्वामित्वको दाबी नगरी स्वधर्मको परिपालन गर्नु पर्दछ। अर्जुनले केवल भगवान्को आदेशमात्र पालन गरे पुग्थ्यो, त्यसमा विचार गर्नुपर्ने आवश्यकता नै थिएन। परमेश्वर समस्त आत्माका पनि आत्मा हुनुहुन्छ भन्ने ठानेर केही सोच्दै नसोची जो पूर्णतया परमात्मामा आश्रित हुन्छ, वा अर्को शब्दमा जो पूर्णतया कृष्णभावनाभावित हुन्छ त्यसलाई **"अध्यात्म चेतस"** भनिन्छ। जो आफ्नो स्वामीको आज्ञानुसार कर्म त गर्दछ तर फलको आशा राख्दैन त्यसलाई **'निराशी'** भनिन्छ। जसरी एउटा कर्मचारी वा खजान्चीले बैंकमा लाखौँ लाख डलर वा रुपियाँ गन्ने काम गर्दछ तर आफ्ना लागि एक पैसा पनि दाबी गर्दैन, त्यसै गरी मानिसले यो संसारमा जे जति कुरा छन् ती सबै भगवान्का हुन्, कुनै व्यक्तिविशेषका होइनन् भन्ने कुरा बुझ्नु पर्दछ। यस श्लोकमा आएको **'मयि'** वा **'मम'** भन्ने शब्दको विशेष अर्थ यही हो। जो यथार्थमा कृष्णभावनाभावित भएर काम गर्दछ त्यसले कुनै वस्तुमाथि आफ्नो स्वामित्वको दाबी गर्दैन। यो चेतनालाई 'निर्मम' भनिन्छ अर्थात् मेरो केही होइन भन्ने चेतना भनिन्छ। यस किसिमको कठोर आदेश पालन गर्न यदि कुनै किसिमको अरुचि नै भए पनि त्यस्तो अरुचिलाई फ्याँकीदिनु पर्दछ र शारीरिक सम्बन्धका तथाकथित आफन्तहरूबाट टाढा हुनुपरे पनि डराउनुहुन्न। यस प्रकारले मानिस **'विगतज्वर'** अर्थात् ज्वरग्रस्त, आलस्ययुक्त वा जडताग्रस्त मानसिकताबाट रहित हुन्छ। आ-आफ्नै गुण अवस्थाअनुसार हरेक व्यक्तिले आ-आफ्नै किसिमका विशेष कामहरू गर्नु पर्दछ र यस्ता कामहरू माथि भनिएजस्तै कृष्णभावनामा रहेर गर्न सकिन्छ।

**ये मे मतमिदं नित्यमनुतिष्ठन्ति मानवाः ।**
**श्रद्धावन्तोऽनसूयन्तो मुच्यन्ते तेऽपि कर्मभिः ॥ ३१॥**

**ये** — जसले; **मे** — मेरो; **मतम्** — उपदेशलाई; **इदम्** — यो; **नित्यम्** — नित्यकर्मका रूपमा; **अनुतिष्ठन्ति** — नियमित पालन गर्दछन्; **मानवाः** — मानिसहरू; **श्रद्धावन्तः** — श्रद्धा र भक्तिले युक्त भएर; **अनसूयन्तः** — ईर्ष्यारहित भएर; **मुच्यन्ते** — मुक्त हुन्छन्; **ते** — ती सबै; **अपि** — पनि; **कर्मभिः** — सकाम कर्मका बन्धनबाट।

**मेरा उपदेशअनुसार आफ्ना कर्तव्यहरूको पालना गर्दै श्रद्धायुक्त तथा ईर्ष्यारहित भएर मैले दिएको शिक्षाको अनुसरण गर्ने व्यक्ति सकाम कर्मका बन्धनबाट मुक्त हुन्छ।**

**तात्पर्य :** भगवान् श्रीकृष्णका उपदेशहरू सम्पूर्ण वैदिक ज्ञानका सार हुन्, त्यसैले यी उपदेशहरूमा कुनै अपवाद छैन र यी शाश्वत सत्य छन्। जसरी वेद शाश्वत छ, त्यसै गरी कृष्णभावनाको सत्य पनि शाश्वत छ, त्यसैले भगवान्प्रति कुनै ईर्ष्याभाव नराखी मानिसले दृढतापूर्वक उहाँका उपदेशहरू पालन गर्नु पर्दछ। *भगवद्गीताको* भाष्य लेख्ने धेरै दार्शनिकहरू छन् तर तिनीहरूको भगवान् श्रीकृष्णमा कुनै विश्वास छैन। त्यस्ता व्यक्तिहरू सकाम कर्मका बन्धनबाट कहिल्यै मुक्त हुन सक्दैनन् तर भगवान्का शाश्वत उपदेशहरूमा दृढ विश्वास भएको एउटा साधारण मानिस ती आदेशहरूलाई पूर्णतया पालन गर्न नसके पनि सकाम कर्मका बन्धनबाट मुक्त हुन्छ। कृष्णभावनाको प्रारम्भिक अवस्थामा मानिसले भगवान्का आदेशहरू पूर्णतया पालन गर्न सक्दैन तर पनि ऊ ती सिद्धान्तबाट अप्रसन्न नभई पराजय र निराशाको विचारलाई छोडेर निष्कपट भावले काम गर्दै जान्छ। फलस्वरूप ऊ विशुद्ध कृष्णभावनाका स्तरमा पुग्दछ। यसमा कुनै शङ्का छैन।

**ये त्वेतदभ्यसूयन्तो नानुतिष्ठन्ति मे मतम् ।**
**सर्वज्ञानविमूढांस्तान् विद्धि नष्टानचेतसः ॥ ३२ ॥**

**ये** — जो; **तु** — किन्तु; **एतत्** — यो; **अभ्यसूयन्तः** — ईर्ष्यावश; **न अनुतिष्ठन्ति** — नियमित रूपले सम्पन्न गर्दैनन्; **मे** — मेरो; **मतम्** — उपदेश; **सर्वज्ञान** — सबै प्रकारका ज्ञान; **विमूढान्** — पूर्णतया मूर्ख; **तान्** — तिनीहरूलाई; **विद्धि** — जान; **नष्टान्** — सबै नाश भएका; **अचेतसः** — कृष्णभावनाबिना।

**तर जसले ईर्ष्यावश यी उपदेशको उपेक्षा गर्दछन् र यिनको पालन गर्दैनन् ती व्यक्तिहरू सबै प्रकारका ज्ञानले रहित भएका महामूर्ख मानिन्छन् र पूर्णता पाउनका लागि तिनीहरूले गरेका प्रयासहरू पनि नष्ट हुन्छन्।**

**तात्पर्य :** कृष्णभावनारहित हुनुको दोषलाई यहाँ स्पष्ट रूपले व्याख्या गरिएको छ। जसरी सबैभन्दा ठुलो कार्यकारी प्रशासन प्रमुखको आदेश नमान्नेहरूलाई दण्डको व्यवस्था हुन्छ, त्यसै गरी भगवान्को आदेश पालन नगर्नेहरूका लागि पनि अवश्य दण्डको व्यवस्था हुन्छ। भगवान्को आज्ञा नमान्ने व्यक्ति जतिसुकै ठुलो भए पनि उसलाई आफ्नै आत्माको ज्ञान हुँदैन र उसको हृदय नै शून्य हुने भएकाले उसलाई ब्रह्म, परमात्मा र भगवान्को पनि ज्ञान हुँदैन, त्यसैले त्यस्ता मानिसको जीवन पूर्ण वा सार्थक हुन्छ भन्ने कुराको आशा गर्न सकिँदैन।

**सदृशं चेष्टते स्वस्याः प्रकृतेर्ज्ञानवानपि ।**
**प्रकृतिं यान्ति भूतानि निग्रहः किं करिष्यति ॥ ३३ ॥**

**सदृशम्** — अनुसार; **चेष्टते** — चेष्टा गर्दछ; **स्वस्याः** — आफैँद्वारा; **प्रकृतेः** — प्रकृतिका गुणको; **ज्ञानवान्** — विद्वान्; **अपि** — यद्यपि; **प्रकृतिम्** — प्रकृति; **यान्ति** — प्राप्त हुन्छन्; **भूतानि** — समस्त जीवात्मा; **निग्रहः** — नियन्त्रण; **किम्** — के; **करिष्यति** — गर्न सक्दछ।

**ज्ञानी मानिसले पनि आफ्नो स्वभावअनुसार कार्य गर्दछ। प्रत्येक व्यक्तिले तीन गुणहरूबाट प्राप्त भएको आफ्नो स्वभावको अनुसरण गरेको हुन्छ, त्यसलाई दमन गर्नाले के हुनसक्ला ?**

**तात्पर्य :** कृष्णभावनाको दिव्य स्तरमा अवस्थित नभई प्रकृतिका गुणहरूको प्रभावबाट मुक्त हुन सकिँदैन। यो कुरा स्वयम् भगवान्‌ले गीताको ७.१४ मा भन्नुभएको छ। सांसारिक धरातलमा अवस्थित भएका ठुलाभन्दा ठुला शिक्षित व्यक्तिहरूलाई पनि खालि सैद्धान्तिक ज्ञानको माध्यमले आत्मालाई शरीरबाट छुट्याएर मायाको जालबाट मुक्त हुन सम्भव छैन। आफूलाई विज्ञानका क्षेत्रमा निकै अघि पुगेको सम्झिने धेरै यस्ता तथाकथित अध्यात्मवादीहरू छन् जो भित्रभित्रै पूर्णतया प्रकृतिका गुणहरूको अधीनमा रहेका छन्। तिनीहरू प्रकृतिका गुणभन्दा पर जानसकेका छैनन्। मानिस प्राज्ञिक दृष्टिले जतिसुकै ठुलो विद्वान् भए पनि धेरै समयसम्म भौतिक प्रकृतिका सङ्गतमा रहेका कारणले ऊ बन्धनमा नै रहेको हुन्छ। आफ्नो निर्धारित कर्महरू गर्ने कार्यमा नै संलग्न रहेको व्यक्तिलाई पनि यो कृष्णभावनामृतले उसका भौतिक प्रपञ्चहरूबाट मुक्ति दिलाउन सहयोग पुऱ्याउँदछ। त्यसैले पूर्णतया कृष्णभावनामा भावित नभई कसैले पनि निर्धारित कर्महरूको परित्याग गर्नु हुँदैन। कसैले पनि आफ्नो निर्धारित कर्तव्यलाई परित्याग गरेर तथाकथित योगी वा कृत्रिम अध्यात्मवादी बन्ने प्रयास गर्नु हुन्न। बरु आफू जुन ठाउँमा छ त्यही ठाउँमा रहेर कृष्णभावनामृतको राम्रो प्रशिक्षण प्राप्त गर्नु र कृष्णभावनाभावित हुने प्रयाश गर्नु उत्तम हुन्छ। यसरी कृष्णमायाका बन्धनबाट मुक्त हुन सकिन्छ।

**इन्द्रियस्येन्द्रियस्यार्थे रागद्वेषौ व्यवस्थितौ ।**
**तयोर्न वशमागच्छेत्तौ ह्यस्य परिपन्थिनौ ॥ ३४ ॥**

**इन्द्रियस्य** — इन्द्रियहरूको; **इन्द्रियस्य अर्थे** — इन्द्रियहरूका विषयमा; **रागद्वेषौ** — राग र द्वेष (आसक्ति र अनासक्ति); **व्यवस्थितौ** — नियमभित्र रहेका

छन्; **तयोः** — तिनको; **न** — न; **वशम्** — वशमा; **आगच्छेत्** — आओस्; **तौ** — ती दुवै; **हि** — निश्चय नै; **यस्य** — उसका; **परिपन्थिनौ** — अवरोधहरू।

**प्रत्येक इन्द्रिय र त्यस इन्द्रियका विषयसँग सम्बन्धित राग र द्वेषलाई व्यवस्थित गराउने केही नियमहरू हुने गर्दछन्। मानिस यस्ता राग र द्वेषबाट वशीभूत हुनु हुँदैन, किनभने यी रागद्वेषहरू आत्मसाक्षात्कारका मार्गमा अवरोधक बनेर बस्दछन्।**

**तात्पर्य :** कृष्णभावनामा रस लिन लागेका मानिसहरू स्वभावले भौतिक इन्द्रियतृप्तिमा संलग्न हुन रुचाउँदैनन्। कृष्णभावनामा नलागेका व्यक्तिहरूले शास्त्रमा वर्णन गरिएका विधिविधानहरूको पालना गर्नै पर्दछ। अनियन्त्रित इन्द्रियभोग नै सांसारिक बन्धनको कारण हो तर जसले शास्त्रका विधिनियमहरूको पालन गर्दछ त्यो व्यक्ति इन्द्रियका विषयमा अल्झिँदैन। उदाहरणका लागि यौनसुख बद्ध जीवका लागि आवश्यक कुरा हो र यस्तो यौनसुखको अनुमति विवाह सूत्रमा बाँधिएकाहरूका लागि मात्र हुन्छ। शास्त्रको आदेशअनुसार आफ्नी पत्नी वा पतिबाहेक अन्य स्त्री वा पुरुषसँग यौनसम्बन्ध स्थापित गर्नु निषेध छ। अरू सबै स्त्रीहरूलाई आमासमान मान्नु पर्दछ। शास्त्रको यस्तो आदेश हुँदाहुँदै पनि मानिसहरू परस्त्री वा परपुरुषसँग यौन सम्बन्ध राख्न चाहन्छन्। यस्तो प्रवृत्तिलाई निषेध गर्नु पर्दछ अन्यथा यो आत्मसाक्षात्कारका मार्गमा अवरोध बन्दछ। जबसम्म यो भौतिक शरीर रहन्छ तबसम्म शास्त्रीय नियममा रहेर भौतिक शरीरका आवश्यकताहरू पूर्ति गर्ने अनुमति छ। तैपनि हामीले यस किसिमको नियन्त्रणमा मात्रै विश्वास गर्नु हुन्न। मानिसले अनासक्त रहेर शास्त्रका यी विधिनियमहरूको पालन गर्नु पर्दछ, किनभने नियममा रहेर नै गरिएका इन्द्रियभोगले पनि कहिलेकाहीँ मानिसलाई पथभ्रष्ट गराउन सक्दछ। राजमार्गमा पनि दुर्घटना हुने सम्भावना रहिरहन्छ। अत्यन्त सावधानीसँग बनाइएका राम्रा र सुरक्षित ठानिने राजमार्गमा पनि दुर्घटना हुने खतरा छैन भन्न सकिँदैन। संसारसँगको लामो सम्पर्कले गर्दा व्यक्तिका मनमा इन्द्रियसुखका भावनाहरू उठिराख्दछन् र नियमित तथा न्यायसङ्गत इन्द्रियभोगमा लागेको भए पनि त्यसबाट च्यूत हुने सम्भावना रहिरहन्छ, त्यसैले न्यायसङ्गत इन्द्रियभोगका निमित्त पनि सबै प्रकारका आसक्तिहरूबाट बच्नु पर्दछ। तर, कृष्णभावनामा हुने आसक्ति वा सधैँ भगवान् श्रीकृष्णको सेवामा लाग्ने प्रवृत्तिले व्यक्तिलाई सबै प्रकारका इन्द्रियजन्य गतिविधिहरूबाट विरक्त बनाउँदछ। अतः कुनै पनि अवस्थामा मानिसले कृष्णभावनाविमुख हुने प्रयास गर्नु हुँदैन। सबै प्रकारका इन्द्रियभोगका आसक्तिबाट विरक्त हुनुको उद्देश्य नै आखिरमा कृष्णभावनामा अवस्थित हुनु हो।

**श्रेयान् स्वधर्मो विगुणः परधर्मात् स्वनुष्ठितात् ।**
**स्वधर्मे निधनं श्रेयः परधर्मो भयावहः ॥ ३५ ॥**

**श्रेयान्** — श्रेष्ठ छ; **स्वधर्मः** — आफ्नो निर्धारित कर्तव्य; **विगुणः** — गुणरहित भए पनि; **परधर्मात्** — अरूका लागि तोकिएको कर्मभन्दा; **स्वनुष्ठितात्** — राम्ररी सम्पन गरिएको; **स्वधर्मे** — आफ्नै निर्धारित कर्ममा रहेर; **निधनम्** — मर्नु वा नष्ट हुनु; **श्रेयः** — उत्तम हो; **परधर्मः** — अरूको धर्म (अरूलाई तोकिएको कर्तव्य); **भयावहः** — डरलाग्दो हुन्छ।

**अरूलाई तोकिएको कर्म (परधर्म) राम्ररी सम्पन्न गर्नुभन्दा त्रुटिपूर्ण तरिकाले भए पनि आफूलाई तोकिएको कर्तव्य (स्वधर्म) गर्नु नै राम्रो छ। परधर्ममा लाग्नुभन्दा आफ्नै धर्ममा रहेर मर्नु बरु उत्तम हुन्छ, किनभने परधर्ममा लाग्नु डरलाग्दो हुन्छ।**

**तात्पर्य :** मानिसले अरूलाई तोकिएको काम गर्नुभन्दा पूर्णतया कृष्णभावनामा रहेर आफूलाई तोकिएको कर्म नै गर्नु पर्दछ। प्रकृतिको गुणका अधीनमा रहेर मानिसको मनोवैज्ञानिक अवस्थाअनुसार निर्धारित गरिएका कर्मलाई नै भौतिक दृष्टिले कर्तव्य कर्म भनिन्छ र भगवान् श्रीकृष्णको दिव्यसेवा गर्नका लागि आध्यात्मिक गुरुद्वारा निर्देशित कर्मलाई आध्यात्मिक कर्म भनिन्छ। भौतिक कर्म होस् वा आध्यात्मिक कर्म होस् मानिसले मृत्युपर्यन्त आफूलाई निर्धारित गरिएको कर्म गर्नु पर्दछ र अरूका लागि तोकिएका कर्मको नक्कल गर्नु हुँदैन। आध्यात्मिक स्तरमा सम्पन्न गरिने कर्म र भौतिक स्तरमा सम्पन्न गरिने कर्ममा धेरै भिन्नता हुन्छ तर आधिकारिक व्यक्तिको निर्देशनलाई अनुसरण गरेर गरिने कर्म कर्ताका लागि सधैँ कल्याणकारी हुन्छ। प्रकृतिका गुणको अधीनमा रहँदासम्म मानिसले आफ्नो विशेष अवस्थालाई ध्यानमा राखेर निर्धारित नियम वा कर्तव्यको पालन गर्नु पर्दछ र अरूका कर्मको अनुकरण गर्नु हुँदैन। उदाहरणका लागि सतोगुणमा रहेको ब्राह्मण हिंस्रक हुँदैन, जबकि रजोगुणमा रहने क्षत्रिय हिंस्रक हुन सक्दछ। एउटा क्षत्रियका लागि ब्राह्मणको अहिंसा सिद्धान्त अपनाउनुभन्दा हिंसात्मक सिद्धान्तको पालन गर्दै नष्ट हुनु श्रेयस्कर छ। हरेक व्यक्तिले विस्तारै आफ्नो हृदयलाई सफा बनाउने प्रयास गर्नु पर्दछ, अचानक होइन। जुन समय मानिस प्रकृतिका गुणहरूबाट पर हुँदै पूर्णतः कृष्णभावनामा लीन हुन पुग्दछ त्यस समय एउटा प्रामाणिक गुरुका निर्देशनमा रहेर उसले जे पनि गर्न सक्दछ। पूर्णरूपले कृष्णभावनामा स्थिर भएका अवस्थामा त एउटा ब्राह्मणले क्षत्रियले जस्तै र एउटा क्षत्रियले ब्राह्मणले जस्तै कर्म गर्न सक्दछ। त्यस्तो दिव्य अवस्थामा यो भौतिक जगत्को भेदभाव

रहँदैन। उदाहरणका लागि विश्वामित्र वास्तवमा क्षत्रिय थिए तर पछि उनी ब्राह्मण बने। त्यसै गरी परशुराम पहिला ब्राह्मण थिए तर पछि उनी क्षत्रिय भए। ब्रह्ममा स्थित भएका हुनाले नै उनीहरूले त्यसो गर्नसकेका हुन्। तर, जबसम्म मानिस भौतिक स्तरमा हुन्छ तबसम्म उसले प्राकृतिक गुणअनुसार नै आफूलाई निर्धारित गरिएको कर्म गर्नु पर्दछ। सँगसँगै उसलाई कृष्णभावनाको पूर्ण ज्ञान हुनु पनि आवश्यक छ।

अर्जुन उवाच

**अथ केन प्रयुक्तोऽयं पापं चरति पूरूषः ।**
**अनिच्छन्नपि वार्ष्णेय बलादिव नियोजितः ॥ ३६ ॥**

**अर्जुन उवाच** — अर्जुनले भने; **अथ** — त्यसोभए; **केन** — कसले; **प्रयुक्तः** — प्रेरित; **अयम्** — यो; **पापम्** — पाप; **चरति** — गर्दछ; **पूरूषः** — व्यक्तिले; **अनिच्छन्** — नचाहँदा नचाहँदै; **अपि** — पनि; **वार्ष्णेय** — हे वृष्णिवंशी कृष्ण!; **बलात्** — बलपूर्वक; **इव** — जस्तै; **नियोजितः** — लगाइएको छ।

**अर्जुनले भने — हे वृष्णिवंशी कृष्ण! मानिसले नचाहँदा नचाहँदै पनि बलपूर्वक पापकर्ममा कसैले लगाएजस्तै केबाट प्रेरित भएर पाप गर्दछ?**

**तात्पर्य :** जीवात्मा भगवान्को अंश भएको हुनाले मौलिक रूपमा ऊ आध्यात्मिक हुन्छ, शुद्ध हुन्छ र समस्त सांसारिक कल्मषहरूबाट मुक्त हुन्छ अनि स्वभावले ऊ भौतिक संसारका पाप कर्ममा लाग्न प्रेरित पनि हुँदैन तर जब ऊ मायाको सम्पर्कमा आउँदछ त्यस समय उसले बिनाहिच्किचाहट धेरै पाप कर्महरू गर्दछ। कहिलेकाहीँ ऊ आफ्नै इच्छाविरुद्ध पनि धेरै पाप गर्न पुग्दछ। अर्जुनले भगवान् श्रीकृष्णसँग गरेको प्रश्न अति नै आशापूर्ण छ। उनले सोधेका छन् — जीवात्माको स्वभाव किन विचलित हुन्छ? कहिलेकाहीँ जीवलाई कुनै पाप कर्म गर्न मन लाग्दैन तर उसलाई पाप कर्म गर्न बाध्य हुनु पर्दछ, किन? वास्तवमा त्यस्ता पाप गर्नका लागि परमात्माले प्रेरणा दिनु हुन्न। मानिसलाई पाप कर्ममा लगाउने तत्त्व अर्कै छ, जसको वर्णन भगवान्ले निम्नलिखित श्लोकमा गर्नुभएको छ।

श्री भगवानुवाच

**काम एष क्रोध एष रजोगुणसमुद्भवः ।**
**महाशनो महापाप्मा विद्ध्येनमिह वैरिणम् ॥ ३७ ॥**

**श्रीभगवानुवाच** — भगवान्ले भन्नुभयो; **कामः** — विषयवासना; **एषः** — यो;

**क्रोधः** — क्रोध; **एषः** — यो; **रजोगुणः** — रजोगुणबाट; **समुद्भवः** — उत्पन्न भएको; **महाशनः** — सर्वभक्षी; **महापाप्मा** — ठुलो पापी; **विद्धि** — जान; **एनम्** — यसलाई; **इह** — यो संसारमा; **वैरिणम्** — सबभन्दा ठुलो शत्रु।

**भगवान्ले भन्नुभयो — मानिसलाई पाप कर्ममा लगाउने तत्त्व विषयवासना हो। यसको उत्पत्ति रजोगुणको सम्पर्कबाट हुन्छ र पछि यो क्रोधमा परिवर्तित हुन्छ। यसैलाई नै तिमीले संसारको सर्वभक्षी पापी शत्रु मान।**

**तात्पर्य :** जीवात्मा भौतिक सृष्टिको सम्पर्कमा आउँदा ऊभित्र रहेको शाश्वत श्रीकृष्णप्रेम रजोगुणका सङ्गतले गर्दा कामवासनामा रूपान्तरित हुन्छ। अर्को शब्दमा भन्दा जसरी ईमिली फलको सम्पर्कमा आउँदा दूध-दहीमा रूपान्तरित हुन्छ, त्यसै गरी जीवमा रहेको ईश्वरप्रेम पनि कामभावमा परिणत हुन्छ। यो कामवासना सन्तुष्ट नभए यसले क्रोधको रूप लिन्छ। क्रोध मोहमा परिणत हुन्छ र मोहले भौतिक अस्तित्वलाई बनाई राख्दछ। त्यसैले जीवात्माको सबैभन्दा ठुलो शत्रु यही कामवासना हो र यही कामवासनाले जीवात्मालाई यस संसारमा अल्झिइरहन प्रेरित गर्दछ। तमोगुणबाट क्रोध उत्पन्न हुन्छ। यिनै गुणहरू नै स्वयम् क्रोध तथा यस्तै अन्य रूपमा प्रकट हुन्छन्। यदि रजोगुणलाई तमोगुणमा पतन हुन नदिने र काम गर्न र बाँच्नका लागि निर्धारित गरिएका विधिद्वारा यसलाई सतोगुणमा पुऱ्याउने भए त्यसबाट उत्पन्न हुने आध्यात्मिक आसक्तिले मानिसलाई क्रोधको स्थितिमा पतन हुनबाट रक्षा गर्दछ। भगवान्ले नित्य बढिरहने आध्यात्मिक आनन्द लिने उद्देश्यले स्वयम् आफूलाई विभिन्न रूपमा विस्तारित गर्नुभयो। जीवात्माहरू त्यही आध्यात्मिक आनन्दका अंश हुन्, त्यसैले तिनीहरू पनि आंशिक रूपले स्वतन्त्र छन्। तर, उक्त स्वतन्त्रताको दुरूपयोग गरेर जब तिनीहरूले आफ्नो सेवाभावलाई रूपान्तरित गर्दै इन्द्रियतृप्तितर्फ लैजान्छन्, त्यस समय तिनीहरू कामवासनाका वशमा पर्दछन्। भगवान्ले बद्ध जीवका कामवासना प्रवृत्तिलाई परिपूर्ति गर्न सुविधा प्रदान गर्ने उद्देश्यले यो भौतिक सृष्टिको रचना गर्नुभएको हो। लामो समयसम्म कामवासनाका क्रियाकलापमा लागिरहँदा पनि जब जीवात्मा पूर्णतया निष्फल हुन्छ अनि मात्र ऊ आफ्नो वास्तविक स्वरूपबारे जिज्ञासा गर्न सुरु गर्दछ।

यही जिज्ञासाबाट वेदान्तसूत्र सुरु भएको हो। त्यहाँ भनिएको छ— **"अथातो ब्रह्मजिज्ञासा"** अर्थात् मानिसले परमतत्त्वका बारेमा जिज्ञासा गर्नु पर्दछ। त्यो परमतत्त्वको परिभाषा *श्रीमद्भागवत्मा* यसरी गरिएको

छ—**'जन्माद्यस्ययतोऽन्वयादितरश्च।'** अर्थात्, सबै वस्तुको उद्‌गम वा मुहान परमब्रह्म नै हुनुहुन्छ। त्यसोभए यो कामवासनाको उत्पत्ति पनि ब्रह्मबाट भएको हो। यदि यो कामवासना भगवान्‌को प्रेममा रूपान्तरित भइदिए वा कृष्णभावनामा परिणत भएमा अथवा अझ अर्को शब्दमा हरेक वस्तुको इच्छा भगवान् श्रीकृष्णका लागि भएमा काम र क्रोध दुवै आध्यात्मिक बन्दछन्। भगवान् रामका महान् भक्त हनुमान्‌ले रावणको सुनौलो लङ्का डढाएर आफ्नो क्रोध प्रदर्शित गरे तर त्यसो गरे पनि उनी भगवान्‌का सर्वश्रेष्ठ भक्त बनिरहे। यो *भगवद्‌गीतामा* यहाँ पनि भगवान्‌को सन्तुष्टिका लागि आफ्नो क्रोध शत्रुमाथि प्रयोग गर्ने प्रेरणा भगवान् श्रीकृष्णले अर्जुनलाई दिनुभएको छ। त्यसैले कृष्णभावनामा उपयोग गरिएको काम र क्रोध हाम्रा शत्रु नभएर मित्र बन्दछन्।

**धूमेनाव्रियते वह्निर्यथादर्शो मलेन च ।**
**यथोल्बेनावृतो गर्भस्तथा तेनेदमावृतम् ॥ ३८ ॥**

**धूमेन** — धूवाँले; **आव्रियते** — ढाकिन्छ; **वह्निः** — आगो; **यथा** — जसरी; **आदर्शः** — ऐना; **( दर्पण ) मलेन** — धूलोले; **च** — पनि; **यथा** — जसरी; **उल्बेन** — गर्भाशयद्वारा; **आवृतः** — ढाकिइरहन्छ; **गर्भः** — भ्रूण ( गर्भ ) ; **तथा** — त्यसरी नै; **तेन** — कामवासनाद्वारा; **इदम्** — यो; **आवृतम्** — ढाकिएको छ।

**जसरी आगो धूवाँले ढाकिएको हुन्छ, ऐना धूलोले ढाकिएको हुन्छ र भ्रूण गर्भाशय वा सालनालले ढाकिएको हुन्छ त्यसरी नै यो जीवात्मा पनि विभिन्न तहका कामवासनाले ढाकिएको छ।**

**तात्पर्य :** जीवात्मालाई ढाक्ने आवरणका तीन तह छन्। यिनै आवरणले गर्दा जीवको शुद्ध चेतना धमिलिन्छ। यो आवरण विभिन्न रूपमा प्रकट हुने कामवासना बाहेक अरू केही होइन। जसरी आगोलाई धूवाँले, ऐनालाई धूलोले र भ्रूण (गर्भ) लाई सालनालले ढाकेको हुन्छ त्यसरी नै यो जीवात्मालाई कामभावले ढाकेको छ। यहाँ कामवासनालाई धूवाँसँग दाँजिएको छ। आगो धूवाँभित्र ढाकिएको भए पनि जीवित झिल्कोको केही मात्रामा अनुभव गर्न सकिन्छ। अर्को शब्दमा—जब जीवात्मामा ऊभित्रको कृष्णभावना सूक्ष्म रूपमा प्रकट हुन्छ त्यस समय त्यो जीवात्मालाई धूवाँले ढाकिएको आगोको उदाहरण दिइन्छ। हुनत जहाँ धूवाँ हुन्छ त्यहाँ आगो हुन्छ नै तैपनि सुरुमा त्यहाँ स्पष्ट रूपमा आगो देखिँदैन। यो अवस्था कृष्णभावनाको प्रारम्भिक अवस्थाजस्तै हो। धूलोले ढाकिएको ऐनालाई सफा गर्ने प्रक्रिया विभिन्न किसिमका आध्यात्मिक उपायले मनलाई सफा गर्ने प्रक्रियाजस्तै हो। मनलाई सफा गर्ने सबैभन्दा राम्रो प्रक्रिया भगवान्‌को पवित्र नाम जप्नु हो। गर्भाशयद्वारा

ढाकिएको भ्रूण एउटा असहाय अवस्थाको उदाहरण हो। एउटा शिशु गर्भमा सालनालले ढाकिएर रहनुपर्दा कतिसम्म असहाय हुन्छ, त्यहाँ ऊ हलचल गर्न पनि सक्दैन। बद्ध जीवको यो अवस्थालाई रूखबिरुवाको अवस्थासँग तुलना गर्न सकिन्छ। वृक्षहरू पनि जीवात्मा नै हुन् तर उनीहरूमा रहेको कामवासनाको प्रबलताले गर्दा उनीहरूलाई प्रायः चेतनाशून्य अवस्थामा रहनुपर्ने योनि प्राप्त भयो। धूलो जमेको ऐनाको तुलना पशु र पक्षीहरूसँग गर्न सकिन्छ र धूवाँले ढाकिएको आगोको तुलना मानिससँग गर्न सकिन्छ। मनुष्य शरीर प्राप्त गरेको जीवात्मामा केही मात्रामा भए पनि कृष्णभावनाको उदय हुन सक्दछ। यदि मानिसले अगाडि प्रगति गर्दै गए उसको मनुष्यजीवनमा आध्यात्मिक अग्नि प्रज्ज्वलित हुन सक्दछ। धूवाँले ढाकिएको आगोलाई राम्ररी सञ्चालन गरे त्यहाँ आगोको ज्वाला निस्किन्छ। अतः यो मनुष्यजीवन जीवात्मालाई संसारको बन्धनबाट छुट्कारा पाउन दिइएको एउटा राम्रो अवसर हो। मनुष्य जीवनमा सुयोग्य गुरुको निर्देशनमा रहेर कृष्णभावनाको अभ्यास गर्नाले कामवासनारूपी शत्रुलाई जित्न सकिन्छ।

**आवृतं ज्ञानमेतेन ज्ञानिनो नित्यवैरिणा ।**
**कामरूपेण कौन्तेय दुष्पूरेणानलेन च ॥ ३९ ॥**

**आवृतम्** — ढाकिएको; **ज्ञानम्** — शुद्ध चेतना; **एतेन** — यसले; **ज्ञानिनः** — ज्ञानीको; **नित्यवैरिणा** — नित्य शत्रुद्वारा; **कामरूपेण** — कामवासनाका रूपमा; **कौन्तेय** — हे कुन्तीपुत्र!; **दुष्पूरेण** — कहिल्यै पनि तृप्त नहुने; **अनलेन** — आगोद्वारा; **च** — पनि।

**यसरी बुद्धिमान् जीवात्माको शुद्ध चेतनालाई आगोजस्तै बलिरहने र कहिल्यै तृप्त नहुने कामवासनारूपी नित्य शत्रुले ढाकिराखेको छ।**

**तात्पर्य :** मनुस्मृतिमा भनिएको छ — जसरी निरन्तर ईन्धन वा तेल खन्याइरहे पनि आगोलाई तृप्त पार्न सकिँदैन, त्यसै गरी जतिसुकै विषयभोग गरे पनि कामना तृप्त हुँदैन। यस भौतिक जगत्मा सम्पूर्ण क्रियाकलापको केन्द्रविन्दु नै कामवासना (मैथुन) हो। त्यसैले यो संसारलाई **'मैथुन्यागार'** वा विषयी जीवनको साङ्गलो भनिन्छ। साधारण कारागारमा अपराधीलाई बारभित्र थुनिन्छ त्यसै गरी भगवान्का नियमहरूको पालन नगर्ने अपराधीलाई यही विषयी जीवनरूपी साङ्गलो लगाएर राखिन्छ। इन्द्रियतृप्तिका आधारमा भौतिक सभ्यताको विकास गर्नुको अर्थ हो भौतिक जगत्मा जीवात्माको अस्तित्वको अवधिलाई अझ बढाउनु, त्यसैले यो कामवृत्ति अज्ञानको लक्षण हो। यसले जीवात्मालाई यो भौतिक संसारमा बाँधिराख्दछ। इन्द्रियहरूद्वारा विषयको

भोग गर्दा केही आनन्दको अनुभव हुन सक्दछ तर यथार्थमा त्यो तथाकथित आनन्दको अनुभूति मानिसका लागि परमशत्रु बन्दछ।

**इन्द्रियाणि मनो बुद्धिरस्याधिष्ठानमुच्यते ।**
**एतैर्विमोहयत्येष ज्ञानमावृत्य देहिनम् ॥ ४० ॥**

**इन्द्रियाणि** — इन्द्रियहरू; **मनः** — मन; **बुद्धिः** — बुद्धि; **अस्य** — यो कामवृत्तिको; **अधिष्ठानम्** — निवासस्थल; **उच्यते** — भनिन्छ; **एतैः** — यी सबैद्वारा; **विमोहयति** — मोहित हुन्छ; **एषः** — यो कामवृत्ति; **ज्ञानम्** — ज्ञानलाई; **आवृत्य** — ढाकेर; **देहिनाम्** — शरीरधारीहरूको।

**इन्द्रियहरू, मन र बुद्धि नै यस कामवासनाका कार्यका निवासस्थल हुन्। यिनैका माध्यमद्वारा यो कामवासनाका कार्यले जीवात्माको वास्तविक ज्ञानलाई ढाकिदिन्छ र उसलाई मोहित पार्दछ।**

**तात्पर्य :** कामवासनारूपी शत्रुले बद्ध जीवका शरीरका विभिन्न सामरिक स्थलहरूमा आफ्नो अधिकार जमाएको छ, त्यसैले भगवान् श्रीकृष्णले यहाँ ती ठाउँहरूको सङ्केत गरिरहनुभएको छ। यसबाट शत्रुलाई जित्न चाहनेले उक्त शत्रुलाई जता पनि भेट्न सक्दछ। मन नै सम्पूर्ण इन्द्रियका क्रियाकलापको केन्द्रविन्दु हो, त्यसैले जब हामी इन्द्रियका विषयहरूका बारेमा केही सुन्छौँ त्यस समय मन इन्द्रियतृप्तिका सबै विचारहरूको भण्डार बन्दछ र फलस्वरूप मन र इन्द्रियहरू कामवासनाका कार्यका आश्रयस्थल वा घर बन्दछन्। अनि बुद्धि यस किसिमका कामवासनामय प्रवृत्तिहरूको राजधानी बनिदिन्छ। बुद्धि आत्माको निकटतम छिमेकीद्वार हो। त्यसैले त्यस्तो कामवासनामय बुद्धिबाट आत्मा प्रभावित हुन्छ, अनि त्यहाँ अहङ्कार उत्पन्न हुन्छ र मन, इन्द्रिय तथा विषयहरूलाई नै उसले आफू र आफ्नो ठान्दछ। आत्मालाई भौतिक इन्द्रियहरूको भोग गर्ने लत बढ्दछ र उसले यसैलाई नै वास्तविक आनन्द ठान्दछ। *श्रीमद्भागवत्को* (१०.८४.१३) मा आत्माको यो झूटो स्वरूपको बारेमा अति राम्रोसँग व्याख्या गरिएको छ।

*यस्यात्मबुद्धिः कुणपे त्रिधातुके स्वधीः कलत्रादिषु भौम इज्यधीः ।*
*यत्तीर्थबुद्धिः सलिले न कर्हिचिज्जनेष्वभिज्ञेषु स एव गोखरः ॥*

जुन मानिसले यी तीन तत्त्वबाट बनेको शरीरलाई आत्मा ठान्दछ, जसले शरीरका सह-उत्पादनलाई स्वजन वा आफन्त ठान्दछ, जसले जन्मभूमिलाई नै पूजनीय मान्दछ र जसले केवल नुहाउनका लागि मात्र तीर्थयात्रा गर्दछ तर त्यहाँका

दिव्यज्ञान सम्पन्न व्यक्तिहरूसँग सत्संग गर्दैन त्यस्तो व्यक्तिलाई गाईजस्तो वा गधाजस्तो मान्नु पर्दछ।

**तस्मात्त्वमिन्द्रियाण्यादौ नियम्य भरतर्षभ ।**
**पाप्मानं प्रजहि ह्येनं ज्ञानविज्ञाननाशनम् ॥ ४१ ॥**

**तस्मात्** — त्यसैले; **त्वम्** — तिमी; **इन्द्रियाणि** — इन्द्रियहरूलाई; **आदौ** — पहिले; **नियम्य** — नियमित गराएर; **भरतर्षभ** — हे भरतवंशीहरूमा श्रेष्ठ; **पाप्मानम्** — पापका महान् लक्षणहरूलाई; **प्रजहि** — दमन गर (जित); **हि** — निश्चय नै; **एनम्** — यो; **ज्ञान** — ज्ञानको र; **विज्ञान** — शुद्ध आत्माको वैज्ञानिक ज्ञानलाई; **नाशनम्** — विनाशकारी।

**त्यसकारण हे भरतवंशीहरूमा श्रेष्ठ अर्जुन! पहिले नै इन्द्रियहरूलाई वशमा राखेर पापको महान् प्रतीक ( कामवासना ) लाई दमन गर र ज्ञान र आत्मज्ञानको यो विनाशकर्तालाई मार।**

**तात्पर्य :** भगवान्ले सुरुमा नै अर्जुनलाई इन्द्रियहरू वशमा राखेर सबैभन्दा ठुलो पापी शत्रु कामवृत्तिलाई दमन गर्ने सल्लाह दिनुभयो। किनभने यो कामवासनारूपी शत्रुले आत्मसाक्षात्कार तथा आत्माको विशिष्ट ज्ञान गर्ने उत्कण्ठालाई ध्वस्त पारिदिन्छ। यहाँ ज्ञान शब्दले आत्मा र अनात्माको भेदसम्बन्धी ज्ञान वा अर्को शब्दमा शरीर नै आत्मा होइन भन्ने कुरालाई बुझाएको छ। **विज्ञानम्** शब्दले आत्माको वास्तविक अवस्थाको विशिष्ट ज्ञान र परमात्मासँग उसको सम्बन्ध बुझाएको छ। *श्रीमद्भागवत्*को २.९.३१ मा यसको व्याख्या यसरी गरिएको छ—

*ज्ञानं परमगुह्यं मे यद्विज्ञानसमन्वितम् ।*
*सरहस्यं तदङ्गं च गृहाण गदितं मया ॥*

आत्मा र परमात्माको ज्ञान अति गोप्य र रहस्यमय छ तैपनि स्वयम् भगवान्द्वारा विभिन्न पक्षबाट यसको व्याख्या गर्न भएको हुनाले यस किसिमको ज्ञान तथा विशिष्ट अनुभूतिलाई बुझ्न सकिन्छ। *भगवद्गीताले* नै हामीलाई आत्माको सामान्य र विशिष्ट ज्ञान प्रदान गर्दछ। जीवहरू भगवान्का अंश हुन् त्यसैले तिनीहरूको एक मात्र उद्देश्य भगवान्को सेवा गर्नु हो। यस किसिमको चेतनालाई कृष्णभावना भनिन्छ। अतः मानिसले जीवनको प्रारम्भिक अवस्थादेखि नै कृष्णभावनाको अभ्यास गर्नु पर्दछ। यसो भएमा मात्रै उसले पूर्णतया कृष्णभावनाभावित भएर त्यही अनुरूप कर्म गर्न सक्दछ।

कामवासनाका कार्य ईश्वरप्रेमको विकृत प्रतिविम्ब हो र यो प्रत्येक

जीवका लागि स्वाभाविक वृत्ति पनि हो। तर यदि कसैलाई जीवनको सुरुदेखि नै कृष्णभावनाको शिक्षा दिएमा ऊभित्र रहेको स्वाभाविक ईश्वरप्रेम कामवासनाका रूपमा विकृत हुन पाउँदैन। एक पटक उक्त ईश्वरप्रेम कामभावनाका रूपमा परिणत भएमा फेरि यसको भौतिक स्वरूपलाई प्राप्त गर्न अत्यन्त कठिन हुन्छ। यति हुँदाहुँदै पनि यो कृष्णभावना अत्यन्त शक्तिशाली भएका हुनाले यो कृष्णभावनाको शिक्षा जीवनमा अलि ढीलो पाउने व्यक्तिले पनि भक्तिको विधिनियमहरूलाई पालन गरेर भगवद्प्रेम प्राप्त गर्न सक्दछ। त्यसैले जीवनका कुनै पनि अवस्थामा, कृष्णभावनाको महत्त्व बुझेको दिनदेखि मानिसले भगवद् भक्तिद्वारा इन्द्रियहरूलाई वशमा राख्न सुरु गर्न पर्दछ र विषयप्रेमलाई भगवद्प्रेममा परिवर्तन गर्न पर्दछ। यही नै मानव जीवनको परमपूर्णताको अवस्था हो।

**इन्द्रियाणि पराण्याहुरिन्द्रियेभ्यः परं मनः ।**
**मनसस्तु परा बुद्धिर्यो बुद्धेः परतस्तु सः ॥ ४२ ॥**

**इन्द्रियाणि** — इन्द्रियहरू; **पराणि** — श्रेष्ठ; **आहुः** — भनिन्छ; **इन्द्रियेभ्यः** — इन्द्रियहरूभन्दा बढी; **परम्** — श्रेष्ठ; **मनः** — मन; **मनसः** — मनभन्दा बढ्ता; **तु** — पनि; **परा** — श्रेष्ठ; **बुद्धिः** — बुद्धि; **यः** — जो; **बुद्धेः** — बुद्धिभन्दा बढ्ता; **परतः** — श्रेष्ठ; **तु** — तर; **सः** — त्यो।

**जड पदार्थभन्दा कर्मेन्द्रियहरू श्रेष्ठ छन्, ती इन्द्रियहरूभन्दा मन श्रेष्ठ छ, बुद्धि मनभन्दा अझ श्रेष्ठ छ र त्यो (आत्मा) बुद्धिभन्दा पनि श्रेष्ठ छ।**

**तात्पर्य :** इन्द्रियहरू कामवासनाका कार्यका क्रियाकलापका विभिन्न द्वार हुन्। कामवासना शरीरभित्र सुरक्षित छ तर यसलाई इन्द्रियरूपी झ्यालहरू दिइएका छन्, त्यसैले समष्टिमा इन्द्रियहरू शरीरभन्दा श्रेष्ठ छन्। उन्नत चेतना वा कृष्णभावना प्राप्त भएपछि यी ढोकाहरूको केही काम छैन। कृष्णभावनामा लागेको आत्माको सीधा सम्बन्ध भगवान्सँग हुन्छ। यहाँ वर्णन गरिएका शारीरिक कर्मको श्रेष्ठता आखिरमा परमात्मामा पुगेर समाप्त हुन्छ। शारीरिक कार्यको अर्थ इन्द्रियहरूको कार्य हो र यी इन्द्रियहरू अवरुद्ध हुनुको अर्थ सबै शारीरिक कार्यहरू रोकिन पुग्नु हो। यसरी शरीरको कार्य रोकिए पनि मन क्रियाशील नै रहिरहन्छ। शरीर मौन र स्थिर रहँदा पनि मनले आफ्नो काम गरिरहेकै हुन्छ; उदाहरणका लागि सपनामा मन क्रियाशील हुन्छ तर मनभन्दा माथि बुद्धिको सङ्कल्प शक्ति हुन्छ। बुद्धिभन्दा पनि माथि स्वयम् आत्मा हुन्छ। त्यसैले यदि आत्मा नै प्रत्यक्ष रूपमा परमात्मामा संलग्न भए आत्माका अधीनमा रहेका अरू सबै तत्त्वहरू — बुद्धि, मन, इन्द्रिय आदि स्वतः भगवान्मा संलग्न हुन्छन्। कठोपनिषद्मा पनि एउटा यस्तै प्रसङ्ग छ,

जसमा भनिएको छ— इन्द्रियका विषयहरू इन्द्रियभन्दा श्रेष्ठ छन् र मन इन्द्रिय तथा इन्द्रियका विषयहरूभन्दा श्रेष्ठ छ, त्यसैले यदि स्वयम् मन नै भगवान्‌को सेवामा निरन्तर लागेमा इन्द्रियहरू अन्यत्र लाग्ने सम्भावना नै हुँदैन। यो मनोवृत्तिको विवेचना पहिल्यै गरिसकिएको छ। **परं दृष्ट्वा निवर्तते** यदि एक पटक यो मन भगवान्‌को दिव्यसेवामा लागेमा फेरि त्योभन्दा तुच्छ विषयमा मन लाग्ने सम्भावना नै हुँदैन। कठोपनिषद्‌मा आत्मालाई **'महान्'** भनिएको छ, अतः इन्द्रियका विषयहरू, स्वयम् इन्द्रियहरू, मन र बुद्धि यी सबैभन्दा माथि आत्मा छ। त्यसैले यदि प्रत्यक्ष रूपले आत्माको मौलिक स्वरूपलाई बुझेमा सम्पूर्ण समस्याको समाधान हुन्छ।

मानिसले आफ्नो बुद्धिद्वारा आत्माको वैधानिक स्थितिको खोजी गर्नु पर्दछ र मनलाई निरन्तर कृष्णभावनामा लगाइराख्नु पर्दछ। यसो गरेमा उसका सबै समस्याहरू समाधान हुन्छन्। साधारणतया नवसिकारू आध्यात्मवादीहरूलाई इन्द्रियका विषयहरूबाट टाढा रहने सल्लाह दिइन्छ तर यसका साथसाथै मानिसले आफ्नो बुद्धिको उपयोग गरेर मनलाई बलियो बनाउनु पर्दछ। यदि कसैले बुद्धिद्वारा आफ्नो मनलाई भगवान्‌को शरणमा लगेर कृष्णभावनामा लगाए भने त्यो मन स्वतः शक्तिशाली बन्दछ। हुनत इन्द्रियहरू सर्पजस्ता अति बलवान् छन् तापनि मनलाई भगवान्‌मा लगाएपछि ती शक्तिशाली सर्पजस्ता इन्द्रियहरू विषालु दाँत भाँचिएका सर्पजस्ता कमजोर बन्दछन्। बुद्धि, मन तथा इन्द्रियहरूको स्वामी आत्मा हो तापनि जबसम्म यसलाई भगवान् श्रीकृष्णको सङ्गत दिएर कृष्णभावनामा सुदृढ गराइँदैन तबसम्म यो आत्मा चञ्चल मनको सङ्गतले गर्दा तल झर्ने सम्भावना रहिरहन्छ।

**एवं बुद्धेः परं बुद्ध्वा संस्तभ्यात्मानमात्मना ।**
**जहि शत्रुं महाबाहो कामरूपं दुरासदम् ॥ ४३ ॥**

**एवम्** — यस प्रकार; **बुद्धेः** — बुद्धिभन्दा; **परम्** — श्रेष्ठ; **बुद्ध्वा** — जानेर; **संस्तभ्य** — स्थिर गरेर; **आत्मानम्** — आफूलाई (मनलाई); **आत्मना** — सुविचारित बुद्धिद्वारा; **जहि** — जित; **शत्रुम्** — शत्रुलाई; **महाबाहो** — हे महाबाहु!; **कामरूपम्** — कामवासनाको रूपमा; **दुरासदम्** — दुर्जेय (जित्न नसकिने)।

**यसप्रकार हे महाबाहु अर्जुन! आफूलाई भौतिक इन्द्रिय, मन र बुद्धिभन्दा दिव्य सम्झेर सुविचारित आध्यात्मबुद्धि ( कृष्णभावना ) द्वारा मनलाई दृढ बनाउनु पर्दछ र त्यही आध्यात्मिक शक्तिद्वारा यो कामरूपी दुर्जेय वा जित्न नसकिने शत्रुलाई जित्नु पर्दछ।**

**तात्पर्य :** *भगवद्गीताको* यो तेस्रो अध्यायले निष्कर्षमा पुगेर मानिसलाई के निर्देशन दिएको छ भने, निराकार शून्यवादलाई नै परमलक्ष्य नमानेर र आफूलाई भगवान्को शाश्वत सेवक ठानेर कृष्णभावना वा कृष्णप्रेममा लाग्नु पर्दछ। भौतिक जीवनमा मानिस निश्चय नै प्रकृतिमाथि प्रभुत्व जमाउने इच्छा र कामवासनाकाप्रवृत्तिबाट प्रभावित हुन्छ। प्रभुत्वको चाहना र इन्द्रियतृप्तिको इच्छा नै बद्ध जीवका सबैभन्दा ठुला शत्रु हुन्। तर, कृष्णभावनामृतको शक्तिद्वारा मानिसले इन्द्रिय, मन तथा बुद्धिमाथि नियन्त्रण राख्न सक्दछ। यसका लागि मानिसले अकस्मात आफ्ना नित्य नैमित्तिक कर्म गर्न छोड्नु हुँदैन बरु विस्तारै कृष्णभावनाको विकास गरेर भौतिक इन्द्रिय तथा मनको प्रभावभन्दा माथि उठ्नु पर्दछ। अनि मात्र आफ्नो शुद्ध स्वरूपप्रति लक्षित स्थिर बुद्धिद्वारा दिव्य अवस्थामा पुग्न सकिन्छ। यही नै यो अध्यायको सारसंक्षेप हो। यो भौतिक जगत्को अपरिपक्व अवस्थामा रहेर दार्शनिक चिन्तन र यौगिक आसनहरूको अभ्यासले इन्द्रियहरूलाई वशमा राख्ने प्रयास कृत्रिम हुन्। यस्ता कृत्रिम प्रयासद्वारा आध्यात्मिक जीवन प्राप्त गर्ने कार्यमा कहिल्यै सहायता पुग्दैन। मानिसले त आफ्नो उच्च बुद्धिको प्रयोग गरेर आफूलाई कृष्णभावनामा प्रशिक्षित गर्नु पर्दछ।

यसप्रकार *श्रीमद्भगवद्गीता* ग्रन्थअन्तर्गत 'कर्मयोग' शीर्षक तेस्रो अध्यायको भक्तिवेदान्त तात्पर्य समाप्त भयो।

# अध्याय-चार

# दिव्य ज्ञान

श्री भगवानुवाच
**इमं विवस्वते योगं प्रोक्तवानहमव्ययम् ।**
**विवस्वान्मनवे प्राह मनुरिक्ष्वाकवेऽब्रवीत् ॥ १ ॥**

**श्रीभगवानुवाच** — भगवान्ले भन्नुभयो; **इमम्** — यो; **विवस्वते** — सूर्यदेवलाई; **योगम्** — भगवान्सँग जीवात्माको सम्बन्ध बुझाउने विज्ञान; **प्रोक्तवान्** — भनेको थिएँ; **अहम्** — मैले; **अव्ययम्** — अविनाशी; **विवस्वान्** — सूर्यदेवले; **मनवे** — मनुलाई (मानव जातिका आदि पुर्खा वैवस्वत मनु); **प्राह** — भने; **मनु** — मनुले; **इक्ष्वाकवे** — राजा इक्ष्वाकुलाई; **अब्रवीत्** — भनेका थिए।

**भगवान्ले भन्नुभयो — मैले यो अविनाशी योग सर्वप्रथम सूर्यलाई भनेको थिएँ। सूर्यले मानव जातिका आदिपिता मनुलाई भने र मनुले यही ज्ञान फेरि राजा इक्ष्वाकुलाई दिए।**

**तात्पर्य :** यहाँ हामी *भगवद्गीताको* इतिहास पाउँदछौँ। गीताज्ञान पहिले सूर्यलोकदेखि लिएर सम्पूर्ण लोकका राजाहरूलाई प्रदान गरिएको थियो। त्यति लामो समयदेखि यो आएको छ। आफ्ना राज्यका बासिन्दाहरूको सुरक्षा गर्नु सबै लोकका राजाहरूको कर्तव्य हो, त्यसैले सधैँ राजाहरूले आफ्ना नागरिकहरूमाथि राम्रो शासन गर्न र तिनलाई सांसारिक बन्धनबाट रक्षा गर्न *भगवद्गीताको* विज्ञान बुझ्न पर्दछ। मानव जीवन आध्यात्मिक ज्ञान आर्जन गर्नका लागि हो। भगवान्सँग उसको शाश्वत सम्बन्ध छ। त्यसैले सम्पूर्ण राज्य तथा सधैँ लोकका शासकहरूले आफ्ना नागरिकहरूलाई शिक्षा संस्कृति र भक्तिद्वारा यो कुरा सिकाउनु पर्दछ। अर्को शब्दमा भन्दा, सबै राज्यका प्रशासन प्रमुखहरूले कृष्णभावनाको विज्ञानलाई फैलाउनु पर्दछ, जसले गर्दा सबै नागरिकहरूले यो महाविज्ञानबाट लाभ लिन सकून् र मानवजीवनरूपी अवसरको सदुपयोग गर्दै सफलताको मार्गमा अगाडि बढ्न सकून्।

यस युगमा सूर्य देवतालाई विवस्वान् नामले चिनिन्छ। यिनी सूर्यलोकका राजा हुन्। सूर्यलोक सौरमण्डल अन्तर्गतका सबै ग्रह वा लोकहरूको उद्गम हो। ब्रह्मसंहिता (५.५२) मा भनिएको छ—

*यच्चक्षुरेष सविता सकलग्रहाणाम्,*
*राजा समस्तसुरमूर्तिरशेषतेजाः ।*
*यस्याज्ञया भ्रमति सम्भृतकालचक्रो,*
*गोविन्दमादिपुरुषं तमहं भजामि ॥*

ब्रह्माजी भन्नु हुन्छ— म उनै आदिपुरुष भगवान् गोविन्दको अर्चना गर्दछु, जसका आदेशले सम्पूर्ण लोकका राजा सूर्यले पर्याप्त शक्ति र ताप धारण गरेका छन्। यी सूर्यदेवता भगवान्का नेत्रस्वरूप हुन् र उहाँकै आज्ञानुसार यिनी आफ्नो कक्षमा घुमिरहन्छन्।

सूर्य सबै लोकका राजा हुन्। अहिले विवस्वान् नामले चिनिने यी सूर्यदेवताले सूर्यलोकमा शासन गर्दछन्। यो सूर्यलोक वा ग्रहले ताप र प्रकाश प्रदान गरेर अन्य सबै लोक वा ग्रहलाई आफ्नो नियन्त्रणमा राखेको छ। सूर्य भगवान् श्रीकृष्णको आदेशअनुसार घुम्ने गर्दछन्। सूर्यलोकमा शासन गर्ने उनै विवस्वान् सूर्यलाई भगवान् श्रीकृष्णले यो *भगवद्गीतारूपी* विज्ञान बुझाउनका लागि आफ्नो पहिलो शिष्य बनाउनुभएको थियो। त्यसैले गीता सामान्य सांसारिक विद्वान्का लागि कल्पना गरेर बनाइएको ग्रन्थ होइन। यो त अनन्त कालदेखि चलिआएको ज्ञानको स्तरीय ग्रन्थ हो। महाभारत शान्तिपर्व (३४८.५१.५२) मा गीताको इतिहास निम्नलिखित रूपमा पाउन सकिन्छ—

*त्रेता युगादौ च ततो विवस्वान्मनवे ददौ ।*
*मनुश्च लोकभृत्यर्थं सुतायेक्ष्वाकवे ददौ ।*
*इक्ष्वाकुणा च कथितो व्याप्य लोकानवस्थितः ॥*

त्रेता युगको सुरुमा परमेश्वरसँग सम्बन्धित यो विज्ञानको उपदेश विवस्वानले मनुलाई दिए। मनुष्य जातिका पिता मनुले फेरि यो ज्ञान आफ्ना छोरा महाराज इक्ष्वाकुलाई दिए। इक्ष्वाकु यो भूमण्डलका राजा थिए र यिनै इक्ष्वाकु रघुवंशका पुर्खा हुन्। त्यसै वंशमा पछि भगवान् रामचन्द्रले अवतार लिनुभयो। त्यसैले मानवसमाजमा *भगवद्गीताको* अस्तित्व महाराज इक्ष्वाकुको समयदेखि विद्यमान थियो।

अहिले कलियुगको ४,३२,००० वर्षमध्ये केवल ५,००० वर्षमात्र हामीले बितायौँ। योभन्दा अगाडि ८,००,००० वर्षको द्वापर युग थियो र त्योभन्दा पूर्व १२,००,००० वर्षको त्रेता युग थियो। यसरी हेर्दा करीब २०,०५,००० वर्ष पूर्व मनुले आफ्ना छोरा तथा शिष्य इक्ष्वाकुलाई यो *भगवद्गीताको* उपदेश दिएका थिए। त्यससमय इक्ष्वाकु पृथ्वीका राजा थिए। अहिलेका वर्तमान मनुको पूर्ण आयु लगभग ३०,५३,००,००० वर्षको भएको अनुमान गरिन्छ र त्यसमा

१२,०४,००,००० वर्ष बितिसके। अब मनुको जन्मभन्दा अगाडि नै भगवान्ले आफ्ना शिष्य विवस्वान् सूर्यलाई यो गीता सुनाउनुभएको थियो। यसबाट एउटा मोटामोटी अनुमान के गर्न सकिन्छ भने, गीता आजभन्दा कम्तीमा १२,०४,००,००० वर्षअघि भनिएको शास्त्र हो। यो गीता मानवसमाजमा आजभन्दा २०,००,००० वर्ष अघिदेखि विद्यमान छ र आजभन्दा ५,००० वर्षअघि भगवान्ले अर्जुनलाई फेरि त्यही गीता शास्त्रको उपदेश दिनुभयो। गीताको अनुसार वा गीताका वक्ता भगवान् श्रीकृष्णको भनाईअनुसार नै यसरी गीताको इतिहासको मोटामोटी अनुमान गरिएको हो। सूर्यदेव विवस्वान् क्षत्रिय भएकाले उनलाई गीता सुनाइएको हो। यी विवस्वान् सम्पूर्ण सूर्यवंशी क्षत्रियहरूका पिता हुन्। *भगवद्गीता* पनि वेदजत्तिकै हो। स्वयम् भगवान्को मुखारविन्दबाट भनिएको हुनाले यो पनि **अपौरूषेय** (विकाररहित) ज्ञान हो, वैदिक उपदेशहरूलाई कुनै सांसारिक विवेचना नगरी जस्ताको तस्तै स्वीकार गरिन्छ, तसर्थ गीतालाई पनि कुनै सांसारिक विवेचना नगरी स्वीकार गर्नु पर्दछ। सांसारिक तार्किक व्यक्तिहरू आफ्नो-आफ्नो किसिमले गीताका विषयमा चिन्तनमनन गर्न सक्दछन् तर यसरी चिन्तन गरेर बनाइएको ग्रन्थ जस्ताको तस्तै गीता हुन सक्दैन। त्यसैले, गुरुशिष्य परम्परामा रहेर गीतालाई जस्ताको तस्तै रूपमा स्वीकार गर्न पर्दछ। यहाँ भनिएको छ— यो गीताको ज्ञान सर्वप्रथम भगवान्ले सूर्यदेवलाई दिनुभयो। सूर्यदेवले आफ्ना छोरा मनुलाई यो ज्ञान प्रदान गरे र मनुले पनि यो गीताज्ञान आफ्ना छोरा इक्ष्वाकुलाई दिए।

**एवं परम्पराप्राप्तमिमं राजर्षयो विदुः।**
**स कालेनेह महता योगो नष्टः परन्तप ॥ २॥**

**एवम्** — यस प्रकारले; **परम्परा** — शिष्यपरम्पराबाट; **प्राप्तम्** — प्राप्त हुनआएको; **इमम्** — यो विज्ञानलाई; **राजर्षयः** — ऋषिसमान राजाहरूले; **विदुः** — जाने; **सः** — त्यो ज्ञान; **कालेन** — समयको गतिले; **इह** — यस संसारमा; **महता** — महान्; **योगः** — परमेश्वरसँग आत्माको सम्बन्धको विज्ञान; **नष्टः** — छिन्नभिन्न भयो; **परन्तप** — हे शत्रुहरूलाई दमन गर्ने अर्जुन।

**यसरी यो परमविज्ञान शिष्यपरम्पराद्वारा प्राप्त भएको हो र राजर्षिहरूले यसलाई त्यसै विधिले बुझे तर समयका अन्तरालमा त्यो परम्परा छिन्नभिन्न भयो। त्यसैले यो विज्ञान जस्तो छ त्यही रूपमा नदेखिएजस्तो लाग्छ।**

**तात्पर्य :** यहाँ स्पष्ट रूपले के भनिएको छ भने, विशेष गरेर गीताको उपदेश राजर्षिहरूका लागि गरिएको थियो, किनभने तिनीहरूले जनतामा शासन गर्ने

कार्यमा यसको उपयोग गर्दथे। आफ्नो व्यैयक्तिक मनोमानीअनुसार विभिन्न प्रकारले यसको व्याख्या गर्ने र अरूलाई यसको लाभ नपुऱ्याउने आसुरी व्यक्तिका लागि भनेर यो *भगवद्गीताको* उपदेश गरिएको होइन। असाधु तथा अविवेकी भाष्यकारहरूको निहित स्वार्थले गर्दा गीताको वास्तविक उद्देश्य नै छिन्नभिन्न हुन लागेको हुनाले फेरि शिष्यपरम्पराको स्थापना गर्नुपर्ने आवश्यकता देखियो। पाँच हजार वर्षअघि पनि स्वयम् भगवान्ले शिष्यपरम्परा खण्डित भएको पाउनुभयो। त्यसैले उहाँलाई गीताको उद्देश्य नै लोप हुन लागेको अनुभव भएको थियो। ठीक त्यसै गरी वर्तमान क्षणमा पनि गीताका धेरै संस्करणहरू (विशेषतः अङ्ग्रेजी भाषामा) प्रकाशित भएका छन् तर तीमध्ये प्रायः सबैजसो संस्करणहरू प्रामाणिक गुरु-शिष्य परम्पराअनुसार आएका छैनन्। विभिन्न सांसारिक विद्वान्हरूद्वारा गीताका असङ्ख्य व्याख्याहरू भएका छन् तर तीमध्ये सबै व्यक्तिहरूले भगवान् श्रीकृष्णलाई भगवान्का रूपमा स्वीकार गरेका छैनन्, यद्यपि भगवान् श्रीकृष्णका वाणीका आधारमा उनीहरूले राम्रो व्यवसाय चलाएका छन्। यो आसुरी प्रवृत्ति हो। असुरहरू भगवान्मा विश्वास त गर्दैनन् तर भगवान्का गुणहरूबाट प्रशस्त लाभ लिने गर्दछन्। अतः अङ्ग्रेजीमा एउटा यस्तो गीताको आवश्यकता थियो जो गुरु-शिष्य परम्पराबाट प्राप्त भएको होस्। त्यही ठुलो आवश्यकता पूर्ति गर्ने उद्देश्यले यहाँ यो प्रयास गरिएको हो। *भगवद्गीताको* यो स्वीकृत यथारूप मानवताका लागि एउटा महान् वरदान सिद्ध हुनेछ तर यदि यसलाई मात्र काल्पनिक एवं दार्शनिक चिन्तन हो भनेर स्वीकार गरेमा त्यो समय नष्ट गर्नुमात्र हुन्छ।

**स एवायं मया तेऽद्य योगः प्रोक्तः पुरातनः ।**
**भक्तोऽसि मे सखा चेति रहस्यं ह्येतदुत्तमम् ॥ ३ ॥**

**सः** — त्यही; **एव** — निश्चय नै; **अयम्** — यो; **मया** — मद्वारा; **ते** — तिमीलाई; **अद्य** — आज; **योगः** — योगविद्या; **प्रोक्तः** — भनियो; **पुरातनः** — धेरै पुरानो; **भक्तः** — भक्त; **असि** — तिमी छौ; **मे** — मेरा; **सखा** — मित्र; **च** — पनि; **इति** — अतः; **रहस्यम्** — रहस्य (खास कुरा); **हि** — निश्चय नै; **एतत्** — यो; **उत्तमम्** — उत्तम वा दिव्य।

**आज म तिमीलाई भगवान्सँगको सम्बन्ध बुझाउने धेरै पुरानो विज्ञानको कुरा भन्दैछु, किनभने तिमी मेरा भक्त पनि हौ र मित्र पनि हौ, अनि तिमी यो विज्ञानको दिव्य रहस्य बुझ्न पनि सक्दछौ।**

**तात्पर्य :** मानिस दुई प्रकारका हुन्छन् — भक्त र असुर। भगवान्ले यहाँ अर्जुनलाई यो महाविज्ञानका उपयुक्त पात्र रोज्नुभयो, किनभने अर्जुन भगवान्का भक्त थिए। असुरहरूका लागि यो महान् रहस्यमय विज्ञान बुझ्नु सम्भव छैन। यस

महान् ग्रन्थ गीताका धेरै संस्करणहरू उपलब्ध छन्, तीमध्ये कुनैमा भक्तहरूले गरेका भाष्य छन् र कुनैमा असुरहरूका भाष्य छन्। भक्तहरूले लेखेका भाष्य यथार्थ हुन् र असुरहरूद्वारा गरिएका भाष्य अर्थहीन छन्। अर्जुनले श्रीकृष्णलाई भगवान्का रूपमा स्वीकार गरेका छन्, त्यसैले अर्जुनको चरणचिन्हको अनुसरण गरेर लेखिएको भाष्य नै यस महान् विज्ञानप्रतिको सही भक्ति वा सेवा हो। असुरहरू परमेश्वर श्रीकृष्णलाई त्यही रूपमा स्वीकार गर्दैनन्। उनीहरू भगवान् श्रीकृष्णका सम्बन्धमा अरू नै केही मनगढन्त विचारहरू दिन्छन् र सर्वसाधारण पाठकलाई श्रीकृष्णका उपदेशका सही मार्गबाट विचलित गराइदिन्छन्। यहाँ यस्ता कुमार्गमा लाग्नबाट बच्नका लागि चेतावनी दिइएको छ। मानिसहरू अर्जुनको पदचिन्हलाई अनुसरण गर्दै शिष्यपरम्पराको अनुसरण गरून् र यसरी *श्रीमद्भगवद्गीतारूपी* महान् विज्ञानबाट लाभान्वित होऊन्।

अर्जुन उवाच

**अपरं भवतो जन्म परं जन्म विवस्वतः ।**
**कथमेतद् विजानीयां त्वमादौ प्रोक्तवानिति ॥ ४ ॥**

**अर्जुन उवाच** — अर्जुनले भने; **अपरम्** — पछि; **भवतः** — हजुरको; **जन्म** — जन्म; **परम्** — पहिल्यै; **जन्म** — जन्म; **विवस्वतः** — सूर्य देवताको; **कथम्** — कसरी; **एतत्** — यो; **विजानीयाम्** — मैले जानूँ; **त्वम्** — हजुरले; **आदौ** — अगाडि; **प्रोक्तवान्** — उपदेश दिनुभयो; **इति** — यस्तो।

**अर्जुनले भने, सूर्यदेव विवस्वान्को जन्म पहिल्यै भएको थियो, हजुरको जन्म अहिले भएको छ, यो विज्ञान हजुरले उनलाई पहिल्यै भन्नुभएको थियो भन्ने कुरा मैले कसरी बुझूँ।**

**तात्पर्य :** यदि अर्जुनलाई भगवान्का भक्त स्वीकार गरेमा उनले भगवान् श्रीकृष्णका वाणीमा किन विश्वास गर्न सकेनन्? यथार्थ कुरा के हो भने, अर्जुनले आफ्ना लागि यो कुरा सोधेका छैनन्। यो जिज्ञासा त उनले तिनीहरूका लागि गरेका थिए, जसको भगवान्मा विश्वास छैन अथवा यो प्रश्न ती असुरहरूका निमित्त गरिएको हो जो श्रीकृष्णलाई भगवान् मान्ने कुरामा सहमत छैनन्। उनीहरूका लागि भनेर नै अर्जुनले भगवान् श्रीकृष्णका सम्बन्धमा आफूलाई केही थाहा नभएजस्तै गरी यो प्रश्न सोधेका हुन्। श्रीकृष्ण, भगवान् हुनुहुन्छ, उहाँ हरेक वस्तुका मूल स्रोत हुनुहुन्छ र उहाँ नै अन्तिम ब्रह्म हुनुहुन्छ भन्ने अर्जुनलाई राम्रोसँग थाहा थियो। यो कुरा दशौँ अध्यायमा स्पष्ट हुन्छ। अवश्य नै भगवान् श्रीकृष्ण यस पृथ्वीमा देवकीका छोराका रूपमा पनि अवतीर्ण हुनुभयो तर

उनै श्रीकृष्ण कसरी उही शाश्वत आदिपुरुष भगवान्का रूपमा रहिरहनुभयो? सर्वसाधारण मानिसका लागि यो कुरा बुझ्न कठिन छ। त्यसैले, यो विषयलाई स्पष्ट पार्नका लागि नै अर्जुनले भगवान् श्रीकृष्णसँग यस्तो प्रश्न सोधेका हुन्, किनभने स्वयम् भगवान् श्रीकृष्णबाटै यसको आधिकारिक उत्तर पाइयोस्।

आजमात्रै होइन अनादिकालदेखि नै सारा संसारले भगवान् श्रीकृष्णलाई परम आधिकारिक स्रोत मान्दैआएको छ। केवल असुरहरूले मात्र यसलाई स्वीकार गर्दैनन्। जे होस् भगवान् श्रीकृष्ण सर्वस्वीकृत परम आधिकारिक स्रोत हुनुहुन्छ, त्यसैले अर्जुनले उहाँसँग यो प्रश्न राखेका हुन्। उहाँले आफ्नाबारेमा असुरहरूद्वारा चित्रण गरिएको भन्दा भिन्न किसिमको बयान दिनु हुन्छ। असुरहरू सधैँ आफू र आफ्ना अनुयायीहरूले मात्र बुझ्नेगरी विकृत ढङ्गले उहाँको चित्रण गर्ने प्रयास गर्दछन्। हरेक व्यक्तिले आफ्नै हितका लागि पनि कृष्णविज्ञान बुझ्नु आवश्यक छ। जब भगवान् श्रीकृष्णले आफ्नाबारेमा आफैँ भन्दै हुनुहुन्छ, त्यो सारा संसारका लागि मङ्गलमय विषय हुन्छ।

असुरहरूका लागि भगवान् श्रीकृष्णले आफ्नाबारेमा गरेको यो वर्णन अनौठो लाग्न सक्दछ, किनभने असुरहरू सधैँ आफ्नो दृष्टिकोणअनुसार भगवान् श्रीकृष्णको अध्ययन गर्दछन् तर भक्तहरू स्वयम् भगवान् श्रीकृष्णद्वारा आफ्नाबारेमा गरिएको वर्णनलाई हृदयदेखि स्वागत गर्दछन्। भक्तहरू भगवान् श्रीकृष्णका यस्ता प्रामाणिक वचनहरूलाई सधैँ स्वागत गर्दछन्, किनभने उनीहरू भगवान् श्रीकृष्णका बारेमा धेरैभन्दा धेरै कुरा जान्न उत्सुक हुन्छन्। यसरी भगवान् श्रीकृष्णलाई एउटा सामान्य व्यक्ति मान्ने नास्तिकहरूले पनि श्रीकृष्ण अतिमानव हुनुहुन्छ, सच्चिदानन्दमय विग्रह हुनुहुन्छ, दिव्य हुनुहुन्छ, प्रकृतिका तीन गुणहरूभन्दा पर हुनुहुन्छ र देश तथा कालको प्रभावभन्दा माथि हुनुहुन्छ भन्ने बुझ्न सक्नेछन्। अर्जुनका स्तरका कृष्णभक्तहरूलाई भगवान् श्रीकृष्णका दिव्य स्वरूपका बारेमा कहिल्यै कुनै भ्रम हुन सक्दैन। भगवान् श्रीकृष्णलाई भौतिक प्रकृतिका गुणहरूको अधीनमा रहने एउटा सामान्य व्यक्तिसरह ठान्ने नास्तिकहरूलाई चुनौती दिनका लागि मात्र अर्जुनले भगवान् श्रीकृष्ण सँग यस्तो प्रश्न राखेका हुन्।

श्रीभगवानुवाच

**बहूनि मे व्यतीतानि जन्मानि तव चार्जुन ।**
**तान्यहं वेद सर्वाणि न त्वं वेत्थ परन्तप ॥ ५ ॥**

**श्रीभगवानुवाच** — भगवान्ले भन्नुभयो; **बहूनि** — धेरै धेरै; **मे** — मेरा; **व्यतीतानि** — बितिसकेका छन्; **जन्मानि** — जन्महरू; **तव** — तिम्रो;

**च** — पनि; **अर्जुन** — हे अर्जुन; **तानि** — ती सबैलाई; **अहम्** — मैले; **वेद** — जान्दछु; **सर्वाणि** — सबै; **त्वम्** — तिमीले; **नवेत्थ** — जान्दैनौ; **परन्तप** — हे शत्रुहरूलाई दमन गर्ने अर्जुन।

**भगवान्ले भन्नुभयो — हे परन्तप अर्जुन! तिम्रा र मेरा धेरै धेरै जन्महरू बितिसके। मलाई ती सबैको सम्झना छ तर तिमीले त्यो सम्झन सक्दैनौ।**

**तात्पर्य :** ब्रह्मसंहिता (५.३३) मा भगवान्का धेरै धेरै अवतारहरू भएको सूचना हामी पाउँदछौँ। त्यहाँ भनिएको छ—

*अद्वैतमच्युतमनादिमनन्तरूपमाद्यं पुराणपुरुषं नवयौवनं च ।*
*वेदेषु दुर्लभमदुर्लभमात्मभक्तौ गोविन्दमादिपुरुषं तमहं भजामि ॥*

"म उनै आदिपुरुष भगवान् गोविन्द (कृष्ण) को उपासना गर्दछु, जो अद्वैत हुनुहुन्छ, अच्युत तथा अनादि हुनुहुन्छ। असीमित रूपमा उहाँको विस्तार भएको छ र उहाँ आदिम वा पुरातन हुनुहुन्छ तापनि उहाँ सधैँ नवयौवनले परिपूर्ण देखिनु हुन्छ।" भगवान्को यस्तो सच्चिदानन्दमय स्वरूपको ज्ञान प्रायः उच्चकोटिका वैदिक विद्वान्हरूलाई हुन्छ तर विशुद्ध तथा अनन्य भक्तहरूले भगवान्का यस्ता स्वरूपहरूको दर्शन सधैँ पाइरहन्छन्। ब्रह्मसंहिता (५.३९) मा भनिएको छ—

*रामदिमूर्तिषुकलानियमेन तिष्ठन्,*
*नानावतारमकरोद् भुवनेषु किन्तु ।*
*कृष्णः स्वयं समभवत् परमः पुमान् यो*
*गोविन्दमादिपुरुषं तमहं भजामि ॥*

म उनै आदिपुरुष गोविन्दको भजन गर्दछु जो सधैँ राम, नृसिंह र अन्य धेरै अवतार तथा अंशावतारमा विद्यमान रहनु हुन्छ, अनि सँगसँगै आदिपुरुष भगवान् श्रीकृष्णका रूपमा विख्यात भएर स्वयम् पनि अवतरित हुनुहुन्छ।

वेदहरूमा पनि भनिएको छ— भगवान् अद्वय हुनुहुन्छ तापनि स्वयम् असङ्ख्य रूपहरूमा देखापर्नु हुन्छ। उहाँ विभिन्न रङ्गमा परिवर्तित भएर पनि एउटै रहिरहने वैदूर्य मणिजस्ता हुनुहुन्छ। शुद्ध तथा निष्काम भक्तहरूले मात्रै उहाँका ती विविध रूपहरूलाई बुझ्न सक्दछन्। केवल वेद अध्ययन गरेर उहाँलाई बुझ्न सकिँदैन। भनिएको पनि छ— **वेदेषु दुर्लभमदुर्लभमात्म भक्तौ।** अर्जुन जस्ता भक्तहरू भगवान्का नित्य मित्र हुन्। जुन समय भगवान्ले अवतार लिनु हुन्छ, उहाँका पार्षद् भक्तहरू पनि त्यस समय विभिन्न रूपमा उहाँको सेवा गर्नका लागि भगवान्सँगै अवतरित हुन्छन्। अर्जुन यस्तै किसिमका

भक्त हुन्। यो श्लोकबाट के कुराको सङ्केत पाइन्छ भने, लाखौँ वर्षअघि भगवान् श्रीकृष्णले सूर्यदेव विवस्वान्लाई *भगवद्गीताको* उपदेश दिँदा अर्जुन पनि कुनै अर्कै रूपमा त्यस समय विद्यमान थिए। भगवान् र अर्जुनका बीचमा के भिन्नता छ भने, भगवान्लाई त्यो घटनाको पूरा सम्झना छ तर अर्जुनलाई त्यसको सम्झना छैन। भगवान्को अंश जीवात्मा र स्वयम् भगवान्का बीचमा रहेको भिन्नता यही हो। यहाँ अर्जुनलाई परम शक्तिशाली वीर भनेर सम्बोधन गरिएको छ। अर्जुनले शत्रुहरूलाई दमन गर्न त सक्दछन् तर पूर्वजन्ममा भएका घटनाहरू सम्झन सक्दैनन्। अतः भौतिक रूपमा जीव जतिसुकै शक्तिशाली भए पनि ऊ कहिल्यै परमात्माको बराबरीमा पुग्न सक्दैन। जो भगवान्को नित्य मित्र बनेको छ, त्यो अवश्य पनि मुक्तपुरुष हो तापनि ऊ भगवान्को समकक्ष हुन सक्दैन। ब्रह्मसंहितामा भगवान्लाई अच्युत भनिएको छ, जसको अर्थ भौतिक सम्पर्कमा रहेर पनि जसले आफूलाई कहिल्यै भुल्दैन भन्ने हुन्छ। त्यसैले भगवान् र जीवात्मा कहिल्यै कुनै किसिमले पनि समान हुन सक्दैनन्, त्यो जीव अर्जुनजस्तै मुक्तपुरुष किन नहोस्। अर्जुन भगवान्का भक्त हुन् तैपनि कहिलेकाहीँ उनले भगवान्को प्रकृति (स्वभाव) बिर्सिन्छन्। तर, दैवी कृपाले गर्दा भक्तले तुरुन्तै भगवान्को अच्युतस्वरूपलाई बुझ्दछ तर अभक्त वा असुरहरूले भगवान्को त्यो दिव्य प्रकृतिलाई बुझ्न सक्दैनन्। फलस्वरूप गीतामा दिइएका यी विवरणहरू आसुरी मष्तिस्कमा पस्न सक्दैन। भगवान् श्रीकृष्ण र अर्जुन दुवै अविनाशी हुनुहुन्छ तैपनि श्रीकृष्णले लाखौँ वर्षअघि आफूले सम्पन्न गर्नुभएको काम सम्झन सक्नुभयो तर अर्जुनले सम्झिन सकेनन्। यहाँ हामीले अर्को के पनि सम्झन पर्दछ भने, जीवात्माले शरीर परिवर्तन गर्दा पहिलेका सबै कुरा बिर्सिन्छ तर भगवान्ले सम्झिरहनु हुन्छ, किनभने भगवान्को शरीर सच्चिदानन्दमय हुन्छ र त्यो कहिल्यै परिवर्तित हुँदैन। उहाँ अद्वैत हुनुहुन्छ, किनभने उहाँको शरीर र आत्मामा कुनै भिन्नता छैन। उहाँसँग सम्बन्धित प्रत्येक वस्तु आत्ममय हुन्छ र बद्ध जीव आफ्नो भौतिक शरीरभन्दा भिन्दै हुन्छ। भगवान्को आत्मा र शरीर अभिन्न हुने हुनाले उहाँ यो भौतिक जगत्मा अवतरित हुँदा पनि उहाँको स्थिति सामान्य जीवात्माको भन्दा भिन्न हुन्छ। असुरहरू भगवान्को यस्तो दिव्य स्वभावसँग समन्वय राख्न सक्दैनन्। यसको व्याख्या स्वयम् भगवान्ले आगामी श्लोकमा यसरी गर्नु हुन्छ—

**अजोऽपि सन्नव्ययात्मा भूतानामीश्वरोऽपि सन् ।**
**प्रकृतिं स्वामधिष्ठाय संभवाम्यात्ममायया ॥ ६ ॥**

**अजः** — अजन्मा; **अपि** — पनि; **सन्** — भएर; **अव्यय** — अविनाशी; **आत्मा** — शरीर; **भूतानाम्** — जन्मिएका प्राणीहरूको; **ईश्वरः** — परमेश्वर; **अपि** — पनि; **सन्** — भएर; **प्रकृतिम्** — दिव्य स्वरूपमा; **स्वाम्** — मेरो आफ्नै; **अधिष्ठाय** — यसरी अवस्थित भएर; **संभवामि** — म अवतार लिन्छु; **आत्ममायया** — मेरै अन्तरङ्गा शक्तिद्वारा।

**म अजन्मा हूँ, मेरो दिव्य शरीर अविनाशी छ र म सबै प्राणीहरूको स्वामी हूँ तैपनि प्रत्येक युगमा म आफ्नो वास्तविक दिव्य स्वरूपमा प्रकट हुन्छु।**

**तात्पर्य :** भगवान्ले यहाँ आफ्नो जन्मको विशिष्टताका बारेमा भन्नुभएको छ। उहाँ एउटा सामान्य मानिसजस्तै प्रकट हुनुभए पनि उहाँ आफ्ना धेरै धेरै पूर्वजन्मका हरेक कुरा सम्भनु हुन्छ, जबकि साधारण मानिसले केही घण्टा अगाडि आफूले गरेको काम पनि सम्भिन सक्दैन। यदि कसैले एक दिनअघि ठीक यसै समय तिमीले के गरेका थियौ भनेर सोधे एउटा साधारण मानिसलाई यसको तत्काल उत्तर दिन गाह्रो पर्दछ। हिजो ठीक यसै समय मैले के गरेको थिएँ भन्ने सम्भनका लागि मैले धेरै समयसम्म आफ्नो बुद्धिलाई सावधानीपूर्वक प्रयोग गर्नु पर्दछ। यति हुँदाहुँदै पनि मानिसले प्रायः आफूलाई भगवान् वा कृष्ण भएको दाबी गर्ने साहस गर्दछ। यस किसिमको दाबी वा घोषणा सुनेर मानिसले मार्ग भुल्न हुँदैन। यहाँ भगवान्ले फेरि आफ्नो प्रकृति वा स्वभावको व्याख्या गर्नुभएको छ। यहाँ प्रकृतिको अर्थ स्वरूप वा आफ्नो रूप हो। भगवान् भन्नु हुन्छ—"म आफ्नै शरीरमा प्रकट हुन्छु। साधारण जीवले एउटा जीवनबाट अर्को जीवनमा जाँदा शरीर परिवर्तन गरेजस्तै गरी भगवान्ले आफ्नो शरीर परिवर्तन गर्नु हुन्न।

बद्ध जीवको यो जन्ममा एक किसिमको शरीर हुन्छ आगामी जन्ममा अर्कै प्रकारको शरीर हुन्छ। यो भौतिक जगत्मा जीवको सधैँ एकै किसिमको शरीर रहिरहन्न, बरु उसले एउटा शरीर छोडेर अर्को शरीरमा देहान्तरण गरिरहन्छ तर भगवान्ले यस्तो गर्नु हुन्न। उहाँले अवतार लिँदा जहिले पनि आफ्नो अन्तरङ्गा शक्तिद्वारा उहाँ आफ्नो उही मौलिक शरीरमा आउनु हुन्छ। अर्को शब्दमा भन्दा, भगवान् श्रीकृष्ण आफ्ना दुई हातमा बाँसुरी धारण गरेको मौलिक तथा शाश्वत स्वरूपमा यस जगत्मा आउनु हुन्छ। उहाँ भौतिक जगत्बाट प्रदूषित नभई आफ्नो उही शाश्वत शरीरमा प्रकट हुनुहुन्छ। हुनत उहाँ आफ्नो उही दिव्य शरीरमा प्रकट हुने ब्रह्माण्डका स्वामी हुनुहुन्छ तैपनि उहाँ सामान्य मानिससमान प्रकट हुनुभएको हो कि भनेजस्तो लाग्दछ। उहाँको शरीरमा भौतिक शरीरमाजस्तै विकृति उत्पन्न हुँदैन, उहाँको शरीर अक्षय छ तर पनि

उहाँ बाल्यावस्थाबाट कुमार अवस्थामा र कुमार अवस्थाबाट युवावस्थामा जानु भएजस्ता देखिनु हुन्छ तर अचम्मको कुरा के छ भने, उहाँ युवा अवस्थाबाट वृद्धावस्थातिर कहिल्यै जानुभएन।

कुरुक्षेत्रमा युद्ध हुँदा उहाँका धेरै नाति-पनातिहरू भइसकेका थिए र भौतिक काल गणनाअनुसार उहाँ निकै बूढो भइसक्नुभएको थियो तर पनि उहाँ बीस-पच्चीस वर्षका युवकजस्ता देखिनुहुन्थ्यो। हामीले भगवान् श्रीकृष्णको वृद्ध अवस्थाको चित्र देखेका छैनौँ, किनभने उहाँ कहिल्यै पनि हामीजस्तै बूढो हुनु हुन्न। हुनत उहाँ भूत, भविष्य र वर्तमान् तीनै कालमा सबैभन्दा जेठा र बयोवृद्ध पुरुष हुनुहुन्छ। उहाँको शरीर र बुद्धि न कहिल्यै बूढो हुन्छ, न कहिल्यै क्षीण हुन्छ, न कहिल्यै परिवर्तन हुन्छ। यसबाट के स्पष्ट हुन्छ, यो संसारमा रहँदा पनि उहाँ उही अजन्मा र सच्चिदानन्दमय शरीरमा नै रहनुभयो। उहाँको शरीर र बुद्धिमा कहिल्यै कुनै परिवर्तन आएन। वास्तवमा उहाँको आविर्भाव र तिरोभाव सूर्यको उदय र अस्तजस्तै हो। सूर्य हाम्रो अगाडिबाट घुम्दै हाम्रा दृष्टिबाट पर हुन्छन्। सूर्य हाम्रो दृष्टिबाट पर जाँदा वा नदेखिने हुँदा हामीले सूर्य अस्ताएको ठान्दछौँ र हाम्रा अगाडि हुँदा सूर्य आकाशमा छन् भन्ने सोच्दछौँ तर वास्तवमा सूर्य स्थिर छन्, केवल हाम्रो अपूर्ण तथा त्रुटिपूर्ण इन्द्रियका कारणले गर्दा हामीले सूर्यलाई उदाएको र अस्ताएको भन्ने कल्पना गरेका हौँ। भगवान् श्रीकृष्णका सम्बन्धमा पनि यही कुरा लागू हुन्छ। भगवान्‌को आविर्भाव र तिरोभाव सामान्य जीवात्माको जन्म र मृत्युभन्दा भिन्दै किसिमको हुन्छ। यसबाट स्पष्ट हुन्छ— भगवान् शाश्वत हुनुहुन्छ। आफ्नै अन्तरङ्गा शक्तिले गर्दा उहाँ आनन्दस्वरूप हुनुहुन्छ र यो भौतिक प्रकृतिद्वारा उहाँ कहिल्यै प्रदूषित हुनु हुन्न।

भगवान् अजन्मा भएर पनि विभिन्न रूपमा अवतरित हुनुहुन्छ भन्ने कुरा वेदहरूले पनि पुष्टि गरेका छन् र वेदान्तमा यही कुराको पुष्टि गर्दै भनिएको छ— भगवान्‌ले जन्म लिनुभए जस्तो लाग्छ तर उहाँको शरीर अपरिवर्तनशील छ। *श्रीमद्भागवत्‌मा* भगवान् आफ्नी आमाका अगाडि चार हात र षड् ऐश्वर्यले युक्त साक्षात् नारायणका रूपमा प्रकट हुनुभएको छ। उहाँले यसरी आफ्नो मौलिक र शाश्वत रूपमा प्रकट हुनु जीवहरूलाई प्रदान गरिने उहाँको अहैतुकी कृपा हो। यसबाट जीवलाई भगवान्‌को सही रूपमा ध्यान केन्द्रित गर्न सजिलो पर्दछ। भगवान्‌को स्वरूप निर्विशेषवादीहरूद्वारा गलत किसिमले कल्पना गरिएजस्तो छैन। विश्वकोशअनुसार माया वा आत्ममाया शब्द भगवान्‌को अहैतुकी कृपाको सूचक हो। भगवान्‌लाई आफ्ना सबै पूर्ववर्ती आविर्भाव र तिरोभावको ज्ञान भईरहन्छ तर सामान्य शरीर ग्रहण गर्नासाथ जीवले पूर्वजन्मको

शरीरसँग सम्बन्धित हरेक कुरा बिर्सिन्छ। भगवान् सम्पूर्ण जीवात्माका स्वामी हुनुहुन्छ। यस पृथ्वीमा रहँदा उहाँले धेरै आश्चर्यजनक र अतिमानवीय लीलाहरू गरिरहनु हुन्छ, त्यसैले भन्न सकिन्छ— भगवान् निरन्तर आफ्नो परमसत्य रूपमा रहनु हुन्छ। उहाँको स्वरूप र आत्मामा तथा उहाँको गुण र शरीरमा कुनै अन्तर हुँदैन। अब यहाँ प्रश्न गर्न सकिन्छ— त्यसोभए यो संसारमा भगवान्ले किन अवतरित हुने र तिरोधान हुने गरिरहनु हुन्छ? आगामी श्लोकमा यसको व्याख्या गरिएको छ—

**यदा यदा हि धर्मस्य ग्लानिर्भवति भारत ।**
**अभ्युत्थानमधर्मस्य तदात्मानं सृजाम्यहम् ॥ ७ ॥**

**यदा यदा** — जहिले जहिले र जहाँ जहाँ; **हि** — निश्चय नै; **धर्मस्य** — धर्मको; **ग्लानिः** — क्षति वा हानि; **भवति** — हुन्छ; **भारत** — हे भरतवंशी; **अभ्युत्थानम्** — प्रधानता; **अधर्मस्य** — अधर्मको; **तदा** — त्यस समय; **आत्मानम्** — आफैँलाई; **सृजामि** — प्रकट गर्छु; **अहम्** — म।

**हे भरतवंशी अर्जुन! जहाँ जहाँ र जहिले जहिले धर्मको पतन र अधर्मको उन्नति हुन लाग्दछ त्यस समय त्यस ठाउँमा मैले अवतार लिन्छु।**

**तात्पर्य :** यहाँ यो **सृजामि** शब्द निकै महत्त्वपूर्ण छ। सृष्टिको अर्थमा **सृजामि** शब्दको प्रयोग हुन सक्दैन किनभने, उपरोक्त श्लोकअनुसार भगवान्को स्वरूप तथा शरीरको सृष्टि हुँदैन। भगवान्को स्वरूप नित्य विद्यमान रहन्छ। अतः यहाँ **सृजामि** शब्दको अर्थ भगवान् आफ्नो पहिलेको स्वरूपमा प्रकट हुनुहुन्छ भन्ने हुन्छ। हुनत भगवान् आफ्नो निश्चित कार्यक्रमअनुसार ब्रह्माको एक दिनमा पर्ने सातौँ मनुका २८ औँ युगअन्तर्गतको द्वापर युगको अन्त्यमा प्रकट हुनुहुन्छ तर पनि उहाँ यही नियमलाई पालन गर्न बाध्य हुनु हुन्न किनभने उहाँ आफ्नो इच्छानुसार काम गर्न स्वतन्त्र हुनुहुन्छ। त्यसैले जहिले जहिले धर्मको हानि र अधर्मको उन्नति हुन प्रारम्भ हुन्छ भगवान् स्वेच्छाले प्रकट हुनुहुन्छ। वेदमा धर्मको नियमको वर्णन गरिएको छ। यदि ती नियमहरूको पालन गर्ने क्रममा कुनै कमी भएमा भने मानिस अधार्मिक बन्दछ। *श्रीमद्भागवत्मा* भनिएअनुसार यी नियमहरू भगवान्का नियम हुन्। भगवान्ले मात्रै कुनै धर्मको व्यवस्था गर्न सक्नु हुन्छ। वेद पनि विशेष गरेर ब्रह्माजीका हृदयमा भगवान्द्वारा भनिएको शास्त्र मानिन्छ। त्यसैले धर्मका नियमहरूलाई पनि भगवान्को प्रत्यक्ष आदेश मानिन्छ **धर्मं तु साक्षात् भगवत्प्रणीतम्**! सम्पूर्ण *भगवद्गीतामा* धर्मका यिनै नियमहरूको स्पष्ट सङ्केत गरिएको छ। वेदहरूको उद्देश्य नै भगवान्का आदेशको अधीनमा रहेर यस्तै नियमहरूको स्थापना गर्नु हो। *भगवद्गीताको*

अन्त्यमा भगवान्ले स्पष्ट भन्नुभएको छ— धर्मको सर्वोच्च सिद्धान्त भन्नु नै भगवान्को शरणागति हो, अरू केही होइन। वैदिक नियमहरूले मानिसलाई पूर्णतया भगवान्का शरणमा जानका लागि धकेलिरहन्छन्। जब जब असुरहरूद्वारा यी वैदिक सिद्धान्तमा व्यवधान पुऱ्याउने काम हुन्छ अनि भगवान्ले अवतार लिनु हुन्छ। *श्रीमद्भागवत्* पुराणबाट हामी के थाहा पाउँदछौँ भने, भगवान् बुद्ध श्रीकृष्णकै अवतार हुनुहुन्छ। उहाँको अवतार त्यस समय भएको थियो जब भौतिकवाद अत्यन्त उग्र हुँदैगएको थियो र भौतिकवादीहरू वैदिक प्रमाणका आधारमा कपटपूर्ण आचरण गरिरहेका थिए। हुनत वेदहरूमा विशेष प्रयोजनका लागि पशुवलि गर्ने सम्बन्धी केही निश्चित विधिविधानहरू छन् तर आसुरी स्वभावका मानिसहरू वैदिक विधिको पालना नगरी पशुवलिलाई मात्रै अपनाइरहेका थिए। यही हिंस्रक अनाचारलाई रोक्न र वैदिक अहिंसाको स्थापना गर्न गौतम बुद्धको अवतार भएको हो। भगवान्का प्रत्येक अवतारको कुनै न कुनै विशेष उद्देश्य हुन्छ। ती सबैको वर्णन शास्त्रहरूमा गरिएको छ। केवल भारतभूमिमा मात्रै भगवान्ले अवतार लिनु हुन्छ भन्ने कुरा तथ्य होइन। उहाँ आफ्ने इच्छानुसार कुनै पनि समय, कुनै पनि ठाउँमा प्रकट हुन सक्नु हुन्छ। शास्त्रहरूद्वारा अनुमोदित नभएसम्म कसैलाई पनि अवतारका रूपमा स्वीकृति दिनु हुँदैन। जुन परिस्थितिमा रहेर मानिसले धर्मका विषयमा जति कुरा बुझ्न सक्दछ त्यति मात्रै भगवान्ले आफ्ना हरेक अवतारमा भन्नु हुन्छ। तर, भगवान्का हरेक अवतारको उद्देश्य भने एउटै हुन्छ त्यो हो— मानिसलाई कृष्णभावनाभावित बनाउनु र धार्मिक नियमहरूप्रति आज्ञाकारी बनाउनु। कहिले भगवान् स्वयम् आउनु हुन्छ, कहिले आफ्ना प्रामाणिक प्रतिनिधिहरूलाई पुत्र वा सेवकका रूपमा पठाउनु हुन्छ। कहिले रूप परिवर्तन गरेर उहाँ आफैँ आउनु हुन्छ, प्रकट हुनुहुन्छ।

अर्जुन संसारका अन्य-अन्य भागका साधारण मानिसहरूका तुलनामा बढी जागरूक भएका हुनाले *भगवद्गीताको* यो सिद्धान्त भगवान्ले विशेष गरेर अर्जुनलाई भन्नुभएको थियो तैपनि यो विषय अर्जुनका लागि मात्र नभएर अर्जुनजस्ता अन्य महापुरुषका लागि पनि हो। दुईमा दुई जोड्दा चार हुन्छ भन्ने गणितीय नियम प्राथमिक कक्षाका विद्यार्थीहरूका लागि जति सत्य छ त्यति नै सत्य उच्च कक्षाका विद्यार्थीहरूलाई पनि छ। तैपनि गणित कुनै माथिल्लो स्तरको र कुनै तल्लो स्तरको हुने गर्दछ। भगवान्ले पनि प्रत्येक अवतारमा लगभग एकै किसिमको सिद्धान्तको शिक्षा दिनु हुन्छ तर त्यो शिक्षा परिस्थिति अनुरूप कहिले माथिल्लो स्तरको र कहिले तल्लो स्तरको प्रतीत हुन्छ। समाज जीवनका चार वर्ण र चार आश्रमको स्वीकारसँगै धर्मको उच्चतर सिद्धान्त

प्रारम्भ हुन्छ। यो कुरा को पछि व्याख्या गरिने छ। अवतारहरूको एउटै मात्र उद्देश्य सबैतिर कृष्णभावना जगाइदिनु हो तर विभिन्न परिस्थितिअनुसार यस्तो चेतना कहिले प्रकट अवस्थामा हुन्छ कहिले अप्रकट अवस्थामा।

**परित्राणाय साधूनां विनाशाय च दुष्कृताम् ।**
**धर्मसंस्थापनार्थाय सम्भवामि युगे युगे ॥ ८॥**

**परित्राणाय** — उद्धार गर्नका लागि; **साधूनाम्** — भक्तहरूको; **विनाशाय** — संहार गर्नका लागि; **च** — तथा; **दुष्कृताम्** — दुष्टहरूको; **धर्म** — धर्मलाई; **संस्थापनार्थाय** — पुनःस्थापित गर्नका लागि; **सम्भवामि** — प्रकट हुन्छु; **युगे युगे** — युग युगमा।

**भक्तहरूको उद्धारका लागि, दुष्टहरूको विनाशका लागि र धर्मको पुनःस्थापना गर्नका लागि म हरेक युगमा प्रकट हुन्छु।**

**तात्पर्य :** *भगवद्गीताका* अनुसार कृष्णभावनाभावित व्यक्ति नै साधु वा पवित्र मानिस हो। अधार्मिकजस्तो देखिने व्यक्ति पनि यदि पूर्णरूपले कृष्णभावनाभावित भएमा त्यसलाई साधु नै मान्नु पर्दछ। कृष्णभावनाको वास्ता नगर्ने व्यक्तिलाई यहाँ **दुष्कृताम्** भनिएको छ। सांसारिक शिक्षाले विभूषित भएको भए पनि कृष्णभावनारहित दुष्ट व्यक्तिलाई मूर्ख वा नराधम भनिन्छ। यसको विपरीत विद्या वा सुसंस्कार नपाएको व्यक्ति पनि यदि शत-प्रतिशत कृष्णभावनामा लागे त्यसलाई साधु मान्न सकिन्छ। जहाँसम्म अनीश्वरवादी नास्तिकहरूको कुरा छ, तिनको विनाश गर्नका लागि रावण र कंसलाई मार्न भगवान् जुन रूपमा प्रकट हुनुभयो त्यसै रूपमा अवतरित हुनु पर्दछ भन्ने जरूरी छैन। भगवान्का यस्ता धेरै सेवकहरू छन् जसले त्यस्ता असुरहरूलाई संहार गर्न सक्दछन् तैपनि भगवान् ती आसुरी व्यक्तिहरूद्वारा सताइएका आफ्ना निष्काम भक्तहरूलाई सन्तुष्ट पार्नका लागि विशेष गरी अवतार लिनु हुन्छ। आफ्नै नातेदार वा सम्बन्धी भए पनि असुरहरूले भक्तहरूलाई सताउने गर्दछन्। प्रल्हाद महाराज हिरण्यकशिपुका छोरा थिए तर पनि उनी आफ्ना पिताद्वारा धेरै सताइएका थिए। त्यसै गरी भगवान् श्रीकृष्णकी आमा देवकी कंसकी बहिनी थिइन् तर उनीबाट कृष्णको जन्म हुन्छ भन्ने कुराले गर्दा कंशले उनलाई र उनका पति वसुदेवलाई धेरै दण्ड दियो, त्यसैले यहाँ के भन्न सकिन्छ भने भगवान् श्रीकृष्ण कंसलाई मार्नका लागि होइन देवकीको उद्धार गर्नका लागि प्रकट हुनुभएको थियो तैपनि यी दुवै काम एकैसाथ सम्पन्न हुनभए। त्यसैले भनिएको छ—भगवान्ले भक्तको उद्धार गर्नका लागि र दुष्ट असुरहरूको संहार गर्नका लागि विभिन्न अवतार लिनु हुन्छ। कृष्णदास

कविराजले लेख्नुभएको चैतन्य चरितामृतको निम्नलिखित श्लोकहरूबाट अवतारका सिद्धान्तको सारांश प्रकट हुन्छ—

*सृष्टि हेतु एइ मूर्ति प्रपञ्चे अवतरे ।*
*सेइ ईश्वरमूर्ति 'अवतार' नाम धरे ॥*
*मायातीत परव्योमे सबार अवस्थान ।*
*विश्वे अवतरि धरे 'अवतार' नाम ॥*

(*मध्यलीला*— २०.२६३.२६४)

भौतिक रूपमा देखिनका लागि भगवान् भगवद्धामबाट यो पृथ्वीमा अवतरित हुनुहुन्छ। यसरी आउने ईश्वरको विशिष्ट रूपलाई नै अवतार भनिन्छ। यस्ता अवतारहरू मूल रूपमा भगवद्धाममा विद्यमान हुन्छन्। तिनै अवतारहरू जब भौतिक सृजनामा आउनुहुन्छ, त्यतिसमय उहाँहरूलाई अवतार भनिन्छ। अवतार धेरै किसिमका हुन्छन्, जस्तै **पुरुषावतार, गुणावतार, लीलावतार, शक्त्यावेशावतार, मन्वन्तरावतार र युगावतार** आदि। यी अवतारहरू ब्रह्माण्डमा क्रमैसँग अवतरित हुन्छन् तर भगवान् श्रीकृष्ण मूल भगवान् हुनुहुन्छ र सबै अवतारहरूका उद्‌गमस्रोत हुनुहुन्छ। भगवान् श्रीकृष्णलाई मूल रूपमा वृन्दावनका लीलाहरूमा देख्नचाहने शुद्ध भक्तहरूको चिन्तालाई हटाउनका लागि नै भगवान् श्रीकृष्णले यस रूपमा अवतार लिनुभएको हो, त्यसैले श्रीकृष्ण अवतारको मुख्य उद्देश्य आफ्ना निष्काम वा शुद्ध भक्तहरूलाई प्रसन्न पार्नु हो। भगवान् भन्नु हुन्छ—"मैले प्रत्येक युगमा अवतार लिन्छु।" यसबाट के सङ्केत पाइन्छ भने, उहाँले यो कलियुगमा पनि अवतार लिनु हुन्छ। *श्रीमद्‌भागवत्‌मा* भनिएको छ—श्री चैतन्य महाप्रभु नै श्रीकृष्णको कलियुगी अवतार हुनुहुन्छ। उहाँले सङ्कीर्तन आन्दोलनद्वारा कृष्णउपासनाको प्रचार-प्रसार गर्नुभयो र सम्पूर्ण भारतभरि कृष्णभावनामृतको विस्तार गर्नुभयो। यो सङ्कीर्तनको संस्कृति विश्वभरिका नगर-नगर तथा गाउँ-गाउँसम्म फैलिने छ भन्ने भविष्यवाणी पनि उहाँले गर्नुभएको थियो। उपनिषद्, महाभारत, र भागवत्‌जास्ता शास्त्रीय ग्रन्थहरूका गोपनीय स्थलहरूमा अप्रत्यक्ष रूपले चैतन्य महाप्रभु भगवान् श्रीकृष्णका अवतार हुनुहुन्छ भन्ने कुराको वर्णन गरिएको छ, त्यसैले भगवान् श्रीकृष्णका भक्तहरू चैतन्य महाप्रभुको सङ्कीर्तन आन्दोलनबाट निकै आकर्षित हुन्छन्। भगवान्‌को यस अवतारमा दुष्टहरूको विनाश गरिँदैन बरु उहाँले आफ्नो अहैतुकी कृपाद्वारा तिनीहरूको उद्धार गर्नु हुन्छ।

**जन्म कर्म च मे दिव्यमेवं यो वेत्ति तत्त्वतः ।**
**त्यक्त्वा देहं पुनर्जन्म नैति मामेति सोऽर्जुन ॥ ९ ॥**

**जन्म** — जन्म; **कर्म** — काम; **च** — पनि; **मे** — मेरो; **दिव्यम्** — दिव्य; **एवम्** — यसरी; **यः** — जसले; **वेत्ति** — जान्दछ; **तत्त्वतः** — यथार्थमा; **त्यक्त्वा** — त्यागेर; **देहम्** — यो शरीरलाई; **पुनर्जन्म** — फेरि अर्को जन्म; **न एति** — पाउँदैन; **माम्** — मलाई; **एति** — प्राप्त गर्दछ; **सः** — त्यसले; **अर्जुन** — हे अर्जुन।

**हे अर्जुन! जसले मेरो जन्म र कर्मको दिव्य स्वभावलाई यथार्थ रूपले बुझ्दछ, त्यसले यो शरीर छोडेपछि भौतिक संसारमा फेरि जन्म लिनु पर्दैन, बरु उसले मेरो सनातन धाम प्राप्त गर्दछ।**

**तात्पर्य :** छैटौं श्लोकमा भगवान् आफ्नो दिव्य धामबाट यस पृथ्वीमा अवतरित हुने कुराको चर्चा भइसक्यो। जसले भगवान्को आविर्भावको सत्यतालाई बुझ्न सक्दछ त्यो व्यक्ति यो भौतिक सांसारिक प्रपञ्चबाट पहिल्यै मुक्त भइसकेको हुन्छ र यो शरीर त्याग्नासाथ तुरून्त भगवद्धाममा फर्किन्छ। जीवात्मालाई भवबन्धनबाट यस प्रकारको मुक्ति प्राप्त गर्न त्यति सजिलो छैन। शून्यवादीहरू वा निराकारवादीहरू तथा योगीहरूले धेरै धेरै कष्ट सहेर धेरै धेरै जन्मपछि मात्र बल्ल मुक्ति पाउँदछन्। यति गरेर पनि उनीहरूले पाउने मुक्ति भगवान्को निराकार ब्रह्मज्योतिमा लीन हुने मुक्ति हो। यो मुक्ति आंशिक मुक्ति हो। यो मुक्तिमा फेरि भौतिक संसारमा फर्किनुपर्ने डर रहिरहन्छ। तर भगवान्का शरीरको दिव्य प्रकृति र उहाँका क्रियाकलापलाई बुझ्नाले भक्तहरूले पाउने मुक्तिमा यो शरीर छुटेपछि जीवले भगवद्धाम प्राप्त गर्दछ र उसलाई फेरि यो भौतिक संसारमा जन्म लिनुपर्ने डर रहँदैन। ब्रह्मसंहिता ५.३३ मा भनिएको छ— भगवान्का धेरै धेरै रूप र अवतारहरू छन् "**अद्वैतमच्युतमनादिमनन्तरूपम्**"। भगवान्का धेरै दिव्य-दिव्य रूपहरू छन् तर पनि उहाँ अद्वय हुनुहुन्छ, एउटै हुनुहुन्छ। सांसारिक विद्वान् तथा ज्ञानयोगीका लागि यो विषय बुझ्न कठिन छ, असम्भव छ तैपनि यो तथ्यलाई भक्तले विश्वासपूर्वक बुझ्नु पर्दछ। वेदहरूमा अर्थात् पुरुषबोधिनी उपनिषद्मा भनिएको छ—

*एको देवो नित्य लीलानुरक्तो भक्तव्यापी हृद्यन्तरात्मा ॥*

एउटा भगवान् आफ्ना धेरै धेरै दिव्य रूपमा सधैँ आफ्ना शुद्ध भक्तहरूका साथमा रहिरहनु हुन्छ। यो वेदवचनको पुष्टि स्वयम् भगवान्ले गीताको यो श्लोकमा गर्नुभएको छ। वेद र भगवान्लाई नै प्रामाणिक आधार मानेर जसले यो सत्यलाई स्वीकार गर्दछ र दार्शनिक चिन्तन मननमा समय नष्ट गर्दैन, उसले नै मुक्तिको सर्वोच्च पूर्ण अवस्थालाई प्राप्त गर्दछ। श्रद्धापूर्वक यो सत्यलाई स्वीकार गर्नाले निश्चित रूपमा मानिसले मुक्ति लाभ गर्दछ। वैदिक वाक्य

**तत्त्वमसि** यसै प्रसङ्गमा लागू हुन्छ। जसले भगवान् श्रीकृष्णलाई उहाँ नै परब्रह्म हुनुहुन्छ भनेर जान्दछ वा जसले उहाँलाई "हजुर नै परमब्रह्म भगवान् हुनुहुन्छ" भन्दछ त्यो व्यक्ति तुरुन्तै मुक्त हुन्छ, यसमा शङ्का छैन र यसको फलस्वरूप उसलाई निश्चित रूपले भगवान्‌को अलौकिक सङ्गत पनि प्राप्त हुन्छ। अर्को शब्दमा भन्दा भगवान्‌को यस्तो श्रद्धालु भक्तले सिद्धि पनि प्राप्त गर्दछ। निम्नलिखित वैदिक भनाईबाट यसको पुष्टि हुन्छ

*"तमेव विदित्वाति मृत्युमेति नान्यः पन्था विद्यतेऽयनाय ।"*

(*श्वेताश्वतर उपनिषद्* ३.८)

भगवान्‌लाई जानेर मात्रै मानिसले जन्म र मृत्युबाट मुक्तिको पूर्ण अवस्था प्राप्त गर्न सक्दछ। यो बाहेक यस किसिमको सिद्धि प्राप्त गर्ने अर्को कुनै बाटो वा उपाय छैन। यो बाहेक अर्को कुनै विकल्प छैन भन्नुको तात्पर्य के हो भने—जसले श्रीकृष्णलाई भगवान्‌का रूपमा मान्दैन त्यो मान्छे अवश्य पनि तमोगुणी हो। जसरी मह राखेको भाँडालाई बाहिरबाट चाटेर त्यसको स्वाद पाउन सकिन्न त्यसै गरी सांसारिक किसिमको विद्वत्ताले *भगवद्‌गीताको* व्याख्या गरेर पनि मोक्ष प्राप्त गर्न सकिँदैन। त्यस्ता ज्ञानयोगी दार्शनिकहरूले भौतिक जगत्‌मा त महत्त्वपूर्ण भूमिका निर्वाह गर्न सक्लान् तर मुक्तिका अधिकारी हुन सक्दैनन्। यस्ता अभिमानी भौतिक विद्वान्‌हरूले भगवान्‌का भक्तहरूको अहैतुकी कृपा पर्खिनु पर्दछ। त्यसैले मानिसले श्रद्धा र ज्ञानपूर्वक कृष्णभावनाको विकास गर्नु पर्दछ र यही नै सिद्धि प्राप्त गर्ने उपाय हो।

**वीतरागभयक्रोधा मन्मया मामुपाश्रिताः ।**
**बहवो ज्ञानतपसा पूता मद्भावमागताः ॥ १० ॥**

**वीत**— मुक्त; **राग**— आसक्ति; **भय**— डर; **क्रोधाः**— र रीसदेखि; **मत्-मया**— पूर्णतया ममा; **माम्**— मेरो; **उपाश्रिताः**— पूर्ण आश्रयमा रहेको; **बहवः**— विभिन्न; **ज्ञान**— ज्ञानको; **तपसा**— तपस्याले; **पूताः**— पवित्र भएको; **मत्भावम्**— मप्रतिको दिव्य प्रेम; **आगताः**— प्राप्त गरे।

**आसक्ति भय र क्रोधबाट मुक्त भएर, पूर्णतया ममा लीन भएर र मेरो शरणमा आएर भूत कालमा धेरै व्यक्तिहरू मेरो ज्ञानद्वारा पवित्र भए। यसरी तिनीहरू सबैले मेरो दिव्य प्रेम प्राप्त गरे।**

**तात्पर्य :** भौतिक विषयवासनामा अति आसक्त भएको व्यक्तिका लागि परमसत्यको स्वरूप बुझ्नु धेरै कठिन छ। यो कुरा पहिल्यै पनि भनिसकिएको

छ। सामान्यतया शारीरिक अवधारणा भएको बुद्धिमा आसक्त भएका व्यक्तिहरू भौतिकवादमा निकै तल्लीन हुन्छन्। तिनीहरूका लागि परमात्मा एउटा व्यक्ति पनि बन्न सक्नुहुन्छ भन्ने कुरा बुझ्नु असम्भव हुन्छ। त्यस्ता भौतिकवादी व्यक्तिहरूले यस प्रकारको नित्य सच्चिदानन्दमय रहने दिव्य शरीरको कल्पनासम्म पनि गर्न सक्दैनन्।

भौतिकवादी धारणाअनुसार शरीर नाशवान्, अज्ञानमय र पूर्णतया दुःखमय छ, त्यसैले सामान्य मानिसहरूलाई भगवान्को साकार रूपका विषयमा जानकारी दिँदा उनीहरू त्यस्तै नाशवान शरीरको कल्पना गरिरहेका हुन्छन्। यस्ता भौतिकवादी व्यक्तिहरूका निमित्त भौतिक जगत्को यो विराट स्वरूप नै परमतत्त्व हो। त्यसैले तिनीहरू परमेश्वरलाई निराकार मान्दछन्। भौतिकतामा अत्यन्त तल्लीन रहने हुनाले भौतिक पदार्थबाट मुक्ति पाइसकेपछि पनि जीवको अलग अस्तित्व रहन्छ भन्ने कुराबाट तिनीहरू डराउँछन्। उनीहरूलाई आध्यात्मिक जीवन पनि व्यक्तिगत र साकार हुन्छ भन्ने कुरा भने उनीहरू फेरि पनि व्यैयक्तिक बनिरहन डराउँछन्। फलस्वरूप उनीहरू स्वभावले निराकार शून्यमा विलय हुन चाहन्छन्। सामान्यतया उनीहरू जीवात्मालाई समुद्रमा उठ्ने पानीका फोकासँग तुलना गर्दछन्। यस्ता पानीका फोका फुट्नासाथ समुद्रमा विलय हुन्छन्, तिनको स्वतन्त्र अस्तित्व हुँदैन। स्वतन्त्र अस्तित्वरहित आध्यात्मिक जीवनको परमसिद्धि यही हो।

आध्यात्मिक अस्तित्त्वको पूर्ण ज्ञानरहित यो अवस्था नै जीवनको भयावह अवस्था हो। यसबाहेक आध्यात्मिक जीवनका बारेमा कत्ति पनि नबुझ्ने मानिसहरू पनि धेरै छन्। धेरै सिद्धान्तहरू र धेरै प्रकारका दार्शनिक चिन्तनका विसङ्गतिहरूबाट जब मानिस आत्तिन्छ अनि उसमा एक किसिमको अरुचि वा क्रोध उत्पन्न हुन्छ र मूर्खतावश परमकारण भन्ने कुनै वस्तु छैन र हरेक वस्तु अन्ततोगत्वा शून्यमय छ भन्ने निष्कर्षमा पुग्दछ। यस्ता मानिसहरूलाई जीवनको रूग्ण अवस्थामा रहेको मान्नु पर्दछ। केही मानिसहरू भौतिकतामा साह्रै आसक्त भएका कारणले आध्यात्मिक जीवनतर्फ कुनै ध्यानै दिँदैनन्।

केही मानिसहरू परमआध्यात्मिक कारणमा लीन हुन चाहन्छन् र केही व्यक्तिहरू निराशावश सबै प्रकारका आध्यात्मिक चिन्तनबाट क्रुद्ध भएर हरेक वस्तुमा अविश्वास गर्न थाल्दछन्। यी अन्तिम श्रेणीका मानिसहरूले कुनै न कुनै मादक पदार्थको सहारा लिन्छन्। यस्ता व्यक्तिमा हुने मतिभ्रमलाई पनि कहिलेकाहीं आध्यात्मिक दृष्टि मान्ने गरिन्छ। भौतिक जगत्प्रति हुने आसक्तिका तीन अवस्था हुन्छन्, ती हुन्— आध्यात्मिक जीवनको उपेक्षा, आध्यात्मिक

साकार स्वरूपको डर र जीवनमा आएको निराशाबाट उत्पन्न हुने शून्यवादको कल्पना। मानिसले यी तीनै अवस्थाबाट छुटकारा पाउनु पर्दछ। यी अवस्थाबाट छुटकारा पाउनका लागि प्रामाणिक गुरुको निर्देशनमा रहेर भगवान्‌को शरणमा पर्नु पर्दछ र भक्तिमय जीवनका नियम तथा विधिविधानहरूको पालन गर्नु पर्दछ। भक्तिमय जीवनको अन्तिम अवस्थालाई भाव वा दिव्य भगवत्प्रेम भनिन्छ। भक्ति-रसामृतसिन्धु (१.४.१५-१६) अनुसार भक्तिको विज्ञान यस प्रकारको छ—

*आदौ श्रद्धा ततः साधुसंगोऽथ भजनक्रिया*
*ततोऽनर्थनिवृत्तिः स्याततो निष्ठा रुचिस्ततः ।*
*अथासक्तिस्ततो भावस्ततः प्रेमाभ्युदञ्चति*
*साधकानामयं प्रेम्णः प्रादुर्भावे भवेत्क्रमः ॥*

"सुरुमा आत्मसाक्षात्कार गर्ने प्राथमिक इच्छा हुनु पर्दछ। यसबाट मानिसले आध्यात्मिक क्षेत्रमा माथि उठेका सन्तहरूको सङ्गत पाउने प्रयास गर्दछ, त्यसपछि आध्यात्मिक गुरुबाट दीक्षा ग्रहण गर्दछ र नवदीक्षित भक्त बनेर गुरुको आज्ञानुसार भक्तियोगको अभ्यास गर्न थाल्दछ। यसरी आध्यात्मिक गुरुका निर्देशनमा रहेर भक्तिसाधना गर्दागर्दै ऊ सधैँ भौतिक आसक्तिबाट मुक्त हुन्छ। उसको आत्मसाक्षात्कारमा स्थिरता आउँदछ अनि उसमा भगवान् श्रीकृष्णका बारेमा श्रवण गर्ने रुचि विकसित हुन्छ। यही रुचिबाट पछि गएर कृष्णभावनाप्रति आसक्ति उत्पन्न हुन्छ। यति भएपछि ऊ भावमा वा *भगवत्* प्रेमको पहिलो चरणमा परिपक्व हुन्छ। ईश्वरप्रेमलाई नै सही प्रेम भनिन्छ र यही नै जीवनको सर्वोच्च पूर्णताको अवस्था हो।" प्रेमका अवस्थामा मानिस भगवान्‌को दिव्य प्रेमाभक्तिमा निरन्तर डुबिरहन्छ। यसरी मन्द गति भएको भक्तिमार्गद्वारा प्रामाणिक गुरुको निर्देशनमा जीवनको सर्वोच्च अवस्था प्राप्त गर्न सकिन्छ र यही विधिद्वारा नै भौतिक आसक्ति, व्यैयक्तिक आध्यात्मिक स्वरूपको डर तथा शून्यवादी दर्शनबाट उत्पन्न हुने नैराश्यबाट पनि मुक्ति पाउन सकिन्छ। यति भएपछि मात्र मानिसले अन्त्यमा भगवद्धाम प्राप्त गर्न सक्दछ।

**ये यथा मां प्रपद्यन्ते तांस्तथैव भजाम्यहम् ।**
**मम वर्त्मानुवर्तन्ते मनुष्याः पार्थ सर्वशः ॥ ११ ॥**

**ये** — जो; **यथा** — जसरी; **माम्** — मेरा; **प्रपद्यन्ते** — शरण पर्दछन्; **ताम्** — तिनीहरूलाई; **तथा एव** — त्यसरी नै; **भजामि** — फल दिन्छु; **अहम्** — मैले; **मम** — मेरो; **वर्त्म** — बाटो; **अनुवर्तन्ते** — अनुसरण गर्दछन्; **मनुष्याः** — मानिसहरू; **पार्थ** — हे पृथापुत्र अर्जुन!; **सर्वशः** — सबै पक्षबाट।

**जो जुन भावले मेरो शरणमा पर्दछ, त्यसलाई त्यही अनुरूपको फल दिन्छु, हे पार्थ! हरेक व्यक्तिले सबै पक्षबाट मेरो मार्गको अनुगमन गर्दछन्।**

**तात्पर्य :** हरेक व्यक्तिले भिन्न भिन्न पक्षबाट भगवान् श्रीकृष्णलाई नै खोजिराखेका हुन्छन्। भगवान् श्रीकृष्णलाई आंशिक रूपमा उहाँको निर्विशेष ब्रह्मज्योतिका तेजमा र सूक्ष्म अणुका कणदेखि लिएर हरेक वस्तुमा निवास गर्ने सर्वव्यापी परमात्माका रूपमा अनुभव गर्न सकिन्छ, तापनि भगवान् श्रीकृष्णको पूर्ण साक्षात्कार त उहाँका शुद्ध भक्तहरूले नै गर्न सक्दछन्। फलस्वरूप भगवान् श्रीकृष्ण हरेक व्यक्तिका अनुभूतिका विषय हुनुहुन्छ। यस प्रकार हरेक व्यक्ति आ-आफ्नो इच्छानुसार उहाँलाई पाएर सन्तुष्ट हुन्छन्। दिव्य लोकमा पनि भगवान् श्रीकृष्णले आफ्ना भक्तहरूको चाहनाअनुसार उनीहरूसँग दिव्यभावको आदान-प्रदान गर्नु हुन्छ। कसैले भगवान् श्रीकृष्णलाई परमस्वामीका रूपमा पाउन चाहन्छन् र कसैले प्रिय सखाका रूपमा प्राप्त गर्न चाहन्छन्। त्यसै गरी कसैले उहाँलाई आफ्नो पुत्रका रूपमा देख्न चाहन्छन् त कसैले प्रेमीका रूपमा पाउन चाहन्छन्। भगवान् श्रीकृष्णले सबै भक्तलाई उनीहरूको प्रेमको प्रगाढताअनुसार समान रूपले फल दिनु हुन्छ। यस किसिमको विनिमयको अनुभव भौतिक जगत्मा पनि गर्न सकिन्छ, तर यस्तो विनिमय वा आदान-प्रदान भक्तहरूका प्रकारका आधारमा समान्भावले गरिन्छ। शुद्ध भक्तले यहाँ पनि र भगवद्धाममा पनि भगवान् श्रीकृष्णको निकटता पाउन सक्दछन् र उहाँको साकार सेवा-अर्चना गर्न सक्दछन्। यसरी उनीहरूले भगवान्प्रति गरिने प्रेमाभक्तिको दिव्य अनुभव प्राप्त गर्दछन्। जीवात्माको अस्तित्व नै मेटाएर आध्यात्मिक आत्माघात गर्न चाहने निराकार निर्विशेषवादीहरूलाई पनि भगवान् श्रीकृष्णले आफ्नो तेजमा विलीन गराएर सहायता गर्नु हुन्छ। यी निराकारवादीहरू भगवान्को सत् चित् र आनन्दमय स्वरूपलाई स्वीकार गर्दैनन्, त्यसै हुनाले यिनीहरू आफ्नो व्यक्तित्वलाई समाप्त गरेर भगवान्को दिव्य सगुण भक्तिको आनन्द भोग्न सक्दैनन्। तीमध्ये केही, जो निराकार सत्तामा दृढतापूर्वक अवस्थित भइसकेका छैनन् तिनीहरू केही कर्म गर्ने आफ्नो सुषुप्त इच्छालाई प्रदर्शित गर्नका लागि यस भौतिक जगत्मा फर्किएर आउँदछन्। तिनीहरू आध्यात्मिक जगत्मा प्रवेश गर्न पाउँदैनन् तर फेरि भौतिक जगत्मा फर्केर कर्म गर्ने अवसर तिनीहरूलाई दिइन्छ। भगवान् स्वयम् नै यज्ञेश्वर भएर सकाम कर्म गर्नेहरूलाई कामअनुसार उनीहरूले चाहेअनुसारको फल दिनु हुन्छ। योगशक्तिको खोजीमा लागेका योगीहरूलाई उहाँ योगशक्ति प्रदान गर्नु हुन्छ। अर्को शब्दमा भन्नुपर्दा, प्रत्येक व्यक्तिका कर्मको सफलता भगवान्को कृपामा निर्भर हुन्छ। सबै किसिमका आध्यात्मिक प्रक्रियाहरू एउटै मार्गमा पाइने सफलताका विभिन्न श्रेणी वा स्तर हुन्। अतः कृष्णभावनाको सर्वोच्च पूर्णतामा

नपुगेसम्म मानिसका सारा प्रयासहरू अपूर्ण नै हुन्छन्। *श्रीमद्भागवत* (२.३.१०) मा भनिएको छ—

*अकामः सर्वकामो वा मोक्षकाम उदारधीः ।*
*तीव्रेण भक्तियोगेन यजेत पुरुषं परम् ॥*

कुनै किसिमको कामना नभएकाले पनि, सबै किसिमका कर्मफलको चाहना गर्नेले पनि र मोक्षको कामना राख्नेले पनि सिद्धि पाउनका लागि आफ्नो सम्पूर्ण शक्ति र सामर्थ्य लगाएर भगवान्को सेवा गर्नु पर्दछ, जसको चरम सीमा कृष्णभावना हो।

**काङ्क्षन्तः कर्मणां सिद्धिं यजन्त इह देवताः ।**
**क्षिप्रं हि मानुषे लोके सिद्धिर्भवति कर्मजा ॥ १२ ॥**

**काङ्क्षन्तः** — चाहना गर्दै; **कर्मणाम्** — सकाम कर्महरूको; **सिद्धिम्** — पूर्णता; **यजन्त** — यज्ञद्वारा पूजा गर्दछन्; **इह** — यो भौतिक संसारमा; **देवताः** — देवताहरू; **क्षिप्रम्** — अति छिटो; **हि** — निश्चय नै; **मानुषे** — मानव समाजमा; **लोके** — यस लोकमा; **सिद्धिः** — सफलता; **भवति** — आउँछ; **कर्मजा** — सकाम कर्मद्वारा।

**यस संसारमा सकाम कर्मको फल वा सिद्धि चाहनेहरूले देवताहरूको पूजा गर्दछन्। अवश्य नै यो संसारमा मानिसलाई उसका सकाम कर्मको फल तुरुन्तै प्राप्त हुन्छ।**

**तात्पर्य :** यस भौतिक जगत्का देवताहरूका सम्बन्धमा एउटा ठुलो भ्रमरूपी धारणा छ। आफूलाई ठुलो विद्वान् देखाउन खोज्ने अल्पज्ञ मानिसहरू यी देवताहरूलाई परमेश्वरको विविध रूप मान्दछन्। वास्तवमा यी देवताहरू परमेश्वरका विभिन्न रूप होइनन्। यी त परमेश्वरका विभिन्न अंशमात्र हुन्। ईश्वर एउटै हुनुहुन्छ तर ईश्वरका अंशहरू धेरै छन्। वेदमा भनिएको छ— **नित्यो नित्यानाम्।** परमेश्वर एउटै हुनुहुन्छ **कृष्ण-ईश्वरः परमः कृष्णः।** देवताहरू यो भौतिक जगत्को व्यवस्था गर्नका लागि केही शक्ति दिएर पठाइएका उहाँका प्रतिनिधिमात्र हुन्। यी देवताहरू जीवात्मा नै हुन् (**नित्यानाम्**) यिनीहरूलाई विभिन्न मात्रामा भौतिक शक्ति प्रदान गरिएको छ। यिनीहरू कहिल्यै पनि परमेश्वर अर्थात् नारायण, विष्णु वा कृष्णजस्ता हुन सक्दैनन्। जसले देवताहरू र ईश्वरलाई एउटै स्तरका हुन् भन्ने सोच्दछ त्यो नास्तिक वा पाखण्डी हो। ब्रह्माजी र शिवजीजस्ता ठुला ठुला देवताहरू पनि परमेश्वरका बराबरीमा पुग्न सक्नु हुन्छ। वास्तवमा शिव तथा ब्रह्माजीजस्ता

देवताहरूले पनि भगवान्‌को पूजा-आराधना गर्नहुन्छ— **शिवविरिञ्चिनुतम्।** यति हुँदाहुँदै पनि अचम्मको कुरा के छ भने, मूर्ख मानिसहरू धेरै मानव नेताहरूलाई ईश्वरको अवतार मानेर पूजा गर्दछन्। यहाँ **इह देवता** भन्ने शब्द यस भौतिक जगत्‌का शक्तिशाली मानिस वा देवताहरू बुझाउनका लागि प्रयोग भएको छ। भगवान् नारायण, भगवान् विष्णु वा भगवान् श्रीकृष्णलाई यस संसारका संसारी जीव मान्न सकिँदैन। उहाँहरू यो जगत्‌सँग सम्बन्धित हुनु हुन्न। भगवान् भौतिक सृष्टिभन्दा पर तथा दिव्य हुनुहुन्छ। निर्विशेषवादीहरूका आदिगुरु श्रीपाद शङ्कराचार्यले पनि भगवान् नारायण वा भगवान् श्रीकृष्ण यो भौतिक सृष्टिभन्दा पर हुनुहुन्छ भन्ने कुराको उल्लेख गर्नुभएको छ तैपनि तत्काल फल चाहने मूर्खहरू (**हृतज्ञान**) देवताहरूको पूजा गर्दछन्। उनीहरूलाई फल प्राप्त हुन्छ तर यस किसिमको प्रतिफल क्षणिक हुन्छ र यस्तो फल अल्पज्ञानी मानिसहरूका लागि मात्र हुन्छ भन्ने कुरा तिनीहरूलाई थाहा हुँदैन। बुद्धिमान् व्यक्ति कृष्णभावनामा लागिरहेको हुन्छ। उसले तत्काल क्षणिक लाभ पाउने उद्देश्यले कुनै तुच्छ देवताहरूको उपासना गर्दैन। उसलाई त्यसो गर्नु आवश्यक पनि छैन। यस संसारका देवता र तिनका पूजा गर्ने व्यक्तिहरू यो संसार नष्ट हुँदा सँगै नष्ट हुन्छन्। देवताहरूबाट पाइने वरदान पनि भौतिक र क्षणिक हुन्छन्। यो भौतिक जगत्, देवता र तिनका पूजा गर्ने सहित सबै धर्तीवासी विराट ब्रह्माण्ड सागरका पानीका फोकाजस्ता हुन्। यस संसारका मानिसहरू पागलजस्ता भएर क्षणिक वस्तुका पछाडि लागेका छन्। सम्पत्ति, परिवार र अन्य भोग सामग्रीहरूप्रति उनीहरूको लगाव देखिन्छ। यस्तै क्षणिक वस्तुहरू प्राप्त गर्ने उद्देश्यले उनीहरूले मानव समाजका शक्तिशाली व्यक्तिहरूलाई र देवताहरूलाई पूजा गर्दछन्। यदि कुनै मानिसले कुनै राजनीतिक नेताको सेवा गरेर सरकारमा पुगेर मन्त्री पद प्राप्त गर्न सफल भए उसले आफूलाई ठुलो वरदान प्राप्त भएको ठान्दछ। त्यसैले मानिसहरू केही क्षणिक लाभ प्राप्त गर्नका लागि तथाकथित नेताहरूलाई साष्टाङ्ग दण्डवत् प्रणाम गर्दछन् र तिनले यस्ता वस्तुहरू पाउँदछन् पनि। यस किसिमका मूर्ख मानिसहरू सांसारिक दुःखको स्थायी समाधानका लागि कृष्णभावनामा आउन चाहँदैनन्। तिनीहरू सबै इन्द्रियभोगको पछाडि आसक्त भइरहन्छन् र अलिकति सुख-सुविधा पाउनका लागि केही शक्तिशाली जीवको उपासना गर्दछन् जसलाई देवता भनिन्छ। अतः धेरै कम व्यक्तिहरू नै कृष्ण-भावनामृतमा रुचि राख्दछन् र धेरैजसो मानिसहरू भौतिक विषयभोगमा रमाउँछन् अनि यही भौतिक भोग प्राप्तिका लागि उनीहरू शक्तिशाली जीवको पूजा गर्दछन्। यही कुरा यस श्लोकमा सङ्केत गरिएको छ।

**चातुर्वर्ण्यं मया सृष्टं गुणकर्मविभागशः ।**
**तस्य कर्तारमपि मां विद्ध्यकर्तारमव्ययम् ॥ १३ ॥**

**चातुर्वर्ण्यम्** — मानवसमाजका चार वर्ग; **मया** — मद्वारा; **सृष्टम्** — सृष्टि गरियो; **गुण** — गुण र; **कर्म** — कर्मको; **विभागशः** — विभाजन अनुरूपमा; **तस्य** — त्यसको; **कर्तारम्** — कर्ता; **अपि** — पनि; **माम्** — मलाई; **विद्धि** — जान; **अकर्तारम्** — अकर्ता; **अव्ययम्** — अविनाशी।

**प्रकृतिका तीन गुण र ती गुणसँग सम्बन्धित कर्मअनुसार मैले मानव समाजमा चार वर्गहरूको सृष्टि गरेँ। म यी सबैको कर्ता हूँ तर पनि तिमीले मलाई अविनाशी अकर्ता नै ठान।**

**तात्पर्य :** भगवान् प्रत्येक वस्तुका रचयिता हुनुहुन्छ, हरेक वस्तुको जन्म उहाँबाट नै भएको हो। उहाँद्वारा नै सबै वस्तु अडिएका छन् र प्रलय भएपछि फेरि हरेक वस्तु उहाँमा गएर मिल्दछन्। अतः उहाँ समाजव्यवस्था वा वर्णाश्रम व्यवस्थाका चारै वर्गका स्रष्टा हुनुहुन्छ। यी चार वर्गमा सर्वप्रथम बुद्धिमान् मानिसहरूको वर्ग आउँदछ। सतोगुणमा अवस्थित भएको हुनाले मानिसहरूको यो वर्गलाई ब्राह्मण वर्ग भनिन्छ। दोस्रोमा प्रशासक वर्ग आउँदछन्, यिनलाई रजोगुणी हुनाले क्षत्रिय भनिन्छ। व्यापारिक वर्गलाई वैश्य भनिन्छ। यिनीहरूमा रजोगुण र तमोगुणको मिश्रण पाइन्छ र चौथो श्रमिक वर्ग हो जसलाई तमोगुण प्रधान हुनाले शूद्र भनिन्छ। मानवसमाजका यी चार वर्गहरूको सृष्टि गरेर पनि भगवान् श्रीकृष्ण आफू स्वयम् कुनै वर्गभित्र पर्नु हुन्न। उहाँ बद्ध जीव नभएको हुनाले मानवसमाजको कुनै अङ्ग बन्नु हुन्न। मानवसमाज पनि हुनत पशुहरूको समाजजस्तो हो तर पनि मानिसलाई पशुसमाजबाट माथि उठाउनका लागि र तिनमा क्रमिक रूपले कृष्णभावनाको विकास गराउने उद्देश्यले भगवान्‌ले उपर्युक्त वर्णाश्रम व्यवस्थाको रचना गर्नुभएको हो। कुनै व्यक्तिविशेषले कुनै कामप्रति देखाउने प्रवृत्ति प्रकृतिका गुणहरूद्वारा उसले आर्जित गरेको स्वभावमा निर्भर हुन्छ। प्राकृतिक गुणअनुसार जीवात्माका जीवनमा देखा पर्ने लक्षणहरूको वर्णन यसै ग्रन्थको अठारौँ अध्यायमा गरिएको छ। तर कृष्णभावनामा लागेको व्यक्ति ब्राह्मणहरूभन्दा पनि माथि हुन्छ। हुनत गुणअनुसार ब्राह्मणमा ब्रह्म वा परमात्मा सम्बन्धी ज्ञान हुनुपर्ने हो तैपनि तिनीहरूमध्ये धेरैजसो भगवान् श्रीकृष्णको निराकार ब्रह्मस्वरूपसम्म मात्र पुग्दछन् तर जो व्यक्ति ब्राह्मणको सीमित ज्ञानको सीमालाई पार गरेर भगवान् श्रीकृष्णको ज्ञानसम्म पुग्दछ त्यो व्यक्ति कृष्णभावनाभावित हुन्छ, अर्थात् वैष्णव बन्दछ। कृष्णभावनामा राम, नृसिंह, बराह आदि भगवान् श्रीकृष्णका विभिन्न

अंशविस्तारहरूको संयुक्त ज्ञान समाहित छ। त्यसैले जसरी भगवान् श्रीकृष्ण मानवसमाजका चार वर्गहरूभन्दा पर हुनुहुन्छ त्यसै गरी कृष्णभावनाभावित व्यक्ति पनि यी चार प्रकारका वर्ण व्यवस्थाभन्दा पर हुन्छ। यसलाई हामी जातीय विभाजन भनौँ या राष्ट्रिय भनौ या साम्प्रदायिक।

**न मां कर्माणि लिम्पन्ति न मे कर्मफले स्पृहा ।**
**इति मां योऽभिजानाति कर्मभिर्न स बध्यते ॥ १४ ॥**

**न** — होइन; **माम्** — मलाई; **कर्माणि** — सबै किसिमका कर्मले; **लिम्पन्ति** — प्रभावित पार्दछन्; **न** — नत; **मे** — मेरो; **कर्मफले** — सकाम कर्ममा; **स्पृहा** — अभिलाषा; **इति** — यस प्रकार; **माम्** — मलाई; **यः** — जसले; **अभिजानाति** — जान्दछ; **कर्मभिः** — यस्ता कर्मफलबाट; **न** — होइन; **स** — त्यो; **बध्यते** — बाँधिन्छ।

**मलाई प्रभावित पार्ने कुनै कर्म छैन र ममा कुनै कर्मफलको चाहना पनि छैन। जसले मसँग सम्बन्धित यो सत्य कुरालाई बुझ्दछ त्यो व्यक्ति सकाम कर्मफलको बन्धनमा बाँधिदैन।**

**तात्पर्य :** जसरी यो भौतिक संसारमा पनि राजाले गल्ती गर्न सक्दैन भन्ने संबैधानिक नियम छ वा राजा राज्यको नियमभन्दा माथि हुन्छ भन्ने धारणा छ, त्यसै गरी भौतिक जगत्का स्रष्टा भएर पनि भगवान् भौतिक क्रियाकलापबाट प्रभावित हुनु हुन्न। उहाँ सृष्टि गर्नु हुन्छ र स्वयम् सृष्टिभन्दा अलग रहनु हुन्छ। तर, जीवात्मा भौतिक क्रियाकलापका सकाम कर्मफलका चक्रमा अल्झिन्छ, किनभने तिनीहरूमा भौतिक साधन र स्रोतहरूमाथि अधिकार जमाउने प्रवृत्ति रहेको हुन्छ। कुनै संस्थाको स्वामी त्यस संस्थाका कर्मचारीहरूका असल वा खराब क्रियाकलापप्रति उत्तरदायी हुँदैन। कर्मचारीहरू नै ती राम्रा वा नराम्रा कामप्रति जिम्मेदार हुन्छन्। जीवात्माहरू आ-आफ्ना इन्द्रियतृप्तिका कार्यमा लागिरहन्छन् तर ती सबै क्रियाकलापको अनुमति भगवान्द्वारा दिइएको हुँदैन। इन्द्रियतृप्तिको उन्नतिका लागि मानिसहरू सांसारिक कार्यमा लागेका हुन्छन्। मृत्युपछि स्वर्गीय सुख पाउने इच्छा उनीहरूको हुन्छ। भगवान् स्वयम्मा परिपूर्ण हुनुभएकाले स्वर्गीय सुखप्रति उहाँको कुनै आकर्षण छैन। स्वर्गका देवताहरू भगवान्द्वारा नियुक्त सेवक मात्र हुन्। स्वामीले सेवकले जस्तै तल्लो स्तरको सुखको इच्छा राख्दैन। स्वामी वा भगवान् भौतिक क्रिया-प्रतिक्रियाबाट अलगै रहनु हुन्छ। उदाहरणका लागि पृथ्वीमा उम्रिने विभिन्न प्रकारका वनस्पतिहरूप्रति वर्षा उत्तरदायी हुँदैन यद्यपि वर्षा नभई कुनै पनि वनस्पति उम्रिन सम्भव छैन। वैदिक स्मृतिमा यो तथ्यको पुष्टि यसरी गरिएको छ—

*निमित्तमात्रमेवासौ सृज्यानां सर्गकर्मणि ।*
*प्रधान कारणीभूता यतो वै सृज्यशक्तय: ॥*

भौतिक सृष्टिका एकमात्र परमकारण भगवान् हुनुहुन्छ जसद्वारा यो विराट ब्रह्माण्ड दृश्य रूपमा प्रकट भएको छ। प्रकृति त यसको निमित्तकारण मात्र हो। प्राणीहरूका विभिन्न जाति छन्, तिनमा कोही देवता छन्, कोही मानिस छन् र कोही तल्ला स्तरका पशुहरू छन्। ती सबै आफ्ना पूर्वजन्मका राम्रा वा नराम्रा कर्महरूको फल भोग्न बाध्य छन्। भगवान्ले यिनीहरूलाई आफ्नो काम गर्ने अनुकूल सुविधा प्रदान गर्नु हुन्छ र प्रकृतिको नियमअनुसारको गुण पनि सुलभ गराइदिनु हुन्छ तर भगवान् जीवात्माका पूर्वजन्मका तथा यस जन्मका कार्यहरूप्रति उत्तरदायी हुनु हुन्न। यस कुराको पुष्टि गर्दै वेदान्त सूत्रमा भनिएको छ—**"वैषम्यनैर्घृण्ये न सापेक्षत्वात्"** अर्थात, भगवान् कुनै पनि जीवात्माप्रति पक्षपात गर्नु हुन्न। जीवात्मा आफ्नो कर्मप्रति स्वयम् उत्तरदायी छ। भगवान्ले उसलाई आफ्नो प्रकृति वा बहिरङ्गा शक्तिका माध्यमले कर्म गर्ने सुविधा मात्र प्रदान गर्नु हुन्छ। जसले कर्मका नियमको यो सूक्ष्मतालाई राम्रोसँग बुझेको छ त्यो व्यक्ति कर्मको फलबाट कहिल्यै प्रभावित हुँदैन। अर्को शब्दमा भन्दा, जो व्यक्ति भगवान्का दिव्य स्वभावबाट परिचित हुन्छ ऊ कृष्णभावनामृतको अनुभवी बन्दछ। त्यस व्यक्तिमाथि कर्मको नियम कहिल्यै लागू हुँदैन। जसले भगवान्को दिव्य स्वभावलाई बुझेको छैन र भगवान्का क्रियाकलापहरू पनि सामान्य मानिसहरूका जस्तै कर्मफलका लागि हुन्छन् भन्ने ठान्दछ त्यो व्यक्ति निश्चय नै कर्मफलको बन्धनमा पर्दछ तर जसले परमसत्यलाई जानेको छ त्यो व्यक्ति कृष्णभावनामा स्थिर रहेको मुक्त जीव हो।

**एवं ज्ञात्वा कृतं कर्म पूर्वैरपि मुमुक्षुभि: ।**
**कुरु कर्मैव तस्मात्त्वं पूर्वै: पूर्वतरं कृतम् ॥ १५ ॥**

**एवम्**— यसरी; **ज्ञात्वा**— राम्ररी जानेर; **कृतम्**— गरिएको; **कर्म**— काम; **पूर्वै:**— पूर्ववर्ती; **अपि**— निश्चय नै; **मुमुक्षुभि:**— मोक्ष पाएकाहरूले; **कुरु**— गर; **कर्म**— स्वधर्म; **एव**— निश्चय नै; **तस्मात्**— त्यसै कारणले; **त्वम्**— तिमीले; **पूर्वै:**— पूर्ववर्तीहरूद्वारा; **पूर्वतरम्**— प्राचीन समयदेखि; **कृतम्**— सम्पन्न गरिएको।

**प्राचीन कालमा सम्पूर्ण मुक्तात्माहरूले मेरो दिव्य प्रकृतिलाई जानेर कर्म गरेका थिए। तिमीले पनि तिनीहरूका चरणचिन्हको अनुसरण गर्दै आफ्नो कर्तव्य पालन गर।**

**तात्पर्य :** मानिसहरूका दुई प्रकार वर्ग छन्। केही मानिस यस्ता छन् जसको हृदय पूर्णतया दूषित भौतिक विषयले भरिएको हुन्छ र केही भौतिक रूपले स्वतन्त्र हुन्छन्। कृष्णभावना ती दुवै प्रकारका मानिसहरूका निमित्त समान रूपले लाभदायक छ। जसको हृदय दूषित कुराले भरिएको छ, तिनले भक्ति मार्गका विधि-नियमहरूको पालन गर्दै विस्तारै हृदय शुद्धिका लागि कृष्णभावनालाई अँगाल्न सक्दछन् र जसको हृदय त्यस्ता अपवित्रताहरूबाट पहिल्यै शुद्ध भइसकेको छ, तिनीहरूले पनि यही कृष्णभावनामा रहेर काम गर्न सक्दछन्। यसो भएमा उनीहरूको आदर्श क्रियाकलापलाई अनुसरण गरेर अरू मानिसहरू पनि लाभान्वित हुन्छन्। कहिलेकाहीँ मूर्ख मानिसहरू वा कृष्णभावनामा रहेका नवसिकारू व्यक्तिहरू कृष्णभावनाको पूर्ण ज्ञान प्राप्त नगरी त्यसबाट पर जान खोज्छन् तर भगवान् श्रीकृष्णले युद्धक्षेत्रबाट युद्ध नगरी पछि हट्ने अर्जुनको इच्छालाई स्वीकृति दिनुभएन। मानिसले कसरी काम गर्नु पर्दछ भन्ने कुरा मात्र जान्नु आवश्यक छ। स्वयम् कृष्णभावनाका क्रियाकलापहरूबाट टाढा रहने तर आफूलाई कृष्णभावनायुक्त देखाउन चाहने प्रवृत्ति राम्रो होइन। यस्तो प्रवृत्तिभन्दा वास्तवमा भगवान् श्रीकृष्णको प्रसन्नताका लागि कार्यक्षेत्रमा संलग्न रहने प्रवृत्ति बढी महत्त्वको हुन्छ। यहाँ अर्जुनलाई कृष्णभावनामा रहेर सूर्यदेव विवस्वानजस्ता भगवान्का पूर्व शिष्यहरूको चरणचिन्हलाई अनुसरण गर्ने सल्लाह दिइएको छ। विवस्वान्का बारेमा उल्लेख पहिल्यै गरिसकिएको छ। भगवान्लाई आफूले पूर्वजन्ममा गर्नु भएका सबै क्रियाकलापहरू थाहा छ र पूर्वजन्ममा कसले कृष्णभावनाभावित भएर कार्य गरेको थियो त्यो पनि उहाँलाई थाहा छ। त्यसैले भगवान्ले यहाँ सूर्यदेवले गरेका कामको उल्लेख गर्नुभएको हो। सूर्यदेवले केही लाख वर्षपूर्व भगवान्बाट यो ज्ञान सिकेका थिए। यहाँ भगवान् श्रीकृष्णले पूर्ववर्ती मुक्तपुरुषका रूपमा आफ्ना सबै त्यस्ता शिष्यहरूको उल्लेख गर्नुभएको छ जो जीवनभर भगवान्ले विभाजित गरिदिनुभएका कर्महरू सम्पादन गर्नमा लागेका थिए।

**किं कर्म किमकर्मेति कवयोऽप्यत्र मोहिताः ।**
**तत्ते कर्म प्रवक्ष्यामि यज्ज्ञात्वा मोक्ष्यसेऽशुभात् ॥ १६ ॥**

**किम्** — के हो ?; **कर्म** — कर्म; **किम्** — के हो ?; **अकर्म** — अकर्म; **इति** — यस प्रकार; **कवयः** — बुद्धिमान् व्यक्तिहरू; **अपि** — पनि; **अत्र** — यस विषयमा; **मोहिताः** — अल्मलिन्छन्; **तत्** — त्यो; **ते** — तिमीलाई; **कर्म** — कर्म; **प्रवक्ष्यामि** — भन्छु; **यत्** — जसलाई; **ज्ञात्वा** — जानेर; **मोक्ष्यसे** — मुक्त हुनेछौ; **अशुभात्** — अशुभ वा दुर्भाग्यबाट।

**कर्म के हो र अकर्म के हो भन्ने कुरा छुट्याउने काममा विद्वान्‌हरू पनि अल्मलिने गर्दछन्। त्यसैले म तिमीलाई कर्म के हो भन्ने कुरा भन्दछु। यो कुरा जानेमा तिमी सधैँ अशुभ वा दुर्भाग्यबाट मुक्त हुनेछौ।**

**तात्पर्य :** कृष्णभावनामा रहेर गरिने कर्म पूर्ववर्ती प्रामाणिक भक्तहरूको आदर्श अनुरूप हुनु पर्दछ। यसको चर्चा पन्ध्रौँ श्लोकमा गरिसकिएको छ। यस्ता कर्महरू स्वतन्त्र रूपले किन गर्न हुँदैन भन्ने विषयको चर्चा यस श्लोकमा गरिएको छ। कृष्णभावनामा रहेर कर्म गर्नका लागि मानिसले गुरु-शिष्यपरम्परामा आएका प्रामाणिक आचार्यहरूको नेतृत्वको अनुसरण गर्नु पर्दछ। यसको व्याख्या यस अध्यायको सुरुमा गरिएको छ। कृष्णभावनामा रहेर कर्म गर्ने निर्देशन पहिले सूर्यदेवलाई दिइएको थियो। त्यो उपदेश सूर्यले मनुलाई दिए। मनुले फेरि आफ्ना छोरा इक्ष्वाकुलाई दिए। त्यस समयदेखि नै त्यो परम्परा पृथ्वीमा चल्दैआएको हो। त्यसैले मानिसले त्यही शिष्यपरम्परा अनुसार पूर्ववर्ती आचार्यहरूका पदचिन्हहरूको अनुसरण गर्नु पर्दछ। अन्यथा अत्यन्त बुद्धिमान् व्यक्ति पनि कृष्णभावनामा रहेर गरिने कर्मका विषयमा भ्रमित हुन सक्दछ। त्यसकारणले भगवान् आफैँले अर्जुनलाई कृष्णभावनाको उपदेश दिने निश्चय गर्नुभएको हो। अर्जुनलाई भगवान् स्वयम्‌ले शिक्षा दिनुभएको हुनाले, अर्जुनका चरणचिन्हको अनुसरण गर्ने व्यक्ति कहिल्यै भ्रमित हुँदैन।

भनिएको छ, अधुरो अनुभवजन्य ज्ञानले धर्ममार्गको निर्णय गर्न सकिँदैन। वास्तवमा धर्मको प्रतिपादन भगवान् स्वयम्‌ले गर्नुभएको हो। भनिएको पनि छ **धर्मंस्तु साक्षद् भगवत्प्रणीतम्** (भागवत् ६.३.१९) अपूर्ण चिन्तनद्वारा कसैले पनि धार्मिक सिद्धान्तको निर्माण गर्न सक्दैन। मानिसले ब्रह्मा, शिव, नारद, मनु, कुमारहरू, कपिल, प्रल्हाद, भीष्म, शुकदेव गोस्वामी, यमराज, जनक, बलि महाराज जस्ता महान् आधिकारिक भक्तहरूका चरणचिन्हको अनुसरण गर्नु पर्दछ। मानसिक चिन्तनद्वारा मात्र मानिसले धर्म के हो र आत्मसाक्षात्कार के हो भन्ने कुरा निश्चय गर्न सक्दैन। त्यसै कारणले आफ्ना भक्तहरूप्रतिको अहैतुकी कृपाले गर्दा नै भगवान्‌ले अर्जुनलाई सीधै कर्म के हो र अकर्म के हो भन्ने कुराको व्याख्या गर्नुभयो। कृष्णभावनामा रहेर गरिएका कर्मद्वारा मात्रै मानिस सांसारिक बाधा-बन्धनबाट मुक्त हुन सक्दछ।

**कर्मणो ह्यपि बोद्धव्यं बोद्धव्यं च विकर्मणः ।**
**अकर्मणश्च बोद्धव्यं गहना कर्मणो गतिः ॥ १७॥**

**कर्मणः** — कर्मलाई; **हि** — निश्चय नै; **अपि** — पनि; **बोद्धव्यम्** — बुझ्नु पर्दछ; **बोद्धव्यम्** — बुझ्नु पर्दछ; **च** — पनि; **विकर्मणः** — निषेध गरिएको

कर्मलाई; **अकर्मणः** — अकर्मलाई; **च** — पनि; **बोद्धव्यम्** — बुझ्नु पर्दछ; **गहना** — अति कठिन छ; **कर्मणः** — कर्मको; **गतिः** — प्रवेश।

**कर्मको जटिलतालाई बुझ्नु अति कठिन छ, त्यसैले मानिसले कर्म के हो, निषेध गरिएका कर्म के हो र अकर्म के हो भन्ने कुरा राम्रोसँग बुझ्नु पर्दछ।**

**तात्पर्य :** भवबन्धनबाट साँच्चै नै मुक्त हुनचाहने मानिसले कर्म, अकर्म र विकर्मका बीचको भेद बुझ्न पर्दछ। मानिसले आफूलाई यस्ता कर्म अकर्म र विकर्मको विश्लेषण गर्ने कार्यमा लगाउनै पर्दछ किनभने यो अत्यन्त कठिन विषयवस्तु हो। कृष्णभावनालाई र गुणअनुसार कर्मलाई बुझ्नका लागि मानिसले भगवान्सँग आफ्नो के सम्बन्ध छ त्यो बुझ्नु पर्दछ। यो विषयलाई जसले राम्रोसँग बुझेको छ त्यसले सम्पूर्ण जीवात्मा भगवान्का अन्तरङ्ग दास हुन् र अन्त्यमा गएर सबैले कृष्णभावनाभावित भएर कर्म गर्नु पर्दछ भन्ने रहस्य जानेको हुन्छ। सम्पूर्ण *भगवद्गीताको* निष्कर्ष यतैतिर निर्देशित छ। कृष्णभावना बाहेकका सम्पूर्ण निष्कर्ष तथा परिणाम विकर्म हुन् अर्थात्, निषिद्ध कर्म हुन्। यी सबै कुरालाई बुझ्न कृष्णभावनाभावित आधिकारिक व्यक्तिहरूको सङ्गत गर्नु पर्दछ र तिनीहरूबाट यसको रहस्य बुझ्नु पर्दछ। यस्तो बुझाइ स्वयम् भगवान्बाट सिकेजस्तो हुन्छ। अन्यथा यस विषयमा अत्यन्त बुद्धिमान् व्यक्ति पनि भ्रमित हुन्छ।

**कर्मण्यकर्म यः पश्येदकर्मणि च कर्म यः।**
**स बुद्धिमान्मनुष्येषु स युक्तः कृत्स्नकर्मकृत् ॥ १८॥**

**कर्मणि** — कर्ममा; **अकर्म** — अकर्म; **यः** — जसले; **पश्येत्** — देख्दछ; **अकर्मणि** — अकर्ममा; **च** — पनि; **कर्म** — सकाम कर्म; **यः** — जो; **सः** — त्यो; **बुद्धिमान्** — बुद्धिमान् हो; **मनुष्येषु** — मनुष्यहरूमा; **स** — त्यो; **युक्तः** — दिव्य स्थितिमा पुगेको; **कृत्स्नकर्मकृत** — सबै काममा संलग्न रहेर पनि।

**जसले कर्ममा अकर्म र अकर्ममा कर्म देख्दछ त्यो व्यक्ति सबै मानिसहरूभन्दा बुद्धिमान् हो र त्यस्तो व्यक्ति सबै किसिमका कर्ममा संलग्न भएर पनि दिव्य अवस्थामा रहेको हुन्छ।**

**तात्पर्य :** कृष्णभावनाभावित भएर काम गर्ने व्यक्ति कर्मको बन्धनबाट स्वतः मुक्त हुन्छ। उसले आफ्ना सबै कर्महरू भगवान् श्रीकृष्णका लागि गर्दछ त्यसैले ऊ कुनै पनि कर्मका प्रभावले सुखी वा दुःखी हुँदैन। फलस्वरूप भगवान् श्रीकृष्णका लागि सबै काममा संलग्न रहँदारहँदै पनि ऊ मानवसमाजमा बुद्धिमान्

व्यक्ति ठहरिन्छ। अकर्मको अर्थ कर्मफलरहित हुनु हो। निराकारवादीहरू आत्मसाक्षात्कारका मार्गमा कर्मफल बाधक हुन्छ भन्ने ठानेर डरले कर्म गर्नै छोड्दछन् तर साकारवादीहरू आफूलाई भगवान्को नित्य दास ठान्दछन् र आफ्नो स्वरूपसँग राम्ररी परिचित हुन्छन्। त्यसैले उनीहरू आफूलाई सधैँ कृष्णभावनाका कार्यमा संलग्न राख्दछन्। कृष्णभावनामा सम्पूर्ण काम भगवान् श्रीकृष्णको लागि गरिन्छ। यसरी कृष्णसेवा गरिरहँदा उसलाई दिव्य सुखको अनुभव भइरहन्छ। कृष्णसेवाको विधिमा लागेका व्यक्तिहरूलाई व्यक्तिगत इन्द्रियतृप्तिको चाहना नै हुँदैन। भगवान् श्रीकृष्णप्रतिको नित्य दास्यभावले उसलाई सबै प्रकारका कर्मफलबाट मुक्त गराइदिन्छ।

**यस्य सर्वे समारम्भाः कामसंकल्पवर्जिताः ।**
**ज्ञानाग्निदग्धकर्माणं तमाहुः पण्डितं बुधाः ॥ १९ ॥**

**यस्य** — जसको; **सर्वे** — सबै प्रकारका; **समारम्भाः** — प्रयत्नहरू; **काम** — इन्द्रियतृप्ति गर्ने इच्छामा आधारित; **सङ्कल्प** — निश्चय; **वर्जिताः** — रहित छ; **ज्ञानाग्नि** — पूर्ण ज्ञानरूपी अग्निद्वारा; **दग्ध** — डढेका छन्; **कर्माणम्** — जसका कर्महरू; **तम्** — त्यसलाई; **आहुः** — भन्दछन्; **पण्डितम्** — पण्डित (बुद्धिमान्); **बुधाः** — ज्ञानीहरू।

**जसको हरेक प्रयास ( कर्म ) इन्द्रियतृप्तिको इच्छाले रहित हुन्छ त्यसलाई पूर्णज्ञानी मानिन्छ। ऋषिहरू त्यस्ता कर्तालाई पूर्णज्ञानरूपी अग्निद्वारा कर्मफल भस्म गराउने पण्डित भन्दछन्।**

**तात्पर्य :** पूर्णज्ञानी व्यक्तिले मात्र कृष्णभावनाभावित व्यक्तिका क्रियाकलापलाई बुझ्न सक्दछ। यस्ता व्यक्तिमा इन्द्रियतृप्ति गर्ने प्रवृत्ति हुँदैन। उनीहरूलाई आफ्नो स्वरूपको पूर्ण ज्ञान हुन्छ। उनीहरूले आफूलाई भगवान्का नित्य दास मानेका हुन्छन्। यही ज्ञानले उनीहरूले आफ्नो कर्मफललाई भस्म गरेका हुन्छन्। यस किसिमको पूर्णज्ञान पाएको व्यक्ति साँच्चिकै विद्वान् हो। म भगवान्को नित्य दास हूँ भन्ने ज्ञानको विकासको तुलना अग्निसँग गरिएको छ। यस किसिमको ज्ञानरूपी अग्नि एक पटक बलै पछि सम्पूर्ण कर्मका फलहरूलाई खरानी पारिदिन्छ।

**त्यक्त्वा कर्मफलासङ्गं नित्यतृप्तो निराश्रयः ।**
**कर्मण्यभिप्रवृत्तोऽपि नैव किञ्चित्करोति सः ॥ २० ॥**

**त्यक्त्वा** — त्यागेर; **कर्म-फल-आसङ्गम्** — कर्मफलको आसक्तिलाई; **नित्य** — सधैँ; **तृप्तः** — सन्तुष्ट; **निराश्रयः** — आश्रयरहित; **कर्मणि** —

कर्ममा; **अभिप्रवृत्तः** — पूर्णतया संलग्न रहेर; **अपि** — पनि; **न** — होइन; **एव** — निश्चय नै; **किञ्चित्** — केही; **करोति** — गर्दछ; **सः** — त्यसले।

**कर्मफलका सम्पूर्ण आसक्तिहरूलाई त्यागेर सधैँ सन्तुष्ट र स्वतन्त्र रहने व्यक्तिले सबै प्रकारका कर्ममा संलग्न रहे पनि सकाम कर्म गरिरहेको हुँदैन।**

**तात्पर्य :** कृष्णभावनामा रहेर हरेक कार्य केवल भगवान् श्रीकृष्णका लागि गर्ने मानिस नै कर्मका बन्धनबाट मुक्त हुन्छ। कृष्णभावनाभावित व्यक्ति भगवान्प्रतिको विशुद्ध प्रेमका कारणले नै कर्म गर्दछ। त्यसैले उसलाई कर्मफलप्रति कुनै आसक्ति हुँदैन। हरेक कुरा भगवान् श्रीकृष्णका आश्रयमा छोड्ने हुनाले उसलाई आफ्नो पालन-पोषणप्रति सरोकार हुँदैन। यसरी कृष्णमय भएको व्यक्तिले न त कुनै वस्तु पाउने चाहना नै गर्दछ न त भएको वस्तुको संरक्षणको चिन्ता नै गर्दछ। उसले आफ्नो सामर्थ्यले भेटेसम्म आफ्नो कर्तव्यको पालना गर्दछ र बाँकी सबै कुरा भगवान् श्रीकृष्णका आश्रयमा छोडिदिन्छ। यस प्रकारको अनासक्त मानिस राम्रो वा नराम्रो कर्मफलबाट सधैँ मुक्त हुन्छ, मानौँ उसले केही पनि गरिरहेको छैन। यही हो अकाम वा निष्काम कर्मको लक्षण। कृष्णभावनामा रहेर गरिने कर्मबाहेक अरू कर्मले कर्तालाई बन्धनयुक्त बनाइदिन्छन् र विकर्मको सही स्वरूप पनि यही हो, जसको व्याख्या पहिले पनि गरिसकिएको छ।

**निराशीर्यतचित्तात्मा त्यक्तसर्वपरिग्रहः ।**
**शारीरं केवलं कर्म कुर्वन्नाप्नोति किल्बिषम् ॥ २१॥**

**निराशीः** — फलको इच्छारहित; **यत** — वशमा राखेको; **चित्त आत्मा** — मन र बुद्धि; **त्यक्त** — छोडेको छ; **सर्व** — सबै; **परिग्रहः** — वस्तुप्रतिको स्वामित्वको भावना; **शारीरम्** — शरीर र प्राण दुवैको रक्षा; **केवलम्** — केवल; **कर्म** — कर्म; **कुर्वन्** — गर्दै; **न आप्नोति** — पाउँदैन; **किल्बिषम्** — पापपूर्ण प्रतिफल।

**यस किसिमको ज्ञानी पुरुषले पूर्णतया नियन्त्रित मन र बुद्धिले काम गर्दछ। उसले आफ्ना सम्पत्तिमाथिको स्वामित्वलाई पनि त्यागिदिन्छ र केवल जीवन निर्वाहका लागि मात्र कर्म गर्दछ। यसरी कर्म गर्ने व्यक्ति पापपूर्ण कर्मफलबाट प्रभावित हुँदैन।**

**तात्पर्य :** कृष्णभावनाभावित व्यक्तिले आफ्ना कर्मको राम्रो वा नराम्रो फलको अपेक्षा गर्दैन। उसका मन र बुद्धि पूर्णतया नियन्त्रित हुन्छन्। "म पूर्ण परमेश्वरको अंश हूँ, अतः अंश रूपमा मद्वारा गरिने कुनै पनि कर्म मैले नै गरेको नभएर परमेश्वरले मेरा माध्यमबाट सम्पन्न गराउनु भएको मात्र

हो" भन्ने ज्ञान उसलाई हुन्छ। जब हात हल्लिन्छ, हातको आफ्नै इच्छाले हल्लिएको हुन्न बरु सम्पूर्ण शरीरको चेष्टा वा प्रयासले मात्र हल्लिएको हुन्छ। कृष्णभावनाभावित व्यक्ति सधैँ भगवान्‌को इच्छाको अनुगामी हुन्छ, किनभने उसलाई आफ्नो व्यक्तिगत इन्द्रियतृप्तिको कुनै चाहना हुँदैन। ऊ यन्त्रको एउटा पूर्जाजस्तो बनेर हिँड्डुल गर्दछ। जसरी पूर्जालाई राम्रोसँग चलाउन समय-समयमा तेल र सफाइको आवश्यकता पर्दछ त्यसै गरी कृष्णभावनाभावित व्यक्ति पनि कर्मद्वारा आफूलाई स्वस्थ तन्दुरुस्त बनाइराख्छ जसले गर्दा भगवान्‌को दिव्य प्रेमाभक्तिमा लागिरहन सकियोस्।

यसरी ऊ आफ्ना कर्मका सम्पूर्ण प्रतिक्रियाबाट सुरक्षित हुन्छ। एउटा पशुजस्तै उसलाई आफ्नो शरीरको स्वामित्वबोध पनि हुँदैन। कहिलेकाहीँ स्वामीले आफ्नो पशुलाई आफ्नो अधिकारभित्रको वस्तु सम्झेर निर्दयतापूर्वक पिट्ने गर्दछ, तैपनि पशुले कुनै विरोध जनाउँदैन, न त उसको आफ्नो कुनै सही स्वाधीनता नै हुन्छ। कृष्णभावनाभावित व्यक्ति आत्मसाक्षात्कारको कार्यमा लागिरहेको हुन्छ। उसले कुनै भौतिक पदार्थमाथि झूटो अधिकार बनाउन समय नै पाउँदैन। आफ्नो शरीर र आत्मरक्षाका लागि उसलाई कुनै अनुचित उपायले धन-सङ्ग्रह गर्नुपर्ने आवश्यकता पनि हुँदैन। त्यसैले ऊ त्यस किसिमका भौतिक पापद्वारा दूषित हुँदैन। यसरी ऊ आफ्ना सम्पूर्ण कर्मका प्रतिक्रिया वा प्रतिफलबाट मुक्त हुन्छ।

**यदृच्छालाभसंतुष्टो द्वन्द्वातीतो विमत्सरः ।**
**समः सिद्धावसिद्धौ च कृत्वापि न निबध्यते ॥ २२ ॥**

**यदृच्छा** — स्वतः भएको; **लाभ** — लाभले; **सन्तुष्टः** — सन्तुष्ट; **द्वन्द्व** — द्वन्द्वदेखि; **अतीतः** — पर; **विमत्सरः** — ईर्ष्यारहित; **समः** — स्थिरचित्त; **सिद्धौ** — सफलतामा र; **असिद्धौ** — असफलतामा; **च** — पनि; **कृत्वा** — गरेर; **अपि** — पनि; **न निबध्यते** — प्रभावित हुँदैन, बाधिँदैन।

**जो व्यक्ति स्वतः प्राप्त हुने लाभबाट सन्तुष्ट हुन्छ, द्वैतभावबाट मुक्त हुन्छ, ईर्ष्या गर्दैन र सफलता र असफलता दुवै अवस्थामा स्थिरचित्त हुन्छ, त्यो व्यक्ति कर्म गरेर पनि कर्मफलमा बाधिँदैन।**

**तात्पर्य :** कृष्णभावनाभावित व्यक्ति आफ्नो शरीरको रक्षाका लागि पनि धेरै प्रयत्न गर्दैन। ऊ त स्वतः भैपरी आउने लाभबाटै सन्तुष्ट हुन्छ। उसले माग्दा पनि माग्दैन र कसैबाट उधारो पनि लिँदैन। उसले आफ्नो शक्ति र सामर्थ्यअनुसार सत्यतामा रहेर कर्म गर्दछ र आफ्नो परिश्रमबाट जे जति प्राप्त हुन्छ त्यसैमा सन्तोष गर्दछ। अतः ऊ आफ्नो जीविकाको विषयमा स्वतन्त्र

हुन्छ। उसले अरू कसैको सेवामा लागेर भगवान्को सेवामा कमी हुन दिँदैन तर भगवान्को सेवाका लागि संसारको द्वन्द्वबाट विचलित नभई कुनै पनि काम गर्न सक्दछ। सांसारिक द्वन्द्वलाई सुख-दुःख, जाडो-गर्मीका रूपमा अनुभव गर्न सकिन्छ। कृष्णभावनाभावित व्यक्ति यस प्रकारका द्वन्द्वबाट पर हुन्छ, किनभने भगवान् श्रीकृष्णलाई प्रसन्न तुल्याउनका लागि गरिने कुनै पनि काम गर्न उसले अप्ठ्यारो मान्दैन। त्यसैले उसले सफलता र असफलता दुवै अवस्थामा समभाव राख्न सक्दछ। जब कुनै व्यक्ति दिव्य ज्ञानमा पुगेको हुन्छ त्यससमय उसमा यस्ता लक्षणहरू देख्न सकिन्छ।

**गतसंगस्य मुक्तस्य ज्ञानावस्थितचेतसः ।**
**यज्ञायाचरतः कर्म समग्रं प्रविलीयते ॥ २३ ॥**

**गतसङ्गस्य** — प्रकृतिको गुणमा अनासक्त; **मुक्तस्य** — मुक्तपुरुषको; **ज्ञान-अवस्थित** — ब्रह्ममा अवस्थित; **चेतसः** — जसको ज्ञान; **यज्ञाय** — यज्ञ वा भगवान् श्रीकृष्णका लागि; **आचरतः** — कर्म गर्दै; **कर्म** — कर्म; **समग्रम्** — सम्पूर्ण; **प्रविलीयते** — पूर्णतया विलीन हुन्छ।

**जो व्यक्ति प्रकृतिका गुणमा आसक्त छैन र पूर्णरूपले दिव्य ज्ञानमा अवस्थित छ, उसका सबै कर्महरू ब्रह्ममा लीन हुनजान्छन्।**

**तात्पर्य :** पूर्णरूपले कृष्णभावनाभावित भएपछि मानिस सबै द्वन्द्वहरूबाट मुक्त हुन्छ र त्यसै गरी भौतिक गुणका दोषहरूबाट पनि मुक्त हुन्छ। भगवान् श्रीकृष्णका साथमा रहेको आफ्नो सम्बन्धको स्वाभाविक स्थितिको ज्ञान हुने हुनाले नै ऊ यसरी मुक्त हुन्छ। यसरी मुक्त भइसकेपछि उसको चित्त कृष्णभावनाबाट विचलित हुँदैन। उसले जे गर्दछ त्यो आदि भगवान् विष्णु वा भगवान् श्रीकृष्णका लागि गर्दछ। यसो हुँदा उसका सम्पूर्ण कर्महरू यज्ञमय बन्दछन्। यज्ञको अर्थ नै परमपुरुष विष्णु वा कृष्णलाई प्रसन्न पार्नु हो। यस्तो यज्ञमय कर्मको फल पनि ब्रह्मभूत भएर ब्रह्ममा मिल्दछ र मानिसलाई त्यस्ता कर्महरूबाट प्राप्त हुने भौतिक फल भोग्नु पर्दैन।

**ब्रह्मार्पणं ब्रह्म हविर्ब्रह्माग्नौ ब्रह्मणा हुतम् ।**
**ब्रह्मैव तेन गन्तव्यं ब्रह्मकर्मसमाधिना ॥ २४ ॥**

**ब्रह्म** — आध्यात्मिक प्रकृतिमा; **अर्पणम्** — अर्पण; **ब्रह्म** — परमब्रह्म; **हवि** — घिउ; **ब्रह्म** — आध्यात्मिक; **अग्नौ** — हवनीय अग्निमा; **ब्रह्मणा** — आत्माद्वारा; **हुतम्** — अर्पण गरिएको; **ब्रह्म** — आध्यात्मिक धाम; **एव** —

निश्चय नै; **तेन** — उसबाट; **गन्तव्यम्** — पुग्नयोग्य; **ब्रह्म** — आध्यात्मिक; **कर्म** — कर्ममा; **समाधिना** — पूर्ण एकाग्रताले।

**कृष्णभावनामृतमा पूर्णतया निमग्न भएको व्यक्तिले आफ्नो आध्यात्मिक कर्मले गर्दा भगवद्धाम प्राप्त गर्दछ, किनभने उसका कर्ममा हवन पनि ब्रह्ममय र हवि पनि ब्रह्ममय हुन्छन्।**

**तात्पर्य :** कृष्णभावनाभावित भएर कर्म गर्दागर्दै अन्त्यमा कसरी आध्यात्मिक लक्ष्य प्राप्त हुन्छ भन्ने कुराको वर्णन यहाँ गरिएको छ। कृष्णभावनामा रहेर गरिने धेरै प्रकारका कर्महरू छन्, ती सबैको वर्णन आगामी श्लोकहरूमा गरिने छ तर यहाँ केवल कृष्णभावनामृतका सिद्धान्तको वर्णन मात्र गरिनेछ। भौतिक संक्रमणहरूले ग्रस्त भएको बद्ध जीवले भौतिक वातावरणमा रहेर नै कर्म गर्नु पर्दछ, तैपनि यस्तो वातावरणबाट ऊ बाहिर आउनु पर्दछ। जुन विधिले बद्ध जीव भौतिक वातावरणबाट बाहिर आउन सक्दछ, त्यही विधिको नाम नै कृष्णभावना हो। उदाहरणका लागि दूध वा दूधबाट बनेका वस्तुहरू धेरै खानाले पेट गडबड भएको बिरामीलाई दूधबाटै बनेको अर्को परिकार दही खान दिएर उपचार गरिन्छ। त्यसै गरी भौतिकतामा डुबेका बद्ध जीवलाई कृष्णभावनाद्वारा नै उपचार गर्न सकिन्छ, जुन कुरा गीतामा यहाँ दिइएको छ। यस्तो विधिलाई सामान्यतया यज्ञ भनिन्छ। यज्ञको तात्पर्य भगवान् विष्णु वा कृष्णलाई सन्तुष्ट पार्नु हो। यो संसारमा कृष्णभावनामा रहेर वा भगवान् श्रीकृष्णका लागि भनेर जति धेरै कर्म गरिन्छन् ती कर्मले अरू नराम्रा कुरालाई पूर्णतः शोषण गरेर वातावरणलाई त्यति नै बढी आध्यात्मिक बनाइदिन्छ। ब्रह्म शब्दको अर्थ आध्यात्मिक हो। भगवान् आध्यात्मिक हुनुहुन्छ र उहाँको दिव्य शरीरको किरणलाई ब्रह्मज्योति भनिन्छ। ब्रह्मज्योति उहाँको आध्यात्मिक तेज हो। अस्तित्वमा जे जति वस्तु छन्, सबै ब्रह्मज्योतिमा अवस्थित छन् तर जब त्यो ज्योति इन्द्रियतृप्तिजन्य मायाका पर्दाले ढाकिन्छ त्यो अवस्थालाई भौतिकता भनिन्छ। यो भौतिक आवरणलाई कृष्णभावनाद्वारा तुरुन्त हटाउन सकिन्छ। यस प्रकार कृष्णभावनाका लागि अर्पण गरिएको हवि, यस्तो हवि उपभोग गर्ने भोक्ता प्रतिनिधि, हवनीय वा समर्पण गर्ने विधि, समर्पण कर्ता र उक्त समर्पणको प्रतिफल सबै आपसमा मिलेर परमसत्य वा ब्रह्ममय बन्दछन्। मायाद्वारा ढाकिएको परमसत्यलाई पदार्थ भनिन्छ। जब त्यही पदार्थ परमसत्यका निमित्त प्रयोग हुन्छ त्यसमा फेरि आध्यात्मिक गुण आउँदछ। यस्तै मायाजन्य चेतनालाई ब्रह्ममा रूपान्तरित गर्ने विधि नै कृष्णभावना हो। जब मन पूर्णरूपले कृष्णभावनामा निमग्न हुन्छ त्यस्तो अवस्थालाई समाधिस्थ

अवस्था भनिन्छ। यस्तो दिव्य चेतनामा रहेर जे जे कर्म गरिन्छ, त्यसलाई यज्ञ भनिन्छ। आध्यात्मिक चेतनाको त्यो अवस्थामा पुगेको होता, हवन, हवि, यज्ञ सम्पादनको नेतृत्व गर्ने कर्ता र परमप्राप्ति वा फल आदि हरेक कुरा परमब्रह्ममा एक हुन पुग्दछन्। कृष्णभावनाको विधि पनि यही हो।

**दैवमेवापरे यज्ञं योगिनः पर्युपासते ।**
**ब्रह्माग्नावपरे यज्ञं यज्ञेनैवोपजुह्वति ॥ २५ ॥**

**दैवम्** — देवताहरूको पूजामा; **एव** — जस्तै; **अपरे** — अरू; **यज्ञम्** — यज्ञ; **योगिनः** — योगीहरूले; **पर्युपासते** — राम्रोसँग पूजा गर्दछन्; **ब्रह्म** — परम-सत्यको; **अग्नौ** — अग्निमा; **अपरे** — अरूले; **यज्ञम्** — यज्ञलाई; **यज्ञेन** — यज्ञद्वारा; **एव** — यस प्रकारले; **उपजुह्वति** — अर्पण गर्दछन्।

**कतिपय योगीहरू विभिन्न प्रकारका यज्ञहरूद्वारा राम्रोसँग देवताहरूको पूजा गर्दछन् र कुनै योगीहरू परमब्रह्मरूपी अग्निमा आहूति चढाउँछन्।**

**तात्पर्य :** कृष्णभावनाभावित भएर आफ्नो कर्तव्य कर्ममा निमग्न रहने व्यक्ति नै पूर्ण योगी हो वा प्रथम श्रेणीको योगी हो भन्ने कुराको चर्चा माथि नै गरियो तर केही मानिसहरू यस्ता पनि छन् जो देवताहरूको पूजा गर्नका लागि यस्तै यज्ञ गर्दछन् र अझ अन्य मानिसहरू त परब्रह्म वा भगवान्को निराकार स्वरूपका लागि नै यज्ञ गर्दछन्। यस प्रकार तिनका श्रेणीअनुसार विभिन्न प्रकारका यज्ञहरू छन्। विभिन्न प्रकारका यज्ञकर्ताहरूद्वारा सम्पन्न गरिने यज्ञका यी विभिन्न श्रेणीहरू केवल बाहिरी वर्गीकरण मात्र हुन्। वास्तवमा यज्ञको अर्थ भगवान् विष्णुलाई प्रसन्न पार्नु हो। कहीँ भगवान् विष्णुलाई नै यज्ञ भन्ने गरिएको पनि पाइन्छ। यी विभिन्न प्रकारका यज्ञहरूलाई मुख्यतया दुई श्रेणीमा वर्गीकरण गर्न सकिन्छ— १. सांसारिक उपलब्धिका लागि गरिने यज्ञ र २. दिव्य ज्ञान प्राप्तिका लागि गरिने यज्ञ। कृष्णभावनामा भावित भएका व्यक्तिहरूको सम्पूर्ण भौतिक सम्पदा परमेश्वरलाई प्रसन्न गराउनका लागि प्रयोग हुन्छ, तर कुनै क्षणिक भौतिक सुख चाहनेहरू इन्द्र, सूर्य, चन्द्र आदि देवताहरूलाई प्रसन्न पार्नका लागि आफ्नो भौतिक सम्पदाको आहूति दिन्छन्। अरू निराकारवादीहरू निराकार ब्रह्ममा लीन हुन आफ्नो स्वरूपको आहूति दिन्छन्। देवताहरू त्यस्ता शक्तिशाली जीवात्मा हुन् जसलाई परमेश्वरले ताप, पानी, प्रकाश आदि भौतिक वस्तुहरूको आपूर्ति गरेर ब्रह्माण्डको रेखदेख र निरीक्षण गर्नका लागि नियुक्त गर्नुभएको हो। भौतिक लाभको चाहना गर्नेहरूले वैदिक अनुष्ठान पद्धतिअनुसार विभिन्न देवताहरूको पूजा-आराधना गर्दछन्। यस्ता मानिसहरूलाई बहुईश्वरवादी (धेरै ईश्वर मान्ने) भनिन्छ। जो

परमसत्यको निर्गुण निराकार स्वरूपको पूजा गर्दछन् र देवताका स्वरूपलाई क्षणिक मान्दछन् तिनीहरूले परमसत्यरूपी अग्निमा आफ्नो वैयक्तिक सत्ताको आहूति दिन्छन्। यसरी उनीहरू परमसत्तामा लीन भएर आफ्नो वैयक्तिक अस्तित्व समाप्त गर्दछन्। यस्ता निराकारवादीहरू परमात्माको दिव्य स्वभावलाई बुझ्नका लागि दार्शनिक चिन्तनमा आफ्नो सम्पूर्ण समयको आहूति दिन्छन्। अर्को शब्दमा — सकाम कर्मवादीहरू सांसारिक भोगका लागि आफ्नो भौतिक सम्पदाको आहूति दिन्छन् निराकारवादीहरू परमेश्वरको सत्तामा लीन हुनका लागि आफ्नो भौतिक उपाधिहरूको आहूति दिन्छन्। निराकारवादीहरूका लागि यज्ञको अग्निवेदी नै परमब्रह्म हो र आहूति ब्रह्मरूपी अग्निमा आत्मसत्ताको विलय हो। तर, अर्जुनजस्ता कृष्णभावनामा भावित व्यक्तिले भगवान् श्रीकृष्णलाई प्रसन्न पार्नका लागि आफ्नो सर्वस्व अर्पित गरिदिन्छन्। यसरी समग्र भौतिक सम्पदाका साथै उनीहरूको आत्मस्वरूप पनि भगवान् श्रीकृष्णको लागि समर्पित हुन पुग्दछ। यस प्रकार उनीहरू प्रथम श्रेणीका योगी बन्दछन् तर उनीहरूले आफ्नो व्यैयक्तिक अस्तित्व गुमाउँदैनन्।

**श्रोत्रादीनीन्द्रियाण्यन्ये संयमाग्निषु जुह्वति ।**
**शब्दादीन्विषयानन्य इन्द्रियाग्निषु जुह्वति ॥ २६ ॥**

**श्रोत्र आदीनि** — कान आदि; **इन्द्रियाणि** — इन्द्रियहरू; **अन्ये** — अरू; **संयम** — संयमका; **अग्निषु** — अग्निमा; **जुह्वति** — अर्पण गर्दछ; **शब्द आदीन्** — शब्द आदि; **विषयान्** — इन्द्रिय तृप्तिका विषयहरूलाई; **अन्ये** — अरू; **इन्द्रिय** — इन्द्रियका; **अग्निषु** — अग्निमा; **जुह्वति** — चढाँउँदछ।

**केही ( विशुद्ध ब्रह्मचारीहरू ) श्रवण प्रक्रिया र इन्द्रियहरूलाई मनको नियन्त्रणरूपी अग्निमा होमिदिन्छन् र अर्काथरी ( गृहस्थहरू ) इन्द्रियका विषयहरूलाई इन्द्रियरूपी अग्निमो आहूति दिन्छन्।**

**तात्पर्य :** मानव जीवनका चारवटा आश्रमका सदस्यहरू ब्रह्मचारी, गृहस्थ, वानप्रस्थी र संन्यासी परिपूर्ण योगी वा अध्यात्मवादी बन्नका निमित्त हुन्। मानव जीवन पशु जीवनजस्तो इन्द्रियतृप्ति गर्नका लागि मात्र होइन, अतः मानिसलाई आध्यात्मिक जीवनमा पूर्ण बनाउनका निमित्त यी चार आश्रमहरूको व्यवस्था गरिएको हो। ब्रहमचारी वा विद्यार्थीले सुयोग्य गुरुका रेखदेखमा इन्द्रियतृप्तिका विषयबाट हटेर आफ्नो मनलाई वशमा राख्दछन्। ब्रह्मचारीहरू कृष्णभावनासम्बन्धी शब्दहरू मात्रै सुन्दछन्। सुन्नु नै ज्ञानको पहिलो आधारभूत सिद्धान्त हो। त्यसैले शुद्ध ब्रहमचारी सधैँ **"हरेर्नामानुकीर्तनम्"** अर्थात्

भगवान्‌का नाम र कीर्तन सुन्ने कार्यमा मात्र संलग्न हुन्छन्। ब्रह्मचारीहरू सांसारिक शब्दध्वनिबाट टाढा रहन्छन्। उनीहरूका कान **'हरेकृष्ण, हरेकृष्ण'** जस्ता आध्यात्मिक ध्वनिहरूको श्रवणमा लागिरहन्छन्। त्यसै गरी इन्द्रियतृप्तिको केही छुट पाएका गृहस्थ पनि अत्यन्त संयमपूर्वक यस्तै कार्यहरू सम्पादन गर्दछन्। कामवासना, नशा, मद्यपान तथा मांसभक्षण मानवसमाजका स्वाभाविक प्रवृत्ति हुन्। तर, संयमित गृहस्थ कहिल्यै पनि यौनजीवन र इन्द्रियतृप्तिका काममा अनियन्त्रित रूपले लागिरहन्नन्। यसैले हरेक मानवसमाजमा धार्मिक सिद्धान्तमा आधारित विवाह प्रथाको प्रचलन छ। किनभने, यौनजीवनलाई नियन्त्रित गर्ने यो पनि एउटा मार्ग हो। यस्तो संयमित र अनासक्त यौनजीवन पनि एक प्रकारको यज्ञ नै हो। किनभने, संयमित गृहस्थले इन्द्रियतृप्तितर्फ प्रवाहित आफ्ना सामान्य प्रवृत्तिहरूलाई उच्चतर दिव्य जीवनका लागि आहूति दिन्छन्।

**सर्वाणीन्द्रियकर्माणि प्राणकर्माणि चापरे ।**
**आत्मसंयमयोगाग्नौ जुह्वति ज्ञानदीपिते ॥ २७॥**

**सर्वाणि** — सम्पूर्ण; **इन्द्रिय** — इन्द्रियहरूका; **कर्माणि** — कर्महरू; **प्राण-कर्माणि** — प्राणवायुका कार्यहरू; **च** — पनि; **अपरे** — अरूहरू; **आत्म-संयम** — मनको नियन्त्रण; **योग आग्नौ** — योगरूपी अग्निमा; **जुह्वति** — होमिदिन्छ; **ज्ञान-दीपिते** — आत्मसाक्षात्कार गर्ने जिज्ञासाले गर्दा।

**मन र इन्द्रियलाई वशमा राखेर आत्मसाक्षात्कार गर्न चाहनेहरूले सबै इन्द्रियहरू र प्राणवायुका कार्यहरूलाई पनि संयमित मनरूपी अग्निमा आहूति दिन्छन्।**

**तात्पर्य :** यहाँ पतञ्जलिद्वारा सूत्रबद्ध गरिएको योगपद्धतितर्फ सङ्केत गरिएको छ। पतञ्जलिको योगसूत्रमा आत्मालाई प्रत्यग् आत्मा र पराग् आत्मा भनिएको छ। जीवात्मा जहिलेसम्म इन्द्रियभोगमा आसक्त रहन्छ त्यस समयसम्म उसलाई परागात्मा भनिन्छ र जब जीवात्मा इन्द्रियभोगबाट अलग्ग हुन्छ त्यसलाई प्रत्यगात्मा भनिन्छ। जीवका शरीरमा दश प्रकारका वायुहरू क्रियाशील हुन्छन्। तिनीहरूलाई श्वासप्रक्रिया वा प्राणायामद्वारा जान्न सकिन्छ। पतञ्जलिको योगविधिले शरीरमा विद्यमान वायुहरूको क्रियाशीलतालाई प्राविधिक उपायले कसरी नियन्त्रण गर्ने भन्ने सिकाउँदछ र यसरी अघि बढेमा अन्त्यमा गएर वायुका सबै आन्तरिक कार्यहरू आत्मालाई भौतिक आसक्तिबाट शुद्ध रूपमा बचाइराख्न सहायक हुन्छन्। प्रत्यगात्मा बनाउनु नै यो योगपद्धतिको परमउद्देश्य हो। यो प्रत्यगात्मा अवस्था पदार्थको क्रियाकलापबाट प्राप्त गर्न सकिन्छ।

इन्द्रियहरू इन्द्रियका विषयहरूसँग अन्तरक्रिया गर्दछन्; जस्तै कानले सुन्ने काम गर्दछ, आँखाले देख्ने काम गर्दछ, नाकले सुँघ्ने, जिब्राले स्वाद लिने र हातले छुने काम गर्दछन्। यसरी यी सबै इन्द्रियहरू आत्माका बाहिरी क्रियाकलापमा संलग्न छन्। यी कार्यलाई प्राणवायुका कार्य पनि भनिन्छ। अपान वायु तलतिर जान्छ, व्यान वायु माथिल्लो भागतिर जान्छ तर जब मानिस बुद्ध, प्रबुद्ध हुन्छ त्यससमय उसले यी सबै वायुहरूलाई आत्मसाक्षात्कारको खोजीमा लगाउँछ।

**द्रव्ययज्ञास्तपोयज्ञा योगयज्ञास्तथापरे ।**
**स्वाध्यायज्ञानयज्ञाश्च यतयः संशितव्रताः ॥ २८॥**

**द्रव्य यज्ञा** — सम्पत्तिको यज्ञ; **तपःयज्ञाः** — तपस्यारूपी यज्ञ; **योग-यज्ञाः** — अष्टाङ्ग योगरूपी यज्ञ; **तथा** — यस प्रकार; **अपरे** — अरूहरू; **स्वाध्याय** — वेदाध्ययनरूपी यज्ञ; **ज्ञानयज्ञाः** — दिव्य ज्ञानको विकासरूपी यज्ञ; **च** — पनि; **यतयः** — प्रबुद्ध व्यक्तिहरू; **संशितव्रताः** — दृढव्रत लिएका।

**दृढव्रत धारण गरेका योगीहरू कसैले सम्पत्तिको त्यागद्वारा, कसैले कठिन तपस्याद्वारा, कसैले अष्टाङ्ग योगको अभ्यासद्वारा र कसैले दिव्यज्ञानको विकास गराउने वेदहरूको अध्ययनद्वारा आफूलाई प्रबुद्ध बन्दछन्।**

**तात्पर्य :** यी यज्ञहरूलाई विभिन्न वर्गमा विभाजित गर्न सकिन्छ। धेरै मानिसहरू यस्ता छन्, जसले विभिन्न प्रकारका दान गरेर आफ्नो सम्पत्तिको यजन गर्दछन्। भारतमा धनी व्यापारीहरूको समुदाय वा राज-खानदानका व्यक्तिहरूले धर्मशाला, अन्नक्षेत्र, अतिथिशाला, अनाथालय र विद्यापीठजस्ता धेरै दातव्य संस्थाहरू खोलेका छन्। अन्य देशहरूमा पनि धनीहरूले विभिन्न अस्पतालहरू, वृद्धाश्रमहरू, र यस्तै गरिबहरूलाई निशुल्क औषधिउपचार गर्ने, पढाउने र भोजन वितरण गर्ने उद्देश्यले धेरै दातव्य संस्थाहरू खोलेका छन्। यी दानकार्यसँग सम्बन्धित कर्मलाई द्रव्यमय यज्ञ भनिन्छ। अर्काथरी मानिसहरू जीवनमा उन्नति गर्नका लागि र मरेपछि उच्च लोकहरूमा जानका लागि चान्द्रायण व्रत, चातुर्मास्य व्रतजस्ता विविध किसिमका तपस्याहरू गर्दछन्। यसो गर्दा कठोर नियममा रहेर धेरै कठिन व्रतहरू गर्नु पर्दछ। उदाहरणका लागि चातुर्मास्य व्रत गर्ने व्यक्तिले असारदेखि कात्तिकसम्मका चार महिनामा कपाल दाह्री काट्दैनन्, कतिपय खाद्यवस्तु खाँदैनन्, दिनमा दुई पटक खाँदैनन्, घर छाडेर अन्यत्र जाँदैनन् इत्यादि। यसरी जीवनका सुखभोगहरू छोडेर व्रत बस्नुलाई तपोमय यज्ञ भनिन्छ। अन्य केही व्यक्तिहरू परमब्रह्ममा विलीन हुनका लागि पतञ्जलिको योगविधि जस्ता विभिन्न प्रकारका योगसाधनामा आफूलाई संलग्न गराउँछन् अथवा कोही विशेष सिद्धि

पाउनका लागि अष्टाङ्ग योग वा हठयोगको अभ्यास गर्दछन् र कोही पवित्र तीर्थस्थलहरूको भ्रमण गर्दछन्। भौतिक जगत्मा कुनै विशेष सिद्धि प्राप्त गर्नका लागि गरिने यी सम्पूर्ण कार्यहरूलाई योग-यज्ञ भनिन्छ। केही व्यक्तिहरू उपनिषद्, वेदान्तसूत्र जस्ता वैदिक साहित्य तथा साङ्ख्यदर्शन आदिको अध्ययनमा आफ्नो समय र ध्यान लगाउँछन्। यस्तो कार्यलाई स्वाध्याय-यज्ञ भनिन्छ। यी सबै योगीहरू यस्तै विभिन्न प्रकारका यज्ञ कर्ममा लागिरहन्छन् र उच्चतर जीवनको खोजी गरिरहन्छन्। तर, कृष्णभावना यी यज्ञहरूभन्दा भिन्दै हो किनभने यसमा भगवान्को प्रत्यक्ष सेवा गरिन्छ जुन कुरा माथि वर्णन गरिएका कुनै पनि यज्ञबाट पाउन सकिँदैन। यस्तो भगवद् सेवा भगवान् र भगवान्का सुयोग्य भक्तहरूका कृपाद्वारा मात्र पाउन सकिन्छ। त्यसैले, कृष्णभावना वा कृष्णभक्ति सबैभन्दा दिव्य वा अद्वितीय छ।

**अपाने जुह्वति प्राणं प्राणेऽपानं तथापरे ।**
**प्राणापानगती रुद्ध्वा प्राणायामपरायणाः ॥**
**अपरे नियताहाराः प्राणान् प्राणेषु जुह्वति ॥ २९ ॥**

**अपाने** — अधोगामी वायुमा; **जुह्वति** — होम्दछन्; **प्राणम्** — प्राणवायुलाई; **प्राणे** — प्राणवायुमा; **अपानम्** — अपानवायुलाई; **तथा** — त्यसै गरी; **अपरे** — अरूहरू; **प्राण** — प्राण र; **अपान** — अपानको; **गति** — गतिलाई; **रुद्ध्वा** — रोकेर; **प्राण-आयाम** — सम्पूर्ण प्राणलाई रोकेर समाधिमा; **परायणाः** — प्रवृत्त हुन्छन्; **अपरे** — अरू योगीहरू; **नियत-आहाराः** — नियन्त्रित आहार लिएर; **प्राणान्** — बाहिर जाने प्राणलाई; **प्राणेषु** — बहिर्गामी वायुमा; **जुह्वति** — होम्दछन्।

**कुनै योगीहरू समाधिमा रहनका लागि प्राणायमद्वारा श्वासलाई रोकिराख्दछन्। यिनीहरू अपानवायुमा प्राणवायुलाई र प्राणमा अपानवायुलाई रोक्ने अभ्यास गर्दछन् र अन्त्यमा प्राण र अपान दुवैलाई रोकेर समाधिमा प्रवेश गर्दछन् र कुनै योगीले आहारलाई नियन्त्रण गर्दै प्राणलाई प्राणमा होमिदिन्छन्।**

**तात्पर्य :** श्वास प्रक्रियालाई नियन्त्रण गर्ने पद्धतिलाई प्राणायाम भनिन्छ। सुरुमा हठयोगका विविध आसनहरूका सहायताले यसको अभ्यास गर्ने गरिन्छ। यी सम्पूर्ण विधिहरू इन्द्रियहरूलाई वशमा राख्न र आत्मसाक्षात्कारका मार्गमा प्रगति गर्नका लागि भनिएका हुन्। यस विधिमा वायुलाई शरीरभित्रै रोक्ने अभ्यास गरिन्छ जसले गर्दा वायुमार्गको दिशा उल्टो हुन्छ। अपानवायु अधोगामी हो र प्राणवायु उर्ध्वगामी हो। प्राणायाम गर्दा जबसम्म प्राण र अपान

दुवै वायु तटस्थ भएर पूरक वा सम हुँदैनन् तबसम्म योगीले विपरीत दिशामा श्वास लिने अभ्यास गरिरहन्छ। प्राणवायुमा अपानवायुलाई मिलाउनुलाई रेचक भनिन्छ, प्राण र अपान दुवै वायुलाई पूर्णतया रोक्नुलाई कुम्भकयोग भनिन्छ। यो कुम्भकयोगको अभ्यासद्वारा मानिसले आत्मसिद्धिका लागि आफ्नो जीवन अवधि (आयु) पनि बढाउन सक्दछ।

बुद्धिमान् योगीहरू एउटै जीवनकालमा सिद्धि प्राप्त गर्न चाहन्छन्। उनीहरू फेरि अर्को जीवनको प्रतीक्षा गरिरहँदैनन्। यो कुम्भकयोगको अभ्यास गरेर योगीहरूले आफ्नो जीवन-अवधि धेरै वर्षसम्मका लागि बढाउन सक्दछन्। तर, भगवान्को अलौकिक प्रेमाभक्तिमा लागिरहने कृष्णभावनाभावित मानिस स्वतः नै इन्द्रियहरूलाई नियन्त्रण गर्न सक्ने हुन्छ। उसका इन्द्रियहरू सधैँ भगवान् श्रीकृष्णका सेवामा लागिरहने हुनाले तिनलाई अन्यत्र लाग्ने अवसर हुँदैन। फलस्वरूप त्यस्तो व्यक्ति जीवनको अन्त्यमा स्वतः भगवान् श्रीकृष्णको दिव्य धाममा स्थानान्तरित हुन्छ। त्यसैले उसले आफ्नो जीवन-अवधि लम्ब्याउने प्रयत्न गर्दैन। ऊ त तत्काल मुक्तिको स्तरमा पुग्दछ। *भगवद्गीताको* १४.२६ मा भनिएको पनि छ—

*मां च योऽव्यभिचारेण भक्तियोगेन सेवते ।*
*स गुणान्समतीत्यैतान् ब्रह्मभूयाय कल्पते ॥*

अर्थात्, "भगवान्को विशुद्ध भक्तिमा लागेको व्यक्ति प्रकृतिका गुणहरूलाई पार गर्दै तुरुन्त आध्यात्मिक अवस्थामा पुग्दछ।" कृष्णभावनामा लागेको व्यक्तिले दिव्य अवस्थाबाट आफ्नो साधना सुरु गर्दछ र निरन्तर त्यही दिव्य चेतनामै रहिरहन्छ। त्यसैले उसको कहिल्यै पतन हुँदैन र जीवनको अन्त्यमा ऊ तुरुन्तै भगवद्धाममा प्रवेश गर्दछ। कृष्णको प्रसाद मात्र ग्रहण गर्नाले स्वतः आहारमा नियन्त्रण हुन पुग्दछ। इन्द्रियहरूलाई नियन्त्रण गर्ने विषयमा भोजन घटाउनु वा अल्पाहार गर्नु निकै सहयोगी सिद्ध हुन्छ र इन्द्रियहरूलाई नियन्त्रण नगरीकन सांसारिक बन्धनबाट छुट्कारा पाउन सम्भव पनि छैन।

**सर्वेऽप्येते यज्ञविदो यज्ञक्षपितकल्मषाः ।**
**यज्ञशिष्टामृतभुजो यान्ति ब्रह्म सनातनम् ॥ ३० ॥**

**सर्वे** — सबै; **अपि** — नै; **एते** — यिनीहरू; **यज्ञविदः** — यज्ञ गर्नुको उद्देश्यसँग परिचित; **यज्ञ-क्षपित** — यस्तै यज्ञ गर्नाले शुद्ध भएको; **कल्मषाः** — पाप कर्महरूको; **यज्ञशिष्ट** — यस्तै यज्ञफलको; **अमृत भुजः** — अमृत चाखेको; **यान्ति** — जान्छन्; **ब्रह्म** — परमब्रह्म; **सनातनम्** — शाश्वत धाम।

**यी सबै यज्ञकर्ताहरू यज्ञको अर्थ जान्नाले पापकर्मबाट मुक्त हुन्छन् र यज्ञको फलरूपी अमृत चाखेर परमधामतिर अगाडि बढ्छन्।**

**तात्पर्य :** द्रव्य यज्ञ, स्वाध्याय यज्ञ, योग यज्ञ आदि विभिन्न प्रकारका यज्ञहरूका सम्बन्धमा माथि गरिएको व्याख्याबाट के कुरा स्पष्ट हुन्छ भने, यी सबै यज्ञहरूको सामान्य उद्देश्य इन्द्रियनिग्रह हो। इन्द्रियतृप्ति नै भौतिक अस्तित्वको मूल जरो वा कारण हो, त्यसैले जहिलेसम्म इन्द्रियभोगको स्तरबाट उठेर त्योभन्दा उच्च स्तरमा अवस्थित हुन सकिँदैन तबसम्म पूर्णज्ञान, पूर्ण जीवन र पूर्ण आनन्द अर्थात् सच्चिदानन्दको अवस्थामा प्रवेश गर्न सम्भव छैन। यो सच्चिदानन्दमय स्तर नै शाश्वत धाम वा ब्रह्मधाम हो। उपर्युक्त यज्ञहरूले मानिसलाई संसारका पापपूर्ण प्रतिक्रिया वा प्रतिफलबाट शुद्ध हुन सहायता गर्दछन्। जीवनमा गरिने यस किसिमको प्रगतिबाट मानिस जीवनमा सुखी र ऐश्वर्यशाली बन्दछ नै, साथै जीवनका अन्त्यमा या त ऊ निराकार ब्रह्ममा विलीन हुन्छ या भगवान् श्रीकृष्णको सङ्गत प्राप्त गरेर शाश्वत भगवद्धाममा प्रवेश गर्दछ।

**नायं लोकोऽस्त्ययज्ञस्य कुतोऽन्यः कुरुसत्तम ॥ ३१ ॥**

**न** — छैन; **अयम्** — यो; **लोकः** — लोक; **अस्ति** — छ; **अयज्ञस्य** — यज्ञ नगर्नेहरूलाई; **कुतः** — कहाँ छ; **अन्यः** — अरू; **कुरुसत्तम** — हे कुरुश्रेष्ठ।

**हे कुरुश्रेष्ठ अर्जुन! यज्ञ नगर्ने मानिस यस लोकमा, यस जीवनमा त सुखपूर्वक रहन सक्दैन भने अर्को जन्ममा झन् कसरी सुखी होला ?**

**तात्पर्य :** मानिस यस लोकमा जुन रूपमा रहे पनि उसलाई आफ्नो वास्तविक स्वरूपको ज्ञान हुँदैन। अर्को शब्दमा भन्दा हाम्रो पापपूर्ण जीवनका बहुमुखी प्रतिक्रियाहरूका कारणले भौतिक जगत्मा हाम्रो अस्तित्व रहनआएको हो। अज्ञान नै पापपूर्ण जीवनको कारण हो र पापपूर्ण जीवनले नै मानिसलाई भौतिक जगत्मा आउन बाध्य गराइएको हो। मानव जीवन नै सांसारिक बन्धनबाट बाहिर निस्कने एक मात्र ढोका वा मार्ग हो। वेदले हामीलाई धर्म, अर्थ, काम र मोक्षरूपी मार्गहरू देखाएर भौतिक बन्धनबाट मुक्त हुन सक्ने अवसर प्रदान गरेको छ। धर्म तथा माथि वर्णन गरिएका विभिन्न प्रकारका यज्ञहरूले हाम्रो आर्थिक समस्यालाई समाधान गरिदिन्छन्। जनसङ्ख्याको वृद्धि भए पनि यज्ञहरू सम्पन्न गर्नाले हामीलाई चाहिनेजति भोजन, पर्याप्त दूध आदि उपलब्ध भइरहन्छ। शरीरको आवश्यकता पूरा भएपछि स्वभावतः इन्द्रियतृप्तिको समय आउँछ। त्यसैले वेदमा वैधानिक तरिकाले इन्द्रियतृप्ति गर्नका लागि पवित्र विवाहविधिको व्यवस्था गरिएको छ। यस प्रकारले मानिस विस्तारै भौतिक बन्धनबाट मुक्ति पाउने स्तरमा

पुग्दछ र परमेश्वरको सान्निध्य प्राप्त गरेर जीवनमुक्तिको परिपूर्णता प्राप्त गर्दछ। यस्तो परिपूर्णता माथि भनिएअनुसारका यज्ञहरू सम्पादन गर्नाले प्राप्त हुन्छ। यदि मानिस वेदमा भनिएअनुसार यज्ञ गर्न तयार नभए उसले यसै जीवनमा पनि सुख पाउन सक्दैन, अर्को जीवनमा, अर्को लोकमा गएर सुख पाउने कुरा नै छैन। भिन्नभिन्न स्वर्गीय लोकहरूमा विभिन्न प्रकारका भौतिक सुखसुविधाहरू छन्। विभिन्न प्रकारका यज्ञयोगादि गर्ने व्यक्तिलाई हरेक अवस्थामा पर्याप्त सुखसुविधा प्राप्त हुन्छ। तर, ती सबै सुखहरूमा सर्वश्रेष्ठ सुख कृष्णभावनाको अभ्यासद्वारा वैकुण्ठमा पुगेपछि पाइन्छ। त्यसैले कृष्णभावनाभावित जीवन नै यस भौतिक जगत्का सबै किसिमका समस्याहरूको एकमात्र समाधान हो।

**एवं बहुविधा यज्ञा वितता ब्रह्मणो मुखे ।**
**कर्मजान्विद्धि तान्सर्वानेवं ज्ञात्वा विमोक्ष्यसे ॥ ३२ ॥**

**एवम्** — यस प्रकार; **बहुविधा** — धेरै प्रकारका; **यज्ञा** — यज्ञहरू; **वितता** — फैलिएका छन्; **ब्रह्मणः** — वेदहरूका; **मुखे** — मुखमा; **कर्मजान्** — कर्मको जन्म; **विद्धि** — जान्नु पर्दछ; **तान्** — ती; **सर्वान्** — सबैलाई; **एवम्** — यस प्रकार; **ज्ञात्वा** — जानेर; **विमोक्ष्यसे** — मुक्त हुनेछौ।

**यी विभिन्न प्रकारका यज्ञहरू वेदसम्मत छन् र सबै यज्ञहरू विभिन्न प्रकारका कर्मबाट उत्पन्न हुन्छन्। यस प्रसङ्गलाई यसरी बुझ्ने तिमी मुक्त हुनेछौ।**

**तात्पर्य :** विभिन्न प्रकारका कर्ताहरूलाई उपयुक्त हुने विभिन्न प्रकारका यज्ञहरूको उल्लेख वेदमा गरिएको छ, जसको चर्चा माथि नै गरियो। मानिसहरू शरीरलाई नै आत्मा ठान्ने शारीर नै आत्मा हो भन्ने बुद्धिको धारणामा लीन छन्, त्यसैले यी यज्ञहरूको व्यवस्था यसरी गरिएको हो। यी यज्ञलाई मानिसहरूले आफ्नो, शरीर, मन तथा बुद्धिअनुसार सम्पन्न गर्दछन्। वास्तवमा शरीरबाट मुक्त हुनका लागि नै यी सबै यज्ञ विधिको व्यवस्था गरिएको हो। यस कुरालाई भगवान्ले आफ्नो श्रीमुखबाट यहाँ स्पष्ट पार्नुभएको छ।

**श्रेयान् द्रव्यमयाद्यज्ञाज्ज्ञानयज्ञः परन्तप ।**
**सर्वं कर्माखिलं पार्थ ज्ञाने परिसमाप्यते ॥ ३३ ॥**

**श्रेयान्** — श्रेष्ठ छ; **द्रव्यमयात्** — सम्पत्तिको दान गरिने; **यज्ञात्** — यज्ञभन्दा; **ज्ञानयज्ञः** — ज्ञानमय यज्ञ; **परन्तप** — हे शत्रुहरूका दण्डदाता; **सर्वम्** — सबै; **कर्म** — कर्म; **अखिलम्** — पूर्णतामा; **पार्थ** — हे पृथापुत्र; **ज्ञाने** — ज्ञानमा; **परिसमाप्यते** — समाप्त हुन्छन्।

**हे परन्तप! ज्ञानमय यज्ञ द्रव्यमय यज्ञभन्दा श्रेष्ठ हो। हे पार्थ! अन्तमा सम्पूर्ण कर्ममय यज्ञको समाप्ति दिव्य ज्ञानमा गएर हुन्छ।**

**तात्पर्य :** जीवलाई पूर्ण ज्ञानी बनाउनु नै सम्पूर्ण यज्ञहरूको एकमात्र उद्देश्य हो। ज्ञान पाएपछि जीव भौतिक क्लेशहरूबाट छुट्कारा लिएर अन्त्यमा भगवान्को दिव्य सेवामा (कृष्णभावनामा) लाग्न सक्दछ। यति हुँदाहुँदै पनि यज्ञका यी सम्पूर्ण क्रियाकलापमा केही रहस्यमय कुराहरू छन्, त्यो रहस्यलाई मानिसले बुझ्नु पर्दछ। यज्ञकर्ताको श्रद्धाअनुसार कहिलेकाहीँ यज्ञले विभिन्न रूप धारण गर्दछ। यदि यज्ञकर्ताको श्रद्धा वा विश्वास दिव्य ज्ञानको स्तरमा पुगे त्यस्तो व्यक्तिलाई ज्ञानरहितको द्रव्ययज्ञ गर्ने कर्ताभन्दा श्रेष्ठ मानिन्छ, किनभने ज्ञानरहित सम्पन्न गरिएको यज्ञ भौतिक स्तरमा मात्र सीमित हुन्छ त्यसबाट कुनै आध्यात्मिक लाभ हुँदैन। कृष्णभावनामा पुगेर यथार्थ ज्ञानको अन्त्य हुन्छ, किनभने कृष्णभावना दिव्य ज्ञानको सर्वोच्च अवस्था हो। ज्ञानमा उन्नति नभएसम्म यज्ञ भन्ने कुरा केवल भौतिक क्रियाकलाप मात्र भएर रहन्छ। तर, यदि यज्ञकर्ता दिव्य ज्ञानका स्तरमा पुगेमा यस्ता सम्पूर्ण कर्महरू पूर्ण आध्यात्मिक बन्दछन्। चेतनागत विविधताका आधारमा यस्ता यज्ञीय कर्महरूलाई कहिले कर्मकाण्ड (सकाम कर्म) भनिन्छ, त कहिले ज्ञानकाण्ड (सत्यको अनुसरण गर्ने ज्ञान) भनिन्छ। अतः त्यही यज्ञ श्रेष्ठ हो, जसको अन्त्य ज्ञानमा पुगेर हुन्छ।

**तद्विद्धि प्रणिपातेन परिप्रश्नेन सेवया ।**
**उपदेक्ष्यन्ति ते ज्ञानं ज्ञानिनस्तत्त्वदर्शिनः ॥ ३४ ॥**

**तत्** — विभिन्न यज्ञसम्बन्धी ज्ञानलाई; **विद्धि** — जान्ने प्रयास गर; **प्रणिपातेन** — गुरुका नजिक पुगेर; **परिप्रश्नेन** — विनम्र जिज्ञासाद्वारा; **सेवया** — सेवाद्वारा; **उपदेक्ष्यन्ति** — गुरुले दीक्षा दिनेछन् (उपदेश दिनेछन्); **ते** — तिमीलाई; **ज्ञानम्** — ज्ञानको; **ज्ञानिनः** — आत्मसाक्षात्कार गरेका; **तत्त्वदर्शिनः** — सत्यको दर्शन पाएका व्यक्तिहरू।

**गुरुका नजिक गएर सत्यलाई बुझ्ने प्रयाश गर। विनम्रतापूर्वक गुरुका समक्ष आफ्ना जिज्ञासाहरू राख, गुरुको सेवा गर अनि सत्यको दर्शन पाएका ज्ञानी गुरुले तिमीलाई यथार्थ ज्ञान प्रदान गर्नु हुनेछ।**

**तात्पर्य :** आत्मसाक्षात्कारको मार्ग निस्सन्देह कठिन छ। त्यसैले यहाँ भगवान् हामीलाई सुयोग्य गुरुका निकट जाने सल्लाह दिनु हुन्छ। गुरुहरू स्वयम् भगवान्बाट सुरु भएको शिष्यपरम्परामा आउनु भएको हुन्छ। यो शिष्यपरम्पराको नियम पालन नगरी कुनै पनि व्यक्ति प्रामाणिक गुरु बन्न

सक्दैन। भगवान् आदिगुरु हुनुहुन्छ। अतः शिष्यपरम्पराबाट आएको व्यक्तिले आफ्ना शिष्यलाई भगवान्को सन्देश जस्ताको तस्तै प्रदान गर्न सक्दछन्। आफैँले निर्माण गरेको विधि अपनाएर कसैले पनि आत्मसाक्षात्कार गर्न सक्दैन तर आजभोलिका केही मूर्ख पाखण्डीहरू त्यस्तै गर्दैछन्। *भागवत्* (६.३.१९) मा भनिएको छ—**"धर्मस्तु साक्षात् भगवत्प्रणीतम्"** अर्थात्, धर्ममार्ग सीधै भगवान्द्वारा प्रतिपादित भएको हो। त्यसैले मानसिक चिन्तन वा शुष्क तर्कले मात्र मानिसलाई सही मार्गमा हिँडाउन सहायता गर्दैन, न त ज्ञानका पुस्तकहरू स्वतन्त्र रूपले अध्ययन गरेर मात्र मानिसले आध्यात्मिक जीवनमा प्रगति गर्न सक्दछ। ज्ञान प्राप्त गर्नका लागि मानिस प्रामाणिक गुरुकहा जान पर्दछ। यस्ता गुरुका चरणमा पूर्ण समर्पित हुनु पर्दछ र अहङ्कारशून्य भएर विनम्र सेवकजस्तो बनेर गुरुको सेवा गर्नु पर्दछ। त्यस्ता स्वरूपसिद्ध गुरुहरूको सन्तुष्टि नै आध्यात्मिक जीवनमा प्रगतिको रहस्य हो। जिज्ञासा र विनम्रताको राम्रो मेल भए पछि आध्यात्मिक ज्ञान प्राप्त गर्न सकिन्छ। सेवाभाव र विनम्रताबिना विद्वान् गुरुसँग गरिएको जिज्ञासा प्रभावकारी हुँदैन। गुरुद्वारा गरिने परीक्षामा शिष्य उत्तीर्ण हुनु पर्दछ। यदि गुरुले शिष्यमा वास्तविक ज्ञानको इच्छा भएको देखे पछि उहाँले त्यस्ता सुयोग्य शिष्यलाई स्वतः आध्यात्मिक ज्ञानको आशीर्वाद दिनुहुन्छ। यो श्लोकमा अन्धअनुयायी हुने कुराको र निरर्थक जिज्ञासाको निन्दा गरिएको छ। शिष्यले गुरुबाट विनम्रतापूर्वक सुन्नेमात्र होइन, उसले त विनम्रता, सेवा र जिज्ञासामार्फत गुरुबाट स्पष्ट ज्ञान प्राप्त गर्न सक्नु पर्दछ। एउटा सुयोग्य गुरु आफ्ना शिष्यप्रति स्वभावले अत्यन्त दयालु हुन्छन्। त्यसैले शिष्य विनम्रतापूर्वक सधैँ गुरु-सेवामा तत्पर रहेका अवस्थामा गुरुशिष्यबीच जिज्ञासा र ज्ञानको विनिमय (आदान-प्रदान) परिपूर्ण हुन्छ।

**यज्ज्ञात्वा न पुनर्मोहमेवं यास्यसि पाण्डव ।**
**येन भूतान्यशेषाणि द्रक्ष्यस्यात्मन्यथो मयि ॥ ३५ ॥**

**यत्** — जसलाई; **ज्ञात्वा** — जानेर; **न** — हुँदैन; **पुनः** — फेरि; **मोहम्** — मोह; **एवम्** — यसरी; **यास्यसि** — जानेछौ; **पाण्डव** — हे पाण्डुपुत्र; **येन** — जसद्वारा; **भूतानि** — जीवात्माहरू; **अशेषाणि** — सबै; **द्रक्ष्यसि** — देख्नेछौ; **आत्मानि** — परमात्मामा; **अथ** — अथवा अर्को शब्दमा; **मयि** — ममा।

**आत्मसाक्षात्कार गरेका व्यक्तिहरूबाट वास्तविक ज्ञान पाइसकेपछि तिमी फेरि कहिल्यै यस्तो मोहमा पर्नेछैनौ, किनभने यो ज्ञानद्वारा तिमीले सबै जीव परमात्माका अंश हुन् तथा तिनीहरू सबै मेरा हुन् भन्ने अनुभव गर्न सक्दछौ।**

**तात्पर्य :** आत्मसाक्षात्कार गरेका व्यक्तिबाट ज्ञान प्राप्त गर्नुको परिणामस्वरूप व्यक्तिले वस्तुको यथार्थ जानकारी प्राप्त गर्दछ र साथै सम्पूर्ण जीवात्मा भगवान् श्रीकृष्णका अंश हुन् भन्ने कुरा बुझ्दछ। भगवान् श्रीकृष्णभन्दा भिन्न अस्तित्वको बोध हुनुलाई माया भनिन्छ। 'मा' भनेको होइन, 'या' भनेको यो, अर्थात् यो होइन भन्ने भाव नै माया हो। केही मानिसहरूका विचारमा भगवान् श्रीकृष्ण एकजना महान् ऐतिहासिक व्यक्तित्व हुनुहुन्छ, उहाँसँग हाम्रो केही सम्बन्ध छैन र परब्रह्म निराकार छ। वास्तवमा *भगवद्गीताका* अनुसार निराकार ब्रह्म भन्नु भगवान् श्रीकृष्णको आफ्नै तेज हो। श्रीकृष्ण भगवान् हुनुहुन्छ र प्रत्येक वस्तुका कारण हुनुहुन्छ। ब्रह्म संहितामा पनि भनिएको छ— श्रीकृष्ण भगवान् हुनुहुन्छ र सबै कारणका पनि कारण हुनुहुन्छ। लाखौंलाख अवतारहरू उहाँका विस्तार मात्र हुन्। यसै गरी सम्पूर्ण जीवात्माहरू भगवान् श्रीकृष्णका अंश हुन्। भगवान् श्रीकृष्णका धेरै अंशहरूको विस्तारमा उहाँको आफ्नो छुट्टै अस्तित्व हराउन पुग्दछ भन्ने मायावादी दार्शनिकहरूको विचार झूटो हो। यो भौतिकवादी विचार हो। भौतिक जगत्मा यदि कुनै वस्तुलाई विखण्डित पारेमा त्यसको मूलस्वरूप नष्ट हुन्छ। यस्तो अनुभव हामीले गरेका छौँ। तर, परमात्माका स्तरमा एकमा एक जोड्दा एक हुन्छ र एकमा एक घटाउँदा पनि एक नै बाँकी रहन्छ भन्ने मान्यता मायावादीहरूमा भेटिँदैन। वास्तवमा परब्रह्मको स्वरूप यस्तै छ।

ब्रह्म-विज्ञानको पर्याप्त ज्ञान नहुनाले हामी मायाद्वारा ढाकिएका छौँ, त्यसैले हामीले आफूलाई भगवान् श्रीकृष्णभन्दा भिन्न ठान्दछौँ। हुनत हामी भगवान् श्रीकृष्णबाट छुट्टिएका अंश हौँ तैपनि हामी श्रीकृष्णभन्दा भिन्न होइनौँ। व्यक्ति-व्यक्तिमा देखिने शारीरिक भिन्नता माया हो, वास्तविक यथार्थ होइन। हामी सबैको एउटै अर्थ भगवान् श्रीकृष्णलाई सन्तुष्ट पार्नु हो। मायाका कारणले गर्दा नै अर्जुनले भगवान् श्रीकृष्णसँगको आफ्नो शाश्वत आध्यात्मिक सम्बन्धभन्दा आफ्ना पारिवारिकजनसँग रहेको क्षणिक शारीरिक सम्बन्धलाई महत्त्वपूर्ण मानेका हुन्। भगवान् श्रीकृष्णको नित्यदास भएका कारणले नै जीवात्मा श्रीकृष्णबाट भिन्न हुन सक्दैन। गीताको सम्पूर्ण उपदेश यतैतिर लक्षित छ। आफूलाई भगवान् श्रीकृष्णबाट अलग सम्झनु नै माया हो। जीवात्मा परब्रह्मको भिन्न अंश हो। उसले केही विशेष उद्देश्य पूर्ण गर्नु पर्दछ। तर, त्यही उद्देश्य पूरा गर्न बिर्सिएका कारणले नै जीवले अनादि कालदेखि कहिले मानिस, कहिले पशु र कहिले देवता आदिका शरीरमा रहनु परेको हो।

यो शारीरिक भिन्नता भगवान्को दिव्य सेवामा लाग्न बिर्सिएकाले भएको हो। अहिले यदि कोही कृष्णभावनामा रहेर भगवान्को दिव्य सेवामा संलग्न भएमा

त्यसले मायाबाट तुरुन्त मुक्ति पाउन सक्दछ। यस किसिमको ज्ञान मानिसले प्रामाणिक गुरुबाट मात्रै पाउन सक्दछ र जीव पनि भगवान् श्रीकृष्णजस्तै हो भन्ने भ्रमलाई हटाउन सक्दछ। परमात्मा श्रीकृष्ण सम्पूर्ण जीवात्माका परमआश्रय हुनुहुन्छ र यो आश्रयलाई त्यागेमा जीव मायाद्वारा मोहित हुन्छ, किनभने मायामा परेपछि उसले आफूलाई श्रीकृष्णभन्दा भिन्न सम्झिन थाल्दछ। केवल यही नै पूर्णज्ञान हो। भौतिक स्वरूपका विभिन्न मापदण्डअन्तर्गत रहँदा जीवले भगवान् श्रीकृष्णलाई बिर्सिन्छ तर जब यस्ता मोहग्रस्त जीव कृष्णभावनाका सम्पर्कमा आउँदछन् अनि आफूहरू पुनः मुक्तिका पथमा आइपुगेको कुरा उनीहरूले थाहा पाउँदछन्। यो कुराको पुष्टि *श्रीमद्भागवत्* (२.१०.६) मा यसरी गरिएको छ—

*'मुक्तिर्हित्वान्यथारूपं स्वरूपेण व्यवस्थितिः ।*

मुक्तिको अर्थ आफूलाई भगवान् श्रीकृष्णको नित्य दास सम्झेर आफ्नो स्वाभाविक अवस्थामा रहनु हो।

**अपि चेदसि पापेभ्यः सर्वेभ्यः पापकृत्तमः ।**
**सर्वं ज्ञानप्लवेनैव वृजिनं सन्तरिष्यसि ॥ ३६ ॥**

**अपि** — पनि; **चेत्** — यदि; **असि** — तिमी छौ; **पापेभ्यः** — पापीहरूभन्दा; **सर्वेभ्यः** — सबै; **पापकृत्तमः** — सबैभन्दा ठुलो पापी; **सर्वम्** — यस्ता सबै पापकर्महरू; **ज्ञानप्लवेन** — दिव्य ज्ञानरूपी डुङ्गाद्वारा; **एव** — निश्चय नै; **वृजिनम्** — दुःखको सागरलाई; **सन्तरिष्यसि** — पूर्णतया पार गर्नेछौ।

**यदि तिमी सम्पूर्ण पापीहरूभन्दा पनि महापापी मानिएका भए पनि दिव्य ज्ञानरूपी डुङ्गामा चढेमा यो दुःखको सागरलाई सजिलै पार गर्न सक्नेछौ।**

**तात्पर्य :** भगवान् श्रीकृष्णसँग रहेको आफ्नो सम्बन्धको स्वाभाविक स्थितिको ज्ञान गर्नु अति उत्तम कुरा हो। यसले अज्ञानको सागरमा पौडिरहेको मानिसलाई उसको जीवनसङ्घर्षबाट तुरुन्त माथि उठाउँदछ। यो भौतिक जगत्लाई कहिले अज्ञानको सागर मानिन्छ र कहिले डँढेलो लागेको जङ्गल। जतिसुकै सिपालु पौडी खेलाडी किन नहोस्, यदि ऊ समुद्रमा छ भने उसको जीवनसङ्घर्ष साह्रै कठोर हुन्छ। यसरी समुद्रमा पौडिँदै जीवनका लागि सङ्घर्ष गरिरहेको व्यक्तिलाई कसैले अलि अगाडि गएर समुद्रबाट बाहिर निकालि दिएमा त्यो व्यक्ति उसको सबैभन्दा ठुलो रक्षक मानिन्छ। भगवान्बाट प्राप्त हुने पूर्णज्ञान नै मुक्तिको मार्ग हो। कृष्णभावनामृतरूपी डुङ्गा पनि अत्यन्त सजिलो छ तर सँगसँगै यो अत्यन्त महान् तथा गम्भीर पनि छ।

**यथैधांसि समिद्धोऽग्निर्भस्मसात्कुरुतेऽर्जुन ।**
**ज्ञानाग्नि सर्वकर्माणि भस्मसात्कुरुते तथा ॥ ३७॥**

**यथा** — जसरी; **एधांसि** — दाउरालाई; **समिद्धः** — जलिरहेको; **अग्निः** — आगोले; **भस्मसात्** — खरानी; **कुरुते** — गराउँदछ; **अर्जुन** — हे अर्जुन; **ज्ञान अग्निः** — ज्ञानरूपी अग्निले; **सर्वकर्माणि** — सांसारिक कर्मका सम्पूर्ण फललाई; **भस्मसात्** — खरानी; **कुरुते** — पार्दछ; **तथा** — त्यसै प्रकारले।

**हे अर्जुन! जसरी जलिरहेको आगोले सुकेको दाउरालाई खरानी पारिदिन्छ, त्यसै गरी ज्ञानरूपी अग्निले भौतिक कर्मका सम्पूर्ण फललाई डढाएर भस्म पारिदिन्छ।**

**तात्पर्य :** आत्मा र परमात्मासम्बन्धी पूर्णज्ञान र त्यस ज्ञानको सम्बन्धलाई यहाँ जलेको आगोसँग तुलना गरिएको छ। यो ज्ञानरूपी अग्निले सम्पूर्ण पापकर्मका फललाई मात्र होइन पुण्यकर्मका फललाई पनि डढाइदिन्छ। कर्मफलका धेरै अवस्थाहरू छन्— शुभारम्भ, बीज, सञ्चित आदि। तर, जीवात्मालाई आफ्नो स्वरूपको ज्ञान हुनासाथ कर्मफलहरू ती पूर्ववर्ती कर्म हुन् वा परवर्ती, सबै भस्म हुन्छन्। वैदिक साहित्यमा अर्थात् वृहदारण्यकोपनिषद् (४.४.२२) मा भनिएको छ— **"उभे उहैवैषएते तरत्यमृतः साध्वसाधूनी"** अर्थात् मानिसले पाप तथा पुण्य दुवै प्रकारका कर्मफलमाथि विजय प्राप्त गर्दछ।

**न हि ज्ञानेन सदृशं पवित्रमिह विद्यते ।**
**तत्स्वयं योगसंसिद्धः कालेनात्मनि विन्दति ॥ ३८॥**

**न** — छैन; **हि** — निश्चय नै; **ज्ञानेन** — ज्ञानसँगको; **सदृशं** — तुलनामा; **पवित्रम्** — पवित्र; **इह** — यस जगत्मा; **विद्यते** — छ; **तत्** — त्यो; **स्वयम्** — आफैँ; **योग** — भक्तिमा; **संसिद्धः** — जो परिपक्व छ; **कालेन** — यथासमय; **आत्मनि** — आफ्नै आत्मामा; **विन्दति** — आस्वादन गर्दछ, भोग्दछ।

**यस संसारमा दिव्य ज्ञान जत्तिको महान् र पवित्र वस्तु अरू केही छैन। यस्तो ज्ञान सम्पूर्ण योगको पाकेको फल हो। जो व्यक्ति भक्ति सेवामा सक्षम र पूर्ण हुन्छ त्यसैले यथासमय आफैंभित्र यो ज्ञानको आस्वादन गर्दछ।**

**तात्पर्य :** जब हामी दिव्य ज्ञानका सम्बन्धमा कुरा गरिरहेका हुन्छौँ त्यससमय हाम्रो प्रयोजन अध्यात्म ज्ञानसँग हुन्छ। हुन पनि दिव्य ज्ञान जस्तो महान् र विशुद्ध वस्तु अरू केही छैन। अज्ञान नै हाम्रो बन्धनको कारण हो र ज्ञान मुक्तिको कारण हो। यो ज्ञान भक्ति सेवाको परिपक्व फल हो। यस किसिमको दिव्य ज्ञानको अवस्थामा पुगेका व्यक्तिका लागि अरू ठाउँमा

शान्ति खोज्नुपर्ने आवश्यकता नै पर्दैन। त्यस्ता व्यक्तिले आफैंभित्र शान्तिको आस्वादन गरिरहेका हुन्छन्। अर्को शब्दमा भन्दा ज्ञान तथा शान्तिको अवसान कृष्णभावनामा पुगेर हुन्छ। *भगवद्गीताको* अन्तिम सन्देश त्यही हो।

**श्रद्धावाँल्लभते ज्ञानं तत्परः संयतेन्द्रियः ।**
**ज्ञानं लब्ध्वा परां शान्तिमचिरेणाधिगच्छति ॥ ३९ ॥**

**श्रद्धावान्** — श्रद्धालु व्यक्तिले; **लभते** — प्राप्त गर्दछ; **ज्ञानम्** — ज्ञान; **तत्परः** — यसमा अत्यन्त अनुरक्त; **संयत** — संयमित; **इन्द्रियः** — इन्द्रियहरू; **ज्ञानम्** — ज्ञान; **लब्ध्वा** — पाएर; **पराम्** — अलौकिक; **शान्तिम्** — शान्ति; **अचिरेण** — अति छिटो; **अधिगच्छति** — प्राप्त गर्दछ।

**जुन श्रद्धालु व्यक्ति दिव्य ज्ञानका लागि समर्पित छ र जसले इन्द्रियहरूलाई वशमा राखेको छ त्यही नै यो ज्ञान प्राप्त गर्ने अधिकारिक व्यक्ति हो र यस्तो ज्ञान पाउनासाथ उसले तुरुन्तै आध्यात्मिक शान्ति प्राप्त गर्दछ।**

**तात्पर्य :** भगवान् श्रीकृष्णमा दृढ विश्वास राख्ने व्यक्तिले नै यस किसिमको कृष्णभावनाभावित ज्ञान प्राप्त गर्न सक्दछ। कृष्णभावनाभावित भएर कर्म गर्नाले नै परमसिद्धि पाउन सकिन्छ भनेर विचार गर्ने व्यक्ति नै श्रद्धावान् मानिस हो। यस्तो ज्ञान श्रद्धा र भक्तिले पाउन सकिन्छ र **"हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे, हरे राम हरे राम राम राम हरे हरे"** यो मन्त्रको जप गर्नाले पनि उक्त ज्ञान प्राप्त हुन्छ। किनभने, यसरी भगवान्‌को नाम जप गर्दा हृदयभित्र जमेको सम्पूर्ण भौतिक मैलो सफा हुन्छ। यसबाहेक मानिसले आफ्ना इन्द्रियहरूलाई संयममा पनि राख्नु पर्दछ। जुन मानिस भगवान् श्रीकृष्णप्रति श्रद्धावान् छ र जसले आफ्ना इन्द्रियहरूलाई संयममा राख्दछ त्यसले छिटै नै कृष्णभावनामृतको पूर्णज्ञान प्राप्त गर्दछ।

**अज्ञश्चाश्रद्दधानश्च संशयात्मा विनश्यति ।**
**नायं लोकोऽस्ति न परो न सुखं संशयात्मनः ॥ ४० ॥**

**अज्ञः** — मूर्ख; जसलाई शास्त्रको ज्ञान छैन; **च** — तथा; **अश्रद्दधानः** — जसलाई शास्त्रमा श्रद्धा छैन; **च** — पनि; **संशयात्मा** — शङ्कालु व्यक्ति; **विनश्यति** — नष्ट हुन्छ; **न** — न; **अयम्** — यसमा; **लोकः** — जगत्; **अस्ति** — छ; **न** — न त; **परः** — आगामी जीवनमा; **न** — छैन; **सुखम्** — सुख; **संशयात्मनः** — शङ्का गर्ने व्यक्तिका लागि।

**शास्त्रप्रति शङ्का गर्ने अज्ञानी र श्रद्धाविहीन व्यक्तिले ईश्वरीय चेतना प्राप्त गर्न सक्दैन। त्यस्तो व्यक्ति तल झर्दछ। शंकालु व्यक्तिले न त यस लोकमा सुख पाउँदछ न त परलोकमा नै।**

**तात्पर्य :** *भगवद्गीता* सम्पूर्ण प्रामाणिक शास्त्रहरूमध्ये सर्वश्रेष्ठ हो। जो व्यक्ति पूर्णतया पशुतुल्य छन् तिनमा न प्रामाणिक शास्त्रप्रति कुनै श्रद्धा हुन्छ न त शास्त्रको ज्ञान नै हुन्छ। कतिपयलाई शास्त्रको केही ज्ञान हुन्छ र कहिलेकाहीँ शास्त्रीय वचनहरू उद्धरण पनि गर्दछन्, तापनि तिनीहरूमा ती वचनहरूप्रति वास्तविक विश्वास हुँदैन। कतिपय मानिसहरू जसले *भगवद्गीतालाई* शास्त्रका रूपमा श्रद्धा त गर्दछन् तर भगवान् श्रीकृष्णको पूजा आराधनामा विश्वास गर्दैनन्, यस्ता व्यक्तिहरू कृष्णभावनामृतमा रहन सक्दैनन् र पतित हुन्छन्। माथि उल्लिखित सबै प्रकारका व्यक्तिहरू, जो श्रद्धालु छैनन् र सधैँ शङ्का मात्र गरिरहन्छन् तिनीहरूको कहिल्यै आध्यात्मिक प्रगति हुँदैन। भगवान् र भगवान्का वचनमा श्रद्धा नगर्ने व्यक्तिले न यस लोकमा न त परलोकमा नै केही सुख पाउन सक्दछन्। तिनले कुनै किसिमको पनि सुख पाउँदैनन्। अतः मानिसले श्रद्धापूर्वक प्रामाणिक शास्त्रका नियमहरूको अनुसरण गर्नु पर्दछ अनि मात्र ज्ञानका स्तरमा पुगिन्छ। ज्ञानले मात्रै उसलाई आध्यात्मिक अनुभूतिको दिव्य स्तरमा पुऱ्याउन सहायता गर्दछ। अर्को शब्दमा शंकाले ग्रस्त मानिसले आध्यात्मिक उत्थानका क्षेत्रमा कुनै ठाउँ पाउँदैन। अतः मानिसले शिष्यपरम्पराबाट आएका महान् आचार्यहरूका चरणचिन्हको अनुसरण गर्नु पर्दछ। यसरी नै उनीहरूले सफलता पाउँदछन्।

**योगसंन्यस्तकर्माणं ज्ञानसञ्छिन्नसंशयम् ।**
**आत्मवन्तं न कर्माणि निबध्नन्ति धनञ्जय ॥४१॥**

**योग** — कर्मयोगमय भक्ति सेवाद्वारा; **सन्यस्त** — विरक्तः संन्यासी; **कर्माणम्** — कर्मका फलहरूलाई; **ज्ञान** — ज्ञानद्वारा; **सञ्छिन्न** — काट; **संशयम्** — सन्देहलाई; **आत्मवन्तम्** — आत्मामा अवस्थित; **न** — होइन; **कर्माणि** — कर्महरूले; **निबध्नन्ति** — बाँध्दछन्; **धनञ्जय** — हे ऐश्वर्यविजेता, अर्जुन।

**जो मानिस आफ्ना कर्मफललाई त्यागेर भक्तिसेवामा लाग्दछ र दिव्य ज्ञानद्वारा जसका शंकाहरू नष्ट भएका छन्, त्यो नै आत्मपरायण व्यक्ति हो। हे धनञ्जय! यस्तो व्यक्ति कर्मफलका बन्धनले बाँधिदैन।**

**तात्पर्य :** जसले स्वयम् भगवान् श्रीकृष्णले भन्नु भएजस्तै *भगवद्गीताका* उपदेशहरूलाई पालन गर्दछ, त्यो व्यक्ति दिव्य ज्ञानका कृपाले सम्पूर्ण शंकाबाट मुक्त हुन्छ। पूर्णतः कृष्णभावनामा रहँदा मानिसलाई म भगवान्को अंश हूँ भन्ने ज्ञान हुन्छ, त्यसैले ऊ पहिलेदेखि नै आत्मज्ञानमा स्थापित भइसकेको हुन्छ। यसरी ऊ कर्मका बन्धनभन्दा माथि हुन्छ। यसमा कुनै शंका छैन।

**तस्मादज्ञानसम्भूतं हृत्स्थं ज्ञानासिनात्मनः ।**
**छित्त्वैनं संशयं योगमातिष्ठोत्तिष्ठ भारत ॥ ४२ ॥**

**तस्मात्** — त्यसैले; **अज्ञानसम्भूतम्** — अज्ञानबाट उत्पन्न; **हृत्स्थम्** — हृदयमा रहेको; **ज्ञान** — ज्ञानरूपी; **असिना** — तरवारले; **आत्मनः** — आफ्नो; **छित्वा** — काटेर; **एनम्** — यो; **संशयम्** — सन्देहलाई; **योगम्** — योगमा; **अतिष्ठ** — स्थित होऊ; **उत्तिष्ठ** — युद्धका लागि उठ; **भारत** — हे भरतवंशी अर्जुन।

**अतः हे अर्जुन! अज्ञानका कारणले तिम्रा हृदयमा जुन शंका उठेको छ त्यसलाई ज्ञानरूपी तरवारले काट र योगयुक्त भएर युद्धका लागि उठ।**

**तात्पर्य :** यस अध्यायमा जुन योगपद्धतिको उपदेश दिइएको छ त्यसलाई सनातन योग वा जीवात्माद्वारा गरिने शाश्वत क्रियाकलाप भनिन्छ। यस योगमा यज्ञीय कर्मका दुई विभाग छन्। यीमध्ये पहिलोलाई द्रव्यमय यज्ञ भनिन्छ र दोस्रोलाई आत्मज्ञान भनिन्छ, जुन विशुद्ध आध्यात्मिक कर्म हो। यदि द्रव्यमय यज्ञ आध्यात्मिक अनुभूतिका लागि नगरेमा त्यस्तो यज्ञ एउटा भौतिक कर्ममात्र हुन्छ। तर, कसैले आध्यात्मिक उद्देश्य लिएर वा भक्तिभावमा रहेर यस्तो यज्ञ सम्पन्न गरेमा त्यो एउटा परिपूर्ण यज्ञ हुन्छ।

जब हामी आध्यात्मिक क्रियाकलापका क्षेत्रमा आउँदछौँ त्यससमय यो आध्यात्मिक कर्म पनि दुई वर्गमा विभाजित भएको पाउँदछौँ। यीमध्ये पहिलो आत्मज्ञान वा आफ्नो वैधानिक स्वरूपको ज्ञान र दोस्रो — भगवान्‌सँग सम्बन्धित सत्यको ज्ञान हो। जसले *भगवद्‌गीतामा* वर्णन गरिएका मार्गलाई यथावत् अनुसरण गर्दछ त्यसले आध्यात्मिक ज्ञानका यी दुई महत्त्वपूर्ण विभागलाई सजिलैसँग बुझ्न सक्दछ। उसका लागि भगवान्‌को अंशरूप आत्माका सम्बन्धमा पूर्णज्ञान प्राप्त गर्न कुनै कठिनाइ हुँदैन। यस किसिमको ज्ञान लाभदायक हुन्छ र यस्तो व्यक्तिले भगवान्‌का दिव्य क्रियाकलापहरूलाई सजिलै बुझ्न सक्दछ। यस अध्यायका सुरुमा स्वयम् भगवान्‌ले नै भगवान्‌का दिव्य कर्महरूको चर्चा गर्नुभएको छ। जसले *भगवद्‌गीताको* उपदेशलाई बुझ्न सक्दैन त्यो अश्रद्धालु हो र उसले भगवान्‌द्वारा प्रदान गरिएको आंशिक स्वतन्त्रताको दुरुपयोग गरिरहेको छ भन्ने ठान्नु पर्दछ। यसरी उपदेश दिँदादिँदै पनि जसले सत् चित् आनन्दमय भगवान्‌को वास्तविक स्वभावलाई बुझ्न सक्दैन त्यो निश्चय नै एक नम्बरको मूर्ख हो।

कृष्णभावनाका सिद्धान्तहरूलाई अपनाएर अज्ञानलाई बिस्तारै हटाउन सकिन्छ। देवयज्ञ, ब्रह्मयज्ञ, ब्रह्मचर्य यज्ञ, गृहस्थयज्ञ, इन्द्रियसंयम यज्ञ,

योगाभ्यास यज्ञ, तपोयज्ञ, द्रव्ययज्ञ, ज्ञानयज्ञ (स्वाध्याय यज्ञ) र वर्णाश्रम धर्मभित्र पर्ने सामाजिक विधानहरूमा सहभागी हुनुजस्ता विभिन्न किसिमका यज्ञहरूद्वारा कृष्णभावना जागृत हुन्छ। यी सबै कर्महरू यज्ञको रूपमा चिनिन्छन् र सबै नियमित कर्ममो आधारित छन्। तर, यी सम्पूर्ण क्रियाकलापभित्र रहेको सबभन्दा महत्त्वपूर्ण तत्त्व आत्मसाक्षात्कार हो। आत्मसाक्षात्कारको खोजी गर्ने व्यक्ति नै *भगवद्गीताको* सही विद्यार्थी हो तर जसले भगवान् श्रीकृष्णको प्रामाणिकतामा शंका गर्दछ, त्यो उल्टो झर्दछ, पतित हुन्छ। त्यसैले मानिसलाई सेवा र समर्पणभावका साथ प्रामाणिक गुरुका अधीनमा रहेर *भगवद्गीता* वा अन्य शास्त्रहरूको अध्ययन गर्ने सल्लाह दिइएको छ।

प्रामाणिक गुरु अनन्त कालदेखि नै गुरु-शिष्यपरम्पराबाट आउनु भएको हुन्छ र भगवान्ले दिनुभएको त्यो उपदेशबाट कत्ति पनि विचलित हुनुहुन्छ, जुन उपदेश लाखौँ वर्षअघि भगवान्ले सूर्यदेवलाई दिनुभएको थियो। *भगवद्गीताको* त्यही उपदेश सूर्यदेवबाट पृथ्वीका राजाहरूमार्फत यो पृथ्वीमा आइपुगेको थियो। अतः मानिसले *भगवद्गीताको* मार्गलाई अनुसरण गर्नु पर्दछ जुन स्वयम् गीतामा वर्णन गरिएको छ र त्यस्ता व्यक्तिहरूसँग सावधान रहनु पर्दछ, जो वैयक्तिक आत्मप्रशंसामा लागेर अरूहरूलाई वास्तविक पथबाट विचलित गराइदिन्छन्। भगवान् श्रीकृष्ण निश्चित रूपले परमपुरुष परमात्मा हुनुहुन्छ र उहाँका क्रियाकलापहरू दिव्य छन्। जसले यो यथार्थलाई बुझ्दछ, त्यो व्यक्ति *भगवद्गीताको* अध्ययनको प्रारम्भदेखि नै मुक्तपुरुष हो।

यस प्रकार *श्रीमद्भगवद्गीता* ग्रन्थअन्तर्गत 'दिव्य ज्ञान' शीर्षक चतुर्थ अध्यायको भक्तिवेदान्त तात्पर्य समाप्त भयो ।

## अध्याय-पाँच

# कर्मयोग ( कृष्णभावनामय कर्म )

अर्जुन उवाच
**संन्यासं कर्मणां कृष्ण पुनर्योगं च शंससि ।**
**यच्छ्रेय एतयोरेकं तन्मे ब्रूहि सुनिश्चितम् ॥ १ ॥**

**अर्जुन उवाच** — अर्जुनले भने; **संन्यासम्** — संन्यासको; **कर्मणाम्** — सम्पूर्ण कर्मको; **कृष्ण** — हे कृष्ण; **पुनः** — फेरि; **योगम्** — भक्तियोग; **च** — पनि; **शंससि** — प्रशंसा गर्नु हुन्छ; **यत्** — जुन; **श्रेयः** — बढी लाभदायक छ; **एतयोः** — यी दुईमध्ये; **एकम्** — एउटा; **तत्** — त्यो; **मे** — मेरा लागि; **ब्रूहि** — भन्नुहोस्; **सुनिश्चितम्** — निश्चय गरेर।

**अर्जुनले भने — "हे कृष्ण! मलाई हजुरले पहिले कर्म त्याग गर भन्नुभयो। अहिले फेरि भक्तिपूर्वक कर्म गर्ने आदेश दिँदै हुनुहुन्छ। अब निश्चय गरेर यी दुई मार्गमध्ये मेरा लागि जुन बढी लाभदायक छ, कृपया त्यही मार्गको उपदेश दिनुहोस्।"**

**तात्पर्य :** *भगवद्गीताको* यस पाँचौँ अध्यायमा भगवान्‌ले शुष्क चिन्तनभन्दा भक्तिपूर्वक गरिएको कर्म नै श्रेष्ठ हुन्छ, भन्नुभएको छ। भक्तिको बाटो अरूभन्दा धेरै सजिलो छ, किनभने यो दिव्यस्वरूपा भक्तिले मानिसलाई कर्मका बन्धनबाट छुट्कारा दिन्छ। दोस्रो अध्यायमा आत्मा र आत्माको शरीर- बन्धनको सामान्य ज्ञान दर्शाइएको छ। त्यस अध्यायमा बुद्धियोग अर्थात् भक्तियोगद्वारा यो भौतिक बन्धनबाट कसरी मुक्त हुन सकिन्छ भन्ने कुरा पनि भनिएको छ। तेस्रो अध्यायमा ज्ञानीलाई कुनै कर्म गर्नु पर्दैन भनिएको छ। चौथो अध्यायमा अर्जुनलाई भगवान्‌ले सबै यज्ञहरूको समाप्ति ज्ञानमा गएर हुन्छ भन्नुभएको छ। साथै, त्यसै अध्यायको अन्त्यमा भगवान्‌ले अर्जुनलाई 'पूर्ण ज्ञानले युक्त भएर उठ अनि युद्ध गर' भन्ने सल्लाह पनि दिनुभएको छ। भगवान्‌ले यसरी सँगसँगै भक्तिमय कर्म तथा ज्ञानयुक्त-अकर्मको महत्त्वलाई जोड दिनुभएको देख्दा अर्जुनको सङ्कल्प भ्रमित हुनगएको थियो। अर्जुनले त इन्द्रियद्वारा सम्पादित हुने सबै कर्महरूको परित्यागलाई नै ज्ञानमय संन्यास हो भन्ने ठानेका रहेछन्। तर, कसैले भक्तियोगमा रहेर कुनै कर्म गरेमा त्यसलाई कर्मको त्याग कसरी भन्ने ? अर्जुनको सोचाइ के छ

भने, ज्ञानमय संन्यासका लागि त सबै प्रकारका कर्मबाट मुक्त हुनु पर्दछ, किनभने कर्म र संन्यासमा कुनै किसिमको मेल वा समानता हुन सक्दैन तर यहाँ ज्ञानपूर्वक गरिएको कर्म बन्धनकारी हुँदैन र त्यो अकर्मजस्तै हुन्छ भन्ने कुरा अर्जुनले बुझ्न नसकेजस्तो देखिन्छ। त्यसैले सबै प्रकारका कर्महरूको त्याग गर्ने हो अथवा पूर्ण ज्ञानयुक्त भएर कर्म गर्ने हो, यही कुरा स्पष्ट नभएर अर्जुनले यो प्रश्न गरेका हुन्।

श्रीभगवानुवाच

**संन्यासः कर्मयोगश्च निःश्रेयसकरावुभौ ।**
**तयोस्तु कर्मसंन्यासात् कर्मयोगो विशिष्यते ॥ २ ॥**

**श्रीभगवानुवाच** — भगवान्ले भन्नुभयो; **संन्यासः** — कर्मको त्याग; **कर्मयोगः** — भक्तिमय कर्म; **च** — पनि; **निःश्रेयसकरौ** — मुक्तिपथतिर लैजाने; **उभौ** — दुवै; **तयोः** — दुवैमध्ये; **तु** — तर; **कर्मसंन्यासात्** — सकाम कर्मको त्यागभन्दा; **कर्मयोगः** — भक्तिमय कर्म; **विशिष्यते** — श्रेष्ठ छ।

**श्रीभगवान्ले उत्तर दिनुभयो — मुक्तिका लागि त कर्मको परित्याग तथा भक्तिमय कर्म ( कर्मयोग ) दुवै उत्तम छन् तर यी दुईमध्ये कर्मको परित्यागभन्दा भक्तियुक्त कर्म नै श्रेष्ठ छ।**

**तात्पर्य :** सकाम कर्महरू (इन्द्रियतृप्तिको चाहना गर्नु) नै भवबन्धनका कारण हुन्। मानिसले जबसम्म शारीरिक सुख-सुविधाको स्तर बढाउने उद्देश्यले कर्म गरिरहन्छ तबसम्म ऊ विभिन्न प्रकारका शरीरमा देहान्तरण भइरहन्छ र भवबन्धन पनि पछिसम्म कायमै रहिरहन्छ। यसको पुष्टि भागवत् (५.५.४-६) मा यसरी गरिएको छ—

*नूनं प्रमत्तः कुरुते विकर्मः यदिन्द्रियप्रीतय आपृणोति ।*
*न साधु मन्ये यत आत्मनोऽयमसन्नपि क्लेशद आस देहः ॥*
*पराभवस्तावदबोधजातो यावन्न जिज्ञासत आत्मतत्त्वम् ।*
*यावत्क्रियास्तावदिदं मनो वै कर्मात्मकं येन शरीरबन्धः ॥*
*एवं मनः कर्मवशं प्रयुङ्क्ते अविद्ययात्मन्युपधीय माने ।*
*प्रीतिर्न यावन्मयि वासुदेवे न मुच्यते देहयोगेन तावत् ॥*

"मानिसहरू पागल भएर इन्द्रियतृप्तिका पछि लागिरहेका छन् र यो कष्टमय वर्तमान शरीर तिनीहरूको पूर्वजन्मका सकाम कर्महरूको फल हो भन्ने कुरा बुझिरहेका छैनन्। यो शरीर नाशवान् भएर पनि यसले विभिन्न प्रकारले सधैँ एउटा न एउटा दुःख दिइरहन्छ। त्यसैले इन्द्रियतृप्तिका लागि कर्म गर्नु श्रेयस्कर छैन। मानिसले जबसम्म आफ्नो वास्तविक स्वरूपका विषयमा

जिज्ञासा गर्दैन तबसम्म उसको जीवनलाई असफल मान्नु पर्दछ। आफ्नो स्वरूपको ज्ञान नभएसम्म उसले इन्द्रियतृप्तिका लागि सकाम कर्म गरिरहन्छ। जबसम्म इन्द्रियतृप्तिको यो सोचाइमा ऊ फँसिरहन्छ, तबसम्म उसले एकपछि अर्को शरीर ग्रहण गरिरहनु पर्दछ। उसको मन सकाम कर्ममा व्यस्त रहेर अज्ञानद्वारा प्रभावित भएको भए पनि उसले वासुदेवको भक्तिप्रति प्रेम बढाउनु नै पर्दछ। अनि मात्र उसले सांसारिक बन्धनबाट मुक्त हुने अवसर पाउँदछ।"

त्यसैले म आत्मा हूँ, शरीर होइन भन्ने जानकारी वा ज्ञान मात्र पनि मुक्तिका लागि पर्याप्त हुँदैन। आत्माको स्तरमा रहेर मानिसले कर्म गर्नु पर्दछ अन्यथा भवबन्धनबाट छुट्कारा पाउने कुनै अर्को उपाय छैन। कृष्णभावनाभावित भएर गरिएका कर्मलाई सकाम कर्म भनिँदैन। पूर्ण ज्ञानले युक्त भएर गरिएका कर्महरू वास्तविक ज्ञान बढाउने हुन्छन्। कृष्णभावनाभावित नभई केवल कर्म त्याग मात्र गरेर बद्ध जीवको हृदय शुद्ध हुँदैन। जबसम्म हृदय शुद्ध हुँदैन तबसम्म मानिसलाई सकाम कर्मले तानिरहन्छ। तर, कृष्णभावनाभावित कर्मले कर्तालाई स्वतः सकाम कर्मको प्रतिफलबाट मुक्त गराउन सहयोग गर्दछ, फलस्वरूप उसलाई फेरि यो सांसारिक दलदलमा फँस्नु पर्दैन। अतः कृष्णभावनाभावित भएर गरिने कर्म संन्यासभन्दा धेरै श्रेष्ठ हुन्छ, किनभने संन्यासमा सधैँ पतन हुने सम्भावना रहिरहन्छ। कृष्णभावनाले युक्त नभएको संन्यास सधैँ अपूर्ण रहन्छ। श्रील रूप गोस्वामीले भक्तिरसामृत सिन्धु (१.२.२५८) मा यसको पुष्टि यसरी गर्नुभएको छ—

*प्रापञ्चिकतया बुद्ध्या हरिसम्बन्धिवस्तुनः ।*
*मुमुक्षुभिः परित्यागो वैराग्यं फल्गु कथ्यते ॥*

"यदि मुक्तिको चाहना राख्ने व्यक्तिले श्रीभगवान्सँग सम्बन्धित वस्तुहरूलाई भौतिक वस्तु सम्झेर परित्याग गरे त्यसको त्यो संन्यासलाई अपूर्ण ठानिन्छ।" संन्यास त्यस समय पूर्ण मानिन्छ जब यो संसारको प्रत्येक वस्तु भगवान्को हो र कुनै पनि वस्तुको स्वामित्वको दाबी भगवान्बाहेक अरू कसैले गर्न सक्दैन भन्ने ज्ञान मानिसलाई हुन्छ। वास्तवमा कुनै पनि वस्तु भगवान्बाहेक अरू कसैको हुन नै सक्दैन भन्ने ज्ञान हुनासाथ संन्यास वा त्याग भन्ने कुरा नै समाप्त हुन्छ, मानिसले यो कुरा बुझ्ने प्रयास गर्नु पर्दछ। जसले यो सबै सम्पत्ति भगवान् श्रीकृष्णको हो भन्ने विश्वास गर्दछ त्यही व्यक्ति नित्य संन्यासी हो। प्रत्येक वस्तु भगवान् श्रीकृष्णको भएका हुनाले त्यसको उपयोग पनि भगवान् श्रीकृष्णको सेवाका निमित्त गरिनु पर्दछ। यसरी कृष्णभावनाभावित भएर गरिने पूर्ण कर्महरू मायावादी संन्यासीको नक्कली वैराग्यभन्दा धेरै उत्तम ठानिन्छ।

**ज्ञेयः स नित्यसंन्यासी यो न द्वेष्टि न काङ्क्षति ।**
**निर्द्वन्द्वो हि महाबाहो सुखं बन्धात्प्रमुच्यते ॥ ३ ॥**

**ज्ञेयः** — सम्झिनु पर्दछ; **सः** — त्यो; **नित्य** — सधैँ; **संन्यासी** — संन्यासी; **यः** — जो; **न** — न त कहिल्यै; **द्वेष्टि** — घृणा गर्दछ; **न** — न त; **काङ्क्षति** — इच्छा गर्दछ; **निर्द्वन्द्वः** — सम्पूर्ण द्वैतभावबाट मुक्त; **हि** — निश्चय नै; **महाबाहो** — हे महाबाहु (बलिष्ठ भुजा भएका) अर्जुन; **सुखम्** — सुखपूर्वक; **बन्धात्** — बन्धनबाट; **प्रमुच्यते** — पूर्णतया मुक्त हुन्छ।

**कर्मफललाई घृणा पनि नगर्ने र कर्मफलको इच्छा पनि नराख्ने व्यक्तिलाई नित्यसंन्यासी भन्नु पर्दछ। हे महाबाहु अर्जुन! यस्तो मानिसले सम्पूर्ण द्वन्द्वबाट रहित भएर भवबन्धनलाई सजिलैसँग पार गर्दछ र यसबाट ऊ पूर्णतया मुक्त पनि हुन्छ।**

**तात्पर्य :** पूर्णतया कृष्णभावनाभावित पुरुष नित्यसंन्यासी हुन्छ, किनभने उसले न आफूले गरेका कर्मको फललाई घृणा गर्दछ न त त्यसको आकाङ्क्षा नै राख्दछ। यस्तो संन्यासी भगवान्‌को दिव्य प्रेमाभक्ति-परायण भएर पूर्णज्ञानी हुन्दछ, किनभने उसले भगवान् श्रीकृष्णसँग सम्बन्धित हुनु नै आफ्नो वास्तविक स्वरूप हो भन्ने बुझ्दछ। श्रीकृष्ण पूर्ण हुनुहुन्छ र म उहाँको अंश मात्र हूँ भन्ने कुरा उसलाई राम्रोसँग अनुभूति भएको हुन्छ। यस्तो ज्ञान पूर्ण ज्ञान हो, किनभने यो परिमाणात्मक र गुणात्मक रूपले सही छ। भगवान् श्रीकृष्णका साथमा एकाकार हुनु भन्ने धारणा गलत हो, किनभने अंश कहिल्यै पनि पूर्णको बराबर हुन सक्दैन। एकता भन्ने कुरा गुणमा हुन्छ, गुणको मात्रामा हैन, यो नै सही ज्ञान हो, यही दिव्य ज्ञान हो। यसैद्वारा मानिस स्वयम्‌मा परिपूर्ण हुन्छ, उसलाई न कुनै वस्तुको आकाङ्क्षा हुन्छ न कसैको शोक हुन्छ। उसको मनमा कुनै प्रकारको द्वैतभाव रहँदैन किनभने ऊ जे गर्दछ, भगवान् श्रीकृष्णको निमित्त गर्दछ। यसरी द्वैतभावरहित भएर ऊ यो संसारमा रहँदारहँदै पनि भौतिक जगत्‌बाट मुक्त हुन्छ।

**सांख्ययोगौ पृथग्बालाः प्रवदन्ति न पण्डिताः ।**
**एकमप्यास्थितः सम्यगुभयोर्विन्दते फलम् ॥ ४ ॥**

**सांख्य** — भौतिक जगत्‌को विश्लेषणात्मक अध्ययन; **योगौ** — भक्तिपूर्ण कर्म; **पृथक्** — भिन्न; **बालाः** — अल्पज्ञ; **प्रवदन्ति** — भन्दछन्; **न** — होइन; **पण्डिताः** — विद्वान्‌ले; **एकम्** — एउटामा; **अपि** — पनि; **आस्थितः** — स्थित भएर; **सम्यक्** — पूर्णतया; **उभयोः** — दुवैको; **विन्दते** — भोग गर्दछ; **फलम्** — फल।

**अज्ञानीहरू मात्र भक्ति ( कर्मयोग ) लाई भौतिक जगत्को विश्लेषणात्मक अध्ययन ( साङ्ख्य ) भन्दा भिन्दै ठान्दछन्। तर, जो वास्तवमा ज्ञानी छन् तिनीहरूको भनाइअनुसार त यी दुईमध्ये कुनै एउटा बाटोमा राम्रोसँग लाग्ने व्यक्तिले दुवै प्रकारको फल प्राप्त गर्दछ।**

**तात्पर्य :** भौतिक जगत्को विश्लेषणात्मक अध्ययन (साङ्ख्य) को उद्देश्य आत्माको अस्तित्वलाई खोज्नु हो। यस भौतिक जगत्का आत्मा भगवान् विष्णु वा परमात्मा हुनुहुन्छ। भगवान्को भक्ति भन्नु नै परमात्माको सेवा हो। एउटा विधिले वृक्षको जरा पत्ता लगाइन्छ अर्को विधिले जरामा सिँचाइ पनि गरिन्छ। साङ्ख्य दर्शनको सच्चा विद्यार्थीले जगत्को मूलाधारको रूपमा भगवान् विष्णुलाई चिन्दछ अनि ज्ञानको पूर्णताद्वारा आफूलाई भगवान्को सेवामा लगाउँदछ। तसर्थ यी दुवैमा कुनै भिन्नता छैन, किनभने दुवैको उद्देश्य भगवान् विष्णुलाई प्राप्त गर्नु हो। परमउद्देश्यलाई नचिनेका मानिसहरूले मात्र साङ्ख्य र कर्मयोगको उद्देश्य एउटै होइन भन्दछन् तर जो विद्वान् छन् तिनीहरू यी दुवै प्रक्रियाहरूको उद्देश्य एउटै हो भन्ने जान्दछन्।

**यत्सांख्यैः प्राप्यते स्थानं तद्योगैरपि गम्यते ।**
**एकं सांख्यं च योगं च यः पश्यति स पश्यति ॥ ५ ॥**

**यत्** — जुन; **सांख्यैः** — साङ्ख्य दर्शनद्वारा; **प्राप्यते** — प्राप्त हुन्छ; **स्थानम्** — स्थान; **तत्** — त्यो; **योगैः** — भक्तियोगद्वारा; **अपि** — पनि; **गम्यते** — प्राप्त गर्न सकिन्छ; **एकम्** — एउटै; **सांख्यम्** — विश्लेषणात्मक अध्ययनलाई; **च** — तथा; **योगम्** — भक्तिमय कर्म; **च** — तथा; **यः** — जो; **पश्यति** — देख्दछ; **सः** — त्यसले; **पश्यति** — देख्दछ।

**साङ्ख्ययोगद्वारा जुन अवस्थालाई प्राप्त गर्न सकिन्छ त्यही अवस्था भक्तिमय कर्मद्वारा पनि प्राप्त गर्न सकिन्छ। अतः जसले यीः साङ्ख्य र भक्ति योग दुवै मार्गलाई एउटै देख्दछ त्यही व्यक्ति यथार्थमा द्रष्टा हो।**

**तात्पर्य :** दार्शनिक अनुसन्धानको वास्तविक उद्देश्य नै जीवनको परमलक्ष्य प्राप्त गर्नु हो। जीवनको परमलक्ष्य भनेको आत्मसाक्षात्कार भएको हुनाले यी दुवै प्रक्रियाबाट प्राप्त हुने परिणाममा कुनै भिन्नता छैन। साङ्ख्य दर्शनको अनुसन्धानबाट के निष्कर्षमा पुग्न सकिन्छ भने, यो जीव भौतिक जगत्को अंश नभएर पूर्ण परमात्माको अंश हो। अतएव भौतिक जगत्सँग जीवात्माको कुनै सरोकार छैन। उसका सम्पूर्ण क्रियाकलापहरूको सम्बन्ध त परमेश्वरसँग हुनु पर्दछ। कृष्णभावनामा रहेर कर्म गरिरहेका समयमा मात्र ऊ आफ्नो वास्तविक स्वरूपमा रहेको हुन्छ। साङ्ख्य विधिअनुसार मानिसले पदार्थको आसक्ति

छोड्नु पर्दछ र भक्तियोगका विधिअनुसार उसले कृष्णभावनायुक्त कर्ममा अनुरक्त हुनु पर्दछ। साँच्चै भन्दा दुवै प्रक्रियाहरू समान किसिमका छन्। तैपनि सतही रूपमा हेर्दा एउटा प्रक्रिया आसक्तिपूर्ण देखिन्छ र अर्को प्रक्रिया अनासक्तिपूर्ण देखिन्छ। वास्तवमा पदार्थप्रति अनासक्ति र भगवान् श्रीकृष्णप्रति आसक्ति भनेको एउटै कुरा हो। जसले यस्तो देख्न सक्दछ त्यसले नै वस्तुलाई यथार्थ रूपमा देखेको मानिन्छ।

**संन्यासस्तु महाबाहो दुःखमाप्तुमयोगतः ।**
**योगयुक्तो मुनिर्ब्रह्म न चिरेणाधिगच्छति ॥ ६ ॥**

**संन्यासः** — संन्यास आश्रम; **तु** — तर; **महाबाहो** — हे महाबाहु! (बलिष्ठ भुजा भएका) अर्जुन; **दुःखम्** — दुःख; **आप्तुम्** — द्वारा प्रभावित; **अयोगतः** — भक्तिबिना; **योगयुक्तः** — भक्तिमा लागेको; **मुनिः** — चिन्तक; **ब्रह्म** — ब्रह्मलाई (परमेश्वरलाई); **नचिरेण** — चाँडै; **अधिगच्छति** — प्राप्त गर्दछ।

**भगवान्को भक्ति नगरी केवल कर्मको परित्याग मात्र गरेर कोही पनि सुखी हुन सक्दैन तर भक्तिपूर्ण कर्ममा लागेको विचारवान् व्यक्तिले परमेश्वरलाई चाँडै प्राप्त गर्न सक्दछ।**

**तात्पर्य :** संन्यासी दुई प्रकारका हुन्छन्। १. साङ्ख्य दर्शनको अध्ययनमा लागेका मायावादी संन्यासी र २. वेदान्तसूत्रको यथार्थ भाष्य भागवत्-दर्शनको अध्ययनमा लागेका वैष्णव संन्यासी। हुनत वेदान्तसूत्रको अध्ययन मायावादी संन्यासीहरू पनि गर्दछन् तर तिनीहरू शङ्कराचार्यद्वारा प्रतिपादित शारीरिक भाष्यमा अल्झेका हुन्छन्। यता भागवत् सम्प्रदायका विद्यार्थीहरू पाञ्चरात्रीकी विधिअनुसार भगवान्को भक्तिमा लागेका हुन्छन् र यसरी वैष्णव संन्यासीहरूले विभिन्न प्रकारका कार्यहरूद्वारा भगवान्को दिव्य सेवा गर्नु पर्दछ। वैष्णव संन्यासीहरूलाई भौतिक कार्यसँग कुनै सरोकार हुँदैन तर पनि भगवान्का भक्तिका लागि तिनीहरू धेरै प्रकारका कार्य गरिरहन्छन्। तर, मायावादी संन्यासीहरू साङ्ख्य तथा वेदान्तको अध्ययन र चिन्तनमा लागिरहेर पनि भगवान्को दिव्य भक्तिमय आनन्द प्राप्त गर्नुबाट वञ्चित हुन्छन्। तिनीहरूमध्ये कतिपय त ब्रह्म-चिन्तनबाट दिक्क भएर राम्रोसँग नबुझेर पनि भागवत्का शरणमा समर्पित हुन पुग्दछन्। फलस्वरूप श्रीमद्भागवत्को अध्ययन पनि तिनीहरूका लागि कष्टकर हुन्छ। कृत्रिम साधनद्वारा गरिएका शुष्क चिन्तन एवं निर्वैयक्तिक विवेचना मायावादी संन्यासीहरूका लागि पनि निरर्थक हुन्छन्। तर, भक्तिमा अनुरक्त भएका वैष्णव संन्यासीहरू आ-आफ्ना दिव्य कर्महरू सम्पन्न गरेर प्रसन्नताको अनुभव गर्दछन् र भगवत्धाममा प्रवेश गर्नपाउने कुरामा

निश्चिन्त हुन्छन्। मायावादी संन्यासीहरू कहिलेकाहीँ आत्मसाक्षात्कारको पथबाट विचलित हुन्छन् र फेरि समाजसेवा, परोपकारजस्ता परमार्थी भौतिक कर्ममा संलग्न हुन्छन्। यी कार्यहरू भौतिक कामबाहेक केही होइनन्। अतः निष्कर्ष के हो भने, कृष्णभावनामय कार्यमा संलग्न रहने भक्तहरू नै ब्रह्म के हो र अब्रह्म के हो भन्ने विषयका साधारण चिन्तनमा लागेका संन्यासीहरूभन्दा श्रेष्ठ हुन्छन्, हुनत ती ब्रह्मवादी संन्यासीहरू पनि विभिन्न जन्मजन्मान्तर पार गरेपछि कृष्णभावनामो आउँछन्।

**योगयुक्तो विशुद्धात्मा विजितात्मा जितेन्द्रियः ।**
**सर्वभूतात्मभूतात्मा कुर्वन्नपि न लिप्यते ॥ ७॥**

**योगयुक्तः** — भक्तिमा संलग्न; **विशुद्ध आत्मा** — शुद्ध आत्मा भएको; **विजित आत्मा** — आत्म संयमी; **जित इन्द्रियः** — इन्द्रियलाई जितेको; **सर्वभूत** — सबै जीवहरूप्रति; **आत्मभूत आत्मा** — दयालु; **कुर्वन् अपि** — कर्म गर्दागर्दै पनि; **न लिप्यते** — कहिल्यै पनि बाँधिन्न।

**जो भक्तिभावले कर्म गर्दछ, जसको आत्मा शुद्ध भएको छ र जसले आफ्नो मन तथा इन्द्रियहरू वशमा राखेको छ त्यो सबैको प्रियपात्र हुन्छ र प्रत्येक व्यक्ति उसका लागि प्रिय हुन्छ। यस्तो व्यक्ति सधैँ कर्म गरिरहे पनि कर्ममा बाँधिदैन।**

**तात्पर्य :** कृष्णभावनामृतद्वारा मुक्तिको बाटोमा अग्रसर भएको व्यक्ति नै प्रत्येक जीवको प्रियपात्र हुन्छ र प्रत्येक जीव उसका लागि प्यारो लाग्दछ। कृष्णभावनामृतमा लागेका हुनाले उसले यस्तो अनुभव गर्न थाल्दछ। जसरी रूखका हाँगा र पातहरू रूखबाट अलग हुन सक्दैनन् त्यसरी नै यस्तो व्यक्तिले पनि कुनै जीवलाई भगवान् श्रीकृष्णभन्दा अलग ठान्न सक्दैन। उसलाई के कुराको ज्ञान भएको हुन्छ, जसरी रूखको जरामा सिँचाई गरेमा पानी रूखका हाँगाबिँगा र पातहरूमा पुग्दछ अनि जसरी मुखबाट खाएको भोजन पेटमा पुगी पेटबाट सबै अङ्ग-प्रत्यङ्गका लागि स्वतः शक्ति प्राप्त हुन्छ त्यसरी नै भक्तले कृष्णभावनामय कर्मद्वारा सबैलाई सेवा पुऱ्याइरहेको हुन्छ अनि यसरी ऊ पनि सबैको प्यारो हुन्छ। प्रत्येक व्यक्ति उसको कामद्वारा सन्तुष्ट हुने हुनाले उसको चेतना पनि शुद्ध हुन्छ। चेतना शुद्ध भएको हुनाले उसको मन पनि पूर्णरूपमा नियन्त्रित हुन्छ। मन नियन्त्रित भएपछि उसका इन्द्रियहरू पनि संयमित हुन्छन्। यसरी सधै सदैव भगवान् श्रीकृष्णमा स्थिर रहेको मन श्रीकृष्णबाट कहिल्यै विचलित हुने प्रश्न नै उठ्दैन, हुन पनि कसरी होस्? उसलाई त भगवान् श्रीकृष्णको सेवाबाहेक अरू कार्यमा आफ्ना इन्द्रियहरूलाई लगाउने समय

नै हुँदैन। कृष्ण-कथाका अतिरिक्त अरू केही सुन्ने इच्छा उसले राख्दैन। ऊ भगवान् श्रीकृष्णलाई भोग लगाएको प्रसादबाहेक अरू कुनै वस्तु खान चाहँदैन। ऊ त्यस्तो कुनै ठाउँमा जाँदैन जहाँ भगवान् श्रीकृष्णको कुनै कार्य हुँदैन। यसको फलस्वरूप उसका इन्द्रियहरू पनि नियन्त्रित हुन्छन्। यस्ता इन्द्रिय-संयमी व्यक्तिबाट कसैप्रति कुनै अपराध हुन सक्दैन।

यहाँ कसैले प्रश्न गर्न सक्दछ, त्यसो भए अर्जुन किन युद्धक्षेत्रमा अरूप्रति आक्रामक भएका थिए त? के उनी कृष्णभावनाभावित भएका थिएनन्? अवश्य पनि भएका थिए! किनभने गीताको दोस्रो अध्यायअनुसार आत्मा सधैँ अमर छ, तसर्थ युद्धक्षेत्रका योद्धाहरू आ-आफ्नो स्वरूपमा अमर छँदैछन्। कसले कसलाई मार्ने? अर्जुनले त कृत्रिम रूपमा आक्रमणको अभिनय मात्रै गरिरहेका थिए। अतः आध्यात्मिक दृष्टिले कुरुक्षेत्रको युद्धभूमिमा कोही पनि मरेनन्। युद्धभूमिमा प्रत्यक्ष उपस्थित हुनुभएका भगवान् श्रीकृष्णको आज्ञाले तिनीहरूको वस्त्र (शरीर) मात्र परिवर्तन थियो। अतएव अर्जुन कुरुक्षेत्रको युद्धभूमिमा युद्धरत भएर पनि वास्तवमा युद्ध गरिरहेका थिएनन्। उनी त पूर्ण रूपले कृष्णभावनामा मग्न रहेर भगवान् श्रीकृष्णको आज्ञा पालन मात्र गरिरहेका थिए। यस्ता व्यक्ति कहिल्यै पनि कर्मका बन्धनमा बाँधिँदैनन्।

**नैव किञ्चित्करोमीति युक्तो मन्येत तत्त्ववित् ।**
**पश्यञ्श्रृण्वन्स्पृशञ्जिघ्रन्नश्नन्गच्छन्स्वपन्श्वसन् ॥ ८॥**
**प्रलपन्विसृजन्गृह्णन्नुन्मिषन्निमिषन्नपि ।**
**इन्द्रियाणीन्द्रियार्थेषु वर्तन्त इतिधारयन् ॥ ९॥**

**न** — न; **एव** — निश्चय नै; **किञ्चित्** — केही कुरा; **करोमि** — गर्दछु; **इति** — यस्तो; **युक्तः** — दैवी चेतनामा लागेको; **मन्येत** — सोच्दछ; **तत्त्ववित्** — सत्यलाई जान्नेले; **पश्यन्** — हेर्दा; **श्रृण्वन्** — सुन्दा; **स्पृशन्** — छुँदा; **जिघ्रन्** — सुँघ्दा; **अश्नन्** — खाँदा; **गच्छन्** — हिँड्दा; **स्वपन्** — सपना देख्दा; **श्वसन्** — सास फेर्दा; **प्रलपन्** — कुराकानी गर्दा; **विसृजन्** — विसर्जन गर्दा; **गृह्णन्** — ग्रहण गर्दा; **उन्मिषन्** — उघार्दा वा खोल्दा; **निमिषन्** — चिम्लँदा; **अपि** — पनि; **इन्द्रियणी** — इन्द्रियहरूलाई; **इन्द्रिय अर्थेषु** — इन्द्रियकै तृप्तिमा; **वर्तन्त** — लागिरहन्छन्; **इति** — यस्तो; **धारयन्** — विचार गरोस्।

**दिव्य चेतनाले युक्त भएको मानिस त हेर्दा, सुन्दा, छुँदा, सुँघ्दा, खाँदा, हिँड्दा, सुत्दा तथा सास फेर्दा पनि मैले केही गरिरहेकै छैन भन्ने विचार गरिरहेको हुन्छ। त्यसै गरी उसले कुराकानी गर्दा, विसर्जन गर्दा, ग्रहण**

**गर्दा, आँखा हेर्दा या चिम्लिँदासम्म पनि भौतिक इन्द्रियहरू आफ्ना-आफ्ना विषयमा लागिरहेका छन् तर म यी सबैबाट अलग्ग छु भन्ने विचार गर्दछ।**

**तात्पर्य :** कृष्णभावनाभावित व्यक्तिको जीवन शुद्ध हुन्छ। तसर्थ उसलाई टाढा र नजिकका कर्ता, कर्म, अधिष्ठान, प्रयास तथा भाग्यजस्ता पाँचवटा कारणमाथि निर्भर पर्नु पर्दैन। भगवान् श्रीकृष्णको दिव्य प्रेमाभक्तिमा संलग्न भएका कारणले यस्तो भएको हो। बाहिरबाट हेर्दा उसका शरीर तथा इन्द्रियहरूले कर्म गरेको जस्तो देखिन्छ तापनि आध्यात्मिक कार्यमा (भगवान् श्रीकृष्णको दिव्य सेवामा) लागिरहेको हुँदा ऊ आफ्नो वास्तविक स्थितिप्रति सधैँ सचेष्ट रहिरहन्छ, त्यसैले यस्तो अवस्थालाई आध्यात्मिक अनुरक्ति भन्नु पर्दछ। भौतिक चेतनामा हुँदा इन्द्रियहरू इन्द्रियतृप्तिमो लागिरहेका हुन्छन् तर कृष्णचेतनामा हुँदा तिनै इन्द्रियहरू भगवान् श्रीकृष्णका इन्द्रियतृप्तिमा लाग्दछन्। अतएव कृष्णभावनाभावित व्यक्ति हुनत भौतिक कार्यमा लागिरहे जस्तो देखिए तापनि वास्तवमा ऊ ती कार्यबाट सधैँ मुक्त रहेको हुन्छ। देख्ने र सुन्ने कार्य ज्ञानेन्द्रियको हो, हिँड्नु, बोल्नु, विसर्जन गर्नु आदि कर्मेन्द्रियका काम हुन्। कृष्णभावनाभावित व्यक्ति कहिल्यै पनि इन्द्रियहरूका कार्यबाट प्रभावित हुँदैन। ऊ भगवत् सेवाबाहेक कुनै अर्को कार्य गर्न पनि सक्दैन। किनभने 'म भगवान्को शाश्वत दास हूँ' भन्ने कुरामा ऊ दृढ रहेको हुन्छ।

**ब्रह्मण्याधाय कर्माणि सङ्गं त्यक्त्वा करोति यः।**
**लिप्यते न स पापेन पद्मपत्रमिवाम्भसा ॥ १० ॥**

**ब्रह्मणि** — भगवान्मा; **आधाय** — समर्पित गरेर; **कर्माणि** — सबै कर्महरू; **सङ्गम्** — आसक्ति; **त्यक्त्वा** — त्यागेर; **करोति** — गर्दछ; **यः** — जो; **लिप्यते** — प्रभावित हुन्छ; **न** — हुँदैन; **सः** — त्यो; **पापेन** — पापले; **पद्म-पत्रम्** — कमलको पात; **इव** — जस्तै; **अम्भसा** — पानीले।

**जसले कर्मको फल परमेश्वरलाई समर्पित गरेर आसक्तिरहित हुँदै कर्म गर्दछ, पापले उसलाई त्यसरी नै छुन सक्दैन जसरी कमलको पातलाई पानीले भिजाउँदैन।**

**तात्पर्य :** यहाँ ब्रह्मणिको अर्थ कृष्णभावनामृतमा भन्ने हुन्छ। यो भौतिक जगत् भनेको प्रकृतिका तीन गुणहरूको समग्र अभिव्यक्ति हो जसलाई प्रधान पनि भनिन्छ। अनि सर्वं हि एतद् ब्रह्म (मुण्डक उपनिषद् २) तस्माद् एतद् ब्रह्म नाम रूपं अन्नं च जायते, (*मुण्डक उपनिषद्* १-२-१०) भन्ने वेदमन्त्रहरू तथा *भगवद्गीताको* मम योनिर्महद्ब्रह्म (१४-३) भन्ने वाक्यले यस जगत्का

प्रत्येक वस्तु ब्रह्मकै अभिव्यक्ति हुन् भन्ने थाहा हुन्छ। कार्य वा प्रभावहरू भिन्न-भिन्न रूपमा प्रकट भए पनि तिनीहरू कारणसँग अभिन्न हुन्छन्। ईशोपनिषद्‌मा पनि सबै वस्तुहरू परब्रह्म श्रीकृष्णसँग सम्बद्ध छन् र ती सबै उहाँकै हुन् भनिएको छ। जसले प्रत्येक वस्तु श्रीकृष्णको हुन् भन्ने जानेको छ र प्रत्येक वस्तुका स्वामी हुनाले सबै कुरा उहाँको सेवामा नियोजित छन् भन्ने बुझेको छ त्यसलाई स्वभावतः पाप र पुण्यको कर्मफलद्वारा प्रभावित हुनु पर्दैन। विशेष प्रकारको कर्म सम्पादन गर्नका लागि भगवान्‌ले दिनुभएको मनुष्य शरीरलाई पनि कृष्णभावनामय कार्यमा संलग्न राख्नका निमित्त उपयोग गर्नु पर्दछ। यसो गर्नाले मात्र कमलको पातलाई पानीले भिजाउन नसकेजस्तै पापकर्मका संक्रमणले पनि मानिसलाई छुन सक्दैन। भगवान्‌ले पनि गीतामा **मयि सर्वाणि कर्माणि संन्यस्य** अर्थात, सम्पूर्ण कर्महरू मलाई नै समर्पण गर भन्नुभएको छ। तात्पर्य के हो भने, कृष्णभावनाविहीन मानिस आफ्नो शरीर तथा इन्द्रियलाई नै आफ्नो स्वरूप सम्झेर कर्म गर्दछ त्यो कृष्णभावनाभावित व्यक्ति चाहिँ आफ्नो शरीर पनि भगवान् श्रीकृष्णको सम्पत्ति हो तसर्थ यसलाई श्रीकृष्णको सेवामा संलग्न राख्नु पर्दछ भन्ने सम्झेर कर्म गर्दछ।

**कायेन मनसा बुद्‌ध्या केवलैरिन्द्रियैरपि ।**
**योगिनः कर्मकुर्वन्ति सङ्‌ग त्यक्त्वात्मश्रुद्धये ॥ ११ ॥**

**कायेन** — शरीरद्वारा; **मनसा** — मनद्वारा; **बुद्‌ध्या** — बुद्धिद्वारा; **केवलैः** — शुद्ध; **इन्द्रियैः** — इन्द्रियद्वारा; **अपि** — पनि; **योगिनः** — कृष्णभावनाभावित व्यक्ति; **कर्म** — कर्म (काम); **कुर्वन्ति** — गर्दछन्; **सङ्‌गम्** — आसक्ति; **त्यक्त्वा** — त्याग गरेर; **आत्म** — आफ्नो स्वरूप; **शुद्धये** — शुद्धिका लागि।

**योगीजन आसक्तिरहित भएर शरीर, मन, बुद्धि तथा इन्द्रियहरूद्वारा केवल आत्मशुद्धिका लागि कर्म गर्ने गर्दछन्।**

**तात्पर्य :** कृष्णभावनामा रहेर भगवान् श्रीकृष्णको इन्द्रियतृप्तिका लागि शरीर, मन, बुद्धि र इन्द्रियद्वारा कुनै पनि कर्म गर्ने व्यक्ति भौतिक संक्रमणहरूबाट शुद्ध हुन्छ। कृष्णभावनाभावित व्यक्तिका क्रियाकलापबाट कुनै पनि भौतिक प्रतिक्रिया प्रकट हुँदैन। अतः सामान्य रूपमा सदाचार भनिने शुद्ध कर्महरू कृष्णभावनामृतमा रहेर पनि सरलतापूर्वक सम्पन्न गर्न सकिन्छ। श्रीरूप गोस्वामीले आफ्नो भक्तिरसामृत सिन्धु (१.२.१८७) मा यसको वर्णन यसरी गर्नुभएको छ—

*ईहा यस्य हरेर्दास्ये कर्मणा मनसा गिरा ।*
*निखिलास्वप्यवस्थासु जीवन्मुक्तः स उच्यते ॥*

"आफ्नो शरीर, मन, बुद्धि तथा वाणीले भगवान् श्रीकृष्णको सेवा वा कृष्णभावनामय कर्म गर्ने व्यक्ति आफ्ना तथाकथित विभिन्न भौतिक क्रियाकलापमा व्यस्त रहेर पनि यो भौतिक संसारमा मुक्तपुरुषजस्तो भएर रहन सक्दछ। यो भौतिक शरीर मेरो होइन र म स्वयम् पनि यो शरीर होइन भन्ने विश्वास उसमा हुने हुनाले यी वस्तुहरूप्रति उसको कुनै अहङ्कार हुँदैन। म यो शरीर पनि होइन र यो शरीर मेरो पनि होइन, म भगवान् श्रीकृष्णको हूँ, र यो शरीर पनि श्रीकृष्णको हो भन्ने कुरा उसले जानेको हुन्छ। जब उसले आफ्नो शरीर, मन, बुद्धि, वाणी, जीवन, सम्पत्ति आदि जे-जे उसको अधिकारमा छ ती सबै भगवान् श्रीकृष्णको सेवामा लगाउँदछ र ऊ तत्काल भगवान् श्रीकृष्णकहाँ पुग्दछ। ऊ भगवान् श्रीकृष्णसँग हुन्छ र ऊ अहङ्काररहित हुन्छ। अहङ्कारको कारणले त मानिसले आफूलाई शरीर हूँ भन्ने सोच्दछ। कृष्णभावनामृतको पूर्णावस्था भनेको यही हो।

**युक्तः कर्मफलं त्यक्त्वा शान्तिमाप्नोति नैष्ठिकीम् ।**
**अयुक्तः कामकारेण फले सक्तो निबध्यते ॥ १२ ॥**

**युक्तः** — भक्तिमा लागेको व्यक्ति; **कर्मफलम्** — सबै कर्मफलहरू; **त्यक्त्वा** — त्याग गरेर; **शान्तिम्** — पूर्ण शान्ति; **आप्नोति** — प्राप्त गर्दछ; **नैष्ठिकीम्** — अचल; **अयुक्तः** — कृष्णभावनारहित; **कामकारेण** — कर्मफल भोग गर्नका लागि; **फले** — फलमा; **सक्तः** — आसक्त; **निबध्यते** — बाँधिन्छ।

**निष्ठावान् भक्तले आफ्ना सबै कर्मफलहरू मलाई अर्पण गरेर विशुद्ध शान्ति प्राप्त गर्दछ तर कृष्णभावनारहित व्यक्ति आफ्ना कर्मको फलमा आसक्त रहने हुनाले बन्धनमा पर्दछ।**

**तात्पर्य :** कृष्णभावनाभावित व्यक्ति र शारीरिक अवधाराणको बुद्धि भएको व्यक्तिमा हुने भिन्नता भनेको, पहिलो भगवान् श्रीकृष्णप्रति आसक्त हुन्छ अनि दोस्रो आफ्ना कर्मको फलप्रति आसक्त हुन्छ। जुन व्यक्ति भगवान् श्रीकृष्णप्रति आसक्त भएर श्रीकृष्णको लागि कर्म गर्दछ त्यसलाई निश्चय नै मुक्तपुरुष भन्नु पर्दछ। त्यस्तो व्यक्तिलाई कुनै पनि कर्मफलको चिन्ता हुँदैन। *श्रीमद्भागवत्मा* भनिएको छ — परमसत्यको ज्ञान नहुनु र द्वैतभावमा रहेर कर्म गर्नु नै कर्मफलको चिन्ताको कारण हो। भगवान् श्रीकृष्ण परिपूर्ण सत्य हुनुहुन्छ र भगवान् हुनुहुन्छ। कृष्णभावनामा द्वैतभाव हुँदैन। यहाँ रहेका सबै कुराहरू भगवान् श्रीकृष्णको शक्तिका उत्पादन हुन् र श्रीकृष्ण सर्वमङ्गलमय हुनुहुन्छ। तसर्थ कृष्णभावनामा सम्पन्न भएका सबै कर्महरू परमपदमा प्रतिष्ठित हुन्छन्। ती सबै दिव्यभावमा हुनेहुँदा भौतिक प्रभावबाट

मुक्त हुन्छन्। यस कारण कृष्णभावनामा रहने जीव शान्तिले युक्त हुन्छ। तर, जो इन्द्रियतृप्तिका लोभमा फँसेको छ, त्यसलाई शान्ति प्राप्त हुन सक्दैन। कृष्णभावनामृतको रहस्य नै यही हो। यो अनुभूतिमा भगवान् श्रीकृष्णबाहेक अरू केही पनि देखिँदैन र शान्ति एवं निर्भयको स्थिति प्राप्त हुन्छ।

**सर्वकर्माणि मनसा सन्न्यस्यास्ते सुखं वशी ।**
**नवद्वारे पुरे देही नैव कुर्वन्नकारयन् ॥ १३ ॥**

**सर्व** — सबै; **कर्माणि** — कर्महरू; **मनसा** — मनले; **संन्यस्य** — त्याग गरेर; **आस्ते** — रहन्छ (बस्दछ); **सुखम्** — सुखमा; **वशी** — संयमी; **नवद्वारे** — नौ ढोका भएको ठाउँमा; **पुरे** — नगरमा; **देही** — देहवान् आत्मा; **न** — होइन; **एव** — निश्चय नै; **कुर्वन्** — केही काम गर्दै; **न** — न; **कारयन्** — गराउँदै।

**शरीर धारण गरेको जीवात्मा आफ्नो प्रकृतिलाई वशमा राखेर मनले सम्पूर्ण कर्महरूको परित्याग गर्दै आफूले पनि केही नगरी र अरूलाई पनि केही नगराई नौ ढोका भएको भौतिक शरीररूपी नगरमा सुखपूर्वक निवास गर्दछ।**

**तात्पर्य :** शरीर धारण गरेको जीवात्मा नौ ढोका भएको नगरमा (शरीरमा) बास गर्दछ। नगररूपी शरीरका कामहरू विशिष्ट प्राकृतिक गुणद्वारा स्वतः सम्पन्न हुने गर्दछन्। शरीरको परिस्थितिअनुसार रहेर पनि जीवले यदि कुनै ठुलो इच्छा राखे ऊ ती परिस्थितिभन्दा माथि उठ्न सक्दछ। आफ्नो पराप्रकृतिलाई बिर्सिसकेको हुनाले जीवले आफूलाई शरीर ठान्दछ, त्यसैले कष्ट पनि भोग्दछ। कृष्णभावनाद्वारा उसले आफ्नो वास्तविक स्थिति पुनः प्राप्त गर्न सक्दछ र यसरी यो शरीरकोबन्धनबाट मुक्त हुन सक्दछ। त्यसैले कृष्णभावनामृतलाई ग्रहण गर्नासाथ मानिस आफ्ना शारीरिक क्रियाकलापहरूबाट सधैँ अलग हुन्छ। यस्तो संयमित जीवनमा उसका कार्यप्रणालीहरू परिवर्तित हुन्छन् र नौवटा द्वार भएको नगरमा (शरीरमा) ऊ सुखपूर्वक निवास गर्दछ। ती नौ द्वारहरू यस प्रकारका छन्—

*नवद्वारे पुरे देही हँसो लेलायते बहिः ।*
*वशी सर्वस्य लोकस्य स्थावरस्य चरस्य च ॥*

*(श्वेताश्वतर उपनिषद् ३-१८)*

"जीवको शरीरभित्र निवास गर्ने भगवान् ब्रह्माण्डका सम्पूर्ण जीवहरूका नियन्त्रक हुनुहुन्छ। यो शरीरमा नौवटा द्वारहरू छन्— दुई आँखा, दुईवटा नाकका प्वाल, दुई कान, एउटा मुख, गुदा र उपस्थ। बद्धावस्थामा रहँदा

जीवले आफूलाई शरीर हूँ भन्ने ठान्दछ तर जब उसले आफूभित्र रहेका परमात्मासँग आफ्नो परिचय बढाउँछ त्यस समय ऊ यही शरीरमा रहेर पनि भगवान्‌जस्तै मुक्त हुन सक्दछ। यसरी कृष्णभावनाभावित व्यक्ति शरीरका बाहिरी र आन्तरिक दुवै कर्महरूबाट मुक्त हुन्छ।"

**न कर्तृत्वं न कर्माणि लोकस्य सृजति प्रभुः ।**
**न कर्मफल संयोगं स्वभावस्तु प्रवर्तते ॥ १४ ॥**

**न** — न त; **कर्तृत्वम्** — कर्तापन; **स्वामित्व**; **न** — न त; **कर्माणि** — कर्महरू; **लोकस्य** — मानिसहरूका; **सृजति** — उत्पन्न गर्दछ; **प्रभुः** — शरीररूपी नगरका स्वामी; **न** — न त; **कर्मफल** — कर्मको फल; **संयोगम्** — सम्बन्ध वा संयोग; **स्वभावः** — प्रकृतिको गुण; **तु** — तर; **प्रवर्तते** — काम गर्दछन्।

**शरीररूपी नगरका स्वामी शरीर धारण गरेको जीवात्माले न त कर्मको सृजना गर्दछ, न कसैलाई कर्म गर्नका लागि प्रेरित गर्दछ, न त कर्मफलको रचना नै गर्दछ। यी सबै कुरा प्रकृतिका गुणहरूद्वारा सम्पन्न हुन्छन्।**

**तात्पर्य :** जीवात्मा परमेश्वरका प्रकृति अथवा शक्तिहरूमध्येको एउटा शक्ति हो तर यो शक्ति भगवान्‌को अर्को शक्ति अपरा प्रकृति वा पदार्थभन्दा अलग छ। यसको चर्चा सातौँ अध्यायमा गरिने छ। संयोगवश पराप्रकृति या जीव आनादिकालदेखि नै भौतिक (अपरा) प्रकृतिको सम्पर्कमा रहँदैआएको छ। अनेक प्रकारका कर्महरू र तिनको परिणामस्वरूप नै जीवले यो नाशवान् भौतिक शरीरमा निवास गर्नुपरेको हो। यस्तो बद्ध परिवेशमा रहनुपरेकाले नै मानिसले आत्मस्वरूप आफूलाई अज्ञानवश शरीर मान्दछ र शरीरद्वारा गरिएका कर्मको फल भोग्दछ। अनन्तकालदेखि उपार्जित यो अज्ञान नै शारीरिक कष्ट र दुःखको कारण हो। शरीरका क्रियाकलापदेखि पृथक् हुनेबित्तिकै जीव कर्मबन्धनबाट पनि मुक्त हुन्छ। जीव जबसम्म यो शरीररूपी नगरमा बास गर्दछ तबसम्म ऊ यसको स्वामी हो भनेजस्तो देखिन्छ तर वास्तवमा ऊ न यसको स्वामी हो न त कर्म र कर्मका फलहरूको नियन्त्रक नै हो। ऊ त यो भवसागरको माझमा रहेर जीवन सङ्घर्षको सामना गर्ने प्राणी मात्र हो। भवसागरका छालहरूले उसलाई उचाल्ने र पछार्ने गर्दछन् तर तिनीहरूमाथि उसको कुनै नियन्त्रण छैन। यसबाट छुट्कारा पाउने उसको सर्वोत्तम समाधान दिव्य कृष्णभावना नै हो। यसैद्वारा भवसागरबाट पार हुन सकिन्छ र यसैले मात्र उसलाई समस्त अशान्तिबाट रक्षा गर्न सक्दछ।

**नादत्ते कस्यचित्पापं न चैव सुकृतं विभुः ।**
**अज्ञानेनावृतं ज्ञानं तेन मुह्यन्ति जन्तवः ॥ १५ ॥**

**न-आदत्ते** — कहिल्यै स्वीकार गर्दैन; **कस्यचित्** — कसैको; **पापम्** — पापलाई; **न** — न त; **च** — पनि; **एव** — निश्चय नै; **सुकृतम्** — पुण्यलाई; **विभुः** — परमेश्वर; **अज्ञानेन** — अज्ञानले; **आवृतम्** — ढाकिएको; **ज्ञानम्** — ज्ञान; **तेन** — त्यसबाट; **मुह्यन्ति** — मोहग्रस्त हुन्छन्; **जन्तवः** — जीवहरू।

**परमेश्वरले न त कसैको पाप स्वीकार गर्नु हुन्छ न त पुण्य नै। तर, सबै शरीर धारण गरेका जीव अज्ञानले गर्दा मोहग्रस्त हुन्छन् र त्यही मोहले तिनीहरूको वास्तविक ज्ञान ढाकिएको हुन्छ।**

**तात्पर्य :** संस्कृत शब्द "**विभु**" को अर्थ परमेश्वर हुनुहुन्छ, उहाँ असीम ज्ञान, धन, बल, यश, सौन्दर्य तथा त्यागले पूर्ण हुनुहुन्छ। उहाँ सधैँ आत्मतृप्त एवं पाप-पुण्यबाट अविचलित रहनु हुन्छ। कुनै पनि जीवका लागि उहाँले कुनै विशिष्ट परिस्थिति सिर्जना गर्नु हुन्न तर जीव आफैँ अज्ञानद्वारा मोहित भएर यस्तो विशेस परिस्थितिको कामना गर्दछ, जसबाट कर्म तथा कर्मफलको श्रृङ्खला आरम्भ हुन सुरु हुन्छ। जीव पराप्रकृतिको कारणले गर्दा ज्ञानवान् छ तैपनि ऊ आफ्नो सीमित शक्तिका आधारमा अज्ञानद्वारा वशीभूत हुन्छ। भगवान् सर्वशक्तिमान् हुनुहुन्छ, तर जीव त्यस्तो छैन। भगवान् सर्वज्ञ हुनुहुन्छ विभु हुनुहुन्छ तर जीव सूक्ष्म अणुरूप छ। जीवात्माले आफ्नो स्वतन्त्र इच्छाद्वारा कुनै कुराको चाहना गर्ने सामर्थ्य मात्र पाएको छ तर त्यस्ता इच्छाको पूर्ति सर्वशक्तिवान् भगवान्बाट मात्र हुन सक्दछ। जीव जब आफ्नो इच्छाले मोहग्रस्त हुन्छ, भगवान्ले पनि त्यसलाई आफ्नो इच्छापूर्ति गर्ने अवसर दिनु हुन्छ तर कुनै विशेस परिस्थितिमा जीवले चाहेको कर्म र कर्मफलहरूप्रति उहाँ कहिल्यै उत्तरदायी हुनु हुन्न। मोहग्रस्त हुने हुनाले शरीरधारी जीवले यो परिस्थितिजन्य शरीर नै म हूँ भन्ने ठान्दछ र जीवनका क्षणिक सुख-दुःखहरूबाट प्रभावित भइरहन्छ। भगवान् परमात्माका रूपमा निरन्तर जीवसँगै रहनु हुन्छ, त्यसैले उहाँ जीवका प्रत्येक इच्छाहरू त्यसरी नै थाहा पाउनु हुन्छ जसरी फूलको नजिक बस्नेले फूलको सुवास थाहा पाउँदछ। इच्छा एउटा सूक्ष्म बन्धन हो, जसले जीवलाई बाँधेर राख्दछ। भगवान्ले मानिसको योग्यताअनुसार उसको इच्छा पूरा गरिदिनु हुन्छ। "मानिसले चाहेर हुन्न ईश्वरले चाहनु पर्दछ"। मानिस सर्वशक्तिमान् नभएकाले ऊ आफ्ना इच्छाहरू आफैँ पूरा गर्न सक्दैन तर भगवान् सर्वशक्तिमान् हुनुभएकाले सम्पूर्ण इच्छाहरू आफैँ पूर्ण गर्न सक्नु हुन्छ। उहाँ निष्पक्ष हुनुहुन्छ त्यसैले

उहाँ ती सूक्ष्म जीवहरूको स्वतन्त्र इच्छामा व्यवधान उत्पन्न गर्नुहुन्न। तर, यदि कसैले भगवान् श्रीकृष्णलाई नै पाउने इच्छा राखेमा भगवान्ले त्यस्ता व्यक्तिको विशेष रेखदेख गर्नु हुन्छ। अनि उसलाई उत्साहित गराइराख्नु हुन्छ जसले गर्दा भगवान्लाई प्राप्त गर्ने उसको इच्छा पनि पूरा हुन्छ र सधैँ ऊ सुखी पनि हुन्छ। तसर्थ वैदिक मन्त्रहरू यसरी घोषणा गर्दछन् **एष उ ह्येव साधु कर्म कारयति तं यमेभ्यो लोकेभ्य उन्निनीषते। एष उ एवासाधु कर्म कारयति यमधो निनीषते** — अर्थात्, भगवान्ले जीवलाई माथि उठोस् भनेर नै शुभ कर्मतिर प्रेरित गर्नु हुन्छ र यसै गरी भगवान्ले जीवलाई नर्कको कष्ट भोगाएर सचेत पार्न अशुभ कार्यतर्फ पनि प्रेरित गर्नु हुन्छ। ( *कौषीतकी उपनिषद्* ३.८)

*अज्ञो जन्तुरनीशोऽयमात्मनः सुख दुःखयोः ।*
*ईश्वरप्रेरितो गच्छेत् स्वर्गं वाश्वभ्रमेव च ॥*

"जीव आफ्नो सुख-दुःखमा पूर्णतया आश्रित हुन्छ। जसरी हावाद्वारा बादल परिचालित हुन्छ त्यसै गरी जीवात्मा नर्क जाने वा स्वर्ग जाने कुरा पनि परमेश्वरका इच्छामा निर्भर गर्दछ।"

अतः कृष्णभावनामृतलाई उपेक्षा गर्ने आफ्नो अनादिकालदेखिको बानीले गर्दा नै शरीर धारण गर्ने जीवात्माले स्वयम् आफूलाई आफैँले मोहग्रस्त पारेको छ। तसर्थ मौलिक रूपमा आफू सच्चिदानन्दस्वरूप हुँदाहुँदै पनि आफ्नो अस्तित्वको सूक्ष्मताले गर्दा ऊ "भगवान्को सेवा गर्नु नै मेरो वास्तविक कर्तव्य हो" भन्ने कुरा बिर्सन्छ र अविद्याको बन्धनमा फँस्दछ। अनि अज्ञानका अधीनमा रहेको हुनाले जीवात्माले भगवान्लाई नै आफ्नो बद्ध अवस्थाको उत्तरदायी मान्दछ। यस कुराको पुष्टि वेदान्तसूत्रले पनि गरेका छन् — **वैषम्य नैर्घृण्ये न सापेक्षत्वात् तथा हि दर्शयति** (२.१.३४) अर्थात्, भगवान्ले कसैलाई घृणा पनि गर्नु हुन्न र कसैलाई माया पनि गर्नु हुन्न। यद्यपि त्यसो गर्नुभए जस्तो लाग्दछ।

**ज्ञानेन तु तदज्ञानं येषां नाशितमात्मनः ।**
**तेषामादित्यवज्ज्ञानं प्रकाशयति तत्परम् ॥ १६ ॥**

**ज्ञानेन** — ज्ञानद्वारा; **तु** — तर; **तत्** — त्यो; **अज्ञानम्** — अविद्या; **येषाम्** — जसको; **नाशितम्** — नष्ट भएको छ; **आत्मनः** — जीवको; **तेषाम्** — तिनीहरूको; **आदित्यवत्** — उदाउँदो सूर्यजस्तो; **ज्ञानम्** — ज्ञान; **प्रकाशयति** — प्रकट हुन्छ; **तत्परम्** — कृष्णभावना।

**जब कुनै व्यक्ति अविद्यालाई विनाश गर्ने ज्ञानबाट प्रबुद्ध हुन्छ त्यस अवस्थामा उसको त्यो ज्ञानद्वारा दिनमा सूर्यका किरणले सारा वस्तुहरू प्रकाशित भएजस्तै हरेक वस्तु उद्घाटित हुन्छ।**

**तात्पर्य :** जसले भगवान् श्रीकृष्णलाई भुलेका छन् तिनीहरू निश्चित रूपले मोहग्रस्त हुन्छन् तर जो कृष्णभावनाभावित हुन्छन् तिनीहरू कहिल्यै मोहग्रस्त हुँदैनन्। *भगवद्गीतामा* भनिएको छ—"**सर्वंज्ञानप्लवेन,....ज्ञानाग्नि सर्वकर्माणि**" तथा "**न हि ज्ञानेन सदृशम्**" ज्ञान सधैँ सम्माननीय हुन्छ। त्यो ज्ञान के हो? भगवान् श्रीकृष्णप्रति समर्पित भएपछि मात्र त्यो पूर्ण ज्ञान प्राप्त हुन्छ। गीता ७.११ मा भनिएको छ "**बहूनां जन्मनामन्ते ज्ञानवान्मां प्रपद्यते।**" धेरै जन्म पार गरेपछि मात्र मानिसलाई पूर्ण ज्ञान प्राप्त हुन्छ र ऊ भगवान् श्रीकृष्णको शरणमा जान्छ वा उसलाई कृष्णभावना प्राप्त हुन्छ। जब उसलाई कृष्णभावनामृत प्राप्त हुन थाल्दछ अनि सूर्यको उज्यालोमा सम्पूर्ण वस्तुहरू देखिए जस्तै उसका ज्ञानरूपी प्रकाशमा पनि हरेक कुरा उद्घाटित हुन्छ। जीवात्मा धेरै प्रकारले मोहग्रस्त हुन्छ। उदाहरणका लागि जब जीवले आफैँलाई ईश्वर मान्दछ, त्यसको फलस्वरूप ऊ अविद्याको अन्तिम बन्धनमा पर्दछ। यदि जीव ईश्वर हुनेभए ऊ अविद्याका कारणले मोहग्रस्त हुने थिएन। ईश्वर पनि कहिल्यै अविद्याले मोहग्रस्त हुनुहुन्छ र? यदि यसो होभए अविद्या वा शैतानलाई ईश्वरभन्दा ठुलो मान्नुपर्‍यो। पूर्णतः कृष्णभावनाभावित व्यक्तिहरूबाट मात्रै वास्तविक ज्ञान प्राप्त गर्न सकिन्छ। त्यसैले यस्तै किसिमको प्रामाणिक गुरुको खोजी गर्नु पर्दछ र त्यही गुरुबाट कृष्णभावनामृतको महत्त्व बुझ्नु पर्दछ। सूर्यको प्रकाशले अन्धकार हटाएजस्तै गरी कृष्णभावनाले पनि सम्पूर्ण अविद्या नष्ट गरिदिन्छ। कसैलाई "म शरीर होइन, म त शरीरभन्दा परको आत्मा हूँ" भन्ने पूरा ज्ञान भएको भए पनि उसले आत्मा तथा परमात्माबीचको भिन्नता छुट्ट्याउन नसक्ने सम्भावना पनि हुन्छ तर यदि ऊ पूर्ण प्रामाणिक कृष्णभावनाभावित गुरुको शरणमा परेमा उसलाई सबै कुराको ज्ञान हुन सक्दछ। ईश्वरका प्रतिनिधिसँग भेट भएपछि मात्र नै ईश्वर तथा ईश्वरसँगको आफ्नो सम्बन्धबारे यथार्थ ज्ञान पाउन सकिन्छ। ईश्वरको प्रतिनिधिले कहिल्यै पनि आफूलाई ईश्वर हूँ भन्नु हुँदैन, यद्यपि उहाँको सम्मान ईश्वर समान हुन्छ, किनभने उहाँलाई ईश्वरको ज्ञान भएको हुन्छ। मानिसले ईश्वर र जीवका बीचको अन्तर बुझ्नु आवश्यक हुन्छ। भगवान् श्रीकृष्णले पनि गीताको दोस्रो अध्यायको श्लोक १२ मा भन्नुभएको छ—प्रत्येक जीव व्यष्टि हुन्, पृथक् हुन्। त्यसै गरी भगवान् पनि व्यष्टि वा पृथक् हुनुहुन्छ। सबै जीवात्मा भूत कालमा पृथक् थिए, अहिले पनि पृथक छन् र भविष्यमा मुक्त भएपछि पनि पृथक् व्यक्तित्वको रूपमा नै रहिरहने छन्। रातमा सबै वस्तुहरू एउटै जस्तो देखिए पनि दिनको उज्यालोमा त सबै वस्तु अलग-अलग रूपमा आफ्नो यथार्थ रूपमा देखिन्छन्। आध्यात्मिक जीवनमा व्यष्टि जीवको पृथक् पहिचान हुनु नै वास्तविक ज्ञान हो।

**तद्बुद्धयस्तदात्मानस्तन्निष्ठास्तत्परायणाः ।
गच्छन्त्यपुनरावृत्तिं ज्ञाननिर्धूतकल्मषाः ॥ १७ ॥**

**तत्-बुद्धयः** — नित्य भगवत्परायण बुद्धि भएको; **तत्-आत्मनः** — भगवान्मा मन लगाएको; **तत्-निष्ठाः** — परमेश्वरमा निष्ठा भएको; **तत्-परायणाः** — पूर्णरूपले भगवान्को शरणमा परेको; **गच्छन्ति** — जान्छन्; **अपुनः आवृत्तिम्** — मुक्तिको अवस्थामा; **ज्ञान** — ज्ञानद्वारा; **निर्धूत** — शुद्ध भएको; **कल्मषाः** — पाप, अविद्या।

**जब मानिसको बुद्धि, मन, श्रद्धा तथा आश्रय सबैकुरा भगवान्मा स्थिर हुन्छ अनि मात्र पूर्ण ज्ञानद्वारा ऊ सधैँ संकल्पबाट शुद्ध हुन्छ, त्यसपछि नै ऊ मुक्तिको सीधा बाटोमा अग्रसर हुन्छ।**

**तात्पर्य :** भगवान् श्रीकृष्ण नै परमदिव्य, परमसत्य हुनुहुन्छ। समग्र गीता श्रीकृष्ण नै भगवान् हुनुहुन्छ भन्ने घोषणामा केन्द्रित छ। सम्पूर्ण वेदहरूको पनि अभिमत यस्तै छ। परतत्त्वको अर्थ परमसत्य हो। जसले ज्ञानद्वारा भगवान्लाई ब्रह्म, परमात्मा तथा भगवान्का रूपमा चिनेका छन् तिनीहरूले यो कुरा बुझिसकेका हुन्छन्। भगवान् नै परतत्त्वका पराकाष्ठा हुनुहुन्छ। उहाँभन्दा पर केही पनि छैन। भगवान् भन्नु हुन्छ— **"मत्तः परतरं नान्यत् किञ्चिदस्ति धनञ्जय"**।

भगवान्ले निराकार ब्रह्मको पनि अनुमोदन गर्नुभएको छ— **"ब्रह्मणो हि प्रतिष्ठाहम्"**। तसर्थ भगवान् श्रीकृष्ण नै सबै प्रकारले परमसत्य हुनुहुन्छ। जसको मन, बुद्धि, श्रद्धा, आश्रय सबै कुरा कृष्णमा आश्रित छन् अर्थात् जो पूर्णरूपले कृष्णभावनाभावित छ, उसका सबै संक्रमणहरू निश्चित रूपले पखालिन्छन् र ब्रह्मसम्बन्धी प्रत्येक पक्षको पूर्ण ज्ञान पनि उसलाई हुन्छ। कृष्णभावनाभावित व्यक्तिले भगवान् श्रीकृष्णमा द्वैत-व्यक्तित्व (एकता र भिन्नता सँगसँगै) छ भन्ने कुरा राम्रोसँग बुझेको हुन्छ र यस्तो दिव्य ज्ञानले युक्त भएको व्यक्तिले मुक्तिका बाटोमा दृढ रहेर आध्यात्मिक प्रगति गर्न सक्दछ।

**विद्याविनयसंपन्ने ब्राह्मणे गवि हस्तिनि ।
शुनि चैव श्वपाके च पण्डिताः समदर्शिनः ॥ १८ ॥**

**विद्या** — शिक्षाले; **विनय** — तथा विनम्रताले; **सम्पन्ने** — युक्त भएको; **ब्राह्मणे** — ब्राह्मणमा; **गवि** — गाईमा; **हस्तिनि** — हात्तीमा; **शुनि** — कुकुरमा; **च** — तथा; **एव** — निश्चय नै; **श्वपाके** — कुकुरभक्षी चाण्डालमा; **च** — क्रमशः (तथा); **पण्डिताः** — ज्ञानी वा विवेकी; **समदर्शिनः** — समान दृष्टि राख्नेहरू।

**विनम्र साधु पुरुष आफ्नो वास्तविक ज्ञानबाट प्राप्त गुणका कारणले एउटा विद्वान् तथा विनीत ब्राह्मणलाई र गाई, हात्ती, कुकुर तथा चाण्डाललाई पनि समान दृष्टिले हेर्दछन्।**

**तात्पर्य :** कृष्णभावनाभावित व्यक्तिले को कुन जातको हो र कुन प्रजातिको हो भन्ने कुरामा भेददृष्टि राख्दैन। सामाजिक दृष्टिले ब्राह्मण तथा चाण्डाल भिन्न-भिन्न जातका हुन सक्दछन् अथवा कुकुर, गाई तथा हात्ती पनि योनिअनुसार भिन्न हुन सक्दछन् तर विद्वान् योगीका दृष्टिमा यस्ता शरीरगत भिन्नता अर्थहीन ठहरिन्छ। यसको कारण के हो भने, तिनीहरूको सम्बन्ध परमेश्वरसँग रहेको हुन्छ र परमेश्वर प्रत्येकका हृदयमा परमात्माको रूपमा रहनु हुन्छ। परमसत्यको यस्तो ज्ञान नै वास्तविक ज्ञान हो। शरीरको सम्बन्ध विभिन्न जाति र योनिसँग भए पनि भगवान् सबैप्रति समानरूपले दयालु हुनुहुन्छ, त्यसैले उहाँ जीवहरूका परिस्थितिप्रति असंलग्न रहेर पनि प्रत्येक जीवलाई आफ्नो मित्र सम्झनु हुन्छ र आफ्नो परमात्मा स्वरूपलाई कायमा राख्नु हुन्छ। परमात्माका रूपमा भगवान् चाण्डाल र ब्राह्मण दुवैका हृदयभित्र उपस्थित रहनु हुन्छ, यद्यपि चाण्डाल र ब्राह्मण दुवैको शरीर भिन्न-भिन्न हुन सक्दछ। शरीर प्रकृतिका विभिन्न गुणद्वारा उत्पन्न हुने वस्तु हो तर शरीरभित्र रहने आत्मा र परमात्मा समान आध्यात्मिक गुण भएका तत्त्व हुन्। तैपनि आत्मा र परमात्माको गुणमा रहेको यो समानताले तिनीहरूलाई मात्रात्मक दृष्टिले समान बनाउँदैन, किनभने व्यष्टि आत्मा कुनै विशेष शरीरमा उपस्थित रहन्छ तर परमात्मा प्रत्येक शरीरमा विद्यमान हुनुहुन्छ। कृष्णभावनाभावित व्यक्तिलाई यसको पूर्ण ज्ञान हुन्छ र त्यसैले ऊ सही अर्थमा विद्वान् र समदर्शी हुन्छ। आत्मा र परमात्मा दुवै समान छन्, किनभने दुवै चेतन, शाश्वत तथा आनन्दमय छन् तर तिनमा भिन्नता भनेको, आत्मा शरीरको सीमाभित्र रहन्छ र परमात्मा सबै शरीरमा व्याप्त रहनु हुन्छ। परमात्मा भेदभावरहित भएर सबै शरीरमा विद्यमान रहनु हुन्छ।

**इहैव तैर्जितः सर्गो येषां साम्ये स्थितं मनः ।**
**निर्दोषं हि समं ब्रह्म तस्माद् ब्रह्मणि ते स्थिताः ॥ १९ ॥**

**इह** — यो जीवनमा; **एव** — निश्चय नै; **तैः** — तिनीहरूले; **जितः** — जितेका; **सर्गः** — जन्म र मृत्यु; **येषाम्** — जसको; **साम्ये** — समानतामा; **स्थितम्** — रहेका; **मनः** — मन; **निर्दोषम्** — दोषरहित; **हि** — निश्चय नै; **समम्** — समतामा; **ब्रह्म** — ब्रह्म झैँ; **तस्मात्** — तसर्थ; **ब्रह्मणि** — ब्रह्ममा; परमेश्वरमा; **ते** — तिनीहरू; **स्थिताः** — रहेका हुन्छन्।

**आफ्नो मनलाई समानता र एकत्वमा स्थापित गरेका व्यक्तिहरूले आफ्नो जन्म र मृत्युको अवस्थालाई पहिला नै जितिसकेका हुन्छन्। तिनीहरू ब्रह्मजस्तै निर्दोष हुन्छन् र यसरी सधैँ ब्रह्ममा स्थित हुन्छन्।**

**तात्पर्य :** मानसिक समानता नै आत्मसाक्षात्कारको लक्षण हो भन्ने कुरा माथि नै भनिसकियो। यथार्थमा मानसिक समानताको त्यस्तो अवस्था प्राप्त गरेका व्यक्तिहरूलाई जन्म र मृत्युजस्ता भौतिक बन्धनमाथि विजय प्राप्त गरेका मुक्त आत्मा मान्नु पर्दछ। मानिसले जबसम्म आफ्नो शरीरलाई आत्मस्वरूप मानेको हुन्छ तबसम्म उसलाई बद्ध जीव भन्नु पर्दछ। तर जब उसले आत्मसाक्षात्कारद्वारा समानचित्तताको अवस्था प्राप्त गर्दछ अनि ऊ आफ्नो बद्ध जीवनबाट मुक्त हुन्छ। अर्थात्, अब उसले यो भौतिक जगत्मा फेरि जन्म लिनु पर्दैन र ऊ मृत्युपछि आध्यात्मिक लोकमा पुग्दछ। भगवान् आसक्ति र घृणारहित हुनुहुन्छ त्यसैले उहाँ निर्दोष हुनुहुन्छ। यसै गरी यदि जीव पनि घृणा र आसक्तिले रहित हुन सके ऊ पनि निर्दोष भएर वैकुण्ठलोकमा प्रवेश गर्नयोग्य हुन्छ। यस्ता व्यक्तिलाई पहिलेदेखि नै मुक्त मान्नु पर्दछ र तिनका लक्षणहरूको व्याख्या तल गरिनेछ।

**न प्रहृष्येत्प्रियं प्राप्य नोद्विजेत्प्राप्य चाप्रियम् ।**
**स्थिर बुद्धिरसंमूढो ब्रह्मविद् ब्रह्मणि स्थितः ॥ २० ॥**

**न प्रहृष्येत्** — हर्षित हुँदैन; **प्रियम्** — प्रिय वस्तु; **प्राप्य** — पाएर; **नउद्विजेत्** — विचलित हुँदैन; **प्राप्य** — प्राप्त गरेर; **च** — पनि; **अप्रियम्** — अप्रिय कुरा; **स्थिर-बुद्धिः** — निश्चल बुद्धि भएको; **असम्मूढः** — मोहरहित; **ब्रह्म-वित्** — परमब्रह्मलाई राम्ररी जानेको; **ब्रह्मणि** — ब्रह्ममा; **स्थितः** — रहेको।

**जो प्रिय वस्तु पाएर हर्षित हुँदैन र अप्रिय वस्तु पाउँदा विचलित हुँदैन, जसको बुद्धि स्थिर छ, जो मोहरहित छ र जसले भगवत्-विद्या जानेको छ त्यो व्यक्तिलाई पहिलेदेखि नै ब्रह्ममा स्थित रहेको मान्नु पर्दछ।**

**तात्पर्य :** यहाँ स्वरूप सिद्ध व्यक्तिको लक्षण भनिएको छ। पहिलो लक्षण के हो भने, त्यस्ता व्यक्तिमा शरीरसँग आत्मतत्त्वको तादात्म्यबारे भ्रम रहँदैन। उसले 'म शरीर होइन, म त भगवान्को एउटा सूक्ष्म अंश मात्र हूँ' भन्ने कुरा राम्रोसँग जानेको हुन्छ। उसलाई न त केही प्राप्त हुँदा हर्ष हुन्छ न त शरीरसँग सम्बन्धित कुनै कुराको क्षति हुँदा शोक नै हुन्छ। मनको यो स्थिरतालाई स्थिरबुद्धि तथा आत्मबुद्धि भनिन्छ। तसर्थ ऊ यो स्थूल शरीरलाई आत्मा मान्ने

भूल गरेर मोहग्रस्त हुँदैन, न त उसले शरीरलाई स्थायी वस्तु मानेर आत्माको अस्तित्वलाई नै अस्वीकार नै गर्न सक्दछ। यस्तो ज्ञानले उसलाई परमसत्य, ब्रह्म, परमात्मा तथा भगवान्सम्बन्धी परिपूर्ण ज्ञानको अवस्थासम्म पुऱ्याउँदछ। यसरी उसले आफ्नो मौलिक स्वरूपलाई राम्रोसँग बुझ्दछ र हरेक पक्षबाट परब्रह्मसँग एकाकार हुने झूटो प्रयास गर्दैन। यसैलाई ब्रह्म-साक्षात्कार वा आत्मसाक्षात्कार भनिन्छ। अनि यही स्थिर बुद्धि नै कृष्णभावना हो।

**बाह्यस्पर्शेष्वसक्तात्मा विन्दत्यात्मनि यत्सुखम् ।**
**स ब्रह्मयोगयुक्तात्मा सुखमक्षयमश्नुते ॥ २१॥**

**बाह्य-स्पर्शेषु** — बाहिरी इन्द्रिय सुखमा; **असक्त आत्मा** — अनासक्त पुरुष; **विन्दति** — भोग गर्दछ; **आत्मनि** — आत्मामा; **यत्** — जो; **सुखम्** — सुख; **सः** — त्यो; **ब्रह्मयोग** — ब्रह्ममा एकाग्र भएर; **युक्त-आत्मा** — आत्मयुक्त वा आत्मासँग सम्बन्धित; **सुखम्** — सुखलाई; **अक्षयम्** — असीमित; **अश्नुते** — भोग गर्दछ।

**यस्तो मुक्तपुरुष भौतिक इन्द्रिय-सुखतिर आकृष्ट नभई सधैँ समाधिमा रहेर आफैँभित्र आनन्दको अनुभव गर्दछ। यसरी आत्मसाक्षात्कार गरेको व्यक्ति परब्रह्ममा एकाग्र-चित्त रहने हुँदा असीम सुखको भोग गर्दछ।**

**तात्पर्य :** कृष्णभावनाका महान् भक्त श्री यामुनाचार्यले भन्नुभएको छ—

*यदवधि मम चेतः कृष्णपदारविन्दे*
*नवनवरसधामन्युद्यतं रन्तुमासीत् ।*
*तदवधि बत नारीसंगमे स्मर्यमाणे*
*भवति मुखविकारः सुष्ठु निष्ठीवनं च ॥*

"जहिलेदेखि कृष्णभक्तिमा लागेर मैले नित्य नयाँ नयाँ आनन्दको अनुभव गर्न थालेँ, त्यस समयदेखि नै नारीसङ्गमको सुख सम्झनेबित्तिकै मेरा ओँठ बटारिन्छन् र थुक्न मन लागेर आउँछ"। ब्रह्मयोगी अर्थात् कृष्णभावनाभावित व्यक्ति भगवान्को प्रेमाभक्तिमा कतिसम्म तल्लीन रहन्छ भने, भौतिक इन्द्रियसुखमा उसलाई कत्ति पनि रुचि हुँदैन। भौतिक दृष्टिमा त कामसुख नै सर्वोपरि आनन्द हो कि जस्तो लाग्दछ। सारा संसार त्यसको अधीनमा रहेर चल्दछ, भौतिकवादी मानिसहरू त यसको प्रोत्साहनबिना कुनै काम गर्न सक्दैनन्। तर, कृष्णभावनामृतमा लीन भएको व्यक्ति विषय-वासनाको सुखबिना पनि उत्साहपूर्वक आफ्नो काममा लागिरहन्छ। आत्मसाक्षात्कारको कसी पनि यही हो। आत्मसाक्षात्कार र कामसुख कहिल्यै पनि एकसाथ अघि

बद्न सक्दैनन्। कृष्णभावनाभावित व्यक्ति जीवनमुक्त रहने हुँदा उसलाई कुनै प्रकारको इन्द्रियसुखले आकर्षित गर्नै सक्दैन।

**ये हि संस्पर्शजा भोगा दुःखयोनय एव ते ।**
**आद्यन्तवन्तः कौन्तेय न तेषु रमते बुधः ॥ २२ ॥**

**ये** — जो; **हि** — निश्चय नै; **संस्पर्शजा** — भौतिक इन्द्रियको स्पर्शद्वारा उत्पन्न; **भोगाः** — भोग; **दुःख** — दुःख; **योनयः** — स्रोत वा कारण; **एव** — निश्चय नै; **ते** — तिनीहरू छन्; **आदि** — प्रारम्भ; **अन्तवन्तः** — नाश हुने, अन्त्य हुने; **कौन्तेय** — हे कुन्तीपुत्र; **न** — होइन; **तेषु** — तिनमा; **रमते** — रमाउँदछ; **बुधः** — बुद्धिमान् मनुष्य।

**भौतिक इन्द्रियहरूको संस्पर्शबाट उत्पन्न हुने दुःखको स्रोतमा बुद्धिमान् मनुष्य रमाउँदैन। हे कुन्तीपुत्र! यस्ता भोगहरूको आदि र अन्त्य हुने हुँदा त्यस्ता विषयमा बुद्धिमान्हरू रुचि राख्दैनन्।**

**तात्पर्य :** यो शरीर स्वयम् नाशवान् भएको हुनाले इन्द्रियहरूको संस्पर्शबाट उत्पन्न भौतिक इन्द्रियसुखहरू सम्पूर्ण नाशवान् छन्। मुक्तात्मा कुनै पनि नाशवान् वस्तुमा रुचि राख्दैन। दिव्य आनन्दको स्वाद जानिसकेका मुक्तात्माहरू झूटो सुखका पछि लाग्न उत्सुक हुँदैनन्। पद्म पुराणमा भनिएको छ—

*रमन्ते योगिनोऽनन्ते सत्यानन्दे चिदात्मनि ।*
*इति राम पदेनासौ परं ब्रह्माभिधीयते ॥*

"योगीहरू परमसत्य साक्षात् भगवान्बाट प्राप्त हुने अनन्त दिव्य सुखमा रमण गर्दछन्, त्यसैले परमसत्यलाई राम पनि भनिन्छ।" *श्रीमद्भागवत्* (५.५.१) मा पनि भनिएको छ—

*नायं देहो देहभाजां नृलोके कष्टान् कामानर्हते विड्भुजां ये ।*
*तपो दिव्यं पुत्रका येन सत्त्वं शुद्ध्येद् यस्माद् ब्रह्मसौख्यं त्वनन्तम् ॥*

"ए छोरा हो! यो मनुष्य जीवनमा इन्द्रियसुखका निमित्त धेरै कठिन श्रम गर्नु व्यर्थ छ। यस्तो सुख त विष्टा खाने सुँगुरले पनि पाएको छ। तिमीहरूले त यो जीवनमा तपस्या गर्नु पर्दछ जसले गर्दा तिमीहरूको जीवन पवित्र होओस् र तिमीहरूलाई असीम दिव्य सुखभोग प्राप्त हुन सकोस्।" त्यसैले यथार्थ योगी वा विद्वान् अध्यात्मवादीहरू इन्द्रियसुखतिर आकृष्ट हुँदैनन्, किनभने ती इन्द्रियसुख नै निरन्तर भवरोगका कारण हुन्। भौतिक सुखप्रति जो जति आसक्त हुन्छ उसलाई त्यत्तिकै भौतिक दुःखको बन्धनमा पर्नु पर्दछ।

**शक्नोतीहैव यः सोढुं प्राक्शरीरविमोक्षणात् ।**
**कामक्रोधोद्भवं वेगं स युक्तः स सुखी नरः ॥ २३ ॥**

**शक्नोति** — समर्थ हुन्छ; **इह एव** — यही शरीरमा; **यः** — जो; **सोढुम्** — सहन गर्न; **प्राक्** — पहिले; **शरीर** — शरीर; **विमोक्षणात्** — त्याग गर्नुभन्दा; **काम** — इच्छा; **क्रोध** — क्रोध; **उद्भवम्** — उत्पन्न; **वेगम्** — वेगलाई; **सः** — त्यो; **युक्तः** — समाधिमा; **सः** — त्यो; **सुखी** — सुखी; **नरः** — मनुष्य।

**यो शरीर त्याग गर्नुभन्दा पहिले इन्द्रियको वेग रोक्न र इच्छा एवं क्रोधको वेग सहन गर्न सक्ने मानिस नै संसारमा सुखी रहन सक्दछ।**

**तात्पर्य :** आत्मासाक्षात्कारको बाटोमा अग्रसर हुन चाहनेले भौतिक इन्द्रियहरूको वेग रोक्ने प्रयत्न गर्नु पर्दछ। ती वेगहरू यस्ता छन् — वाणीको वेग, क्रोधको वेग, मनको वेग, पेटको वेग, उपस्थ वा जननेन्द्रियको वेग तथा जिब्रोको वेग। यी विभिन्न इन्द्रियका वेगहरू तथा मनलाई वशमा राख्न समर्थ व्यक्ति नै गोस्वामी वा स्वामी भनिन्छ। यस्ता गोस्वामीहरू अत्यन्त संयमित जीवन बिताउँछन् र इन्द्रिय-वेगहरूलाई तिरस्कार गर्दछन्। भौतिक इच्छाहरू पूर्ण नभए क्रोध उत्पन्न हुन्छ, यसबाट मन, नेत्र तथा वक्षस्थल उत्तेजित हुन्छन्। तसर्थ शरीर परित्याग नगर्दै मानिसले यिनीहरूलाई वशमा राख्ने अभ्यास गर्नु पर्दछ। जसले यसो गर्न सक्दछ त्यसलाई स्वरूपसिद्ध मान्न सकिन्छ र यसरी उसलाई आत्मसाक्षात्कारको अवस्थामा सुख प्राप्त हुन सक्दछ। इच्छा तथा क्रोधलाई वशमा राख्न यथेष्ट प्रयत्न गर्नु नै योगीको कर्तव्य हो।

**योऽन्तःसुखोऽन्तरारामस्तथान्तर्ज्योतिरेव यः ।**
**स योगी ब्रह्मनिर्वाणं ब्रह्मभूतोऽधिगच्छति ॥ २४ ॥**

**यः** — जो; **अन्तःसुखः** — अन्तरमनदेखि नै सुखी; **अन्तः आरामः** — अन्तरात्मामा रमण गर्ने; **तथा** — तथा; **अन्तः ज्योतिः** — अन्तर्मुखी लक्ष्य राख्दै; **एव** — निश्चय नै; **यः** — जो; **सः** — त्यो; **योगी** — योगी; **ब्रह्म-निर्वाणम्** — परब्रह्ममा मुक्ति; **ब्रह्म-भूतः** — स्वरूपसिद्ध वा ब्रह्ममय भएर; **अधिगच्छति** — प्राप्त गर्दछ।

**जो अन्तःकरणमा सुखको अनुभव गर्दछ, जो कर्मठ छ र अन्तःकरणमो रमण गर्दछ अनि जसको लक्ष्य अन्तर्मुखी छ त्यो यथार्थमा पूर्णयोगी हो। त्यो ब्रह्ममुक्त हो र त्यसले अन्त्यमा ब्रह्मलाई नै प्राप्त गर्दछ।**

**तात्पर्य :** आफ्नो अन्तःकरणमा सुखको अनुभव गर्न नसकेसम्म बाहिरी सुख प्रदान गर्ने बाह्य क्रियाकलापबाट मानिसले कसरी छुट्कारा पाउन सक्दछ?

मुक्तपुरुषले वास्तविक अनुभवद्वारा नै सुखको अनुभूति गर्दछ। उसले कुनै पनि ठाउँमा मौन बसेर अन्तःकरणबाट जीवनका क्रियाकलापहरूको आनन्द प्राप्त गर्न सक्दछ। यस्तो मुक्तपुरुषले कहिल्यै पनि बाह्य भौतिक सुखको कामना गर्दैन। यो अवस्थालाई ब्रह्मभूत अवस्था भनिन्छ र यस्तो अवस्थालाई प्राप्त गरिसकेपछि मात्र भगवद्धाममा जानपाउने कुरा निश्चित हुन्छ।

**लभन्ते ब्रह्मनिर्वाणमृषयः क्षीणकल्मषाः ।**
**छिन्नद्वैधा यतात्मानः सर्वभूतहिते रताः ॥ २५ ॥**

**लभन्ते** — प्राप्त गर्दछन्; **ब्रह्मनिर्वाणम्** — मुक्ति (ब्रह्ममुक्ति); **ऋषयः** — अन्तर्मुखी व्यक्तिहरू; **क्षीणकल्मषाः** — पाप क्षीण भएका; **छिन्न** — निवृत्त भएर; **द्वैधाः** — द्वैतभावबाट; **यतात्मानः** — आत्मसाक्षात्कारमा संलग्न; **सर्वभूत** — सधैँ जीवका लागि; **हिते** — कल्याणकारी कार्यमा संलग्न; **रताः** — लागेका।

**जो शंकाबाट उत्पन्न हुने द्वैतभावभन्दा पर छन्, जसको मन आत्मसाक्षात्कारमा लीन भएको छ, जो सबै जीवहरूको कल्याण गर्नमा सबै व्यस्त रहन्छन् र जो सम्पूर्ण पापले रहित छन् तिनीहरूले नै ब्रह्म निर्वाण ( मुक्ति ) प्राप्त गर्दछन्।**

**तात्पर्य :** केवल त्यही व्यक्ति सबै जीवहरूको कल्याण कार्यमा संलग्न भएको मानिन्छ जो पूर्णतया कृष्णभावनाभावित हुन्छ। भगवान् श्रीकृष्ण नै सबै वस्तुका उद्गम हुनुहुन्छ भन्ने वास्तविक ज्ञान भएको व्यक्तिले जब कुनै काम गर्दछ, सबैको हितलाई ध्यानमा राखेर गर्दछ। परमभोक्ता, परमनियन्त्रक तथा परमसखा भगवान् श्रीकृष्णलाई भुल्नु नै मानवताको क्लेशको कारण हो। अतः समग्र मानव समाजभित्र यस्तो चेतनालाई जागृत तुल्याउन गरिने कार्य गर्नु नै सबैभन्दा ठुलो कल्याण कार्य हो। कुनै पनि व्यक्ति प्रथमतः स्वयम् मुक्त नभई यस्तो श्रेष्ठ कार्यमा लाग्न सक्दैन। कृष्णभावनाभावित मानिसका हृदयमा भगवान् श्रीकृष्णको सर्वोच्चताप्रति कत्ति पनि शंका हुँदैन। ऊ सबै पापबाट मुक्त हुने हुनाले नै उसमा कुनै शंका हुँदैन। दैवीप्रेमको स्थिति भनेको यही हो। मानव समाजको भौतिक तथा शारीरिक कल्याण कार्यमा मात्रै व्यस्त रहने व्यक्तिबाट वास्तवमा कसैको पनि सहायता हुन सक्दैन। बाहिरी शरीर तथा मनको क्षणिक विश्रान्तिले मात्र पूर्ण सन्तुष्टि दिँदैन। जीवनका कठिन सङ्घर्षमा हुने मानिसका समस्याहरूको वास्तविक कारण नै मानिसले परमेश्वरसँग रहेको आफ्नो सम्बन्धलाई बिर्सिदिनु हो। भौतिक जञ्जालमा फँसेको भए पनि भगवान् श्रीकृष्णसँग रहेको आफ्नो सम्बन्धका विषयमा पूर्ण सचेत रहने व्यक्ति नै वास्तविक मुक्त आत्मा हो।

**कामक्रोधविमुक्तानां यतीनां यतचेतसाम् ।**
**अभितो ब्रह्मनिर्वाणं वर्तते विदितात्मनाम् ॥ २६ ॥**

**काम** — इच्छाहरूबाट; **क्रोध** — क्रोधबाट; **विमुक्तानाम्** — मुक्त भएका पुरुषको; **यतीनाम्** — साधु पुरुषको; **यतचेतसाम्** — मनमाथि पूर्ण नियन्त्रण हुनेको; **अभितः** — निकट भविष्यमा निश्चित; **ब्रह्मनिर्वाणम्** — ब्रह्ममा मुक्ति; **वर्तते** — हुन्छ; **विदित आत्मनाम्** — स्वरूप सिद्ध व्यक्तिहरूको।

**जो सम्पूर्ण भौतिक इच्छा तथा क्रोधबाट मुक्त छन्, जो स्वरूपसिद्ध छन्, जो आत्मसंयमी छन् र पूर्णताका लागि निरन्तर प्रयत्नशील छन्, निकट भविष्यमा तिनीहरूको मुक्ति सुनिश्चित छ।**

**तात्पर्य :** मोक्षका लागि सतत प्रयत्नशील रहने साधुपुरुषहरूमध्ये जो कृष्णभावनाभावित छ त्यही सर्वश्रेष्ठ हो। यस तथ्यको पुष्टि *श्रीमद्भागवत* (४.२२.३९) मा यसरी गरिएको छ।

*यत्पादपंकजपलाशविलास भक्त्या*
*कर्माशयं ग्रथितमुद्ग्रथयन्ति सन्तः ।*
*तद्वन्न रिक्तमतयो यतयोऽपि रुद्ध*
*स्रोतोगणास्तमरणं भज वासुदेवम् ॥*

"भक्तिपूर्वक भगवान् वासुदेवको पूजन गर्ने प्रयास गर। ठुलाठुला साधुपुरुष पनि इन्द्रियहरूको वेगलाई त्यति कुशलतापूर्वक रोक्न सक्दैनन् जति कुशलतापूर्वक सकाम कर्मको गहिरो इच्छालाई समूल नष्ट गर्ने र भगवान्का चरणकमलको सेवामा लागेर दिव्य आनन्द प्राप्त गर्नेहरूले रोक्न सक्दछन्।"

बद्ध जीवमा कर्मको फल भोग्ने इच्छा अति बलवान् हुन्छ। ठुलाठुला ऋषिमुनिहरूलाई समेत कठोर परिश्रम गर्दा गर्दै पनि यस्तो इच्छा वशमा राख्न अत्यन्त कठिन हुन्छ। तर, कृष्णभावनामा निरन्तर सेवारत भगवान्को भक्त आत्मसाक्षात्कारमा पारङ्गत हुन्छ र उसले अति छिटो ब्रह्ममुक्ति प्राप्त गर्दछ। आत्मसाक्षात्कारको पूर्ण ज्ञान हुनाले ऊ सधैँ समाधिस्थ हुन्छ। योसँग मिल्दोजुल्दो एउटा उदाहरण यहाँ प्रस्तुत छ—

*दर्शनध्यानसंस्पर्शैः मत्स्यकूर्मविहंगमाः ।*
*स्वान्यपत्यानि पुष्णन्ति तथाहमपि पद्मज ॥*

"माछा, कछुवा तथा पक्षीहरू केवल दृष्टिद्वारा, चिन्तनद्वारा तथा स्पर्शद्वारा आफ्ना सन्तानहरू हुर्काउँछन्। हे पद्मज! म पनि त्यसै गर्दछु।"

माछाले हेरेर मात्र आफ्ना बच्चाको पोषण गर्दछ, कछुवाले केवल बच्चाको चिन्तन गरेर आफ्ना बच्चा हुर्काउँदछ। कछुवाले जमिनमा फुल पार्दछ र आफू पानीभित्र बस्दछ तर निरन्तर आफू नै आफ्ना फुलमा ओथारो बसेको कल्पना गरिरहन्छ। चराहरूले न्यानो स्पर्श दिएर मात्रै बच्चा हुर्काउँदछन्। यस्तै प्रकारले कृष्णभावनामा संलग्न भक्त पनि भगवद्धामबाट टाढा रहेर पनि निरन्तर भगवान्को चिन्तनद्वारा अन्त्यमा उहाँको धाममा पुग्दछ। भौतिक क्लेशको अनुभव उसलाई हुँदैन। जीवनको यस्तो अवस्था नै ब्रह्म निर्वाणको अवस्था हो। भगवान्मा निरन्तर लीन रहनेहुँदा उसलाई भौतिक कष्टको कुनै अनुभव नै हुँदैन।

**स्पर्शान्कृत्वा बहिर्बाह्यांश्चक्षुश्चैवान्तरे भ्रुवोः ।**
**प्राणापानौ समौ कृत्वा नासाभ्यन्तरचारिणौ ॥ २७॥**
**यतेन्द्रियमनोबुद्धिर्मुनिर्मोक्षपरायणः ।**
**विगतेच्छाभयक्रोधो यः सदा मुक्त एव सः ॥ २८॥**

**स्पर्शान्** — ध्वनि आदि इन्द्रियका विषय; **कृत्वा** — राखेर; **बहिः** — बाहिरी; **बाह्यान्** — अनावश्यक; **चक्षुः** — आँखा; **च** — पनि; **एव** — निश्चय नै; **अन्तरे** — माभमा; **भ्रुवोः** — आँखीभौँको; **प्राण अपानौ** — ऊर्ध्वगामी र अधोगामी वायु; **समौ** — अवरुद्ध; **कृत्वा** — गरेर; **नास-अभ्यन्तर** — नाकभित्र; **चारिणौं** — चलिरहने; **यत** — संयमित; **इन्द्रिय** — इन्द्रियहरू; **मनः** — मन; **बुद्धिः** — बुद्धि; **मुनिः** — योगी; **मोक्ष** — मोक्षका लागि; **परायणः** — परायण, तत्पर; **विगत** — परित्याग गरेका; **इच्छा** — इच्छा; **भय** — डर; **क्रोधः** — क्रोध; **यः** — जो; **सदा** — सधैँ; **मुक्तः** — मुक्त; **एव** — निश्चय नै; **सः** — त्यो।

**समग्र इन्द्रियका विषयहरूलाई पन्छाएर, दृष्टिलाई आँखीभौँको बिचमा केन्द्रित गरेर, प्राण तथा अपान वायुलाई नाकभित्र रोकेर अनि मन, इन्द्रिय तथा बुद्धिलाई वशमा राख्दै मोक्षलाई लक्ष्य बनाएको योगी, इच्छा, भय तथा क्रोधबाट मुक्त हुन्छ। जो सधैँ यस्तो अवस्थामा रहन्छ त्यो निश्चय नै जीवनमुक्त हो।**

**तात्पर्य :** कृष्णभावनामृतमा संलग्न हुनेबित्तिकै मानिसले आफ्नो आध्यात्मिक स्वरूपको बारेमा थाहा पाउँदछ। यसपछि भक्तिद्वारा उसले परमेश्वरलाई चिन्दछ। भक्तिमा दृढ रहेको मानिसले नै दिव्य स्थिति प्राप्त गर्दछ। उसले आफ्नो कर्मक्षेत्रमा पनि भगवान्को उपस्थिति अनुभव गर्ने योग्यता आर्जन गर्दछ। यस्तो विशेष स्थितिलाई नै ब्रह्ममुक्ति भनिन्छ।

भगवान् श्रीकृष्णले मुक्तिबारे उपर्युक्त सिद्धान्त प्रतिपादन गर्नुभयो र

कसरी मानिसले अष्टाङ्ग योगको अभ्यासद्वारा यस्तो स्थिति प्राप्त गर्न सक्दछ भन्ने शिक्षा पनि अर्जुनलाई प्रदान गर्नुभयो। यो अष्टाङ्ग योग आठ प्रकारका छन्—**यम, नियम, आसन, प्राणायाम, प्रत्याहार, धारणा, ध्यान र समाधि**। छैटौँ अध्यायमा योगका विषयको विस्तृत व्याख्या गरिएको छ र यो पाँचौँ अध्यायको अन्त्यमा त्यसको प्रारम्भिक विवेचना मात्र गरिएको छ। योगमा प्रत्याहार विधिअनुसार शब्द, स्पर्श, रूप, रस र गन्धलाई निराकरण गर्नु पर्दछ अनि दृष्टिलाई आँखीभौँको बिचे राखेर आधा आँखाले नाकको टुप्पामा एकाग्र भएर हेरिरहनु पर्दछ। पूरै आँखा चिम्लेर कुनै लाभ हुँदैन किनकि त्यसो गर्दा निद्रा लाग्ने बढी सम्भावना हुन्छ अनि आँखा पूरै खुला राख्दा पनि लाभ हुँदैन किनकि त्यस समय इन्द्रियका विषयहरूद्वारा आकर्षित हुन सक्ने खतरा हुन्छ। नाकभित्र श्वासको गति रोक्नका लागि शरीरमा रहेको प्राण तथा अपान वायुलाई सम (तटस्थ) राख्नु पर्दछ। यस किसिमको योगअभ्यासद्वारा मानिसले आफ्ना इन्द्रियहरूमाथि विजय प्राप्त गर्न सक्दछ अनि बाह्य इन्द्रियका विषयहरूबाट टाढा रहेर उसले आफ्नो मुक्तिको तयारी गर्न सक्दछ।

यस्तो योगविधिबाट मानिसलाई सबै प्रकारका भय तथा क्रोधदेखि अलग हुन सहायता पुग्दछ र यसरी दिव्य अवस्थामा परमात्माको उपस्थितिलाई अनुभव गर्न सकिन्छ। अर्को शब्दमा भन्दा योगका सिद्धान्तहरूलाई सम्पन्न गर्ने सरलतम् विधि नै कृष्णभावनामृत हो। आगामी अध्यायमा यसबारे विस्तृत व्याख्या हुने छ। कृष्णभावनाभावित व्यक्ति सधैं भक्तिमा लीन रहने हुँदा उसका इन्द्रियहरू अन्यत्र लाग्ने खतरा रहँदैन। इन्द्रियहरूलाई वशमा राख्नका लागि यो विधि अष्टाङ्ग योगभन्दा धेरै उत्तम छ।

**भोक्तारं यज्ञतपसां सर्वलोकमहेश्वरम् ।**
**सुहृदं सर्वभूतानां ज्ञात्वा मां शान्तिमृच्छति ॥ २९ ॥**

**भोक्तारम्**— भोग गर्ने भोक्ता; **यज्ञ**— यज्ञहरूको; **तपसाम्**— तपस्याको; **सर्वलोक**— सम्पूर्ण लोक तथा त्यहाँका देवताहरूको; **महाईश्वरम्**— परमेश्वर; **सुहृदम्**— उपकारी; **सर्व**— सबैका; **भूतानाम्**— जीवहरू; **ज्ञात्वा**— यसरी जानेर; **माम्**— म (कृष्ण) लाई; **शान्तिम्**— भौतिक यातनाबाट मुक्ति; **ऋच्छति**— प्राप्त गर्दछ।

**मलाई नै सम्पूर्ण यज्ञ र तपस्याका परमभोक्ता जानेर, मलाई नै सबै लोकहरू र देवताहरूका परमस्वामी मान्ने र मलाई नै सम्पूर्ण प्राणीका उपकारी तथा हितैषी ठान्ने, मेरो भावनाले पूर्ण भएको व्यक्तिले भौतिक कष्टहरूको पीडाबाट शान्ति प्राप्त गर्दछ।**

**तात्पर्य :** माया-शक्तिको बन्धनमा बाँधिएका सबै बद्ध जीवहरू संसारमा शान्ति प्राप्त गर्न उत्सुक छन् तर *भगवद्गीताको* यस अध्यायमा वर्णन गरिएको शान्ति सूत्रलाई तिनीहरू बुझ्दैनन्। भगवान् श्रीकृष्ण सम्पूर्ण मानवीय कर्मका भोक्ता हुनुहुन्छ भन्ने भाव नै सबभन्दा ठुलो शान्तिसूत्र हो। मानिसले आफ्ना प्रत्येक वस्तु भगवान्को दिव्य सेवामा अर्पण गर्नु पर्दछ, किनभने उहाँ नै सबै लोक र त्यहाँका देवताहरूका पनि स्वामी हुनुहुन्छ। उहाँभन्दा ठुलो अर्को कोही छैन। उहाँ त ठुलाभन्दा पनि ठुला देवता, शिव तथा ब्रह्माभन्दा पनि महान् हुनुहुन्छ। वेदमा (श्वेताश्वतर उपनिषद् ६.७) भगवान्लाई **"तमीश्वराणां परमं महेश्वरम्"** भनिएको छ। मायाको वशीभूत भएर सबै जीवात्माहरू सर्वत्र आफ्नो प्रभुत्व विस्तार गर्न खोजिरहेछन् तर वास्तवमा भन्दा, सर्वत्र भगवान्को मायाले तिनलाई आफ्ना प्रभावमा पारिएको छ। भगवान् भौतिक प्रकृतिका स्वामी हुनुहुन्छ तर बद्ध जीव त्यही भौतिक प्रकृतिको कडा शासनका अधीनमा छन्। जबसम्म यस्तो ध्रुवसत्यलाई मानिसले बुझ्न सक्दैन तबसम्म संसारमा व्यष्टि या समष्टि रूपले कसैले पनि शान्ति प्राप्त गर्न सम्भव छैन। कृष्णभावनामृतको सार यही हो। भगवान् श्रीकृष्ण परमपरमेश्वर हुनुहुन्छ र महान् देवताहरू सहित सबै जीवात्माहरू उहाँकै अधीनस्थ छन्। पूर्ण कृष्णभावनामृतमा रहेर मात्रै मानिसले पूर्ण शान्ति प्राप्त गर्न सक्दछ।

यस पाँचौँ अध्यायमा कृष्णभावनामृतको व्यावहारिक व्याख्या गरिएको छ, जसलाई सामान्यतया **कर्मयोग** पनि भनिन्छ। अनि कर्मयोगबाट कसरी मुक्ति प्राप्त हुन सक्दछ भन्ने मनोगत प्रश्नको उत्तर यहाँ दिइएको छ। कृष्णभावनामृतमा रहेर कार्य गर्नुको अर्थ परमेश्वरका रूपमा भगवान्लाई चिनेर पूर्ण ज्ञानसहित कर्म गर्नु हो। यस्तो कर्म दिव्य ज्ञानभन्दा अलग हुँदैन। कृष्णभावनामृत भनेको प्रत्यक्ष **भक्तियोग** हो र **ज्ञानयोग** भनेको भक्तियोग प्राप्त गर्ने बाटो हो। कृष्णभावनामृतको अर्को अर्थ परमेश्वरसँग रहेको आफ्नो सम्बन्धबारे पूर्ण ज्ञान प्राप्त हुनु र त्यसअनुसार कर्म गर्नु हो। किनभने यस्तो चेतनाको पूर्णता भनेको भगवान्को वा श्रीकृष्णको पूर्ण ज्ञान हो। शुद्ध जीव भगवान्को सूक्ष्म अंश हो र उहाँकै शाश्वत दास हो। ऊ मायामाथि स्वामित्व कायम गर्ने इच्छाले मायाको सम्पर्कमा आउँदछ र यही नै उसका धेरै दुःखहरूको मूलकारण पनि हो। ऊ जबसम्म पदार्थको सम्पर्कमा रहन्छ, भौतिक आवश्यकताहरूको पूर्तिका लागि उसले कर्म गर्नै पर्दछ। यदि ऊ कृष्णभावनाभावित भएमा पदार्थको परिधिभित्र रहेर पनि आध्यात्मिक जीवन प्राप्त गर्न सक्दछ, किनभने भौतिक जगत्मा पनि भक्तिको अभ्यास गर्नाले जीवको दिव्यस्वरूप प्रकट हुन्छ। जुन मनुष्यले जति जति आध्यात्मिक उन्नति

गर्दछ त्यो व्यक्ति नै पदार्थको बन्धनबाट मुक्त हुँदैजान्छ। भगवान् कसैलाई पनि पक्षपात गर्नुहुन्न। त्यो त कृष्णभावनामा रहेर मानिसले व्यावहारिक रूपमा कर्तव्य पालन गर्ने कार्यमाथि निर्भर गर्ने कुरा हो। यसले मानिसलाई काम तथा क्रोधमाथि विजय प्राप्त गरेर इन्द्रियहरूलाई वशमा राख्न सहायता पुऱ्याउँदछ। उपर्युक्त कामनाका इच्छामा नियन्त्रण राखेर कृष्णभावनामृतमा दृढ रहने व्यक्तिले नै ब्रह्मनिर्वाण वा दिव्य अवस्था प्राप्त गर्न सक्दछ। कृष्णभावनामृतमा अष्टाङ्ग योगपद्धतिको अभ्यास स्वतः भएको हुन्छ र यसैद्वारा अन्तिम लक्ष्यको पूर्ति पनि हुन सक्दछ। यम, नियम, आसन, प्राणायाम, प्रत्याहार, धारणा, ध्यान तथा समाधिको अभ्यासबाट विस्तारै विस्तारै मात्र प्रगति हुन्छ। तर, भक्तियोगका लागि यी कुराहरू केवल प्रस्तावना मात्र हुन्। केवल भक्तियोगबाट मात्र मानिसलाई पूर्ण शान्ति प्राप्त हुन सक्दछ। जीवनको परमसिद्धि पनि यही हो।

यस प्रकार *श्रीमद्भगवद्गीता* ग्रन्थअन्तर्गत 'कर्मयोग — कृष्णभावनामय कर्म' शीर्षक पाचौँ अध्यायको भक्तिवेदान्त तात्पर्य समाप्त भयो।

# अध्याय-छ

# ध्यानयोग

श्रीभगवानुवाच
**अनाश्रितः कर्मफलं कार्यं कर्म करोति यः ।**
**स संन्यासी च योगी च न निरग्निर्न चाक्रियः ॥ १ ॥**

**श्रीभगवान् उवाच** — भगवान्ले भन्नुभयो; **अनाश्रितः** — शरण ग्रहण नगरी; **कर्मफलम्** — कर्मफलको; **कार्यम्** — कर्तव्य; **कर्म** — कर्म; **करोति** — गर्दछ; **यः** — जो; **सः** — त्यो; **संन्यासी** — संन्यासी; **च** — पनि; **योगी** — योगी; **च** — पनि; **न** — न त; **निः अग्निः** — अग्निरहित; **न** — न त; **च** — पनि; **अक्रियः** — कर्तव्यविहीन।

**भगवान् भन्नु हुन्छ — कर्मफलप्रति अनासक्त रहने र आफ्नो कर्तव्यको पालन गर्ने व्यक्ति नै सही संन्यासी वा योगी हो। आगो नबाल्ने र कर्तव्य कर्म नगर्नाले कोही पनि संन्यासी वा योगी हुन सक्दैन।**

**तात्पर्य :** यस अध्यायमा भगवान्ले अष्टाङ्ग योगपद्धतिलाई मन तथा इन्द्रियहरू नियन्त्रणमा राख्ने साधनको रूपमा वर्णन गर्नुभएको छ। तर, यस कलियुगमा सामान्य जनतालाई यो साधना सम्पन्न गर्न अत्यन्त कठिन हुन्छ। यस अध्यायमा भगवान्ले अष्टाङ्ग योगको प्रशंसा गर्नुभएको छ तापनि योभन्दा कर्मयोग अर्थात् कृष्णभावनामय कर्मलाई बढी जोड दिनुभएको छ। संसारमा प्रत्येक मानिस आफ्नो परिवारको पालन गर्न र आफ्नो श्रीसम्पत्तिको रक्षा गर्नका लागि कर्म गर्दछ तर कुनै स्वार्थबिना र कुनै व्यक्तिगत तृप्तिबिना कसैले पनि कर्म गर्दैन त्यो तृप्ति सानो होस् या ठुलो। अतः कर्मफलको भोग गर्ने उद्देश्यले प्रेरित भएर होइन बरु कृष्णभावनामय भएर कर्म गर्नु नै पूर्णताको रहस्य हो। कृष्णभावनामय कर्म गर्नु प्रत्येक व्यक्तिको कर्तव्य हो, किनभने सबै जीवात्मा मौलिक रूपले परमेश्वरका अंश हुन्। शरीरका सबै अङ्गहरू पूरै शरीरका लागि कार्य गर्दछन्। ती अङ्गहरू आफ्नो तुष्टिका लागि होइन पूरै शरीरको सन्तुष्टिका लागि कार्य गर्दछन्। त्यसै गरी जसले आफ्नो तुष्टिका लागि नभएर परब्रह्मको तुष्टिका लागि कार्य गर्दछ त्यही नै पूर्ण-संन्यासी वा पूर्ण-योगी हो।

कहिलेकाहीँ संन्यासीहरूले पनि सबै सांसारिक कर्महरूबाट मुक्ति पाइसकियो भन्ने ठानेर अग्निहोत्र यज्ञ गर्न छोडिदिन्छन्, वास्तवमा त्यो एक

प्रकारको स्वार्थीपन हो। किनभने तिनीहरूको मूल लक्ष्य त निराकार ब्रह्मसँग एकाकार हुनु हो। यस्तो इच्छा कुनै पनि भौतिक इच्छाभन्दा माथिल्लो हो तापनि यो स्वार्थरहित हुन सक्दैन। त्यसै गरी जुन योगी आफ्ना सबै सांसारिक कर्महरू बन्द गरेर आधा आँखा बन्द गरेर योग अभ्यास गरिरहेको छ त्यो पनि व्यक्तिगत आत्मतुष्टिको इच्छा राखेरै बसेको हुन्छ तर कृष्णभावनाभावित व्यक्ति कुनै पनि स्वार्थ नराखी पूर्णब्रह्मको तुष्टिका लागि कर्म गर्दछ। कृष्णभावनाभावित व्यक्तिमा कहिल्यै आत्मतुष्टिको इच्छा रहँदैन। भगवान् श्रीकृष्णलाई प्रसन्न राख्नु नै उसको सफलताको मापदण्ड हो र यसरी त्यो व्यक्ति पूर्ण-योगी वा पूर्ण-संन्यासी बन्दछ। त्यागका सर्वश्रेष्ठ प्रतीक भगवान् चैतन्यमहाप्रभु यसरी प्रार्थना गर्नु हुन्छ—

*न धनं न जनं न सुन्दरीं कवितां वा जगदीश कामये ।*
*मम जन्मनि जन्मनीश्वरे भवताद् भक्तिरहैतुकी त्वयि ॥*

"हे सर्वशक्तिमान् प्रभु! मलाई न धन-सङ्ग्रह गर्ने इच्छा छ न त सुन्दरीसँग रमण गर्ने अभिलाषा छ, आफ्ना अनुयायीहरू बढाउने कामना पनि मेरो छैन। म त जन्म जन्मान्तरसम्म हजुरको प्रेमाभक्तिको अहैतुकी कृपाको मात्र अभिलाषी छु।"

**यं संन्यासमिति प्राहुर्योगं तं विद्धि पाण्डव ।**
**न ह्यसंन्यस्तसंकल्पो योगी भवति कश्चन ॥ २ ॥**

**यम्** — जसलाई; **संन्यासम्** — संन्यास; **इति** — यस्तो; **प्राहुः** — भनिन्छ; **योगम्** — परब्रह्मसँग जोड्ने; **तम्** — त्यसलाई; **विद्धि** — जान; **पाण्डव** — हे पाण्डुपुत्र!; **न** — हुँदैन; **हि** — निश्चय नै; **असंन्यस्त** — त्यागबिना; **संकल्पः** — आत्मतृप्तिको इच्छा; **योगी** — योगी; **भवति** — हुन्छ; **कश्चन** — कुनै एक।

**हे पाण्डुपुत्र! जसलाई संन्यास भनिन्छ त्यही नै तिमी योग हो भन्ने जान। योग भनेको परब्रह्मसँग संयुक्त हुनु हो। अनि इन्द्रिय संयम नगरी कोही पनि योगी हुन सक्दैन।**

**तात्पर्य :** वास्तविक संन्यासयोग या भक्तियोगको अर्थ जीवात्माले आफ्नो स्वाभाविक स्थिति चिनोस् र त्यसअनुसार काम गरोस् भन्नु नै हो। जीवात्माको आफ्नै स्वतन्त्र अस्तित्व हुँदैन। ऊ त परमेश्वरको तटस्था शक्ति हो। मायाशक्तिको बन्धनमा परेको समयमा ऊ बद्ध हुन्छ तर कृष्णभावनाभावित अवस्थामा वा आध्यात्मिक शक्तिले युक्त भएका समयमा उसले आफ्नो जीवनको सहज स्वाभाविक स्थिति प्राप्त गर्दछ। पूर्ण ज्ञानमा रहेको समयमा मानिसले

भौतिक इन्द्रियतृप्तिका कार्यहरू बन्द गर्दछ अर्थात्, उसले इन्द्रियतृप्तिका सबै क्रियाकलापहरूको परित्याग गर्दछ। यसरी योगीहरूले इन्द्रियलाई भौतिक आसक्तिबाट टाढा राख्ने अभ्यास गर्दछन्। तर, कृष्णभावनाभावित व्यक्तिले भगवान् श्रीकृष्णबाहेक अरू वस्तुमा आफ्ना इन्द्रियहरू लगाउने अवसर नै पाउँदैन, त्यसैले कृष्णभावनाभावित व्यक्ति एकैसाथ योगी पनि र संन्यासी पनि हुन्छ। ज्ञान तथा योगविधिमा चाहिने ज्ञान र इन्द्रिय-नियन्त्रण जस्ता कुरा कृष्णभावनामृतमा स्वतः पूरा हुन्छन्। यदि मानिसले स्वार्थपूर्ण क्रियाकलापको परित्याग गर्न नसके उक्त ज्ञान तथा योग दुवै व्यर्थ हुन्छन्। जीवात्माको मुख्य ध्येय भन्नु नै सबै प्रकारका निहित स्वार्थहरू परित्याग गरेर परमेश्वरको तुष्टिका निमित्त तयार रहनु हो। कृष्णभावनाभावित व्यक्तिमा कुनै प्रकारको स्वार्थ पूरा गर्ने इच्छा हुँदैन। ऊ सधैँ परमेश्वरलाई प्रसन्न पार्ने कार्यमा लागिरहेको हुन्छ अतः जसलाई परमेश्वरका विषयमा कुनै जानकारी छैन त्यही व्यक्ति मात्र आफ्नो स्वार्थपूर्तिमा लागिरहेको हुन्छ, किनभने मानिस निष्क्रिय अवस्थामा कहिल्यै रहन सक्दैन। कृष्णभावनामृतको अभ्यास गर्नाले नै सबै उद्देश्यहरू सुचारु ढङ्गले सम्पन्न हुन्छन्।

**आरुरुक्षोर्मुनेर्योगं कर्म कारणमुच्यते ।**
**योगारूढस्य तस्यैव शमः कारणमुच्यते ॥ ३ ॥**

**आरुरुक्षोः** — भर्खर योगमा लागेका; **मुनेः** — मुनिको; **योगम्** — अष्टाङ्ग योग पद्धति; **कर्म** — कर्म; **कारणम्** — साधन; **उच्यते** — भनिन्छ; **योग** — अष्टाङ्ग योग; **आरूढस्य** — प्राप्त हुनेलाई; **तस्य** — त्यसको; **एव** — निश्चय नै; **शमः** — सम्पूर्ण भौतिक कर्मको त्याग; **कारणम्** — कारण (साधन); **उच्यते** — भनिन्छ।

**अष्टाङ्गयोगका नयाँ साधकहरूका लागि कर्म नै आत्मा उन्नतिको साधन हो र योगसिद्ध पुरुषका लागि सबै भौतिक क्रियाकलापहरूको परित्याग नै त्यो साधन हो।**

**तात्पर्य :** आफूलाई परमेश्वरसँग संयुक्त गराउने विधिलाई योग भनिन्छ। सर्वोच्च आध्यात्मिक सिद्धि प्राप्त गर्ने सिँढीसँग यसको तुलना गर्न सकिन्छ। यो सिँढी जीवको निम्नतम अवस्थाबाट सुरु भएर शुद्ध आध्यात्मिक जीवनको पूर्ण साक्षात्कारको माथिल्लो अवस्थासम्म पुगेको छ। विभिन्न तहमा चढेअनुसार यस सिँढीका विभिन्न भागलाई विभिन्न नामले चिनिन्छ। सबै मिलाएर पूरै सिँढीलाई योग भनिन्छ र यसलाई फेरि तीन भागमा विभाजित गरिएको छ— ज्ञानयोग, ध्यानयोग र भक्तियोग। सिँढीको प्रारम्भिक अवस्थालाई योगमा

बहन चाहेका अवस्था तथा अन्तिम अर्थात् सर्वोच्च अवस्थालाई योगारूढ अवस्था भनिन्छ।

अष्टाङ्ग योगमा विशेष गरी यम, नियम तथा आसन (शारीरिक मुद्राहरू) द्वारा ध्यानमा प्रवेश हुनका निमित्त आरम्भिक प्रयास गरिन्छ। यसलाई सकाम कर्म पनि भनिन्छ। यी सबै क्रियाकलापबाट मानसिक सन्तुलन कायम हुन्छ र इन्द्रियहरू वशमा हुन्छन्। जब मानिस ध्यानको अभ्यासमा सिद्धहस्त हुन्छ अनि उसलाई विचलित पार्ने सबै मानसिक क्रियाकलापहरू स्वतः बन्द हुन्छन्।

तर, कृष्णभावनाभावित व्यक्ति प्रारम्भदेखि नै ध्यानका स्तरमा अवस्थित हुन्छ किनभने उसले निरन्तर भगवान् श्रीकृष्णको चिन्तन गरिरहेको हुन्छ। भगवान् श्रीकृष्णको सेवामा यसरी सधैँ व्यस्त हुनेहुँदा उसका सबै भौतिक क्रियाकलापहरू नियन्त्रित हुन्छन्।

**यदा हि नेन्द्रियार्थेषु न कर्मस्वनुषज्जते ।**
**सर्वसंकल्पसंन्यासी योगारूढस्तदोच्यते ॥ ४ ॥**

**यदा** — जब; **हि** — निश्चय; **न** — होइन; **इन्द्रिय अर्थेषु** — इन्द्रिय तृप्तिमा; **न** — होइन; **कर्मसु** — सकाम कर्ममा; **अनुषज्जते** — आवश्यकता अनुरूप लागिरहन्छ; **सर्वसंकल्प** — सबै भौतिक इच्छाहरूको; **संन्यासी** — त्यागी; **योग आरूढः** — योगमा आरूढ भएको; **तदा** — त्यस समय; **उच्यते** — भनिन्छ।

**जसले सबै भौतिक इच्छाहरू परित्याग गरेको छ, जो इन्द्रियतृप्तिका लागि कर्म गर्दैन र जो सकाम कर्ममा फँसेको छैन, त्यस्तो व्यक्तिलाई योगारूढ भनिन्छ।**

**तात्पर्य :** पूर्णरूपले भगवान्को दिव्य प्रेमाभक्तिमा लागिरहेको मानिस आफैँमा प्रसन्न रहने गर्दछ। त्यसो हुँदा ऊ इन्द्रियतृप्ति वा सकाम कर्ममा लागिरहदैन। अन्यथा काम नगरी बस्न नसकिने हुनाले इन्द्रियतृप्तिका कार्यमा पनि लाग्नैपर्ने हुन्छ। कृष्णचेतनाले युक्त नभएको मानिस सधैँ स्वार्थकेन्द्रित वा स्वार्थपूर्ण कार्यको विस्तारमा तत्पर हुन्छ तर कृष्णभावनाभावित व्यक्ति भगवान् श्रीकृष्णको प्रसन्नताका निमित्त कर्म गर्नेहुँदा इन्द्रियतृप्तिप्रति पूरै विरक्त हुन्छ। जसलाई यस्तो अनुभूति प्राप्त भएको छैन ऊ यन्त्रजस्तो बनेर भौतिक इच्छाबाट टाढा रहने प्रयास गरोस्। अनिमात्र ऊ योगरूपी सिँढीको माथिल्लो खुट्किलोसम्म पुग्न समर्थ हुन्छ।

**उद्धरेदात्मनात्मानं नात्मानमवसादयेत् ।**
**आत्मैव ह्यात्मनो बन्धुरात्मैव रिपुरात्मनः ॥ ५ ॥**

**उद्धरेत्** — उद्धार गरोस्; **आत्मना** — मनले; **आत्मानाम्** — बद्ध जीवलाई; **न** — होइन; **आत्मानम्** — बद्ध जीवलाई; **अवसादयेत्** — पतन गराओस्; **आत्मा** — मन; **एव** — निश्चय नै; **हि** — निःसन्देह; **आत्मनः** — बद्ध जीवको; **बन्धुः** — मित्र; **आत्मा** — मन; **एव** — निश्चय नै; **रिपुः** — शत्रु; **आत्मनः** — बद्ध जीवको।

**मानिसले आफ्नो मनको सहायताद्वारा आफ्नो उद्धार गर्नपर्दछ। आफूलाई तल खस्न दिन हुँदैन। यो मन बद्ध जीवको मित्र पनि हो र शत्रु पनि हो।**

**तात्पर्य :** विभिन्न प्रसङ्गअनुसार आत्मा शब्दले शरीर, मन तथा आत्मालाई बुझाउँदछ। योगपद्धतिमा मन र बद्ध आत्माको विशेष महत्त्व रहन्छ। मन नै योगपद्धतिको केन्द्रबिन्दु भएको हुनाले यो प्रसङ्गमा आत्मा शब्दले मनलाई बुझाउँदछ। योगपद्धतिको उद्देश्य मनलाई नियन्त्रण गर्नु र इन्द्रियहरूलाई विषयका आसक्तिबाट टाढा राख्नु हो। यहाँ मनलाई प्रशिक्षित पारेर बद्ध जीवलाई अज्ञानको दलदलबाट उद्धार गर्नु पर्दछ भन्ने कुरामा बढी जोड दिइएको छ। यस भौतिक संसारमा मानिस मन तथा इन्द्रियबाट बढी प्रभावित भइरहन्छ। शुद्ध आत्मा पनि यही मनको झूटो अहङ्कारले गर्दा, प्रकृतिमाथि प्रभुत्व जमाउने इच्छाले यो संसारमा फँसेको हो। तसर्थ मनलाई यसरी तालिम दिनुपर्दछ, जसले गर्दा ऊ प्रकृतिको रमझमबाट आकर्षित नहोओस् र यसरी बद्ध जीवको रक्षा गर्न सकियोस्। इन्द्रियका विषयतिर आकर्षित भएर मानिसले आफूलाई पतित गराउन हुँदैन। जो इन्द्रियका विषयतिर जति आकर्षित हुन्छ ऊ त्यति नै यो सांसारिक बन्धनमा फाँस्दछ। अतः आफूलाई अनासक्त राख्ने सर्वोत्कृष्ट साधन हो— मनलाई सधैँ कृष्णभावनामृतमा संलग्न गराउनु। यही कुरालाई बढी जोड दिनका लागि नै यहाँ **'हि'** शब्दको प्रयोग गरिएका हो, अर्थात् मानिसले त्यसो गर्नै पर्दछ। अमृत विन्दु उपनिषद् (२) मा पनि भनिएको छ—

*मन एव मनुष्याणां कारणं बन्धमोक्षयोः ।*
*बन्धाय विषयासंगो मुक्त्यै निर्विषयं मनः ॥*

"मानिसको बन्धन र मोक्षको कारण भनेको नै मन हो। इन्द्रियका विषयमा लीन भएको मन बन्धनको कारण हो र विषयबाट विरक्त भएको मन मोक्षको कारण हो।" तसर्थ निरन्तर कृष्णभावनामृतमा लागिरहेको मन नै परममुक्तिको कारण हो।

**बन्धुरात्मात्मनस्तस्य येनात्मैवात्मनाजितः ।**
**अनात्मनस्तु शत्रुत्वे वर्तेतात्मैव शत्रुवत् ॥ ६ ॥**

**बन्धुः** — मित्र; **आत्मा** — मन; **आत्मनः** — जीवको; **तस्य** — त्यसको; **येन** — जसले; **आत्मा** — मन; **एव** — निश्चय नै; **आत्मना** — जीवात्माद्वारा; **जितः** — विजित; **अनात्मनः** — मन वशमा नभएको; **तु** — तर; **शत्रुत्वे** — शत्रुताको कारण; **वर्तेत** — रहिरहन्छ; **आत्मा एव** — त्यही मन नै; **शत्रुवत्** — शत्रुजस्तो।

**जसले मनलाई जितेको छ, उसका लागि मन नै सर्वश्रेष्ठ मित्र हो र जसले मनलाई जित्नसकेको छैन त्यसका लागि मन नै सबैभन्दा ठुलो शत्रु पनि हो।**

**तात्पर्य :** मनलाई वशमा राख्नका लागि नै अष्टाङ्ग योगको अभ्यास गर्ने गरिन्छ। यसो गरेमा मानवीय लक्ष्य प्राप्त गर्ने काममा मनले मित्रको जस्तो भूमिका निर्वाह गर्दछ। मनलाई वशमा नराखी कृत्रिम तरिकाले योग अभ्यास गर्नु समय नष्ट गर्नु मात्र हो। जसले मनलाई वशमा राख्न सक्दैन ऊ सधैँ आफ्नो परमशत्रुसँग रहेको हुन्छ, जसले गर्दा उसको जीवन र लक्ष्य दुवै नष्ट हुन्छन्। जीवात्माको मौलिक स्वरूप भनेको आफ्ना स्वामी भगवान्को आज्ञा पालन गर्नु हो। मनलाई आफ्नो वशमा नल्याउँदासम्म मानिसले काम, क्रोध, लोभ, मोहहरूको आज्ञा पालन गर्नु पर्दछ। तर, मनमाथि विजय प्राप्त हुनेबित्तिकै मानिस आफ्नो इच्छाअनुसार सबैका हृदयमा रहने उनै परमात्मास्वरूप भगवान्को आज्ञा पालन गर्न थाल्दछ। योगको अभ्यास गर्नुको वास्तविक उद्देश्य नै आफ्ना हृदयभित्र रहेका परमात्मासँग भेट हुनु र उहाँको आज्ञाको पालन गर्नु हो। जसले सीधै कृष्णभावनालाई अँगालेको छ त्यस्तो व्यक्ति स्वतः भगवान्को आज्ञा पालन गर्ने कार्यमा पूर्ण समर्पित हुन्छ।

**जितात्मनः प्रशान्तस्य परमात्मा समाहितः ।**
**शीतोष्णसुखदुःखेषु तथा मानापमानयोः ॥ ७ ॥**

**जित आत्मनः** — आफ्नो मनलाई जितेको; **प्रशान्तस्य** — मनलाई नियन्त्रण गरी शान्ति प्राप्त गरेको; **परमआत्मा** — परमात्मामा; **समाहितः** — पूर्णरूपले समाहित भएको; **शीत** — जाडो; **उष्ण** — गर्मी; **सुख** — सुख; **दुःखेषु** — दुःखमा; **तथा** — पनि; **मान** — सम्मान; **अपमानयोः** — अपमानमा।

**जसले मनलाई जितेको छ, त्यसले पहिले नै परमात्मालाई पाइसकेको हुन्छ र शान्ति पनि प्राप्त गरिसकेको हुन्छ। यस्ता व्यक्तिका लागि सुख-दुःख, जाडो-गर्मी तथा मान-अपमान सबै समान हुन्छन्।**

**तात्पर्य :** वास्तवमा भन्ने हो भने प्रत्येक जीव, प्रत्येक प्राणीका हृदयमा निवास गर्ने परमात्मास्वरूप भगवान्‌कै आज्ञा पालन गर्नका निमित्त आएका हुन्। बहिर्मुखी मायाले मनलाई चञ्चल बनाएपछि मानिस भौतिक क्रियाकलापमा बाँधिन्छ। तसर्थ जसले कुनै एउटा योगपद्धतिअनुसार मनलाई वशमा राख्नसकेको छ त्यसलाई मात्र आफ्नो लक्ष्यमा पुग्नसकेको मान्नु पर्दछ। भगवत्आज्ञाको पालन गर्नु नै मानिसको परमकर्तव्य हो। जब मानिसको मन पराप्रकृतिमा स्थिर हुन्छ त्यस समय उसका लागि भगवत्-आज्ञा पालन गर्नुबाहेक अरू कुनै विकल्प हुँदैन। मनले पनि कुनै न कुनै उच्च आदेशलाई स्वीकार गरी त्यसको अनुसरण गर्नै पर्दछ। यसरी नियन्त्रित मनको प्रभावले गर्दा मानिस स्वतः परमात्माको आज्ञापालक बन्दछ। किनभने कृष्णभावनाभावित हुनेबित्तिकै मानिसलाई यो दिव्य स्थिति प्राप्त हुन्छ। तसर्थ भगवद्भक्त सुख-दुःख, जाडो-गर्मी आदि सांसारिक द्वन्द्वबाट अप्रभावित हुन्छ। यो अवस्था भनेको व्यावहारिक रूपमा ब्रह्मलीन वा समाधिको अवस्था हो।

**ज्ञानविज्ञान तृप्तात्मा कूटस्थो विजितेन्द्रियः ।**
**युक्त इत्युच्यते योगी समलोष्टाश्मकाञ्चनः ॥ ८ ॥**

**ज्ञान** — आर्जित ज्ञानद्वारा; **विज्ञान** — अनुभूत ज्ञानद्वारा; **तृप्त** — सन्तुष्ट; **आत्मा** — जीवात्मा; **कूटस्थः** — आध्यात्मिक रूपले स्थित; **विजित इन्द्रियः** — इन्द्रियलाई जितेको; **युक्तः** — आत्मसाक्षात्कारका लागि उपयुक्त; **इति** — यस्तो; **उच्यते** — भनिन्छ; **योगी** — योगसाधक; **सम** — समदर्शी; **लोष्ट** — माटो; **अश्म** — ढुङ्गो; **काञ्चनः** — सुन।

**आफ्नो आर्जित ज्ञान र आत्मानुभूतिका गुणद्वारा पूर्णतया सन्तुष्ट हुने र आत्मसाक्षात्कार गरेको व्यक्ति नै योगी मानिन्छ। त्यस्तो व्यक्ति आत्मसंयमी र अध्यात्ममा अवस्थित हुन्छ। उसले ढुङ्गो, माटो वा सुन जे भए पनि सबैलाई समान देख्छ।**

**तात्पर्य :** परमसत्यको अनुभूतिबिनाको कोरा किताबी ज्ञान व्यर्थ हुन्छ, भक्तिरसामृत सिन्धु (१.२.२३४) मा भनिएको छ—

*अतः श्रीकृष्णनामादि न भवेद् ग्राह्यमिन्द्रियैः ।*
*सेवोन्मुखे हि जिह्वादौ स्वयमेव स्फुरत्यदः ॥*

"दूषित इन्द्रियहरूका सहायताले कसैले पनि भगवान् श्रीकृष्णको नाम, रूप, गुण तथा उहाँका लीला र दिव्य प्रकृतिबारे बुझ्न सक्दैन। भगवान्‌को दिव्य सेवामा संलग्न रहेर आध्यात्मिकताले परिपूर्ण भएको व्यक्तिले मात्रै उहाँका दिव्य नाम, रूप, गुण तथा लीलाहरूलाई बुझ्न र अनुभूति गर्न सक्दछ।"

यो *भगवद्गीता* कृष्णभावनामृतको विज्ञान हो। संसारी विद्वत्ताले मात्रै कोही कृष्णभावनाभावित हुन सक्दैन। उसलाई विशुद्ध चेतना भएको व्यक्तिसँग सान्निध्य प्राप्त गर्ने सौभाग्य मिल्नु पर्दछ। कृष्णभावनाभावित व्यक्ति विशुद्ध भक्तिमा तृप्त रहने हुनाले भगवान् श्रीकृष्णका कृपाले उसलाई ज्ञानको अनुभूति हुन्छ। त्यही अनुभूत ज्ञानद्वारा ऊ पूर्ण बन्दछ। आध्यात्मिक ज्ञानद्वारा नै मानिस आफ्ना सङ्कल्पहरूमा दृढ रहन सक्दछ। अन्यथा शैक्षिक ज्ञानले मात्रै त ऊ बाहिरी विरोधाभासबाट मोहित र भ्रमित भइरहन्छ। केवल आत्माको अनुभूति गरेको व्यक्ति मात्र आत्मसंयमी हुन सक्दछ, किनभने ऊ भगवान् श्रीकृष्णको शरणमा समर्पित भइसकेको हुन्छ। संसारी विद्वत्तासँग उसको कुनै सरोकार नहुने हुँदा ऊ स्वयम् दिव्य हुन्छ। संसारी विद्वत्ता तथा मनोधर्म अरूका लागि सुनजस्तै उत्तम भए पनि उसका लागि ढुङ्गा माटोभन्दा बढी मूल्यवान् हुँदैन।

**सुहृन्मित्रार्युदासीनमध्यस्थद्वेष्यबन्धुषु ।**
**साधुष्वपि च पापेषु समबुद्धिर्विशिष्यते ॥ ९ ॥**

**सु-हृत्** — स्वभावले हितैषी; **मित्र** — स्नेहपूर्ण हितैषी; **अरि** — शत्रु; **उदासीन** — युद्धपिपासुहरूका बीचमा पनि तटस्थ; **मध्यस्थ** — मध्यस्थ शत्रुहरूका बीचमा; **द्वेष्य** — ईर्ष्यालु; **बन्धुषु** — बन्धु वा शुभेच्छुमा; **साधुषु** — साधुहरूमा; **अपि** — पनि; **च** — तथा; **पापेषु** — पापीहरूमा; **सम बुद्धिः** — समान बुद्धि भएको; **विशिष्यते** — अग्रसर भएको हुन्छ।

**मानिस जब निष्कपट हितैषीहरू, प्रिय मित्रहरू, तटस्थहरू, मध्यस्थहरू, ईर्ष्यालुहरू, शत्रु तथा मित्रहरू अनि पुण्यात्मा तथा पापीहरूप्रति पनि समानभावले हेर्न सक्ने हुन्छ त्यस समय उसलाई विशिष्ट मानिन्छ।**

**योगी युञ्जीत सततमात्मानं रहसि स्थितः ।**
**एकाकी यतचित्तात्मा निराशीरपरिग्रहः ॥ १० ॥**

**योगी** — योगी (अध्यात्मवादी); **युञ्जीत** — कृष्णचेतनामा केन्द्रित गरोस्; **सततम्** — निरन्तर; **आत्मानम्** — आफूलाई (मन; शरीर तथा आत्माले); **रहसि** — एकान्त स्थानमा; **स्थितः** — अवस्थित भएर; **एकाकी** — एक्लै; **यतचित्तात्मा** — मनमा सदैव सचेत; **निराशीः** — विषयासक्तिरहित भएर; **अपरिग्रहः** — स्वामित्व भाव वा सङ्ग्रहभावरहित।

**योगीले सधैँ आफ्नो शरीर, मन तथा आत्मालाई परमेश्वरमा लगाउनु पर्दछ। एकान्त स्थानमा एक्लै बस्नु पर्दछ र सधैँ सावधानीपूर्वक आफ्नो मनलाई वशमा राख्नु पर्दछ र साथै सबै इच्छाहरू र स्वामित्वभावबाट पनि मुक्त हुनु पर्दछ।**

**तात्पर्य :** ब्रह्म, परमात्मा तथा श्रीभगवान्‌का विभिन्न रूपहरूमा भगवान् श्रीकृष्णको अनुभूति हुने गर्दछ। कृष्णभावनामृतको अर्थ नै सचेत भएर भगवान्‌को दिव्य प्रेमाभक्तिमा निरन्तर संलग्न हुनु हो। जो निराकार ब्रह्म तथा अन्तर्यामी परमात्माप्रति आसक्त छन् तिनीहरू पनि आंशिक रूपले कृष्णभावनाभावित हुन्, किनभने निराकार ब्रह्म भनेको भगवान् श्रीकृष्णको आध्यात्मिक किरण हो र परमात्मा भनेका भगवान् श्रीकृष्णका सर्वव्यापी आंशिक विस्तार हुन्। यस प्रकार निराकारवादी तथा ध्यानयोगी पनि अप्रत्यक्ष रूपले कृष्णभावनाभावित हुन्छन् तर प्रत्यक्ष रूपले हेर्दा कृष्णभावनाभावित व्यक्ति सर्वोच्च योगी हो, किनभने यस्तै भक्तलाई मात्र ब्रह्म वा परमात्मा भनेको के हो भन्ने थाहा हुन्छ। तिनको परमसत्य विषयको ज्ञान पूर्ण हुन्छ। तर, निराकारवादी र ध्यानयोगीहरू अपूर्ण रूपमा मात्र कृष्णभावनाभावित हुन्छन्।

ती सबै आ-आफ्ना कार्यमा निरन्तर लागिरहून् र सबैले ढीलो वा चाँडो परमसिद्धि प्राप्त गरून् भन्ने उद्देश्यले नै यहाँ यो उपदेश दिइएको हो। योगीको पहिलो कर्तव्य भनेको आफ्नो ध्यान सधैँ भगवान् श्रीकृष्णप्रति एकाग्र राख्नु हो। मानिसले सधैँ भगवान् श्रीकृष्णको चिन्तन गर्नु पर्दछ, एक क्षण पनि उहाँलाई भुल्नु हुँदैन। परमेश्वरमा मन एकाग्र हुनुलाई समाधि भन्दछन्। मनलाई एकाग्र पार्नका निमित्त सधैँ एकान्तवास गर्नु पर्दछ र बाहिरी उपद्रवबाट जोगिनु पर्दछ। आत्मसाक्षात्कारलाई प्रभाव पार्ने हरेक प्रतिकूल परिस्थितिलाई त्याग गर्नु पर्दछ र अनुकूल परिस्थितिलाई ग्रहण गर्नु पर्दछ। पूर्णसङ्कल्प लिइसकेपछि अनावश्यक भौतिक वस्तुहरूको पछि लाग्नु हुँदैन अन्यथा परिग्रहभावमा वा ममत्वभावमा फँस्नु पर्दछ।

यी सबै सिद्धि र सावधानीहरूमा पूर्णसफलता प्राप्त गर्न पनि मानिस प्रत्यक्ष रूपमा कृष्णभावनाभावित हुनु पर्दछ, किनभने प्रत्यक्ष कृष्णभावनामृतको अर्थ आत्मविसर्जन वा आत्मसमर्पण हो। यसमा भौतिक स्वामित्वबोध वा परिग्रहभाव कत्ति रहँदैन। श्रील रूपगोस्वामीले कृष्णभावनामृतको लक्षण यसरी प्रस्तुत गर्नुभएको छ—

*अनासक्तस्य विषयान् यथार्हमुपयुञ्जतः ।*
*निर्बन्धः कृष्णसम्बन्धे युक्तं वैराग्यमुच्यते ॥*
*प्रापञ्चिकतया बुद्ध्या हरिसम्बन्धिवस्तुनः ।*
*मुमुक्षुभिः परित्यागो वैराग्यं फल्गु कथ्यते ॥*

*भक्तिरसामृत सिन्धु* २.२५५-२५६

कुनै पनि वस्तुप्रति आसक्ति नराखी भगवान् श्रीकृष्णसँग सम्बन्धित हरेक वस्तु श्रीकृष्णका लागि स्वीकार गर्ने व्यक्तिलाई नै वास्तवमा परिग्रहभन्दा माथि रहेको

मानिन्छ। अर्कातिर बिना ज्ञान भगवान् श्रीकृष्णसँग सम्बन्धित हरेक वस्तुलाई त्याग्ने व्यक्ति पूर्णत्यागी वा पूर्णवैरागी मानिँदैन।

कृष्णभावनाभावित व्यक्तिले प्रत्येक वस्तु भगवान् श्रीकृष्णको हो भन्ने कुरा राम्रोसँग बुझेको हुन्छ र यसरी ऊ व्यक्तिगत स्वामित्वभावबाट सधैँ मुक्त हुन्छ। त्यस्तो व्यक्तिले आफ्ना लागि कुनै कुराको इच्छा राख्दैन। कृष्णभावनामा अनुकूल हुने वस्तुलाई कसरी स्वीकार गर्न पर्दछ र कृष्णभावनाका प्रतिकूल वस्तुलाई कसरी त्याग्नु पर्दछ भन्ने कुरा उसले बुझेको हुन्छ। त्यस्तो व्यक्ति आफ्नो दिव्यताले भौतिक वस्तुहरूको संसर्गबाट सधैँ टाढा रहन्छ। कृष्णभावनाशून्य व्यक्तिहरूको सङ्गतमा बस्नुभन्दा बरु सधैँ एक्लै बस्न उसलाई मन पर्दछ। तसर्थ, कृष्णभावनामा रहने व्यक्ति नै पूर्ण योगी हो।

**शुचौ देशे प्रतिष्ठाप्य स्थिरमासनमात्मनः ।**
**नात्युच्छ्रितं नातिनीचं चैलाजिनकुशोत्तरम् ॥ ११ ॥**
**तत्रैकाग्रं मनः कृत्वा यतचित्तेन्द्रियक्रियः ।**
**उपविश्यासने युञ्ज्याद्योगमात्मविशुद्धये ॥ १२ ॥**

**शुचौ** — पवित्र; **देशे** — भूमिमा; **प्रतिष्ठाप्य** — स्थापित गरेर; **स्थिरम्** — दृढ; **आसनम्** — आसनलाई; **आत्मनः** — आफ्नो; **न** — न त; **अति** — अत्यधिक; **उच्छ्रितं** — अग्लो; **न** — न त; **अति** — अधिक; **नीचम्** — होचो; **चैल अजिन** — नरम वस्त्र तथा मृग-चर्म; **कुश** — कुशको; **उत्तरम्** — आवरण; **तत्र** — त्यहाँ; **एकाग्रम्** — एकाग्र; **मनः** — मन; **कृत्वा** — गरेर; **यतचित्त** — मनलाई वशमा राख्दै; **इन्द्रिय** — इन्द्रियहरू; **क्रियः** — र कर्महरू; **उपविश्य** — बसेर; **आसने** — आसनमा; **युञ्ज्यात्** — सम्पन्न गरोस्; **योगम्** — योग अभ्यास; **आत्म** — हृदयको; **विशुद्धये** — शुद्धिका लागि।

**योगाभ्यास गर्नेले एकान्त ठाउँमा गएर जमीनमा कुश ओच्छ्याएर र त्यसपछि त्यसलाई ढाक्नेगरी मृगचर्म र नरम कपडा राख्न पर्दछ। आसन धेरै अग्लो पनि नहोस् र धेरै होचो पनि नहोस्। ठाउँ पवित्र होस्। यसैमाथि बसेर योगीले दृढतापूर्वक मन, इन्द्रिय तथा कर्महरू वशमा राख्दै मनलाई एउटा बिन्दुमा स्थिर गरेर हृदय शुद्धिका निमित्त योगको अभ्यास गर्न पर्दछ।**

**तात्पर्य :** 'पवित्र स्थान' भन्ने शब्दले तीर्थस्थलहरूलाई सङ्केत गर्दछ। भारतमा योगीहरू, अध्यात्मवादीहरू वा भक्तहरू सबैले आफ्ना घर त्यागेर प्रयाग, मथुरा, वृन्दावन, हृषीकेश तथा हरिद्वारजस्ता पवित्र ठाउँमा बसेर एकान्त स्थलमा योगको अभ्यास गर्दछन्, जहाँ गङ्गा, यमुनाजस्ता पवित्र

नदीहरू प्रवाहित हुन्छन्। तर, यसो गर्न सबैका लागि, विशेष पश्चिमी देशका मानिसहरूका लागि सम्भव हुँदैन। ठुलाठुला शहरका तथाकथित योगसमितिहरू भौतिक लाभ आर्जन गर्न त सफल होलान् तर वास्तविक योग अभ्यासका लागि तिनीहरू सधैँ अनुपयुक्त हुन्छन्। जो आत्मसंयमी छैन, जसको मन चञ्चल छ, त्यसले ध्यानको अभ्यास गर्न सक्दैन। त्यसैले वृहन्नारदीय पुराणमा भनिएको छ— कलियुग (वर्तमान युग) मा सामान्यतया मानिसहरूको आयु छोटो हुन्छ, तिनको आध्यात्मिक अनुभूति पनि मन्द हुन्छ र तिनीहरू विभिन्न चिन्ताले सधैँ सताइएका हुन्छन्। यस्तो अवस्थामा तिनका लागि भगवत्प्राप्तिको सर्वश्रेष्ठ माध्यम भन्नु नै भगवान्को पवित्र नाम सङ्कीर्तन हो।

*हरेर्नाम हरेर्नाम हरेर्नामैव केवलम् ।*
*कलौ नास्त्येव नास्त्येव नास्त्येव गतिरन्यथा ॥*

झगडा र पाखण्ड वा छलकपटको यस युगमा भगवान्को पवित्र नाम सङ्कीर्तन नै मोक्षको एकमात्र साधन हो। यसबाहेक अर्को कुनै मार्ग छैन, अर्को कुनै मार्ग छैन, अर्को कुनै मार्ग छैन।

**समं कायशिरोग्रीवं धारयन्नचलं स्थिरः ।**
**सम्प्रेक्ष्य नासिकाग्रं स्वं दिशश्चानवलोकयन् ॥ १३ ॥**
**प्रशान्तात्मा विगतभीर्ब्रह्मचारिव्रते स्थितः ।**
**मनः संयम्य मच्चित्तो युक्त आसीत मत्परः ॥ १४ ॥**

**समम्** — सोझो; **काय** — शरीर; **शिरः** — शिर; **ग्रीवम्** — गर्दन; घाँटी; **धारयन्** — राख्दै; **अचलम्** — अचल; **स्थिरः** — शान्त; **सम्प्रेक्ष्य** — हेर्दै; **नासिका** — नाकको; **अग्रम्** — टुप्पामा; **स्वम्** — आफ्नो; **दिशः** — सबै दिशामा; **च** — पनि; **अनवलोकयन्** — नहेरी; **प्रशान्त** — अविचलित; **आत्मा** — मन; **विगत-भीः** — भयरहित; **ब्रह्मचारी-व्रते** — ब्रह्मचारी व्रतमा; **स्थितः** — रहेर; **मनः** — मनलाई; **संयम्य** — पूर्णतया दमन गरेर; **मत्** — ममा (कृष्णमा); **चित्तः** — मनलाई केन्द्रित गर्दै; **युक्तः** — वास्तविक योगी; **आसीत** — बसोस्; **मत्** — म (कृष्ण) मा; **परः** — परमलक्ष्य।

**योगको अभ्यास गर्नेले आफ्नो शरीर, गर्दन र शिरलाई सोझो पारेर नाकको अग्रभागमा (टुप्पामा) एकटक लाएर हेर्न पर्दछ र यसरी मनलाई संयमित तथा अविचलित गर्न पर्दछ। अनि विषयी जीवनबाट पूर्णतया मुक्त भएर निर्भीकतापूर्वक मलाई नै परमलक्ष्य बनाएर हृदयमा मेरो चिन्तन गर्न पर्दछ।**

**तात्पर्य :** प्रत्येक जीवका हृदयमा चतुर्भुज विष्णु रूपमा रहनुभएका परमात्मा भगवान् श्रीकृष्णलाई जान्नु नै जीवनको उद्देश्य हो। योगाभ्यासको प्रयोजन पनि भगवान् विष्णुको यही अन्तर्यामी रूपलाई खोज्नु र दर्शन गर्नुबाहेक अरू कोही होइन। प्रत्येकका हृदयमा निवास गर्ने अन्तर्यामी विष्णुमूर्ति भन्नु नै भगवान् श्रीकृष्णको विस्तारित अंश हो। जसले यस्ता विष्णुमूर्तिको अनुभूति गर्न छोडेर आफूलाई अरू कुनै व्यर्थका नक्कली योगाभ्यासमा संलग्न गराएको छ, त्यसले निःसन्देह आफ्नो समयको अपव्यय गरेको मान्नु पर्दछ। जीवनको परमलक्ष्य नै भगवान् श्रीकृष्ण हुनुहुन्छ र प्रत्येक व्यक्तिका हृदयमा रहने विष्णुमूर्ति नै योगाभ्यासको लक्ष्य हो।

हृदयभित्र विष्णुमूर्तिको यो अनुभूति प्राप्त गर्नका लागि पूर्णरूपले ब्रह्मचर्य व्रत पालन गर्नु अनिवार्य हुन्छ। तसर्थ मानिसले घरबार छोडी, कुनै एकान्त ठाउँमा गएर माथि भनिएजस्तै गरी बस्न पर्दछ। घरमा वा घरबाहिर रहेर पनि प्रत्येक दिन मैथुनक्रियामा संलग्न रहने व्यक्ति तथाकथित योगाभ्यासका कक्षाहरूमा सहभागी भए पनि योगी बन्न सक्दैन। उसले त मनलाई संयमित गर्ने अभ्यास गर्नु पर्दछ र मैथुनक्रिया प्रमुख हुने सबै प्रकारका इन्द्रियतृप्तिबाट सधैँ जोगिनु पर्दछ। महान् ऋषि याज्ञवल्क्यले लेख्नुभएको ब्रह्मचर्य व्रतको नियममा भनिएको छ।

*कर्मणा मनसा वाचा सर्वावस्थासु सर्वदा ।*
*सर्वत्र मैथुनत्यागो ब्रह्मचर्यं प्रचक्षते ॥*

"हरेक ठाउँ, हरेक अवस्था र हरेक समयमा मन, वचन र कर्मले मैथुनादि भोगबाट पूर्णतया टाढा रहन सहायता पुऱ्याउनु नै ब्रह्मचर्य व्रतको लक्ष्य हो।" मैथुन र योगाभ्यास सँगसँगै चल्न सक्दैनन्। त्यसैले मानिसलाई बाल्यावस्थादेखि नै ब्रह्मचर्यको शिक्षा दिने गरिन्छ। बाल्यावस्थामा उसलाई मैथुनको कुनै ज्ञान हुँदैन। पाँच वर्षको उमेरमा बालकलाई गुरुकुलमा पठाइन्छ। त्यहाँ उसलाई गुरुबाट ब्रह्मचर्य व्रतमा दृढ रहने नियमहरू सिकाइन्छ। यसरी अभ्यास नगरी कुनै पनि योगमा उन्नति गर्न सकिँदैन, चाहे त्यो ध्यानयोग होओस् या ज्ञानयोग अथवा भक्तियोग।

तर जो व्यक्ति विवाहित जीवनको विधिविधानलाई पालना गर्दै आफ्नै पत्नीसँग मात्र यौनसम्बन्ध राख्दछ, उसलाइ पनि ब्रह्मचारी भनिन्छ। यस्ता संयमशील गृहस्थ ब्रह्मचारीलाई भक्ति सम्प्रदायमा त स्वीकार गर्न सकिन्छ तर ज्ञानयोग तथा ध्यानयोग सम्प्रदायमा यस्ता गृहस्थ ब्रह्मचारीले प्रवेश पाउँदैनन्। यिनमा प्रवेश हुनका लागि पूर्ण ब्रह्चर्यव्रतमा रहनु अनिवार्य मानिन्छ। भक्ति सम्प्रदायमा गृहस्थ ब्रह्मचारीलाई संयमित यौनसम्बन्धको अनुमति दिइन्छ।

किनभने भक्तिसम्प्रदाय अत्यन्त शक्तिशाली छ। यसका प्रभावले गर्दा भगवान्को सेवामा रहँदा-रहँदै मैथुनप्रतिको आकर्षण स्वतः हराउँदै जान्छ। *भगवद्गीता* (२.५९) मा भनिएको छ।

*विषया विनिवर्तन्ते निराहारस्य देहिनः ।*
*रसवर्जं रसोऽप्यस्य परं दृष्ट्वा निवर्तते ॥*

अर्थात् जहाँ अरूलाई विषयभोगबाट टाढा रहनका लागि बलपूर्वक गर्नु पर्दछ त्यहीँ एउटा भगवद्भक्त भगवद् रसास्वादनका कारणले इन्द्रियतृप्तिजन्य क्षुद्रभोगदेखि स्वतः विरक्त हुन पुग्दछ। यस्तो अनुपम रसको ज्ञान भगवान्का भक्तबाहेक अरूलाई हुँदैन।

**विगत-भीः** अर्थात् पूर्ण कृष्णभावनाभावित नभएसम्म मानिस निर्भय हुन सक्दैन। बद्ध जीव आफ्नो विकृत स्मृतिका कारणले अर्थात् कृष्णसँग आफ्नो शास्वत सम्बन्ध छ भन्ने कुराको विस्मृतिका कारणले भयभीत रहने गर्दछ। श्रीमद्भागवत्को (११.२.३७) मा भनिएको छ— **भयं द्वितीयाभिनिवेशतः स्यादीशादपेतस्य विपर्ययोऽस्मृतिः।** निर्भयताको सम्पूर्ण आधार नै कृष्णचेतना हो। कृष्णभावनाभावित व्यक्तिले मात्र योगको पूर्ण अभ्यास गर्न सक्दछ। योगाभ्यासको चरम लक्ष्य पनि अन्तःकरणमा भगवान्को दर्शन गर्नु हो। अतः कृष्णभावनाभावित व्यक्ति सुरुदेखि नै स्वतः सर्वश्रेष्ठ योगी मानिन्छ। यहाँ वर्णित योग-पद्धतिका नियमहरू लोकमा चलेका तथाकथित योगसमितिका योगविधि भन्दा भिन्न छन्।

**युञ्जन्नेवं सदात्मानं योगी नियतमानसः ।**
**शान्तिं निर्वाणपरमां मत्संस्थामधिगच्छति ॥ १५ ॥**

**युञ्जन्** — यस्तो अभ्यास गर्दा गर्दै; **एवम्** — माथि भनिए झैं; **सदा** — निरन्तर; **आत्मानाम्** — शरीर; **मन र आत्मा**; **योगी** — योगसाधक; **नियत-मानसः** — संयमित मन भएको; **शान्तिम्** — शान्ति; **निर्वाणपरमाम्** — भौतिक जगत्को अन्तः; **मत्-संस्थाम्** — चिन्मय आकाश (भगवद्धाम); **अधिगच्छति** — प्राप्त गर्दछ।

**यस प्रकार शरीर, मन र कर्मलाई संयमित राख्ने अभ्यासमा लागेका, संयमित मन भएका योगीहरू यो जगत्को अन्त्य भएपछि भगवत्धाममा (कृष्णलोकमा) पुग्दछन्।**

**तात्पर्य :** अब यहाँ योगाभ्यासको परमलक्ष्यको स्पष्ट व्याख्या गरिन्छ। योगाभ्यास भनेको कुनै भौतिक सुविधा प्राप्त गर्ने साधन होइन। यसको उद्देश्य

त भौतिक संसारबाट विरक्त हुने सामर्थ्य प्राप्त गर्नु हो। *भगवद्गीताका* अनुसार योगद्वारा शारीरिक स्वास्थ्य लाभ गर्नचाहने तथा भौतिक उपलब्धि प्राप्त गर्नचाहने व्यक्ति सही योगी हुन सक्दैन। भौतिकताबाट विरक्त हुनुको अर्थ कपोलकल्पित शून्यमा बिलाउनु पनि होइन। ईश्वरको सृष्टिमा कहीँ पनि शून्य भन्ने कुरा हुँदैन। भौतिक विरक्तिले त मानिसलाई दिव्य आकाशमा स्थित भगवद्धाममा पुग्ने शक्ति दिन्छ। *भगवद्गीताका* अनुसार भगवत्धाम त्यस्तो ठाउँ हो जहाँ सूर्य, चन्द्रमा र बिजुलीको कुनै आवश्यकता छैन। वैकुण्ठ वा दिव्य धामका सबै लोकहरू त्यसरी नै स्वयम् प्रकाशित छन्, जसरी सूर्यद्वारा यो भौतिक आकाश प्रकाशित छ। हुनत प्रत्येक ठाउँ भगवद्धाम हो तर पनि दिव्य आकाश तथा त्यहाँका लोकहरूलाई परमधाम भन्ने गरिन्छ।

भगवान् श्रीकृष्णलाई राम्रोसँग चिनेको व्यक्ति नै पूर्णयोगी हो। उसले यहाँ पनि भगवान्ले भन्नुभएजस्तै (मत्-चित्त, मत्-पर अनि मत् स्थानम्) भएर वास्तविक शान्ति प्राप्त गर्दछ र शरीर छोडेपछि सोझै वैकुण्ठधाम, कृष्णलोक वा गोलोक-वृन्दावनमा पुग्दछ। ब्रह्मसंहिता (५.३७) मा स्पष्ट भनिएको छ, **"गोलोक एव निवसत्यखिलात्मभूतः"**। यद्यपि भगवान् सधैँ आफ्नै गोलोकमा बस्नु हुन्छ तापनि आफ्नो पराआध्यात्मिक शक्तिद्वारा उहाँ सर्वव्यापी ब्रह्म तथा अन्तर्यामी परमात्मा पनि हुनुहुन्छ, भगवान् श्रीकृष्ण वा विष्णुका रूपमा विस्तारित हुनभएका उहाँलाई पूर्णरूपले नचिनुञ्जेल कोही पनि उहाँको दिव्य धाम वैकुण्ठ वा गोलोक-वृन्दावनमा प्रवेश गर्न सक्दैन। अतः कृष्णभावनामा संलग्न रहेको व्यक्तिलाई मात्र पूर्णयोगी मान्न सकिन्छ, किनभने त्यस्ता व्यक्तिको मन सधैँ भगवान् श्रीकृष्णका लीलाहरूमा लीन भइरहेको हुन्छ। **(स वै मनः कृष्णपदारविन्दयोः)** वेदमा अर्थात् श्वेताश्वतर उपनिषद्को (३.८) मा भनिएको छ—**"तमेव विदित्वाति मृत्युमेति"** अर्थात्, केवल भगवान् श्रीकृष्णलाई राम्रोसँग जान्नाले मात्रै जन्म र मृत्युको बन्धनलाई जित्न सकिन्छ। अर्को शब्दमा, योगको पूर्णता भनेको भौतिक जगत्बाट मुक्ति प्राप्त गर्नु हो। कुनै इन्द्रजाल तथा विभिन्न चमत्कारिक कार्यहरू देखाएर अबोध जनतालाई मूर्ख बनाउनु होइन।

**नात्यश्नतस्तु योगोऽस्ति न चैकान्तमनश्नतः ।**
**न चातिस्वप्नशीलस्य जाग्रतो नैव चार्जुन ॥ १६ ॥**

**न** — होइन; **अति** — अति धेरै; **अश्नतः** — खाने; **तु** — तर; **योगः** — भगवान्सँग मिल्नु; **अस्ति** — हो; **न** — न त; **च** — पनि; **एकान्तम्** — अत्यधिक; **अनश्नतः** — खाँदै नखाने; **न** — न त; **च** — पनि;

**अति** — धेरै; **स्वप्नशीलस्य** — धेरै सुत्ने; **जाग्रतः** — रातभरि जागा रहने; **न** — होइन; **एव** — सधैँ; **च** — पनि; **अर्जुन** — हे अर्जुन।

**हे अर्जुन! जो अत्यन्त धेरै खान्छ वा खाँदैखाँदैन, जो अत्यन्त धेरै सुत्दछ वा रातभरि सुत्दैसुत्दैन त्यो योगी हुन सक्दैन।**

**तात्पर्य :** यहाँ योगीका निमित्त भोजन तथा निद्राको नियमितता प्रस्तुत गरिएको छ। धेरै खानुको अर्थ शरीर तथा आत्मालाई चाहिनेभन्दा बढी भोजन गर्नु हो। मानिसलाई मासु खानुपर्ने आवश्यकता छैन, किनभने यहाँ प्रशस्त अन्न, साग, फल र दूध उपलब्ध छन्। यस्ता सादा भोज्य पदार्थलाई *भगवद्गीता*-अनुसार सत्त्वगुणी भोजन भनिन्छ। मांसाहार तमोगुणीका निमित्त हो। तसर्थ जो मासु खान्छन्, रक्सी पिउँछन् तथा धूम्रपान गर्दछन् र भगवान् श्रीकृष्णलाई भोग नलगाई भोजन गर्दछन् तिनीहरूले यस्ता दूषित पदार्थ सेवन गरेर लाग्ने पापको फल अवश्य भोग्दछन्। **"भुञ्जते ते त्वघं पापा ये पचन्त्यात्म कारणात्"** जसले केवल इन्द्रियतृप्तिका निमित्त मात्र भोजन गर्दछ, या केवल आफ्ना लागि मात्र भोजन बनाउँदछ र भगवान् श्रीकृष्णलाई अर्पण नगरी खान्छ त्यसले पाप खाए बराबर हुन्छ। जसले यसरी पाप खान्छ र आवश्यकताभन्दा अधिक भोजन गर्दछ त्यसले पूर्णयोगको पालन गर्न सक्दैन। भगवान् श्रीकृष्णलाई अर्पण गरेर रहेको उच्छिष्ट खानु नै सबैभन्दा उत्तम हो। कृष्णभावनाभावित व्यक्ति भगवान् श्रीकृष्णलाई पहिले अर्पण नगरी केही खाँदैन। त्यसैले कृष्णभावनाभावित व्यक्तिले मात्र योगाभ्यासमा पूर्णता प्राप्त गर्न सक्दछ। जो आफूखुसी उपवास गर्दछ वा उपवासका कृत्रिम नियमद्वारा भोजन त्याग गर्दछ, त्यसले पनि योगको अभ्यास गर्न सक्दैन। कृष्णभावनाभावित व्यक्तिले शास्त्रद्वारा अनुमोदन गरिएको उपवास गर्दछ। उसले आवश्यकताभन्दा बढी उपवास पनि गर्दैन र चाहिनेभन्दा बढी भोजन पनि गर्दैन। त्यसैले ऊ योगाभ्यासका लागि पूर्णतया योग्य मानिएको छ। जसले अपच हुनेगरी खान्छ त्यसले धेरै सपना देख्दछ, फलस्वरूप त्यो धेरै बेरसम्म सुत्छ। मानिस प्रतिदिन छः घण्टाभन्दा बढी सुत्नु हुँदैन। जो मानिस चौबीस घण्टामा छः घण्टाभन्दा बढी सुत्दछ, त्यो अवश्य पनि तमोगुणी हुन्छ। तमोगुणी व्यक्ति अल्छी हुन्छ र ऊ बढीभन्दा बढी सुत्न खोज्दछ। यस्तो व्यक्तिले योगसाधना गर्न सक्दैन।

**युक्ताहारविहारस्य युक्तचेष्टस्य कर्मसु ।**
**युक्त स्वप्नावबोधस्य योगो भवति दुःखहा ॥ १७ ॥**

**युक्त** — नियमित; **आहार** — भोजन; **विहारस्य** — आमोद-प्रमोद (मनोरञ्जन); **युक्त** — नियमित; **चेष्टस्य** — जो जीवन निर्वाहका लागि कर्म गर्दछ;

**कर्मसु** — कर्म गर्न; **युक्त** — नियमित; **स्वप्नअवबोधस्य** — निद्रा र जागरणको; **योगः** — योगाभ्यास; **भवति** — हुन्छ; **दुःखहा** — दुःख हरण गर्ने खालको।

**खाने, सुत्ने, मनोरञ्जन गर्ने र काम गर्ने शैलीमा जो नियमित हुन्छ त्यही व्यक्तिले नै योगाभ्यासद्वारा सबै भौतिक पीडाबाट छुट्कारा पाउन सक्दछ।**

**तात्पर्य :** खाने, सुत्ने, प्रतिरक्षा गर्ने र मैथुन गर्नेजस्ता शारीरिक मागहरूमा अत्यधिक संलग्नताले योगाभ्यासको प्रगति रोकिन सक्दछ। खाने कुराका सम्बन्धमा त भोजनलाई पवित्र बनाएर त्यसलाई प्रसादको रूपमा ग्रहण गर्ने भावना विकसित गर्न सकिन्छ। *भगवद्गीता* ९.२६ अनुसार भगवान् श्रीकृष्णलाई साग, फल-फूल, अन्न, दूध आदि टक्रयाउन सकिन्छ। जुन कुरा मानिसले खान हुँदैन, जुन खाद्य सत्त्वगुणी छैन त्यस्तो आहार ग्रहण गर्न हुँदैन भन्ने ज्ञान कृष्णभावनाभावित व्यक्तिलाई स्वतः स्फुरित हुन्छ। सुत्ने कुरामा पनि कृष्णभावनाभावित व्यक्तिले आफ्नो समय अनावश्यक तरिकाले निद्रामा खर्च गर्दैन र आफू सतर्कतापूर्वक सधैँ कृष्णभावनामय कर्ममा लागिरहन्छ। "**अव्यर्थ कालत्वम्**"। कृष्णभावनाभावित व्यक्ति भगवान् श्रीकृष्णको सेवा नगरी एक क्षण पनि बस्न सक्दैन। अतः ऊ सकेसम्म थोरै सुत्दछ। यस विषयमा श्रील रूपगोस्वामीजी उसको आदर्श बन्न सक्नु हुन्छ, उहाँ दिनभर भगवान् श्रीकृष्णको सेवामा लागिरहनु हुन्थ्यो र दुई घण्टा मात्र निदाउनु हुन्थ्यो, उहाँ कहिले त्योभन्दा पनि थोरै सुत्नु हुन्थ्यो। अझ ठाकुर हरिदासजीले त आफ्नो जप मालामा नित्य तीन लाख नाम जप नगरी न प्रसाद लिनु हुन्थ्यो न त सुत्नु हुन्थ्यो। कामको सम्बन्धमा भन्दा कृष्णभावनाभावित व्यक्तिले भगवान् श्रीकृष्णको रुचिसँग असम्बन्धित कुनै पनि कर्म गर्दैन। यसरी उसका सबै कार्यहरू सधैँ नियमित रहन्छन् र इन्द्रियतृप्तिद्वारा दूषित हुँदैनन्। कृष्णभावनाभावित व्यक्तिका निमित्त इन्द्रियतृप्तिको प्रश्नै उठ्दैन र भौतिक कुरा सोच्ने समय पनि उसलाई हुँदैन। अतएव उसका सबै कार्य-बोली-वचन, निद्रा-जागृति तथा अन्य शारीरिक क्रियाकलाप नियमित रहनेहुँदा उसलाई कुनै भौतिक दुःखले सताउँदैन।

**यदा विनियतं चित्तमात्मन्येवावतिष्ठते ।**
**निस्पृहः सर्वकामेभ्यो युक्त इत्युच्यते तदा ॥ १८ ॥**

**यदा** — जब; **विनियतम्** — विशेष रूपले अनुशासित; **चित्तम्** — मन र मनका कार्यहरू; **आत्मनि** — अध्यात्ममा; **एव** — निश्चय नै; **अवितिष्ठते** — स्थापित हुन्छ; **निस्पृहः** — आकाङ्क्षारहित; **सर्व** — सबै

प्रकारका; **कामेभ्यः** — भौतिक इन्द्रियतृप्तिबाट; **युक्तः** — योगमा राम्रोसँग अवस्थित; **इति** — यस प्रकार; **उच्यते** — भनिन्छ; **तदा** — त्यस समय।

**योगाभ्यासद्वारा आफ्ना मानसिक क्रियाकलापहरूलाई अनुशासित पारेर अध्यात्ममा स्थित भएको योगी नै सबै भौतिक चाहनाबाट मुक्त हुन सक्दछ र त्यसैलाई योगमा स्थापित भएको मानिन्छ।**

**तात्पर्य :** साधारण मानिस र योगीहरूका क्रियाकलापमा के भिन्नता हुन्छ, योगीहरू स्वभावले कामवासना प्रधान हुने सबै प्रकारका सांसारिक चाहनाबाट मुक्त हुन्छन्। एउटा पूर्णयोगी आफ्नो मानसिक कार्यमा कति अनुशासित हुन्छ, उसलाई कुनै पनि भौतिक आकाङ्क्षाले विचलित पार्न सक्दैन। यस्तो सिद्धअवस्था कृष्णभावनाभावित व्यक्तिले स्वतः प्राप्त गर्न सक्दछ। *श्रीमद्भागवत्* ९.४.१८-२० मा भनिएको छ—

*सवै मनः कृष्णपदारविन्दयोर्वचांसि वैकुण्ठगुणानुवर्णने ।*
*करौ हरेर्मन्दिरमार्जनादिषु श्रुतिं चकाराच्युतसत्कथोदये ॥*
*मुकुन्दलिंगालयदर्शने दृशौ तद्भृत्यगात्रस्पर्शेऽगसंगमम् ।*
*घ्राणं च तत्पादसरोजसौरभे श्रीमत्तुलस्या रसनां तदर्पिते ॥*
*पादौ हरेः क्षेत्रपदानुसर्पणे शिरो हृषीकेशपदाभिवंदने ।*
*कामं च दास्ये न तु कामकाम्यया यथोत्तमश्लोकजनाश्रयारतिः ॥*

"राजा अम्बरीषले सर्वप्रथम आफ्नो मनलाई भगवान्‌को चरणकमलमा समर्पण गरे, त्यसपछि आफ्नो वाणीलाई भगवान् श्रीकृष्णका दिव्य गुणहरूको वर्णनमा लगाए, हातलाई भगवान्‌को मन्दिर सफा गर्ने कार्यमा लगाए, कानलाई भगवान्‌का लीला श्रवणमा लगाए, आँखालाई भगवान्‌का दिव्य रूपको दर्शन गर्ने कार्यमा लगाए, शरीरलाई अन्य भक्तहरूको शरीर स्पर्श गर्ने काममा लगाए, आफ्ना नाकलाई भगवान्‌लाई चढाइएको कमलपुष्पको सुगन्ध लिने काममा लगाए, जिब्रोलाई भगवान्‌को चरणकमलमा चढाइएको तुलसीको स्वाद लिनमा लगाए, पाउलाई तीर्थयात्रा तथा भगवान्‌का मन्दिरहरूसम्म जाने कार्यमा प्रयोग गरे अनि शिरलाई भगवान्‌का अगाडि झुकेर प्रणाम गर्ने काममा लगाए र आफ्ना इच्छाहरूलाई भगवान्‌को सदिच्छा पूर्ण गर्ने काममा लगाए। यी सबै दिव्य कामहरू केवल शुद्ध भक्तबाट मात्र सम्पन्न हुन सक्दछन्।

निराकारवादी मतका अनुयायीहरूका लागि यो दिव्य अवस्था वर्णन गर्न नसकिने हुन सक्ला तर कृष्णभावनाभावित व्यक्तिका लागि त यो अत्यन्त सुगम र व्यावहारिक हुँने रहेछ भन्ने कुरा माथि वर्णन गरिएको महाराज अम्बरीषको जीवनचर्याबाट प्रष्ट हुन्छ। जबसम्म निरन्तर स्मरणद्वारा

भगवान्‌का चरणकमलमा मनलाई स्थिर गराइँदैन तबसम्म यस्ता दिव्य कर्महरू व्यावहारिक लाग्न सक्दैनन्। भगवान्‌का भक्तिमा रहेर गरिने यस्ता कार्यलाई अर्चना भनिन्छ अर्थात् सम्पूर्ण इन्द्रियहरूलाई भगवान्‌का सेवामा लगाउनु नै अर्चना हो, किनभने इन्द्रिय एवं मनलाई केही न केही विषय त चाहिन्छ। कोरा नियन्त्रण मात्र पनि व्यावहारिक हुँदैन। तसर्थ विशेष गरी संन्यास आश्रम ग्रहण नगरेका सर्वसाधारण मानिसहरूका लागि माथि वर्णन गरिएको इन्द्रिय तथा मनका दिव्य कार्यहरू नै आध्यात्मिक उपलब्धि गर्ने परिपूर्ण विधि हुन्। यसैलाई *भगवद्गीतामा* 'युक्त' भनिएको छ।

**यथा दीपो निवातस्थो नेङ्गते सोपमा स्मृता ।**
**योगिनो यतचित्तस्य युञ्जतो योगमात्मनः ॥ १९ ॥**

**यथा** — जसरी; **दीपः** — दीपक; **निवातस्थः** — वायुरहित ठाउँमा; **न इङ्गते** — हल्लिँदैन; **सा** — त्यो; **उपमा** — तुलना; **स्मृता** — मानिएको छ; **योगिनः** — योगीको; **यतचित्तस्य** — जसको मन वशमा रहेको छ; **युञ्जतः** — निरन्तर संलग्न; **योगम्** — ध्यानमा; **आत्मनः** — अध्यात्ममा।

**जसरी हावा नलागेका ठाउँमा दीपशिखा हल्लिँदैन त्यसै गरी मनलाई वशमा राखेका योगीहरू दिव्य आत्मतत्त्वको ध्यानमा स्थिर रहन्छन्।**

**तात्पर्य :** वास्तविक कृष्णभावनाभावित व्यक्ति दिव्यतामा मग्न हुँदै आफ्ना आराध्य देवको चिन्तनमा त्यसै गरी अविचलित रहन्छ जसरी हावा नभएको ठाउँमा दीपशिखा स्थिर रहन्छ।

**यत्रोपरमते चित्तं निरुद्धं योगसेवया ।**
**यत्र चैवात्मनात्मानं पश्यन्नात्मनि तुष्यति ॥ २० ॥**
**सुखमात्यन्तिकं यत्तद्बुद्धिग्राह्यमतीन्द्रियम् ।**
**वेत्ति यत्र न चैवायं स्थितश्चलति तत्त्वतः ॥ २१ ॥**
**यं लब्ध्वा चापरं लाभं मन्यते नाधिकं ततः ।**
**यस्मिन्स्थितो न दुःखेन गुरुणापि विचाल्यते ॥ २२ ॥**
**तं विद्याद्दुः खसंयोगवियोगं योगसंज्ञितम् ॥ २३ ॥**

**यत्र** — जुन अवस्थामा; **उपरमते** — दिव्य सुखको अनुभूतिले बन्द हुन पुग्दछन्; **चित्तम्** — मानसिक गतिविधिहरू; **निरुद्धम्** — पदार्थबाट पर हटेर; **योगसेवया** — योगको अभ्यासद्वारा; **यत्र** — जसमा; **च** — पनि; **एव** — निश्चय नै; **आत्मना** — विशुद्ध मनले; **आत्मानाम्** — आफ्नो; **पश्यन्** — स्थितिको अनुभव गर्दै; **आत्मनि** — आफैँमा; **तुष्यति** — सन्तुष्ट

रहन्छ; **सुखम्** — सुख; **आत्यन्तिक** — परम; **यत्** — जो; **तत्** — त्यो; **बुद्धि** — बुद्धिद्वारा; **ग्राह्यम्** — ग्रहण गर्नयोग्य; **अतीन्द्रियम्** — दिव्य; **वेत्ति** — जसले जान्दछ; **यत्र** — जहाँ; **न** — छैन; **च** — पनि; **एव** — निश्चय नै; **अयम्** — यो (ऊ); **स्थितः** — रहेको; **चलति** — हट्दछ; **तत्त्वतः** — सत्यले; **यम्** — जसलाई; **लब्ध्वा** — प्राप्त गरेर; **च** — पनि; **अपरम्** — अरू कुनै; **लाभम्** — लाभ; **मन्यते** — मान्दछ; **न** — होइन; **अधिकम्** — अधिक; **तत** — त्योभन्दा; **यस्मिन्** — जसमा; **स्थितः** — स्थित भएर; न — कहिल्यै पनि; **दुःखेन** — दुःखहरूबाट; **गुरुणा अपि** — अत्यन्त कठिन भए पनि; **विचाल्यते** — विचलित हुन्छ; **तम्** — त्यसलाई; **विद्यात्** — जानोस् (तिमीले जान्न पर्दछ); **दुःख संयोग** — भौतिक संसर्गबाट उत्पन्न दुःख; **वियोगम्** — उन्मूलन; **योग-संज्ञितम्** — योग समाधि भनिन्छ।

**योगाभ्यासद्वारा मानिसको मन भौतिक, मानसिक क्रियाबाट पूर्णतया संयमित हुन्छ, यही अवस्थालाई समाधि वा सिद्धिको अवस्था भन्दछन्। यसमा मानिसले शुद्ध मनले आफैँलाई देख्न सक्दछ, स्वाद लिन सक्दछ र आफैँमा आनन्दित हुन सक्दछ। यही नै पूर्णताको चिन्ह हो। त्यस आनन्दमय स्थितिमा ऊ आफ्ना दिव्य इन्द्रियहरूद्वारा असीम दिव्य सुखको अनुभूति गर्न सक्दछ। यसरी स्थापित भएको मानिस कहिल्यै पनि सत्यबाट बिचलित हुँदैन। यो सुख प्राप्त भएपछि उसलाई अरू कुनै सुखले आकर्षित गर्न सक्दैन। यस्तो स्थितिमा अवस्थित हुन पुगेपछि मानिस ठुलाभन्दा ठुला कठिनाइहरूमा पनि विचलित हुँदैन। यो निःसन्देह भौतिक संसर्गका कारणले उत्पन्न सबै दुःखहरूबाट हुने वास्तविक मुक्ति हो।**

**तात्पर्य :** योग अभ्यासद्वारा मानिस क्रमशः भौतिक धारणादेखि अनासक्त हुँदै जान्छ। योगको यो प्रारम्भिक लक्षण हो। यसपछि ऊ समाधिमा अवस्थित हुन्छ, अर्थात् योगीले आफ्नो दिव्य मन र बुद्धिको सहायताले परमात्माको अनुभूति प्राप्त गर्दछ। त्यस समय म आफैँ परमात्मा हूँ भन्ने भ्रम पनि समाप्त हुन्छ। योगाभ्यास प्रमुख रूपमा पतञ्जलिको पद्धतिमा आधारित छ। केही अप्रामाणिक भाष्यकारहरू जीवात्मा तथा परमात्मा बीच भिन्नता भएको स्थापित गर्ने प्रयास गर्दछन् अनि अद्वैतवादीहरू यसैलाई मुक्ति मान्दछन्। तर, तिनीहरूले पातञ्जल योगपद्धतिको वास्तविक प्रयोजनलाई बुझेका हुँदैनन्। पातञ्जल योगपद्धतिमा दिव्य आनन्दलाई स्वीकार गरिएको छ तर अद्वैतवादीहरू परमात्मासँग एकाकार हुने आफ्नो सिद्धान्तमा अवरोध उत्पन्न हुने डरले यो दिव्य आनन्दलाई स्वीकार गर्दैनन्। अद्वैतवादीहरू ज्ञान तथा ज्ञाताको द्वैत अवस्थालाई स्वीकार गर्दैनन् तर यो श्लोकमा दिव्य इन्द्रियद्वारा अनुभूत दिव्य आनन्दलाई स्वीकार गरिएको छ। यसैको समर्थन योगपद्धतिका

प्रसिद्ध व्याख्याता पतञ्जलि मुनिले पनि गर्नुभएको छ। योगसूत्र (३.३४) मा महर्षि भन्नु हुन्छ—**पुरुषार्थशून्यानां गुणानां प्रतिप्रसवः कैवल्यं स्वरूपप्रतिष्ठा वा चितिशक्तिरिति।**

यो चितिशक्ति अर्थात् अन्तरङ्गा शक्ति दिव्य छ। पुरुषार्थको तात्पर्य धर्म, अर्थ र कामजस्ता भौतिक धर्म पूरा गरी अन्त्यमा मोक्ष प्राप्त गर्नु वा परमात्मासँग एकाकार हुने प्रयत्न गर्नु हो। परमात्मासँगको यो एकाकारलाई अद्वैतवादीहरू कैवल्य भन्दछन्। तर, पतञ्जलिका अनुसार कैवल्यम् भनेको त्यो अन्तरङ्गा वा दिव्य शक्ति हो, जसबाट जीवात्मा आफ्नो मौलिक स्वरूपप्रति सचेत हुन्छ। भगवान् चैतन्यमहाप्रभुका शब्दमा यो अवस्थालाई **चेतो दर्पणमार्जनम्** भनिएको छ अर्थात् यसबाट मनरूपी मलीन दर्पणको सफाइ हुन्छ। यो सफाइ वास्तवमा मुक्ति वा **भवमहादावाग्निनिर्वापणम्** हो। निर्वाण सिद्धान्त पनि प्रारम्भिक रूपले यही नियमसँग मिल्दोजुल्दो छ। भागवत् (२.१०.६.) मा यसलाई **स्वरूपेण व्यवस्थितिः** भनिएको छ। *भगवद्गीताको* प्रस्तुत श्लोकले पनि यसै स्थितिलाई पुष्टि गर्दछ। भौतिक अवसान वा निर्वाणपछि उदय हुने आध्यात्मिक क्रियाकलाप या भगवद्भक्तिको अभिव्यक्तिलाई कृष्णभावनामृत भनिन्छ। भागवत्को शब्दमा यसलाई स्वरूपेण व्यवस्थिति भनिन्छ। यही नै जीवात्माको वास्तविक जीवन हो। माया वा भ्रमका कारणले गर्दा नै भौतिक प्रभावबाट आध्यात्मिक जीवन संक्रमित हुन्छ। यो भौतिक संक्रमणबाट मुक्त हुनुको अर्थ जीवात्माको मौलिक तथा शाश्वत अवस्थाको विनाश होइन। पतञ्जलिले पनि आफ्नै शब्दद्वारा यसको समर्थन गर्दै भनेका छन्— **कैवल्यं स्वरूप प्रतिष्ठा** वा **चितिशक्तिरिति।** यही चितिशक्ति वा दिव्य आनन्द नै वास्तविक जीवन हो। यसको अनुमोदन वेदान्त सूत्र (१.१.१२) मा **आनन्दमयोऽभ्यासात्** भनेर गरिएको छ। यो स्वाभाविक दिव्य आनन्द नै योगको परमलक्ष्य हो र भक्तियोगद्वारा यसलाई सरलतापूर्वक प्राप्त गर्न सकिन्छ। भक्तियोगको विस्तृत विवरण *भगवद्गीताको* सातौँ अध्यायमा गरिने छ।

यस अध्यायमा वर्णन गरिएको योगपद्धतिअनुसार समाधि दुई प्रकारका छन् जसलाई सम्प्रज्ञात समाधि र असम्प्रज्ञात समाधि भन्दछन्। मानिस विभिन्न दार्शनिक अनुसन्धानद्वारा जब दिव्य स्थितिमा अवस्थित हुन्छ, त्यस समय उसलाई सम्प्रज्ञात समाधि प्राप्त भएको मानिन्छ। असम्प्रज्ञात समाधिमा सांसारिक आनन्दसँग कुनै सम्बन्ध हुँदैन, किनभने यस अवस्थामा मानिसको मन इन्द्रियबाट प्राप्त हुने सबै प्रकारका सुखभन्दा माथि उठिसकेको हुन्छ। एक पटक त्यो दिव्य स्थितिमा पुगेपछि योगी त्यहाँबाट कहिल्यै विचलित हुँदैन। योगीले जबसम्म यस्तो स्थिति प्राप्त गर्न सक्दैन तबसम्म ऊ असफल

नै हुन्छ। आजभोलि चलेका इन्द्रियसुखमा आधारित तथाकथित योगाभ्यासहरू योगपद्धतिसंग सधैँ विरोधाभासपूर्ण छन्। योगी भएर पनि यदि कोही मादक द्रव्य सेवन र मैथुनमा संलग्न हुन्छ त्यो एउटा उपहासजनक कुरा हो। यतिसम्म, जो योगको सिद्धिप्रति आकृष्ट हुन्छन् ती पनि पूर्णतः योगमा आरूढ हुन सक्दैनन्। यो श्लोकअनुसार जो योगको सहउत्पादन वा प्रतिफलतिर आकर्षित हुन्छन् तिनले योगसिद्धिको अवस्था प्राप्त गर्न सक्दैनन्। तसर्थ जो शारीरिक स्वस्थताका लागि आसनहरूको प्रदर्शन र सिद्धिको लोभमा फँसेका छन् तिनीहरूबाट त योगको महान् उद्देश्य नै समाप्त भएको बुझ्नु पर्दछ।

यो युगको सर्वोत्तम योगसाधना भन्नु नै कृष्णभावनामृतको अभ्यास हो, जो कहिल्यै असफल हुँदैन। एउटा कृष्णभावनाभावित व्यक्ति आफ्नो व्यवसायमा कति सुखी हुन्छ भने, उसलाई कुनै अरू सुखको आकाङ्क्षा नै जाग्दैन। यो छल-प्रपञ्चको युगमा हठयोग, ध्यानयोग तथा ज्ञानयोगको अभ्यास गर्न लाग्दा धेरै बाधा अड्चन आउन सक्दछन् तर कर्मयोग वा भक्तियोगको पालनमा यस्तो समस्या आउँदैन।

जबसम्म यो शरीर रहन्छ तबसम्म आहार, निद्रा, भय र मैथुनजस्ता शारीरिक आवश्यकता पनि पूरा गर्नु पर्दछ। तर, जुन व्यक्ति शुद्ध भक्तियोग अर्थात् कृष्णभावनामृतमा अवस्थित भएको छ उसले यस्ता शारीरिक आवश्यकताहरू पूरा गर्दा इन्द्रियहरूलाई उत्तेजित पार्ने काम गर्दैन। बरु उसले न्यूनतम उपलब्धिभित्र रहेर जीवनका अत्यन्त आवश्यकताहरू पूरा गर्दै कृष्णभावनामृतको दिव्य सुखको उपभोग गर्दछ। ऊ दुर्घटना, रोग, अभाव र आफ्ना प्रियजनको मृत्युजस्ता परिस्थितिहरूमा पनि निरपेक्ष रहन्छ तर ऊ कृष्णभावनामृत या भक्तियोगसम्बन्धी आफ्ना कर्तव्यहरूप्रति सधैँ सचेत र सजग रहन्छ। दुर्घटनाहरूले उसलाई आफ्नो कर्मपथबाट विचलित पार्न सक्दैनन्। *भगवद्गीता* (२.१४) मा भनिएको छ **आगमापायिनोऽनित्यास्तांस्तितिक्षस्व** भारत। ऊ यस्ता सबै समसामयिक घटनाहरूप्रति सहिष्णु रहन्छ, किनभने यस्ता घटना आइरहन्छन् गइरहन्छन् तर उसको कर्तव्यमा कुनै प्रभाव पर्दैन। यस प्रकार उसले योगाभ्यासका क्षेत्रमा परमसिद्धि प्राप्त गर्दछ।

**स निश्चयेन योक्तव्यो योगोऽनिर्विण्णचेतसा।**
**संकल्पप्रभवान्कामांस्त्यक्त्वा सर्वानशेषतः।**
**मनसैवेन्द्रियग्रामं विनियम्य समन्ततः ॥ २४ ॥**

**सः** — त्यसले; **निश्चयेन** — दृढ सङ्कल्पका साथ; **योक्तव्यः** — अवश्य अभ्यास गरोस्; **योगः** — योगपद्धतिको; **अनिर्विण्ण चेतसा** — विचलित नभईकन; **सङ्कल्प** — मानसिक कल्पनाबाट; **प्रभवान्** — उत्पन्न भएका;

**कामान्** — भौतिक इच्छाहरू; **त्यक्त्वा** — त्याग गरेर; **सर्वान्** — समस्त; **अशेषतः** — पूर्णतया; **मनसा** — मनले; **एव** — निश्चय नै; **इन्द्रियग्रामम्** — इन्द्रिय समूहलाई; **विनियम्य** — वशमा राखेर; **समन्ततः** — सबैतिरबाट।

**मानिस दृढ सङ्कल्प लिएर श्रद्धापूर्वक योग अभ्यासमा लाग्न पर्दछ र त्यस पथबाट विचलित हुन हुँदैन। उसले मनोमानीबाट उत्पन्न सबै इच्छाहरू पनि निरपवाद रूपले त्याग गर्न पर्दछ अनि यस प्रकार मनद्वारा सबैतर्फबाट इन्द्रियहरूलाई नियन्त्रण गर्न पर्दछ।**

**तात्पर्य :** योगाभ्यास गर्नेले दृढ सङ्कल्प लिएर विचलित नभई धैर्यपूर्वक योगको अभ्यासमा लाग्नु पर्दछ। आखिर सफलता निश्चित छ भन्ने विचार गरेर उत्साह र लगनका साथ अघि बढ्नु पर्दछ र सफलता प्राप्तिमा ढिलो भए पनि निरूत्साहित हुनु हुँदैन। निष्ठावान् साधकका लागि सफलता निश्चित छ। भक्तियोगबारे रूपगोस्वामी भन्नु हुन्छ—

*उत्साहान्निश्चयाद्धैर्यात्तत्तत्कर्मप्रवर्तनात् ।*
*संगत्यागात्सतोवृत्तेः षड्भिर्भक्तिः प्रसिध्यति ॥*

(*उपदेशामृत* ३)

"हार्दिक उत्साह, दृढ सङ्कल्प, निरन्तर धैर्य, निर्धारित कर्म, सत्संग तथा सत्कार्यमा पूर्ण संलग्नता आदि प्रक्रियाहरू पूरा गरेपछि भक्तियोगलाई सफलतापूर्वक सम्पन्न गर्न सकिन्छ।"

सङ्कल्पका सम्बन्धमा भन्दा मानिसले समुद्रका लहरमा आफ्ना फुल हराएकी एउटी भँगेरीको कथालाई आदर्श मान्नु पर्दछ। भनिन्छ— एउटी भँगेरी थिई। उसले समुद्रका किनारमा फुल पारिछ तर समुद्रको लहरमा सबै फुलहरू डुबेछन्। भँगेरी अत्यन्त क्षुब्ध भई र आफ्ना फुलहरू फर्काइदिन समुद्रसँग अनुरोध गरी तर समुद्रले उसको अनुरोधलाई वास्तै गरेन। अनि त्यस भँगेरीले त्यो समुद्र नै सुकाइदिने निर्णय गरी। उसले आफ्नो सानो चुच्चोले समुद्रको पानी ओसार्न थाली। यस्तो देख्ने सबैले उसको असम्भव सङ्कल्पप्रति हाँसो गरे। भँगेरीको यस्तो कामको चर्चा भयो। अन्त्यमा त्यो समाचार भगवान् विष्णुका ठुला वाहन तथा पक्षीका राजा गरूडको कानमा पनि पऱ्यो। उनलाई आफ्नी त्यस्ती सानी बहिनी-चरीको माया लाग्यो र उनी त्यो चरीलाई भेट्न आए। ती सानी चरीको त्यत्रो सङ्कल्प देखेर गरूड साह्रै खुसी भए र उसलाई सहायता गर्ने वचन दिए। यसरी गरूडले समुद्रलाई त्यो भँगेरीको फुल तुरुन्त फिर्ता गर्ने आदेश दिए र त्यसो नगरेमा आफैँ आएर उक्त भँगेरीको काम गर्ने धम्की दिए। अन्त्यमा समुद्र डराएर भँगेरीका सबै फुलहरू उसलाई फर्काइदिए।

गरूडका कृपाले भँगेरी साह्रै प्रसन्न भई। यसै गरी योगको अभ्यास विशेष गरी कृष्णभावनामा रहेर गरिने भक्तियोगको अभ्यास अत्यन्तै कठिन कामजस्तो लाग्न सक्दछ तर दृढ सङ्कल्प लिएर नियमको पालन गर्दै अगाडि बढेमा त्यसलाई भगवान्‌ले अवश्य पनि सहायता गर्नु हुन्छ, किनभने जसले आफ्नो सहायता आफैँ गर्दछन् तिनैलाई भगवान्‌ले पनि सहायता गर्नु हुन्छ।

**शनैः शनैरूपरमेद्बुद्ध्या धृतिगृहीतया ।**
**आत्मसंस्थं मनः कृत्वा न किञ्चिदपि चिन्तयेत् ॥ २५ ॥**

**शनैः** — विस्तारै; **शनैः** — क्रमशः; **उपरमेत्** — निवृत्त रहोस्; **बुद्ध्या** — बुद्धिले; **धृति-गृहीतया** — दृढ विश्वास लिएर; **आत्मसंस्थम्** — अध्यात्ममा अवस्थित; **मनः** — मन; **कृत्वा** — गरेर; **न** — होइन; **किञ्चित्** — अरू केही; **अपि** — पनि; **चिन्तयेत्** — सोचोस्।

**विस्तारै विस्तारै, पूर्ण आत्मविश्वासपूर्वक बुद्धिका माध्यमबाट क्रमशः समाधिमा स्थिर हुनु पर्दछ अनि यसरी मनलाई आत्मामा स्थिर गर्नु पर्दछ र अरू केही पनि सोच्नु हुँदैन।**

**तात्पर्य :** समुचित आत्मविश्वास तथा बुद्धिको सहायताले यसरी विस्तारै विस्तारै इन्द्रियका वृत्तिहरूलाई नियन्त्रणमा ल्याउनु पर्दछ। यसैलाई प्रत्याहार भनिन्छ। आत्मविश्वास, ध्यान तथा इन्द्रिय निवृत्तिद्वारा मनलाई वशमा राखेर समाधिमा स्थिर हुनु पर्दछ। त्यस अवस्थामा शारीरिक अवधारणाको बुद्धिबाट प्रभावित हुने कुनै भय हुँदैन। अर्को वाक्यमा भन्दा, जबसम्म यो भौतिक शरीर रहन्छ, तबसम्म मानिसलाई भोग्य पदार्थतिर संलग्न हुनु नै पर्दछ तैपनि उसले केवल इन्द्रियतृप्तिका विषयमा मात्र सोच्नु हुँदैन। उसले त परमात्माको आनन्दबाहेक अरू कुनै आनन्दको चिन्तन गर्नु हुँदैन। कृष्णभावनामृतको प्रत्यक्ष अभ्यास गर्नाले यो स्थितिलाई सहजै प्राप्त गर्न सकिन्छ।

**यतोयतो निश्चलति मनश्चञ्चलमस्थिरम् ।**
**ततस्ततो नियम्यैतदात्मन्येव वशं नयेत् ॥ २६ ॥**

**यतः यतः** — जता जता; **निश्चलति** — विचलित हुन्छ; **मनः** — मन; **चञ्चलम्** — चञ्चल; **अस्थिरम्** — अस्थिर; **ततः ततः** — त्यताबाट; **नियम्य** — नियन्त्रित गरेर; **एतत्** — यो; **आत्मनि** — आफैँमा; **एव** — निश्चय नै; **वशम्** — वशमा; **नयेत्** — ल्याओस्।

**मन आफ्नो चञ्चल र अस्थिर स्वभावका कारणले जता जता विचरण गर्न गएपनि त्यसलाई त्यताबाट तानेर आफ्नो वशमा ल्याउनु पर्दछ।**

**तात्पर्य :** मन स्वभावले चञ्चल र अस्थिर हुन्छ, त्यसैले आत्मसाक्षात्कार गरेको योगीले त्यो चञ्चल मनलाई आफ्नो वशमा ल्याउनु पर्दछ, तर स्वयम् मनका वशमा पर्नु हुँदैन। जसले मनलाई इन्द्रियसहित वशमा राखेको छ त्यसलाई गोस्वामी अर्थात् स्वामी भनिन्छ तर जो मनको वशमा परेको छ त्यसलाई गोदास अर्थात् इन्द्रियहरूको सेवक भनिन्छ। गोस्वामीलाई इन्द्रियसुखको स्तर कस्तो हुनु पर्दछ भन्ने जानकारी हुन्छ। दिव्य इन्द्रियसुखका अवस्थामा इन्द्रियहरू भगवान् हृषीकेश अर्थात् इन्द्रियका स्वामी भगवान् श्रीकृष्णको सेवामा लागिरहेका हुन्छन्। शुद्ध इन्द्रियद्वारा भगवान् श्रीकृष्णको सेवामा लाग्नु नै कृष्णभावनामृत वा कृष्णचेतना हो। यही नै इन्द्रियहरूलाई पूर्णतया वशमा ल्याउने उपाय हो। योगाभ्यासको सर्वोच्च सिद्धि यही हो, योभन्दा पनि ठुलो अरु के हुन सक्दछ।

**प्रशान्तमनसं ह्येनं योगिनं सुखमुत्तमम् ।**
**उपैति शान्तरजसं ब्रह्मभूतमकल्मषम् ॥ २७॥**

**प्रशान्त** — शान्त वा भगवान् श्रीकृष्णका चरणकमलमा स्थित; **मनसम्** — जसको मन; **हि** — निश्चय नै; **एनम्** — यो; **योगिनम्** — योगी; **सुखम्** — सुख; **उत्तमम्** — सर्वोच्च; **उपैति** — प्राप्त गर्दछ; **शान्त रजसम्** — जसको रजोगुण शान्त भएको छ; **ब्रह्मभूतम्** — परमात्मासँग आफ्नो परिचय भएपछि प्राप्त हुने मुक्ति; **अकल्मषम्** — पूर्वजन्मका सम्पूर्ण पापकर्मका प्रतिफलबाट मुक्ति।

**जुन योगीको मन ममा स्थिर भएको छ त्यसले निश्चय नै दिव्य सुखको सर्वोच्च स्थिति प्राप्त गर्दछ। त्यो योगी रजोगुणभन्दा माथि उठेको हुन्छ र त्यसले परमात्मासँग रहेको आफ्नो गुणात्मक एकताको बोध पनि गर्दछ। यसरी ऊ आफ्ना पूर्वजन्मका समस्त कर्मफलबाट मुक्त हुन्छ।**

**तात्पर्य :** भौतिक कल्मषबाट मुक्त भएर भगवान्‌को दिव्य सेवाका स्तरमा पुगेको अवस्था नै ब्रह्मभूत अवस्था हो। **मद्भक्तिं लभते पराम्** (*भगवद्गीता* १८.५४)। जबसम्म मानिसको मन भगवान्‌को चरणकमलमा स्थिर हुँदैन तबसम्म ऊ ब्रह्मभूत अवस्थामा रहन सक्दैन। **स वै मनः कृष्णपदारविन्दयो**। भगवान्‌को दिव्य प्रेमाभक्तिमा निरन्तर प्रवृत्त रहनु वा कृष्णभावनामृतमा रहनु नै यथार्थमा रजोगुणबाट एवं भौतिक संक्रमणबाट मुक्त हुनु हो।

**युञ्जन्नेवं सदात्मानं योगी विगतकल्मषः ।**
**सुखेन ब्रह्मसंस्पर्शमत्यन्तं सुखमश्नुते ॥ २८॥**

**युञ्जन्** — योग अभ्यासमा लागेर; **एवम्** — यसरी; **सदा** — सधैँ; **आत्मा-**

नम् — स्वयम्; **योगी** — जो परमात्माको सम्पर्कमा रहेको छ; **विगत** — मुक्त; **कल्मषः** — सबै प्रकारका भौतिक कल्मषबाट; **सुखेन** — दिव्य सुखमा; **ब्रह्म-संस्पर्शम्** — निरन्तर ब्रह्मको सान्निध्यमा रहेर; **अत्यन्तम्** — सर्वोच्च; **सुखम्** — सुख; **अश्नुते** — प्राप्त गर्दछ।

**यसरी निरन्तर योगाभ्यासमा लागिरहने आत्मसंयमी योगी नै सबै भौतिक कल्मषबाट मुक्त भई भगवान्‌को दिव्य प्रेमाभक्तिमा रहेर परिपूर्ण सुखको सर्वोच्च अवस्था पाउन सफल हुन्छ।**

**तात्पर्य :** भगवान्‌सँग सम्बन्धित आफ्नो मौलिक स्वरूपको जानकारी प्राप्त गर्नु नै आत्मसाक्षात्कारको तात्पर्य हो। जीव (आत्मा) भगवान्‌को अंश हो र भगवान्‌को दिव्य सेवामा लागिरहनु नै उसको स्वरूप हो। ब्रह्मसँगको यो दिव्य सान्निध्यलाई ब्रह्म-संस्पर्श भनिन्छ।

**सर्वभूतस्थमात्मानं सर्वभूतानि चात्मनि ।**
**ईक्षते योगयुक्तात्मा सर्वत्र समदर्शनः ॥ २९ ॥**

**सर्व-भूत-स्थम्** — सबै जीवमा रहेको; **आत्मानम्** — परमात्मालाई; **सर्व** — सबै; **भूतानि** — जीवहरू; **च** — पनि; **आत्मनि** — आत्मामा; **ईक्षते** — देख्छ; **योगयुक्त आत्मा** — कृष्ण चेतनामा लागेको व्यक्तिले; **सर्वत्र** — सबै ठाउँमा; **सम दर्शनः** — समभावले देख्दै।

**वास्तविक योगीले सबै जीवहरूमा मलाई देख्दछ र ममा नै सबै जीवहरूलाई देख्दछ। स्वरूपसिद्ध व्यक्तिले निःसन्देह मलाई नै सर्वत्र विद्यमान परमेश्वरका रूपमा देख्दछ।**

**तात्पर्य :** कृष्णभावनाभावित योगी पूर्णद्रष्टा हुन्छ, किनभने उसले परब्रह्म भगवान् श्रीकृष्णलाई हरेक प्राणीका हृदयमा रहने परमात्माका रूपमा देख्दछ। **ईश्वर सर्व भूतानां हृद्देशेर्जुन तिष्ठति।** कुकुर होस् या ब्राह्मण, भगवान् त दुवैका हृदयमा परमात्मा रूपले रहनु हुन्छ। भगवान् सधैँ दिव्य हुनुहुन्छ तथा कुकुर र ब्राह्मणका हृदयमा उपस्थित भए पनि उहाँ भौतिकताबाट प्रभावित हुनु हुन्न भन्ने कुरा एउटा पूर्णयोगीले राम्रोसँग बुझेको हुन्छ। यही हो भगवान्‌को परमनिरपेक्षता। आत्मा पनि प्रत्येक जीवको हृदयमा निवास गर्दछ तर त्यो एकैसाथ सम्पूर्ण हृदयहरूमा सर्वव्यापी भएर बस्न सक्दैन। आत्मा र परमात्मामा यही अन्तर छ। जो वास्तविक रूपमा योगाभ्यासी होइन त्यसले यो तथ्यलाई स्पष्टसँग देख्न सक्दैन। एउटा कृष्णभावनाभावित व्यक्तिले मात्र भगवान् श्रीकृष्णलाई आस्तिक तथा नास्तिक दुवैका हृदयमा देख्न सक्दछ।

स्मृतिमा यसको पुष्टि गर्दै भनिएको छ— **आत्मतत्त्वाच्च मातृत्वाच्च आत्मा हि परमो हरि।** भगवान् सबै प्राणीहरूका मूल स्रोत हुनुभएकाले उहाँ आमासरह तथा पालनकर्तासरह हुनुहुन्छ। जसरी आमाले आफ्ना विभिन्न छोराछोरीहरूप्रति समानभाव राख्नु हुन्छ त्यसै गरी परमपिता (या माता) ले पनि सबैप्रति समानभाव राख्नु हुन्छ। त्यसैले परमात्मा सधैँ प्रत्येक जीवमा निवास गर्नु हुन्छ भनिएको हो।

बाह्य रूपबाट पनि प्रत्येक जीव भगवान्को शक्ति (भगवद्शक्ति) मा अडिएको छ। यसको व्याख्या सातौँ अध्यायमा गरिने छ। त्यहाँ भगवान्का आध्यात्मिक वा परा अनि भौतिक वा अपरा नाम गरेका दुईवटा मुख्य शक्ति भएको कुराको वर्णन गरिएको छ। यो जीव पराशक्तिको अंश भए पनि अपराशक्तिद्वारा बद्ध बनाइएको छ, त्यसैले जीव सधैँ भगवान्को शक्ति हो। प्रत्येक जीव कुनै न कुनै रूपमा भगवान्मा अवस्थित छ।

योगी समदर्शी हुने हुँदा, सबै जीवहरू आ-आफ्नो कर्मफलअनुसार विभिन्न स्थितिमा रहे पनि अन्त्यमा ती सबै भगवान्का दास हुन् भन्ने कुरा उसले देख्न सक्दछ। भौतिक शक्तिका अधीनमा हुँदा जीवले भौतिक इन्द्रियहरूको सेवा गर्दछ र आध्यात्मिक शक्तिमा हुँदा ऊ साक्षात् परमेश्वरको सेवा गर्दछ। तसर्थ प्रत्येक अवस्थामा जीव ईश्वरको दास हो। कृष्णभावनाभावित व्यक्तिमा यो समदृष्टिले पूर्णता प्राप्त गरेको हुन्छ।

**यो मां पश्यति सर्वत्र सर्वं च मयि पश्यति ।**
**तस्याहं न प्रणस्यामि स च मे न प्रणश्यति ॥ ३० ॥**

**यः** — जो; **माम्** — मलाई; **पश्यति** — देख्दछ; **सर्वत्र** — सबै ठाउँमा; **सर्वम्** — प्रत्येक वस्तु; **च** — तथा; **मयि** — ममा; **पश्यति** — देख्दछ; **तस्य** — त्यसका लागि; **अहम्** — म; **नप्रणश्यामि** — अदृश्य हुन्न; **सः** — त्यो; **च** — पनि; **मे** — मेरा लागि; **नप्रणश्यति** — अदृश्य वा परोक्ष हुँदैन।

**जसले सबै ठाउँमा मलाई देख्दछ र सबैलाई ममा देख्दछ, उसका निमित्त न म कहिल्यै अदृश्य हुन्छु न त मेरा लागि ऊ अदृश्य हुन्छ।**

**तात्पर्य :** निश्चय नै कृष्णचेतनामय व्यक्तिले भगवान् श्रीकृष्णलाई सबै ठाउँमा देख्दछ र सबै वस्तु भगवान् श्रीकृष्णमा रहेको देख्दछ। यस्तो व्यक्तिले प्रकृतिका पृथक् पृथक् अभिव्यक्तिलाई पृथक् दृष्टिले देखेजस्तो लागे पनि प्रत्येक वस्तु भगवान् श्रीकृष्णको शक्तिको अभिव्यक्ति हो भन्ने जानेर हरेक अवस्थामा ऊ भगवान् श्रीकृष्णप्रति सचेत रहन्छ। श्रीकृष्णबिना कसैको अस्तित्व सम्भव छैन र श्रीकृष्ण नै सबैका ईश्वर हुनुहुन्छ, कृष्णभावनामृतको

मूल सिद्धान्त पनि यही हो। कृष्णभावनामृत भनेको श्रीकृष्णप्रेमको विकास हो। यो अवस्था भौतिक मोक्षभन्दा पनि उच्च स्तरको छ। कृष्णभावनामृतको यस्तो अवस्थामा वा आत्मसाक्षात्कारभन्दा माथिल्लो अवस्थामा भगवान् श्रीकृष्ण भक्तका लागि प्रत्येक वस्तु बनिदिनु हुन्छ भन्ने भावमा भक्त भगवान् श्रीकृष्णका साथमा एकाकार हुन पुग्दछ र श्रीकृष्णप्रेमले परिपूर्ण हुन्छ। अनि त्यहाँ भक्त र भगवान्का बीचमा घनिष्ठ सम्बन्ध स्थापित हुन्छ। त्यस अवस्थामा न कहिल्यै जीवात्माको विलय हुन्छ न त भगवान् कहिल्यै भक्तका दृष्टिबाट पर जानु हुन्छ। भगवान् श्रीकृष्णमा विलय हुनु भनेको आध्यात्मिक प्रलय हुनु हो। भक्तले यस्तो खतरा कहिल्यै लिन चाहँदैन। ब्रह्मसंहिता (५.३८) मा भनिएको छ—

*प्रेमाञ्जनच्छुरितभक्तिविलोचनेन,*
*सन्तः सदैव हृदयेषु विलोकयन्ति ।*
*यं श्यामसुन्दरमचिन्त्यगुणस्वरूपं,*
*गोविन्दमादिपुरुषं तमहं भजामि ॥*

"म आदि भगवान् गोविन्दको भजन गर्दछु जसलाई आँखामा भगवत् प्रेमरूपी गाजल लगाएका भक्तहरूले सधैँ देख्ने गर्दछन्। उहाँ भक्तका हृदयमा निवास गर्ने श्यामसुन्दरका रूपमा नित्य देखिनु हुन्छ।" यस अवस्थामा भगवान् श्रीकृष्ण पनि भक्तका दृष्टिबाट अदृश्य हुनु हुन्न र भक्त पनि उहाँलाई आफ्नो दृष्टिबाट ओझेल पारेर कहिल्यै बस्न सक्दैन। योगीका निमित्त पनि यही कुरा सत्य हुन्छ। उनीहरू पनि आफ्ना हृदयमा परमात्माका रूपमा भगवान्को दर्शन गरिरहन्छन्। यस्तै योगी शुद्ध भक्त बन्न सक्दछ र आफूभित्र भगवान्लाई नदेखी एक क्षण पनि रहन सक्दैन।

**सर्वभूतस्थितं यो मां भजत्येकत्वमास्थितः ।**
**सर्वथा वर्तमानोऽपि स योगी मयि वर्तते ॥ ३१॥**

**सर्व-भूत-स्थितम्** — प्रत्येक जीवका हृदयमा रहेका; **यः** — जो; **माम्** — मलाई; **भजति** — भक्तिपूर्वक सेवा गर्दछ; **एकत्वम्** — एकत्व भावमा; **आस्थितः** — रहेको; **सर्वथा** — सबै प्रकारले; **वर्तमानः** — अवस्थित भएर; **अपि** — पनि; **सः** — त्यो; **योगी** — योगी; **मयि** — ममा; **वर्तते** — रहन्छ।

**जुन योगी मलाई र परमात्मालाई एउटै हुन् भन्ने ठानेर भक्तिपूर्वक परमात्माको सेवा गर्दछ त्यो सधैँ ममा नै विराजमान भएको ठानिन्छ।**

**तात्पर्य :** जुन योगीले परमात्माको ध्यान गर्ने अभ्यास गर्दछ, आफ्नो

अन्तःकरणमा उसले शङ्ख, चक्र, गदा, पद्म धारण गर्नुभएका चतुर्भुज विष्णुस्वरूप श्रीकृष्णको दर्शन गर्दछ। योगीले भगवान् विष्णु भगवान् श्रीकृष्णभन्दा भिन्न तत्त्व हुनु हुन्न भन्ने बुझ्नु पर्दछ। जन-जनका हृदयमा परमात्मा स्वरूपले निवास गर्ने पनि भगवान् श्रीकृष्ण नै हुनुहुन्छ। यति मात्र होइन, असंख्य जीवहरूका हृदयमा रहने असंख्य परमात्माका बीचमा पनि कुनै अन्तर छैन। यसै गरी भगवान् श्रीकृष्णको दिव्य प्रेमाभक्तिमा निरन्तर व्यस्त रहने मानिस र परमात्माको ध्यानमा लागिरहने एउटा पूर्णयोगीका बीचमा पनि कुनै अन्तर छैन। कृष्णभावनामृतमा रहने योगी जहिले पनि भगवान् श्रीकृष्णमा स्थित हुन्छ, यद्यपि भौतिक जगत्का विभिन्न क्रियाकलापमा ऊ व्यस्त भइरहेको देखिन्छ। यसको पुष्टि श्रील रूप गोस्वामीको भक्तिरसामृत सिन्धु (१.२.१८७) मा यसरी गरिएको छ— **निखिलास्वप्यवस्थासु जीवन्मुक्तः स उच्यते।** कृष्णभावनामृतमा संलग्न भइरहने भगवद्भक्त स्वतः मुक्त हुन्छ। नारद पञ्चरात्रमा यसको पुष्टि यसरी गरिएको छ—

*दिक्कालाद्यनवच्छिन्ने कृष्णे चेतो विधाय च ।*
*तन्मयो भवति क्षिप्रं जीवो ब्रह्मणि योजयेत् ॥*

देश र कालभन्दा पनि पर, सर्वव्यापी भगवान् श्रीकृष्णको दिव्य रूपमा मनलाई एकाग्र पारेपछि मानिसको मन कृष्णचिन्तनमा लीन हुन्छ अनि उहाँको दिव्य सान्निध्यको आनन्दमय अवस्था उसले प्राप्त गर्दछ।

योगाभ्यासका क्षेत्रमा समाधिको सर्वोच्च अवस्था भनेको कृष्णभावनामृत हो। केवल प्रत्येकका हृदयमा भगवान् श्रीकृष्ण नै परमात्माका रूपमा विराजमान हुनुहुन्छ भन्ने ज्ञान हुने योगी मात्र निर्दोष हुन्छ। भगवान्को यस्तो अचिन्त्य शक्तिको पुष्टि गर्दै वेदले पनि भनेको छ—

**एकोऽपि सन्बहुधा यो विभाति** (गोपालतापिनी उपनिषद् १.२१) अर्थात्, भगवान् एउटै हुनुहुन्छ तर पनि उहाँ विभिन्न भएजस्तै गरी असंख्य हृदयमा निवास गर्नु हुन्छ। यसै गरी स्मृति शास्त्रमा पनि भनिएको छ—

*एक एव परो विष्णुः सर्वव्यापी न संशयः।*
*ऐश्वर्याद्रूपमेकं च सूर्यवत् बहुधेयते ॥*

"भगवान् विष्णु एउटै हुनुहुन्छ तर उहाँ सर्वव्यापी हुनुहुन्छ। एक रूपमा भएपनि आफ्नो अचिन्त्य शक्तिद्वारा उहाँ त्यसरी नै सर्वत्र उपस्थित हुनु हुन्छ जसरी एउटै सूर्य एकै पटक सर्वत्र प्रकाशित हुन सक्दछ।"

**आत्मौपम्येन सर्वत्र समं पश्यति योऽर्जुन ।**
**सुखं वा यदि वा दुःखं स योगी परमो मतः ॥ ३२ ॥**

**आत्म** — आफ्नो आत्मासँग; **औपम्येन** — तुलना गरेर; **सर्वत्र** — सबै ठाउँमा; **समम्** — समान रूपले; **पश्यति** — देख्दछ; **यः** — जसले; **अर्जुन** — हे अर्जुन; **सुखम्** — सुख; **वा** — अथवा; **यदि** — यदि; **वा** — अथवा; **दुःखम्** — दुःख; **सः** — त्यस्तो; **योगी** — योगी; **परमः** — परिपूर्ण वा (सिद्ध); **मतः** — मानिन्छ।

**हे अर्जुन! जसले आफ्नो आत्मासँग तुलना गर्दै सम्पूर्ण प्राणी तथा तिनीहरूका सुख र दुःखलाई वास्तविक समानभावले देख्न सक्दछ त्यो मात्र पूर्णयोगी हो।**

**तात्पर्य :** कृष्णभावनाभावित व्यक्ति नै पूर्णयोगी हो। ऊ आफ्नो व्यक्तिगत अनुभवद्वारा प्रत्येक प्राणीको सुख र दुःखप्रति सजग हुन्छ। ईश्वरसँग रहेको आफ्नो सम्बन्धलाई बिर्सनु नै जीवको दुःखको कारण हो र भगवान् श्रीकृष्णलाई नै सम्पूर्ण मानवीय क्रियाकलापका परमभोक्ता ठान्नु उहाँलाई नै सबै देश र लोकका स्वामी पनि मान्नु र उहाँ नै सबै जीवका परमहितैषी मित्र हुनुहुन्छ भन्ने ठान्नु सुखको कारण हो। भगवन् श्रीकृष्णसँगको आफ्नो सम्बन्ध बिर्सनाले भौतिक प्रकृतिका गुणहरूद्वारा प्रभावित बद्ध जीव तीन प्रकारका सांसारिक तापहरूले दुःखित हुन्छ भन्ने कुरा पूर्णयोगीलाई ज्ञान हुन्छ। अतः उसले श्रीकृष्णसम्बन्धी ज्ञानलाई चारैतिर फैलाएर कृष्णभावनाभावित व्यक्ति नै सुखी हुन सक्दछ भन्ने अनुभव गराउँदछ। यसरी कृष्णभावनाभावित हुनुको महत्त्वलाई सर्वत्र फैलाउन प्रयत्न गर्ने पूर्णयोगी नै संसारको सबैभन्दा ठुलो परोपकारी र ईश्वरको परमप्रिय सेवक हुन्छ।

**न च तस्मान्मनुष्येषु कश्चिन्मे प्रियकृत्तमः** (गीता १८.६९) अर्को शब्दमा भन्नुपर्दा, भगवद्भक्तले सधैँ सबै जीवको कल्याण चाहने हुँदा ऊ सबै प्राणीहरूको वास्तविक मित्र पनि हुन्छ। यस्तो योगी नै सर्वश्रेष्ठ योगी हो। किनभने उसले आफ्नो निजी सुखका निमित्त मात्र योगसिद्धि चाहँदैन बरु अरू सबैको कल्याणका लागि योगमा पूर्णता पाउन चाहन्छ। आफ्ना अरू मित्र जीवहरूसँग द्वेष गर्ने काम उसले गर्दैन। यो नै भगवान्को भक्त र आफ्नो निजी उन्नतिको मात्र चाहना राख्ने योगीका बीचमा हुने अन्तर हो। राम्रोसँग ध्यान गर्नका लागि आफूलाई एकान्तसेवी बनाउने योगीभन्दा प्रत्येक व्यक्तिलाई कृष्णभावनामृतमा प्रेरित गर्ने भक्त नै पारङ्गत मानिन्छ।

अर्जुन उवाच

**योऽयं योगस्त्वया प्रोक्तः साम्येन मधुसूदन ।**
**एतस्याहं न पश्यामि चञ्चलत्वात्स्थितिं स्थिराम्॥ ३३ ॥**

**अर्जुन उवाच** — अर्जुनले भने; **यः अयम्** — यो पद्धति; **योगः** — योगको; **त्वया** — तपाईंले; **प्रोक्त** — भन्नुभएको; **साम्येन** — सामान्यतया; **मधुसूदन** — हे मधु दैत्यवध गर्ने; **एतस्य** — यसको; **अहम्** — मैले; **न पश्यामि** — देख्दिनँ; **चञ्चलत्वात्** — चञ्चल हुनाले; **स्थितिम्** — स्थिति; **स्थिराम्** — स्थायी।

**अर्जुनले भनेहे मधुसुदन! तपाईंले संक्षेपमा वर्णन गर्नुभएको यो योगपद्धति चञ्चल तथा अस्थिर मन भएका कारणले मेरा लागि अव्यावहारिक तथा असहनीय लागेको छ।**

**तात्पर्य :** "शुचौ देशे देखि स योगी परमो मतः" भगवान् श्रीकृष्णले अर्जुनलाई भन्नु भएको योगपद्धतिप्रति अर्जुनले आफ्नो असमर्थता प्रकट गर्दै यसलाई अस्वीकार गरेका छन्। यो कलियुगमा आफ्नो घर छोडेर पर्वत र जङ्गलमा गई एकान्तमा योग अभ्यास गर्नु एउटा साधारण मानिसका लागि सम्भव हुँदैन। वर्तमान युग त छोटो जीवनका निमित्त कठोर सङ्घर्ष गर्नुपर्ने विशेषताबाट परिचित छ। मानिसहरू आजभोलि जतिसुकै सजिलो र व्यावहारिक साधन भए पनि आत्मसाक्षात्कार गर्नतर्फ लाग्दैनन् झन् कठिन योगपद्धतिको विषयमा त के कुरा गर्नु? जुन भागमा जीवनशैली नै परिवर्तन गर्नु पर्दछ, रहन-सहनको तरिका र स्थानको चयनमा नियमित हुनु पर्दछ अनि मनलाई भौतिक आसक्तिबाट विरक्तितर्फ लैजानु पर्दछ।

यस्तो योगपद्धतिको अनुसरण गर्नु असम्भव छ भन्ने कुरा अर्जुनजस्ता व्यावहारिक व्यक्तिले पनि स्वीकार गरे। यद्यपि उनी आफू हरेक प्रकारले यस पद्धतिमा सक्षम र समुन्नत थिए। राजपरिवारका सदस्य हुनाले उनी विविध गुणहरूले परिपूर्ण थिए। उनी महान् योद्धा थिए र दीर्घजीवी पनि थिए। सबैभन्दा ठुलो कुरा उनी भगवान् श्रीकृष्णका घनिष्ठ मित्र थिए। पाँच हजार वर्ष पहिले, आजभोलि हामीले पाउनेभन्दा बढी सुविधा अर्जुनलाई प्राप्त थियो तर पनि उनले यस्तो योगपद्धतिलाई स्वीकार गर्न सकेनन्। साँच्चै भन्दा अर्जुनले कहिल्यै यस्तो योगाभ्यास गरेको तथ्य कुनै पनि इतिहासमा लेखिएको छैन। तसर्थ यो कलियुगमा त झन् यस्तो योगपद्धति सर्वसाधारणका लागि असम्भव प्रमाणित हुन सक्दछ। केही अति सीमित व्यक्तिहरूका लागि यो विधि सम्भव हुन सक्दछ तर सर्वसाधारण जनताका लागि त यो एउटा असम्भव प्रस्ताव मात्र हो। पाँच हजार वर्षअघि त यस्तो स्थिति थियो आजको

युगमा यसको कुरा के गर्नु ? जसले विभिन्न किसिमका तथाकथित योग स्कूल र योग समिति बनाएका छन् यो योगपद्धतिको अनुकरण गरिरहेका छन् त्यो एउटा रमाइलो विषय भए पनि त्यहाँ तिनीहरू अवश्य नै आफ्नो समयको दुरूपयोग गरिरहेका छन्। तिनीहरू आफ्नो अभीष्ट लक्ष्यप्रति अनभिज्ञ छन्।

**चञ्चलं हि मनः कृष्ण प्रमाथि बलवद्दृढम् ।**
**तस्याहं निग्रहं मन्ये वायोरिव सुदुष्करम् ॥ ३४॥**

**चञ्चलम्** — चञ्चल; **हि** — निश्चय नै; **मनः** — मन; **कृष्ण** — हे कृष्ण !; **प्रमाथि** — विचलित हुने; **बलवत्** — बलवान्; **दृढम्** — दुराग्रही; **तस्य** — त्यसलाई; **अहम्** — म; **निग्रहम्** — वशमा राख्न; **मन्ये** — ठान्दछु; **वायोः** — वायुलाई; **इव** — जस्तै; **सुदुष्करम्** — अति कठिन।

**हे कृष्ण! यो मन चञ्चल छ, उच्छृङ्खल छ, हठी तथा अत्यन्त बलवान् छ। यसलाई वशमा गर्नु हावालाई नियन्त्रणमा राख्नुजस्तै कठिन छ भन्ने मैले ठानेको छु।**

**तात्पर्य :** मनलाई बुद्धिको अधीनमा रहने तत्त्व मानिए तापनि यो मन यति बलवान् र दुराग्रही छ, कहिलेकाहीँ यसले बुद्धिलाई पनि उल्लङ्घन गर्दछ। यो व्यावहारिक जगत्मा मानिसलाई विभिन्न विरोधी तत्त्वहरूसँग सामना गर्नु परिरहेको हुन्छ। त्यसैले मनलाई वशमा राख्नु अत्यन्त कठिन हुन्छ। देखावटी रूपमा मानिसले आफ्नो मित्र तथा शत्रुसँग मानसिक सन्तुलन कायम गर्न सक्ला तर अन्तिम रूपमा कुनै पनि सांसारी पुरुषले यस्तो गर्न सक्दैन। किनभने यस्तो गर्नु वेगवान् वायुलाई वशमा पार्नुभन्दा पनि कठिन कुरा हो। वैदिक साहित्य कठोपनिषद् (१.३.३-४) मा भनिएको छ—

*आत्मानं रथिनं विद्धि शरीरं रथमेव च,*
*बुद्धिं तु सारथिं विद्धि मनः प्रग्रहमेव च ।*
*इन्द्रियाणि हयान्याहुर्विषयांस्तेषु गोचरान्,*
*आत्मेन्द्रियमनोयुक्तं भोक्तेत्याहुर्मनीषिणः ॥*

"प्रत्येक जीवात्मा यो भौतिक शरीररूपी रथमा यात्रीजस्तो बनेर बसेको छ, यसको सारथी (ड्राइभर) बुद्धि हो। मन यसको लगाम हो र इन्द्रियहरू यसका घोडा हुन्। मन र इन्द्रियहरूको सङ्गतमा रहेर आत्माले सुख वा दुःखको भोग गर्दछ। ठुला ठुला चिन्तकहरूको विचार यस्तै छ, हुनत बुद्धिको काम मनलाई निर्देशन दिनु हो तापनि अत्यन्त चर्को सङ्क्रामक रोगले सही औषधिको प्रभावलाई उल्लङ्घन गरेजस्तै यो अत्यन्त दुराग्रही र बलवान् मनले पनि

बुद्धिलाई उल्लङ्घन गर्दछ। यस्तो प्रबल मनलाई योग अभ्यासद्वारा वशमा राख्न सकिन्छ तर अर्जुनजस्तो सांसारिक व्यक्तिलाई यस्तो अभ्यास गर्ने कार्य कहिल्यै पनि व्यावहारिक हुन सक्दैन भने आधुनिक युगका मानिसलाई झन् यो कसरी व्यावहारिक होला ? यहाँ प्रयोग भएको उदाहारण उपयुक्त छ। बगिरहेको हावालाई कसैले समात्न सक्दैन, त्यसमा पनि त्यो चञ्चल मनलाई रोक्नखोज्नु झनै कठिन कार्य हो। अतः मनलाई वशमा राख्ने सरलतम उपाय भनेको पूर्णदैन्यभावले **हरेकृष्ण** महामन्त्रको कीर्तन गर्नु हो भनेर भगवान् चैतन्यमहाप्रभुले उपदेश दिनुभएको छ। **स वै मनः कृष्ण पदारविन्दयोः** यही नै यसको विधान हो अर्थात् मानिसले आफ्नो मनलाई पूर्णतया भगवान् श्रीकृष्णमा लगाइराख्नु पर्दछ अनि मात्र यो मनलाई विचलित पार्ने अरू क्रियाकलापहरू समाप्त हुनेछन्।

श्रीभगवानुवाच

**असंशयं महाबाहो मनो दुर्निग्रहं चलम् ।**
**अभ्यासेन तु कौन्तेय वैराग्येण च गृह्यते ॥ ३५ ॥**

**श्रीभगवानुवाच** — भगवान्ले भन्नुभयो; **असंशयम्** — निःसन्देह; **महाबाहो** — हे महाबाहु! (शक्तिशाली भुजा भएका); **मनः** — मनलाई; **दुर्निग्रहम्** — वशमा राख्न कठिन; **चलम्** — चञ्चल; **अभ्यासेन** — अभ्यासले; **तु** — तर; **कौन्तेय** — हे कुन्तीपुत्र!; **वैराग्येण** — वैराग्यले; **च** — पनि; **गृह्यते** — वशमा राख्न सकिन्छ।

**भगवान् श्रीकृष्णले भन्नुभयो — हे महाबाहु, हे कुन्तीपुत्र! चञ्चल मनलाई वशमा ल्याउन कठिन छ भन्ने कुरामा कुनै शंका छैन तर अभ्यास र वैराग्यद्वारा यसलाई वशमा ल्याउन सकिन्छ।**

**तात्पर्य :** यो हठी मनलाई वशमा ल्याउन कठिन छ भन्ने अर्जुनको भनाइलाई भगवान्ले स्वीकार गर्नुभयो। तर, साथै अभ्यास र वैराग्यद्वारा यसलाई वशमा पार्न सकिन्छ भन्ने सुझाव पनि उहाँले दिनुभयो। त्यस्तो अभ्यास के हो त ? तीर्थवास, परमात्माको ध्यानमा मानसिक एकाग्रता, इन्द्रिय तथा मनलाई वशमा राख्नु, ब्रह्मचर्य व्रत पालन गर्नु, एकान्तवास गर्नु आदि कठोर विधि-निषेधको पालन गर्नु आजको युगमा अत्यन्त कठिन काम हो। तर, कृष्णभावनामृतको अभ्यासद्वारा मानिस भगवान्को नवधा वा नौ प्रकारका भक्तिमा संलग्न हुन सक्दछ। यो भक्तिसाधनाको सर्वप्रथम र सर्वोपरि अङ्ग हो। भगवान् श्रीकृष्णका कथाहरूको श्रवण गर्नु नै विभिन्न प्रकारका दुश्चिन्ताहरूबाट मनलाई शुद्ध पार्ने प्रभावशाली दिव्य माध्यम हो। जति जति कृष्ण-कीर्तिको

श्रवण गर्ने कार्य बढ्दै जान्छ त्यति त्यति मानिस प्रबुद्ध हुँदै जान्छ र आफूलाई भगवान् श्रीकृष्णदेखि टाढा राख्ने प्रत्येक वस्तुप्रति उसको अनासक्ति पनि बढ्दै जान्छ। जुन कर्महरू भगवान् श्रीकृष्णप्रति समर्पित छैनन् त्यस्ता कर्म र वस्तुहरूप्रति विरक्ति जनाउनाले मानिस सजिलै वैराग्यवान् हुन सक्दछ।

वैराग्य भनेको मनलाई पदार्थबाट हटाएर आत्मातिर प्रवृत्त गराउनु हो। भगवान् श्रीकृष्णका कार्यमा मन लगाउनुभन्दा निर्वैयक्तिक आध्यात्मिक वैराग्य प्राप्त गर्नु अत्यन्त कठिन हुन्छ। भगवान् श्रीकृष्णका बारेमा श्रवण गर्नाले मानिस स्वतः परमात्माप्रति आकर्षित हुँदै जान्छ। यो विधि व्यावहारिक छ। यो आकर्षणलाई परेशानुभव अर्थात् आध्यात्मिक सन्तुष्टि भनिन्छ। यो भोकाएको मानिसले भोजन गर्दा प्रत्येक गाँसमा थप सन्तुष्टि पाएजस्तै हो। भोकाएका समयमा जति खाँदै गयो त्यति नै सन्तुष्टि र शक्ति प्राप्त भएको अनुभव हुन्छ। त्यसै गरी भक्तिपूर्ण सेवाद्वारा मन भौतिक पदार्थबाट विरक्त हुने हुँदा मानिसले दिव्य सन्तुष्टिको अनुभव गर्दछ। यो पनि ठीक र कुशल उपचार तथा सुपथ्य आहारद्वारा रोग निको पार्नुजस्तै हो। अतएव भगवान् श्रीकृष्णको दिव्य लीलाहरूको श्रवण गर्नु नै पागल मनको कुशल उपचार हो र भगवान् श्रीकृष्णलाई अर्पण गरेका प्रसाद ग्रहण गर्नु नै आत्तिएका रोगीका निमित्त उपयुक्त पथ्य हो। कृष्णभावनामृतको उपचार विधि यही हो।

**असंयतात्मना योगो दुष्प्राप इति मे मतिः ।**
**वश्यात्मना तु यतता शक्योऽवाप्तुमुपायतः ॥ ३६ ॥**

**असंयत** — उच्छृङ्खल; **आत्मना** — मनद्वारा; **योगः** — आत्मसाक्षात्कार; **दुष्प्राय** — पाउन कठिन; **इति** — यसरी; **मे** — मेरो; **मति** — मत वा विचार; **वश्य** — नियन्त्रित; **आत्मना** — मनद्वारा; **तु** — तर; **यतता** — प्रयत्न गर्दै; **शक्यः** — व्यावहारिक; **अवाप्तुम्** — प्राप्त गर्न; **उपायतः** — उपयुक्त साधनद्वारा।

**जसको मन अनियन्त्रित छ, उसका लागि आत्मसाक्षात्कार भनेको कठिन कार्य हुन्छ तर जसको मन संयमित छ र जो प्रयत्नशील पनि छ उसको सफलता निश्चित छ। यो मेरो अभिमत हो।**

**तात्पर्य :** भगवान् घोषणा गर्नु हुन्छ, जो आफ्नो मनलाई भौतिक आसक्तिबाट अलग राख्नका लागि समुचित प्रयत्न गर्दैन त्यसलाई आत्मसाक्षात्कार गर्ने कार्यमा सफलता पाउन अत्यन्त कठिन हुन सक्दछ। भौतिक भोगमा व्यस्त रहेर योगाभ्यास गर्नखोज्नु भनेको आगोमा पानी खन्याएर त्यसलाई प्रज्ज्वलित पार्नखोज्नु जस्तै हो। मन नियन्त्रणमा नराखी योगाभ्यास गर्नु समयको अपव्यय मात्र हो। योगको यस्तो प्रस्तुति भौतिक दृष्टिमा लाभदायक देखिए

पनि आत्मसाक्षात्कारका सम्बन्धमा त्यो महत्त्वहीन प्रमाणित हुन्छ। तसर्थ यो मनलाई निरन्तर भगवान्को दिव्य प्रेमाभक्तिमा संलग्न गराएर मात्र वशमा पार्नु पर्दछ। कृष्णभावनामृतमा नलागेसम्म मनलाई दृढतापूर्वक नियन्त्रण गर्न सकिँदैन। कृष्णभावनाभावित व्यक्तिले अरू छुट्टै केही कार्य नगरी सजिलैसँग योगाभ्यासको फल प्राप्त गर्न सक्दछ तर योगाभ्यास गर्ने व्यक्तिले अन्त्यमा कृष्णभावनाभावित नभई सफलता प्राप्त गर्न सक्दैन।

अर्जुन उवाच

**अयतिः श्रद्धयोपेतो योगाच्चलितमानसः ।**
**अप्राप्य योगसंसिद्धिं कां गतिं कृष्ण गच्छति ॥ ३७ ॥**

**अर्जुन उवाच** — अर्जुनले भने; **अयतिः** — असफल योगी; **श्रद्धया** — श्रद्धापूर्वक; **उपेतः** — लागेको; **योगात्** — योग साधनाबाट; **चलित** — विचलित; **मानसः** — मन भएको; **अप्राप्य** — प्राप्त गर्न असफल; **योग-संसिद्धिम्** — योगको सर्वोच्च सिद्धिलाई; **काम्** — कुन; **गतिम्** — लक्ष्यमा; **कृष्ण** — हे कृष्ण!; **गच्छति** — प्राप्त गर्दछ।

**अर्जुनले भने — हे कृष्ण! जो प्रारम्भमा श्रद्धापूर्वक आत्मसाक्षात्कारको विधि ग्रहण गर्दछ तर अन्त्यमा भौतिक प्रभावले गर्दा विचलित भएर योग सिद्धिबाट वञ्चित हुन्छ, त्यस्तो असफल योगीको कस्तो गति हुन्छ ?**

**तात्पर्य :** *भगवद्गीतामा* आत्मसाक्षात्कार वा योगमार्गको वर्णन गरिएको छ। आत्मसाक्षात्कारको आधारभूत सिद्धान्त भनेको जीवात्मा भौतिक शरीर मात्र होइन, यो त शरीरभन्दा भिन्न वस्तु हो र यसको सुख शाश्वत जीवनमा छ, परमआनन्दमा छ र परमज्ञानमा छ भन्ने बुझ्नु हो। आत्मा शरीर तथा मनभन्दा परको दिव्य विषय हो। आत्मसाक्षात्कारको खोज ज्ञानमार्गको विकासद्वारा, अष्टाङ्गयोग पद्धतिद्वारा वा भक्तियोगको अभ्यासद्वारा हुन्छ। यी प्रत्येक प्रक्रियाहरूमा जीवले आफ्नो स्वाभाविक स्थिति, भगवान्सँगको आफ्नो सम्बन्ध र त्यो तोडिएको सम्बन्धलाई पुनर्स्थापित गर्न सकिने क्रियाकलापको अनुभूति गर्नु पर्दछ अनि मात्र कृष्णभावनाको परिपूर्ण अवस्थालाई प्राप्त गर्न सकिन्छ। उक्त तीनवटा प्रक्रियामध्ये कुनै एउटा विधिको मात्र पनि अनुसरण गर्ने मानिस ढिलो चाँडो आफ्नो लक्ष्यमा अवश्य पुग्न सक्दछ। गीताको दोस्रो अध्यायमा भगवान्ले जोड दिँदै भन्नुभयो — यो दिव्य मार्गमा थोरै प्रयत्न गरेर मोक्षको महान् आशा गर्न सकिन्छ। यी तीनवटामध्ये भक्तियोग नै यस युगका लागि विशेष रूपले उपयुक्त हुन्छ। किनभने प्रत्यक्ष ईश्वरको अनुभूतिको

श्रेष्ठतम उपाय नै यही हो। तसर्थ आफू पूर्ण विश्वस्त हुनका लागि भगवान् श्रीकृष्णको उक्तिलाई पुनः दोहोऱ्याइदिन श्रीकृष्णसँग अर्जुनले अनुरोध गरेका हुन्। जतिसुकै निष्ठापूर्वक आत्मसाक्षात्कारमा लागे पनि यो युगमा ज्ञानको विकास गर्ने विधि र अष्टाङ्ग योगाभ्यासको विधि सामान्यतया अत्यन्त कठिन विषय हुन्। यसमा निरन्तर प्रयासरत हुँदाहुँदै पनि विभिन्न कारणले गर्दा मानिस असफल हुन्छ। पहिलो कारण आजको मानिसले कुनै पनि नियमलाई गम्भीरतापूर्वक अनुसरण नगर्नु हो। दिव्य मार्गको अनुसरण गर्नु भनेको धेरै-थोरै मायाविरुद्ध चुनौती दिनु बराबर हो। फलस्वरूप मायाले पनि जब मानिसलाई आफ्नो बन्धनबाट मुक्त हुनलागेको देख्दछिन्, उनले प्रत्येक प्रयासले अभ्यासकर्तालाई विभिन्न प्रलोभन दिएर पराजित गर्न खोज्दछिन्। बद्ध जीव यसै त प्रकृतिका गुणहरूबाट प्रभावित भएको हुन्छ झन् दिव्य अनुशासनको पालन गर्ने कार्यमा संलग्न भएको समयमा त मायाबाट मोहित हुने सम्भावना बारम्बार आइरहन्छ। यसैलाई **योगाच्चलित मानस** अर्थात् दिव्य मार्गबाट विचलित हुनु भनिन्छ। अर्जुन पनि यही आत्मसाक्षात्कारको मार्गबाट विचलित हुनेहरूको गति कस्तो होला भन्ने जान्न चाहन्छन्।

**कच्चिन्नोभयविभ्रष्टश्छिन्नाभ्रमिव नश्यति ।**
**अप्रतिष्ठो महाबाहो विमूढो ब्रह्मणः पथि ॥ ३८ ॥**

**कच्चित्** — कतै; **न** — होइन; **उभय** — दुवै; **विभ्रष्टः** — विचलित; **छिन्न** — छिन्नभिन्न; **अभ्रम** — बादल; **इव** — जस्तै; **नश्यति** — नाश हुन्छ; **अप्रतिष्ठः** — बिनाकुनै स्थिति; **महाबाहो** — हे महाबाहु कृष्ण; **विमूढः** — मोहग्रस्त; **ब्रह्मणः** — ब्रह्मप्राप्तिको; **पथि** — बाटोमा।

**हे महाबाहु कृष्ण! ब्रह्मप्राप्तिको मार्गबाट च्यूत भएको व्यक्ति आध्यात्मिक तथा भौतिक दुवै सफलताबाट वञ्चित हुने हो कि? ऊ कतै छिन्नभिन्न भएको बादलजस्तै नाश हुने त होइन? के उसलाई कुनै लोकमा ठाउँ मिल्नसक्ला?**

**तात्पर्य :** प्रगतिका दुईवटा मार्गहरू छन्। भौतिकवादीहरू अध्यात्ममा रुचि राख्दैनन्। तसर्थ तिनीहरू आर्थिक विकासद्वारा भौतिक समुन्नति चाहन्छन् वा समुचित पुण्यकर्मद्वारा उच्चतम लोकमा पुग्न चाहन्छन्। यदि कसैले अध्यात्मको बाटो रोजे उसले सबै प्रकारका भौतिक क्रियाकलापहरू र तथाकथित भौतिक सुख-सुविधाहरू परित्याग गर्नु पर्दछ। यदि कुनै महत्त्वाकाङ्क्षी ब्रह्मवादी वा अध्यात्मवादी असफल भएमा ऊ प्रत्यक्ष रूपले दुवै लाभबाट वञ्चित हुन्छ। अर्को शब्दमा भन्दा, उसले न भौतिक सुख उपभोग गर्न सक्दछ न त

आध्यात्मिक सफलता नै प्राप्त गर्दछ । उसको कुनै स्थान हुँदैन, ऊ टुक्रिएको बादलजस्तै हुन्छ। कहिलेकाहीँ एउटा सानो बादलबाट एक टुक्रा बादल अलग भएर अर्को ठुलो बादलसँग मिसिन जान्छ, यदि केहीगरी त्यो टुक्रो बादल ठुलो बादलमा मिसिन नसके त्यसलाई हावाले उडाएर विशाल आकाशमा लोप गराइदिन्छ। **'ब्रह्मणः पथि'** भनेको ब्रह्मसाक्षात्कारको त्यो बाटो हो जसमा आफूलाई परमेश्वरको अभिन्न अंशको रूपमा अनुभव गर्नासाथ परमेश्वर, ब्रह्म, परमात्मा तथा भगवान्‌का रूपमा प्रकट हुनुहुन्छ। भगवान् श्रीकृष्ण नै परमसत्यको पूर्णतम् अभिव्यक्ति हुनुहुन्छ तसर्थ जो यस्ता परमपुरुषको शरणमा जान्छ त्यो मात्र सफल योगी हो। ब्रह्म तथा परमात्मा-साक्षात्कारको माध्यमबाट जीवनको यस्तो लक्ष्यमा पुग्न धेरै जन्म लाग्न सक्दछ। **बहूनां जन्मनामन्ते** भनेको यही हो। अतः दिव्य साक्षात्कारको सर्वश्रेष्ठ मार्ग भनेको भक्तियोग वा कृष्णभावनामृतको प्रत्यक्ष विधि हो।

**एतन्मे संशयं कृष्ण छेत्तुमर्हस्यशेषतः ।**
**त्वदन्यः संशयस्यास्य छेत्ता न ह्युपपद्यते ॥ ३९ ॥**

**एतत्** — यो; **मे** — मेरो; **संशयम्** — शंका; **कृष्ण** — हे कृष्ण !; **छेत्तुम्** — हटाउनका लागि; **अर्हसि** — योग्य हुनुहुन्छ (अनुरोध छ); **अशेषतः** — पूर्णतया; **त्वत्** — तपाईँबाहेक; **अन्यः** — अर्को; **संशयस्य** — सन्देहको; **अस्य** — यो; **छेत्ता** — हटाउने; **न** — छैन; **हि** — निश्चय नै; **उपपद्यते** — पाउन सम्भव।

**हे कृष्ण! हजुरबाहेक मेरो यो शंका हटाउनसक्ने अरू कोही छैन, तसर्थ मेरो शंकालाई पूर्णरूपले हटाइदिनुहुन हजुरसँग अनुरोध गर्दछु।**

**तात्पर्य :** भगवान् श्रीकृष्ण स्वयम् भूत, वर्तमान तथा भविष्यका ज्ञाता हुनुहुन्छ। गीताको प्रारम्भमा भगवान्‌ले भन्नुभएको छ— सबै जीव व्यष्टिरूपमा पहिले भूत कालमा पनि थिए, अहिले वर्तमानमा पनि विद्यमान छन् र भविष्यमा भवबन्धनबाट मुक्त भएपछि पनि व्यष्टिरूपमा तिनीहरूको पृथक् अस्तित्व रहिरहने छ। यसरी व्यष्टि जीवनको भविष्यबारे पनि भगवान्‌ले पहिल्यै प्रष्ट पारिदिनुभएको छ। यहाँ अर्जुनले योगसाधनामा असफल भएका योगीको भविष्य के हुन्छ भनेर जान्नचाहेका छन्। कोही पनि भगवान् श्रीकृष्णको बराबर हुन नै सक्दैन न त उहाँभन्दा ठुलो नै कोही छ। निश्चय नै तथाकथित ठुला ठुला ऋषिमुनि, दार्शनिकहरू पनि प्रकृतिका कृपाका अधीनमा रहने हुँदा तिनीहरू भगवान् श्रीकृष्णका बराबरीमा पुग्न सक्दैनन्। अतः शंकाको भरपर्दो र अन्तिम निर्णय त भगवान् श्रीकृष्णले नै दिन सक्नु हुन्छ। किनभने उहाँ नै भूत, वर्तमान र भविष्यका पूर्ण ज्ञाता हुनुहुन्छ तर उहाँलाई कसैले जान्न

सक्दैन। अतः कुन वस्तु के हो भन्ने कुरा या त भगवान् श्रीकृष्णले जान्नुहुन्छ या कृष्णभावनाभावित भक्तले जान्न सक्दछ।

श्रीभगवानुवाच
**पार्थ नैवेह नामुत्र विनाशस्तस्य विद्यते ।**
**न हि कल्याणकृत्कश्चिद्दुर्गतिं तात गच्छति ॥ ४० ॥**

**श्रीभगवानुवाच** — भगवान्ले भन्नुभयो; **पार्थ** — हे पृथापुत्र; **न एव** — यस्तो होइन; **इह** — यो संसारमा; **न** — न त; **अमुत्र** — अर्को जन्ममा; **विनाशः** — विनाश; **तस्य** — उसको; **विद्यते** — छ; **न** — न त; **हि** — निश्चय नै; **कल्याणकृत** — शुभकार्यमा लागेको; **कश्चित्** — कोही पनि; **दुर्गतिम्** — पतन भएर; **तात** — हे मेरा मित्र; **गच्छति** — जान्छ।

**भगवान्ले भन्नुभयो — हे पृथापुत्र! कल्याण कार्यमा लागिरहने योगीको विनाश यो लोकमा पनि हुँदैन र परलोकमा पनि हुँदैन। हे मित्र! असल काम गर्नेलाई खराब तत्त्वबाट कहिल्यै पराजित हुनु पर्दैन।**

**तात्पर्य :** *श्रीमद्भागवत्* (१.५.१७) मा श्रीनारदमुनिले व्यासदेवलाई यसरी उपदेश दिनु हुन्छ—

*त्यक्त्वा स्वधर्मं चरणाम्बुजं हरेर्भजन्नपक्कोऽथ पतेत्ततो यदि ।*
*यत्र क्व वाभद्रमभूदमुष्य किं को वार्थ आप्ताऽभजतां स्वधर्मतः ॥*

"यदि कोही सम्पूर्ण भौतिक अभिलाषा त्यागेर पूर्णतया भगवान्‌को शरणमा परेको छ त्यसको कुनै क्षति हुने र पतन हुदै। अर्कातिर अभक्तहरू आँखा चिम्लेर आफ्नो व्यवसायमा लाग्दछन् तैपनि उनीहरूले केही प्राप्त गर्न सक्दैनन्।" भौतिक लाभका लागि विभिन्न शास्त्रीय तथा लौकिक कार्यहरू छन्। योगीले आफ्नो जीवनको आध्यात्मिक उन्नति एवं कृष्णभावनामृतको प्राप्तिका लागि सम्पूर्ण भौतिक क्रियाकलापहरू परित्याग गर्नु पर्दछ। कसैले तर्क गर्न सक्दछ, यदि कृष्णभावना परिपूर्ण भएमा सर्वोच्च सिद्धि प्राप्त होला तर यदि त्यो पूर्ण भएन र सिद्धि प्राप्त गर्न नसके के होला? के त्यस समय भौतिक र आध्यात्मिक दुवै किसिमको क्षति व्यहोर्नु पर्दछ? शास्त्रमा पनि निर्धारित स्वधर्मको आचरण नगर्नेले पापको फल भोग गर्नु नै पर्दछ भन्ने चेतावनी दिइएको छ। तसर्थ जसले राम्रोसँग यस्तो दिव्य कर्म सम्पन्न गर्दैन त्यसले पनि त्यसको प्रतिफल भोग्नै पर्दछ। *श्रीमद्भागवत्*ले असफल भएको योगीले पनि चिन्ता लिनु नपर्ने आश्वासन दिएको छ। मानिसले निर्धारित स्वधर्मको आचरण नगरेको फल भोग्न पर्दछ तापनि उसलाई घाटा हुँदैन,

किनभने यो पवित्र कृष्णभावना कहिल्यै विस्मृत हुने वस्तु होइन। जो निरन्तर यसमा लागिरहन्छ उसले अर्को जन्ममा निम्न योनिमा जन्म लिनुपरे पनि उसलाई पहिलेको भक्तिमय संस्कारले काम गरिरहन्छ। अर्कातिर जो केवल नियत कर्ममा मात्र दृढतापूर्वक लागेको छ तर उसमा कृष्णभावनामृतको अभ्यासमा शून्य भए उसलाई शुभ फल प्राप्त हुन पर्दछ भन्ने कुनै निश्चित हुँदैन।

यो श्लोकको तात्पर्य यसरी बुझ्न सकिन्छ— मानवतालाई दुई भागमा हेर्न सकिन्छ, नियमित र अनियमित। जो अर्को जन्म तथा आत्मिक मुक्तिको ज्ञानबिना केवल पाशविक इन्द्रियतृप्तिमा मात्र लागिरहन्छन् तिनीहरू अनियमित वर्गमा पर्दछन्। अनि जो शास्त्रमा वर्णन गरिएअनुसारका कर्तव्य र तिनका सिद्धान्तहरूको पालन गर्दछन् तिनीहरू नियमित वर्गभित्र पर्दछन्। अनियमित वर्गका सुसभ्य तथा असभ्य शिक्षित तथा अशिक्षित, बलिया तथा निर्बलियाहरू पाशविक प्रवृत्तिले पूर्ण हुन्छन्। तिनीहरूको कार्य कहिल्यै पनि पवित्र वा कल्याणधर्मी हुँदैन, किनभने तिनीहरू पशुजस्तै आहार, निद्रा, भय तथा मैथुनको भोगमा निरन्तर डुबेर निरन्तर दुःखमय भौतिक जीवन बिताउँछन्। अर्कातिर जो शास्त्रीय आदेशअनुसार संयमित जीवन बिताउँदछन् तिनीहरू क्रमशः कृष्णभावनामृततर्फ उन्मुख हुन्छन् र तिनीहरूले नै निश्चित रूपमा आफ्नो जीवनलाई उन्नत बनाउँदछन्। पवित्र वा कल्याणमार्गका अनुयायीहरूलाई पुनः तीन वर्गमा विभाजित गर्न सकिन्छ।

१. भौतिक सम्पन्नताको उपभोग गर्ने शास्त्रीय विधि-विधानका अनुयायी,
२. यो भौतिक संसारबाट परममुक्ति पाउन प्रयत्न गर्नेहरू र
३. कृष्णभावनामृतका भक्तहरू।

भौतिक सुख-सुविधाका लागि शास्त्रीय विधिनियमहरूको अनुसरण गर्ने पहिलो वर्गका अनुयायीहरूलाई फेरि दुई श्रेणीमा विभाजन गर्न सकिन्छ— फलको इच्छा राख्ने सकाम कर्मी र इन्द्रियतृप्तिको इच्छा नराख्ने (निष्काम कर्मी)। इन्द्रियतृप्तिका लागि कर्मफलको इच्छा गर्नेहरू जीवनको उच्चतम तहसम्म चढ्न सक्दछन् र स्वर्गलोकसम्म पनि जान सक्दछन् तर यस भौतिक संसारबाट मुक्त नभएको हुँदा तिनीहरूले वास्तविक कल्याणमार्गको अनुसरण गरिरहेका हुँदैनन्। ती मात्रै पवित्र वा शुभ कर्म हुन् जसबाट मुक्ति प्राप्त हुन सक्दछ। जसले मानिसलाई शारीरिक अवधारणाको बुद्धिबाट मुक्ति दिएर परम आत्मसाक्षात्कार वा मोक्षको बाटोमा लगाउँदैनन् त्यस्ता कुनै पनि कार्य कल्याणकारी हुन सक्दैनन्। कृष्णभावनाभावित कर्महरू मात्रै शुभ कर्म हुन्। जसले कृष्णभावनामृतका मार्गमा लागेर प्रगति गर्ने उद्देश्य राख्दछ र स्वेच्छाले

शारीरिक सुखसुविधा परित्याग गर्दछ, त्यसैलाई ठुलो तपस्वी वा पूर्णयोगी भन्न सकिन्छ। अष्टाङ्ग योगपद्धति पनि कृष्णभावनामृतको चरम अनुभूतितर्फ नै निर्देशित छ, त्यसैले यस्तो पद्धतिको अभ्यास पनि कल्याणकारी हो र शुभ हो। यो पद्धतिमा उन्नति गर्न यथाशक्य प्रयास गरिरहने व्यक्तिले आफ्नो पतन हुन्छ कि भनेर डराउनु पर्दैन।

**प्राप्य पुण्यकृतां लोकानुषित्वा शाश्वतीः समाः ।**
**शुचीनां श्रीमतां गेहे योगभ्रष्टोऽभिजायत॥ ४१॥**

**प्राप्य** — प्राप्त गरेर; **पुण्यकृताम्** — पुण्यकर्म गर्नेहरू; **लोकान्** — लोकहरूमा; **उषित्वा** — निवास गरेर; **शाश्वतीः** — धेरै; **समाः** — वर्षहरू; **शुचीनाम्** — पवित्र आत्माहरूका; **श्रीमताम्** — सम्पन्न वर्गका; **गेहे** — घरमा; **योगभ्रष्टः** — आत्मसाक्षात्कारको पथबाट च्युत भएका; **अभिजायते** — जन्म लिन्छ।

**असफल योगी पवित्र आत्माहरूको लोकमा धेरै वर्षसम्म पुण्य भोग गरेपछि, सदाचारी पुरुषका परिवारमा वा धनवान्‌का कुलमा जन्म लिन्छ।**

**तात्पर्य :** असफल योगीका दुई श्रेणी छन् — एक किसिमका जो अलिकति उन्नति हुनेबित्तिकै भ्रष्ट हुन्छन्। अर्का किसिमका जो दीर्घकालसम्म योगाभ्यास गरेपछि भ्रष्ट हुन्छन्। जुन योगी अल्पकालिक अभ्यासपछि भ्रष्ट हुन्छ त्यो स्वर्गलोकमा पुग्दछ, जहाँ केवल पुण्यात्माहरू मात्र प्रवेश गर्न पाउँदछन्। त्यहाँ दीर्घकालसम्म बसेपछि उसलाई पुनः यही लोकमा पठाइन्छ। यसपछि ऊ कुनै सदाचारी ब्राह्मणका घरमा वा वैष्णव कुलमा वा धनवान् वैश्यका कुलमा जन्म लिन्छ।

योगाभ्यासको वास्तविक उद्देश्य भन्नु नै कृष्णभावनामृतको सर्वोच्च सिद्धि प्राप्त गर्नु हो, जसको व्याख्या यसै अध्यायको अन्तिम श्लोकमा गरिएको छ। तर, जो नियमपालनमा त्यति सतर्क हुँदैनन् र भौतिक प्रलोभनमा फँस्दछन् तिनीहरूलाई पनि भगवान्‌को कृपाद्वारा प्रचुर भौतिक सम्पत्तिको पूरा उपभोग गर्ने अनुमति प्राप्त हुन्छ। यसपछि तिनीहरूलाई सदाचारी कुल वा धनी परिवारमा जीवन बिताउने सुअवसर प्रदान गरिन्छ। यस्ता परिवारमा जन्म लिनेहरू सुविधायुक्त जीवन बिताउँदै आफूलाई कृष्णभावनामृतको उचाइसम्म पुऱ्याउन प्रयास गर्दछन्।

**अथवा योगिनामेव कुले भवति धीमताम् ।**
**एतद्धि दुर्लभतरं लोके जन्म यदीदृशम् ॥ ४२॥**

**अथवा** — या; **योगिनाम्** — विद्वान् योगीहरूका; **एव** — निश्चय नै; **कुले** — परिवारमा; **भवति** — जन्म लिन्छ; **धीमताम्** — परमबुद्धिमान्को; **एतत्** — यो; **हि** — निश्चय नै; **दुर्लभतरम्** — अत्यन्त दुर्लभ; **लोके** — यो संसारमा; **जन्म** — जन्म; **यत्** — जो; **ईदृशम्** — यस प्रकारका।

**अथवा त्यो (योगको लामो अभ्यासपछि असफल भएको) व्यक्ति त्यस्तो योगीको कुलमा जन्म लिन्छ जो अत्यन्त बुद्धिमान् हुन्छ। निश्चय पनि यस्तो जन्म संसारमा दुर्लभ छ।**

**तात्पर्य :** यहाँ त्यस्ता योगी वा सुबुद्धिमान् मानिसका कुलमा जन्म लिनुलाई प्रशंसनीय मानिएको छ। किनभने यस्तो कुलमा जन्म लिने बालकलाई सानैदेखि नै आध्यात्मिक वातावरण प्राप्त हुन्छ। विशेष गरी आचार्य तथा गोस्वामीहरूका कुलमा यस्तो वातावरण विद्यमान हुन्छ। यस्ता कुलमा अत्यन्त बुद्धिमान् र भक्त सदस्य रहन्छन्। अनि परम्परा तथा प्रशिक्षणले गर्दा तिनीहरू श्रद्धावान् पनि हुन्छन्। यसरी तिनीहरू गुरु हुनयोग्य बन्दछन्।

भारतमा यस्ता धेरै आचार्यकुल छन् तर आजभोलि पर्याप्त विद्या एवं प्रशिक्षणको अभावका कारणले ती पतनशील भएका छन्। भगवान्को कृपाले गर्दा अहिले पनि यस्ता परिवार छन् जसमा पुस्तौँपुस्ता योगीहरू प्रकट हुँदै-आएका छन्। यस्तो परिवारमा जन्म लिनपाउनु वास्तवमा अत्यन्त सौभाग्यको कुरा हो। सौभाग्यवश हाम्रा गुरुदेव ॐ विष्णुपाद श्री श्रीमद्भक्तिसिद्धान्त सरस्वती गोस्वामी महाराजलाई र स्वयम् मलाई पनि यस्तो परिवारमा जन्म लिने अवसर प्राप्त भयो। भगवान्का कृपाले हामी दुवैलाई बाल्यावस्थादेखि भगवद्भक्तिमा लाग्ने प्रशिक्षण दिइएको थियो र पछि दिव्य व्यवस्थाको निर्देशनअनुसार उहाँसँग मेरो भेट भयो।

**तत्र तं बुद्धिसंयोगं लभते पौर्वदेहिकम् ।**
**यतते च ततो भूयः संसिद्धौ कुरुनन्दन ॥ ४३ ॥**

**तत्र** — त्यहाँ; **तम्** — त्यसलाई; **बुद्धिसंयोगम्** — चेतनाको जागृति; **लभते** — प्राप्त हुन्छ; **पौर्वदेहिकम्** — पूर्व देहबाट; **यतते** — प्रयास गर्दछ; **च** — पनि; **ततः** — त्यसपछि; **भूयः** — फेरि; **संसिद्धौ** — सिद्धिका लागि; **कुरुनन्दन** — हे कुरुपुत्र।

**हे कुरुनन्दन! यस्तो जन्म पाएपछि उसले आफ्नो पूर्वजन्मको दैवी चेतनालाई पुनः प्राप्त गर्दछन्। अनि उसले पूर्ण सफलता प्राप्त गर्ने उद्देश्य लिएर अघि बढ्ने प्रयास गर्दछन्।**

**तात्पर्य :** राजा भरतलाई तेस्रो जन्ममा उत्तम ब्राह्मणकुल प्राप्त भयो। पूर्वजन्मको दिव्य चेतना पुनः प्राप्त गर्न उत्तम कुल प्राप्त हुन्छ भन्ने यो एउटा उदाहरण हो। भरत विश्वभरिका सम्राट थिए र उनको समयदेखि नै यो लोक देवताहरूका बीचमा भारतवर्षका नामले प्रसिद्ध हुँदैआएको छ। पहिले यो इलावृत वर्षका नामले चिनिन्थ्यो। भरतले कलिलै उमेरमा आध्यात्मिक सिद्धिका लागि संन्यास ग्रहण गरेका थिए तर उनी सफल हुनसकेनन्। अर्को जन्ममा उनले उत्तम ब्राह्मणकुलमा जन्म लिए र उनको नाम जडभरत भयो, किनभने उनी एकान्तवास गर्दथे र कसैसँग पनि बोल्दैनथे। पछि राजा रहुगणले यिनलाई महान् योगीका रूपमा चिन्नसके। उनको जीवनबाट योगअभ्यासको दिव्य प्रयास कहिल्यै पनि व्यर्थ हुन्छन् भन्ने कुरा प्रष्ट हुन्छ। योगीलाई कृष्णभावनामृतमा पूर्ण सिद्धि प्राप्त गर्ने सुअवसर पनि भगवत्कृपाबाट बारम्बार प्राप्त हुन्छ।

**पूर्वाभ्यासेन तेनैव ह्रियते ह्यवशोऽपि सः ।**
**जिज्ञासुरपि योगस्य शब्दब्रह्मातिवर्तते ॥ ४४ ॥**

**पूर्व** — पहिलेको; **अभ्यासेन** — अभ्यासद्वारा; **तेन** — त्यसैबाट; **एव** — निश्चय नै; **ह्रियते** — आकर्षित हुन्छ; **हि** — निश्चय नै; **अवशः** — स्वतः; **अपि** — पनि; **सः** — त्यो; **जिज्ञासुः** — जिज्ञासु; **अपि** — पनि; **योगस्य** — योगका विषयमा; **शब्द ब्रह्म** — शास्त्रको अनुष्ठान; **अतिवर्तते** — माथि पुग्दछ।

**आफ्नो पूर्वजन्मको दैवी चेतनाका गुणले गर्दा नचाहेर पनि ऊ स्वतः योगमार्गतिर आकर्षित हुन्छ। यस्तो जिज्ञासु योगी सधैँ शास्त्रीय सिद्धान्तभन्दा माथि हुन्छ।**

**तात्पर्य :** उन्नत योगीजन शास्त्रीय अनुष्ठानहरूप्रति त्यति आकर्षित हुँदैनन्। बरु यौगिक प्रक्रियाहरूप्रति स्वतः आकर्षित हुन्छन् जसद्वारा तिनीहरू पूर्ण कृष्णभावनामा आरूढ हुन्छन्। *श्रीमद्भागवत्* (३.३३.७)मा उत्तम योगीहरूले वैदिक कार्यहरूप्रति राख्ने दृष्टिकोणको यसरी वर्णन गरिएको छ—

*अहो बत श्वपचोऽतो गरीयान् यज्जिह्वाग्रे वर्तते नाम तुभ्यम्।*
*तेपुस्तपस्ते जुहुवुः सस्नुरार्या ब्रह्मानूचुर्नाम गृणन्ति ये ते ॥*

"हे भगवन्! जसले हजुरका पावन नामहरूको जप गर्दछन् तिनीहरू चाण्डालका परिवारमा जन्मिएका भए पनि आध्यात्मिक जीवनमा अत्यधिक समुन्नत हुन्छन्। यस्ता जपगर्नेहरू निःसन्देह सबै प्रकारका तप र यज्ञहरू

सम्पन्न गरिसकेका मानिन्छन्, सम्पूर्ण पवित्र तीर्थहरूमा स्नान गरिसकेका मानिन्छन् र समग्र शास्त्रको अध्ययन पनि गरिसकेका मानिन्छन्।"

यसैको सुप्रसिद्ध उदाहरण भगवान् चैतन्यमहाप्रभुले प्रस्तुत गर्नुभयो। उहाँले नै ठाकुर हरिदासलाई आफ्नो परमप्रिय शिष्यका रूपमा स्वीकार गर्नुभयो। हुनत हरिदासको जन्म एक मुसलमानको परिवारमा भएको थियो तर भगवान् चैतन्यले तिनलाई नामाचार्यको पदवी प्रदान गर्नुभयो। किनभने तिनले प्रतिदिन तीन लाख पटकसम्म भगवान्को पवित्र नाम **हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे, हरे राम हरे राम राम राम हरे हरे** जप गर्दथे। निरन्तर भगवान्को पवित्र नाम जप गरिरहने हुँदा अवश्य पनि तिनले आफ्नो पूर्वजन्ममा शब्दब्रह्म नामको वेदवर्णित कार्य पूरा गरिसकेको हुनु पर्दछ भन्न सकिन्छ, किनभने कसैले पनि पवित्र नबनेसम्म कृष्णभावनामृतका नियमहरूलाई ग्रहण गर्न सक्दैन वा भगवान्को पवित्र नाम 'हरेकृष्ण' को जप गर्ने कार्यमा संलग्न हुन सक्दैन।

**प्रयत्नाद्यतमानस्तु योगी संशुद्धकिल्बिषः ।**
**अनेकजन्मसंसिद्धस्ततो याति परां गतिम् ॥ ४५ ॥**

**प्रयत्नात्** — कठिन अभ्यासले; **यतमानः** — प्रयास गर्दै; **तु** — तथा; **योगी** — यस्तो योगी; **संशुद्ध** — शुद्ध भएर; **किल्बिषः** — जसका सबै पापहरू; **अनेक** — अनेकौं; **जन्म** — जन्मपछि; **संसिद्धः** — सिद्धि प्राप्त गरेर; **ततः** — त्यसपछि; **याति** — प्राप्त गर्दछ; **पराम्** — सर्वोच्च; **गतिम्** — गन्तव्य वा लक्ष्य।

**सम्पूर्ण संकल्पहरूबाट शुद्ध भएर उत्तरोत्तर प्रगति गर्ने कार्यमा गम्भीरतापूर्वक लागेको योगी धेरै धेरै जन्मको अभ्यासपछि सिद्धि प्राप्त गरेर परमलक्ष्यमा पुग्न समर्थ हुन्छ।**

**तात्पर्य :** विशेष गरी सदाचारी, धनवान् या पवित्र कुलमा उत्पन्न व्यक्ति योगाभ्यासको अनुकूल वातावरण पाएमा सचेत हुन्छ। अनि उसले दृढ सङ्कल्प लिएर आफ्नो अधूरो कार्य पूरा गर्न थाल्दछ। यसरी उसले आफ्ना सम्पूर्ण भौतिक संकल्पलाई पनि पूर्णतः सफा गर्दछ। सम्पूर्ण संक्रमणबाट मुक्त भएपछि उसलाई अन्त्यमा कृष्णभावनारूपी परमसिद्धि प्राप्त हुन्छ। कृष्णभावनामृत नै सवै संक्रमणबाट मुक्त हुने पूर्ण अवस्था हो। *भगवद्गीता* (७.२८) मा यसको पुष्टि भएको छ—

*येषां त्वन्तगतं पापं जनानां पुण्यकर्मणाम् ।*
*ते द्वन्द्वमोहनिर्मुक्ता भजन्ते मां दृढव्रताः ॥*

"धेरै जन्मसम्म पुण्यकर्म गरेपछि मात्र मानिसले सम्पूर्ण संक्रमण तथा मोहको द्वन्द्वबाट पूर्णतया छुट्कारा पाउँदछ, अनि मात्र ऊ भगवान्‌को दिव्य प्रेमाभक्तिमा संलग्न हुन्छ।"

**तपस्विभ्योऽधिको योगी ज्ञानिभ्योऽपि मतोऽधिकः ।**
**कर्मिभ्यश्चाधिको योगी तस्माद्योगी भवार्जुन॥ ४६ ॥**

**तपस्विभ्यः** — तपस्वीहरूभन्दा; **अधिकः** — धेरै श्रेष्ठ; **योगी** — योगी; **ज्ञानिभ्यः** — ज्ञानीहरूभन्दा; **अपि** — पनि; **मतः** — मानिन्छ; **अधिकः** — ठुलो; **कर्मिभ्यः** — सकाम कर्मीभन्दा; **च** — पनि; **अधिकः** — ठुलो; **योगी** — योगी; **तस्मात्** — त्यसैले; **योगी** — योगी; **भव** — होऊ; **अर्जुन** — हे अर्जुन।

**योगी, तपस्वी एवं ज्ञानीभन्दा पनि ठुलो हुन्छ र सकामकर्मीभन्दा पनि महान् हुन्छ, तसर्थ हे अर्जुन! सबै परिस्थितिमा तिमी योगी बन।**

**तात्पर्य :** हामी योगको नाम लिनासाथ आफ्नो चेतनालाई परमसत्यसँग जोड्ने तत्त्व भन्ने बुझ्दछौँ। विभिन्न साधकहरू आफूले ग्रहण गरेका विशेष विधिअनुसार विभिन्न नामले यस पद्धतिको परिचय दिन्छन्। यस योगपद्धतिमा सकामकर्मको प्रधानता हुँदा यसलाई कर्मयोग भनिन्छ। यसमा चिन्तनको प्रधानता हुँदा यसलाई ज्ञानयोग भनिन्छ र यस योगमा भगवान्‌को भक्तितत्त्व प्रधान हुँदा यसलाई भक्तियोग भनिन्छ। भक्तियोग अर्थात् कृष्णभावनामृत नै सबै योगको परमसिद्धि हो। आगामी श्लोकमा पनि यसको व्याख्या हुनेछ। भगवान्‌ले यहाँ योगको श्रेष्ठतालाई पुष्टि गर्नुभएको छ तर यो भक्तियोगभन्दा पनि श्रेष्ठ हो भन्ने उल्लेख उहाँले गर्नुभएको छैन। भक्तियोग पूर्ण आत्मज्ञान हो, तसर्थ योभन्दा श्रेष्ठ अरू केही छैन। आत्मज्ञानबिनाको तपस्या अपूर्ण हुन्छ। परमेश्वरप्रति समर्पित नभएसम्म ज्ञानयोग पनि अपूर्ण नै हुन्छ र कृष्णभावनामृत बिनाको सकाम कर्म पनि केवल समयको अपव्यय मात्र हो। अतः यहाँ उल्लिखित योगको सर्वाधिक प्रशंसित रूप भनेको भक्तियोग नै हो। यसको अझ स्पष्ट र विस्तृत वर्णन अर्को श्लोकमा गरिएको छ।

**योगिनामपि सर्वेषां मद्गतेनान्तरात्मना ।**
**श्रद्धावान्भजते यो मां स मे युक्ततमो मतः ॥ ४७ ॥**

**योगिनाम्** — योगीहरूमध्ये; **अपि** — पनि; **सर्वेषाम्** — सबै प्रकारका; **मत्गतेन** — मेरा शरणमा परेका; **अन्तःआत्मना** — आफैँभित्र; **श्रद्धावान्** — पूर्ण श्रद्धासहित; **भजते** — दिव्य भक्ति गर्दछ; **यः** — जो; **माम्** — मेरो (भगवान्‌को); **सः** — त्यो; **मे** — मद्वारा; **युक्ततमः** — परमयोगी; **मतः** — मानिन्छ।

**सबै योगीहरूमध्ये पनि जुन योगी अत्यन्त श्रद्धालु छ, जो सधैँ ममा समर्पित छ, जसले आफ्नो अन्तःकरणमा मेरो चिन्तन गरिरहन्छ, जो मेरो दिव्य भक्तिमा संलग्न छ त्यो नै घनिष्ठ रूपले योगमा मसँग संयुक्त हुन्छ र त्यो नै सबैभन्दा श्रेष्ठ हो। यो मेरो विचार हो।**

**तात्पर्य :** यहाँ '**भजते**' शब्द महत्त्वपूर्ण छ। **भजते** शब्द '**भज्**' धातुबाट बनेको हो। जहाँ सेवाको आवश्यकता हुन्छ त्यहाँ यसको प्रयोग गरिन्छ। अङ्ग्रेजी शब्द वर्शिप (पूजा) ले **भज्** धातुको भावलाई व्यक्त गर्न सक्दैन। वर्शिप शब्दले पूजा गर्नु, सम्मान प्रकट गर्नु, गुणवान्‌को आदर गर्नु भन्ने जनाउँछ। तर, प्रेम र श्रद्धायुक्त सेवा त विशेषतः भगवान्‌का निमित्त मात्र प्रयोग हुन्छ। सम्मानित व्यक्ति र देवताको पूजा नगर्नेलाई अशिष्ट भन्न सकिन्छ तर विधिपूर्वक भगवान्‌को सेवा नगर्नेलाई त भर्त्सना नै गर्नु पर्दछ। प्रत्येक जीव भगवान्‌को अंशस्वरूप हुन् तसर्थ प्रत्येक जीवले आ-आफ्ना स्वभावअनुसार भगवान्‌को सेवा गर्नु पर्दछ। भगवत्-सेवा नगर्ने व्यक्ति पतित हुन्छ। *श्रीमद्भागवत्* (११.५.३.) मा यसको पुष्टि यसरी गरिएको छ।

*य एषां पुरुषं साक्षादात्मप्रभवमीश्वरम् ।*
*न भजन्त्यवजानन्ति स्थानाद्भ्रष्टाः पतन्त्यधः ॥*

"सम्पूर्ण जीवात्माका जन्मदाता आदि भगवान्‌को सेवा नगर्ने र आफ्नो कर्तव्य-पालनमा उपेक्षा गर्ने व्यक्ति निश्चित रूपमा आफ्नो मौलिक स्वरूपबाट पतित हुन्छ।"

यस श्लोकमा '**भजन्ति**' शब्द प्रयोग भएको छ। **भजन्ति** शब्दको प्रयोग केवल परमेश्वरका लागि नै गरिन्छ। तर, वर्शिप (पूजा) शब्दको प्रयोग देवताहरू तथा अन्य साधारण जीवका लागि पनि गरिन्छ। यो श्लोकमा प्रयोग भएको *श्रीमद्भागवत्‌को* **अवजानन्ति** शब्द *भगवद्गीतामा* पनि पाइन्छ, जस्तै — **अवजानन्ति मां मूढाः।** केवल मूर्ख एवं धूर्तहरू मात्र भगवान् श्रीकृष्णको उपहास गर्दछन्। यस्ता मूर्खहरूमा भगवद्भक्तिको भाव हुँदैन तैपनि यिनीहरू *भगवद्गीताको* भाष्य लेख्न खोज्दछन्। फलस्वरूप भजन्ति र वर्शिप शब्दबीचको अन्तर छुट्याउन सक्दैनन्।

सम्पूर्ण योगहरूको पराकाष्ठा भक्तियोगमा निहित छ। अरू योगहरू भक्तियोगका विन्दुमा पुग्ने साधन मात्र हुन्। योगको वास्तविक अर्थ भक्तियोग हो। अरू सबै योगहरू भक्तियोगरूपी गन्तव्यको दिशामा अग्रसर गराउने तत्त्व मात्र हुन्। कर्मयोगदेखि सुरु भएर भक्तियोगसम्म जाने लामो बाटो आत्मसाक्षात्कारसम्म पुग्दछ। निष्काम कर्मयोग यस मार्गको आरम्भ मात्र हो।

जब कर्मयोगमा ज्ञान तथा वैराग्यको वृद्धि हुन्छ अनि यस अवस्थालाई ज्ञानयोग भनिन्छ। जब ज्ञानयोगमा विभिन्न भौतिक विधिद्वारा परमात्माको ध्यानमा वृद्धि हुन प्रारम्भ हुन्छ र मन त्यसैमा रमाउन सुरु गर्दछ अनि त्यसलाई अष्टाङ्गयोग भनिन्छ। यस अष्टाङ्गयोगलाई पार गरेपछि मानिस जब भगवान् श्रीकृष्णको निकट पुग्दछ अनि त्यस स्थितिलाई भक्तियोग भनिन्छ। यथार्थमा भक्तियोग नै जीवनको परमलक्ष्य हो। तर पनि भक्तियोगको सूक्ष्म विश्लेषण गर्नका निमित्त अरू योगको बारेमा पनि जान्नु पर्दछ। अतः जुन योगी प्रगतिशील हुन्छ त्यही मात्र शाश्वत कल्याणको सही मार्गमा अवस्थित हुन्छ। जो व्यक्ति कुनै एउटा विशेष विन्दुमा स्थिर हुन्छ र अगाडि बढ्दैन त्यस्तालाई कर्मयोगी, ज्ञानयोगी, ध्यानयोगी, राजयोगी, हठयोगी आदि नामले सम्बोधन गरिन्छ। कुनै पर्याप्त भाग्यमानी व्यक्तिले भक्तियोगमा आउने सौभाग्य प्राप्त गर्दछ र त्यसले सबै योगहरू पार गरिसकेको छ भन्ने बुझ्नु पर्दछ। तसर्थ कृष्णभावनाभावित हुनु नै योगको सर्वोच्च अवस्था हो। यो ठीक त्यस्तै हो जसरी हामी विश्वका पर्वतहरूमा हिमालय नै सबैभन्दा अग्लो छ र सगरमाथा यसको सर्वोच्च शिखर हो भन्ने गर्दछौँ।

ठुलो भाग्यले मात्र कुनै कुनै व्यक्ति वैदिक विधानअनुसार भक्तियोगद्वारा कृष्णभावनामृतमा प्रतिष्ठित हुन्छन्। जसको बादलजस्तै सुन्दर वर्ण छ, जसको मुखकमल सूर्यसमान उज्ज्वल छ, जसका वस्त्रहरू रत्नजडित आभूषणले चम्किएका छन् र जसको शरीर फूलको मालाले सुशोभित भएको छ त्यस्ता श्यामसुन्दर भगवान्‌मा आफ्नो ध्यान एकाग्र गर्ने आदर्श योगी नै सर्वश्रेष्ठ हुन्छ। भगवान्‌को अङ्गलाई सबैतिरबाट प्रदीप्त पार्ने उहाँको वैभवशाली सौन्दर्यलाई ब्रह्मज्योति भनिन्छ। उहाँ नै राम, नृसिंह, वराह तथा भगवान् श्रीकृष्णजस्तै विभिन्न रूपमा अवतरित हुने गर्नु हुन्छ। उहाँ नै सामान्य व्यक्ति जस्तै माता यशोदाका छोराका रूपमा पनि जन्म ग्रहण गर्नु हुन्छ र कृष्ण, गोविन्द तथा वासुदेवका नामले चिनिनुहुन्छ। उहाँ पूर्णबालक, पूर्णसखा, पूर्णपति तथा पूर्णस्वामी हुनुहुन्छ। उहाँ सम्पूर्ण ऐश्वर्य तथा दिव्य गुणहरूले परिपूर्ण हुनुहुन्छ। श्रीभगवान्‌का यिनै रूप र गुणहरूप्रति पूर्णसचेत रहने व्यक्ति नै सर्वोच्च योगी भनिन्छ। योगको यस्तो सर्वोच्च अवस्था केवल भक्तियोगबाट मात्र प्राप्त हुन सक्दछ। सबै वैदिक साहित्यमा यसको पुष्टि गरिएको छ।

*यस्य देवे पराभक्तिर्यथा देवे तथा गुरौ ।*
*तस्यैते कथिता ह्यर्थाः प्रकाशन्ते महात्मनः ॥*

*-श्वेताश्वतर उपनिषद्* (६.२३)

"जुन महात्माहरूका हृदयमा श्रीभगवान् तथा गुरुप्रति परमश्रद्धा हुन्छ, उहाँहरूमा वैदिक ज्ञानको सम्पूर्ण तात्पर्य स्वतः प्रकाशित हुन्छ।"

**भक्तिरस्य भजनं तदिहामुत्रोपाधिनैरास्येनामुष्मिन् मनःकल्पनमेतदेव नैष्कर्म्यम्**—गोपालतापनि उपनिषद् (१.५) अनुसार भक्तिको अर्थ भगवान्को सेवा हो। यस्तो सेवा यो जीवन र अर्को जन्ममा पनि भौतिक लाभको इच्छाले रहित हुन्छ। मानिसले यस्तो प्रवृत्तिबाट अलग रहेर आफ्नो मनलाई परमेश्वरमा लीन गराउनु पर्दछ। "**नैष्कर्म्य**" को प्रयोजन पनि यही हो। योग विधिको परिपूर्णतम अवस्था कृष्णभावना वा भक्तियोग सम्पादन गर्ने यी केही साधनहरू हुन्।

यस प्रकार *श्रीमद्भगवद्गीता* ग्रन्थअन्तर्गत 'ध्यानयोग' शीर्षक छैठौँ अध्यायको भक्तिवेदान्त तात्पर्य समाप्त भयो।

# अध्याय-सात

# परम-ज्ञान

श्रीभगवानुवाच

**मय्यासक्तमनाः पार्थ योगं युञ्जन्मदाश्रयः ।**
**असंशयं समग्रं मां यथा ज्ञास्यसि तच्छृणु ॥ १ ॥**

**श्रीभगवानुवाच** — भगवान्‌ले भन्नुभयो; **मयि** — ममा; **आसक्तमनाः** — मन आकर्षित भएको; **पार्थ** — हे पृथापुत्र; **योगम्** — आत्मसाक्षात्कार; **युञ्जन्** — अभ्यास गर्दै; **मत् आश्रयः** — मेरो शरणमा (कृष्णचेतनामा); **असंशयम्** — निःसन्देह; **समग्रम्** — पूर्णतया; **माम्** — मलाई; **यथा** — कसरी; **ज्ञास्यसि** — जान्न सक्दछौ; **तत्** — त्यो; **श्रृणु** — सुन।

**भगवान्‌ले भन्नुभयो — हे पार्थ! आफ्नो मनलाई म (कृष्ण) मा आसक्त गरेर मेरो भावनाले पूर्ण भएर चेतनापूर्वक योगाभ्यासमा लागेको व्यक्तिले शंकारहित भई कसरी मलाई जान्न सक्दछ, त्यो सुन।**

तात्पर्य : *भगवद्‌गीताको* यस सातौँ अध्यायमा विस्तृत रूपले कृष्णभावनाका प्रकृतिको वर्णन गरिएको छ। भगवान् श्रीकृष्ण सम्पूर्ण ऐश्वर्यले परिपूर्ण हुनुहुन्छ र उहाँले यस्ता ऐश्वर्यहरूलाई कसरी प्रकट गर्नु हुन्छ भन्ने कुराको वर्णन यहाँ गरिएको छ। यसबाहेक भगवान् श्रीकृष्णप्रति आकर्षित हुने चार प्रकारका भाग्यशाली व्यक्तिहरू र कहिल्यै पनि श्रीकृष्णको शरण ग्रहण नगर्ने चार प्रकारका भाग्यहीन व्यक्तिहरूको वर्णन पनि यस अध्यायमा गरिएको छ।

*भगवद्‌गीताका* अघिल्ला छःवटा अध्यायहरूमा विभिन्न प्रकारका योगविधिहरूद्वारा आफूलाई आत्मसाक्षात्कारको अवस्थामा लैजान सक्ने अभौतिक आत्माको वर्णन गरिएको छ। छैटौँ अध्यायको अन्त्यमा सबै योगहरूमध्ये सर्वश्रेष्ठ योग कृष्णभावना वा मनलाई दृढतापूर्वक भगवान् श्रीकृष्णमा एकाग्र गर्ने विधिको स्पष्ट वर्णन भएको छ। मनलाई भगवान् श्रीकृष्णमा एकाग्र गरेर मात्र मानिसले पूर्णरूपमा परमसत्यलाई जान्न सक्दछ, अन्यथा सक्दैन। निर्वैयक्तिक ब्रह्मज्योति वा अन्तर्यामी परमात्माको अनुभूतिले परमसत्यको पूर्णज्ञान हुँदैन, किनभने यो एउटा आंशिक अनुभूति मात्र हो। पूर्ण र वैज्ञानिक ज्ञान भन्नु भगवान् श्रीकृष्ण नै हुनुहुन्छ र कृष्णभावनामा हुँदा मानिसलाई हरेक कुराको अनुभूति हुन्छ। पूर्ण कृष्णभावनामा रहँदा

मानिसले भगवान् श्रीकृष्ण नै परमज्ञान हुनुहुन्छ भन्ने जानकारी निःसन्देह पाउँदछ। विभिन्न प्रकारका योगहरू कृष्णभावनामृतमा पुग्नका लागि सिँढी मात्र हुन्। कृष्णभावनालाई ग्रहण गर्ने व्यक्तिले ब्रह्मज्योति तथा परमात्माको विषयमा स्वतः जान्दछ। कृष्णभावनारूपी योगको अभ्यास गरिरहेको मानिसले परमसत्य, जीवात्मा, भौतिक प्रकृति तथा सामग्रीसहित तिनीहरूको प्रकटीकरण आदि हरेक तथ्यको विषयमा पूर्ण जानकारी प्राप्त गर्दछ।

अतः मानिसले छैटौँ अध्यायको अन्तिम श्लोकमा निर्देश गरिएअनुसारको योगाभ्यास सुरु गर्नु पर्दछ। नवधा भक्तिको अभ्यासले परमेश्वर श्रीकृष्णमा मन केन्द्रित गर्न सजिलो हुन्छ। तीमध्ये "श्रवण" प्रथम, तथा महत्त्वपूर्ण अङ्ग हो। त्यसैले भगवान्ले पनि अर्जुनलाई **तच्छृणु** अर्थात् मसँग सुन भन्नुभएको हो। भगवान् श्रीकृष्णभन्दा ठुलो प्रमाण अरू केही छैन। अतः उहाँबाटै सुनेर मानिसले पूर्णतया कृष्णभावनाभावित हुने महान् सौभाग्य प्राप्त गर्दछ। मानिसले या साक्षात् भगवान् श्रीकृष्णबाट या श्रीकृष्णका शुद्ध भक्तबाट ज्ञान सिक्नु पर्दछ तर शिक्षाको अभिमान गर्ने विद्वान् र अभक्तसँग सिक्नु हुँदैन।

परमसत्य भगवान् श्रीकृष्णलाई बुझ्ने विधिको वर्णन *श्रीमद्भागवत्*को प्रथम स्कन्धको दोस्रो अध्यायमा यसरी गरिएको छ।

*शृण्वतां स्वकथाः कृष्णः पुण्यश्रवणकीर्तनः ।*
*हृद्यन्तःस्थो ह्यभद्राणि विधुनोति सुहृत्सताम् ॥*
*नष्टप्रायेष्वभद्रेषु नित्यं भागवत्सेवया ।*
*भगवत्युत्तमश्लोके भक्तिर्भवति नैष्ठिकी ॥*
*तदा रजस्तमोभावाः कामलोभादयश्च ये ।*
*चेत एतैरनाविद्धं स्थितं सत्त्वे प्रसीदति ॥*
*एवं प्रसन्नमनसो भगवद्भक्तियोगतः ।*
*भगवत्तत्त्वविज्ञानं मुक्तसंगस्य जायते ॥*
*भिद्यते हृदयग्रन्थिश्छिद्यन्ते सर्वसंशयाः ।*
*क्षीयन्ते चास्य कर्माणि दृष्ट एवात्मनीश्वरे ॥*

*श्रीमद्भागवत्* (१.२.१७-२१)

भगवान् श्रीकृष्णका विषयमा वैदिक साहित्यबाट सुन्नपाउनु वा स्वयम् भगवान् श्रीकृष्णबाट *भगवद्गीताका* माध्यमले श्रवण गर्नपाउनु स्वयम्मा एउटा पुण्य कर्म हो। सबैका हृदयमा निवास गर्नुहुने भगवान् श्रीकृष्णका विषयमा जसले सुन्दछ त्यसका लागि उहाँ सर्वश्रेष्ठ हितैषी मित्र हुनुहुन्छ र उहाँका बारेमा निरन्तर श्रवण गर्ने भक्तलाई उहाँले शुद्ध पारिदिनु हुन्छ। यस प्रकार भक्तले आफूभित्र सुषुप्त अवस्थामा रहेको दिव्य ज्ञानको स्वतः विकास

गर्दछ। उसले श्रीमद्भागवत्‌बाट र भक्तहरूबाट जति-जति भगवान् श्रीकृष्णका विषयमा सुन्दछ त्यति नै भगवद्भक्तिमा ऊ दृढ हुँदैजान्छ। भक्ति विकसित हुँदै गएपछि ऊ रजोगुण र तमोगुणबाट मुक्त हुन्छ अनि यसरी उसका काम र लोभ पनि समाप्त हुन्छन्। यस्ता संक्रमणहरूबाट मुक्त भएपछि त्यो भक्त सत्त्वगुणका अवस्थामा स्थिर हुन्छ। उसले भक्तिद्वारा उन्नत स्फूर्ति प्राप्त गर्दछ र राम्रोसँग ईश्वरीय विज्ञानलाई बुझ्दछ। यसरी भक्तियोगले भौतिक मोहको कठोर बन्धनबाट मुक्ति दिन्छ। त्यसपछि ऊ तुरुन्तै **"असंशयं समग्रम्"** अर्थात् परमसत्य भगवान्‌लाई बुझ्ने अवस्थामा आउँदछ।

अतः भगवान् श्रीकृष्णबाट वा कृष्णभावनामा रहेका उहाँका भक्तहरूबाट श्रवण गरेर मात्रै मानिसले कृष्णविज्ञानलाई बुझ्न सक्दछ।

**ज्ञानं तेऽहं सविज्ञानमिदं वक्ष्याम्यशेषतः ।**
**यज्ज्ञात्वा नेह भूयोऽन्यज्ज्ञातव्यमवशिष्यते ॥ २ ॥**

**ज्ञानम्** — प्रत्यक्ष ज्ञान; **ते** — तिमीप्रति; **अहम्** — म; **स** — सहित; **विज्ञानम्** — दिव्य ज्ञान; **इदम्** — यो; **वक्ष्यामि** — भन्नेछु; **अशेषतः** — पूर्णरूपले; **यत्** — जुन; **ज्ञात्वा** — जानेपछि; **न** — छैन; **इह** — यो संसारमा; **भूयः** — फेरि; **अन्यत्** — अरू केही; **ज्ञातव्यम्** — जान्न योग्य; **अवशिष्यते** — बाँकी रहन्छ।

**अब म तिमीलाई पूर्णरूपमा व्यावहारिक तथा दिव्य ज्ञानको वर्णन गर्दछु जसलाई जानेपछि तिमीले जान्नुपर्ने अरू कुनै कुरा बाँकी रहँदैन।**

**तात्पर्य :** यो अनौठो संसार, यसका पछाडि रहेको आत्मा र यी दुवैको मूल स्रोतसहित सम्पूर्ण कुराको ज्ञान नै पूर्णज्ञान हो। यही नै दिव्य ज्ञान पनि हो। भगवान् श्रीकृष्ण अर्जुनका निमित्त उपर्युक्त ज्ञानपद्धतिको व्याख्या गर्न चाहनु हुन्छ, किनभने अर्जुन भगवान् श्रीकृष्णका विश्वसनीय भक्त तथा मित्र पनि हुन्। चौथो अध्यायको आरम्भमा भगवान्‌ले दिनुभएको व्याख्यालाई यहाँ फेरि पुष्टि गरिएको छ। किनभने यो पूर्णज्ञान स्वयम् भगवान्‌बाट प्रारम्भ भएको शिष्यपरम्परामा रहेका भगवान्‌का भक्तहरूबाट मात्र पाउन सकिन्छ। त्यसकारण, सम्पूर्ण ज्ञानका स्रोत रहनुभएका, सम्पूर्ण कारणका पनि कारण हुनुभएका एवं सम्पूर्ण योगपद्धतिहरूमा हुने ध्यानका एक मात्र विषय हुनुभएका भगवान् श्रीकृष्णलाई बुझ्न पर्याप्त ज्ञानवान् हुनु आवश्यक छ। सम्पूर्ण कारणका पनि कारणस्वरूप भगवान्‌लाई जानेपछि जान्नयोग्य हरेक कुरा जानिन्छ र अरू केही पनि जान्न बाँकी रहँदैन। वेदहरू भन्दछन्—**कस्मिन् नु भगवो विज्ञाते सर्वमिदं विज्ञातं भवति** (मुण्डक उपनिषद् १.३)

**मनुष्याणां सहस्रेषु कश्चिद्यतति सिद्धये ।**
**यततामपि सिद्धानां कश्चिन्मां वेत्ति तत्त्वतः ॥ ३ ॥**

**मनुष्याणाम्** — मानिसहरूमा; **सहस्रेषु** — हजारौँमा; **कश्चित्** — कुनै एक; **यतति** — प्रयन्त गर्दछ; **सिद्धये** — सिद्धिका लागि; **यतताम्** — प्रयत्न गर्नेहरू-मध्ये; **अपि** — पनि; **सिद्धानाम्** — सिद्ध पुरुषहरूमध्ये; **कश्चित्** — कुनै एक; **माम्** — मलाई; **वेत्ति** — जान्दछ; **तत्त्वतः** — यथार्थ रूपमा।

**हजारौँ मानिसहरूमध्ये कुनै एउटाले सिद्धिका लागि प्रयत्न गर्दछ र ती सिद्धि प्राप्त गर्नेहरूमध्ये पनि कठिनतापूर्वक कुनै एउटाले मात्र यथार्थमा मलाई जान्दछ।**

**तात्पर्य :** मानिसहरू विभिन्न स्तरका हुन्छन्, ती हजारौँ मानिसहरूमध्ये एक, दुई जनाले मात्र आत्मसाक्षात्कारप्रति बढी रुचि राख्ने हुन्छन् र आत्मा के हो शरीर के हो र परमसत्य के हो भन्ने कुरा जान्ने प्रयत्न गर्दछन्। सामान्यतया, मानिस आहार, निद्रा, भय र मैथुनजस्ता पशुवृत्तिमा संलग्न हुने गर्दछन् र कठिनतापूर्वक कुनै-कुनै मानिसले मात्र आध्यात्मिक ज्ञानमा अभिरुचि देखाँउदछन्। गीताका प्रथम छः अध्यायहरू तिनीहरूका लागि हो, जो दिव्य ज्ञानमा रुचि राख्दछन्, आत्मबोध गर्न चाहन्छन्, परमात्मालाई चिन्न चाहन्छन् तथा ज्ञानयोग, ध्यानयोग एवं पदार्थ र आत्माबीचको पृथकताको बोधद्वारा आत्मासाक्षात्कारको प्रक्रिया अघि बढाउन चाहन्छन्। तर, भगवान् श्रीकृष्णलाई तिनीहरूले मात्र जान्दछन्, जो कृष्णभावनाभावित छन्। अरू योगीहरू निराकार ब्रह्मको अनुभूति गर्ने अवस्थासम्म पुग्न सक्दछन्, किनभने यो भगवान् श्रीकृष्णलाई जान्नुभन्दा सजिलो छ। श्रीकृष्ण परमपुरुष हुनुहुन्छ साथै उहाँ ब्रह्म तथा परमात्माको ज्ञानभन्दा पर हुनुहुन्छ। भगवान् श्रीकृष्णलाई चिन्न नसकेर योगी तथा ज्ञानीहरू आफ्नो साधनामा अल्मलिन्छन्। महान् निराकारवादी श्रीपाद शंकराचार्यले आफ्नो गीताभाष्यमा श्रीकृष्णलाई भगवान्‌को रूपमा स्वीकार गर्नुभएको छ तर उहाँका अनुयायीहरूले श्रीकृष्णलाई यस रूपमा स्वीकार गर्दैनन्। निराकार ब्रह्मको दिव्य अनुभूति प्राप्त गरे पनि भगवान् श्रीकृष्णलाई चिन्न तिनलाई निकै कठिन हुन्छ।

श्रीकृष्ण भगवान् हुनुहुन्छ, उहाँ सम्पूर्ण कारणका पनि मूल कारण हुनुहुन्छ र उहाँ आदिपुरुष भगवान् गोविन्द हुनुहुन्छ। **ईश्वरः परमः कृष्णः सच्चिदानन्दविग्रहः, अनादिरादिर्गोविन्दः सर्वकारणकारणम्।** अभक्तहरूले भगवान् श्रीकृष्णलाई जान्न अति कठिन छ। अभक्तहरू भक्तिमार्ग धेरै सजिलो छ भन्ने घोषणा गर्दछन् तर भक्तिमार्गको अभ्यास गर्न सक्दैनन्।

तिनीहरूले भनेजस्तै गरी भक्तिमार्ग सजिलो भएको भए ती अभक्तहरू यस्तो सजिलो भक्तिमार्ग छोडेर कठिन मार्गमा लाग्ने थिएनन्। वास्तवमा भक्तिमार्ग त्यति सजिलो छैन। ज्ञानबिना अनधिकारी व्यक्तिले चलाएको तथाकथित भक्तिमार्ग सजिलो होला तर वास्तविक विधिविधानअनुसार यसको अभ्यासमा लागेमा विद्वान् मीमांसकहरू र दार्शनिकहरू पनि यस मार्गबाट च्युत हुन्छन्। श्रील रूप गोस्वामी आफ्नो कृति भक्तिरसामृतसिन्धु (१.२.१०१) मा भन्नु हुन्छ—

*श्रुतिस्मृतिपुराणादि पञ्चरात्रविधिं बिना ।*
*ऐकान्तिकी हरेर्भक्तिरुत्पातायैव कल्पते ॥*

उपनिषद्, पुराण तथा नारद पञ्चरात्रजस्ता प्रामाणिक वैदिक ग्रन्थहरूको उपेक्षा गरेर गरिने भक्तिले समाजमा अनावश्यक अव्यवस्था मात्र फैलाउँदछ।

निराकारवादी ब्रह्मवेत्ता वा परमात्मावेत्ता योगीहरूले भगवान् श्रीकृष्णलाई यशोदानन्दन वा पार्थसारथीका रूपमा चिन्नु सम्भव छैन। कहिलेकाहीँ ठुला ठुला देवताहरू पनि भगवान् श्रीकृष्णका विषयमा भ्रमित हुन्छन्— **'मुह्यन्ति यत्सूरयः', 'मां तु वेद न कश्चन'**। भगवान् भन्नु हुन्छ— कसैले पनि मलाई म जस्तो छु त्यस्तै रूपमा जान्न सक्दैन। उहाँलाई यथार्थ रूपमा जान्ने महात्मा अत्यन्त दुर्लभ हुन्छन्। अर्थात्— **स महात्मा सुदुर्लभः**। जतिसुकै ठुलो विद्वान् र दार्शनिक भए पनि भक्ति नभएसम्म भगवान्लाई वास्तविक रूपमा कसैले चिन्न सक्दैन। केवल शुद्ध भक्तले मात्र भगवान् श्रीकृष्णका अचिन्त्य दिव्य गुणबारे केही जान्न सक्दछ। उहाँ कारणका पनि कारण हुनुहुन्छ, उहाँ सर्वशक्तिमान् हुनुहुन्छ र उहाँ ऐश्वर्यमा, सम्पत्तिमा, यशमा, बलमा, सौन्दर्यमा, ज्ञानमा तथा वैराग्यमा अतुलनीय हुनुहुन्छ भन्ने कुरा केवल भक्तले मात्र जानेको हुन्छ। किनभने भगवान् आफ्ना भक्तप्रति अत्यन्त दयालु हुनुहुन्छ। उहाँ ब्रह्मसाक्षात्कारका पराकाष्ठा हुनुहुन्छ। र भक्तहरूले मात्र उहाँलाई तात्त्विक रूपमा चिन्न सक्दछन्, अनुभूति गर्न सक्दछन्। त्यसैले भक्तिरसामृतसिन्धु (१.२.२३४) मा भनिएको छ।

*अतः श्रीकृष्णनामादि न भवेद्ग्राह्यमिन्द्रियैः ।*
*सेवोन्मुखे हि जिह्वादौ स्वयमेव स्फुरत्यदः ॥*

"कुण्ठित इन्द्रियहरूद्वारा कृष्णतत्त्व बुझ्न सकिँदैन तर भक्तहरूको दिव्य सेवाद्वारा प्रसन्न भएर उहाँ आफ्ना भक्तहरूका हृदयमा स्वयम् प्रकाशित भइदिनु हुन्छ।

**भूमिरापोऽनलो वायुः खं मनो बुद्धिरेव च ।**
**अहंकार इतीयं मे भिन्ना प्रकृतिरष्टधा ॥ ४ ॥**

**भूमिः** — पृथ्वी; **आपः** — पानी (जल); **अनलः** — आगो; **वायुः** — हावा (वायु); **खम्** — आकाश; **मनः** — मन; **बुद्धिः** — बुद्धि; **एव** — निश्चय नै; **च** — तथा; **अहंकार** — अहङ्कार; **इति** — यसरी; **इयम्** — यी सबै; **मे** — मेरा; **भिन्ना** — पृथक्; **प्रकृतिः** — शक्तिहरू; **अष्टधा** — आठ प्रकारका।

**पृथ्वी, जल, अग्नि, वायु, आकाश, मन, बुद्धि र अहङ्कार यी आठ मेरा विभिन्न भौतिक शक्तिहरू (प्रकृति) हुन्।**

**तात्पर्य :** ईश्वरविज्ञानले भगवान्‌को मौलिक अवस्था तथा उहाँका विविध शक्तिहरूको विश्लेषण गर्दछ। भगवान्‌का विभिन्न पुरुष अवतार (विस्तार) मा रहेको शक्ति र भौतिक तत्त्वलाई प्रकृति भनिन्छ। सात्वत तन्त्रमा भनिएको छ—

*विष्णोस्तु त्रीणिरूपाणि पुरुषाख्यान्यथो विदुः ।*
*एकं तु महतः स्रष्टृद्वितीयं त्वण्डसंस्थितम् ।*
*तृतीयं सर्वभूतस्थं तानि ज्ञात्वा विमुच्यते ॥*

भौतिक सृष्टिका निमित्त भगवान् श्रीकृष्णको निजी अंशले तीनवटा भगवान् विष्णुहरूको रूप धारण गर्नु हुन्छ। पहिलो महाविष्णु रूपले सम्पूर्ण भौतिक शक्ति अर्थात् महत् तत्त्वको सृष्टि गर्नु हुन्छ। दोस्रो गर्भोदकशायी विष्णु रूपले सम्पूर्ण ब्रह्माण्डमा प्रवेश गरेर ती प्रत्येकमा विभिन्नता उत्पन्न गर्नु हुन्छ र तेस्रो क्षीरोदकशायी विष्णु सम्पूर्ण ब्रह्माण्डमा सर्वव्यापी परमात्माका रूपमा विस्तारित भएर रहनु हुन्छ। उहाँ परमाणुभित्र पनि उपस्थित हुनुहुन्छ। जसले भगवान् विष्णुका यी तीनवटै रूपलाई चिन्दछ त्यो मानिस भवबन्धनबाट मुक्त हुन्छ।

यो भौतिक जगत् भगवान्‌का शक्तिहरूमध्ये एउटाको मात्र क्षणिक अभिव्यक्ति हो। यस संसारका सबै क्रियाकलापहरू भगवान् श्रीकृष्णका यिनै तीनवटा विष्णु-अंशद्वारा निर्देशित छन्। यिनीहरूलाई पुरुषअवतार भनिन्छ। सामान्य रूपमा ईश्वरतत्त्व (कृष्ण) लाई नबुझ्ने व्यक्तिले यो संसार जीवहरूको भोगका लागि हो, सबै जीवहरू नै पुरुष हुन् र यिनीहरू नै भौतिक शक्तिका कारण हुन्, नियन्त्रक हुन् र भोक्ता पनि हुन् भन्ने ठान्दछन्। भगवत्‌गीताअनुसार यस्तो नास्तिक निष्कर्ष झूटो हो। यस श्लोकमा भगवान् श्रीकृष्णलाई नै यस जगत्‌का आदिकारण मानिएको छ। यसको पुष्टि *श्रीमद्भागवत्‌मा* पनि भएको छ। भगवान्‌का अलग-अलग शक्तिहरू नै यो

भौतिक जगत्का उपादान वा घटक हुन्। आध्यात्मिक आकाश वा परव्योममा प्रकट हुने निराकारवादीहरूको परमलक्ष्य ब्रह्मज्योति पनि एउटा आध्यात्मिक शक्ति नै हो। वैकुण्ठलोकमा हुने आध्यात्मिक विभिन्नता ब्रह्मज्योतिमा नभए पनि निर्विशेषवादीहरू ब्रह्मज्योतिलाई नै परम तथा शाश्वत लक्ष्यका रूपमा स्वीकार गर्दछन्। परमात्माको अभिव्यक्ति पनि क्षीरोदकशायी विष्णुको एउटा क्षणिक र सर्वव्यापी पक्ष हो। आध्यात्मिक जगत्मा परमात्माको अभिव्यक्ति शाश्वत हुँदैन। अतः यथार्थ परमसत्य भन्नु भगवान् श्रीकृष्ण मात्र हुनुहुन्छ। उहाँ पूर्ण शक्तिमान् पुरुष हुनुहुन्छ र उहाँका विभिन्न प्रकारका भिन्न तथा अन्तरङ्गा शक्तिहरू छन्।

माथि आठ प्रकारका भौतिक शक्तिहरू प्रधान रूपले अभिव्यक्त हुन्छन् भनियो। तीमध्ये प्रथम पाँचवटा अर्थात् पृथ्वी, जल, अग्नि, वायु र आकाशलाई स्थूल अथवा विराट सृष्टि भनिन्छ जसभित्र शब्द, स्पर्श, रूप, रस र गन्ध यी पाँच इन्द्रियका विषयहरू पनि समाहित छन्। भौतिक विज्ञानमा यिनै दश तत्त्वहरू समावेश छन् र यसबाहेक अरू केही छैन। मन, बुद्धि र अहङ्कार यी तीन तत्त्वहरूलाई भौतिकवादीहरूले उपेक्षा गर्दछन्। मानसिक क्रियाकलापसँग सम्बन्धित दार्शनिकहरू पनि ज्ञानमा पूर्ण हुँदैनन्, किनभने तिनीहरूले सृष्टिका परमउद्गम स्रोत भगवान् श्रीकृष्णलाई चिन्नसकेका हुँदैनन्। भौतिक अस्तित्वको आधारभूत सिद्धान्त नै "म हूँ" तथा "यो मेरो हो" भन्ने झूटो अहङ्कार हो—जसले भौतिक क्रियाकलापका निम्ति आवश्यक पर्ने १० ज्ञानेन्द्रिय कर्मेन्द्रयहरूलाई पनि समावेश गर्दछ। भौतिक कार्य वा विषयभोगका दश इन्द्रियहरू पनि यसैमा समावेश छन्। बुद्धि महत्तत्व नामका समग्र भौतिक सृष्टिको सूचक हो। भगवान्का आठ विभिन्न शक्तिहरूबाट जगत्का चौबीस तत्त्वहरू प्रकट हुन्छन् जो नास्तिक साङ्ख्य दर्शनका विषयवस्तु हुन्। यिनीहरू मूलरूपमा भगवान् श्रीकृष्णका शक्तिका उपशाखा हुन् र उहाँबाट पृथक् पनि हुन्। तर, आफ्नो अल्पज्ञानका कारणले नास्तिक साङ्ख्य दार्शनिकहरू भगवान् श्रीकृष्ण नै सबै कारणका पनि कारण हुनुहुन्छ भन्ने बुझ्दैनन्। *भगवद्गीतामा* पनि साङ्ख्य दर्शनको विवेचनाको विषयवस्तुलाई भगवान् श्रीकृष्णको बहिरङ्गा शक्तिको अभिव्यक्ति हो भनिएको छ।

**अपरेयमितस्त्वन्यां प्रकृतिं विद्धि मे पराम् ।**
**जीवभूतां महाबाहो ययेदं धार्यते जगत्॥ ५ ॥**

**अपरा** — निकृष्ट वा जड; **इयम्** — यो; **इतः** — यसबाहेक; **तु** — तर;

**अन्याम्** — अरू; **प्रकृतिम्** — शक्ति वा प्रकृतिलाई; **विद्धि** — जान्ने प्रयत्न गर; **मे** — मेरो; **पराम्** — उत्कृष्ट वा चेतन; **जीव-भूताम्** — जीवात्मालाई समावेश गर्ने; **महाबाहो** — हे महाबाहु (बलिष्ट भुजाधारी); **यया** — जसद्वारा; **इदम्** — यो; **धार्यते** — उपभोग गरिन्छ; (दोहन गरिन्छ); **जगत्** — संसार।

**हे महाबाहु अर्जुन! यसबाहेक मेरो एउटा पराशक्ति पनि छ जसअन्तर्गत भौतिक वा अपराशक्तिका साधनहरूलाई उपभोग गर्ने जीवात्माहरू पर्दछन्।**

**तात्पर्य :** यहाँ जीवात्मा भगवान्‌को पराशक्तिअन्तर्गत पर्दछन् भन्ने स्पष्ट उल्लेख छ। अपराशक्ति पृथ्वी, जल, अग्नि, वायु, आकाश, मन, बुद्धि र अहङ्कारजस्ता विभिन्न पदार्थतत्त्वका रूपमा प्रकट हुने गर्दछन्। भौतिक प्रकृतिका यी दुवै रूपहरू स्थूल (पृथ्वी आदि) तथा सूक्ष्म (मन आदि) पनि अपराशक्तिको प्रतिफल हुन्। आफ्ना विविध आवश्यकता पूर्तिका लागि अपराशक्तिको उपभोग गरिरहेका जीवहरू स्वयम् परमेश्वरको पराशक्ति हुन् र यही शक्तिका कारणले सारा संसार क्रियाशील हुन्छ। पराशक्तिद्वारा अर्थात् जीवद्वारा गतिशील नबनाएसम्म यो दृश्य जगत्‌मा कार्य गर्ने शक्ति नै आउँदैन। शक्तिमान्‌ले नै सधैँ शक्तिको नियन्त्रण गरिरहनुहुन्छ। अतः जीवहरू सधैँ भगवान्‌बाटै नियन्त्रित हुन्छन्। जीवहरूको आफ्नो कुनै स्वतन्त्र अस्तित्व हुँदैन। तिनीहरू कहिल्यै पनि समान रूपमा शक्तिमान् हुन सक्दैनन् तर बुद्धि नभएका मानिसहरू यस्तो सोच्ने गर्दछन्। *श्रीमद्‌भागवत्* १०.८७.३० मा जीव तथा भगवान्‌का बीचमा रहेको अन्तर यसरी स्पष्ट पारिएको छ।

*अपरिमिता ध्रुवास्तनुभृतो यदि सर्वगता*
*स्तर्हि न शास्यतेति नियमो ध्रुव नेतरथा ।*
*अजनि च यन्मयं तदविमुच्य नियन्तृ भवेत्*
*सममनुजानतां यदमतं मतदुष्टतया ॥*

हे परमशाश्वत! यदि सबै शरीर धारण गरेका धारी जीवहरू तपाईंजस्तै शाश्वत र सर्वव्यापी भइदिएका भए तिनीहरू कहिल्यै पनि तपाईंका नियन्त्रणमा रहने थिएनन्। यदि जीवहरूलाई तपाईंको सूक्ष्म शक्तिका रूपमा लिनेभए तुरुन्त ती सबै तपाईंको परमनियन्त्रणमा पर्दछन्। अतः जीवात्माको वास्तविक मुक्ति भनेको तपाईंको शरणमा जानु हो र यसै शरणागतिबाट मात्र तिनीहरू सुखी हुनेछन्। त्यही मौलिक स्वरूपमा रहेर मात्रै तिनीहरू नियन्त्रक हुन सक्दछन्। त्यसैले, आत्मा र परमात्मा अर्थात् जीव र ईश्वर हरेक पक्षबाट समान हुन् भन्दै

अद्वैतवादी सिद्धान्तको वकालत गर्ने अल्प बुद्धिका मानिसहरू वास्तवमा गलत र दूषित विचारबाट निर्देशित छन्।

परमेश्वर श्रीकृष्ण नै एक मात्र नियन्त्रक हुनुहुन्छ र सबै जीवहरू उहाँद्वारा नियन्त्रित छन्। यी जीवहरू उहाँका पराशक्ति हुन्, किनभने यिनीहरूको गुण परमेश्वरको समान छ तैपनि शक्तिको परिमाण वा मात्राको विषयमा तिनीहरू कहिल्यै परमेश्वरसमान हुन सक्दैनन्। पराशक्ति वा जीवले अपराशक्तिको वा स्थूल तथा सूक्ष्म शक्ति (पदार्थ) को उपभोग गर्दागर्दै आफ्नो वास्तविक आध्यात्मिक मन तथा बुद्धिलाई पनि विर्सन्छ। जीवमाथि रहेको जड प्रकृतिको प्रभावको कारणले उसमा यस्तो विस्मृति आएको हो। तर, मायाको प्रभावबाट मुक्त हुनेबित्तिकै जीवले त्यो अवस्था प्राप्त गर्दछ जसलाई मुक्ति भनिन्छ। मायाको प्रभावमा आएर अहङ्कारग्रस्त जीवले म नै पदार्थ हूँ र सारा भौतिक उपलब्धिहरू मेरा हुन् भन्ने सोच्दछ। समग्र भौतिक विचारबाट मुक्ति प्राप्त गरेपछि नै उसले आफ्नो वास्तविक स्थितिको अनुभूति गर्दछ। यसका लागि उसले सबै पक्षबाट भगवान्सँग एक हुने धारणालाई त्याग्नु पर्दछ। निष्कर्ष भनेको, गीताले जीवलाई भगवान् श्रीकृष्णका विभिन्न शक्तिहरूमध्येको एक शक्ति मान्दछ र यही जीवशक्ति भौतिक कल्मषबाट मुक्त हुनासाथ पूर्णतया कृष्णभावनाभावित हुन्छ वा मुक्त हुन्छ।

**एतद्योनीनि भूतानि सर्वाणीत्युपधारय ।**
**अहं कृत्स्नस्य जगतः प्रभवः प्रलयस्तथा ॥ ६ ॥**

एतत् — यी दुवै शक्तिहरू; **योनीनि** — जसका जन्मको स्रोत; **भूतानि** — प्रत्येक सिर्जित वस्तु; **सर्वाणि** — सबै; **इति** — यसरी; **उपधारय** — सम्झिराख; **अहम्** — म; **कृत्स्नस्य** — सम्पूर्ण; **जगतः** — संसारको; **प्रभवः** — उत्पत्तिको स्रोत; **प्रलय** — संहार; **तथा** — तथा।

**सम्पूर्ण प्राणीहरूका उद्गम स्रोत मेरा यिनै दुई शक्ति वा प्रकृतिहरू हुन्। यो जगत्मा भएका सम्पूर्ण भौतिकता र आध्यात्मिकता एवं तिनको उत्पत्ति र प्रलय दुवै अवस्थाको कारण मै हूँ भन्ने जान।**

**तात्पर्य :** यस जगत्मा विद्यमान प्रत्येक वस्तु भौतिक पदार्थ र आत्माका उत्पादन हुन्। आत्मा सृष्टिको आधारभूत क्षेत्र हो र आत्माद्वारा पदार्थहरू उत्पन्न हुन्छन्। भौतिक विकासको कुनै पनि अवस्थामा आत्माको उत्पत्ति हुँदैन। बरु यो भौतिक जगत् आध्यात्मिक शक्तिका आधारमा उत्पन्न हुने गर्दछ। आत्मा अन्तर्निहित भएको हुँदा यो भौतिक शरीरको विकास सम्भव भएको हो। पराशक्ति वा आत्माको उपस्थितिले गर्दा नै एउटा बालक विस्तारै बढ्दै गएर

कुमार हुन्छ अनि युवक हुन्छ, त्यसै गरी यो विराट ब्रह्माण्डका समग्र सृष्टिको विकास पनि परमात्मा विष्णुको उपस्थितिका कारणले हुने गर्दछ। आत्मा र पदार्थ मूल रूपमा भगवान्‌का दुई शक्ति हुन्। यिनको संयोगबाट विराट ब्रह्माण्ड प्रकट हुन्छ। तसर्थ, भगवान् नै सबै वस्तुका मूल कारण हुनुहुन्छ। यो जीवात्मा पनि भगवान्‌को सानो अंश हो। जीवात्मा कुनै गगनचुम्बी महलको निर्माता हुन सक्दछ, ठुलो कारखानाको स्वामी हुन सक्दछ, कुनै महानगरको संस्थापक हुन सक्दछ तर यो जीव कहिल्यै पनि विश्व ब्रह्माण्डको निर्माता हुन सक्दैन। यो विराट ब्रह्माण्डका स्रष्टा विराट आत्मा या परमात्मा हुनुहुन्छ। अनि परमेश्वर श्रीकृष्ण विराट तथा लघु दुवै आत्माका कारणस्वरूप हुनुहुन्छ। त्यसैले उहाँ सम्पूर्ण कारणका पनि कारण हुनुहुन्छ। यसको पुष्टि कठोपनिषद् (२.२.१३) मा यसरी गरिएको छ— **नित्यो नित्यानां चेतनश्चेतनानाम्।**

**मत्तः परतरं नान्यत्किञ्चिदस्ति धनञ्जय ।**
**मयि सर्वमिदं प्रोतं सूत्रे मणिगणा इव ॥ ७॥**

**मत्तः** — मभन्दा पर; **परतरम्** — श्रेष्ठ; **न** — छैन; **अन्यत्-किञ्चित** — अरू केही पनि; **अस्ति** — छ; **धनञ्जय** — हे धनका विजेता; **मयि** — ममा; **सर्वम्** — सबै कुरा; **इदम्** — यो हामीले देखेको; **प्रोतम्** — गाँसिएको; **सूत्रे** — धागोमा; **मणिगणाः** — मोतिका दाना; **इव** — जस्तै।

**हे धनञ्जय! मभन्दा ठुलो कुनै सत्य छैन। जसरी मोतीका दाना धागोमा उनिएका हुन्छन् त्यसै गरी सबै ममाथि नै आश्रित छन्।**

**तात्पर्य :** परमसत्य साकार छ कि निराकार भन्ने कुरामा सामान्य विवाद हुने गर्दछ। जहाँसम्म *भगवद्गीताको* कुरा छ, यसले श्रीकृष्ण नै परमसत्य भगवान् हुनुहुन्छ भनेर आफ्ना पद-पदमा पुष्टि गरेको छ। यस श्लोकमा विशेष गरी परमसत्य व्यक्ति वा पुरुषरूप हुनुहुन्छ भन्ने कुरामा विशेष जोड दिइएको छ। भगवान् नै परमसत्य हुनुहुन्छ भन्ने कुरा ब्रह्मसंहितामा पनि यसरी पुष्टि गरिएको छ— **ईश्वरः परमः कृष्णः सच्चिदानन्दविग्रहः**। भगवान् श्रीकृष्ण नै परमसत्य हुनुहुन्छ र उहाँ नै आदि भगवान् हुनुहुन्छ, उहाँ नै सम्पूर्ण आनन्दका सागर गोविन्द हुनुहुन्छ र उहाँ शाश्वत ज्ञान र आनन्दमय स्वभावका हुनुहुन्छ। यी सबै प्रमाणहरूले निर्विवाद रूपमा परमपुरुष नै परमसत्य हुनुहुन्छ र उहाँ सबै कारणहरूका पनि कारण हुनुहुन्छ भन्ने कुरा सिद्ध गर्दछन्। तथापि श्वेताश्वतर उपनिषद् (३.१०) मा उल्लिखित निम्नलिखित वैदिक मन्त्रलाई आधार बनाएर अनिश्वरवादीहरू यस्तो तर्क गर्दछन्— **ततो यदुत्तरतरं तदरूपमनामयं। य एतद्विदुरमृतास्ते भवन्त्यथेतरे दुःखमेवापियन्ति** — अर्थात्, भौतिक

जगत्मा ब्रह्माण्डका आदिजीवात्मा ब्रह्माजीलाई देवता, मानिस तथा निम्न कोटिका प्राणीहरूमध्ये सर्वश्रेष्ठ मानिएको छ। तथापि ब्रह्माभन्दा पर एक इन्द्रियभन्दा माथि ब्रह्म हुनुहुन्छ जसको कुनै भौतिक स्वरूप छैन र उहाँ सम्पूर्ण भौतिक संक्रमणबाट मुक्त हुनुहुन्छ। जसले उहाँलाई चिन्दछ त्यो पनि दिव्य हुन्छ र जसले उहाँलाई चिन्दैन उसले सांसारिक दु:खहरूको भोग गरिरहनु पर्दछ।

निराकारवादीहरू विशेष गरी **अरूपम्** शब्दमा जोड दिन्छन्। तर, यो अरूपम् शब्दको अर्थ निराकार होइन। यसले दिव्य सच्चिदानन्दमय स्वरूपलाई सूचित गर्दछ, जसको वर्णन ब्रह्मसंहिताको माथि उद्धृत गरिएको पङ्क्तिमा भएको छ। श्वेताश्वतर उपनिषद् (३.८-९ ) को अर्को श्लोकमा पनि यसको पुष्टि यसरी गरिएको छ—

*वेदाहमेतं पुरुषं महान्तमादित्यवर्णं तमसः परस्तात् ।*
*तमेव विद्वान्ति मृत्युमेति नान्यः पन्था विद्यतेऽयनाय ॥*
*यस्मात्परं नापरमस्ति किञ्चिद् यस्मान्नाणीयो नो ज्यायोऽस्ति किञ्चित्।*
*वृक्ष इव स्तब्धो दिवि तिष्ठत्येकस्तेनेदं पूर्णं पुरुषेण सर्वम् ॥*

अन्धकारमय सम्पूर्ण भौतिक अवधारणाहरूभन्दा माथि रहनुभएका दिव्य स्वरूप भगवान्लाई म जान्दछु। भगवान्लाई जान्ने व्यक्ति मात्र जन्म र मृत्युको बन्धनबाट पार हुन सक्दछ। उनै परमपुरुषको ज्ञानबाहेक मोक्षको अरू कुनै उपाय छैन।

परमपुरुषभन्दा ठुलो सत्य केही पनि छैन, किनभने उहाँ नै महानतम हुनुहुन्छ। उहाँ सूक्ष्मभन्दा पनि सूक्ष्म र महान्भन्दा पनि महानतम हुनुहुन्छ। उहाँ एउटा मूक (बोल्न नसक्ने) वृक्षजस्तो बनेर स्थिर रहनु हुन्छ र दिव्य आकाशलाई प्रकाशित गराउनु हुन्छ। जसरी वृक्षले आफ्नो जरा फैलाउँछ, उहाँले पनि त्यसरी नै आफ्ना विस्तृत शक्तिहरूको प्रसारण गर्नु हुन्छ।

यी श्लोकहरूबाट के निष्कर्ष प्राप्त हुन्छ भने, परमसत्य भन्नु नै श्रीभगवान् हुनुहुन्छ, र उहाँ नै आफ्ना विविध भौतिक र आध्यात्मिक (परा-अपरा) शक्तिका माध्यमले सर्वव्यापी भएर रहनुभएको छ।

**रसोऽहमप्सु कौन्तेय प्रभास्मि शशिसूर्ययोः ।**
**प्रणवः सर्ववेदेषु शब्दः खे पौरुषं नृषु ॥ ८ ॥**

**रसः** — स्वाद; **अहम्** — म; **अप्सु** — जलमा; **कौन्तेय** — हे कुन्तीपुत्र; **प्रभा** — प्रकाश; **अस्मि** — हुँ; **शशि-सूर्ययोः** — चन्द्रमा र सूर्यको; **प्रणवः** — ओंकारका अ-उ-म यी तीन अक्षर; **सर्व** — सबै; **वेदेषु** — वेदहरूमा;

**शब्दः** — शब्द (ध्वनि); **खे** — आकाशमा; **पौरूषम्** — शक्ति (सामर्थ्य); **नृषु** — मानिसहरूमा।

**हे कुन्तीपुत्र! म जलको स्वाद हूँ, सूर्य-चन्द्रको प्रकाश हूँ, वैदिक मन्त्रमा ओंकार हूँ, म आकाशमा ध्वनि हूँ र मानिसमा शक्ति र सामर्थ्य हूँ।**

**तात्पर्य :** भगवान् आफ्ना धेरै परा र अपरा अर्थात् आध्यात्मिक र भौतिक शक्तिद्वारा कसरी सर्वव्यापी भएर रहनुभएको छ भन्ने कुरा यो श्लोकले भनेको छ। परमेश्वरको प्रारम्भिक अनुभूति उहाँका विभिन्न शक्तिहरूका माध्यमबाट प्राप्त हुन सक्दछ, यसरी उहाँको निराकार स्वरूपको पनि अनुभव गर्न सकिन्छ। जसरी सूर्यदेवता एक पुरुष व्यक्तित्व हुनुहुन्छ र आफ्नो सर्वव्यापी किरणद्वारा प्रकाशित भएको देखिनु हुन्छ, त्यसै गरी भगवान् पनि आफ्नो नित्य धाममा रहेर आफ्नो सर्वव्यापी विस्तारित शक्तिद्वारा प्रकाशित हुन सक्नु हुन्छ। जलको स्वाद, जलको मूलभूत गुण हो। समुद्रको पानी कसैले पिउन चाहँदैन, किनभने त्यसमा शुद्ध जलमात्र नभई नून पनि मिश्रित हुन्छ। जलप्रतिको आकर्षण जलको शुद्ध स्वादमा निर्भर छ। यो शुद्ध स्वाद भगवान्का शक्तिहरूमध्ये एउटा हो। निराकारवादीहरूले जलको स्वादका कारण जलमा भगवान्को उपस्थिति रहेको अनुभव गर्दछन् र भगवान्को कृपाले सुस्वादु पानी पिएर तिर्खा मेट्न पाएकोमा सगुणवादीले पनि भगवान्को गुणगान गर्दछन्। परमेश्वरको अनुभूति गर्ने विधि यही हो। व्यावहारिक रूपमा भन्दा सगुणवाद तथा निर्गुणवादमा कुनै मतभेद छैन। जसले ईश्वरलाई चिन्दछ उसले प्रत्येक वस्तुमा भगवान्का सगुण र निर्गुण दुवै रूपको एकैसाथ बोध गर्दछ र दुवैमा कुनै विरोधाभास नरहेको तथ्यको अनुभव गर्दछ। त्यसैले भगवान् चैतन्य महाप्रभुले **अचिन्त्य भेदाभेद तत्त्व** (अर्थात् सँगसँगै एक पनि र भिन्नता पनि) भनिने आफ्नो शुद्ध सिद्धान्त प्रतिपादन गर्नुभयो।

सूर्य तथा चन्द्रमाको प्रकाश पनि ब्रह्मज्योतिबाट उत्पन्न भएको हो र यो भगवान्को निराकार तेज वा प्रकाश हो। प्रणव अर्थात् ओंकार प्रत्येक वैदिक मन्त्रका प्रारम्भमा भगवान्लाई सम्बोधन गर्न प्रयोग हुने दिव्य ध्वनि हो। निराकारवादीहरू भगवान् श्रीकृष्णलाई उहाँका असङ्ख्य नामबाट सम्बोधन गर्न डराउँछन्, तसर्थ तिनीहरू केवल ओंकारको दिव्य ध्वनि उच्चारण गर्न रूचाउँछन् तर ओंकार नै भगवान् श्रीकृष्णको शब्दस्वरूप हो भन्ने कुराको अनुभूति तिनीहरू गर्दैनन्। कृष्णभावनामृतको कार्यक्षेत्र व्यापक छ, सर्वत्र फैलिएको छ। जो कृष्णभावनामृतसँग परिचित छ त्यो धन्य हुन्छ र जसले भगवान् श्रीकृष्णलाई चिन्दैन वा जान्दैन त्यो मोहग्रस्त रहन्छ। तसर्थ, श्रीकृष्णलाई जान्नु मुक्ति हो र श्रीकृष्णलाई नजान्नु बन्धन हो।

**पुण्यो गन्धः पृथिव्यां च तेजश्चास्मि विभावसौ ।**
**जीवनं सर्वभूतेषु तपश्चास्मि तपस्विषु ॥ ९ ॥**

**पुण्यः** — मूल (पहिलो); **गन्धः** — सुगन्ध; **पृथिव्याम्** — पृथ्वीमा; **च** — पनि; **तेजः** — ताप वा प्रकाश; **च** — पनि; **अस्मि** — हूँ; **विभावसौ** — आगोमा; **जीवनम्** — जीवन; **सर्व** — सबै; **भूतेषु** — जीवहरूमा; **तपः** — तपस्या; **च** — पनि; **अस्मि** — हूँ; **तपस्विषु** — तपस्वीहरूमा।

**म पृथ्वीमा विद्यमान् सुगन्ध हूँ र अग्निको ताप वा उष्मा हूँ। म सबै जीवहरूको जीवन तथा सम्पूर्ण तपस्वीहरूको तप हूँ।**

**तात्पर्य :** पुण्यको अर्थ हो जसमा कुनै विकार छैन। पुण्य भनेको मौलिक हो। यस भौतिक जगत्का प्रत्येक वस्तुमा कुनै न कुनै गन्ध वा सुगन्ध रहेको हुन्छ। फूलमा सुगन्ध भएजस्तै जल, पृथ्वी, अग्नि र वायुमा पनि गन्ध हुन्छ। हरेक वस्तुमा व्याप्त भएर रहेको अदूषित भौतिक गन्ध नै मूल सुगन्ध हो र त्यो नै भगवान् श्रीकृष्ण हुनुहुन्छ। त्यसै गरी प्रत्येक वस्तुको एक विशिष्ट मौलिक स्वाद हुन्छ र यस्तो स्वादलाई रसायनको मिश्रणद्वारा परिवर्तन गर्न सकिन्छ। अतः प्रत्येक मूल वस्तुमा कुनै न कुनै गन्ध तथा सुगन्ध हुन्छ। **'विभावसु'** को अर्थ अग्नि हो। अग्निबिना न कारखाना चल्न सक्दछ न भोजन आदि पकाउन सकिन्छ। यही अग्नि भगवान् श्रीकृष्ण हुनुहुन्छ। अग्निमा रहेको ताप पनि भगवान् श्रीकृष्ण नै हुनुहुन्छ। वैदिक चिकित्साअनुसार अपच हुनुको कारण नै पेटको अग्नि वा ताप मन्द हुनु हो। अतः खाएको भोजन पचाउनका लागि पनि अग्नि चाहिन्छ। कृष्णभावनामृत अनुसार पृथ्वी, जल, अग्नि, वायु तथा प्रत्येक सक्रिय तत्त्व अनि सबै रसायन एवं भौतिक तत्त्वका मूलकारण नै भगवान् श्रीकृष्ण हुनुहुन्छ भन्ने कुरामा हामी सचेत हुनु पर्दछ। मानिसको जीवन अवधि पनि भगवान् श्रीकृष्णमा निर्भर छ अर्थात् श्रीकृष्णका कृपाले नै मानिस दीर्घायु अथवा अल्पायु हुन सक्दछ। अतः प्रत्येक क्षेत्रमा कृष्णभावना नै सक्रिय रहेको देखिन्छ।

**बीजं मां सर्व भूतानां विद्धि पार्थ सनातनम् ।**
**बुद्धिर्बुद्धिमतामस्मि तेजस्तेजस्विनामहम् ॥ १० ॥**

**बीजं** — बीज; **माम्** — मलाई; **सर्वभूतानाम्** — सबै जीवहरूको; **विद्धि** — जान्ने प्रयास गर; **पार्थ** — हे पृथापुत्र!; **सनातनम्** — मौलिक (शाश्वत); **बुद्धिः** — बुद्धि; **बुद्धिमताम्** — बुद्धिमानहरूको; **अस्मि** — हूँ; **तेजः** — तेज (शक्ति); **तेजस्विनाम्** — तेजस्वीहरूको; **अहम्** — म हूँ।

**हे पृथापुत्र! म नै सम्पूर्ण अस्तित्वको मूल बीज हूँ। बुद्धिमान्हरूको बुद्धि र सबै शक्तिमान् पुरुषहरूको तेज पनि म नै हूँ।**

**तात्पर्य :** बीजको अर्थ मूल उत्पत्ति स्रोत हो। भगवान् श्रीकृष्ण नै हरेक वस्तुका बीज हुनुहुन्छ। चर तथा अचर गरी जीव धेरै प्रकारका हुन्छन्। पशु-पक्षी, मनुष्य तथा अरू सजीव प्राणीहरू चर हुन् र रूख-बिरुवा अचर हुन् किनकि तिनीहरू हिँड्न सक्दैनन्, केवल उभिइरहन्छन्। प्रत्येक जीव चौरासी लाख योनिअन्तर्गत पर्दछन्। तीमध्ये केही चर हुन्छन् र केही अचर हुन्छन्। तर, भगवान् श्रीकृष्ण हरेक स्थितिमा यी सबैका बीजस्वरूप हुनुहुन्छ। वैदिक साहित्यमा भनिएजस्तै ब्रह्म वा परमसत्यबाट हरेक कुराको उत्पत्ति हुन्छ। भगवान् श्रीकृष्ण नै परब्रह्म वा परमात्मा हुनुहुन्छ। ब्रह्म निराकार छ तर परब्रह्म साकार हुनुहुन्छ। भगवद्- गीताअनुसार निराकार ब्रह्म साकार रूपभित्र अवस्थित रहेको हुन्छ। त्यसैले, मौलिक रूपमा भगवान् श्रीकृष्ण नै सबै वस्तुहरूका उद्गम स्रोत हुनुहुन्छ। उहाँ नै मूल जरो हुनुहुन्छ। वृक्षका जराले जसरी वृक्षको पोषण गर्दछ त्यसरी नै भगवान् श्रीकृष्णले पनि यस जगत्को मूल जरो बनेर प्राणीहरूलाई पालन-पोषण गर्नु हुन्छ। वैदिक साहित्यमा (कठोपनिषद् २.२.१३ मा) पनि यसको पुष्टि भएको छ।

*नित्योनित्यानां चेतनश्चेतनानाम्।*
*एको बहूनां यो विदधाति कामान्॥*

अर्थात्, उहाँ सम्पूर्ण नित्यताहरूका पनि मूल नित्यस्वरूप हुनुहुन्छ, उहाँ नै सम्पूर्ण जीवहरूमध्येका परमजीव हुनुहुन्छ र उहाँ एक्लैले सबै जीवहरूको पालन-पोषण गरिरहनुभएको छ। बुद्धि नभई मानिसले केही गर्न सक्दैन र भगवान् श्रीकृष्णका भनाइअनुसार सम्पूर्ण बुद्धिको मूल जरो उहाँ नै हुनुहुन्छ। त्यसैले बुद्धि नभएसम्म मानिसले भगवान् श्रीकृष्णलाई बुझ्न सक्दैन।

**बलं बलवतां चाहं काम रागविवर्जितम् ।**
**धर्माविरुद्धो भूतेषु कामोऽस्मि भरतर्षभ ॥ ११॥**

**बलम्** — शक्ति; **बलवताम्** — बलवान्हरूको; **च** — तथा; **अहम्** — म हूँ; **काम** — विषयभोग; **राग** — र आसक्ति; **विवर्जितम्** — रहित भएको; **धर्म अविरुद्धः** — धार्मिक नियमको अविरोधी; **भूतेषु** — सबै जीवहरूमा; **कामः** — विषयी जीवन; **अस्मि** — म हूँ; **भरत ऋषभ** — हे भरत कुलमा श्रेष्ठ।

**हे भरतश्रेष्ठ अर्जुन! म बलवान्हरूको काम र उत्तेजनाविहीन बल हूँ। म त्यो कामवासना हूँ जुन धर्मको सिद्धान्त विरुद्ध छैन।**

**तात्पर्य :** बलवान् पुरुषको शक्ति दुर्बलहरूको रक्षाका लागि उपयोग हुनु पर्दछ, व्यक्तिगत किसिमले आक्रमण गर्नका लागि होइन। त्यसै गरी धार्मिक नियमअनुरूपको मैथुन पनि सन्तानोत्पत्तिका निमित्त हुनु पर्दछ, अरू प्रयोजनका लागि होइन। तसर्थ आमाबाबुको कर्तव्य आफ्ना सन्तानलाई कृष्णभावनाभावित बनाउनु हो।

**ये चैव सात्त्विका भावा राजसास्तामसाश्च ये ।**
**मत्त एवेति तान्विद्धि न त्वहं तेषु ते मयि ॥ १२ ॥**

**ये** — जुन; **च** — तथा; **एव** — निश्चय नै; **सात्त्विकाः** — सत्त्वगुणी; **भावाः** — भाव (अवस्था); **राजसाः** — रजोगुणी; **तामसाः** — तमोगुणी; **च** — पनि; **ये** — जुन सबै; **मत्तः** — मबाट; **एव** — निश्चय नै; **इति** — यसरी; **तान्** — तिनीहरू; **विद्धि** — जान; **न** — छैन; **तु** — तर; **अहम्** — म; **तेषु** — तिनीहरूमा; **ते** — तिनीहरू; **मयि** — ममा।

**यी सबै सत्त्वगुण, रजोगुण र तमोगुणका अवस्थाहरू मेरो शक्तिबाट प्रकट हुन्छन् भन्ने जान। एक अर्थमा म सबै हूँ तर म स्वतन्त्र छु। म प्रकृतिका गुणहरूको अधीनमा छैन बरु तिनीहरू मेरा अधीनमा छन्, मभित्र छन्।**

**तात्पर्य :** संसारका सबै भौतिक क्रियाकलापहरू प्रकृतिका तीन गुणहरूका अधीनमा सञ्चालित हुने गर्दछन्। प्रकृतिका गुणहरू परमेश्वर श्रीकृष्णबाट उत्पन्न हुन्छन् तर पनि भगवान् श्रीकृष्ण तिनका अधीनमा रहनु हुन्न। उदाहरणका लागि राज्यको नियमअनुसार कुनै पनि व्यक्ति दण्डित हुन सक्दछ तर नियम बनाउने राजा त्यसको अधीनमा रहँदैन। त्यसै गरी प्रकृतिका सबै सत्त्व, रज र तमोगुणहरू भगवान् श्रीकृष्णबाटै उत्पन्न हुन्छन् तैपनि श्रीकृष्ण प्रकृतिका अधीनमा रहनु हुन्न। त्यसैले उहाँ निर्गुण हुनुहुन्छ, यसको अर्थ हो—सबै गुणहरू उहाँबाटै उत्पन्न भएर पनि तिनीहरूले उहाँलाई प्रभावित पार्न सक्दैनन्। भगवान्का विशेषताहरूमध्ये यो पनि एक हो।

**त्रिभिर्गुणमयैर्भावैरेभिः सर्वमिदं जगत् ।**
**मोहितं नाभिजानाति मामेभ्यः परमव्ययम् ॥ १३ ॥**

**त्रिभिः** — तीनवटा; **गुणमयैः** — गुणले युक्त; **भावैः** — भावद्वारा; **एभिः** — यी सबै; **सर्वम्** — सम्पूर्ण; **इदम्** — यो; **जगत्** — ब्रह्माण्ड;

**मोहितम्** — मोहग्रस्त; **न अभिजानाति** — जान्दैन; **माम्** — मलाई; **एभ्यः** — यिनीहरूभन्दा माथि; **परम** — परम; **अव्ययम्** — अविनाशी, सनातन।

**सत्त्व, रज र तम यी तीन गुणले मोहग्रस्त भएको यो सारा संसार गुणहरू भन्दा माथि भएको र अविनाशीरूपी मलाई चिन्न असमर्थ छ।**

**तात्पर्य :** समग्र विश्व प्रकृतिका तीन गुणहरूद्वारा मोहित छ। यी तीन गुणहरूद्वारा भ्रमित भएका मानिसले भगवान् श्रीकृष्ण भौतिक प्रकृतिभन्दा धेरै पर हुनुहुन्छ भन्ने कुरा जान्दैनन्। प्रत्येक जीवात्माले प्रकृतिका प्रभावअन्तर्गत रहेर एउटा विशेष किसिमको शरीर पाएको हुन्छ र त्यही शरीरअनुसार नै उसले मानसिक तथा शारीरिक वा जैविक क्रियाकलापहरू गर्दछ। प्रकृतिका तीन गुणअन्तर्गत रहेर काम गर्ने मानिसका चार श्रेणी हुन्छन्। जो शुद्ध सत्त्वगुणी छन् ती ब्राह्मण हुन्, जो शुद्ध रजोगुणी छन् ती क्षत्रिय हुन् र जसमा रजोगुण र तमोगुण दुवैको मिश्रण छ ती वैश्य हुन् अनि जो पूर्णतया तमोगुणी छन् ती शूद्र हुन्। जो यिनीहरूभन्दा पनि तल छन् ती पशु हुन् वा ती पशुजीवनमा छन्। हुनत यी उपाधिहरू अस्थायी हुन्। म ब्राह्मण पनि हुन सक्दछु, क्षत्रिय पनि हुन सक्दछु र वैश्य वा अरू कुनै पनि वर्णको हुन सक्दछु तर हरेक अवस्थामा यो जीवन अस्थायी नै हुन्छ। जीवन यस्तो नश्वर छ तैपनि हामी अर्को जन्ममा के हुन्छौँ भन्ने कुरा हामीलाई थाहा छैन तर माया शक्तिको वशीभूत भएर हामीले आफूलाई शरीरिक अवधारणाका बुद्धिका कारणले म अमेरिकी, भारतीय, रूसी, या ब्राह्मण, हिन्दु, मुसलमान आदि हूँ भनेर सोच्ने गर्दछौँ। यदि हामी प्रकृतिका गुणहरूबाट यसरी बाँधिएमा हामीले यी सबै गुणभन्दा पर रहनुभएका परमेश्वरलाई भुल्नेछौँ। त्यसैले, भगवान् श्रीकृष्ण भन्नु हुन्छ— सबै जीवहरू प्रकृतिका यिनै गुणहरूद्वारा मोहित भएर यस भौतिक जगत्का पृष्ठभूमिमा स्वयम् भगवान् विराजमान् हुनुहुन्छ भन्ने कुरा बिर्सन्छन्।

मानिस, देवता, पशु इत्यादि धेरै प्रकारका जीवहरू यहाँ छन्। तीमध्ये प्रत्येक जीव प्रकृतिका अधीनमा छन् र ती सबैले दिव्य पुरुष भगवान्लाई बिर्सिसकेका छन्। जो रजोगुणी छन्, जो तमोगुणी छन् र जो सत्त्वगुणी छन् तिनले पनि परमसत्यको निराकार ब्रह्मस्वरूपभन्दा परको तत्त्वलाई बुझ्न सक्दैनन्। तिनीहरू समग्र सौन्दर्य, ऐश्वर्य, ज्ञान, बल, यश तथा त्यागमय भगवान्को साक्षात् स्वरूप देखेर मोहित भइरहन्छन्। सत्त्वगुणीहरूले पनि उहाँलाई चिन्न सक्दैनन् रजोगुणी र तमोगुणीले उहाँलाई चिन्न सक्लान् भन्ने के आशा ? कृष्णभावना प्रकृतिका यी तीन गुणहरूभन्दा माथि छ र जो यथार्थमा कृष्णभावनामृतमा स्थापित भएका छन् वास्तवमा तिनीहरू नै मुक्त हुन्।

**दैवी ह्येषा गुणमयी मम माया दुरत्यया ।**
**मामेव ये प्रपद्यन्ते मायामेतां तरन्ति ते ॥ १४ ॥**

**दैवी** — दिव्य; **हि** — निश्चय नै; **एषा** — यो; **गुणमयी** — प्रकृतिका तीन गुणले युक्त:; **मम** — मेरो; **माया** — शक्ति; **दुरत्यया** — पार पाउन धेरै कठिन; **माम्** — मेरो (ममा); **एव** — निश्चय नै; **ये** — जो; **प्रपद्यन्ते** — शरण पर्दछन्; **मायाम् एताम्** — यो माया शक्तिबाट; **तरन्ति** — पार तर्दछन्; **ते** — तिनीहरू।

**प्रकृतिका तीन गुणले युक्त मेरी दैवीशक्तिबाट पार पाउनु अत्यन्त कठिन छ। तर, जो मेरा शरणमा पर्दछन् तिनीहरूले यसलाई सजिलैसँग पार गर्न सक्दछन्।**

**तात्पर्य :** भगवान्का शक्तिहरू असङ्ख्य छन् र यी सबै शक्तिहरू दैवी हुन्। जीवात्माहरू उहाँका शक्तिका अंश हुनाले ती पनि दैवी हुन् तर भौतिक शक्तिका सम्पर्कमा रहने हुँदा तिनीहरूको मौलिक पराशक्ति ढाकिएको हुन्छ। भौतिक शक्तिबाट यसरी ढाकिएर रहने हुँदा मानिसले त्यसको प्रभावलाई सजिलै अतिक्रमण गर्न सक्दैन। परा र अपरा यी दुवै शक्ति भगवान्बाट उत्पन्न हुने हुनाले शाश्वत छन् भन्ने उल्लेख पहिले पनि गरिसकिएको छ। जीवहरू भगवान्का पराशक्तिसँग सम्बन्धित हुन्छन् तैपनि तिनीहरू अपराशक्ति अर्थात् पदार्थद्वारा दूषित हुने हुँदा तिनीहरू नित्य रूपमा मोहग्रस्त हुन्छन्। त्यसैले बद्ध जीवलाई नित्य बद्ध वा सधैँ बद्ध अवस्थामा रहने भनिन्छ। त्यसकारण, कसैले पनि जीवको बद्ध अवस्थाको इतिहासलाई भौतिक इतिहासमा जस्तै निश्चित तिथिमिति तोकेर भन्न सक्दैन। फलस्वरूप, उसलाई भौतिक प्रकृतिका बन्धनबाट मुक्त हुन साह्रै कठिन हुन्छ। प्रकृति स्वयम् पराशक्ति भए पनि त्यो शक्तिपरमात्माको इच्छाअनुसार सञ्चालित हुने हुँदा जीवात्माले त्यसलाई अतिक्रमण गर्न सक्दैन। यहाँ अपराशक्ति वा भौतिक प्रकृतिलाई दैवी प्रकृतिका रूपमा परिभाषित गरिएको छ, किनभने यसको सम्बन्ध दैवी शक्तिसँग छ र यसको सञ्चालन पनि दैवी इच्छाबाट हुन्छ। दैवी इच्छाबाट सञ्चालित हुने हुँदा यो भौतिक प्रकृति अपरा हुँदा-हुँदै पनि दृश्य जगत्को निर्माण तथा विनाशको समयमा यसले आश्चर्यजनक तरिकाले कार्य गर्दछ। यस कुरालाई वेदमा यसरी पुष्टि गरिएको छ—

*मायां तु प्रकृतिं विद्यान्मायिनं तु महेश्वरम्*
*(श्वेताश्वतर उपनिषद् ४.१०)*

अर्थात्, माया झूटो र नाशवान् छ तैपनि मायाको पृष्ठभूमिमा परमजादूगर भगवान् हुनुहुन्छ, जो परमनियन्त्रक महेश्वर हुनुहुन्छ।

गुणको अर्को अर्थ डोरी पनि हुन्छ अर्थात् बद्धजीव मोहरूपी डोरीले बलियोसँग बाँधिएको छ भन्ने कुरा यहाँ हामीले बुझ्नु पर्दछ। हात-खुट्टा बाँधिएको मानिस आफैँ त्यो बन्धनबाट मुक्त हुन सक्दैन। उसलाई त्यस बन्धनबाट मुक्त पार्न बन्धनमा नपरेको अर्को एउटा मानिसको सहयोग चाहिन्छ, अर्थात् एउटा बाँधिएको व्यक्तिले अर्को बाँधिएको व्यक्तिलाई फुकाउन सक्दैन। उसलाई बन्धनमुक्त पार्न मुक्तपुरुष नै चाहिन्छ। त्यसैले या स्वयम् भगवान् श्रीकृष्ण वा उहाँका प्रतिनिधि अर्थात् प्रामाणिक गुरुले मात्र बद्ध जीवलाई मुक्त गर्न सक्नु हुन्छ। यस्तो उत्कृष्ट सहायताबिना भवबन्धनबाट छुटकारा पाउन असम्भव छ। भक्ति अर्थात् कृष्णभावनामृत मात्र यस्तो मुक्तिका लागि सहायक सिद्ध हुन सक्दछ। भगवान् श्रीकृष्ण मायाशक्तिका अधिपति हुनुभएको हुनाले उहाँले मात्र यो जित्न नसकिने शक्तिलाई बद्ध जीवलाई मुक्त गर्ने आदेश दिन सक्नु हुन्छ। शरणागतप्रतिको अहैतुकी कृपाले गर्दा र जीवात्माप्रतिको पैतृक स्नेहले गर्दा उहाँले जीवलाई मुक्त गर्ने यस्तो आदेश दिनु हुन्छ, किनभने प्रत्येक जीव मौलिक रूपमा भगवान्‌को प्रिय सन्तान हो। त्यसैले, भगवान्‌का चरणकमलको शरणमा जानु नै निष्ठुर मायाको बन्धनबाट मुक्त हुने एकमात्र उपाय हो।

**'मामेव'** शब्द पनि अत्यन्त महत्त्वपूर्ण छ। **'माम्'** को अर्थ एकमात्र भगवान् श्रीकृष्ण (विष्णु) मा समर्पित होऊ भन्ने हो, ब्रह्मा वा शिवमा समर्पित होऊ भन्ने होइन। यद्यपि ब्रह्मा र शिव पनि अत्यन्त महान् हुनुहुन्छ र लगभग भगवान् विष्णुका समान हुनुहुन्छ तर यस्ता रजोगुण र तमोगुणका अवतारले बद्ध जीवलाई मायाको बन्धनबाट मुक्त गराउन सक्नु सम्भव छैन। अर्को शब्दमा भन्दा ब्रह्मा र शिव पनि मायाको प्रभावका अधीनमा हुनुहुन्छ। केवल भगवान् विष्णुमात्र मायाका स्वामी हुनुहुन्छ। तसर्थ, उहाँले मात्र बद्धजीवलाई मोक्ष प्रदान गर्न सक्नु हुन्छ। वेदमा (श्वेताश्वतर उपनिषद् ३.८) पनि **"तमेव विदित्वा"** अर्थात् भगवान् श्रीकृष्णलाई जान्नाले मात्र मुक्ति पाउन सम्भव छ भनी यसको पुष्टि गरिएको छ। भगवान् शिवले पनि भगवान् विष्णुका कृपाले मात्र मुक्ति पाउन सकिन्छ भन्नुभएको छ। उहाँ भन्नु हुन्छ **"मुक्तिप्रदाता सर्वेषां विष्णुरेव न संशयः"** अर्थात् भगवान् विष्णु नै सबैका मुक्तिदाता हुनुहुन्छ भन्ने कुरामा कुनै शंका छैन।

**न मां दुष्कृतिनो मूढाः प्रपद्यन्ते नराधमाः ।**
**माययापहृतज्ञाना आसुरं भावमाश्रिताः ॥ १५ ॥**

**न** — होइन; **माम्** — मेरो; **दुष्कृतिनः** — दुष्ट; **मूढाः** — मूर्ख; **प्रपद्यन्ते** —

शरण पर्दछन्; **नरअधमाः** — अधम मानिसहरू; **मायया** — माया शक्तिद्वारा; **अपहृत** — अपहरण गरिएको छ; **ज्ञानाः** — जसको ज्ञान; **आसुरम्** — आसुरी; **भावम्** — प्रकृति या स्वभाव; **आश्रिताः** — स्वीकार गरेका।

**जो अति मूर्ख छन्, जो मानिसहरूमध्ये सबैभन्दा अधम छन्, जसको ज्ञान मोहग्रस्त छ र जो असुरको जस्तो नास्तिक स्वभावका छन् त्यस्ता दुष्टहरू मेरा शरणमा आउँदैनन्।**

**तात्पर्य :** *भगवद्गीतामा* के भनिएको छ भने, भगवान् श्रीकृष्णका चरणकमलको शरण लिएपछि मात्र मानिसले प्रकृतिका कठोर नियमहरूलाई पार गर्न सक्दछ। यहाँ यस सम्बन्धमा एउटा प्रश्न उठ्छ— त्यसोभए विद्वान्, दार्शनिकहरू, वैज्ञानिकहरू, व्यापारीहरू, प्रशासकहरू तथा सबै जननेताहरू किन सर्वशक्तिमान् भगवान् श्रीकृष्णका चरणकमलका शरणमा पर्दैनन्? प्रकृतिको बन्धनबाट मुक्ति पाउनका लागि ठुलाठुला नेताहरू विभिन्न प्रकारका पद्धतिको अनुसरण गर्दै ठुलाठुला योजना बनाएर निरन्तर प्रयत्नशील रहँदै धेरै जन्म तथा वर्षहरू व्यतीत गरिरहेका छन् तर यदि त्यही मुक्ति भगवान्का चरणकमलको शरण ग्रहण गर्नासाथ प्राप्त हुन्छ भने त्यस्ता बुद्धिमान् एवं परिश्रमी पुरुषहरू किन यस्तो सजिलो उपाय ग्रहण गर्दैनन्?

*भगवद्गीताले* यसको उत्तर स्पष्ट शब्दमा दिएको छ। ब्रह्मा, शिव, कपिल कुमारगण, मनु, व्यास, देवल, असित, जनक, प्रह्लाद, बलि र यसपछिका मध्वाचार्य, रामानुजाचार्य, श्रीचैतन्य महाप्रभुजस्ता समाजका वास्तविक विद्वान्, नेताहरू र त्यस्तै अरू श्रद्धावान् दार्शनिकहरू, राजनीतिज्ञहरू, शिक्षकहरू, वैज्ञानिकहरू सर्वशक्तिमान् परमपुरुषका चरणकमलको शरणमा परेका छन् तर जो वास्तवमा दार्शनिक, वैज्ञानिक, शिक्षक र प्रशासक होइनन् र भौतिक उपलब्धिका लागि मात्र त्यस्तो दार्शनिक वैज्ञानिक भएको अभिनय गर्दछन् तिनीहरूले मात्र परमेश्वरका योजना र मार्गको अनुसरण गर्दैनन्। तिनीहरूलाई ईश्वरको कुनै जानकारी छैन। तिनीहरू केवल आफ्ना निजी सांसारिक योजनाहरू बनाउँदछन् अनि अन्त्यमा संसारका समस्याहरूको समाधान गर्नका लागि व्यर्थका प्रयासहरू गर्दछन् र स्थितिलाई झन् जटिल बनाउँदछन्। भौतिक शक्ति अत्यन्त शक्तिशाली भएको हुनाले यसले नास्तिकहरूद्वारा निर्मित अनधिकृत योजनाहरूको प्रतिरोध गर्दछ तथा यस्ता योजनाकारहरूको ज्ञानलाई निष्फल बनाइदिन्छ।

यहाँ नास्तिक योजनाकारहरूलाई **दुष्कृतिनः** वा दुष्ट भनिएको छ। कृतिको अर्थ पुण्यात्मा हो। नास्तिक योजनाका निर्माताहरू पनि कहिलेकाहीँ अत्यन्त बुद्धिमान् र सुयोग्य हुन्छन्। किनकि ठुलाठुला योजनाका लागि

त्यो असल होस् या खराब, बुद्धिको आवश्यकता पर्दछ तर नास्तिकहरूको बुद्धि भने परमेश्वरको योजनाको विरोध गर्ने कार्यमा उपयोग भएको हुन्छ। त्यसैकारण, नास्तिक योजनाकारहरूलाई **"दुष्कृति"** भनिएको हो। यसबाट तिनीहरूको बुद्धि र प्रयास विपरीत दिशातिर निर्देशित भइरहेको हुन्छ भन्ने सूचित हुन्छ।

भौतिक शक्ति परमेश्वरको पूर्ण निर्देशनमा चल्दछ भन्ने कुरा *भगवद्गीतामा* स्पष्ट उल्लेख गरिएको छ। भौतिक प्रकृतिको कुनै स्वतन्त्र सम्प्रभुत्व छैन, जसरी पदार्थको गतिअनुसार त्यसको छाया चल्दछ त्यसै गरी भौतिक शक्ति पनि परमेश्वरको छायातुल्य बनेर काम गर्दछ। तर, यो भौतिक शक्ति अत्यन्त बलवान् छ र यी नास्तिकहरू आफ्नो अनीश्वरवादी स्वभावका कारणले न परमेश्वरको शक्तिले कसरी काम गर्दछ भन्ने बुझ्दछन् न उनीहरू परमेश्वरको योजनालाई नै जान्न सक्दछन्। मोहमा आधारित तथा रजोगुण र तमोगुणमा आधारित तिनका सबै योजनाहरू त्यसरी नै ध्वस्त हुन्छन्, जसरी भौतिक दृष्टिले विद्वान्, वैज्ञानिक, दार्शनिक, शासक तथा शिक्षक हुँदाहुँदै पनि हिरण्यकशिपु एवं रावणका सारा योजनाहरू ध्वस्त भएका थिए। यी दुष्कृति अर्थात् दुष्टहरू चार प्रकारका हुन्छन्, जसको रूपरेखा यस प्रकार छ—

**(१) मूढ**—यिनीहरू कठिन परिश्रम गर्ने भारवाहक (भारी बोक्ने) पशुजस्तै अति नै मूर्ख हुन्छन्। यिनीहरू आफ्नो श्रमको फल आफैँले भोग गर्न चाहन्छन् र भगवान्‌लाई केही पनि अर्पण गर्न चाहँदैनन्। भारवाहक (भारी बोक्ने) पशुको उपयुक्त उदाहरण गधा हो। यो विचरो पशुलाई उसको स्वामी सकेसम्म काममा लगाउँदछन् र रातदिन कसका लागि यति कठिन परिश्रम गरिरहेको छु भन्ने कुरा स्वयम् त्यो गधालाई पनि थाहा हुँदैन। पेटभरि घाँस खान पाए उसलाई पुगिहाल्दछ, यसैमा ऊ सन्तुष्ट रहन्छ। स्वामी पिट्छ भन्ने डरले ऊ पूरा निदाउन पनि सक्दैन। आफ्नो कामवासना तृप्तिका लागि ऊ बारम्बार विपरीत लिङ्गी वा गधिनीको लात्ती खाइरहन्छ र ऊ त्यसैमा तृप्त हुन्छ। गधाले कहिलेकाहीँ कविता सुनाउँदछ र कहिले दर्शन पनि छाँट्दछ तर ऊ कराएको आवाजले केवल अरूको शान्ति भङ्ग हुन्छ। ठीक यस्तै अवस्था मूर्ख सकाम कर्मीहरूको पनि हुन्छ। तिनीहरूलाई "म कसका लागि काम गरिरहेको छु" भन्ने थाहा हुँदैन। कर्म यज्ञका लागि हो वा कर्म नै यज्ञ हो भन्ने कुरा पनि तिनीहरू जान्दैनन्।

धेरैजसो व्यक्तिहरू, जो आफैँले निम्त्याएको दुःखको भारी बिसाउन रातदिन कठिन परिश्रम गर्दछन्, तिनीहरू भन्छन् "हामीलाई जीवनको अमरताका सम्बन्धमा सुन्ने समय नै छैन।" यस्ता मूढहरूका लागि नाशवान्

भौतिक लाभ नै जीवनको सर्वस्व निधि हुन्छ, त्यसमध्ये तिनले आफ्नो श्रमका फलको एउटा सानो अंशमात्र किन नभोगून् त्यसैलाई ठुलो मान्दछन्। आफ्नो लाभका लागि तिनीहरू रातदिन सुत्दैनन्। तिनीहरूका आन्द्रामा घाउ होस्, अपच होस्, खाँदै नखाई रहन परोस् तिनीहरू त्यसैमा सन्तुष्ट हुन्छन् र आफ्ना मायामय स्वामीको लाभका लागि दिनरात काममा व्यस्त हुन्छन्। आफ्ना सही स्वामीलाई नचिनेर नै यी मूर्ख कर्मीहरूले आफ्नो सम्पूर्ण मूल्यवान् समय व्यर्थै मायाको सेवामा नष्ट गर्दछन्। अझ दुर्भाग्य के हो भने, तिनीहरू कहिल्यै स्वामीका पनि परमस्वामी भगवान्का शरणमा जाँदैनन् न भगवान्का विषयमा सही व्यक्तिबाट केही श्रवण गर्ने समय यिनीहरूलाई हुन्छ। विष्टा खाने सुँगुरले घिउ र चिनीबाट बनेको मिठाइतिर हेर्दैन, त्यसको कुनै वास्ता गर्दैन। त्यस्तै, मूर्ख कर्मी मानिस पनि इन्द्रियलाई आनन्द दिने यस नाशवान् जगत्का क्षुद्र समाचार निरन्तर सुनिरहन्छ तर संसारलाई गतिशील पार्ने शाश्वत जीवन-शक्तिका विषयमा सुन्ने समय उसका लागि अति कम हुन्छ।

(२) दोस्रो किसिमको दुष्कृति वा दुष्टलाई **नराधम** वा अधम व्यक्ति भनिन्छ। नरको अर्थ मानिस हो र अधमको अर्थ सबैभन्दा नीच हो। चौरासी लाख जीवयोनिमध्ये चार लाख जति मानवयोनि छन्। यीमध्ये धेरै निम्न श्रेणीका मानवयोनि पनि छन् जो धेरैजसो असभ्य वा असंस्कृत छन्। सामाजिक, राजनैतिक तथा धार्मिक जीवनमा जसका विधिनियमहरू छन् ती सभ्य मानिस हुन्। सामाजिक तथा राजनैतिक दृष्टिले उन्नत भएर पनि जसको कुनै धार्मिक सिद्धान्त वा आचरण छैन तिनीहरूलाई नराधम मानिन्छन्। ईश्वरबिनाको कुनै धर्म हुँदैन, किनभने धार्मिक नियमहरू पालन गर्ने उद्देश्य नै परमसत्यलाई जान्नु र मानवसँग रहेको उहाँको सम्बन्धलाई आत्मसात गर्नु हो। गीतामा भगवान्ले स्पष्ट रूपमा उहाँभन्दा माथि कोही पनि छैन र उहाँ नै परमसत्य हुनुहुन्छ भन्ने कुरा व्यक्त गर्नुभएको छ। मानवजीवनको सुसंस्कृत रूप भन्नु नै सर्वशक्तिमान् परमसत्य भगवान् श्रीकृष्णसँग रहेको विस्मृत सम्बन्धचेतनालाई पुनर्जागृत पार्नु हो, जसले यस्तो सुअवसरलाई गुमाइरहेको छ त्यो नराधमको श्रेणीमा पर्दछ। शास्त्रीय भनाइबाट हामी के जानकारी पाउँदछौँ भने आमाका गर्भमा रहँदा गर्भस्थ शिशु अत्यन्त कष्टप्रद अवस्थामा छट्पटाइरहेको हुन्छ र त्यस समयमा उसले आफ्नो उद्धारका लागि भगवान्सँग प्रार्थना गर्दै बाहिर आएपछि केवल भगवान्को पूजा गर्नेछु भन्ने वाचा गर्दछ। सङ्कट परेको समयमा ईश्वरलाई पुकार्नु प्रत्येक जीवको स्वभाव हो, किनभने ईश्वरसँग उसको पुरानो र शाश्वत सम्बन्ध छ। तर, उद्धार भएपछि वा जन्मिएपछि बालकले जन्मको पीडा पनि भुल्दछ र मायाशक्तिको वशमा परेर आफ्नो उद्धारकर्तालाई पनि बिर्सन्छ।

बालकमा लुकेको सुषुप्त दिव्य चेतनालाई जागृत गराउने कर्तव्य अभिभावकको हो। वर्णाश्रम व्यवस्थामा मनुस्मृतिअनुसार बालकमा ईश्वरीय चेतना जागृत पार्ने उद्देश्यले दस प्रकारका शुद्धीकरण संस्कारको विधानको व्यवस्था गरी धर्मको पथ-प्रदर्शन गरिएको छ। तर, आज विश्वको कुनै पनि भागमा कुनै पनि संस्कारको दृढतापूर्वक पालन भएको छैन। फलस्वरूप ९९.९% जनसङ्ख्या नराधम भएका छन्। यसरी सम्पूर्ण जनसङ्ख्या नराधम भइसकेपछि स्वभावतः त्यसका समग्र तथाकथित शिक्षाहरू पनि भौतिक प्रकृतिको सर्वशक्तिमत्ताद्वारा अर्थहीन प्रमाणित भएका छन्। *भगवद्गीताको* मापदण्डअनुसार विद्वान् पुरुष तिनीहरू नै हुन् जो ब्राह्मण, कुकुर, गाई, हात्ती र चण्डाललाई पनि समान दृष्टिले हेर्दछन्। सही भक्तको दृष्टिकोण पनि यस्तै हुन्छ। गुरुरूप ईश्वरका अवतार श्रीनित्यानन्द प्रभुले जगाई तथा मधाई नाम गरेका विशिष्ट नराधमहरूको उद्धार गर्नुभएर शुद्ध भक्तले कसरी नराधमलाई पनि दया गर्दछ भन्ने कुरा सिद्ध गर्नुभएको छ। तसर्थ, भगवान्बाट बहिष्कृत भएका नराधमलाई भक्तले मात्र आफ्नो अनुकम्पाद्वारा पुनः आध्यात्मिक चेतना प्रदान गरी उद्धार गर्न सक्दछ।

श्रीचैतन्य महाप्रभुले भक्तहरूका क्रियाकलाप वा भागवत्-धर्मको प्रचार गर्दा भगवान्को सन्देशलाई विनम्रभावले श्रवण गर्ने निर्देशन दिनुभएको छ। *भगवद्गीता* नै भगवान्का सन्देशहरूको सार हो। यसलाई विनम्रतापूर्वक श्रवण गरे मात्र पनि अधमभन्दा अधम मानिसको समेत उद्धार हुन सक्दछ। तर, दुर्भाग्य के छ भने मानिसहरू परमेश्वरको सदिच्छाप्रति समर्पणभाव राख्न परेमा उहाँको सन्देशसम्म पनि सुन्न चाहँदैनन्। यस्ता तल्ला स्तरका मानिसहरू वा नराधमहरूले मानिसको प्रमुख कर्तव्यको पूर्ण अवहेलना गर्दछन्।

(३) **दुष्कृतिः माययापहृतज्ञानाः** भएकाहरू यो तेस्रो श्रेणीमा पर्दछन्। अर्थात्, यस्ता व्यक्तिहरू जसको विशद ज्ञान पनि भौतिक माया शक्तिका प्रभावले गर्दा व्यर्थ भएको छ, तिनलाई **माययापहृतज्ञानाः** भनिन्छ। तिनीहरू अधिकांश अत्यन्त विद्वान् हुन्छन्। त्यस्ता व्यक्तिहरूमा महान् दार्शनिकहरू, कवि, साहित्यकारहरू, वैज्ञानिकहरू पर्दछन् तर माया शक्तिले यिनीहरूलाई पनि भ्रमित बनाइदिन्छ। फलस्वरूप यिनीहरू परमेश्वरको अवज्ञा गर्दछन्।

यस समय **माययापहृतज्ञानाः** भएकाहरूको सङ्ख्या ठुलो छ। कतिसम्म भने *भगवद्गीताका* विद्वान्हरूका बीचमा पनि यस्ता व्यक्तिहरू छन्। गीतामा अत्यन्त राम्रोसँग स्पष्ट भाषामा श्रीकृष्ण नै भगवान् हुनुहुन्छ भनिएको छ। उहाँको बराबरीमा पुग्ने र उहाँभन्दा ठुलो कोही छैन। उहाँ सम्पूर्ण मानवका आदिपिता हुनुहुन्छ र ब्रह्माजीका पनि पिता हुनुहुन्छ। वास्तवमा

भगवान् श्रीकृष्ण ब्रह्माका मात्र हैन सबै जीवयोनिहरूका पनि पिता हुनुहुन्छ। उहाँ निराकार ब्रह्म तथा परमात्माका मूल स्रोत हुनुहुन्छ र जीवात्माभित्र रहने परमात्मा पनि उहाँको अंश हो। उहाँ नै सबैका उद्गम वा प्रारम्भ हुनुहुन्छ, त्यसैले सबैजना उहाँको चरणकमलको शरणमा पर्नु पर्दछ भन्ने सल्लाह यहाँ दिइएको छ। यस किसिमको स्पष्ट भनाइ हुँदाहुँदै पनि **माययापहृतज्ञाना:** भएकाहरू भगवान्को उपहास गर्दछन् र उहाँलाई एउटा साधारण मानिस मात्र हुनुहुन्छ भन्ने ठान्दछन्। यो भाग्यशाली मानवको स्वरूप भगवान्को दिव्य तथा शाश्वत स्वरूपअनुरूपको रचना हो भन्ने कुरा तिनीहरू बुझ्न सक्दैनन्।

**माययापहृतज्ञाना:** वर्गका मानिसहरूद्वारा गरिएका गीताका सबै अनधिकृत व्याख्याहरू परम्परागत प्रक्रियाको सीमाभन्दा बाहिर छन् र ती व्याख्याहरू आध्यात्मिक ज्ञानका मार्गमा अवरोधजस्ता बनेर रहेका छन्। यस्ता मायालेग्रस्त व्याख्याकारहरू न स्वयम् भगवान्का चरणको शरणमा पर्दछन् न अरूलाई नै उहाँका शरणमा जाने विधि सिकाउँदछन्।

(४) दुष्कृतिको अन्तिम वर्गलाई **आसुरं भावमाश्रिता:** भनिन्छ अर्थात्, यिनीहरू आसुरी सिद्धान्तका अनुयायी हुन्छन्। यो श्रेणीका मानिसहरू खुला रूपमा नास्तिक हुन्छन्। यिनीहरूमध्ये केहीको तर्क हुन्छ, ईश्वर कहिल्यै पनि यो भौतिक संसारमा अवतरित हुन सक्दैन तर यिनीहरू यो कसरी हुन सक्दैन भन्ने ठोस प्रमाण वा कारण प्रस्तुत गर्न असमर्थ हुन्छन्। कतिपय मानिसहरू भगवान्लाई निर्विशेष रूपका अधीनमा रहेको मान्दछन्, जुन गीतामा भनिएको भन्दा ठीक विपरीत कुरा हो। नास्तिकहरू भगवान्सँग द्वेष गर्दछन् र आफ्नै मस्तिष्कका कारखानामा उत्पन्न भएका विभिन्न अवैध अवतारहरू प्रस्तुत गर्ने गर्दछन्। यस्ता मानिसहरूको जीवनको एक मात्र उद्देश्य भगवान्लाई अस्वीकार गर्न हो। यस्ता मानिसहरू कहिल्यै पनि भगवान् श्रीकृष्णका चरणको शरणमा जान सक्दैनन्।

दक्षिण भारतका श्रीयामुनाचार्य आलबन्दरूले भन्नुभएको छ— "हे प्रभु! नास्तिक सिद्धान्त राख्नेहरूले हजुरलाई चिन्न सक्दैनन्। यद्यपि हजुर विलक्षण गुण, रूप तथा लीलाहरूले सम्पन्न हुनुहुन्छ, सबै शास्त्रहरूले हजुरको विशुद्ध सत्त्वमय व्यक्तित्व भएको कुरालाई पुष्टि गरेका छन् अनि दैवी गुणद्वारा सम्पन्न र दिव्य ज्ञानमा अवस्थित प्रसिद्ध आचार्यहरूले पनि आफ्ना ज्ञानका गहिराइमा पुगेर हजुरको व्यक्तित्वलाई स्वीकार गरेका छन्।

तसर्थ १. अत्यन्त मूर्ख व्यक्ति, २. नराधम, ३. भ्रमित मनोधर्मी चिन्तकहरू र ४. नास्तिक व्यक्ति, यी चार प्रकारका व्यक्तिहरू, दुष्कृति हुन् र यिनीहरू

कहिल्यै पनि भगवान्का चरणकमलका शरणमा जाँदैनन्। सम्पूर्ण शास्त्र तथा आचार्यहरूले जतिसुकै उपदेश दिए पनि यिनीहरू त्यो सुन्दैनन्।

**चतुर्विधा भजन्ते मां जनाः सुकृतिनोऽर्जुन ।**
**आर्तो जिज्ञासुरर्थार्थी ज्ञानी च भरतर्षभ ॥ १६ ॥**

**चुतः विधा** — चार प्रकारका; **भजन्ते** — सेवा गर्दछन्; **माम्** — मलाई; **जनाः** — मानिसहरू; **सुकृतिनः** — पुण्यात्मा; **अर्जुन** — हे अर्जुन; **आर्तः** — विपत्तिग्रस्त (पीडित); **जिज्ञासुः** — ज्ञान जान्नचाहने; **अर्थ अर्थी** — भौतिक लाभको इच्छा राख्नेहरू; **ज्ञानी** — वस्तुलाई सही रूपमा चिन्नेहरू (तत्त्वज्ञ); **च** — पनि; **भरत ऋषभ** — हे श्रेष्ठ भरतवंशी अर्जुन।

**हे भरतश्रेष्ठ! विपत्तिमा परेका, ज्ञानको चाहना भएका, धनको चाहना भएका र ब्रह्मज्ञानको खोजीमा लागेका — यी चार प्रकारका पुण्यात्माहरूले मेरो सेवा गर्दछन्।**

**तात्पर्य :** दुष्टता वा दुष्कृतिलाई मन नपराउने र दृढतापूर्वक शास्त्रीय विधिविधानको पालन गर्ने व्यक्तिहरू पनि यहाँ छन्। यसरी शास्त्रीय विधिविधानलाई पालन गर्ने, नैतिक तथा सामाजिक नियमहरू अनुसरण गर्ने र अलिअलि परमेश्वरको भक्ति पनि गरिरहने व्यक्तिहरूलाई सुकृतिनः भनिन्छ। यस्ता व्यक्तिहरू चार प्रकारका छन् जो पीडित छन् वा दुःखी छन्, जसलाई धनको आवश्यकता परेको छ, जो जिज्ञासु छन्, अनि जसलाई परमसत्यको ज्ञान छ। यी मानिसहरू विभिन्न परिस्थितिमा भगवद्भक्तिमा आउँदछन् तर यिनीहरू शुद्ध भक्त होइनन्, किनभने यी सबै विभिन्न परिस्थितिवश परमेश्वरको भक्ति गर्दछन् र त्यसका सट्टामा आफ्ना कतिपय महत्त्वाकाङ्क्षाहरू पूरा गराउन चाहन्छन्। शुद्ध भक्ति निष्काम हुन्छ र त्यसमा कुनै भौतिक लाभको आकाङ्क्षा हुँदैन। भक्तिरसामृतसिन्धुको (१.१.११) मा शुद्ध भक्तिको परिभाषा यसरी गरिएको छ—

*अन्याभिलाषिताशून्यं ज्ञानकर्माद्यनावृतम् ।*
*आनुकुल्येन कृष्णानुशीलनं भक्तिरुत्तमा ॥*

अर्थात् "मानिसले कुनै दार्शनिक चिन्तन वा सकाम कर्मद्वारा भौतिक फल वा लाभ पाउने इच्छा नराखी अनुकूल भाव लिएर परमेश्वर कृष्णको दिव्य प्रेमभक्तिमा संलग्न हुनु पर्दछ। यसैलाई शुद्ध भक्ति भनिन्छ।"

जब यी चार प्रकारका मानिसहरू परमेश्वरप्रति भक्ति राखेर उहाँको निकट आउँदछन् र शुद्ध भक्तको सङ्गत पाएर पूर्णतया शुद्ध हुन्छन् अनि

तिनीहरू पनि शुद्ध भक्त बन्दछन्। जहाँसम्म दुष्ट (दुष्कृतःहरू)को कुरा छ तिनीहरूका लागि भक्ति अत्यन्त कठिन प्रमाणित हुन्छ। किनभने तिनीहरूको जीवन स्वार्थपूर्ण, अनियमित तथा आध्यात्मिक लक्ष्यविहीन हुन्छ तैपनि संयोगवश शुद्ध भक्तको सङ्गत प्राप्त गर्नसकेका खण्डमा तिनीहरूमध्ये केही शुद्ध भक्त नै पनि हुन सक्दछन्।

जो सधैँ सकाम कर्ममा व्यस्त रहन्छन् तिनीहरू कुनै भौतिक आपत्ति पर्दा भगवान्सँग आउँछन् र शुद्ध भक्तको सङ्गतमा रहन्छन् अनि यसरी विपत्तिवश भगवान्का भक्त बन्दछन्। जो केवल निराश छन् तिनीहरू पनि कहिलेकाहीँ शुद्ध भक्तको सङ्गतमा आउँछन् र ईश्वरका विषयमा जान्ने जिज्ञासा राख्दछन्। त्यसै गरी शुष्क दार्शनिक चिन्तकहरू पनि ज्ञानका प्रत्येक क्षेत्रबाट आत्तिएपछि कहिलेकाहीँ ईश्वरको विषयमा जान्न चाहन्छन् अनि भगवान्को भक्ति गर्न थाल्दछन् र यसरी तिनीहरू निराकार ब्रह्म तथा अन्तर्यामी परमात्माको ज्ञानलाई पार गरी भगवत्कृपा र उहाँका शुद्ध भक्तको सङ्गत पाएर साकार भगवान्को नजिक आइ पुग्दछन्। समग्रमा भन्दा जब आर्त, जिज्ञासु, ज्ञानी तथा अर्थार्थीहरू समग्र भौतिक इच्छाहरूबाट मुक्त हुन्छन् र भौतिक आसक्तिमा रहेर आध्यात्मिक उन्नति हुन सक्दैन भन्ने बुझ्दछन् अनि तिनीहरू पनि शुद्ध भक्त बन्न सक्दछन्। जबसम्म यस्तो शुद्ध भक्तिको अवस्था प्राप्त हुँदैन तबसम्म भगवान्को दिव्य सेवामा लागेका भक्त पनि सकाम कर्ममा ओर्लेर सांसारिक ज्ञानको खोजीमा दौडने सम्भावना हुन्छ। तसर्थ, शुद्ध भक्तिको अवस्था प्राप्त गर्न मानिसले यी सबै कुराहरूलाई पार गर्नु पर्दछ।

**तेषां ज्ञानी नित्ययुक्त एकभक्तिर्विशिष्यते ।**
**प्रियो हि ज्ञानिनोऽत्यर्थमहं स च मम प्रियः ॥ १७ ॥**

**तेषाम्** — तीमध्ये; **ज्ञानी** — ज्ञानवान्; **नित्ययुक्तः** — सधैँ तत्पर; **एक** — एकमात्र; **भक्तिः** — भक्तिमा; **विशिष्यते** — विशिष्ट हुन्छ; **प्रियः** — अतिशय प्यारो; **हि** — निश्चय नै; **ज्ञानिनः** — ज्ञानवान् व्यक्तिप्रति; **अत्यर्थम्** — अत्यधिक; **अहम्** — म हूँ; **सः** — त्यो; **च** — पनि; **मम** — मेरा लागि; **प्रियः** — प्यारो।

**यिनीहरूमध्ये पनि जो परमज्ञानी छ र शुद्ध भक्तिमा लागिरहेको छ, त्यही सर्वश्रेष्ठ हो, किनभने म उसका लागि अत्यन्त प्रिय हुन्छु र ऊ मेरा लागि पनि अत्यन्त प्रिय हुन्छ।**

**तात्पर्य :** भौतिक इच्छाका सबै संक्रमणहरूबाट मुक्त भएका पीडित, जिज्ञासु, धन चाहने तथा ज्ञानीहरू नै शुद्ध भक्त बन्न सक्दछन्। तर, तिनीहरूमध्ये जो

परमसत्यको ज्ञाता छ र भौतिक इच्छारहित छ त्यो मात्र भगवान्‌को वास्तविक शुद्ध भक्त हुन सक्दछ। यी चार वर्गमध्ये जुन भक्त ज्ञानी छ र साथै भगवान्‌को भक्तिमा पनि संलग्न रहेको छ, भगवान्‌ले त्यसैलाई सर्वश्रेष्ठ हो भन्नुभएको छ। ज्ञानको अनुसन्धानबाट मानिसले आफ्नो आत्मा आफ्नो भौतिक शरीरभन्दा पृथक् हो भन्ने अनुभूति गर्दछ र ? अझै प्रगति गर्दैजाँदा उसले निर्विशेष ब्रह्म तथा परमात्माको पनि ज्ञान प्राप्त गर्दछ। जब ऊ पूर्णरूपले शुद्ध हुन्छ त्यस समय उसलाई ईश्वरको नित्यदास हुनु नै मेरो स्वाभाविक स्थिति हो भन्ने अनुभूति हुन्छ। यति मात्र होइन, शुद्ध भक्तको सङ्गतमा परेपछि आर्त, जिज्ञासु, धनको इच्छुक र ज्ञानी पनि स्वतः शुद्ध हुन्छन् तर प्रारम्भिक अवस्थादेखि नै परमेश्वरको पूर्णज्ञानमा अवस्थित रहेको र साथै भगवान्‌को भक्तिमा पनि संलग्न रहेको व्यक्ति भगवान्‌लाई अति प्यारो हुन्छ। किनभने भगवान्‌को दिव्य ज्ञानमा अवस्थित भएको व्यक्ति भक्तिद्वारा कतिसम्म संरक्षित हुन्छ भने उसलाई भौतिक संक्रमणले स्पर्श गर्न पनि सक्दैन।

**उदाराः सर्व एवैते ज्ञानी त्वात्मैव मे मतम् ।**
**आस्थितः स हि युक्तात्मा मामेवानुत्तमां गतिम् ॥ १८ ॥**

**उदाराः** — विशाल हृदय भएका; **सर्व** — सबै; **एव** — निश्चय नै; **एते** — यी; **ज्ञानी** — ज्ञानमा अवस्थित व्यक्ति; **तु** — तर; **आत्मा एव** — म समानको; **मे** — मेरो; **मतम्** — मत (विचार); **आस्थित** — अवस्थित; **सः** — त्यो; **हि** — निश्चय नै; **युक्त आत्मा** — भक्तिमा संलग्न; **माम्** — मैमा; **एव** — निश्चय नै; **अनुत्तमाम्** — परम, सर्वोच्च; **गतिम्** — लक्ष्य।

**यी सबै भक्तहरू निस्सन्देह उदार आत्मा हुन्, तथापि जो मेरो ज्ञानमा अवस्थित छन् तिनीहरूलाई म आफैँ समान ठान्दछु। मेरो दिव्य सेवामा संलग्न रहेर उसले सर्वोच्च तथा पूर्णलक्ष्यका रूपमा मलाई नै प्राप्त गर्नेछ।**

**तात्पर्य :** यसको अर्थ थोरै वा अपूर्ण ज्ञान भएका भक्तहरू भगवान्‌का प्रियपात्र हुँदैनन् भन्ने होइन। भगवान् भन्नु हुन्छ— ती सबै उदार हुन्, किनभने जुनसुकै उद्देश्य भए पनि यदि केही भगवान्‌सँग आउँदछ त्यसलाई महात्मा भनिन्छ। यदि भक्तले भक्तिको सट्टामा केही लाभको चाहना राखे पनि भगवान्‌ले त्यसलाई स्नेहको विनिमयका रूपमा स्वीकार गर्नु हुन्छ। स्नेहवश भक्तहरू भगवान्‌सँग केही भौतिक लाभको याचना पनि गर्दछन् र आफूले चाहेको वस्तु पाएपछि अत्यन्त प्रसन्न भएर तिनीहरू भगवद्भक्तिमा अझ अधि बढ्न थाल्दछन्। तर पूर्णज्ञानमा अवस्थित भक्त भगवान्‌का लागि अति प्रिय हुन्छन्, किनभने उनको

एक मात्र उद्देश्य नै प्रेम तथा भक्तिपूर्वक परमेश्वरको सेवा गर्नु हुन्छ। यस्तो भक्त भगवान्‌को सेवा नगरी एक क्षण पनि बस्न सक्दैन। यसै गरी भगवान् पनि आफ्ना भक्तलाई अत्यन्त माया गर्नु हुन्छ, उहाँ एक क्षण पनि उसबाट अलग रहन सक्नु हुन्न। *श्रीमद्भागवत्* (९.४.६८) मा भगवान् भन्नु हुन्छ—

*साधवो हृदयं मह्यं साधूनां हृदयं त्वहम् ।*
*मदन्यत्ते न जानन्ति नाहं तेभ्यो मनागपि ॥*

"भक्तहरू सधै मेरा हृदयमा निवास गर्दछन् र म पनि भक्तहरूको हृदयमा निवास गर्दछु। भक्तले मबाहेक अरू केही जान्दैन र म पनि मेरा भक्तलाई बिर्सिन सक्दिनँ। शुद्ध भक्त र मेराबीचमा अत्यन्त घनिष्ठ सम्बन्ध हुन्छ। ज्ञानवान् शुद्ध भक्तहरू कहिल्यै पनि आध्यात्मिक सम्पर्कबाट बाहिर रहँदैनन्, त्यसैले तिनीहरू मेरा लागि अत्यन्त प्रिय हुन्छन्।"

**बहूनां जन्मनामन्ते ज्ञानवान्मां प्रपद्यते ।**
**वासुदेवः सर्वमिति स महात्मा सुदुर्लभः ॥ १९ ॥**

**बहूनाम्** — धेरै धेरै; **जन्मनाम्** — बारम्बार दोहोरिने जन्म र मृत्युको; **अन्ते** — अन्त्यमा; **ज्ञानवान्** — ज्ञानी व्यक्ति; **माम्** — ममा; **प्रपद्यते** — शरण पर्दछ; **वासुदेवः** — भगवान् श्रीकृष्ण; **सर्वम्** — सबै कुरा; **इति** — यसरी; **सः** — त्यो; **महाआत्मा** — महान् आत्मा; **सुदुर्लभः** — देख्न अत्यन्त दुर्लभ छ।

**धेरै धेरै जन्मजन्मान्तरपछि वास्तविक ज्ञानी भक्त मलाई नै समग्र कारणहरूका पनि कारण ठानेर मेरो शरणमा आइ पुग्दछ। यस्तो महात्मा अत्यन्त दुर्लभ हुन्छ।**

**तात्पर्य :** जीवले धेरै-धेरै जन्मपर्यन्त भक्तिपूर्ण कार्य वा दिव्य कार्यहरू सम्पन्न गरेपछि मात्र भगवान् नै आध्यात्मिक अनुभूतिका परमलक्ष्य हुनुहुन्छ भन्ने दिव्य तथा शुद्ध ज्ञान प्राप्त गर्न सक्दछ। आत्मसाक्षात्कारको प्रारम्भिक कालमा भौतिकवादप्रतिको आसक्तिलाई छोड्ने प्रयत्न गर्दा उसको झुकाव निर्विशेषवादतिर बढ्न सक्दछ तर अझ अघि बढ्दै जाँदा आध्यात्मिक जीवनका गतिविधिद्वारा पनि भक्तिका मार्गमा अग्रसर हुन सकिँदोरहेछ भन्ने कुरा उसले बुझ्न थाल्दछ। यस्तो अनुभूतिले उसलाई भगवान्‌प्रति आसक्ति उत्पन्न गराइदिन्छ र अन्त्यमा उहाँको शरणमा पुग्दछ। यस्तो समयमा मात्र उसले भगवान् श्रीकृष्णको कृपा नै सबै कुरा हो भन्ने बुझ्दछ र उहाँ नै सबै कारणका पनि कारण हुनुहुन्छ तथा यो जगत् उहाँदेखि स्वतन्त्र छैन भन्ने पनि थाहा पाउँदछ। यो भौतिक जगत्‌लाई उसले आध्यात्मिक विविधताहरूको विकृत प्रतिविम्ब मात्र भएको

अनुभव गर्न थाल्दछ। उसले प्रत्येक वस्तुसँग परमेश्वर श्रीकृष्णको सम्बन्ध छ भन्ने पनि अनुभव गर्दछ र यसरी उसले प्रत्येक वस्तु वासुदेव श्रीकृष्णसँग सम्बन्धित रहेको निर्णय गर्दछ। यस्तो वासुदेवमय विश्वदृष्टिको विकास भएपछि मानिसले आफ्नो परमलक्ष्यका रूपमा भगवान् श्रीकृष्णको पूर्ण शरणागति ग्रहण गर्दछ। यस्ता शरणागत महात्मा अत्यन्त दुर्लभ हुन्छन्।

श्वेताश्वतर उपनिषद् ३/१४-१५ मा यो श्लोकको निकै राम्रो व्याख्या भएको पाइन्छ—

*सहस्रशीर्षा पुरुषः सहस्राक्षः सहस्रपात् ।*
*स भूमिं विश्वतो वृत्वात्यातिष्ठत् दशांगुलम् ॥*
*पुरुष एवेदं सर्वं यद्भूतं यच्च भाव्यम् ।*
*उतामृतत्त्वस्येशानो यदन्नेनातिरोहति ॥*

छान्दोग्य उपनिषद् (५.१.१५) मा उल्लिखित छ—**न वै वाचो न चक्षूंषि न श्रोत्राणि न मनांसीत्याचक्षते प्राण इति एवाचक्षते प्राणो ह्यवैतानि सर्वाणि भवन्ति।** जीवात्माको शरीरमा न त वाक्शक्ति, न दृष्टिशक्ति, न श्रवणशक्ति तथा विचारशक्ति नै प्रमुख तत्त्व हुन्। सम्पूर्ण शक्ति वा क्रियाकलापको केन्द्र त जीवनशक्ति हो, त्यो नै प्रमुख हो। त्यसै गरी भगवान् वासुदेव वा भगवान् श्रीकृष्ण नै सम्पूर्ण पदार्थमा अवस्थित मूल सत्ता हुनुहुन्छ। यस शरीरमा बोल्ने, हेर्ने, सुन्ने तथा सोच्ने आदि शक्तिहरू छन् तर भगवान्सँग सम्बन्धित नभएका खण्डमा यी महत्त्वपूर्ण हुँदैनन्। किनभने भगवान् वासुदेव सर्वव्यापी हुनुहुन्छ र प्रत्येक वस्तुमा भगवान् वासुदेव हुनुहुन्छ, त्यसैले पूर्णज्ञानमा अवस्थित भक्त उहाँको शरणमा पर्दछ। यसको तुलना *भगवद्गीता* (७.१७) तथा (११.४०)को भनाइसँग गर्न सकिन्छ।

**कामैस्तैस्तैर्हृतज्ञानाः प्रपद्यन्तेऽन्यदेवताः ।**
**तं तं नियममास्थाय प्रकृत्या नियताः स्वया ॥ २० ॥**

**कामैः** — इच्छाद्वारा; **तैः तैः** — ती ती; **हृत** — हरण भएको; **ज्ञानाः** — ज्ञानले; **प्रपद्यन्ते** — शरण लिन्छन्; **अन्य** — अरू; **देवताः** — देवताहरूमा; **तम् तम्** — त्यही त्यही; **नियमम्** — नियमहरूको; **आस्थाय** — पालन गर्दै; **प्रकृत्या** — स्वभावले; **नियताः** — नियन्त्रित; **स्वया** — आफैँद्वारा।

**भौतिक आसक्तिद्वारा जसको बुद्धि अपहरण भएको छ तिनीहरू देवताहरूको शरणमा जान्छन् र आ-आफ्नो स्वभावअनुसार पूजा उपासनाका निर्दिष्ट विधिविधानहरूको पालना गर्दछन्।**

**तात्पर्य :** सबै भौतिक संक्रमणबाट मुक्त भइसकेका व्यक्तिहरू भगवान्‌का शरणमा आउँदछन् र उहाँको भक्तिमा संलग्न हुन्छन्। पूर्णतया भौतिक संक्रमण नपखालिएसम्म मानिसहरू स्वभावले अभक्त हुन्छन्। तर, कतिपय मानिसहरू भौतिक कामनाहरू हुँदाहुँदै पनि भगवान्‌तर्फ आकर्षित हुन्छन् र बहिरङ्गा प्रकृतिद्वारा त्यति आकृष्ट हुँदैनन्, किनभने तिनीहरू सही उद्देश्यतिर अग्रसर भइरहेका हुन्छन्। त्यसैले, तिनीहरू छिटै नै भौतिक कामेच्छाबाट मुक्त हुन सक्दछन्। *श्रीमद्‌भागवत्*मा भनिएको छ— मानिस सम्पूर्ण भौतिक चाहनाबाट मुक्त भएको शुद्ध भक्त होस् वा भौतिक इच्छाहरूले पूर्ण भएको होस् वा भौतिक संक्रमणहरूबाट मुक्ति पाउने चाहना भएको होस्, जुनसुकै स्तरमा भए पनि हरेक परिस्थितिमा उसले भगवान् वासुदेवको शरण ग्रहण गर्नु पर्दछ र उहाँको उपासनामा लाग्नु पर्दछ। *श्रीमद्‌भागवत्* (२.३.१०) मा यसरी भनिएको छ।

*अकामः सर्वकामो वा मोक्षकाम उदारधीः ।*
*तीव्रेण भक्तियोगेन यजेत पुरुषं परम् ॥*

आध्यात्मिक चेतना हराएका अल्पज्ञानी व्यक्तिहरू आफ्ना भौतिक चाहनाहरूको तत्काल पूर्ति गर्न देवताहरूको शरणमा पर्दछन्। रजोगुण र तमोगुणजस्ता निम्नस्तरका गुणबाट सञ्चालित भएकाले यस्ता व्यक्तिहरू सामान्यतया भगवान्‌का शरणमा जाँदैनन् र विभिन्न देवताहरूको उपासनामा लाग्दछन्। पूजाका विधिविधानहरू पालन गर्नपाए तिनीहरू सन्तुष्ट हुन्छन्। देवताहरूको पूजा गर्ने यी व्यक्तिहरू सानासाना इच्छाबाट प्रेरित हुने गर्दछन् र परमलक्ष्यसम्म कसरी पुग्नु पर्दछ भन्ने कुरा जान्दैनन्। तर भगवद्‌भक्त कहिल्यै पनि त्यसरी पथभ्रष्ट हुँदैन। हुनत वैदिक साहित्यमा विभिन्न उद्देश्यका लागि भिन्न-भिन्न देवताहरूको पूजा गर्ने विधिविधानहरू पनि छन्। जस्तै-रोगी मानिसले सूर्यको उपासना गर्ने विधि छ। त्यसकारण भगवद्‌भक्तिमा संलग्न नभएको अभक्तले विशेष उद्देश्यको पूर्तिका लागि परमेश्वरको पूजा गर्नुभन्दा देवताको पूजा गर्नु राम्रो हुन्छ भन्ने सोच्दछन्। तर, शुद्ध भक्तले भगवान् श्रीकृष्ण नै सबैका स्वामी हुनुहुन्छ भन्ने कुरा जानिसकेका हुन्छन्। चैतन्य चरितामृत (आदि लीला ५.१४२) मा भनिएको छ— **एकले ईश्वर कृष्ण आर सब भृत्य।** अर्थात् केवल भगवान् श्रीकृष्ण नै एक मात्र स्वामी हुनुहुन्छ र अरू सबै उहाँका दास हुन्। त्यसकारण, शुद्ध भक्तहरू आफ्ना भौतिक आवश्यकता पूर्तिका लागि कहिल्यै पनि देवताहरूकहाँ जाँदैनन्। उनीहरू सधैँ परमेश्वरमाथि नै निर्भर रहन्छन्, शुद्ध भक्त भगवान्‌ले जे दिनु हुन्छ त्यसैमा सन्तुष्ट रहने गर्दछन्।

**यो यो यां यां तनुं भक्तः श्रद्धयार्चितुमिच्छति ।**
**तस्य तस्याचलां श्रद्धां तामेव विदधाम्यहम् ॥ २१ ॥**

**यः यः** — जस जसले; **याम् याम्** — जुनजुन; **तनुम्** — देवताको रूपलाई; **भक्तः** — भक्तले; **श्रद्धया** — श्रद्धाले; **अर्चितुम्** — पूजा गर्नका लागि; **इच्छति** — इच्छा गर्दछ; **तस्य तस्य** — त्यस त्यसको; **अचलां** — स्थिर; **श्रद्धाम्** — श्रद्धा (विश्वास); **ताम्** — त्यो; **एव** — निश्चय नै; **विदधामि** — दिन्छु; **अहम्** — मैले।

**म प्रत्येक जीवका हृदयमा परमात्मा स्वरूपले विराजमान छु। यदि कसैले कुनै देवताको पूजा गर्ने इच्छा राखेमा उसले ती विशेष देवताको भक्ति गर्न सकोस् भनी म त्यही देवतामा उसको श्रद्धा स्थिर गरिदिन्छु।**

**तात्पर्य :** ईश्वरले सबैलाई स्वतन्त्रता प्रदान गर्नुभएको छ। अतः यदि कसैले भौतिक फलभोगको इच्छा राखेर कुनै देवतासँग भक्तिपूर्वक कुनै सुविधाको याचना गरेको भए पनि उसको हृदयमा निवास गर्नुहुने परमात्माले उसको इच्छा बुझेर उसले चाहेको कुरा पुऱ्याइदिनु हुन्छ। सम्पूर्ण जीवका परमपिता भएका नाताले उहाँ कसैको स्वतन्त्रतामा हस्तक्षेप गर्नुहुन्न बरु तिनीहरूलाई ती सबै सुविधा उपलब्ध गराइदिनु हुन्छ, जसबाट तिनीहरूले आफ्ना भौतिक चाहना पूरा गर्नसकून्। कसैले प्रश्न गर्न सक्दछः सर्वशक्तिमान् ईश्वरले जीवहरूलाई भौतिक भोगका यस्ता सुविधाहरू प्रदान गरेर मायाको बन्धनमा किन फँसाउनुभएको होला? यसको उत्तरमा के भन्न सकिन्छ भने, यदि परमेश्वरले परमात्मा भएका नाताले यस्ता सुविधाहरू प्रदान नगर्ने भए ईश्वरले स्वतन्त्रता दिनुभएको छ भन्नुको कुनै अर्थ रहँदैन? तसर्थ, जसले जे चाहन्छ त्यसलाई त्यो काम गर्न उहाँ पूर्ण स्वतन्त्रता प्रदान गर्नु हुन्छ। तर, हामीले उहाँको परमउपदेश *श्रीमद्भगवद्गीतामा* पाउँदछौँ। त्यहाँ भनिएको छ — मानिसले सबै कर्महरू परित्याग गरेर मेरो शरणमा आउनु पर्दछ। यसैबाट मानिस सुखी रहन सक्नेछ।

जीवात्मा र देवता दुवै भगवान्को इच्छाका अधीनमा रहेका छन्। तसर्थ, न जीवात्माले स्वेच्छापूर्वक कुनै देवताको उपासना गर्न सक्दछ न देवताले नै परमेश्वरको इच्छाबिना कसैलाई वरदान दिन सक्दछन्। भनिन्छ, ईश्वरको इच्छाबिना घाँसको एउटा त्यान्द्रो पनि हल्लिन सक्दैन। साधारणतया, संसारमा दुःख पाएको मानिस वैदिक साहित्यको सल्लाहअनुसार देवताको शरणमा जान्छ। अमुक-अमुक वस्तुको चाहना गर्ने व्यक्तिले अमुक-अमुक देवताको उपासना गरोस् भन्ने वैदिक निर्देशन छ। उदाहरणका लागि रोगीले सूर्यदेवको

उपासना गरोस् भनिएको छ र विद्या चाहनेले विद्याकी देवी सरस्वतीको पूजा गर्नु पर्दछ भनिएको छ। त्यसै गरी सुन्दर पत्नी चाहनेले शिवकी पत्नी उमादेवीको आराधना गर्न पर्दछ भनिएको छ। त्यसै गरी, शास्त्रमा (वैदिक शास्त्रमा) विभिन्न देवताहरूको पूजा गर्ने विभिन्न विधिविधानहरू लेखिएका छन्। किनभने कुनै विशेष जीवले कुनै विशेष भौतिक सुविधाको उपभोग गर्न चाहन्छ, त्यसैले, उसलाई विशेष देवताबाट वरदान प्राप्त गर्ने प्रबल इच्छा पनि भगवान्बाट प्राप्त हुन्छ अनि उसले सफलतापूर्वक वरदान पनि प्राप्त गर्दछ। कुनै विशेष देवताको पूजा गर्ने विधि पनि भगवान्द्वारा नै व्यवस्थित हुने गर्दछ। देवताहरूले जीवलाई पूजा गर्ने प्रेरणा दिन सक्दैनन् तर परमेश्वर वा परमात्मा श्रीकृष्ण प्रत्येक जीवका हृदयमा निवास गर्नुहुने हुनाले उहाँले नै मानिसलाई कुनै विशेष देवताको पूजा गर्ने प्रेरणा प्रदान गर्नु हुन्छ। सबै देवताहरू वास्तवमा परमेश्वरको विराट शरीरका विभिन्न अङ्ग हुन्, त्यसैले तिनीहरू स्वतन्त्र छैनन्। वैदिक साहित्यमा भनिएको छ—"परमात्माका रूपमा देवताहरूका हृदयमा पनि स्वयम् भगवान् नै विराजमान् हुनुहुन्छ, त्यसैले उहाँले देवताका माध्यमबाट जीवको इच्छा पूरा गर्ने व्यवस्था मिलाउनुभएको छ।" तर जीव तथा देवता दुवै परमात्माका इच्छामा आश्रित रहने हुँदा तिनीहरू स्वतन्त्र छैनन्।

**स तया श्रद्धया युक्तस्तस्याराधनमीहते ।**
**लभते च ततः कामान्मयैव विहितान्हि तान् ॥ २२ ॥**

**सः** — त्यो; **तया** — त्योसँग; **श्रद्धया** — श्रद्धाले; **युक्तः** — पूर्ण भएर; **तस्य** — त्यस देवताको; **आराधनम्** — आराधनाका लागि; **ईहते** — आकाङ्क्षा गर्दछ (चाहन्छ); **लभते** — प्राप्त गर्दछ; **च** — तथा; **ततः** — त्यसबाट; **कामान्** — इच्छाहरू; **मया** — मद्वारा; **एव** — नै; **विहितान्** — व्यवस्थित; **हि** — निश्चय नै; **तान्** — तिनीहरू।

**यस प्रकारको श्रद्धाले पूर्ण भएर उसले देवता विशेषको पूजा गर्ने प्रयत्न गर्दछ र आफ्नो इच्छापूर्ति गर्दछ। तर, वास्तवमा यी सबै लाभहरू मैले नै प्रदान गर्दछु।**

**तात्पर्य :** परमेश्वरको अनुमतिबिना देवताहरूले पनि आफना उपासकलाई वरदान दिन सक्दैनन्। प्रत्येक वस्तु परमेश्वरको सम्पत्ति हो भन्ने कुरा जीवहरूले बिर्सिए पनि देवताहरूले बिर्सिएका हुँदैनन्। अतः देवताहरूको पूजा र वाञ्छित फलको प्राप्ति देवताहरूको कारणले होइन भगवान्को इच्छाअनुसार देवताका माध्यमबाट हुने कुरा हो। अल्पज्ञानी जीवहरू यो कुरा जान्दैनन्। त्यसकारण, तिनीहरू केही लाभका लागि देवताहरूका पछि दौडन्छन् तर शुद्ध भक्त कुनै

वस्तुको आवश्यकता पर्दा सोभै परमेश्वरसँग मात्र प्रार्थना गर्दछन्, यद्यपि भौतिक लाभका लागि वरदान माग्नु शुद्ध भक्तको लक्षण होइन। जीव आफ्नो इच्छापूर्तिका लागि प्रायः पागलजस्तै बनेर बारम्बार देवताहरूकहाँ जाने गर्दछ। यस्तो किन हुन्छ भने, जीवात्माले चाहेका कतिपय कुराहरू अनुचित हुन्छन्। त्यस्ता अनुचित कामना भगवान्‌ले पूरा गरिदिनु हुन्न। चैतन्य चरितामृतमा पनि भनिएको छ— परमेश्वरको पूजा पनि गर्ने र साथसाथै भौतिक भोगको चाहना पनि गर्नेलाई परस्पर विरोधी इच्छा राख्ने व्यक्ति भनिन्छ। परमेश्वरको भक्ति र देवताहरूको पूजा एउटै स्तरमा आउन सक्दैनन्, किनभने देवताहरूको पूजा भौतिक वस्तु हो र परमेश्वरको भक्ति पूर्णतया आध्यात्मिक वस्तु हो।

भगवद्धाममा जाने चाहना गर्नेहरूका लागि भौतिक इच्छाहरू बाधक बन्दछन्। तसर्थ, अल्पज्ञानी जीवहरूले इच्छा गरेको जस्तो भौतिक भोग भगवान्‌का शुद्ध भक्तलाई दिइँदैन। यदि दिने हो भने तिनीहरू भगवान्‌को भक्तिमा संलग्न हुन छोडेर भौतिक जगत्‌का देवातहरूको पूजा गर्न थाल्नेछन्।

**अन्तवत्तु फलं तेषां तद्भवत्यल्पमेधसाम् ।**
**देवान्देवयजो यान्ति मद्भक्ता यान्ति मामपि ॥ २३ ॥**

**अन्तवत्** — नाशवान्; **तु** — तर; **फलम्** — फल; **तेषाम्** — तिनीहरूको; **तत्** — त्यो; **भवति** — हुन्छ; **अल्पमेधसाम्** — अल्पज्ञानी मानिसको; **देवान्** — देवताहरूलाई; **देवयजः** — देवताको पूजा गर्नेहरू; **यान्ति** — जान्छन्; **मत्** — मेरा; **भक्ताः** — भक्तहरू; **यान्ति** — जान्छन्; **माम्** — मसँग (मेरा धाममा); **अपि** — पनि।

**अल्पबुद्धिका मानिसहरूले देवताहरूको पूजा गर्दछन् र सीमित तथा क्षणिक फल पाउँदछन्। अन्त्यमा देवताको पूजा गर्नेहरू देवलोक जान्छन् र मेरा भक्तहरू मेरो परमधाममा आइ पुग्दछन्।**

**तात्पर्य :** *भगवद्गीताका* केही भाष्यकारहरूले देवताको पूजा गर्ने व्यक्ति पनि परमेश्वरको धाममा पुग्दछ भनेका छन्। तर, यहाँ स्पष्ट रूपले देवताका उपासकहरू देवताहरूको विभिन्न लोकमा जान्छन् भनिएको छ। जस्तै, सूर्यको उपासना गर्नेले सूर्यलाई प्राप्त गर्दछन् र चन्द्रमाको उपासना गर्नेले चन्द्रमालाई प्राप्त गर्दछन्। त्यसै गरी, इन्द्रादि देवताको पूजा गर्नचाहनेले ती ती देवताहरूको लोक प्राप्त गर्दछन्। जसले जुनसुकै देवताको उपासना गरे पनि अन्त्यमा भगवान्‌को धाममा जान्छ भन्ने कुरा सत्य होइन। यहाँ यो कुराको निषेध गरिएको छ र के स्पष्ट गरिएको छ भने, देवताका उपासकहरू भौतिक जगत्‌को विभिन्न लोकमा जान्छन् र भगवान्‌का भक्त सीधै भगवान्‌को धाममा

जान्छन्। यहाँ एउटा प्रश्न उठ्न सक्दछ, त्यो के हो भने-यदि देवताहरू भगवान्‌को शरीरका विभिन्न अङ्ग भए देवताहरूको पूजा गर्दा पनि भगवान्‌को पूजा गरेसरह फल पाउनुपर्ने हो। यसको उत्तरमा भन्न सकिन्छ— देवताका उपासकहरू अल्पज्ञ हुन्छन्। तिनीहरू शरीरको कुन अङ्गले भोजनको आपूर्ति गर्दछ वा कुन अङ्गलाई भोजन दिनु पर्दछ भन्ने जान्दैनन्। तिनीहरूमध्ये केही त कति मूर्ख हुन्छन् शरीरका अङ्ग धेरै हुनाले तिनलाई भोजन दिने तरिका पनि विभिन्न हुन सक्दछन् भन्ने दाबी गर्दछन्। तर, यो कुरा एकदम बेठीक हो। के आँखा र कानबाट शरीरलाई भोजन पुऱ्याउन सकिन्छ? देवता भनेका भगवान्‌को विराट शरीरका विभिन्न अङ्ग मात्र हुन् भन्ने ज्ञान तिनलाई हुँदैन र आफ्नो अज्ञानतावश प्रत्येक देवता अलग-अलग ईश्वर हुन् र परमेश्वरका प्रतिस्पर्धी हुन् भन्ने विश्वास तिनीहरूले लिएका हुन्छन्।

हुनत देवताहरू मात्र होइन सामान्य जीवहरू पनि परमेश्वरका अङ्ग हुन्। *श्रीमद्भागवत्‌मा* ब्राह्मणहरू परमेश्वरका शिर हुन् भनिएको छ, क्षत्रिय उहाँका हात हुन् र वैश्य उहाँका कम्मर तथा शूद्र उहाँका पाउ हुन् र यी सबैले भिन्दाभिन्दै सेवाकार्य गर्दछन् भनिएको छ। यदि कसैले भौतिक अवस्थाको विचार नगरी देवता र आफू दुवैलाई परमेश्वरको अंशका रूपमा देख्ने गरे त्यसलाई उसको पूर्णज्ञान मान्नु पर्दछ तर यदि उसमा यस्तो ज्ञान नभए ऊ देवताहरू निवास गर्ने विभिन्न लोकमा पुग्दछ। तर, भक्तहरूको गन्तव्य र यो गन्तव्य एउटै होइन।

देवताहरूबाट प्राप्त हुने वरदान नाशवान् हुन्छन्, किनभने यो भौतिक जगत्‌का सबै लोक, सबै देवता र तिनका सबै उपासकहरू नाशवान् छन्। त्यसैले यो श्लोकमा स्पष्ट रूपले यस्ता देवताहरूको उपासनाबाट प्राप्त हुने सबै फल नाशवान् हुन्छन् र त्यस्तो पूजा केवल अल्पज्ञ जीवहरूले मात्र गर्ने गर्दछन् भनिएको हो। परमेश्वरको भक्तिमा संलग्न कृष्णभावनाभावित शुद्ध भक्तहरू शाश्वत आनन्दमय र ज्ञानमय अवस्थामा पुग्दछन्। अतः उनीहरूले प्राप्त गर्ने उपलब्धि र देवताका सामान्य उपासकहरूले पाउने उपलब्धि पनि भिन्न हुने गर्दछ। परमेश्वर असीमित हुनुहुन्छ। उहाँको अनुग्रह पनि अनन्त छन् र दया पनि अनन्त छ। त्यसैले आफ्ना शुद्ध भक्तहरूमाथि हुने परमेश्वरका कृपाको कुनै सीमा छैन।

**अव्यक्तं व्यक्तिमापन्नं मन्यन्ते मामबुद्धयः ।**
**परं भावमजानन्तो ममाव्ययमनुत्तमम् ॥ २४ ॥**

**अव्यक्तम्**— अप्रकट; **व्यक्तिम्**— व्यक्तित्वलाई; **आपन्नम्**— प्राप्त भएको;

**मन्यन्ते** — सोच्दछन्; **माम्** — मलाई; **अबुद्धयः** — अल्पज्ञानी व्यक्तिहरू; **परम्** — परम; **भावम्** — सत्तालाई; **अजानन्तः** — नजानेर; **मम** — मेरो; **अव्ययम्** — अविनाशी; **अनुत्तमम्** — सर्वश्रेष्ठ।

**मलाई राम्रोसँग नचिन्ने बुद्धिहीन मानिसहरू म परमपुरुष श्रीकृष्णलाई पहिले निराकार भएको र अहिले साकार रूप धारण गरेर आएको भन्ने ठान्दछन्। अल्पज्ञानी भएका कारणले तिनीहरूले मेरो परमअविनाशी र सर्वोच्च प्रकृतिलाई बुझ्न सक्दैनन्।**

**तात्पर्य :** देवताका उपासकहरूलाई अल्पज्ञ मानिस भनिसकिएकै छ, त्यसै गरी यहाँ निराकारवादीहरूलाई पनि अल्पज्ञ भनिएको छ। भगवान् श्रीकृष्णले आफ्नो सगुण स्वरूपमा अर्जुनसँग प्रत्यक्ष कुरा गर्नुभएको देखेर पनि अज्ञानवश निराकारवादीहरू ईश्वरको कुनै स्वरूप नै हुँदैन भनेर अन्धो तर्क दिने गर्दछन्। श्रीरामानुजाचार्यको शिष्यपरम्पराका महान् भगवद्‌भक्त यामुनाचार्यले यस सम्बन्धमा दुईवटा अत्यन्त उपयुक्त श्लोक लेख्नुभएको छ। उहाँ भन्नु हुन्छ—

*त्वां शीलरूप चरितैः परमप्रकृष्टैः*
*सत्त्वेन सात्त्विकतया प्रबलैश्च शास्त्रैः ।*
*प्रख्यातदैवपरमार्थविदां मतैश्च*
*नैवासुरप्रकृतयः प्रभवन्ति बोद्धुम् ॥*

"हे प्रभु! व्यासदेव तथा नारदजस्ता भक्तहरू हजुरलाई भगवान्‌का रूपमा चिन्दछन्। विभिन्न वैदिक ग्रन्थहरू पढेर मानिसले हजुरका गुण, रूप तथा कार्यहरूको विशिष्टता थाहा पाउँदछन् र हजुर साक्षात् भगवान् हुनुहुन्छ भन्ने बुझ्दछन् तर रजोगुण र तमोगुणका वशमा परेका असुर तथा अभक्त मानिसहरूले हजुरलाई चिन्न सक्दैनन्, हजुरलाई बुझ्न ती असमर्थ हुन्छन्। यस्ता अभक्तहरू वेदान्त, उपनिषद् तथा वैदिक ग्रन्थको व्याख्या गर्ने कार्यमा जतिसुकै निपुण भए पनि तिनीहरूले हजुरलाई चिन्न सम्भव छैन" (स्तोत्र रत्न, १२) ब्रह्मसंहितामा पनि केवल वेदान्त साहित्यको अध्ययन गरेर मात्र भगवान्‌लाई बुझ्न सकिँदैन भनिएको छ। परमपुरुषलाई केवल भगवत्कृपाबाट मात्र चिन्न सकिन्छ। अतः यो श्लोकमा स्पष्ट रूपले देवताका उपासक मात्र होइन, कृष्णभावनारहित अभक्तहरू तथा वेदान्त र वैदिक साहित्यको अध्ययनमा संलग्न रहनेहरू पनि अल्पज्ञ हुन् भनिएको छ, किनभने तिनीहरूका लागि पनि ईश्वरको साकार रूपलाई बुझ्नु असम्भव छ। जसले परमसत्यलाई निराकार मान्दछन् तिनीहरूलाई यहाँ '**अबुद्धय**' भनिएको छ। यसको अर्थः परमसत्यको वास्तविक स्वरूप तिनीहरूलाई थाहा छैन। श्रीमद्‌भागवतमा

परमब्रह्मको अनुभूति निराकार ब्रह्मबाट सुरु हुन्छ र माथि उठ्दै जाँदा अन्तर्यामी परमात्मामा पुगिन्छ अनि अन्त्यमा परमसत्यको सर्वोच्च अवस्थामा भगवान्को अनुभूति हुन्छ भनिएको छ। आधुनिक निराकारवादीहरू झन् बढी अल्पज्ञ देखिन्छन्, किनभने तिनीहरू आफ्ना महान् पूर्वज शंकराचार्यले भनेको पनि मान्दैनन्। उहाँले स्पष्ट रूपमा श्रीकृष्णलाई भगवान् नै मान्नुभएको छ। त्यसैले निराकारवादीहरू परमसत्यलाई नचिनेर श्रीकृष्ण भनेका वसुदेव र देवकीकै छोरा हुन्, एउटा शक्तिशाली व्यक्ति मात्र हुन् वा एउटा राजकुमार हुन् भन्ने ठान्दछन्। *भगवद्गीता* (९.११) मा यस्तो सोचाइको भर्त्सना गरिएको छ। त्यहाँ भनिएको छ— **अवजानन्ति मां मूढा मानुषीं तनुमाश्रितम्** अर्थात् केवल मूर्खहरूले मात्र मलाई सामान्य पुरुष हो भन्ने ठान्दछन्। तथ्य कुरा के हो भने, भक्ति नगरी र कृष्णभावना विकसित नगरी भगवान् श्रीकृष्णलाई बुझ्न सकिँदैन। *श्रीमद्भागवत्* (१०.१४.२९) मा यसको पुष्टि यसरी गरिएको छ—

*अथापि ते देव पदाम्बुजद्वय प्रसादलेशानुगृहीत एव हि ।*
*जानाति तत्त्वं भगवन् महिम्नो न चान्य एकोऽपि चिरं विचिन्वन् ॥*

"हे प्रभु! अलिकति मात्र भए पनि हजुरका चरणकमलको कृपा प्राप्त गरेको व्यक्तिले मात्र हजुरका व्यक्तित्वको महानतालाई बुझ्न सक्दछ तर मानसिक कल्पनाद्वारा भगवान्लाई बुझ्न खोज्नेहरूले हजुरलाई चिन्न सक्दैनन्, तिनीहरूले वर्षौंदेखि वेदाध्ययन गरिरहेका किन नहोऊन्।"

मानसिक कल्पना र वैदिक साहित्यको विवेचनाले मात्र कसैले पनि भगवान् श्रीकृष्णका नाम, रूप तथा गुणलाई बुझ्न सक्दैन। उहाँलाई भक्तिले मात्र चिन्न सकिन्छ। जसले एकाग्र भएर— **हरे कृष्ण, हरे कृष्ण, कृष्ण कृष्ण हरे हरे। हरे राम, हरे राम, राम राम हरे हरे,** यो महामन्त्रको जप गर्दछ, त्यही व्यक्ति कृष्णभावनामृतमा पूर्णरूपले लीन हुन सक्दछ र त्यसैले मात्र भगवान्लाई बुझ्न सक्दछ। अभक्त निराकारवादीहरू भगवान् श्रीकृष्णको शरीर यही भौतिक प्रकृतिबाट बनेको हो र उहाँका सम्पूर्ण क्रियाकलाप, उहाँको रूप तथा हरेक वस्तु माया हो, भन्ने गर्दछन्। यी निराकारवादीहरू मायावादीका नामले चिनिन्छन्। तिनीहरू परमसत्यका बारेमा केही जान्दैनन्।

बीसौँ श्लोकमा स्पष्ट भनिएको छ— **कामैस्तैस्तैर्हृतज्ञानाः प्रपद्यन्तेऽन्यदेवताः** अर्थात्, जो जो काम र इच्छाका मदद्वारा अन्धो भएका छन् तिनीहरू विभिन्न देवताका शरणमा जान्छन्। भगवान्का अतिरिक्त अरू देवताहरू पनि छन् जसका आ-आफ्ना लोकहरू छन् र स्वयम् भगवान्को पनि आफ्नो लोक छ। उदाहरणका लागि तेईसौँ श्लोकमा

भनिएको छ— **देवान् देवयजो यान्ति मद्भक्ता यान्ति मामपि।** अर्थात्, देवताका उपासक विभिन्न देवलोकहरूमा जान्छन् र भगवान् श्रीकृष्णका भक्त कृष्णलोकमा जान्छन्। यसरी स्पष्ट रूपमा वर्णन गरिएको भए पनि मूर्ख निराकारवादीहरू भगवान्लाई रूपविहीन मान्दछन् र उहाँलाई दिइएका विभिन्न नाम तथा रूपहरू आरोपित हुन् भन्दछन्। के *भगवद्गीताको* अध्ययन गर्दा देवता र तिनीहरूका धाम निराकार हुन्छन् भन्ने देखिन्छ र? स्पष्ट छ, न देवताहरू निराकार छन् न भगवान् श्रीकृष्ण नै निराकार हुनुहुन्छ। उहाँहरू सबै व्यक्तित्ववान् हुनुहुन्छ। भगवान् श्रीकृष्ण परमेश्वर हुनुहुन्छ, उहाँको आफ्नो लोक छ र देवताहरूका पनि आ-आफ्ना लोकहरू छन्।

तसर्थ, परमसत्य रूपविहीन छ र रूप परमसत्यमाथि आरोपित वस्तु मात्र हो भन्ने अद्वैतवादीहरूको तर्क सत्य प्रमाणित हुँदैन। यहाँ स्पष्टसँग यो रूप आरोपित होइन भनिएको छ। *भगवद्गीताले* हामीलाई के कुरा प्रष्ट्याएको छ भने, देवताहरूका रूप र परमेश्वरको स्वरूप सँगसँगै विद्यमान छन् तथा भगवान् श्रीकृष्ण सच्चिदानन्दस्वरूप हुनुहुन्छ। वेदले पनि **आनन्दमयोऽभ्यासात्** भनेर परमसत्य स्वभावले आनन्दमय हुनुहुन्छ र उहाँ अनन्त शुभ गुणहरूको भण्डार हुनुहुन्छ भन्ने कुराको पुष्टि गरेको छ। भगवान्ले *भगवद्गीतामा* "म अजन्मा भएर पनि जन्म ग्रहण गर्न सक्दछु" भन्नुभएको छ। यी यस्ता तथ्यहरू हुन् जो गीताको अध्ययनबाट जान्न सकिन्छ। भगवान् कसरी निराकार हुन सक्नु हुन्छ हामी जान्न सक्दैनौँ। गीताको वर्णनका आधारमा अद्वैतवादी निराकारवादीहरूको आरोपित सिद्धान्त नै झूटो हो भन्ने निश्चित छ। यहाँ के कुरा स्पष्ट छ भने, परमसत्य भगवान् श्रीकृष्ण रूपवान् पनि हुनुहुन्छ र व्यक्तिवान् पनि हुनुहुन्छ।

**नाऽहं प्रकाशः सर्वस्य योगमायासमावृतः ।**
**मूढोऽयं नाभिजानाति लोको मामजमव्ययम् ॥ २५ ॥**

**न** — न त; **अहम्** — म; **प्रकाशः** — प्रकट; **सर्वस्य** — सबैका लागि; **योगमाया** — आन्तरिक शक्तिद्वारा; **समावृतः** — आच्छादित; **मूढः** — मूर्ख; **अयम्** — यो; **न अभिजानाति** — बुझ्न सक्दैन; **लोकः** — मानिसहरू; **माम्** — मलाई; **अजम्** — जन्मरहित; **अव्ययम्** — अविनाशी।

**मूर्ख तथा अल्पज्ञानीहरूका लागि म सधैँ अदृश्य हुन्छु। तिनीहरूका लागि म आफ्नी योगमायाद्वारा ढाकिएको छु, तसर्थ म अजन्मा र अविनाशी हूँ भन्ने कुरा तिनीहरूलाई थाहा हुँदैन।**

**तात्पर्य :** यहाँ तर्क उठ्न सक्दछ— श्रीकृष्ण यस पृथ्वीमा उपस्थित हुँदा उहाँ

सबैका लागि प्रकट हुनु हुन्थ्यो र अहिले उहाँ सबैका अगाडि किन प्रकट हुनु हुन्न ? वास्तवमा त्यस समय पनि उहाँ सबैका लागि प्रकट हुनु हुन्नथ्यो। त्यस समय पनि थोरै व्यक्तिहरूले मात्र उहाँलाई भगवान्का रूपमा चिनेका थिए। कुरुहरूका सभामा श्रीकृष्ण सभाका अध्यक्ष निर्वाचित हुनुभएकोमा एकातिर शिशुपालले उहाँको घोर विरोध गऱ्यो अर्कातिर त्यही सभामा भीष्मपितामहले उहाँको हार्दिक समर्थन गर्दै श्रीकृष्णलाई साक्षात् भगवान् भनेर घोषणा गर्नुभयो। त्यसै गरी, पाण्डवहरूलगायतका केही व्यक्तिहरूले मात्र उहाँलाई परमेश्वरका रूपमा चिन्दथे, सबैले होइन। उहाँ सामान्य व्यक्ति र भक्तिहीन व्यक्तिका निमित्त अप्रकट नै हुनुहुन्थ्यो। त्यसैले, उहाँलाई भक्तहरूले बाहेक अरू सबैले आफूजस्तै सामान्य व्यक्ति ठान्दछन् भनेर स्वयम् भगवान् श्रीकृष्णले गीतामा उद्घोष गर्नुभएको छ। उहाँ आफ्ना भक्तहरूका लागि सम्पूर्ण आनन्दका सागर भएर देखिनु हुन्छ र अल्पज्ञानी र भक्तिहीन व्यक्तिका दृष्टिमा उहाँ आफ्नै अन्तरङ्गा शक्तिले ढाकिएर रहनु हुन्छ।

*श्रीमद्भागवत* (१.८.१८) मा कुन्तीले उहाँको प्रार्थना गर्दा भगवान् योगमायाको पर्दाद्वारा ढाकिनुभएकाले सामान्य मानिसहरू उहाँलाई चिन्न सक्दैनन् भन्नुभएको छ। यो योगमायारूपी पर्दाको उल्लेख इशोपनिषद्को (मन्त्र १५) मा पनि गरिएको छ— जसमा भक्तले प्रार्थना गर्दछन्—

*हिरण्मयेन पात्रेण सत्यस्यापिहितं मुखम् ।*
*तत्त्वं पूषन्नपावृणु सत्यधर्माय दृष्टये ॥*

अर्थात्, "हे प्रभु! हजुर समग्र ब्रह्माण्डका पालनकर्ता हुनुहुन्छ। अतः हजुरको भक्ति गर्नु नै सर्वोच्च धर्मसिद्धान्त हो। हजुरबाट मेरो पनि पालन हुनेछ भनी मैले हजुरको प्रार्थना गरेको छु। हजुरको दिव्य रूप योगमायाद्वारा ढाकिएको छ। ब्रह्मज्योति पनि हजुरको अन्तरङ्गा शक्तिको आवरण हो। कृपा गरेर यो प्रकाशवान् तेजलाई समेट्नुहोस्, किनभने यो तेजले गर्दा मलाई हजुरको सच्चिदानन्दमय विग्रहको दर्शन गर्न असहज भएको छ।" भगवान् आफ्नो दिव्य सच्चिदानन्दमय रूपमा हुनुहुन्छ, तैपनि ब्रह्मज्योतिको अन्तरङ्गा शक्तिद्वारा उहाँ ढाकिनुभएको छ। त्यसकारण, अल्पज्ञानी निराकारवादीहरूले उहाँलाई देख्न सक्दैनन्।

*श्रीमद्भागवत्* (१०.१४.७) मा पनि ब्रह्माद्वारा यसरी स्तुति गरिएको छ। "हे भगवान्! हे परमात्मा! हे सम्पूर्ण रहस्यका स्वामी! यो संसारमा हजुरका शक्ति तथा लीलाको अनुमान लगाउन कसले सक्दछ? हजुर सधैँ आफ्नो अन्तरङ्गा शक्तिको विस्तार गरिरहनु हुन्छ, त्यसकारण, कसैले पनि हजुरलाई

चिन्न सक्दैनन्। वैज्ञानिक एवं विद्वान्हरूले बरु यो भौतिक जगत्को परमाणु संरचनाको र ग्रह आदिको अन्वेषण तथा परीक्षण गर्न सक्दछन् तर हजुरका शक्तिहरूको गणना गर्न तिनीहरू असमर्थ हुन्छन्। हजुर तिनीहरूका अगाडि उपस्थित हुँदाहुँदै पनि तिनीहरूलाई यसको आभास हुँदैन।" भगवान् श्रीकृष्ण केवल अजन्मा मात्र होइन उहाँ अव्यय र अविनाशी पनि हुनुहुन्छ। उहाँका शक्तिहरू सबै अविनाशी छन् र उहाँको शाश्वत स्वरूप सच्चिदानन्दमय छ।

**वेदाहं समतीतानि वर्तमानानि चार्जुन ।**
**भविष्याणि च भूतानि मां तु वेद न कश्चन ॥ २६ ॥**

**वेद** — जान; **अहम्** — मलाई; **समतीतानि** — पूर्णतया बितिसकेको; **(भूतकाल)**; **वर्तमानानि** — वर्तमान काल; **च** — तथा; **अर्जुन** — हे अर्जुन; **भविष्याणि** — भविष्यत् काल; **च** — पनि; **भूतानि** — सबै प्राणीहरू; **माम्** — मलाई; **तु** — तर; **वेद** — जान्दछन्; **न** — होइन; **कश्चन** — अरू कोही।

**हे अर्जुन! म भगवान् भएकोले भूतकालमा भएका, वर्तमान कालमा भइरहेका र भविष्यमा हुने सबै कुराहरू जान्दछु। म सबै जीवहरूलाई जान्दछु तर मलाई कसैले पनि जान्दैन।**

**तात्पर्य :** यहाँ पनि जीवात्माले जस्तै आफ्नो शरीर परिवर्तन गर्नुपर्ने थियो र पूर्वजन्मका सबै कुरा स्वतः भुल्नुपर्ने थियो। कुनै पनि भौतिक शरीरधारी जीव आफ्ना पूर्वजन्मका सबै सम्झनाहरू यथावत कायम राख्न असमर्थ हुन्छ। उसले आफ्नो पुनर्जन्म र वर्तमान जीवनका उपलब्धिबारे पनि भविष्यवाणी गर्न सक्दैन। अतः भूत, वर्तमान र भविष्यत्मा के के भइरहन्छन् त्यो कुरा जीवलाई थाहा हुँदैन। भौतिक कल्मषहरूबाट मुक्त नभएसम्म उसले भूत, भविष्य र वर्तमान्का कुरा जान्न सक्दैन।

भगवान् श्रीकृष्ण स्पष्ट रूपमा भूत कालका सबै कुरा सम्झनु हुन्छ, वर्तमानमा के भइरहेछ त्यो पनि जान्नु हुन्छ र भविष्यमा के हुनेछ त्यो पनि जान्नु हुन्छ तर सामान्य मानिसहरू यस्ता हुँदैनन्। भगवान् श्रीकृष्णले लाखौँ वर्ष पहिले सूर्यदेव विवस्वान्लाई दिनुभएको उपदेश अहिलेसम्म सम्झिरहनुभएको कुरा हामीले गीताको चौथो अध्यायमा देखिसक्यौँ। सबैका हृदयमा परमात्मा-रूपले निवास गर्ने हुनाले भगवान् श्रीकृष्ण हरेक जीवलाई चिन्नुहुन्छ। तर, प्रत्येक जीवका हृदयमा परमात्मा रूपले उहाँ उपस्थित हुनुहुँदा पनि र स्वयम् भगवान्को रूपमा उपस्थित हुनुहुँदा पनि अल्पज्ञ मानिसहरूले बरु निराकार ब्रह्मलाई चिन्न सक्दछन तर भगवान् श्रीकृष्णलाई परमपुरुषका

रूपमा अनुभव गर्न सक्दैनन्। भगवान् श्रीकृष्णको दिव्य शरीर निःसन्देह अविनाशी छ। उहाँ सूर्यसमान हुनुहुन्छ र माया बादलजस्तो छ। भौतिक जगत्मा हामी सूर्य, बादल, विभिन्न ग्रह तथा नक्षत्रहरू देख्दछौँ। यी सबैलाई क्षणिक रूपमा आकाशमा रहेको बादलले ढाक्न सक्दछ तर यो आवरण हाम्रो दृष्टिसम्म मात्र सीमित छ। वास्तवमा सूर्य, चन्द्रमा, तारा तथा ग्रहहरू कहिल्यै ढाकिँदैनन्। त्यसै गरी, मायाले पनि परमेश्वरलाई ढाकिराख्न सक्दैन। उहाँ आफ्नो अन्तरङ्गा शक्तिद्वारा अरू अल्पज्ञ श्रेणी मानिसहरूबाट अदृश्य नै रहनु हुन्छ। जस्तै — यसै अध्यायको तेस्रो श्लोकमा भनिएको छ — करोडौँ मानिसहरूमध्ये केही मानिसले मात्र मानव जीवनमा पूर्णता प्राप्त गर्ने प्रयत्न गर्दछन् अनि यस्ता हजारौँ-हजार सिद्ध पुरुषहरूमध्ये कठिनताले कुनै एउटाले मात्र भगवान् श्रीकृष्णलाई चिन्न सकेको हुन्छ। निराकार ब्रह्म तथा अन्तर्यामी परमात्माको अनुभूति पाएर सिद्ध भएको मानिसले पनि कृष्णभावनाभावित नभई भगवान् श्रीकृष्णलाई चिन्न र बुझ्न सक्दैन।

**इच्छाद्वेषसमुत्थेन द्वन्द्वमोहेन भारत ।**
**सर्वभूतानि सम्मोहं सर्गे यान्ति परन्तप ॥ २७ ॥**

**इच्छा** — इच्छा; **द्वेष** — द्वेष वा घृणा; **समुत्थेन** — उदय भएपछि; **द्वन्द्व** — द्वैत रूपको; **मोहेन** — मोहद्वारा; **भारत** — हे भरतवंशी; **सर्व** — सबै; **भूतानि** — जीवहरू; **सम्मोहम्** — मोहित अवस्थामा; **सर्गे** — जन्म लिँदै; **यान्ति** — जान्छन्; **परन्तप** — हे शत्रुहरूका विजेता।

**हे भरतवंशी! हे शत्रुविजेता! सबै जीवहरू मोहित स्थितिमा जन्म लिन्छन् र इच्छा तथा द्वेषबाट उत्पन्न द्वन्द्वमा परेर भ्रमित हुन्छन्।**

**तात्पर्य :** जीवको स्वाभाविक मौलिक स्थिति भनेको शुद्ध ज्ञानरूप परमेश्वरका अधीनमा रहनु हो। मानिस मोहबाट ग्रस्त भएर शुद्ध ज्ञानदेखि टाढा हुनेबित्तिकै माया शक्तिका अधीनमा पर्दछ अनि ऊ भगवान्लाई चिन्न सक्दैन। यो मायाशक्ति इच्छा तथा घृणाको द्वन्द्वबाट उत्पन्न हुन्छ। यही इच्छा र द्वेष वा घृणाको कारणले अज्ञानी मानिस आफूलाई परमेश्वरसँग तुलना गर्न खोज्दछ र भगवान् श्रीकृष्णसँग ईर्ष्या गर्न थाल्दछ। शुद्ध भक्तहरू इच्छा तथा घृणाद्वारा दूषित र भ्रमित नहुने हुनाले उनीहरू भगवान् श्रीकृष्ण आफ्नो अन्तरङ्गा शक्तिद्वारा प्रकट हुनुहुन्छ भन्ने कुरा बुझ्न सक्दछन् तर द्वैत तथा अज्ञानका कारणले मोहग्रस्त भएका मानिसहरू भगवान्लाई भौतिक शक्तिबाट उत्पन्न हुनुभएको ठान्दछन्। यही नै तिनीहरूको दुर्भाग्य हो। यस्ता मोहग्रस्त व्यक्तिहरू मान-अपमान, दुःख-सुख, स्त्री-पुरुष, राम्रो-नराम्रो तथा

आनन्द र पीडाजस्ता द्वन्द्वमा अल्भेर "यी मेरी श्रीमती हुन्, यो मेरो घर हो, म यो घरको स्वामी हूँ, म यी श्रीमतीको पति हूँ" इत्यादि सोच्दछन्। यी सबै मोहका द्वन्द्व हुन्। जो यस्ता द्वन्द्वहरूबाट मोहित वा भ्रमित हुन्छन् तिनीहरू अत्यन्त मूर्ख हुन् र यस्ता व्यक्तिले कहिल्यै पनि भगवान्लाई चिन्न सक्दैनन्।

**येषां त्वन्तगतं पापं जनानां पुण्यकर्मणाम् ।**
**ते द्वन्द्वमोह निर्मुक्ता भजन्ते मां दृढव्रताः ॥ २८ ॥**

**येषाम्** — जसको; **तु** — तर; **अन्तगतम्** — पूर्णरूपले नष्ट; **पापम्** — पाप; **जनानाम्** — मानिसका; **पुण्य** — पवित्र; **कर्मणाम्** — जसका पूर्वकर्महरू; **ते** — तिनीहरू; **द्वन्द्व** — द्वैतभावको; **मोह** — मोह; **निर्मुक्ताः** — बाट मुक्त भएका; **भजन्ते** — भक्तिमा लाग्दछन्; **माम्** — मेरो; **दृढव्रताः** — सङ्कल्पपूर्वक।

**जसले पूर्वजन्ममा र यो जन्ममा पनि पुण्यकर्म गरेका छन् र जसका पापहरू पूर्णरूपले निर्मूल भएका छन् तिनीहरू नै मोहको द्वन्द्वबाट मुक्त हुन्छन् र दृढतापूर्वक मेरा सेवामा तत्पर भइरहन्छन्।**

**तात्पर्य :** यस श्लोकमा दिव्य पद प्राप्त गर्नयोग्य अधिकारीको उल्लेख गरिएको छ। जो पापी छ, नास्तिक छ, मूर्ख छ र कपटी पनि छ, यस्ता व्यक्तिका लागि इच्छा र द्वेषको द्वन्द्वलाई पार गर्नु अति कठिन हुन्छ। जसले धर्मका विधिविधान पालन गर्दै आफ्नो जीवन बिताएका छन् र जो पुण्यकर्म गर्दै पापकर्ममाथि विजय प्राप्त गर्ने प्रयत्नमा लागेका छन् त्यस्ता व्यक्तिहरूले मात्र भक्तिको सहारा लिएर विस्तारै भगवान्को शुद्ध ज्ञान प्राप्त गर्न सक्दछन्। यसपछि क्रमशः तिनीहरू समाधिमा भगवान्को ध्यान गर्न सक्षम हुनेछन्। आध्यात्मिक स्थितिमा अवस्थित हुने विधि पनि यही हो। यस्तो आध्यात्मिक उत्थान कृष्णभावनामा रहेर शुद्ध भक्तहरूको सङ्गत गर्नाले सम्भव हुन्छ, किनभने महान् भक्तहरूको सङ्गत पाएर नै मानिस मोहबाट मुक्त हुन सक्दछ।

*श्रीमद्भागवत्* (५.५.२) मा भनिएको छ— वास्तविक मुक्तिको चाहना गर्ने मानिसले भक्तहरूको सेवा गर्नु पर्दछ **महत्सेवां द्वारमाहुर्विमुक्तेः** तर भौतिकवादी पुरुषहरूको सङ्गत गर्ने व्यक्ति संसारको गहन अन्धकारतिर अग्रसर हुँदैजान्छ **तमोद्वारं योषितां सङ्गिसङ्गम्**। भगवान्का सारा भक्तहरू बद्ध जीवलाई मोहबाट उद्धार गर्नका लागि विश्वभरि भ्रमण गरिरहन्छन्। परमेश्वरको अधीनमा रहेको आफ्नो मौलिक अवस्थालाई बिर्सनु नै ईश्वरीय नियमको सबैभन्दा ठुलो अवहेलना हो भन्ने कुरा यी निराकारवादीहरूले बुझ्दैनन्। आफ्नो स्वाभाविक स्थितिलाई पुनः प्राप्त नगरेसम्म मानिसले न

परमपुरुषलाई चिन्न सम्भव छ न उसले उहाँको दिव्य प्रेम-भक्तिमा पूर्णरूपले संलग्न हुने सङ्कल्प नै लिन सक्दछ।

**जरामरणमोक्षाय मामाश्रित्य यतन्ति ये ।**
**ते ब्रह्म तद्विदुः कृत्स्नमध्यात्मं कर्मचाखिलम्॥ २९ ॥**

**जरा** — वृद्धावस्थाबाट; **मरण** — र मृत्युबाट; **मोक्षाय** — मुक्तिका लागि; **माम्** — ममा; **आश्रित्य** — शरण लिएर; **यतन्ति** — प्रयत्न गर्दछन्; **ये** — ती सबै; **ते** — यस्ता व्यक्तिहरू; **ब्रह्म** — ब्रह्म; **तत्** — वास्तवमा त्यसलाई; **विदुः** — जान्दछन्; **कृत्स्नम्** — सबै कुरा; **अध्यात्मम्** — दिव्य; **कर्म** — कर्म; **च** — पनि; **अखिलम्** — पूर्णरूपले।

**वृद्धावस्था र मृत्युबाट मुक्ति प्राप्त गर्न प्रयत्नशील हुने बुद्धिमान् व्यक्तिहरू भक्तिपूर्वक मेरो शरणमा पर्दछन्। दिव्य कर्मका विषयमा तिनीहरूलाई पूरा ज्ञान हुने हुँदा वास्तवमा तिनीहरू ब्रह्म नै हुन्।**

**तात्पर्य :** जन्म, जरा, रोग र मृत्युले यो भौतिक शरीरलाई मात्र दुःख दिन्छन्, आध्यात्मिक शरीरलाई केही गर्दैनन्। आध्यात्मिक शरीरका लागि जन्म, वृद्धावस्था, रोग र मृत्यु नै हुँदैन। अतः जसले आध्यात्मिक शरीर प्राप्त गरेको छ, त्यो मानिस भगवान्‌को पार्षद बन्दछ र उहाँको नित्यसेवामा लाग्दछ। त्यही नै वास्तवमा मुक्तपुरुष हो। उसले भन्न सक्दछ **अहं ब्रह्मास्मि** — म आत्मा हूँ। भनिन्छ— मानिसले "म ब्रह्म हूँ वा म आत्मा हूँ" भन्ने बुझिरहनु पर्दछ। जीवनको यो ब्रह्मबोध पनि भक्ति हो जसको वर्णन यस श्लोकमा गरिएको छ। शुद्ध भक्तहरू दिव्य रूपले ब्रह्म पदमा अवस्थित हुन्छन् र तिनीहरूले दिव्य कर्मका बारेमा हरेक कुरा जान्दछन्।

भगवान्‌को दिव्य सेवामा लागिरहेका चार प्रकारका अशुद्ध भक्तहरूले पनि आफ्नो लक्ष्य प्राप्त गर्दछन् र भगवान्‌का कृपाले गर्दा पूर्णरूपले कृष्णभावनाभावित हुँदै भगवान्‌को वास्तविक दिव्य सङ्गत प्राप्त गरेर आनन्दित हुन्छन् तर देवताहरूका उपासक कहिल्यै पनि भगवद्धाममा भगवान्‌समक्ष पुग्न सक्दैनन्। ती अल्पज्ञ ब्रह्मवादीहरूले पनि भगवान् श्रीकृष्णको परमधाम गोलोक वृन्दावन प्राप्त गर्न सक्दैनन्। कृष्णभावनामय कर्म गर्ने व्यक्तिहरू मात्र **माम् आश्रित्य** ब्रह्म भन्नयोग्य मानिन्छन्, किनभने भगवान् श्रीकृष्णका धाममा पुग्नका लागि यिनीहरू मात्र वास्तवमा प्रयत्नशील रहन्छन्। यिनीहरूलाई भगवान् श्रीकृष्णका विषयमा कुनै भ्रम नहुने हुनाले यिनीहरू नै यथार्थमा ब्रह्म हुन्।

भगवान्‌को अर्चाविग्रहको उपासनामा लागेका वा भवबन्धनबाट मुक्ति

प्राप्त गर्नका लागि भगवान्को ध्यानमा संलग्न रहेका मानिसहरूले पनि भगवान्का कृपाले ब्रह्म र अधिभूतको तात्पर्य बुझेका हुन्छन्। आगामी अध्यायमा भगवान्ले यसको व्याख्या गर्नुभएको छ।

**साधिभूताधिदैवं मां साधियज्ञं च ये विदुः ।**
**प्रयाणकालेऽपि च मां ते विदुर्युक्तचेतसः ॥ ३० ॥**

**स-अधिभूत** — भौतिक जगत् सञ्चालित हुने सिद्धान्त; **अधिदैवम्** — सबै देवताहरूलाई नियन्त्रणमा राख्ने; **माम्** — मलाई; **स अधियज्ञम्** — सबै यज्ञहरूलाई नियन्त्रित गर्ने; **च** — पनि; **ये** — तिनीहरू; **विदुः** — जान्दछन्; **प्रयाण** — मृत्युको; **काले** — समयमा; **अपि** — पनि; **च** — तथा; **माम्** — मलाई; **ते** — तिनीहरू; **विदुः** — जान्दछन्; **युक्त चेतसः** — ममा चित्त लगाएका।

**जसले मलाई परमेश्वर भनेर चिनेको छ र मलाई नै भौतिक सृष्टिको नियन्त्रण गर्ने तत्त्व मानेको छ र जसले मलाई देवताहरूका नियन्त्रक तथा सबै यज्ञहरूका विधायक ठानेको छ त्यस्तो एकाग्र चित्त भएको व्यक्तिले मृत्युकालमा मलाई ( भगवान्लाई ) जान्न र बुझ्न सक्दछ।**

**तात्पर्य :** कृष्णभावनामा रहेर कर्म गर्ने व्यक्तिहरू समष्टिगत रूपमा भगवान्लाई बुझ्ने भगवद्ज्ञानको मार्गबाट कहिल्यै पनि विचलित हुँदैनन्। कृष्णभावनामृतको अलौकिक सङ्गतमा रहेको मानिसले भगवान्ले भौतिक सृष्टि र देवताहरूलाई समेत कसरी नियन्त्रणमा राख्नुहुन्छ भन्ने बुझ्न सक्दछ। यस्तो दिव्य सङ्गतले गर्दा मानिस विस्तारै भगवान्प्रति श्रद्धावान् हुँदैजान्छ। यस्तो कृष्णभावनाभावित व्यक्तिले मृत्युका समयमा पनि भगवान् श्रीकृष्णलाई भुल्दैन। यसरी ऊ सहजै भगवद्धाम गोलोक वृन्दावनमा पुग्दछ।

यो सातौँ अध्यायमा मानिस कसरी पूर्णतया कृष्णभावनाभावित हुन सक्दछ भन्ने कुराको विशेष व्याख्या गरिएको छ। कृष्णभावनाभावित व्यक्तिको सङ्गतमा रहेर नै कृष्णभावनाको प्रारम्भ हुन्छ। यस्तो सङ्गत आध्यात्मिक हुन्छ र यसले मानिसलाई सीधै भगवान्का सम्पर्कमा लगेर राखिदिन्छ र भगवत्-कृपाले गर्दा ऊ श्रीकृष्णलाई भगवान्का रूपमा बुझ्नसक्ने हुन्छ। साथै, उसले जीवको वैधानिक अवस्थालाई पनि यथार्थ रूपमा बुझ्न सक्दछ र भगवान् श्रीकृष्णलाई बिर्सेर मानिस कसरी भौतिक कर्मबन्धनमा पर्दोरहेछ भन्ने कुरा पनि उसलाई अवगत हुन्छ। सत्सङ्गतमा हुने कृष्णभावनाको क्रमिक विकासद्वारा मानिसले भगवान् श्रीकृष्णलाई बिर्सिएको कारणले आफू भौतिक प्रकृतिका नियममा बाँधिन पुगेको कुरा थाहा पाउँदछ। मानिसको

जीवन कृष्णभावनालाई फेरि प्राप्त गर्ने एउटा सुअवसर हो र परमेश्वरको अहैतुकी कृपा प्राप्त गर्नका लागि यसको सदुपयोग गर्नु पर्दछ भन्ने जानकारी पनि उसलाई हुन्छ।

दुःख पाएका मानिसका विषयमा, जिज्ञासुका विषयमा, भौतिक आवश्यकताको माग गर्ने मानिसका विषयमा, ब्रह्मज्ञान र परमात्माको ज्ञानका विषयमा, जन्म-मृत्यु र रोगबाट मुक्त हुने विषयमा र भगवान्को उपासनाका विषयमा गरी धेरै विषयको चर्चा यस अध्यायमा गरिएको छ। जसले यथार्थमा कृष्णभावनालाई प्राप्त गरेको छ त्यसले यस्ता विभिन्न विधि-विधानहरूको कुनै वास्ता गर्दैन। ऊ सोझै कृष्णभावनामय सेवाकार्यमा सरिक हुन्छ र भगवान् श्रीकृष्णको नित्य दासका रूपमा उसले आफ्नो स्वाभाविक स्थितिलाई प्राप्त गर्दछ। यही स्थितिमा शुद्ध भक्तिको उदय हुन्छ र उसलाई परमेश्वरको श्रवण, गुणानुवाद वा कीर्तनमा आनन्द आउन थाल्दछ। उसलाई यसरी नै आफ्ना सबै उद्देश्यहरू पूरा हुन्छन् भन्ने दृढ विश्वास उत्पन्न हुन्छ। यही दृढ विश्वासलाई नै **दृढव्रत** भनिन्छ र यही नै भक्तियोग वा दिव्य प्रेमाभक्तिको आरम्भ हो। सम्पूर्ण शास्त्रहरूको अभिमत पनि यही छ। *भगवद्गीताको* यो सातौँ अध्याय त्यही दृढ विश्वासको सार-संक्षेप हो।

यस प्रकार *श्रीमद्भगवद्गीता* ग्रन्थअन्तर्गत 'परम-ज्ञान' शीर्षक सातौँ अध्यायको भक्तिवेदान्त तात्पर्य समाप्त भयो।

# अध्याय-आठ

# भगवत्प्राप्ति

अर्जुन उवाच

**किं तद्ब्रह्म किमध्यात्मं किं कर्म पुरुषोत्तम ।**
**अधिभूतं च किं प्रोक्तमधिदैवं किमुच्यते ॥ १॥**

**अर्जुन उवाच** — अर्जुनले भने; **किम्** — के; **तत्** — त्यो; **ब्रह्म** — ब्रह्म; **किम्** — के; **अध्यात्मम्** — आत्मा; **किम्** — के; **कर्म** — सकाम कर्म; **पुरुष-उत्तम** — हे परमपुरुष; **अधिभूतम्** — भौतिक जगत्; **च** — तथा; **किम्** — के; **प्रोक्तम्** — भनिन्छ; **अधिदैवम्** — देवताहरू; **किम्** — के; **उच्यते** — भनिन्छ।

**अर्जुनले सोधे — हे भगवान्! हे पुरुषोत्तम! ब्रह्म के हो ? आत्मा के हो ? सकाम कर्म के हो ? यो भौतिक जगत् के हो ? देवता भनेको को हो ? मलाई कृपया यसको बारेमा वर्णन गर्नुहोस्।**

**तात्पर्य :** यस अध्यायमा भगवान् श्रीकृष्णले अर्जुनबाट सोधिएका 'ब्रह्म भनेको के हो' आदि विभिन्न प्रश्नहरूको उत्तर दिनुभएको छ। यहाँ भगवान्ले कर्म (सकाम कर्म), भक्ति तथा योगसिद्धान्त र शुद्ध भक्तिको पनि व्याख्या गर्नुभएको छ। *श्रीमद्भागवत्मा* परमसत्यलाई ब्रह्म, परमात्मा तथा भगवान्का रूपमा व्याख्या गरिएको छ। जीवात्मा वा जीवलाई पनि ब्रह्म भनिएको छ। अर्जुनले आत्माका विषयमा पनि सोधेका छन्। यहाँ आत्मा भन्नाले शरीर, मन र आत्माको बोध हुन्छ। वैदिक शब्दकोशअनुसार पनि आत्माको अर्थ मन, आत्मा, शरीर तथा इन्द्रियलाई जनाउँदछ।

यहाँ अर्जुनले परमेश्वरलाई पुरुषोत्तम या परमपुरुष भनेर सम्बोधन गरेका छन्। यसको अर्थ के हो भने, उनले यी प्रश्नहरू केवल एउटा मित्रसँग मात्र होइन परमपुरुषसँग सोधिरहेका छन्, किनभने अर्जुनका दृष्टिमा उहाँ मात्र प्रामाणिक उत्तर दिनसक्ने परमआधिकारिक व्यक्तित्व हुनुहुन्छ।

**अधियज्ञः कथं कोऽत्र देहेऽस्मिन्मधुसूदन ।**
**प्रयाणकाले च कथं ज्ञेयोऽसि नियतात्मभिः ॥ २॥**

**अधियज्ञः** — यज्ञका स्वामी; **कथम्** — कसरी; **कः** — को; **अत्र** — यहाँ;

**देहे** — शरीरमा; **अस्मिन्** — यो; **मधुसूदन** — हे मधुसूदन; **प्रयाणकाले** — मृत्युकालमा; **च** — तथा; **कथम्** — कसरी; **ज्ञेयःअसि** — जानिनु हुन्छ; **नियत-आत्मभिः** — आत्म संयमीहरूद्वारा।

**हे मधुसूदन! यज्ञको स्वामी को हो र ऊ शरीरमा कसरी रहन्छ? अनि भक्तिमा लागेका व्यक्तिहरूले मृत्युकालमा कसरी हजुरलाई चिन्न सक्दछन्?**

**तात्पर्य** : यज्ञका स्वामी भन्नाले इन्द्र वा भगवान् विष्णुलाई बुझाउँदछ। ब्रह्माजी र शिवजी सहितका अन्य प्रधान देवताहरूमा भगवान् विष्णु प्रमुख हुनुहुन्छ र प्रशासक देवताहरूमा इन्द्र प्रमुख देवता हुन्। भगवान् विष्णु र इन्द्र दुवैको पूजा यज्ञद्वारा गरिन्छ। तर, यहाँ अर्जुनले वास्तवमा यज्ञको स्वामी को हो र जीवात्माका शरीरभित्र भगवान् कसरी निवास गर्नु हुन्छ? भन्ने प्रश्न गरेका छन्।

अर्जुनले भगवान्‌लाई **मधुसूदन** भनेर सम्बोधन गरेका छन्, किनभने भगवान् श्रीकृष्णले मधु नाम भएको असुरलाई मार्नुभएको थियो। यी सबै शंकास्पद प्रश्नहरू अर्जुनजस्ता कृष्णभावनाभावित भक्तका मनमा उठ्नु नपर्ने हो। यहाँ उठाइएका यी सबै शङ्काहरू असुरका प्रतीक हुन् र भगवान् श्रीकृष्ण असुरहरूको संहार गर्ने कार्यमा सिद्धहस्त हुनुहुन्छ। त्यसैले, अर्जुनले पनि आफ्ना मनमा उठेका सबै आसुरी शङ्काहरूलाई भगवान् श्रीकृष्णले निर्मूल पारिदिनु हुन्छ कि भन्ने आशयले उहाँलाई मधुसूदन भनी सम्बोधन गरेका हुन्।

यो श्लोकमा रहेको **प्रयाणकाले** भन्ने शब्द पनि अत्यन्त महत्त्वपूर्ण छ, किनभने हामीले आफ्ना जीवनभरि गरेका कर्मको परीक्षा मर्ने समयमा नै हुने गर्दछ। जीवनभरि कृष्णभावनामा लागिरहेका मानिसहरूका विषयमा जान्ने उत्कट इच्छा अर्जुनका मनमा उठेको थियो। अन्तिम समयमा तिनीहरूको अवस्था कस्तो हुन्छ होला? भन्ने जिज्ञासा उनमा थियो। मृत्युका समयमा शरीरका सम्पूर्ण कार्यहरू बन्द हुने हुनाले मन पनि सही अवस्थामा हुँदैन। यसरी शारीरिक अवस्था बिग्रिएको समयमा मानिस परमेश्वरको स्मरण गर्न असमर्थ पनि हुन सक्दछ। त्यसैले परमभक्त महाराज कुलशेखर प्रार्थना गर्दछन्, "हे भगवान्! म अहिले पूर्णस्वस्थ छु र यही अवस्थामा तत्काल मेरो मृत्यु भइदिए मेरो मनरूपी हंस सजिलैसँग हजुरका चरणकमलरूपी नालमा प्रवेश गर्न सक्नेथियो, यस्तो भइदिए राम्रो हुनेथियो।" यो रूपकको वर्णन यहाँ किन गरिएको हो भने जलचर पक्षी हाँस कमलको फूल खोस्रिँदै त्यसको नालभित्र प्रवेश गर्न आनन्द मान्दछ। जसरी हाँस कमलपुष्पभित्र प्रवेश गर्न चाहन्छ,

ठीक त्यसै गरी शुद्ध भक्तको मन पनि भगवान्‌का चरणकमलमा लीन हुन चाहन्छ। महाराज कुलशेखर भगवान्‌सँग भन्दछन्—"हे भगवान्! यस समय मेरो मन शान्त छ र म पूर्णस्वस्थ छु, यदि अहिले नै हजुरका चरणकमलको चिन्तन गर्दागर्दै शरीर त्याग्नपाएँ मलाई विश्वास छ—हजुरप्रति रहेको मेरो भक्तिभाव पूर्ण हुनेछ तर यदि मैले आफ्नो सहज मृत्युको प्रतीक्षा गर्नुपरे त्यो समय के हुने हो म जान्न सक्दिनँ, किनभने त्यस समय मेरो शरीरले काम गर्नै छोड्न सक्दछ, मेरो गला अवरुद्ध हुन सक्दछ, म बोल्नै नसक्ने हुन सक्दछु। त्यस्तो अवस्थामा मैले हजुरको नाम जप्न सक्छु कि सक्दिनँ त्यो पनि मलाई थाहा छैन, त्यसैले मलाई अहिले तुरून्तै मर्न दिनुभए उत्तम हुनेथियो।" यहाँ अर्जुन प्रश्न गर्दछन्—यस्तो अवस्थामा कसरी मानिसले भगवान् श्रीकृष्णका चरणकमलमा आफ्नो मनलाई स्थिर गर्न सक्दछ?

श्रीभगवानुवाच

**अक्षरं ब्रह्म परमं स्वभावोऽध्यात्ममुच्यते ।**
**भूतभावोद्भवकरो विसर्गः कर्मसंज्ञितः ॥ ३ ॥**

**श्रीभगवानुवाच**— भगवान्‌ले भन्नुभयो; **अक्षरम्**— अविनाशी; **ब्रह्म**— ब्रह्म; **परमम्**— दिव्य; **स्वभावः**— सनातन प्रकृति; **अध्यात्मम्**— आत्मा; **उच्यते**— भनिन्छ; **भूतभावः उद्भवकरः**— जीवहरूको भौतिक शरीर उत्पन्न गर्ने; **विसर्गः**— सृष्टि; **कर्म**— सकामकर्म; **संज्ञितः**— भनिन्छ।

**भगवान्‌ले भन्नुभयोः अविनाशी एवं दिव्य जीवलाई ब्रह्म भनिन्छ र उहाँको सनातन स्वभावलाई अध्यात्म वा आत्मा भनिन्छ अनि भौतिक शरीरको विकाससँग सम्बन्धित क्रियाकलापलाई कर्म वा सकामकर्म भनिन्छ।**

**तात्पर्य :** ब्रह्म अविनाशी छ र नित्य विद्यमान छ। ब्रह्मको विधानमा कहिल्यै पनि परिवर्तन हुँदैन। तर, ब्रह्मभन्दा पनि पर परब्रह्म हुनुहुन्छ। ब्रह्म शब्दले जीवलाई जनाउँदछ र परब्रह्म शब्दले भगवान्‌लाई जनाउँदछ। जीवात्माको मौलिक अवस्था भौतिक जगत्‌मा उसले ग्रहण गर्ने स्थितिभन्दा भिन्न हुन्छ। भौतिक चेतनामा रहँदा उसको स्वभाव पदार्थमाथि स्वामीत्व कायम गर्ने किसिमको हुन्छ, र आध्यात्मिक चेतनामा वा कृष्णभावनामा रहँदा परमेश्वरको सेवामा रहनु नै उसको स्वभाव हुन्छ। भौतिक चेतनामा रहेको अवस्थामा जीवले संसारमा विभिन्न प्रकारका शरीरहरू धारण गर्नु पर्दछ। भौतिकचेतनाका शक्तिद्वारा सम्पन्न हुने यस्तै विविध सृष्टिलाई कर्म भनिन्छ।

वैदिक साहित्यमा जीवलाई जीवात्मा र ब्रह्म भनिएको छ तर यसलाई कहीँ पनि परमब्रह्म भनिएको छैन। जीवात्माले संसारमा विभिन्न परिस्थितिलाई अङ्गीकार गर्दछ। कहिले ऊ अन्धकारमय भौतिक प्रकृतिसँग मिश्रित भई पदार्थलाई नै आफ्नो स्वरूप ठान्दछ र कहिले आफ्नो पहिचानलाई आध्यात्मिक पराप्रकृतिसँग सम्बद्ध बनाउदछ। त्यसैले, यसलाई परमेश्वरको तटस्था शक्ति भनिन्छ। भौतिक वा आध्यात्मिक प्रकृतिसँग जीवको सम्बन्धका आधारमा उसले भौतिक वा आध्यात्मिक शरीर प्राप्त गर्दछ। भौतिक प्रकृतिमा उसले चौरासी लाख योनिमध्ये कुनै पनि योनिको शरीर धारण गर्न सक्दछ तर आध्यात्मिक प्रकृतिमा उसको एउटै मात्र शरीर हुन्छ। भौतिक प्रकृतिमा उसले आफ्नो कर्मअनुसार कहिले मानिस, कहिले देवता र कहिले पशुपक्षी आदिको जीवन प्राप्त गर्दछ। स्वर्गमा गएर सुखभोग गर्ने इच्छाले उसले कहिलेकाहीँ यज्ञ पनि गर्दछ तर आफ्नो पुण्य सकिएपछि ऊ फेरि पनि मानिस भएर पृथ्वीमा जन्मन्छ। यही प्रक्रियालाई नै कर्म भनिन्छ।

वैदिक यज्ञ-अनुष्ठानको वर्णन छान्दोग्य उपनिषद्मा गरिएको छ। जसअनुसार यज्ञका वेदीमा पाँच किसिमका अग्निहरू हुन्छन्, ती पाँच अग्निमा पाँचै किसिमका आहूतिहरू दिइन्छन्। यी पाँच किसिमका अग्निहरू भनेका स्वर्गलोक, बादल, पृथ्वी, पुरुष र स्त्री हुन् र यिनमा दिइने पाँच आहूतिहरू भनेका श्रद्धा, सोम, वर्षा, अन्न र वीर्य हुन्। यज्ञविधिमा— मानिस आफूले चाहेजस्तो विशिष्ट स्वर्गीय भोग प्राप्तिका लागि विशेष प्रकारको यज्ञ गर्दछ र अन्त्यमा त्यसलाई प्राप्त पनि गर्दछ। अनि आफूले गरेको पुण्यको भोग सकिएपछि जीव वर्षाका रूपमा पृथ्वीमा झर्दछ र उसले अन्नको रूप ग्रहण गर्दछ। त्यही अन्न मानिसले खान्छ र वीर्यमा परिणत हुन्छ अनि त्यो वीर्य स्त्रीका गर्भमा स्थापित हुन्छ। यसरी जीवले फेरि मानिसको रूप प्राप्त गर्दछ। त्यो मानिसले फेरि यज्ञ गर्दछ र यसै गरी ऊ बारम्बार त्यही चक्रमा घुमिरहन्छ। जीवात्माहरू यसरी नै निरन्तर भौतिक मार्गमा आउने जाने गरिरहन्छन् तर कृष्णभावनाभावित मानिस यस्तो यज्ञचक्रलाई त्याग गर्दछ। ऊ सोझै कृष्णभावनालाई अपनाएर त्यसैमार्फत भगवान्का धाममा फर्किने तयारी गर्दछ।

*भगवद्गीताका* निराकारवादी भाष्यकारहरू बिनाकारण ब्रह्मले जीवको रूप लिएर संसारमा आउँछ भन्दछन् र त्यसको पुष्टिका लागि गीताको पन्ध्रौँ अध्यायको सातौँ श्लोकलाई अघि सार्दछन्। तर, त्यस श्लोकमा भगवान्ले जीवलाई "मेरो शाश्वत अंश" भन्नुभएको कुरा तिनीहरू देख्न सक्दैनन्। भगवान्को अंशका रूपमा रहेको यो जीव भौतिक संसारमा आएर तल झर्न सक्दछ, च्युत हुन सक्दछ तर परमेश्वर अच्युत हुनुभएकाले उहाँ कहिल्यै तल

झर्नु हुन्न वा च्युत हुनु हुन्न। त्यसै कारण ब्रह्मले जीवको रूप धारण गर्दछ भन्ने अभिमत स्वीकार्य हुन सक्दैन। अतः सम्झनुपर्ने महत्त्वपूर्ण कुरा के छ भने, वैदिक साहित्यमा ब्रह्म (जीवात्मा) लाई परब्रह्म (परमेश्वर) भन्दा पृथक् मानिएको छ।

**अधिभूतं क्षरोभावः पुरुषश्चाधिदैवतम् ।**
**अधियज्ञोऽहमेवात्र देहे देहभृतां वर ॥ ४॥**

**अधिभूतम्** — भौतिक जगत्; **क्षरः** — निरन्तर परिवर्तनशील; **भावः** — स्वभाव; **पुरुषः** — सूर्य र चन्द्रजस्ता समस्त देवताहरूसहितको विराट रूप; **च** — तथा; **अधिदैवतम्** — अधिदैव नाम गरेको; **अधियज्ञः** — परमात्मा; **अहम्** — म (कृष्ण); **एव** — निश्चय नै; **अत्र** — यसमा; **देहे** — शरीरमा; **देहभृताम्** — शरीरधारीहरूमा; **वर** — हे उत्तम!

**हे शरीरधारीहरूमा श्रेष्ठ! निरन्तर परिवर्तनशील यो भौतिक प्रकृति नै अधिभूत हो। सूर्य र चन्द्रलसहितका सम्पूर्ण देवताहरूसहितको भगवान्को विराट स्वरूपलाई अधिदैव भनिन्छ र प्रत्येक शरीरधारीका हृदयमा परमात्मा रूपले निवास गर्ने म परमेश्वर नै अधियज्ञ वा यज्ञको स्वामी हूँ।**

**तात्पर्य :** यो भौतिक प्रकृति निरन्तर परिवर्तनशील छ। साधारणतः यी भौतिक शरीरहरूले छ:वटा अवस्थाहरू पार गर्दछन् — तिनीहरू जन्मिन्छन्, बढ्छन्, केही समयसम्म बढ्दछन्, केही कुरा उत्पादन गर्दछन् अनि तिनीहरू क्षीण हुन्छन् र अन्त्यमा नष्ट हुन्छन्। यो भौतिक प्रकृतिलाई अधिभूत भनिन्छ। यो निश्चित समयमा उत्पन्न हुन्छ र निश्चित समयमा नष्ट हुने गर्दछ। सबै देवताहरू र तिनका लोकहरूसहित परमेश्वरको विराट स्वरूप नै अधिदैव हो। प्रत्येक शरीरमा जीवात्मासँगै निवास गर्ने भगवान् श्रीकृष्णको प्रतिनिधि अंश परमात्मा हुनुहुन्छ। परमात्मालाई अधियज्ञ भनिन्छ र उहाँ हृदयमा निवास गर्नु हुन्छ। यो श्लोकमा भगवान्ले "एव" शब्दमा विशेष जोड दिँदै परमात्मा उहाँभन्दा अलग छैन भन्ने कुरा स्पष्ट गर्नुभएको छ। परमात्मा वा भगवान् जीवात्माका हृदयभित्र रहेर जीवात्माका हरेक क्रियाकलापहरूको साक्षी भएर बस्नु हुन्छ र परमात्मा जीवात्माका विभिन्न किसिमका चेतनाहरूको उद्गमस्थल हुनुहुन्छ। परमात्माले प्रत्येक आत्मालाई स्वतन्त्र भएर काम गर्ने अवसर पनि दिनु हुन्छ र उहाँ जीवात्माका हरेक क्रियाकलापको साक्षी पनि बन्नु हुन्छ। भगवान्को दिव्य सेवामा लागिरहेको कृष्णभावनाभावित भक्तलाई परमेश्वरका यी सबै विविध कार्यक्रमहरू स्वतः स्पष्ट हुँदैजान्छन्।

"अधिदैवत" नाम गरेको भगवान्को विराटस्वरूप परमात्मारूपी भगवान्का समीप पुग्न नसक्ने नवदीक्षितहरूको चिन्तनका लागि प्रकट गरिएको हो। अतः नवदीक्षितहरूलाई यहाँ उनै विराटपुरुषको चिन्तन गरिरहने परामर्श दिइएको छ। उहाँका चरणहरू तलका लोकमा पुगेका छन्, सूर्य र चन्द्र उहाँका आँखा मानिन्छन् र उच्चलोक वा ब्रह्मलोकलाई उहाँको शिर मानिएको छ।

**अन्तकाले च मामेव स्मरन्मुक्त्वा कलेवरम् ।**
**यः प्रयाति स मद्भावं याति नास्त्यत्र संशयः ॥ ५ ॥**

**अन्तकाले** — जीवनका अन्त्यमा; **च** — पनि; **माम्** — मलाई; **एव** — निश्चय नै; **स्मरन्** — स्मरण गर्दै; **मुक्त्वा** — त्यागेर; **कलेवरम्** — शरीरलाई; **यः** — जो; **प्रयाति** — जान्छ; **सः** — त्यसले; **मत्भावम्** — मेरो स्वभावलाई; **याति** — प्राप्त गर्दछ; **न अस्ति** — छैन; **अत्र** — यहाँ; **संशयः** — सन्देह।

**जीवनका अन्त्यमा जसले केवल मेरो स्मरण गर्दै शरीर त्याग गर्दछ त्यसले तत्काल मेरो स्वभावलाई प्राप्त गर्दछ। यसमा कुनै शंका छैन।**

**तात्पर्य :** यस श्लोकमा कृष्णभावनाको महत्त्व दर्शाइएको छ। जसले कृष्णभावनाभावित अवस्थामा आफ्नो शरीर त्याग गर्दछ त्यसले तत्काल परमेश्वरको दिव्य स्वभाव प्राप्त गर्दछ। परमेश्वर अतिशुद्ध हुनुहुन्छ : त्यसैले निरन्तर कृष्णभावनाभावित हुने व्यक्ति पनि परमशुद्ध मानिन्छ। "**स्मरण**" शब्द यहाँ महत्त्वपूर्ण छ। जसले भक्तिपूर्वक कृष्णचेतनाको अभ्यास गरेको छैन र जसको आत्मा शुद्ध छैन त्यसले भगवान् श्रीकृष्णको स्मरण गर्न सक्दैन। मानिसले जीवनको प्रारम्भिक अवस्थादेखि नै कृष्णभावनाको अभ्यास गर्नु पर्दछ। जीवनको अन्त्यमा सफल हुनचाहनेले कृष्णस्मरणको विधि अपनाउनु अनिवार्य छ। अतः भगवान् श्रीकृष्णको स्मरणका निम्ति मानिसले **हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे। हरे राम हरे राम राम राम हरे हरे** यो महामन्त्र निरन्तर जप गर्नु पर्दछ। भगवान् श्रीचैतन्य महाप्रभुले "**तरोरपि सहिष्णुना**" भनेर साधकलाई वृक्षभन्दा पनि सहनशील हुने सल्लाह दिनुभएको छ। हरेकृष्ण महामन्त्र जप्ने व्यक्तिलाई विभिन्न किसिमका सांसारिक विघ्नबाधाहरूको सामना गर्नु पर्दछ, तैपनि ती सम्पूर्ण विघ्नहरूलाई सहन गर्दै मानिसले निरन्तर — **हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे। हरे राम हरे राम राम राम हरे हरे**, यो महामन्त्र जपिरहनु पर्दछ, जसले गर्दा जीवनका अन्त्यमा कृष्णभावनाको पर्याप्त लाभ लिन सकिन्छ।

**यं यं वापि स्मरन्भावं त्यजत्यन्ते कलेवरम् ।**
**तं तमेवैति कौन्तेय सदा तद्भावभावितः ॥ ६ ॥**

**यम् यम्** — जुन जुन; **वा अपि** — कुनै पनि; **स्मरन्** — स्मरण गर्दै; **भावम्** — भाव वा अवस्थालाई; **त्यजति** — परित्याग गर्दछ; **अन्ते** — अन्त्यमा; **कलेवरम्** — शरीरलाई; **तम् तम्** — त्यही त्यही; **एव** — निश्चय नै; **एति** — प्राप्त गर्दछ; **कौन्तेय** — हे कुन्तीपुत्र!; **सदा** — सधैँ; **तत्** — त्यो; **भाव** — भाव; **भावितः** — स्मरण गर्दै।

**हे कुन्तीपुत्र! शरीर त्याग गर्ने समयमा मानिसले जुन जुन अवस्थाको स्मरण गर्दछ त्यसले निश्चित रूपमा मृत्युपछि त्यही स्थिति प्राप्त गर्दछ।**

**तात्पर्य :** यहाँ मृत्युको सङ्कटपूर्ण क्षणमा आफ्नो स्वभाव परिवर्तन गर्ने विधिको वर्णन गरिएको छ। जीवनका अन्त्यमा भगवान् श्रीकृष्णलाई स्मरण गर्दै शरीर त्याग्ने व्यक्तिले परमेश्वरको दिव्य स्वभाव प्राप्त गर्दछ तर श्रीकृष्णभन्दा भिन्न अरू कुनै कुराको स्मरण गर्दै शरीर त्याग्नेले त्यो दिव्य स्थिति प्राप्त गर्न सक्दैन। यस कुरामा हामीले विशेष ध्यान दिनु पर्दछ। मनलाई सहज अवस्थामा राखेर कसरी मानिसले शरीर त्याग्न सक्दछ? महाराज भरतजस्ता महापुरुषले पनि मृत्युको समयमा मृगको पाठो सम्झिए, जसले गर्दा अर्को जन्ममा उनलाई मृग भएर जन्म लिनु पर्‍यो। मृगका रूपमा जन्म लिएका भए पनि उनलाई पूर्वजन्मका कर्महरूको सम्झना थियो, तैपनि उनले मृगको शरीर स्वीकार गर्न पर्‍यो।

अवश्य नै, जीवनभरि गरेका कर्म तथा सोचेका कुराहरूले मानिसका मृत्युसमयको विचारमा उल्लेखनीय प्रभाव पार्दछ। अतः वर्तमान जीवनले मानिसको आगामी जीवनको निर्माण गर्दछ। यदि कसैले सत्वगुणी अवस्थामा रहेर वर्तमान जीवन बिताएको छ र निरन्तर भगवान् श्रीकृष्णको चिन्तन पनि गरिरहेको छ त्यसले जीवनको अन्तकालमा श्रीकृष्णको स्मरण गर्ने सम्भावना हुन्छ। यसबाट उसलाई श्रीकृष्णको दिव्य स्वभावमा रूपान्तरित हुन सहायता पुग्दछ। दिव्य रूपले श्रीकृष्णको सेवामा लीन भएको व्यक्तिले अर्को जन्ममा भौतिक होइन दिव्य आध्यात्मिक शरीर प्राप्त गर्दछ। त्यसैले, जीवनको अन्तिम अवस्थामा सफलतापूर्वक आफ्नो स्वभावलाई परिवर्तन गर्नका लागि **हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे, हरे राम हरे राम राम राम हरे हरे** यो महामन्त्रको जप गर्नु अति आवशयक छ।

**तस्मात्सर्वेषु कालेषु मामनुस्मर युध्य च ।**
**मय्यर्पितमनोबुद्धिर्मामेवैष्यस्यसंशयः ॥ ७ ॥**

**तस्मात्** — त्यसकारण; **सर्वेषु** — सबै; **कालेषु** — समयमा; **माम्** — मलाई; **अनुस्मर** — स्मरण गरे; **युध्य** — युद्ध गर; **च** — पनि; **मयि** — ममा; **अर्पित** — शरणागत भएर; **मनः** — मन; **बुद्धिः** — बुद्धि; **माम्** — मलाई; **एव** — अवश्य नै; **एष्यति** — प्राप्त गर्नेछौ; **असंशयः** — निस्सन्देह।

**त्यसकारण हे अर्जुन! तिमीले सधैँ भगवान् श्रीकृष्ण रूपमा मेरो चिन्तन गर्नु पर्दछ र साथै युद्ध गर्ने आफ्नो कर्तव्य पनि पूरा गर्नु पर्दछ। आफ्ना कर्महरू मलाई अर्पण गरेर मन र बुद्धिलाई ममा नै अर्पण गरेमा तिमीले निश्चय नै मलाई प्राप्त गर्नेछौ।**

**तात्पर्य :** भौतिक क्रियाकलापमा व्यस्त रहेका सबै मानिसहरूका लागि अर्जुनलाई दिइएको यो उपदेश अत्यन्त महत्त्वपूर्ण छ। भगवान्ले कसैलाई पनि आफ्नो निर्धारित कर्तव्य पालन नगर भन्नु हुन्न। जोसुकैले पनि निरन्तर आफ्ना कर्तव्यहरू पालना गर्दै हरे कृष्ण कीर्तनद्वारा भगवान् श्रीकृष्णको चिन्तन गर्न सक्दछ। यसो गर्नाले भौतिक संक्रमणबाट मुक्ति पाइन्छ र मन तथा बुद्धि भगवान् श्रीकृष्णमा लागिरहन्छ। भगवान् कृष्णको नाम सङ्कीर्तन गर्नाले मानिस कृष्णलोक वा परमधाममा पुग्न सक्दछ, यसमा कुनै शंका छैन।

**अभ्यासयोगयुक्तेन चेतसा नान्यगामिना ।**
**परमं पुरुषं दिव्यं याति पार्थानुचिन्तयन् ॥ ८ ॥**

**अभ्यासयोग** — अभ्यासद्वारा; **युक्तेन** — ध्यानमा संलग्न भएर; **चेतसा** — मन र बुद्धिद्वारा; **न अन्यगामिना** — अन्यत्र मन जान नदिई; **परमम्** — परम; **पुरुषम्** — भगवान्लाई; **दिव्यम्** — दिव्य; **याति** — प्राप्त गर्दछ; **पार्थ** — हे पृथापुत्र!; **अनुचिन्तयन्** — निरन्तर चिन्तन गर्दै।

**हे पार्थ! जुन मानिसले आफ्नो मनले निरन्तर मेरो स्मरण गरिरहन्छ र अविचलित भावले भगवान्का रूपमा मेरो ध्यान गर्दछ, त्यो निश्चित रूपले ममा आइपुग्धछ।**

**तात्पर्य :** यस श्लोकमा भगवान् श्रीकृष्णले आफूलाई स्मरण गर्ने कुरामा जोड दिनुभएको छ। "हरे कृष्ण" महामन्त्रको कीर्तन गर्नाले भगवान् श्रीकृष्णको स्मरण ताजा हुन्छ। भगवान्को ध्वनि श्रवण र नामसङ्कीर्तन गर्ने अभ्यासबाट नै मानिसका कान, जिब्रो र मन व्यस्त हुन्छन्। यो भक्तिमय ध्यानयोगको अभ्यास गर्न अत्यन्त सजिलो छ। यसले परमपुरुषको प्राप्तिमा सहायता पुऱ्याउँदछ। पुरुषम्को अर्थ भोक्ता हो। सबै जीवहरू भगवान्का तटस्थ शक्ति हुन्, तैपनि तिनीहरू भौतिक संक्रमणमा परेका छन्। त्यसैले तिनीहरू आफूलाई नै भोक्ता ठान्दछन् तर वास्तवमा तिनीहरू परमभोक्ता होइनन्। यहाँ

आफ्ना विभिन्न स्वरूप तथा नारायण, वासुदेव आदि अंश-विस्तारका रूपमा भगवान् मात्र परमभोक्ता हुनुहुन्छ भन्ने कुरा स्पष्ट उल्लेख भएको छ।

कृष्णभक्तले हरेकृष्ण महामन्त्रको सङ्कीर्तनद्वारा नारायण, कृष्ण, राम आदि कुनै पनि रूपमा आफ्ना पूजनीय परमेश्वरको निरन्तर चिन्तन गर्न सक्दछ। यस्तो अभ्यासले उसलाई शुद्ध बनाउँछ र भगवन्नामको निरन्तर जप गर्नाले जीवनको अन्त्यमा उसले भगवद्धाम प्राप्त गर्दछ। योग भनेको पनि आफ्नो अन्तस्करणमा रहेका परमात्माको ध्यान गर्नु हो र हरेकृष्ण महामन्त्रको जपद्वारा पनि ठीक त्यसै गरी मानिसले आफ्नो मन परमेश्वरमा स्थिर गर्न सक्दछ। मन चञ्चल भइरहने हुँदा यसलाई बलपूर्वक कृष्णचिन्तनमा लगाउनु अत्यन्त आवश्यक छ। जसरी एउटा भुसिलकिरो पुतली बन्नचाहन्छ र त्यो यसै जीवनमा पुतली भएको दृष्टान्त पनि देख्न पाइन्छ, त्यसै गरी यदि हामीले पनि निरन्तर भगवान् श्रीकृष्णको चिन्तन रहेमा जीवनको अन्त्यमा श्रीकृष्णको जस्तो शारीरिक अवस्था प्राप्त गर्ने कुरा निश्चित छ।

**कविं पुराणमनुशासितार-मणोरणीयांसमनुस्मरेद्यः ।**
**सर्वस्य धातारमचिन्त्यरूप-मादित्यवर्णं तमसः परस्तात्॥ ९ ॥**

**कविम्** — सर्वज्ञ; **पुराणम्** — प्राचीनतम; **पुरातन (सबैभन्दा पुरानो)**; **अनुशासितारम्** — नियन्त्रक; **अणोः** — अणुभन्दा; **अणियांसम्** — सानो; **अनुस्मरेत** — सधैँ स्मरण गर्दछ; **यः** — जसले; **सर्वस्य** — सबैका; **धातारम्** — पालनकर्ता; **अचिन्त्य** — अकल्पनीय; **रूपम्** — जसको स्वरूप; **आदित्य-वर्णम्** — सूर्यजस्तै प्रकाशवान्; **तमसः** — अन्धकारभन्दा; **परस्तात्** — दिव्य।

**जो सर्वज्ञ हुनुहुन्छ, प्राचीनतम हुनुहुन्छ, नियन्त्रक हुनुहुन्छ, सानोभन्दा सानो हुनुहुन्छ, सबैका पालनकर्ता हुनुहुन्छ, जो सम्पूर्ण भौतिक अवधारणाभन्दा पर हुनुहुन्छ, जो अचिन्त्य हुनुहुन्छ, जो सधैँ एउटा पुरुषका रूपमा हुनुहुन्छ, जो सूर्यसमान प्रकाशवान् हुनुहुन्छ र यो भौतिक प्रकृतिभन्दा पर दिव्य स्वरूपका हुनुहुन्छ, उनै परमपुरुषको ध्यान मानिसले गर्नु पर्दछ।**

**तात्पर्य :** यस श्लोकमा परमेश्वरको चिन्तन गर्ने विधिको उल्लेख गरिएको छ। सबैभन्दा प्रमुख तथ्य के हो भने, भगवान् निराकार वा शून्य हुनु हुन्न। शून्य र निराकारको चिन्तन गर्नु अत्यन्त कठिन हुन्छ तर भगवान् श्रीकृष्णको चिन्तन गर्ने विधि अत्यन्त सजिलो छ। यथार्थ रूपमा त्यसैको वर्णन यहाँ गरिएको छ। सबैभन्दा पहिले त भगवान् पुरुष हुनुहुन्छ र व्यक्तित्ववान्

हुनुहुन्छ। सर्वप्रथम हामीले भगवान् राम अथवा भगवान् श्रीकृष्णलाई पुरुष अर्थात् व्यक्तिको रूपमा चिन्नु पर्दछ। कसैले रामको चिन्तन गर्दछन् र कसैले श्रीकृष्णको, तर उहाँ जेजस्तो हुनुहुन्छ त्यो कुरा *भगवद्गीताको* यस श्लोकमा वर्णन गरिएको छ। भगवान् कवि हुनुहुन्छ, उहाँ भूत, वर्तमान र भविष्यका ज्ञाता हुनुहुन्छ, तसर्थ सबै कुरा उहाँलाई थाहा हुन्छ। उहाँ प्राचीनतम पुरुष हुनुहुन्छ, किनभने उहाँ नै हरेक वस्तुका मूल उद्गम हुनुहुन्छ। प्रत्येक पदार्थ उहाँबाट उत्पन्न हुन्छन्। उहाँ ब्रह्माण्डका परमनियन्त्रक पनि हुनुहुन्छ र उहाँ नै मानवताका पालनकर्ता तथा शिक्षक हुनुहुन्छ। उहाँ अणुभन्दा पनि सूक्ष्म हुनुहुन्छ। जीवात्माको आकार एउटा रौँको टुप्पाको दश हजार अंशको एक अंश बराबरको छ र भगवान् अचिन्त्य रूपमा यस्ता अणुको पनि हृदयमा प्रवेश गर्नसक्ने सूक्ष्म हुनुहुन्छ। त्यसैले, उहाँलाई सूक्ष्मभन्दा पनि सूक्ष्म भनिएको हो। उहाँ परमेश्वरका रूपमा परमाणुभित्र पनि प्रवेश गर्न सक्नु हुन्छ र सानोभन्दा सानो तत्त्वको हृदयमा पनि प्रवेश गर्न सक्नु हुन्छ। साथै, परमात्माका रूपमा उहाँले त्यसको नियन्त्रण पनि गर्नु हुन्छ। यति सानो भएर पनि उहाँ सर्वव्यापी हुनुहुन्छ र सबैका पालनकर्ता पनि हुनुहुन्छ। यी सबै लोकहरूको धारण पनि उहाँबाट हुने गर्दछ। यी विशाल लोकहरू कसरी हावामा तैरिरहेका होलान् भनेर हामी प्रायः आश्चर्य प्रकट गर्ने गर्दछौँ। यसको उत्तरमा यहाँ यी सबै विशाल लोकहरू तथा नक्षत्र-पुञ्जहरूको धारण परमेश्वरको **"अचिन्त्य"** शक्तिबाट भएको कुरा वर्णन गरिएको छ। यस प्रसङ्गमा अचिन्त्य शब्द अत्यन्त सार्थक देखिन्छ। ईश्वरको शक्ति हाम्रो कल्पनाशक्ति र विचारशक्तिको सीमाक्षेत्रभन्दा पर भएको हुँदा त्यसलाई अचिन्त्य भनिएको हो। उहाँ यो भौतिक जगत्मा व्याप्त पनि हुनुहुन्छ र साथै यसबाट पर पनि हुनुहुन्छ। यस कुराको खण्डन कसले गर्न सक्दछ? यो भौतिक जगत् जो आध्यात्मिक जगत्का तुलनामा नगण्य छ, त्यसका बारेमा हामी ठीक-ठीक सम्झन सक्दैनौँ भने योभन्दा पर के छ भन्ने कुरा हामी कसरी बुझ्न सक्दछौँ? अचिन्त्य भनेको यो भौतिक जगत्भन्दा पर रहेको हाम्रो तर्क, नीतिशास्त्र तथा दार्शनिक चिन्तनले स्पर्श नै गर्न नसक्ने अकल्पनीय स्तर हो। तसर्थ बुद्धिमान् मानिसले व्यर्थका तर्क तथा चिन्तनबाट टाढा रहेर *भगवद्गीता, श्रीमद्भागवत्* र वेदजस्ता शास्त्रमा जे भनिएको छ त्यसलाई स्वीकार गर्नु पर्दछ र तिनमा सुनिश्चित गरिएका नियमहरूको पालन गर्नु पर्दछ। यसबाट ज्ञान प्राप्त हुन सक्दछ।

**प्रयाणकाले मनसाचलेन भक्त्या युक्तो योगबलेन चैव ।**
**भ्रुवोर्मध्ये प्राणमावेश्य सम्यक् स तं परं पुरुषमुपैति दिव्यम्॥ १० ॥**

**प्रयाणकाले** — शरीर त्याग्ने समयमा; **मनसा** — मनद्वारा; **अचलेन** — अचल; दृढ; **भक्त्या** — पूर्ण भक्तिले; **युक्तः** — संलग्न; **योगबलेन** — योग शक्तिद्वारा; **च** — पनि; **एव** — निश्चय नै; **भ्रुवोः** — दुवै आँखीभौँका; **मध्ये** — बीचमा; **प्राणम्** — प्राणलाई; **आवेश्य** — स्थापित गरेर; **सम्यक्** — पूर्णतया; **सः** — त्यो; **तम्** — त्यसलाई; **परम** — दिव्य; **पुरुषम्** — भगवान्‌लाई; **उपैति** — प्राप्त गर्दछ; **दिव्यम्** — भगवत्-धाममा।

**जसले मृत्युको समयमा प्राणलाई दुवै आँखीभौँका बीचमा स्थिर गरेर योगशक्तिद्वारा मनलाई अविचलित बनाई पूर्ण भक्तिसहित आफूलाई परमेश्वरको स्मरणमा लगाउँदछ, त्यसले निश्चित रूपमा भगवान्‌लाई प्राप्त गर्दछ।**

**तात्पर्य :** यस श्लोकमा स्पष्टसँग मृत्युको समयमा मनलाई भगवान्‌को भक्तिमा स्थिर राख्नु पर्दछ भनिएको छ। जसले योगाभ्यास गर्दछन् तिनीहरूलाई आफ्नो प्राण भ्रुकुटी (आज्ञाचक्र) मा स्थिर गर्ने निर्देशन दिइएको छ। यहाँ षट्चक्रयोग अभ्यासको प्रस्तावद्वारा छःवटा चक्रमा ध्यान गर्ने सुझाव दिइएको छ। तर शुद्ध भक्तले यस किसिमको योगाभ्यास गर्दैन, किनभने ऊ निरन्तर कृष्णभावनामा लीन रहने हुँदा भगवत्कृपाले नै उसले मृत्युको समयमा भगवान्‌को स्मरण गर्न सक्दछ। चौथौँ श्लोकमा पनि यसको व्याख्या गरिएको छ।

यस श्लोकमा **"योगबलेन"** शब्दको विशिष्ट प्रयोग ध्यान दिनयोग्य छ। किनभने योगको अभ्यासबिना, त्यो षट्चक्रयोग होस् या भक्तियोग, मानिसले कहिल्यै पनि मृत्युकालमा दिव्य अवस्था प्राप्त गर्न सक्दैन। जसले मृत्युकालमा अकस्मात् परमेश्वरको स्मरण गर्न सक्दैन उसले कुनै न कुनै योगको, विशेष गरी भक्तियोगको अभ्यास गरेको हुनु पर्दछ। मृत्युकालमा मानिसको मन अत्यन्त तनावग्रस्त हुने हुनाले उसले आफ्नो जीवनमा योगको माध्यमबाट अध्यात्मको अभ्यास गर्नु पर्दछ।

**यदक्षरं वेदविदो वदन्ति विशन्ति यद्यतयो वीतरागाः ।**
**यदिच्छन्तो ब्रह्मचर्यं चरन्ति तत्ते पदं संग्रहेण प्रवक्ष्ये ॥ ११ ॥**

**यत्** — जुन; **अक्षरम्** — ॐ यो अक्षर; **वेदविदः** — वेदका ज्ञाताहरूले; **वदन्ति** — भन्दछन्; **विशन्ति** — प्रवेश गर्दछन्; **यत्** — जसमा; **यतयः** — ठुलाठुला ऋषि; **वीतरागाः** — संन्यास आश्रममा रहने संन्यासी; **यत्** — जुन; **इच्छन्तः** — इच्छा गर्नेहरू; **ब्रह्मचर्यम्** — ब्रह्मचर्यको; **चरन्ति** — अभ्यास गर्दछन्; **तत्** — त्यो; **ते** — तिमीमा; **पदम्** — अवस्था; **संग्रहेण** — संक्षेपमा; **प्रवक्ष्ये** — भन्नेछु।

**जो वेदका ज्ञाता छन्, जो ॐकारको जप गर्दछन् र जो ठुलाठुला संन्यासी, ऋषि छन् तिनीहरू ब्रह्ममा प्रवेश गर्दछन्। यस्तो सिद्धिको इच्छा गर्नेहरू ब्रह्मचर्यव्रतको अभ्यास गर्दछन्। अब म तिमीलाई संक्षेपमा त्यो विधि भन्दछु जसद्वारा मानिसले मुक्तिप्राप्त गर्न सक्दछ।**

**तात्पर्य :** यहाँ प्राणलाई आज्ञाचक्रमा स्थिर गराउने षट्चक्रयोगको अभ्यास गर्ने विधि भगवान् श्रीकृष्णले अर्जुनलाई बताउँदै हुनुहुन्छ। अर्जुनलाई षट्चक्रयोगको अभ्यासको विधि थाहा नभएकाले होला भगवान् श्रीकृष्णले आगामी श्लोकहरूमा यसको विधिको व्याख्या गर्दै हुनुहुन्छ। श्रीकृष्ण भन्नु हुन्छ—यद्यपि ब्रह्म अद्वितीय हुनुहुन्छ तापनि उहाँका विभिन्न स्वरूपहरू हुन्छन्। विशेष गरी निराकारवादीहरूका लागि अक्षर अर्थात् ॐ कार र ब्रह्म दुवै एउटै हुन्। भगवान् श्रीकृष्णले पनि यहाँ संन्यास लिएका ऋषिले प्राप्त गर्ने निराकार ब्रह्मको व्याख्या गर्नुभएको छ।

ज्ञान प्राप्त गर्ने वैदिकपद्धतिमा विद्यार्थीले सानैदेखि गुरुको आश्रममा रहेर पूर्ण ब्रह्मचर्यव्रत पालन गर्दै ॐकारको उपासनासहित परमनिराकार ब्रह्मप्राप्तिको शिक्षा ग्रहण गर्नु पर्दथ्यो। यस प्रकार तिनीहरूले ब्रह्मका दुई स्वरूपको अनुभव गर्दथे। यो प्रथा विद्यार्थीको आध्यात्मिक जीवनको विकासका लागि अति आवश्यक छ, तैपनि अहिलेको समयमा त्यस्तो ब्रह्मचारी जीवनमा रहनु सम्भव छैन। विश्वको सामाजिक जीवनसंरचनामा आएको परिवर्तनले गर्दा आरम्भदेखि नै विद्यार्थीलाई ब्रह्मचर्य आश्रममा रहन असम्भव भएको छ। ज्ञानका विभिन्न शाखाहरूका लागि विश्वभरि नै विभिन्न संस्थाहरू बनेका छन्, तैपनि अहिले ब्रह्मचर्य सिद्धान्तका आधारमा शिक्षा प्रदान गर्ने मान्यता प्राप्त संस्था एउटा पनि छैन। ब्रह्मचर्यको अभ्यास नगरी आध्यात्मिक जीवनमा उन्नति गर्न अत्यन्त कठिन हुन्छ। अतः यस कलियुगका लागि शास्त्रको आदेशानुसार भगवान् श्रीकृष्णका पवित्र नाम **हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे, हरे राम हरे राम राम राम हरे हरे**—को कीर्तन गर्नुबाहेक परमेश्वरको साक्षात्कार गर्ने अर्को कुनै उपाय छैन भनेर भगवान् चैतन्य महाप्रभुले घोषणा गर्नुभएको छ।

**सर्वद्वाराणि संयम्य मनो हृदि निरुध्य च ।**
**मूर्ध्न्याधायात्मनः प्राणमास्थितो योगधारणाम् ॥१२॥**

**सर्व-द्वाराणि** — शरीरका सबै द्वारहरूलाई; **संयम्य** — वशमा राखेर; **मनः** — मनलाई; **हृदि** — हृदयमा; **निरुध्य** — रोकेर; **च** — पनि; **मूर्ध्नि** — शिरमा; **आधाय** — स्थिर गरेर; **आत्मनः** — आत्मालाई;

**प्राणम्** — प्राणवायुलाई; **अस्थितः** — अवस्थित; **योगधारणाम्** — योगको स्थिति।

**इन्द्रियका सबै क्रियाकलापमा अनासक्त रहनु नै यौगिक अवस्था हो। इन्द्रियका सबै द्वारहरू बन्द गरेर मनलाई हृदयमा र प्राणवायुलाई शिरको उच्च भागमा केन्द्रित गरेर मानिसले आफूलाई योगमा स्थापित गर्दछ।**

**तात्पर्य :** योग अभ्यासका लागि सर्वप्रथम इन्द्रियभोगका सबै द्वारहरू बन्द गर्नुपर्ने सुझाव यो श्लोकमा दिइएको छ। इन्द्रियलाई तिनका भोगविषयबाट हटाउने यो विधिलाई प्रत्याहार भनिन्छ। यसमा आँखा, कान, नाक, जिब्रो तथा छाला — यी पाँच ज्ञानेन्द्रियहरूलाई पूर्णतः नियन्त्रणमा राखिन्छ। तिनलाई आत्मतृप्तिमा लिप्त हुन दिइँदैन। यसो गर्दा हृदयनिवासी परमात्मामा मन केन्द्रित हुन्छ अनि प्राणवायुलाई शिरमा स्थिर गर्न सकिन्छ। यस विधिको विस्तृत वर्णन छैटौँ अध्यायमा भइसकेको छ। तर, आजकाल यो विधि व्यावहारिक छैन भन्ने कुरा पनि माथि नै भनिसकियो। सबैभन्दा उत्तम विधि भनेको कृष्णभावनामृत हो। जसले भक्तिपूर्वक आफ्नो मनलाई भगवान् श्रीकृष्णमा स्थिर राख्नसकेको छ, अविचलित दिव्य समाधिमा स्थापित हुन उसलाई कुनै कठिनाइ पर्दैन।

**ओमित्येकाक्षरं ब्रह्म व्याहरन्मामनुस्मरन् ।**
**यः प्रयाति त्यजन्देहं स याति परमां गतिम् ॥ १३ ॥**

**ॐ** — ॐकार; **इति** — यस प्रकार; **एकाक्षरम्** — एक अक्षर; **ब्रह्म** — परब्रह्मको; **व्याहरन्** — उच्चारण गर्दै; **माम्** — म (कृष्ण) लाई; **अनुस्मरन्** — स्मरण गर्दै; **यः** — जो; **प्रयाति** — जान्छ; **त्यजन्** — छोडेर; **देहम्** — यो शरीरलाई; **सः** — त्यसले; **याति** — प्राप्त गर्दछ; **परमाम्** — परम; **गतिम्** — गन्तव्य।

**जसले योग अभ्यासमा स्थित रहेर, अक्षरहरूको परमसंयोग ॐकारको उच्चारण गर्दै भगवान्‌को चिन्तन गर्दछ र आफ्नो शरीर त्याग गर्दछ, त्यसले निश्चित रूपमा आध्यात्मिक लोक प्राप्त गर्दछ।**

**तात्पर्य :** ॐकार, ब्रह्म तथा भगवान् श्रीकृष्ण अलग-अलग हुनु हुन्न भन्ने कुरा यहाँ प्रष्ट्याइएको छ। ॐ भनेको भगवान् श्रीकृष्णको निराकार ध्वनि हो, तसर्थ, 'हरेकृष्ण' महामन्त्रमा यो ॐकार स्वतः समाहित छ। यस युगका लागि स्पष्ट रूपमा हरेकृष्ण मन्त्रको जपको अनुमोदन गरिएको छ। यदि कसैले **हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे। हरे राम हरे राम, राम राम हरे हरे** भन्ने महामन्त्र जप गर्दै आफ्नो शरीर त्याग गरेमा

ऊ आफ्ना अभ्यासको गुणअनुसार आध्यात्मिक लोकहरूमध्ये कुनै एक लोकमा पुग्दछ। भगवान् श्रीकृष्णका भक्त गोलोक वृन्दावन वा कृष्णलोकमा पुग्दछन्। साकारवादीहरूका लागि आध्यात्मिक आकाशमा वैकुण्ठलोकका रूपमा असङ्ख्य अरू लोकहरू विद्यमान् छन् तर विचरा निराकारवादीहरू ब्रह्मज्योतिमा नै अल्भिइरहन्छन्।

**अनन्यचेताः सततं यो मां स्मरति नित्यशः ।**
**तस्याहं सुलभः पार्थ नित्ययुक्तस्य योगिनः ॥ १४ ॥**

**अनन्यचेताः** — मानसिक विचलनबिना; **सततम्** — सधैँ; **यः** — जो; **माम्** — म कृष्णलाई; **स्मरति** — स्मरण गर्दछ; **नित्यशः** — नियमित रूपमा; **तस्य** — त्यसका लागि; **अहम्** — म छु; **सुलभः** — सजिलै प्राप्त हुने; **पार्थ** — हे पृथापुत्र; **नित्य** — नियमित रूपमा; **युक्तस्य** — संलग्न रहेको; **योगिनः** — भक्तका लागि।

**हे अर्जुन! हे पृथापुत्र! मेरो भक्तिमा तल्लीन रहने र अनन्य भावले निरन्तर मेरो स्मरण गरिरहने योगीका निमित्त म सधैँ सुलभ हुन्छु।**

**तात्पर्य :** यस श्लोकमा विशेष गरी भक्तियोगद्वारा भगवान्को सेवा गर्ने निष्काम भक्तहरूले प्राप्त गर्ने अन्तिम लक्ष्यको वर्णन गरिएको छ। यसअघिका श्लोकहरूमा आर्त, जिज्ञासु, अर्थार्थी र ज्ञानी — यी चार प्रकारका भक्तहरूको वर्णन भइसकेको छ। कर्मयोग, ज्ञानयोग तथा हठयोग आदि मुक्तिका विविध योगविधिको पनि वर्णन भएको छ। यी योगपद्धतिका सिद्धान्तमा पनि भक्ति जोडिएको छ तर यस श्लोकमा विशेष गरी ज्ञान, कर्म र हठयोगको मिश्रण नभई शुद्ध भक्तियोगको वर्णन गरिएको छ। भक्तियोगमा भक्तले भगवान् श्रीकृष्णबाहेक अरू केही पनि चाहना राख्दैन भन्ने कुरा **अनन्यचेताः** शब्दले सङ्केत गरेको छ। शुद्ध भक्त स्वर्गलोकमा जाने, ब्रह्मज्योतिमा एकाकार हुने तथा मोक्ष पाउने या भवबन्धनबाट मुक्ति प्राप्त गर्ने चाहना राख्दैन। शुद्ध भक्तले कुनै पनि वस्तुको इच्छा राख्दैन। चैतन्यचरितामृतमा शुद्ध भक्तलाई निष्काम भनिएको छ। यसको अर्थ हो, उसको निजी रुचि भन्ने केही हुँदैन। अतः पूर्ण शान्तिको लाभ पनि उसैले मात्र प्राप्त गर्दछ। आफ्ना स्वार्थमा लागेका मानिसले त्यो शान्ति पाउन सक्दैनन्। ज्ञानयोगीको, कर्मयोगीको र हठयोगीको आफ्ना-आफ्नो निजी स्वार्थ हुन्छ तर शुद्ध भक्तमा भगवान्लाई प्रसन्न पार्नेबाहेक अरू कुनै इच्छा हुँदैन। त्यसैले भगवान् भन्नु हुन्छ — जो एकनिष्ठ भएर भगवान्को भक्तिमा लागेको छ त्यसले परमपुरुषलाई सजिलैसँग प्राप्त गर्दछ।

शुद्ध भक्त सदासर्वदा सधैँ भगवान् श्रीकृष्णको कुनै एक रूपको

भक्तिसेवामा लागिरहेको हुन्छ। श्रीकृष्णका राम, नृसिंह आदि विभिन्न अवतार तथा पूर्णअंशहरूमध्ये कुनै एकलाई चयन गरी भगवान्‌को दिव्य रूप मानेर आफ्नो मनलाई उहाँको भक्तिमा स्थिर गराउन सकिन्छ। यस्ता भक्तहरूलाई अरू योगीहरूले सामना गर्नुपर्ने अन्य समस्याहरू भोग्नु पर्दैन। भक्तियोग अत्यन्त सरल, शुद्ध तथा सुगम पद्धति हो। हरे कृष्ण महामन्त्रको जपबाट यसको शुभारम्भ गर्न सकिन्छ। भगवान् सबैप्रति समान रूपले कृपालु हुनुहुन्छ तैपनि जो अनन्य भावले सधैँ उहाँको सेवामा लागेको छ त्यसप्रति भगवान्‌को विशेष कृपा हुन्छ भन्ने उल्लेख पनि अगाडि नै गरियो। भगवान् विभिन्न प्रकारले त्यस्ता भक्तलाई सहायता गर्नु हुन्छ। वेदमा पनि भनिएको छ—**यमैवैष वृणुते तेन लभ्यस्तस्यैष आत्मा विवृणुते तनुं स्वाम्** अर्थात्, जो पूर्णरूपले भगवान्‌को शरणमा परेको छ र उहाँको सेवामा लागेको छ, उसले मात्र भगवान्‌लाई साँचो रूपमा चिनेको हुन्छ। (कठोपनिषद् १.२.२३)। अनि *भगवद्गीतामा* भनिएअनुसार—**ददामि बुद्धियोगं तम्** अर्थात्, यस्ता भक्तलाई भगवान्‌ले प्रशस्त बुद्धि प्रदान गर्नु हुन्छ जसबाट उसले अन्त्यमा भगवत्धाम प्राप्त गर्न सक्दछ। (गीता १०.१०)

शुद्ध भक्तले पनि जहाँ होस् अथवा जुन समयमा होस् अनन्य भावले भगवान् श्रीकृष्णको चिन्तन गरिरहेको हुन्छ, यही नै उसको विशेष गुण पनि हो। उसलाई कुनै पनि बाधा-अड्चनले प्रभाव पार्दैन। ऊ जुनसुकै समयमा र जुनसुकै ठाँउमा पनि भगवान्‌को सेवामा लागिरहनु पर्दछ। केही व्यक्तिहरू भन्ने गर्दछन्—भक्तहरू वृन्दावनजस्ता पवित्र ठाउँमा या भगवान्‌ले निवास गर्नुभएका कुनै पवित्र नगरमा गएर बस्नु पर्दछ तर वास्तवमा शुद्ध भक्त जहाँ बसे पनि त्यस ठाउँमा उसले भगवद्भक्तिद्वारा वृन्दावनको जस्तै वातावरण सृजना गर्दछ। श्री अद्वैत आचार्यले भगवान् चैतन्य महाप्रभुसँग भन्नुभएको थियो—"हे प्रभु! तपाईं जहाँ जानु हुन्छ त्यहीं वृन्दावन हुन्छ"।

**सततम्** तथा **नित्यशः** यी शब्दले पनि शुद्ध भक्तले सधैँ नियमित रूपले निरन्तर केवल भगवान् श्रीकृष्णको सम्झना गर्दछ र उहाँको ध्यान गर्दछ भन्ने सङ्केत गर्दछन्। यी शुद्ध भक्तका गुणहरू हुन् र भगवान् पनि यिनीहरूका लागि अत्यन्त सहज रूपमा सुलभ हुनुहुन्छ। *भगवद्गीतामा* पनि अरू सबै योगपद्धतिमध्ये भक्तियोगको बढी प्रशंसा गरिएको छ। समान्यतया भक्तियोगमा लागेकाहरू भक्तिका विभिन्न पाँच उपायहरूमा संलग्न हुन्छन्, ती हुन्—

(१) शान्तभक्त—उदासीन (तटस्थ) रहेर भक्तियोगमा संलग्न हुने भक्त।
(२) दास्यभक्त—भगवान्‌को दास बनेर उहाँको भक्तिमा संलग्न हुने भक्त।
(३) सख्यभक्त—सखाका रूपमा भक्ति गर्ने भक्त।

(४) वात्सल्यभक्त — आमाबाबुजस्तै बनेर भगवद्भक्ति गर्ने भक्त।
(५) माधुर्यभक्त — परमेश्वरसँग रहेर दाम्पत्य प्रेमको आस्वादन गर्ने भक्त।

शुद्ध भक्त यीमध्ये कुनै एक प्रकारको प्रेमाभक्तिले युक्त भएर निरन्तर दिव्य भक्तिसेवामा संलग्न रहन्छ र उसले कहिल्यै पनि भगवान्लाई बिर्सिन सक्दैन। फलस्वरूप, भगवान् पनि उसका लागि सहजै सुलभ बनिदिनु हुन्छ। जसरी एक क्षण पनि शुद्ध भक्तले भगवान्लाई बिर्सिन सक्दैन त्यसरी नै भगवान् पनि आफ्नो शुद्ध भक्तलाई एक क्षण पनि बिर्सिन सक्नु हुन्न। अतः **हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे, हरे राम हरे राम राम राम हरे हरे** यही महामन्त्रको कीर्तन नै कृष्णभावना पद्धतिको सबैभन्दा ठुलो वरदान हो।

**मामुपेत्य पुनर्जन्म दुःखालयमशाश्वतम् ।**
**नाप्नुवन्ति महात्मानः संसिद्धिं परमां गताः ॥ १५ ॥**

**माम्** — मलाई; **उपेत्य** — प्राप्त गरेर; **पुनः** — फेरि; **जन्म** — जन्म; **दुःखआलयम्** — दुःखको ठाउँ; **अशाश्वतम्** — क्षणिक; **न आप्नुवन्ति** — पाउँदैनन्; **महा-आत्मानः** — महान् पुरुषहरू; **संसिद्धिम्** — सिद्धि (पूर्णता); **परमाम्** — परम; **गताः** — प्राप्त गरेर।

**मलाई प्राप्त गर्ने भक्तियोगी महापुरुषहरू दुःखै-दुःखले पूर्ण यो अनित्य जगत्मा फेरि कहिल्यै फर्केर आउँदैनन्, किनभने तिनीहरूले परमसिद्धि प्राप्त गरिसकेका हुन्छन्।**

**तात्पर्य :** यो नाश हुने भौतिक जगत् गर्भावस्था तथा जन्मको कष्ट, वृद्धावस्थाको दुःख र मृत्युका कष्टले भरिएको छ। तसर्थ, स्वभावले जसले परमसिद्धि प्राप्त गर्दछ त्यो व्यक्ति परमलोक कृष्णलोक या गोलोक वृन्दावनमा पुग्दछ र ऊ फेरि फर्केर यहाँ आउन चाहँदैन। वैदिक साहित्यमा यस्ता परमलोकहरूलाई अव्यक्त, अक्षर तथा परमगति भनेर वर्णन गरिएको छ, अर्को शब्दमा भन्दा यो लोक हाम्रो भौतिक दृष्टिभन्दा पर रहेको छ र यो अवर्णनीय छ तर महात्माहरूले यसैलाई आफ्नो गन्तव्य र चरम लक्ष्य मानेका छन्। महात्माहरू अनुभवसिद्ध भक्तहरूबाट दिव्य सन्देश प्राप्त गर्दछन् र विस्तारै-विस्तारै कृष्णभावनामा रहेर भक्तिको विकास गर्दछन्। तिनीहरू भगवान्को भक्तिमा अर्थात् उहाँको दिव्य सेवामा तल्लीन रहने गर्दछन्। त्यसले गर्दा तिनीहरूमा कुनै भौतिक लोकमा पुग्ने वा परलोक वा आध्यात्मिक लोकमा स्थानान्तरित हुने इच्छा हुँदैन। तिनीहरू केवल भगवान् श्रीकृष्णको भक्ति चाहन्छन् र श्रीकृष्णको सामीप्य चाहन्छन्, त्यसबाहेक अरू केही पनि चाहँदैनन्। जीवनको सबैभन्दा ठुलो सिद्धि पनि यही

हो। यस श्लोकमा भगवान् श्रीकृष्णका सगुणवादी भक्तहरूको उल्लेख विशेष रूपमा गरिएको छ। कृष्णभावनामा रहेका यस्ता भक्तहरूले नै जीवनको सर्वोच्च सिद्धि प्राप्त गर्दछन्। अर्को शब्दमा भन्दा यिनीहरू महान् आत्मा हुन्।

**आब्रह्मभुवनाल्लोकाः पुनरावर्तिनोऽर्जुन ।**
**मामुपेत्य तु कौन्तेय पुनर्जन्म न विद्यते ॥ १६ ॥**

**आ-ब्रह्म-भुवनात्** — यस लोकदेखि ब्रह्मलोकसम्मका; **लोकाः** — सबै लोकहरू; **पुनः** — फेरि; **आवर्तिनः** — घुमिरहने वा आवागमन भइरहने; **अर्जुन** — हे अर्जुन; **माम्** — मलाई; **उपेत्य** — पाएर; **तु** — तर; **कौन्तय** — हे कुन्तीपुत्र; **पुनःजन्म** — अर्को जन्म; **न विद्यते** — हुँदैन।

**ब्रह्मलोकदेखि भूलोकसम्मका सबै लोकहरू जन्म र मरणको चक्र चलिरहने दुःखमय स्थान हुन्। तर, हे कुन्तीपुत्र! जो मेरो धाममा पुग्दछ उसलाई फेरि कहिल्यै जन्मनु र मर्नु पर्दैन।**

**तात्पर्य :** कर्मयोगी, ज्ञानयोगी या हठयोगी आदि जो भएपनि आखिर तिनीहरूले भक्तियोग अर्थात् कृष्णभावनामृतमा रहेर भक्तिमा सिद्धि प्राप्त गर्नु पर्दछ, अनि मात्र तिनीहरू भगवान् श्रीकृष्णको दिव्यधाम पुग्न सक्दछन्। त्यहाँ पुगेपछि तिनीहरू फेरि यस जगत्मा फर्कनु पर्दैन। जो सर्वोच्च भौतिकलोक या देवलोकमा पुगेका छन् तिनीहरू फेरि जन्म र मृत्युका चक्रमा पर्दछन्। जसरी यो पृथ्वीका मानिसहरू उच्चलोकमा जान्छन् त्यसरी नै ब्रह्मलोक, चन्द्रलोक तथा इन्द्रलोकजस्ता उच्चलोकबाट पनि मानिस पृथ्वीमा झरिरहेका हुन्छन्। छान्दोग्य उपनिषद्मा **पञ्चाग्नि विद्या** नामक यज्ञको अभ्यास गर्ने विधान छ। त्यसबाट मानिसले ब्रह्मलोक प्राप्त गर्न सक्दछ तर ब्रह्मलोकमा गएर पनि यदि उसले कृष्णभावनाको विकास नगरे उसलाई फेरि पृथ्वीलोकमा फर्कनु पर्दछ। जो उच्चतरलोकमा रहेर कृष्णभावनामृतमा प्रगति गर्दै जान्छन् तिनीहरू क्रमशः झन् झन् उच्चतरलोकहरूमा जान्छन् र सृष्टिको प्रलय हुने समयमा नित्य परमधामतिर स्थानान्तरित हुन्छन्। श्रीधर स्वामीले आफ्नो *भगवद्गीता-भाष्यमा* यो श्लोकको उद्धरण गर्नुभएको छ—

*ब्रह्मणा सह ते सर्वे सम्प्राप्ते प्रतिसञ्चरे ।*
*परस्यान्ते कृतात्मानः प्रविशन्ति परंपदम् ॥*

जब यो भौतिक ब्रह्माण्डको प्रलय हुन्छ, त्यस समय ब्रह्म तथा कृष्णभावनामृतमा निरन्तर प्रवृत्त भएका उहाँका भक्तहरूलाई उनीहरूको इच्छानुसार आध्यात्मिक ब्रह्माण्ड वा विशिष्ट वैकुण्ठलोकहरूमा पठाइन्छ।

**सहस्रयुगपर्यन्तमहर्यद्ब्रह्मणो विदुः ।**
**रात्रिं युगसहस्रान्तां तेऽहोरात्रविदो जनाः ॥ १७ ॥**

**सहस्र** — एक हजार; **युग** — कल्प (युग); **पर्यन्तम्** — सम्म; **अहः** — दिन; **यत्** — जुन; **ब्रह्मणः** — ब्रह्माको; **विदुः** — तिनीहरू जान्दछन्; **रात्रिम्** — रात; **युग** — युगहरू; **सहस्रान्ताम्** — यसरी नै एक हजार वर्षपछि समाप्त हुने; **ते** — तिनीहरू; **अहःरात्र** — दिनरात; **विदः** — जान्दछन्; **जनाः** — मानिसहरू।

**मानवीय गणनाअनुसार एक हजार युग मिलेर ब्रह्माको एक दिन हुन्छ तथा त्यति नै समयको उहाँको एक रात्रि पनि हुन्छ।**

**तात्पर्य :** भौतिक ब्रह्माण्डको अवधि सीमित हुन्छो यो कल्पको चक्रमा प्रकट हुन्छ। कल्प भनेको ब्रह्माको एक दिन हो। ब्रह्माको एक दिनमा सत्य, त्रेता, द्वापर र कलिका एक हजार युगचक्र हुन्छन्। सत्य युगमा सदाचार, ज्ञान तथा धर्मको प्रभाव बढी हुन्छ र पाप र अज्ञानको अत्यन्त अभाव हुन्छ। यो युग १७, २८, ००० वर्षसम्म रहन्छ। त्रेता युगमा पापको प्रारम्भ हुन थाल्दछ र यो युग १२, ९६, ००० वर्षसम्म चल्दछ। द्वापर युगमा सदाचार तथा धर्मको ठुलो ह्रास हुन्छ र पाप बढ्दछ। यो युग ८, ६४, ००० वर्षसम्म रहन्छ। यसपछि कलि युग आउँछ। यसमा झगडा, अज्ञान, अधर्म तथा पापको प्रधानता रहन्छ र सदाचारको अस्तित्व लोप हुँदै जान्छ। यो युग ४, ३२, ००० वर्षसम्म रहन्छ। विगत ५ हजार वर्षदेखि हामी यो युग भोगिरहेका छौँ। यस युगमा पापाचार बढेर चरम सीमासम्म पुग्दछ। फलस्वरूप, भगवान् स्वयम् कल्कि अवतार धारण गरेर प्रकट हुनुहुन्छ, असुरहरूको संहार गर्नु हुन्छ, भक्तहरूको रक्षा गर्नु हुन्छ र अर्को सत्य युगको आरम्भ गर्नु हुन्छ। यसै गरी निरन्तर यो प्रक्रिया चलिरहन्छ। यी चारै युग एक हजारपटक दोहोरिँदा ब्रह्माको एक दिन बराबर हुन्छ र यति नै समयको उहाँको एक रात्री हुन्छ। ब्रह्मा यस्ता एक सय वर्षसम्म जीवित रहनु हुन्छ र त्यसपछि उहाँको मृत्यु हुन्छ। ब्रह्माका यी १०० वर्ष हाम्रो गणनाअनुसार पृथ्वीका ३१ खरब ११ अरब र ४० करोड (३१, ११, ४०, ००, ००, ०००) वर्ष बराबर हुन्छ। यो सङ्ख्या हेर्दा ब्रह्माको आयु विचित्र एवं समाप्त नै नहुनेजस्तो लाग्दछ, तर नित्यताको दृष्टिकोणबाट हेर्दा यो सङ्ख्या बिजुली चम्केजत्तिकै छोटो हुन्छ। कारण समुद्रमा असङ्ख्य ब्रह्माहरू अटलान्टिक सागरमा रहेका पानीका फोकाजस्तै उठ्दै र बिलाउँदै गरिरहेका हुन्छन्। ब्रह्मा तथा उनको सृष्टि आदि विषयहरू यही भौतिक ब्रह्माण्डका अङ्ग हुन्, त्यसैले यी सबै निरन्तर परिवर्तित भइरहन्छन्।

यो भौतिक ब्रह्माण्डमा ब्रह्माजी पनि जन्म, वृद्धावस्था, रोग तथा मरणबाट मुक्त रहन सक्नु हुन्न। यो ब्रह्माण्डको व्यवस्था मिलाउने व्यवस्थापकका रूपमा ब्रह्माजी भगवान्‌को प्रत्यक्ष सेवामा लागिरहनुभएको छ। फलस्वरूप, उहाँले तुरुन्त मुक्ति प्राप्त गर्न सक्नु हुन्छ। ब्रह्मलोक यो ब्रह्माण्डको सर्वोच्च लोक हो। सिद्ध संन्यासीहरूलाई समेत यही विशिष्ट लोकमा पठाइन्छ। ब्रह्मलोक नै भौतिक ब्रह्माण्डको सर्वोच्च लोक हो र यो सम्पूर्ण स्वर्गीय लोकहरूभन्दा माथि अवस्थित छ। तर, प्रकृतिको नियमानुसार समयको गतिसँगै ब्रह्माजी तथा ब्रह्मलोकका निवासी प्राणीहरूको पनि मृत्यु हुन्छ।

**अव्यक्ताद्व्यक्तयः सर्वाः प्रभवन्त्यहरागमे ।**
**रात्र्यागमे प्रलीयन्ते तत्रैवाव्यक्तसंज्ञके ॥ १८ ॥**

**अव्यक्तात्** — अव्यक्तबाट; **व्यक्तयः** — जीवात्माहरू; **सर्वाः** — सबै; **प्रभवन्ति** — प्रकट हुन्छन्; **अहःआगमे** — दिनको प्रारम्भमा; **रात्रिआगमे** — रात परेपछि; **प्रलीयन्ते** — विलीन हुन्छन्; **तत्र** — त्यसमा; **एव** — निश्चय नै; **अव्यक्त** — अप्रकट; **संज्ञके** — भनिन्छ।

**ब्रह्माका दिनको शुभारम्भ हुँदा सबै जीवहरू अव्यक्त अवस्थाबाट व्यक्त हुने गर्दछन् अनि जब ब्रह्माको रात सुरु हुन्छ असहाय बनेर ती जीवहरू फेरि अव्यक्तमा विलीन हुन्छन्।**

**भूतग्रामः स एवायं भूत्वा भूत्वा प्रलीयते ।**
**रात्र्यागमेऽवशः पार्थ प्रभवत्यहरागमे ॥ १९ ॥**

**भूतग्रामः** — सबै जीवसमूह; **सः** — त्यो; **एव** — निश्चय नै; **अयम्** — यो; **भूत्वा भूत्वा** — बारम्बार जन्म लिएर; **प्रलीयते** — विनष्ट हुने गर्दछ; **रात्री** — रातको; **आगमे** — आगमनमा; **अवशः** — स्वतः; **पार्थ** — हे पृथापुत्र; **प्रभवति** — प्रकट हुने गर्दछ; **अहः** — दिनको; **आगमे** — आगमनमा।

**जब जब ब्रह्माको दिन उदय हुन्छ सबै जीवहरू बारम्बार प्रकट हुन्छन् र ब्रह्माको रातको आगमनसँगै ती जीवात्माहरू निराश्रय भएर विलीन हुन्छन्।**

**तात्पर्य :** यस भौतिक जगत्‌मा रहिरहन चाहने अल्पज्ञानी पुरुषहरू कुनै माध्यमद्वारा उच्चलोकमा पुगे पनि फेरि फर्केर यही पृथ्वीलोकमा आउनु पर्दछ। ब्रह्माको दिन रहुन्जेल मात्र तिनीहरू उच्च तथा निम्नलोकहरूमा रहेर आफ्ना क्रियाकलापहरूको प्रदर्शन गर्दछन्। तर ब्रह्माको रात परेपछि ती सबै

नष्ट भइहाल्छन्। दिनमा भौतिक क्रियाकलापहरू गर्नका लागि तिनीहरूले धेरै प्रकारका शरीरहरू ग्रहण गर्दछन् तर रात पर्नेबित्तिकै तिनीहरूको शरीर रहँदैन। तिनका सबै शरीरहरू भगवान् विष्णुका शरीरमा विलीन हुन्छन् र ब्रह्माको दिन आउँदा तिनीहरू फेरि प्रकट हुन्छन्— **भूत्वा-भूत्वा प्रलीयते**। दिनमा ती प्रकट हुन्छन् र रातमा पुनः विलय हुन्छन्। अन्त्यमा जब ब्रह्माको आयु सकिन्छ ती सबैको संहार हुन्छ र करोडौँ वर्षसम्म तिनीहरू अप्रकट भएर बस्दछन्। अर्को कल्पमा ब्रह्माको पुनर्जन्म हुँदा तिनीहरू पुनः प्रकट हुन्छन्— यसरी तिनीहरू भौतिक जगत्को जादूबाट विमोहित भइरहन्छन्। तर, कृष्णभावनालाई स्वीकार गर्ने बुद्धिमान् व्यक्तिहरू आफ्नो सम्पूर्ण जीवनलाई भगवान्को भक्ति गर्न र **हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे, हरे राम हरे राम राम राम हरे हरे** यो महामन्त्रको सङ्कीर्तन अभियानमा लगाउँछन्। यसरी तिनीहरूले यसै जीवनमा कृष्णलोक प्राप्त गर्दछन् र पुनर्जन्मको चक्रबाट मुक्त भएर त्यहाँ पुगी शाश्वत आनन्दको अनुभव गर्दछन्।

**परस्तस्मात्तु भावोऽन्योऽव्यक्तोऽव्यक्तात्सनातनः ।**
**यः स सर्वेषु भूतेषु नश्यत्सु न विनश्यति ॥ २० ॥**

**परः** — परमदिव्य; **तस्मात्** — त्यसबाहेक; **तु** — तर; **भावः** — प्रकृति; **अन्यः** — अर्को; **अव्यक्तः** — अव्यक्त; **अव्यक्तात्** — अव्यक्तबाट; **सनातनः** — शाश्वत; **यःसः** — जुन त्यो; **सर्वेषु** — सबै; **भूतेषु** — जीवहरूमा; **नश्यत्सु** — नाश हुँदा; **न विनश्यति** — नष्ट हुँदैन।

**यसबाहेक एउटा अर्को अव्यक्त प्रकृति पनि छ जुन यो व्यक्त र अव्यक्त पदार्थभन्दा शाश्वत र दिव्य छ। त्यो कहिल्यै पनि नाश नहुने पराशक्ति हो। संसारका सबै वस्तु नष्ट हुँदा पनि त्यो यथावत् रहिरहन्छ।**

**तात्पर्य :** भगवान् श्रीकृष्णको पराशक्ति दिव्य र शाश्वत छ। यो शक्ति ब्रह्माको दिन हुँदा प्रकट हुने र रात हुँदा नष्ट हुने भौतिक प्रकृतिको परिवर्तनभन्दा पर छ। भगवान् श्रीकृष्णको पराशक्ति गुणका दृष्टिले भौतिक प्रकृतिको ठीक विपरीत छ। पराशक्ति र अपराशक्तिको व्याख्या सातौँ अध्यायमा भइसकेको छ।

**अव्यक्तोऽक्षर इत्युक्तस्तमाहुः परमां गतिम् ।**
**यं प्राप्य न निवर्तन्ते तद्धाम परमं मम ॥ २१ ॥**

**अव्यक्तः** — अप्रकट; **अक्षरः** — अविनाशी; **इति** — यसरी; **उक्तः** — भनिएको छ; **तम्** — त्यसलाई; **आहुः** — जानिन्छ; **परमाम्** — परम; **गतिम्** — गन्तव्य;

**यम्** — जसलाई; **प्राप्य** — पाएपछि; **न निवर्तन्ते** — फर्केर आउँदैनन्; **तत्** — त्यो; **धाम** — निवासधाम; **परमम्** — परम; **मम** — मेरो।

**वेदान्तीहरू जसलाई अव्यक्त र अविनाशी भन्छन्, जो सबैको गन्तव्य पनि हो र जसलाई प्राप्त गरेपछि कोही पनि फर्केर आउँदैन, त्यही नै मेरो परमधाम हो।**

**तात्पर्य :** ब्रह्मसंहितामा भगवान् श्रीकृष्णको परमधामलाई चिन्तामणिधाम भनिएको छ। त्यो धाममा पुगेपछि सबै इच्छाहरू परिपूर्ण हुन्छन्। गोलोक वृन्दावन नामले चिनिने भगवान् श्रीकृष्णको परमधाममा चिन्तामणिले बनेका महलहरू छन्। त्यहाँका रूखहरूलाई कल्पवृक्ष भनिन्छ। ती कल्पवृक्षले जुन खाद्य पदार्थको माग गऱ्यो त्यसको आपूर्ति गर्ने गर्दछन्। त्यहाँका गाईलाई सुरभि धेनु भनिन्छ र तिनले अनन्तधारा दूधको आपूर्ति गर्दछिन्। त्यस धाममा लाखौँ लक्ष्मीहरूले भगवान्को सेवा गर्दछन् र यसरी सेवा गरिएका भगवान्लाई गोविन्द भनिन्छ। उहाँ आदि ईश्वर हुनुहुन्छ र सम्पूर्ण कारणहरूका पनि कारण हुनुहुन्छ। उहाँ बाँसुरी बजाउनमा व्यस्त रहनु हुन्छ— **वेणुं क्वणन्तम्**। उहाँको दिव्य स्वरूप सबै लोकमा सर्वाधिक आकर्षक छ। उहाँका आँखा कमलदलजस्ता छन् र उहाँको शारीरिक वर्ण मेघको वर्णजस्तो छ। उहाँको सौन्दर्यले हजारौँ कामदेवको सौन्दर्यलाई पनि पराजित गर्दछ। उहाँका शरीरमा पहेँलो वस्त्र सुशोभित छन्, गलामा माला र केशमा मयुरको प्वाँखले शोभा प्रदान गरेका छन्। आध्यात्मिक जगत्को सर्वश्रेष्ठ लोक गोलोक वृन्दावन हो र भगवान् श्रीकृष्णको आफ्नो निजी धाम पनि त्यही हो। यसको थोरै सङ्केत स्वयम् भगवान्ले *भगवद्गीतामा* दिनुभएको छ। यसको विस्तृत वर्णन ब्रह्मसंहितामा पनि पाइन्छ। वैदिक ग्रन्थ कठोपनिषद् (१.३.११) मा **पुरुषान्नपरं किञ्चित्सा काष्ठा परमा गतिः** भनेर भगवान्को धामभन्दा श्रेष्ठ अरू केही छैन र त्यही धाम नै जीवको परमगन्तव्य हो भनिएको छ। त्यहाँ एकपटक पुगिसकेपछि फेरि यो भौतिक संसारमा कहिल्यै फर्केर आउनु पर्दैन। भगवान् श्रीकृष्ण र उहाँको परमधाममा समान गुण भएका हुनाले ती दुईमा कुनै भिन्नता छैन। यस पृथ्वीमा दिल्लीदेखि ९० माइल दक्षिण-पूर्वमा आध्यात्मिक आकाशको गोलोक वृन्दावनको प्रतीकका रूपमा वृन्दावनधाम अवस्थित छ। भगवान् श्रीकृष्ण यस पृथ्वीमा आउनुहुँदा यही वृन्दावनमा अवतरित भएर क्रीडा गर्नुभएको थियो। यो ठाउँ भारतको मथुरा जिल्लामा चौरासी वर्गमाइल क्षेत्रफलमा फैलिएको छ।

**पुरुषः स परः पार्थ भक्त्या लभ्यस्त्वनन्यया ।**
**यस्यान्तःस्थानि भूतानि येन सर्वमिदं ततम् ॥ २२ ॥**

**पुरुषः** — परमपुरुष; **सः** — त्यो; **परः** — परम, जसभन्दा ठुलो अरू कोही छैन; **पार्थ** — हे पृथापुत्र; **भक्त्या** — भक्तिद्वारा; **लभ्यः** — प्राप्त गर्न सकिन्छ; **तु** — तर; **अनन्यया** — अनन्य, अविचल; **यस्य** — जसको; **अन्तःस्थानि** — भित्र; **भूतानि** — यो सम्पूर्ण भौतिक जगत्; **येन** — जसद्वारा; **सर्वम्** — सबै; **इदम्** — जे जति हामी देख्न सक्दछौँ; **ततम्** — व्याप्त छ।

**भगवान् सबैभन्दा महान् हुनुहुन्छ। उहाँलाई अनन्य भक्तिद्वारा मात्र प्राप्त गर्न सकिन्छ। उहाँ आफ्ना धाममा विराजमान हुनुभएर पनि सर्वव्यापी हुनुहुन्छ र उहाँमा नै सबै वस्तु अवस्थित छन्।**

**तात्पर्य :** जुन परमधाममा पुगेपछि फर्कनु पर्दैन त्यही नै परमपुरुष श्रीकृष्णको धाम हो भन्ने कुराको स्पष्ट वर्णन यहाँ गरिएको छ। यही परमधामलाई ब्रह्मसंहितामा **आनन्दचिन्मय रस** भनिएको छ। अर्थात्, यो त्यस्तो ठाउँ हो जहाँ हरेक वस्तु आध्यात्मिक आनन्दले परिपूर्ण हुन्छन्। त्यहाँ विद्यमान विविधिताले युक्त सम्पूर्ण दृश्यहरू आध्यात्मिक आनन्दले भरिपूर्ण हुन्छन्। त्यहाँ भौतिकता भन्ने केही छैन। यी विविधताहरू स्वयम् भगवान्का आध्यात्मिक विस्तारका स्वरूप हुन्, किनभने ती सबै पूर्णतः आध्यात्मिक शक्तिका अभिव्यक्ति हुन्, जसको व्याख्या सातौँ अध्यायमा भइसकेको छ। जहाँसम्म यो भौतिक जगत्को कुरा छ, सधैँ आफ्नो दिव्य धाममा रहेर पनि भगवान् आफ्नो भौतिक मायाशक्तिद्वारा सर्वव्यापक भएर रहनु हुन्छ। उहाँ यसरी नै आफ्ना परा तथा अपराशक्तिद्वारा भौतिक तथा आध्यात्मिक दुवै ब्रह्माण्डमा सर्वत्र उपस्थित रहनु हुन्छ। **यस्यान्तःस्थानि** को अर्थ हो — प्रत्येक वस्तु परा र अपराशक्तिसहित उहाँमा निहित छन्। यी दुवै शक्तिद्वारा भगवान् सर्वव्यापी हुनुभएको हो।

यहाँ **भक्त्या** शब्दले स्पष्ट रूपमा के सङ्केत गरेको छ भने, केवल भक्तिद्वारा असङ्ख्य वैकुण्ठलोक वा भगवान् श्रीकृष्णका परमधाममा पुग्न सकिन्छ। कुनै अरू उपायले मानिसलाई परमधाम प्राप्त हुन सक्दैन। वैदिक साहित्य गोपालतापनी उपनिषद् (३.२) मा पनि भगवान् र उहाँको परमधामको वर्णन गरिएको छ। **एको वशी सर्वगः कृष्णः**। त्यस धाममा केवल एउटै भगवान् रहनु हुन्छ, उहाँको नाम श्रीकृष्ण हो। उहाँ परमदयालुपनका प्रतिमूर्ति हुनुहुन्छ र एउटै रूपमा अवस्थित भएर पनि उहाँ आफूलाई लाखौँ अंशमा विस्तारित गर्न सक्नु हुन्छ। वेदमा भगवान्लाई विभिन्न प्रकारका फलफूलले लटरम्म भएको र निरन्तर पात परिवर्तन भइरहने एउटा ठुलो रूखसँग तुलना गरिएको छ। वैकुण्ठलोकहरूको अध्यक्षता गर्नु हुने भगवान्का अंशविस्तारहरू चतुर्भुजी रूपका छन् र उहाँ विभिन्न प्रकारका

नामले प्रख्यात हुनुहुन्छ, जस्तै — पुरुषोत्तम, त्रिविक्रम, केशव, माधव, अनिरूद्ध, हृषीकेश, सङ्कर्षण, प्रद्युम्न, श्रीधर, वासुदेव, दामोदर, जनार्दन, नारायण, वामन, पद्मनाभ आदि।

ब्रह्मसंहिता (५.३७) मा यसै कुरालाई पुष्टि गर्दै भनिएको छ— भगवान्‌ले नित्य निवास गर्ने परमधाम गोलोक-वृन्दावन हो, तैपनि सबै कुरालाई सुचारु रूपले चलाउनका लागि उहाँ सर्वव्यापी भएर बस्नु हुन्छ— **गोलोक एव निवसत्यखिलात्मभूतः**। वैदिक साहित्य श्वेताश्वतर उपनिषद् (६.८) मा भनिएको छ— **परास्य शक्तिर्विविधैव श्रूयते, स्वाभाविकी ज्ञानबलक्रिया च**। अर्थात्, उहाँका शक्तिहरू कति व्यापक छन् भने भगवान्‌बाट टाढाटाढा रहँदा पनि तिनले गल्ती नगरी यस विश्वब्रह्माण्डका हरेक वस्तुलाई व्यवस्थित तरिकाले सञ्चालन गरिरहेका छन्।

**यत्र काले त्वनावृत्तिमावृत्तिं चैव योगिनः ।**
**प्रयाता यान्ति तं कालं वक्ष्यामि भरतर्षभ ॥ २३ ॥**

**यत्र** — जुन; **काले** — समयमा; **तु** — तथा; **अनावृत्तिम्** — फर्केर नआउने; **आवृत्तिम्** — फर्किने; **च** — पनि; **एव** — निश्चय नै; **योगिनः** — विभिन्न प्रकारका योगीहरू; **प्रयाताः** — प्रयाण गरिसकेका; **यान्ति** — प्राप्त गर्दछन्; **तम्** — त्यो; **कालम्** — समयमा; **वक्ष्यामि** — भनुँला; **भरत ऋषभ** — हे भरतश्रेष्ठ!

**हे भरतश्रेष्ठ! अब म तिमीलाई ती विभिन्न समयहरूको वर्णन गर्दछु जुन समयमा योगीले यो संसारबाट विदा लिँदा ऊ पुनः यो संसारमा फर्कनु पर्दछ वा पर्दैन।**

**तात्पर्य :** परमेश्वरका अनन्य भक्त वा पूर्ण शरणागत भक्तलाई कहिले मर्छु र कसरी मर्छु भन्ने चिन्ता हुँदैन। तिनीहरू सबै कुरा भगवान् श्रीकृष्णका हातमा सुम्पेर प्रसन्नतापूर्वक सजिलै भगवद्धाममा फर्किन्छन्। तर, जसले अनन्य भक्ति गर्दैनन् र ज्ञानयोग, कर्मयोग र हठयोगद्वारा आत्मसाक्षात्कार गर्न चाहन्छन् तिनीहरूका लागि मात्र कुन समय मृत्यु भएमा यो संसारको जन्ममृत्युबाट मुक्ति पाइएला भनेर उचित साइतको विचार गर्नु पर्दछ।

यदि योगी सिद्ध भएमा संसार छोड्ने ठीक समय र ठाउँ रोज्नसक्ला तर यदि ऊ त्यति पारङ्गत भइसकेको नभए र त्यसै अवस्थामा अचानक शरीर छोड्नु परेमा उसको सफलता शरीर छोड्दाको निश्चित समयको संयोगमा निर्भर हुन्छ। आगामी श्लोकमा भगवान्‌ले कुन कुन अवसरमा शरीर त्याग गर्दा फेरि फर्केर आउनु पर्दैन भन्ने विषयको वर्णन गर्नुभएको छ। आचार्य बलदेव

विद्याभूषणका अनुसार यहाँ प्रयोग गरिएको संस्कृतको काल शब्द काल वा समयका अधिष्ठाता देवताका निमित्त प्रयोग गरिएको हो।

**अग्निर्ज्योतिरहः शुक्लः षण्मासा उत्तरायणम् ।**
**तत्र प्रयाता गच्छन्ति ब्रह्म ब्रह्मविदो जनाः ॥ २४ ॥**

**अग्निः** — आगो; **ज्योतिः** — प्रकाश; **अहः** — दिन; **शुक्लः** — शुक्ल पक्ष; **षड्मासाः** — छः महिना; **उत्तर अयनम्** — सूर्य उत्तरतिर रहेको समय; **तत्र** — त्यहाँ; **प्रयाताः** — मर्नेहरू; **गच्छन्ति** — जान्छन्; **ब्रह्म** — ब्रह्मतिर; **ब्रह्मविदः** — ब्रह्मज्ञानी; **जनाः** — मानिसहरू।

**अग्निदेवताका प्रभावमा, उज्यालो प्रकाशमा, दिनको शुभक्षणमा, शुक्लपक्षमा र सूर्य उत्तरायण भएका छः महिनामा शरीर त्याग गर्ने ब्रह्मज्ञानीहरूले ब्रह्मलाई प्राप्त गर्दछन्।**

**तात्पर्य** : जब अग्नि, प्रकाश, दिन तथा पक्षको उल्लेख भएको छ त्यहाँ तिनीहरूका अधिष्ठाता देवता पनि हुन्छन् र तिनीहरूले नै आत्माको यात्राका लागि व्यवस्था मिलाउँछन् भन्ने बुझ्नु पर्दछ। मृत्युको समयमा मानिसलाई उसको मनले नयाँ जीवन-मार्गतिर मार्गदर्शन गरिरहेको हुन्छ। यदि कसैले अकस्मात् या योजना बनाएर उपर्युक्त समयमा शरीर त्याग गरेका त्यसले निराकार ब्रह्मज्योतिलाई प्राप्त गर्ने सम्भावना हुन्छ। योगाभ्यासमा प्रगति गरेका योगीहरूले आफ्नो शरीर त्याग गर्ने समय र स्थानको चयन गर्न सक्दछन्। अरूले यस्तो गर्नु सम्भव हुँदैन। यदि कसैले संयोगवश यस्तो शुभमुहूर्तमा शरीर त्याग गरे तिनीहरूलाई जन्म-मृत्युको चक्रमा फर्कनु पर्दैन नत्र पुनर्जन्मको सम्भावना रहिरहन्छ। तर, कृष्णभावनामा लागेका शुद्ध भक्तका लागि उसले शुभमुहूर्तमा शरीर त्यागे पनि, अशुभ क्षणमा त्यागे पनि, अकस्मात् त्यागे पनि र स्वेच्छापूर्वक शरीर त्याग गरे पनि उसलाई फेरि जन्म लिनुपर्ने भय हुँदैन।

**धूमो रात्रिस्तथा कृष्णः षण्मासा दक्षिणायनम् ।**
**तत्र चान्द्रमसं ज्योतिर्योगी प्राप्य निवर्तते ॥ २५ ॥**

**धूमः** — धूवाँ; **रात्रिः** — रात; **तथा** — पनि; **कृष्णः** — कृष्णपक्ष; **षड्मासाः** — छः महिना; **दक्षिण अयनम्** — सूर्य दक्षिणायन भएको समय; **तत्र** — त्यहाँ; **चान्द्रमसम्** — चन्द्रलोकमा; **ज्योतिः** — प्रकाश; **योगी** — योगी; **प्राप्य** — पुगेर; **निवर्तते** — फर्केर आउँछ।

**धूवाँ, रात्रि, कृष्णपक्ष र सूर्य दक्षिणायन भएको समयमा शरीर त्याग्ने योगी चन्द्रलोकसम्म पुगेर फेरि पृथ्वीमा फर्केर आउँछ।**

**तात्पर्य :** भागवत्को तृतीय स्कन्धमा कपिल मुनिले भन्नुभएको छ— सकाम कर्म र यज्ञविधिमा निपुण व्यक्तिहरू मृत्युपश्चात् चन्द्रलोकमा पुग्दछन्। यी महान् आत्माहरू दैवी गणनाअनुसार लगभग दश हजार वर्षसम्म चन्द्रलोकमा निवास गर्दछन् र सोमरसको पिउदै जीवनको आनन्द भोग गरेपछि तिनीहरू फेरि पृथ्वीमा फर्केर आउँदछन्। यसको अर्थ चन्द्रमामा उच्च कोटिका प्राणीहरू छन्, यद्यपि आफ्ना स्थूल दृष्टिले हामी तिनलाई देख्न सक्दैनौँ।

**शुक्लकृष्णे गती ह्येते जगतः शाश्वते मते ।**
**एकया यात्यनावृत्तिमन्ययावर्तते पुनः ॥ २६ ॥**

**शुक्ल** — प्रकाश; **कृष्णे** — अन्धकार; **गती** — जाने विधि; **हि** — निश्चय नै; **एते** — यी दुवै; **जगतः** — भौतिक जगत्का; **शाश्वते** — वेदहरूको; **मते** — मतमा; **एकया** — एउटाद्वारा; **याति** — जान्छ।; **अनावृत्तिम्** — नफर्कनका लागि; **अन्यया** — अरूद्वारा; **आवर्तते** — फर्की आउँदछ; **पुनः** — फेरि।

**वैदिक मतानुसार यो संसारबाट प्रयाण ( प्रस्थान ) गर्ने दुईवटा मार्ग छन्— पहिलो प्रकाशमय मार्ग र दोस्रो अन्धकारमय मार्ग हो। प्रकाशमय मार्गबाट जाने व्यक्ति फर्केर आउँदैन तर कृष्णमार्ग वा अन्धकारमय पथबाट जाने व्यक्ति फेरि पृथ्वीमा फर्किन्छ।**

**तात्पर्य :** आचार्य बलदेव विद्याभूषणले छान्दोग्य उपनिषद् (५.१०.३-५) बाट आवागमनसम्बन्धी यस्तै एउटा विवरण उद्धृत गर्नुभएको छ। सकामकर्म गर्ने श्रमिक तथा दार्शनिक चिन्तकहरू अनादिकालदेखि यसरी नै निरन्तर जाने र आउने गरिरहेका छन्। भगवान् श्रीकृष्णको आश्रय नलिएका हुनाले यथार्थमा तिनीहरूले कहिल्यै मोक्षको परमपद पाउन सक्दैनन्।

**नैते सृती पार्थ जानन्योगी मुह्यति कश्चन ।**
**तस्मात्सर्वेषु कालेषु योगयुक्तो भवार्जुन ॥ २७ ॥**

**न** — होइन; **एते** — यी दुवै; **सृती** — विभिन्न मार्ग; **पार्थ** — हे पृथापुत्र; **जानन्** — जान्दाजान्दै पनि; **योगी** — भगवद्भक्त; **मुह्यति** — मोहग्रस्त हुन्छन्; **कश्चन** — कुनै; **तस्मात्** — तसर्थ; **सर्वेषु-कालेषु** — सधैँ; **योगयुक्तः** — कृष्णभावनामा संलग्न; **भव** — होऊ; **अर्जुन** — हे अर्जुन!

**भक्तहरू यी दुवै मार्गसँग परिचित हुने हुँदा कहिल्यै पनि मोहग्रस्त हुँदैनन्। तसर्थ हे अर्जुन! तिमी सधैँ भक्तिमा स्थिर होऊ।**

**तात्पर्य :** यस भौतिक जगत्बाट बिदा भएर जाने समयमा आत्माले विभिन्न मार्ग अपनाउन सक्दछ। यो देखेर विचलित नहुने सल्लाह भगवान् श्रीकृष्णले अर्जुनलाई दिँदै हुनुहुन्छ। भगवद्भक्तले आफ्नो मृत्यु व्यवस्थित ढङ्गले हुन्छ कि अकस्मात् हुन्छ भन्ने विषयमा चिन्ता लिनु पर्दैन। भक्तले दृढतापूर्वक कृष्णभावनामा रहेर **हरे कृष्ण** महामन्त्रको जप गर्नु पर्दछ। उक्त दुवै मार्गमध्ये कुनै पनि मार्गको विषयमा चिन्ता लिनु कष्टदायक हुन्छ भन्ने कुरा उसले बुझ्नु पर्दछ। सधैँ भगवान्का सेवामा संलग्न रहेर कृष्णभावनामा तल्लीन हुनु नै यसको सर्वोत्तम उपाय हो र यसैले भगवद्धाम जाने मानिसको मार्गलाई सुगम, सुरक्षित, सुनिश्चित र सोझो बनाउँदछ। यस श्लोकमा प्रयोग गरेमा योगयुक्त शब्द विशेष महत्त्वको छ। योगमा स्थिर रहेको व्यक्तिका सबै गतिविधिहरू कृष्णभावनामय हुन्छन्। श्रीरूप गोस्वामीका उपदेशमा **अनासक्तस्य विषयान् यथार्हमुपयुञ्जतः** भनिएको छ। अर्थात्, मानिस सांसारिक क्रियाकलापहरूमा अनासक्त हुनु पर्दछ र हरेक कर्म कृष्णभावनामा रहेर गर्नु पर्दछ। यो विधिलाई युक्तवैराग्य भनिन्छ र यसैद्वारा मानिसले सिद्धि पनि प्राप्त गर्दछ। त्यसैले, यी वर्णनहरूबाट भक्त कहिल्यै विचलित हुँदैन, किनभने भक्तिद्वारा नै निश्चित रूपले भगवद्धाममा पुग्न सकिन्छ भन्ने जानकारी उसलाई हुन्छ।

**वेदेषु यज्ञेषु तपःसु चैव दानेषु यत्पुण्यफलं प्रदिष्टम् ।**
**अत्येति तत्सर्वमिदं विदित्वा योगी परं स्थानमुपैति चाद्यम् ॥ २८॥**

**वेदेषु** — वेदाध्ययनमा; **यज्ञेषु** — यज्ञ सम्पन्न गर्ने कार्यमा; **तपःसु** — विभिन्न प्रकारका तपस्या गर्नमा; **च** — पनि; **एव** — निश्चय नै; **दानेषु** — दान दिनमा; **यत्** — जुन; **पुण्यफलम्** — पुण्यकर्मको फल; **प्रदिष्टम्** — सङ्केत गरियो; **अत्येति** — पार गर्दछ; **तत्सर्वम्** — ती सबै; **इदम्** — यो; **विदित्वा** — जानेर; **योगी** — भक्त; **परम्** — परम; **स्थानम्** — धाममा; **उपैति** — पुग्दछ, प्राप्त गर्दछ; **च** — पनि; **आद्यम्** — मूल, आदि।

**जसले भक्तिमार्ग स्वीकार गरेको छ उसलाई वेदाध्ययन, तपस्या, दान, दार्शनिक चिन्तन तथा सकामकर्म गर्दा प्राप्त हुने फलबाट वञ्चित हुनु पर्दैन। केवल भक्तिले मात्र पनि उसले यी सबै फलहरू प्राप्त गर्दछ र अन्त्यमा ऊ परमनित्य धाममा पुग्दछ।**

**तात्पर्य :** यो श्लोक सातौँ र आठौँ अध्यायहरूको उपसंहार हो। यसमा कृष्णभावनामृत र भक्तिको विशेष वर्णन गरिएको छ। मानिसले आफ्ना गुरुको निर्देशनमा रहेर वेदाध्ययन गर्नुपर्ने हुन्छ र गुरुको रेखदेखमा बसेर धेरै-धेरै तपस्याहरू पनि गर्नुपर्ने हुन्छ। ब्रह्मचारी सेवकजस्तो बनेर गुरुका घरमा रहनु

पर्दछ र उसले घर-घरै भिक्षा मागेर गुरुकहाँ ल्याउनु पर्दछ। गुरुको आज्ञानुसार उसले भोजन गर्दछ। यदि कुनै दिन गुरुले आफ्ना विद्यार्थीलाई भोजन गर्न बोलाउन बिर्सनु भएमा त्यो दिन उक्त विद्यार्थीले उपवास गर्दछ, भोकै बस्दछ। ब्रह्मचर्य पालनका यस्तै केही वैदिक नियमहरू छन्।

पाँच वर्षको उमेरदेखि बीस वर्षसम्म आफ्ना गुरुका निर्देशनमा रहेर वेदको अध्ययन गर्ने विद्यार्थी नै पूर्णरूपमा चरित्रवान् मानिस बन्दछ। वेदको अध्ययन कल्पनाविलास गर्ने व्यक्तिको मनोरञ्जनका लागि नभएर चरित्र निर्माणका लागि हो। यो प्रशिक्षणपछि उक्त ब्रह्मचारीलाई विवाह गरी गृहस्थाश्रममा प्रवेश गर्ने अनुमति दिइन्छ। उसले गृहस्थ जीवनमा रहेर थप आध्यात्मिक उन्नति गर्नका लागि धेरै प्रकारका यज्ञहरू गर्नुपर्ने हुन्छ। उसले *भगवद्गीतामा* वर्णन गरिएअनुसार देश, काल र पात्रको विवेक राखी सात्त्विक, राजसिक र तामसिक दानको भिन्नता छुट्याएर दान दिनुपर्ने हुन्छ। अनि गृहस्थ जीवनबाट अवकाश लिएपछि वानप्रस्थ आश्रम ग्रहण गर्नु पर्दछ, जसमा रूखको बोक्रा लगाएर, दाह्री-जुँगा पालेर, जङ्गलमा बसेर कठोर तपस्यापूर्ण कष्टमय जीवनयापन गर्नुपर्ने हुन्छ। यसरी मानिसले क्रमशः ब्रह्मचर्य, गृहस्थ, वानप्रस्थ र अन्त्यमा संन्यास आश्रम ग्रहण गरेर जीवनको सिद्धावस्था प्राप्त गर्नु पर्दछ। अनि यिनीहरूमध्ये केही स्वर्गलोक जान्छन्। त्योभन्दा अझ बढी उन्नति गर्नेहरू कोही आध्यात्मिक आकाशमा पुग्दछन् र कोहीले निराकार ब्रह्मज्योतिलाई प्राप्त गर्दछन् र कोही वैकुण्ठलोक वा कृष्णलोकमा पनि पुग्दछन्। वैदिक साहित्यले यस्तो मार्गको रूपरेखा प्रस्तुत गरेका छन्।

तर कृष्णभावनाको विशेषता अर्कै छ, त्यो भनेको भक्तिमय सेवामा संलग्न रहेको मानिसले एउटै प्रयासद्वारा जीवनका विभिन्न आश्रममा रहेर गरिने सम्पूर्ण यज्ञ कार्यहरूलाई पार गर्दछ।

**इदं विदित्वा** शब्दले सूचित गरेअनुसार मानिसले *भगवद्गीताको* सातौँ र आठौँ अध्यायमा वर्णित भगवान् श्रीकृष्णका उपदेशहरूलाई बुझ्नु पर्दछ र पालना गर्नु पर्दछ। मानिसले यी दुई अध्यायलाई मानसिक कल्पना र विद्वत्ताद्वारा होइन भक्तहरूको सङ्गतमा रहेर श्रवणद्वारा बुझ्ने प्रयत्न गर्नु पर्दछ। सातौँ अध्यायदेखि बाह्रौँ अध्यायसम्मका छः अध्यायहरू गीताका सारभूत अध्यायहरू हुन्। प्रथम छः अध्याय र अन्तिम छः अध्यायहरू केवल यिनै छःवटा मध्यवर्ती अध्यायका आवरण मात्र हुन्, जसलाई भगवान्‌ले विशेष संरक्षण प्रदान गर्नुभएको छ। यदि कसैले भक्तहरूका सङ्गतमा रहेर गीताको मध्य भागका यी छःवटा अध्यायको राम्रोसँग अध्ययन गर्ने सौभाग्य पाउँदछ त्यसको जीवन यज्ञ, दान, तपस्या, चिन्तन-मनन आदिलाई समेत पार गरेर

तत्काल गौरवान्वित हुन पुग्दछ, किनभने केवल कृष्णभावनाद्वारा उसलाई यी कर्महरूको सम्पूर्ण फल प्राप्त हुन सक्दछ।

*भगवद्गीतामा* अलिकति पनि श्रद्धा हुने मानिसले भगवद्भक्तबाट नै यसलाई बुझ्नु पर्दछ, किनभने चौथो अध्यायको प्रारम्भमा केवल भक्तहरूबाट नै *भगवद्गीताको* राम्रो बोध गर्न सकिन्छ र अरू कसैबाट पनि पूर्णरूपले यसको अभिप्राय बुझ्न सकिँदैन भन्ने कुरा स्पष्ट पारिएको छ। अतः मानिसले भक्तहरूबाट गीताको अध्ययन गर्नु पर्दछ, अरू चिन्तकहरूबाट होइन। यो श्रद्धाको लक्षण हो। जहिलेदेखि मानिसले भक्तको खोजी गर्न थाल्दछ र पाउँदछ, वास्तवमा त्यस समयदेखि भक्तको सङ्गतमा *भगवद्गीताको* वास्तविक अध्ययन र ज्ञान प्रारम्भ हुन्छ। भक्तको सङ्गतमा रहेर नै मानिसले भक्तिमा उन्नति गर्न सक्दछ र भक्तिका कारण भगवान् श्रीकृष्णका क्रियाकलाप, उहाँको रूप, नाम र लीलासम्बन्धी सबै भ्रमहरू समाप्त हुन्छन्। यसरी भ्रमहरू पूर्णतया मेटिएपछि मात्र ऊ आफ्नो अध्ययनमा स्थिर हुन्छ। त्यसपछि *भगवद्गीताको* अध्ययनमा उसलाई रस आउन थाल्दछ र साथै कृष्णभावनाभावित हुँदै गएको अनुभूति पनि उसलाई हुन थाल्दछ। यसमा अझ प्रगति गर्दै गएमा ऊ भगवान् श्रीकृष्णको प्रेममा पूर्णरूपले अनुरक्त हुन्छ। यो नै जीवनको सर्वोच्च सिद्ध अवस्था हो र यसले भक्तलाई आध्यात्मिक आकाशमा विद्यमान भगवान् श्रीकृष्णको धाम गोलोक वृन्दावनमा पुऱ्याउँदछ, जहाँ पुगेर भक्तहरूले शाश्वत आनन्दको अनुभूति गर्दछन्।

यस प्रकार *श्रीमद्भगवद्गीता* ग्रन्थअन्तर्गत 'भगवत्प्राप्ति' शीर्षक आठौँ अध्यायको भक्तिवेदान्त तात्पर्य समाप्त भयो।

## अध्याय-नौ

# परम गोपनीय ज्ञान

श्रीभगवानुवाच

**इदं तु ते गुह्यतमं प्रवक्ष्याम्यनसूयवे ।**
**ज्ञानं विज्ञानसहीतं यज्ज्ञात्वा मोक्ष्यसेऽशुभात् ॥ १॥**

**श्रीभगवान् उवाच** — भगवान्ले भन्नुभयो; **इदम्** — यो; **तु** — तर; **ते** — तिमीलाई; **गुह्यतमम्** — अत्यन्त गोप्य; **प्रवक्ष्यामि** — भन्दैछु; **अनसूयवे** — ईर्ष्यारहित; **ज्ञानम्** — ज्ञान; **विज्ञान** — अनुभव गरिएको ज्ञान; **सहीतम्** — सहित; **यत्** — जसलाई; **ज्ञात्वा** — जानेर; **मोक्ष्यसे** — मुक्त हुनेछौ; **अशुभात्** — कष्टमय सांसारिक बन्धनबाट।

**भगवान्ले भन्नुभयो — प्रिय अर्जुन! तिमीले कहिल्यै पनि मेरो ईर्ष्या गरेनौ, त्यसैले म तिमीलाई परमगोपनीय ज्ञान र अनुभव भन्दछु। यसलाई जान्नाले तिमी संसारका सबै कष्टहरूबाट मुक्त हुनेछौ।**

**तात्पर्य :** भक्तले भगवान्का बारेमा जति धेरै सुन्दछ त्यति नै बढी ऊ प्रबुद्ध हुँदै जान्छ। भगवान्का बारेमा सुन्ने विधिलाई *श्रीमद्भागवत्मा* यसरी वर्णन गरिएको छ— भगवान्का सन्देशहरू पूर्ण शक्तिशाली हुन्छन्। यदि भगवान्-सम्बन्धी विषयको चर्चा भक्तहरूका बीचमा गरेमा त्यस्ता शक्तिहरूको अनुभूति अझ राम्ररी गर्न सकिन्छ तर यो अनुभूति मनोधर्मी चिन्तकहरू तथा विद्यालयका विद्वान्हरूको सङ्गतबाट प्राप्त गर्न सकिँदैन, किनभने यो अनुभूत ज्ञान हो।

भक्तहरू सधैँ भगवान्का सेवामा लागिरहन्छन्। भगवान्ले पनि यसरी कृष्णभावनामा संलग्न हुने प्राणीहरूको मानसिकता र निश्छलतालाई बुझ्नु हुन्छ र उनीहरूलाई भक्तहरूको सङ्गतमा रहेर श्रीकृष्णको विज्ञान बुझ्ने बुद्धि दिनु हुन्छ। कृष्णचर्चा अत्यन्त शक्तिशाली हुन्छ। यदि कुनै भाग्यमानी व्यक्तिलाई यस्तो सत्सङ्गत प्राप्त हुन्छ र सत्सङ्गबाट पाएको ज्ञानलाई आत्मसात गर्न खोज्छ त्यस्तो व्यक्तिले आध्यात्मिक अनुभूतिका दिशामा अवश्य उन्नति गर्दछ। भगवान् श्रीकृष्णले अर्जुनलाई आफ्नो अलौकिक सेवाको उच्चस्तरसम्म पुऱ्याउन प्रोत्साहित गर्ने उद्देश्यले यो नवौँ अध्यायको

परमगोपनीय विषयका बारेमा भन्दै हुनुहुन्छ। उहाँले यसभन्दा अघिका अध्यायहरूमा भन्नुभएको विषयभन्दा यो विषय महत्त्वपूर्ण छ।

*भगवद्गीताको* पहिलो अध्याय सम्पूर्ण ग्रन्थको भूमिकाजस्तो छ। दोस्रो र तेस्रो अध्यायमा वर्णन गरिएको आध्यात्मिक ज्ञानलाई गोपनीय भनिएको छ। सातौँ र आठौँ अध्यायमा विवेचना गरिएको विषय विशेष गरी भक्तिसेवासँग सम्बन्धित छ। कृष्णभावनामा प्रकाश पार्ने हुनाले यी दुई अध्यायलाई अफ गोपनीय भनियो। तर, यो नवौँ अध्यायमा जुन विषयको चर्चा गरिएको छ त्यो विशुद्ध भक्ति हो। त्यसैले यसलाई परमगोपनीय भनिएको हो। जसले भगवान् श्रीकृष्णको यो परमगुह्य ज्ञान प्राप्त गर्दछ त्यो दिव्य पुरुष हो र त्यस्तो व्यक्तिलाई संसारमा रहँदा पनि यस संसारका भौतिक कष्टहरूले सताउँदैनन्। भक्तिरसामृतसिन्धुमा भनिएको छ— भगवान्लाई प्रेममय सेवा समर्पण गर्ने तीव्र इच्छा भएको व्यक्तिलाई सांसारिक बद्ध अवस्थामा रहेको भए पनि मुक्तपुरुष मान्नु पर्दछ। यस्तो मार्गमा लागेको व्यक्ति मुक्तपुरुष हो भन्ने कुरा यसै *भगवद्गीताको* दशौं अध्यायमा पनि हामीले पाउन सक्दछौँ।

यहाँ यो पहिलो श्लोकको विशेष महत्त्व छ। **इदं ज्ञानं** अर्थात् "यो ज्ञान" यस शब्दले शुद्ध भक्तिसेवालाई सङ्केत गरेको छ। यो भक्तिसेवामा विभिन्न नौ प्रकारका क्रियाकलापहरू पर्दछन्, ती हुन्— **श्रवण, कीर्तन, स्मरण, पाद-सेवन, अर्चन, वन्दन, दास्य, सख्य** र **आत्मनिवेदन**। भक्तिका यी नौ तत्त्वहरूको अभ्यास गर्नाले मानिस अध्यात्मचेतना वा कृष्णभावनाका स्तरसम्म उठ्न सक्दछ। यसरी जब मानिसको हृदय भौतिक संक्रमणहरूबाट शुद्ध हुन्छ अनि मात्र उसले यो कृष्णविज्ञान बुझ्न सक्दछ। जीवात्मा भनेको भौतिक वस्तु होइन भन्ने कुरा मात्र जानेर पुग्दैन। यो आध्यात्मिक अनुभूतिको आरम्भ मात्र हो। उसले **म शरीर होइन** भन्ने ज्ञान भएका भक्तहरूको आध्यात्मिक क्रियाकलाप र सामान्य मानिसका शारीरिक क्रियाकलापबीच हुने अन्तरलाई चिन्नु पर्दछ।

सातौँ अध्यायमा हामीले भगवान्की ऐश्वर्यमयी शक्ति, उहाँका अन्य विभिन्न शक्तिहरू, पराप्रकृति र अपराप्रकृति तथा यो सम्पूर्ण भौतिक जगत्को चर्चा गरिसकेका छौँ। अब यो नवौँ अध्यायमा भगवान्का महिमाको चित्रण गरिनेछ।

यस श्लोकमा प्रयोग भएको **अनसूयवे** शब्द पनि अत्यन्त महत्त्वपूर्ण छ। सामान्यतया ठुला ठुला विद्वान् भाष्यकारहरू पनि भगवान् श्रीकृष्णको ईर्ष्या गर्दछन् त्यसैले ठुला ज्ञानी विद्वान्हरूले लेखेका *भगवद्गीताका* भाष्यहरू पनि अशुद्ध हुन्छन्। भगवान् श्रीकृष्णप्रति ईर्ष्यालु भएका कारणले गर्दा उनीहरूले

गरेका भाष्य व्यर्थ हुन्छन्। केवल भगवान् श्रीकृष्णका भक्तहरूले गरेका टीका नै प्रामाणिक हुन्छन्। कुनै पनि ईर्ष्यालु व्यक्तिले *भगवद्गीताको* व्याख्या गर्न सक्दैन वा कृष्णसम्बन्धी पूर्ण ज्ञान प्रदान गर्न सक्दैन। भगवान् श्रीकृष्णलाई राम्ररी नबुझी जसले उहाँका चरित्रको आलोचना गर्दछ त्यो मूर्ख हो। अतः यस किसिमका भाष्यलाई सावधानीपूर्वक हटाइदिनु पर्दछ। जसले श्रीकृष्णलाई भगवान् भनेर बुझेका छन् ती शुद्ध तथा दिव्य व्यक्तित्वहरूका लागि यी अध्यायहरू धेरै लाभदायक हुनेछन्।

**राजविद्या राजगुह्यं पवित्रमिदमुत्तमम् ।**
**प्रत्यक्षावगमं धर्म्यं सुसुखं कर्तुमव्ययम् ॥ २ ॥**

**राजविद्या** — विद्याहरूको राजा; **राजगुह्यम्** — गोपनीय ज्ञानको पनि राजा; **पवित्रम्** — पवित्रतम; **इदम्** — यो; **उत्तमम्** — दिव्य; **प्रत्यक्ष** — प्रत्यक्ष अनुभवद्वारा; **अवगमम्** — जानिएको; **धर्म्यम्** — धर्मको सिद्धान्त; **सुसुखम्** — अत्यन्त सुखी; **कर्तुम्** — पूरा गर्न; **अव्ययम्** — अविनाशी।

**यो ज्ञान विद्याको राजा हो, सम्पूर्ण रहस्यहरूमध्येको महागोपनीय रहस्य हो, यो नै पवित्रतम् ज्ञान हो, यसले अनुभूतिद्वारा आत्माको प्रत्यक्ष बोध गराउँदछ, यही नै धर्मको पूर्णता हो, यो अविनाशी छ र यसलाई आनन्दपूर्वक सम्पन्न गर्न सकिन्छ।**

**तात्पर्य :** *भगवद्गीताको* यो नवौँ अध्यायलाई सबै विद्याहरूको राजा भनिएको छ, किनभने यो विद्या पहिले-पहिले व्याख्या गरिएका सबै दर्शन र सिद्धान्तहरूको सार हो। भारतवर्षका प्रमुख दार्शनिकहरूमा गौतम, कणाद, कपिल, याज्ञवल्क्य, शाण्डिल्य, वैश्वानर र व्यास उल्लेखनीय छन्, यीमध्ये सबैभन्दा पछिल्ला दार्शनिक वेदान्तसूत्रका रचयिता व्यासदेव हुन्। त्यसैले यो भारतभूमिमा दर्शन वा दिव्यज्ञानको अभाव कहिल्यै भएन। यही सन्दर्भमा भगवान्‌ले यो नवौँ अध्यायलाई यस्ता सबै ज्ञानको राजा भन्नुभएको हो, किनभने यो अध्याय वेदहरूको अध्ययनबाट प्राप्त ज्ञान र विभिन्न दर्शनहरूको सारांश हो। यहाँ यो ज्ञानलाई अत्यन्त गोपनीय वा गुह्य भनिएको छ, किनभने यस्ता गुह्य वा दिव्यज्ञानले आत्मा र शरीरबीचको अन्तरलाई बुझ्ने र बुझाउने काम गर्दछन्। भक्तियोग सम्पूर्ण गोपनीय ज्ञानहरूको पनि राजा अर्थात् प्रमुख ज्ञान हो यो राजविद्या, र त्यसको पनि पराकाष्ठा हो।

साधारणतया मानिसहरूलाई यस्तो गोपनीय ज्ञानको शिक्षा दिइँदैन। उनीहरूलाई बाहिरी ज्ञानको मात्र शिक्षा दिइन्छ। बाहिरी ज्ञान भन्नाले राजनीति, समाजशास्त्र, भौतिक शास्त्र, रसायन शास्त्र, गणित, ज्योतिष, इन्जिनियरिङ्ग

इत्यादि बुझिन्छ, र मानिसहरू यस्तै विषयमा अल्मलिएका छन्। संसारभरि यस्तै बाहिरी ज्ञान-विज्ञानका ठुलाठुला विश्वविद्यालयहरू र विभागहरू छन् तर दुर्भाग्य संसारमा आत्मज्ञानको शिक्षा दिने वा अध्यात्मविज्ञानको जानकारी गराउने कुनै विश्वविद्यालय वा विभाग वा शैक्षणिक संस्था अहिलेसम्म खुलेका छैनन्। आत्मा शरीरको सबैभन्दा महत्त्वपूर्ण भाग हो, आत्माबिना शरीरको कुनै महत्त्व हुँदैन तैपनि मानिसहरू आत्माको चिन्ता गर्दैनन् र शारीरिक आवश्यकताहरूलाई सबैभन्दा बढी महत्त्व दिने गर्दछन्।

*श्रीमद्भगवद्गीताले* विशेष गरी दोस्रो अध्यायदेखि नै आत्माको महत्त्वमाथि जोड दिँदैआएको छ। *भगवद्गीताको* सुरुमा भगवान्ले **अन्तवन्त इमे देहा नित्यस्योक्ताः शरीरिणः** भनेर शरीरलाई नाशवान् र आत्मालाई अविनाशी भन्नुभएको छ। आत्मा भन्ने कुरा यो शरीरभन्दा भिन्न वस्तु हो र यसको स्वभाव विकाररहित छ, अविनाशी छ र शाश्वत छ भन्ने जान्नु मात्र पनि ज्ञानको एउटा गुह्य अंश हो। तर, यसबाट मात्र आत्माका बारेमा कुनै सकारात्मक जानकारी प्राप्त हुँदैन। कहिलेकाहीँ मानिसहरूमा आत्मा शरीरभन्दा भिन्न छ, त्यसैले शरीर छुटेपछि आत्मा शून्यमा रहन्छ र निराकार बन्दछ भन्ने भ्रम पनि भएका पाइन्छ तर वास्तविकता त्यो होइन। शरीरमा हुँदा यति सक्रिय रहेको आत्मा शरीर छुटेपछि कसरी निस्क्रिय भएर बस्न सक्दछ? आत्मा सधैँ सक्रिय रहिरहन्छ। यदि आत्मा शाश्वत भए यसको क्रियाशीलता पनि शाश्वत नै छ र आध्यात्मिक जगत्मा (वैकुण्ठलोक) मा हुने यसका गतिविधिहरू नै अध्यात्मज्ञानको अति गोपनीय भाग हो। आत्माका यिनै गतिविधिहरूको ज्ञानलाई नै यहाँ सबै ज्ञानको राजा वा सम्पूर्ण ज्ञानको परमगोपनीय अंश भनिएको हो।

वैदिक साहित्यमा वर्णन गरिएअनुसार यो ज्ञान सबै किसिमका गतिविधिभन्दा पवित्रतम् छ। पद्मपुराणमा मानिसका पापकर्महरूको विश्लेषण गरिएको छ र एउटा पापपछि हुने अर्को पापको परिणाम पनि देखाइएको छ, जो व्यक्ति सकाम कर्महरूमा संलग्न रहन्छन् तिनीहरू पापपूर्ण गतिविधिका विभिन्न रूप र स्तरमा अल्झिरहन्छन्। उदाहरणका लागि जमिनमा रोपिएको कुनै बीज तुरून्तै उम्रिँदैन। बीजलाई पनि उम्रिनका लागि केही समय लाग्दछ। सुरुमा यो सानो टुसाका रूपमा देखा पर्दछ अनि सानो बिरूवा बन्दछ र पछि बल्ल त्यसले एउटा रूखको आकार ग्रहण गर्दछ । रूख बनिसकेपछि त्यो फुल्छ, अनि फल्दछ। जब फलहरू पाक्दछन् अनि त्यो रूखको बीउ रोप्नेले त्यसका फलको स्वाद लिन्छ। यसै गरी सर्वप्रथम मानिसले पाप कर्म गर्दछ। उक्त पापलाई पनि रूखको बीजलाई जस्तै उम्रिन र फल्न केही समय लाग्छ।

यसका पनि विभिन्न अवस्था हुन्छन् । मानिसले वर्तमानमा पाप कर्म गर्न पूर्णतः बन्द गरे पनि पहिले गरिएका पापको फल उसले भोगी नै रहनु पर्दछ। कुनै पापहरू अझसम्म पनि बीजका रूपमा बाँकी रहेका हुन सक्दछन् त कुनै फलिसकेका र फुलिसकेका हुन्छन् जसलाई हामी विभिन्न दुःख र कष्टका रूपमा भोगिरहेका हुन्छौँ।

*भगवद्गीताको* सातौँ अध्यायको अट्ठाइसौँ श्लोकमा भनिएको छ— जसले सम्पूर्ण पापकर्मका प्रतिफलहरू भोगेर समाप्त गरिसकेको छ र सांसारिक कर्मबाट मुक्त भएर पूर्णतया पुण्यकर्ममा संलग्न भएको छ त्यस्तो व्यक्ति नै भगवान् श्रीकृष्णको भक्त बन्न आइ पुग्दछ। अर्को शब्दमा भन्दा जो वास्तविक भगवद्भक्तिमा संलग्न हुन आइपुगेको छ त्यो व्यक्ति आफ्ना सबै पापकर्महरूबाट मुक्त भइसकेको हुन्छ। पद्मपुराणले यस भनाइको पुष्टि यसरी गरेको छ।

*अप्रारब्धफलं पापं कूटं बीजं फलोन्मुखम् ।*
*क्रमेणैव प्रलीयेत विष्णुभक्तिरतात्मनाम् ॥*

अर्थात्, भगवद्भक्तिमा संलग्न भएका व्यक्तिका पापकर्महरू फलीभूत भएका होउन्, वा सञ्चित रहेका होउन्, वा बीज रूपमा किन नहोउन् सबै नष्ट हुन्छन्, किनभने भक्तियोगको शुद्धीकरणशक्ति निकै प्रबल हुन्छ, त्यसैले यसलाई पवित्रम्, उत्तमम् वा शुद्धतमम् भनिएको छ। उत्तमको अर्थ दिव्य हुन्छ। तमस्‌को अर्थ भौतिक जगत् वा अन्धकार हो र उत्तमको अर्थ भौतिक गतिविधिभन्दा परको दिव्य हो। कहिलेकाहीँ भक्तहरू साधारण मानिस जस्तै सांसारिक काममा लागेका देखिए पनि तिनका भक्तिमय कर्महरूलाई कहिल्यै सांसारिक कार्यजस्तो ठान्न हुन्न। भक्तिमय क्रियाकलापहरूबाट परिचित भएको व्यक्तिले मात्र भक्तिमा रहेर गरिने सेवा साधारण सांसारिक कार्यजस्तो होइन भन्ने कुरा बुझ्दछ। त्यस्ता कार्यहरू सम्पूर्ण रूपले आध्यात्मिक किसिमका हुन्छन्, भक्तिमय हुन्छन् र प्रकृतिका गुणहरूको प्रदूषणबाट रहित हुन्छन्।

भक्तिमय सेवाकार्य स्वयम्मा परिपूर्ण हुन्छ र त्यस्तो कार्यको प्रतिफल प्रत्यक्ष अनुभव गर्न सकिन्छ, प्रत्यक्ष देख्न सकिन्छ। भगवान् श्रीकृष्णका पवित्र नामको (**हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे, हरे राम हरे राम राम राम हरे हरे**) जप गर्दा केही दिव्य आनन्दको अनुभूति हुने कुरा हामीले पनि अनुभव गरेका छौँ। यसरी नाम जप गर्ने व्यक्ति सम्पूर्ण भौतिक संक्रमणहरूबाट तत्काल शुद्ध हुन्छ। यति मात्र होइन, अझ नाम सङ्कीर्तन र श्रवणका साथै भक्तिमय कार्यहरूको प्रचार-प्रसार तथा कृष्णभावनाको

प्रचारमा सहयोग पुऱ्याउने व्यक्तिले क्रमशः आध्यात्मिक उन्नतिको अनुभव पनि गर्न थाल्दछ। आध्यात्मिक जीवनमा हुने यस्तो प्रगति कुनै पूर्वशिक्षा र योग्यतामा निर्भर हुँदैन। यो विधि स्वयम्मा कति शुद्ध छ भने, यसमा संलग्न हुने कुनै पनि व्यक्ति स्वतः शुद्ध भइहाल्दछ।

वेदान्त सूत्रको ३.२.२६ मा निम्नलिखित भनाइको व्याख्या गरिएको छ—**प्रकाशश्च कर्मण्यभ्यासात्** अर्थात् भक्तियोग कति शक्तिशाली छ, यसका गतिविधिमा लाग्नासाथ मानिस निःसन्देह प्रबुद्ध हुन्छ। यसको व्यावहारिक उदाहरण नारद मुनिको पूर्वजन्ममा देख्न सकिन्छ। पूर्व जीवनमा नारदजी दासीपुत्र थिए। न उनी उच्च कुलमा जन्मिएका थिए न त उनले उच्च शिक्षा नै पाएका थिए। उनकी आमाले ठुलाठुला भक्तहरूको सेवा गर्थिन्। उनी पनि उक्त सेवा कार्यमा संलग्न हुन्थे। कहिलेकाहीँ आमाको अनुपस्थितिमा उनी आफैँले मात्र पनि ती महान् भक्तहरूको सेवा गर्दथे। नारदले स्वयम् भन्नुभएको छ—

*उच्छिष्टलेपाननुमोदितो द्विजैः*
*सकृत्स्म भुञ्जे तदपास्तकिल्बिषः ।*
*एवं प्रवृत्तस्य विशुद्ध चेतस-*
*स्तद्धर्म एवात्मरूचिः प्रजायते ॥*

*श्रीमद्भागवत्* (१.५.२५) को प्रस्तुत श्लोकमा नारदजी आफ्ना शिष्य व्यासदेवका सामु आफ्नो पूर्वजन्मको वर्णन गर्दै भन्नु हुन्छ—“एक पटक चतुर्मासका अवसरमा मैले महान् भक्तहरूको सेवामा संलग्न हुने अवसर पाएको थिएँ। त्यस समय मलाई ती ऋषिहरूको घनिष्ठ सत्सङ्ग प्राप्त भएको थियो। कहिलेकाहीँ ती ऋषिहरूले भोजन गरिसक्दा थालमा केही उच्छिष्ट (पुरा) छोड्ने गर्दथे। मलाई ऋषिहरूले खाएका थालहरू सफा गर्ने क्रममा थालमा छोडिएको जूठो खानेकुरा खाने इच्छा हुन्थ्यो। एक दिन त ऋषिहरूको अनुमति लिएर मैले उक्त जूठो अवशिष्ट खाएँ, खाँदै गएँ। त्यसका प्रभावले केही समयमा म मेरा सबै पापपूर्ण कर्मफलबाट मुक्त भएँ। यसरी उक्त उच्छिष्ट खाँदै जाँदा विस्तारै मेरो हृदय पनि ती ऋषिहरूको जस्तै पवित्र भयो। ती महान् भक्तहरूले श्रवण र कीर्तनका माध्यमद्वारा भगवद्सेवामय भक्तिरसको आस्वादन गर्दथे र मैले पनि ती महान् भक्तहरूको जस्तो भक्तिरसको स्वाद पाउन थालेँ।” नारदजीले फेरि भन्नुभयो—

*तत्रान्वहं कृष्णकथाः प्रगायताम्,*
*अनुग्रहेणाश्रृणवं मनोहराः ।*

*ताः श्रद्धया मेऽनुपदं विश्रृण्वतः*
*प्रियश्रवस्यंग ममाभवद् रूचिः ॥*

ऋषिहरूका सत्सङ्गले गर्दा ममा पनि भगवान्का महात्म्यहरू सुन्ने र कीर्तन गर्ने रुचि उत्पन्न हुन थाल्यो र भक्तियोगमा संलग्न हुने तीव्र इच्छा जागृत हुन थाल्यो। अनि वेदान्त सूत्रमा उल्लेख गरिएको **प्रकाशश्च कर्मण्यभ्यासात्** अर्थात् भगवद्भक्तिमा लागेका व्यक्तिलाई सम्पूर्ण अनुभूति स्वतः हुन्छन्, यसको नाम प्रत्यक्ष अनुभूति हो भन्ने उक्तिअनुरूप मलाई पनि भगवान्को प्रत्यक्ष अनुभूति हुन थाल्यो।

यस श्लोकमा प्रयोग भएको **धर्म्यम्** शब्दको अर्थ धर्मको बाटो हो। नारद वास्तवमा दासीपुत्र थिए। उनले विद्यालयमा पढ्ने अवसर पाएका थिएनन्। उनी केवल आफ्नी आमाको सहायता गर्दथे। सौभाग्यवश उनकी आमाले भक्तहरूको सेवा गर्ने अवसर पाएकी थिइन्। आमाका साथमा भएकाले नारदले पनि त्यो मौका पाउनुभयो। यसरी भक्तहरूको सङ्गत मात्र पाउनाले पनि सम्पूर्ण धर्महरूको उच्चतम लक्ष्य प्राप्त गर्न उहाँ सफल हुनुभयो। सम्पूर्ण धर्महरूको उच्चतम लक्ष्य भनेको भक्तियोग हो। यसको पुष्टि गर्दै भागवत्मा भनिएको छ— **स वै पुंसां परो धर्मो यतो भक्तिरधोक्षजे।** भक्तियोगको उपलब्धि नै धर्मको सर्वोच्च परिपूर्णता हो भन्ने कुरा साधारणतया धार्मिक व्यक्तिहरूले बुझेका हुँदैनन्। यसको चर्चा पहिलो नै आठौँ अध्यायको अन्तिम श्लोकको तात्पर्यमा गरिसकिएको छ— **वेदेषु यज्ञेषु तपःसु चैव।** सामान्यतया आत्मसाक्षात्कारका निमित्त वैदिक ज्ञानको आवश्यकता पर्ने हुन्छ। यद्यपि, नारद कुनै गुरुका पाठशालामा पढ्न जानुभएन, उहाँले कहिल्यै वैदिक नियमहरूको शिक्षा पनि पाउनुभएको थिएन तैपनि उहाँले वेदाध्ययनको उच्चतम् प्रतिफल पाउनुभएको थियो। यो विधि अत्यन्त सशक्त भएको हुनाले नै मानिसले नियमित रूपमा कुनै धार्मिक कार्यहरू सम्पन्न नगरी परमसिद्धि प्राप्त गर्दछ। यो कसरी सम्भव छ? यसको पुष्टि पनि वैदिक साहित्यमा गरिएको छ— **आचार्यवान् पुरुषो वेद।** महान् आचार्यहरूको सत्सङ्ग पाएको व्यक्ति अशिक्षित भए पनि र कहिल्यै वेदाध्ययन नगरेको भए पनि आत्मसाक्षात्कारका लागि आवश्यक पर्ने सम्पूर्ण ज्ञानसँग परिचित भइसकेको हुन्छ।

भक्तियोगको विधि अत्यन्त सुखकर हुन्छ, किनभने यसमा **श्रवणं कीर्तनं विष्णोः** हुन्छ। अर्थात्, यहाँ भगवान्का नामहरूको कीर्तन हुन्छ र प्रामाणिक आचार्यहरूद्वारा दिइने दिव्य ज्ञानमय दार्शनिक प्रवचनहरू सुन्न पाइन्छ। बसेर पनि ज्ञान सिक्न सकिन्छ र भगवान्लाई अर्पण गरिएका राम्रा-राम्रा, मीठा-मीठा प्रसादको स्वाद लिन सकिन्छ। विभिन्न अवस्थामा भक्ति सुखमय छ। अत्यन्त

गरिबीका अवस्थामा रहँदा पनि भगवान्‌को भक्ति गर्न सकिन्छ। भगवान् भन्नु हुन्छ— **पत्रं पुष्पं फलं तोयं।** भगवान् भक्तहरूले प्रेमपूर्वक अर्पण गरिएको जे वस्तु पनि ग्रहण गर्नु हुन्छ, यसमा गाह्रो मान्नु हुन्न। एउटा पत्र मात्रै होस् वा एउटा फूल मात्रै, सानो फलको टुक्रा होस् वा अलिकति जल मात्रै। यदि सामाजिक अवस्थाको वास्ता नगरी प्रेमपूर्वक अर्पण गरिन्छ, त्यो वस्तु भगवान्‌ले ग्रहण गर्नु हुन्छ। यी कुराहरू विश्वका जुनसुकै भागमा जहिले पनि पाउन सकिन्छ। भक्तिका इतिहासमा यस्ता धेरै उदाहरणहरू छन्। भगवान्‌का चरणमा चढाइएका तुलसीपत्र मात्र खाएर सनत्कुमारजस्ता मुनिहरू महान् भक्त बने। अतः यो भक्तियोगको विधि अत्यन्त राम्रो छ र यसलाई प्रसन्न मुद्रामा रहेर सम्पन्न गर्न सकिन्छ। भगवान्‌ले केवल प्रेम चाहनु हुन्छ र प्रेमपूर्वक अर्पण गरिएको जुनसुकै वस्तु पनि उहाँले स्वीकार गर्नु हुन्छ।

यहाँ भक्तियोग शाश्वत छ भनिएको छ। यो भक्ति मायावादी दार्शनिकहरूले गरेको दाबीजस्तो छैन। यद्यपि, मायावादीहरू पनि कहिलेकाहीँ तथाकथित भक्ति गर्दछन् तर तिनीहरू के ठान्दछन् भने, जहिलेसम्म मुक्ति प्राप्त हुँदैन तबसम्म मात्र निरन्तर भक्ति गर्नु पर्दछ। "मुक्ति प्राप्त भएपछि तिनीहरू ईश्वरसँग एकाकार हुन्छन्।" यस किसिमको अस्थायी सीमित र स्वार्थमय भक्तिलाई शुद्ध भक्ति मान्न सकिँदैन। वास्तविक भक्ति मुक्ति भइसकेपछि पनि यथावत् रहिरहन्छ। भक्त जब संसार छोडेर भगवद्धाम अर्थात् वैकुण्ठ जान्छ, त्यस समय पनि त्यहाँ ऊ भगवान्‌को भक्तिमय सेवामा संलग्न रहन्छ। ऊ भगवान्‌सँग एकाकार हुने प्रयास गर्दैन।

*भगवद्गीताअनुसार* वास्तविक भक्ति मुक्तिपछि नै सुरु हुन्छ। जब मानिस मुक्त हुन्छ र ब्रह्मको स्तरमा पुग्दछ, **ब्रह्मभूत** हुन्छ अनि उसमा भक्तिको उदय हुन्छ। भनिएको छ— **समः सर्वेषु भूतेषु मद्भक्तिं लभते पराम्।** कर्मयोग, ज्ञानयोग, अष्टाङ्गयोग र अन्य योगहरूबाट मात्र कसैले पनि भगवान्‌लाई बुझ्न सक्दैन। यी योगविधिहरूद्वारा मानिसले भक्तियोगका दिशामा केही प्रगति त गर्न सक्दछ, तर स्वयम् भक्तिमा आरूढ नभई उसले भगवान्‌लाई बुझ्न सक्दैन। *श्रीमद्भागवत्‌मा* यस कुराको पुष्टि गरिएको छ। जब कुनै मानिस भक्तियोगका विधिहरू अपनाएर र विशेष गरी कुनै शुद्ध महात्माका मुखारविन्दबाट *श्रीमद्भागवत्* वा *भगवद्गीता* श्रवण गरेर शुद्ध हुन्छ अनि मात्र त्यो व्यक्ति कृष्णविज्ञान वा भगवद्विज्ञान बुझ्नसक्ने हुन्छ— **एवं प्रसन्नमनसो भगवद्भक्तियोगतः।** जब मानिसको हृदय समस्त व्यर्थका कुराबाट मुक्त हुन्छ वा शुद्ध हुन्छ अनि मात्र त्यसले भगवान् को हुनुहुन्छ भन्ने कुरा बुझ्न सक्दछ। यस प्रकार भक्तियोगको विधि वा कृष्णभावनामृत सबै

शिक्षा र सबै गोपनीय ज्ञानको राजा भएको छ। यो सम्पूर्ण धर्महरूमध्येको सबैभन्दा शुद्धतम रूप हो र यसलाई कुनै कठिनाइबिना आनन्दपूर्वक सम्पन्न गर्न सकिन्छ। अतः मानिसले यसलाई ग्रहण गर्नु पर्दछ।

**अश्रद्दधानाः पुरुषा धर्मस्यास्य परन्तप ।**
**अप्राप्य मां निवर्तन्ते मृत्युसंसारवर्त्मनि ॥ ३ ॥**

**अश्रद्दधानाः** — श्रद्धा नभएका; **पुरुषाः** — मानिसहरू; **धर्मस्य** — धर्मप्रति; **अस्य** — यो; **परन्तप** — हे शत्रुविनाशकारी; **अप्राप्य** — नपाई; **माम्** — मलाई; **निवर्तन्ते** — फर्किन्छन्; **मृत्युः** — मृत्युरूपी; **संसार** — संसारका; **वर्त्मनि** — बाटामा।

**हे परन्तप अर्जुन! भक्तियोगमा श्रद्धा नगर्ने व्यक्तिहरू मलाई प्राप्त गर्न नसकि फेरि जन्म र मृत्युको संसारमा फर्किन्छन्।**

**तात्पर्य :** श्रद्धाविहीन व्यक्तिले भक्तियोग प्राप्त गर्न सक्दैन यही नै यो श्लोकको तात्पर्य हो। भक्तहरूको सङ्गतले श्रद्धा उत्पन्न हुन्छ। भाग्यहीन मानिसहरू महापुरुषहरूद्वारा वैदिक साहित्यका प्रामाणिक वचन सुनेर पनि भगवान्मा श्रद्धा उत्पन्न गर्न सक्दैनन्। तिनीहरू चञ्चल हुन्छन् त्यसैले भगवद्भक्तिमा दृढ रहन सक्दैनन्। कृष्णभावनामा उन्नति गर्नका लागि श्रद्धा सबैभन्दा महत्त्वपूर्ण पक्ष हो। चैतन्यचरितामृतमा भनिएको छ— भगवान् श्रीकृष्णको सेवाद्वारा नै सम्पूर्ण सिद्धि प्राप्त गर्न सकिन्छ भन्ने पूर्ण विश्वासको नाम नै श्रद्धा हो। वास्तविक श्रद्धा भनेको यही हो। *श्रीमद्भागवत्* (४.३१.१४) मा भनिएको छ—

*यथा तरोर्मूलनिषेचनेन तृप्यन्ति तत्स्कन्धभुजोपशाखाः ।*
*प्राणोपहाराच्च यथेन्द्रियाणां तथैव सर्वार्हणमच्युतेज्या ॥*

जसरी रूखका जरामा पानी दिनाले त्यसका हाँगा-बिँगा र पातहरू सन्तुष्ट हुन्छन् र जसरी पेटमा खानेकुराको आपूर्ति गर्नाले शरीरका सबै अङ्गप्रत्यङ्ग तथा इन्द्रियहरू तृप्त हुन्छन्, त्यसै गरी भगवान्का दिव्य सेवामा संलग्न हुँदा सबै देवताहरू र जीवात्माहरू स्वतः प्रसन्न हुन्छन्। अतः गीता पढेपछि गीताको निष्कर्षमा आइपुग्नु पर्दछ र अरू सबै क्रियाकर्महरूलाई छोडेर परमपुरुष भगवान् श्रीकृष्णको सेवा गर्न सुरु गर्न पर्दछ। यो जीवनदर्शनप्रति पूर्णतः समर्पित हुनु नै श्रद्धा हो। मानिसमा यस किसिमको श्रद्धा विकास गर्नु कृष्णभावनाको कार्य हो।

कृष्णभावनाभावित व्यक्तिहरूका तीन श्रेणी छन्। श्रद्धाविहीन व्यक्ति तेस्रो श्रेणीमा पर्दछन्। यस्ता व्यक्तिहरू देखावटी भक्ति गर्दछन् त्यसैले

तिनलाई भक्तिको परिपूर्णता प्राप्त हुँदैन। यस्ता व्यक्तिहरूमा केही समयपछि भक्तिमार्गबाट विचलित हुने सम्भावना बढी हुन्छ। तिनीहरू सेवामा संलग्न रहे पनि पूर्ण विश्वास तथा श्रद्धा नभएका कारणले तिनलाई कृष्णभावनामा निरन्तर रहिरहन निकै कठिन हुन्छ। संस्थाको प्रचार-प्रसार गर्ने क्रममा यस किसिमका धेरै व्यावहारिक कठिनाइ हामीले अनुभव गरेका छौँ। कुनै मानिसहरू आफ्ना गोप्य उद्देश्य लिएर कृष्णभावनामा प्रवेश गर्दछन्, जब तिनको आर्थिक अवस्थामा केही सुधार आउँदछन्, उनीहरू यो मार्ग छाडेर फेरि आफ्नो पुरानो बाटोमा लाग्दछन्। केवल श्रद्धाले मात्र कृष्णभावनामा प्रगति गर्न सकिन्छ। जहाँसम्म श्रद्धाको विकासको कुरा छ, भक्तिसाहित्यको राम्रो अध्ययन गरेको व्यक्तिमा मात्र त्यो सम्भव छ। भक्तिसाहित्यमा निपुण भएको व्यक्ति दृढ श्रद्धालु हुन्छ र त्यस्तो व्यक्तिलाई नै कृष्णभावनामा प्रथम श्रेणीको भनिन्छ। भक्तिशास्त्रको ज्ञान नभएका व्यक्ति दोस्रो श्रेणीका हुन् तर कृष्णभक्ति नै सर्वश्रेष्ठ मार्ग हो भन्ने विश्वास तिनीहरूमा स्वतः उत्पन्न हुन्छ र तिनीहरू यो मार्गमा आउँदछन्। यसरी हेर्दा यिनीहरू तेस्रो श्रेणीका व्यक्तिहरूभन्दा श्रेष्ठ देखिन्छन्। तेस्रो श्रेणीका व्यक्तिमा न श्रद्धा नै हुन्छ न शास्त्रज्ञान नै हुन्छ। तिनीहरू सङ्गतले गर्दा र सजिलोका कारणले गर्दा यसमा लागेका हुन्छन्। त्यसैले तृतीय श्रेणीका व्यक्तिहरू कृष्णभावनाबाट च्युत हुने बढी सम्भावना हुन्छ तर द्वितीय श्रेणीका व्यक्तिहरू च्युत हुँदैनन्। प्रथम श्रेणीका व्यक्तिहरू कृष्णभावनाबाट च्युत हुने प्रश्न नै उठ्दैन। प्रथम श्रेणीका व्यक्तिले भक्तिमा प्रगति पनि गर्दछन् र अन्त्यमा त्यसको अभीष्ट फल पनि प्राप्त गर्दछन्। जहाँसम्म तेस्रो श्रेणीका व्यक्तिहरूको कुरा छ, तिनीहरूमा कृष्णभक्ति धेरै राम्रो कुरा हो भन्ने विश्वास हुन्छ तर तिनले *भगवद्गीता, श्रीमद्भागवत्जस्ता* शास्त्रहरूमार्फत कृष्णसम्बन्धी पर्याप्त ज्ञान पाएका हुँदैनन्। कहिलेकाहीँ कृष्णभावनामा लागेका यी तेस्रो श्रेणीका व्यक्तिहरू कर्मयोग र ज्ञानयोगतिर प्रवृत्त भएको पनि देखिन्छ, र कहिलेकाहीँ तिनीहरू विचलित पनि हुन्छन् तर ज्ञानयोग र कर्मयोगको प्रभाव नष्ट हुनासाथ तिनीहरू दोस्रो श्रेणी वा पहिलो श्रेणीका कृष्णभक्त बन्दछन्। भगवान् श्रीकृष्णप्रतिको श्रद्धा पनि तीन श्रेणीका विभाजित छ। यसको चर्चा *श्रीमद्भागवत्मा* पाइन्छ। पहिलो श्रेणी, दोस्रो श्रेणी र तेस्रो श्रेणीका आस्तिकताको व्याख्या *श्रीमद्भागवत्को* एकादश स्कन्धमा गरिएको छ। भगवान् श्रीकृष्णका बारेमा सुनेर पनि र भक्तियोगको श्रेष्ठतालाई बुझेर पनि जसका हृदयमा त्यसप्रति श्रद्धा उत्पन्न हुँदैन र जसले यस्ता कुरालाई केवल प्रशंसा मात्र हो भन्दछ, त्यस्ता व्यक्तिलाई भक्तिमा लागेका भए पनि आफ्नो बाटो पहिल्याउन धेरै कठिन हुन्छ। त्यस्ता व्यक्तिले पूर्णता पाउने आशा

धेरै कम हुन्छ। अतः भक्तिमार्गमा जानका लागि श्रद्धा नै अत्यन्त महत्त्वपूर्ण कुरा हो।

**मया ततमिदं सर्वं जगदव्यक्तमूर्तिना ।**
**मत्स्थानि सर्वभूतानि न चाहं तेष्ववस्थितः ॥ ४ ॥**

**मया** — मद्वारा; **ततम्** — व्याप्त; **इदम्** — यो; **सर्वम्** — सम्पूर्ण; **जगत्** — दृश्य जगत्; **अव्यक्तमूर्तिना** — अप्रकट रूपद्वारा; **मत्स्थानि** — ममा; **सर्वभूतानि** — सबै जीवात्मा; **न** — होइन; **च** — पनि; **अहम्** — म; **तेषु** — तिनमा; **अवस्थितः** — अवस्थित।

**यो सम्पूर्ण ब्रह्माण्ड मेरो अव्यक्त रूपले ढाकिएको छ, सम्पूर्ण जीव ममा निहित छन् तर म उनीहरूभित्र छैन।**

**तात्पर्य :** स्थूल इन्द्रियहरूद्वारा भगवान्‌को अनुभूति हुन सक्दैन। भनिएको पनि छ—

*अतः श्रीकृष्णनामादि नभवेत् ग्राह्यमिन्द्रियैः ।*
*सेवोन्मुखे हि जिह्वादौ स्वयंमेव स्फुरत्यदः ॥*

*भक्तिरसामृत सिन्धु* (१.२.२३४)

भौतिक इन्द्रियहरूद्वारा भगवान्‌का नाम, यश र लीलाहरूलाई बुझ्न सकिँदैन। उपयुक्त मार्गदर्शनमा रहेर भक्तिमा लागिरहने व्यक्तिलाई मात्र भगवान्‌को साक्षात्कार हुन्छ। ब्रह्मसंहिता (५.३८) मा भनिएको छ— **प्रेमाञ्जनच्छुरित भक्ति विलोचनेन, सन्तः सदैव हृदयेषु विलोकयन्ति** दिव्य प्रेमाभक्तिको भाव विकसित भइसकेका सन्तहरूले भगवान् गोविन्दलाई सधैँभरि आफूभित्र पनि देख्दछन् र आफूबाहिर पनि देख्दछन्, तर सर्वसाधारणले भगवान्‌लाई प्रत्यक्ष देख्न सक्दैनन्। भनिएको छ— भगवान् सर्वव्यापी हुनुहुन्छ, सर्वत्र उपस्थित हुनुहुन्छ, तैपनि भौतिक इन्द्रियहरूद्वारा उहाँलाई अनुभव गर्न सकिँदैन, चिन्तन गर्न सकिँदैन। **अव्यक्तमूर्तिना** भन्ने शब्दले यहाँ यही कुराको सङ्केत गरेको छ। वास्तवमा हरेक वस्तु उहाँमा आश्रित छ तर पनि हामी उहाँलाई देख्न सक्दैनौँ। यहाँ देखिने समग्र भौतिक सृष्टि केवल उहाँका दुई भिन्न शक्तिहरू— **पराशक्ति** र **अपराशक्तिको** संयोग मात्र हो भन्ने कुराको चर्चा पहिल्यै सातौँ अध्यायमा भइसकेको छ। जसरी सूर्यको प्रकाश सारा संसारभरि फैलिएको छ त्यसै गरी भगवान्‌को शक्ति पनि सम्पूर्ण सृष्टिभरि फैलिएको छ र प्रत्येक वस्तु भगवान्‌को त्यही शक्तिमा आश्रित छ।

यसरी भगवान् सर्वत्र फैलिएर रहने हुनाले उहाँको कुनै ठोस वैयक्तिक

सत्ता छैन भन्ने निष्कर्ष कसैले निकाल्नु हुँदैन। यस किसिमका तर्कहरूको निराकरण गर्नका लागि भगवान् स्वयम् भन्नु हुन्छ— "म सर्वत्र व्याप्त छु, सबै कुरा मभित्र छन् तर म यी सबैभन्दा अलग छु।" उदाहरणका लागि राजा सरकारप्रमुख हुन्छ, अर्थात् सरकार भनेको राजकीय शक्तिको मूर्तरूप हो र विभिन्न सरकारी निकायहरू राजाका शक्तिकेन्द्र हुन्। हरेक विभाग राजाका शक्तिमा आश्रित हुन्छन् तर राजा हरेक विभागमा व्यक्तिगत रूपले उपस्थित हुँदैनन्, यस्तो आशा गर्न सकिँदैन। यो एउटा स्थूल उदाहरण हो। ठीक यसै गरी जति कुरा हामीले यो सृष्टिमा देख्दछौँ र जति कुरा यी भौतिक जगत्मा र आध्यात्मिक जगतमा विद्यमान छन्, ती सबै भगवान्का शक्तिमा आश्रित छन्। भगवान्का विभिन्न शक्तिहरूको विस्तारबाट यो सृष्टिको सिर्जना हुन्छ। **विष्टभ्याहमिदं कृत्स्नम्** भनेर *भगवद्गीतामा* भनिएअनुसार भगवान् आफ्नो साकार रूपको प्रतिनिधित्व गर्दै विभिन्न शक्तिहरूको विस्तार गरेर सर्वत्र उपस्थित हुनुहुन्छ।

**न च मत्स्थानि भूतानि पश्य मे योगमैश्वरम् ।**
**भूतभृन्न च भूतस्थो ममात्मा भूतभावनः ॥ ५ ॥**

**न** — छैन; **च** — पनि; **मत्स्थानि** — ममा स्थित; **भूतानि** — समग्र सृष्टि; **पश्य** — हेर; **मे** — मेरो; **योगम् ऐश्वरम्** — अकल्पनीय योगशक्ति; **भूतभृत्** — सम्पूर्ण प्राणीहरूका पालनकर्ता; **न** — होइन; **च** — पनि; **भूतस्थः** — जगत्मा; **मम आत्मा** — मेरो आत्मा; **भूतभावनः** — सम्पूर्ण जगत्को स्रोत हो।

**तैपनि मद्वारा सृजित हरेक वस्तु ममा स्थित हुँदैनन्। मेरो योगशक्तिलाई हेर, म सम्पूर्ण प्राणीहरूको पालनकर्ता हूँ, सबै ठाउँमा म व्याप्त छु तर पनि म जगत्को अंश होइन, म त स्वयम् सृष्टिको कारणस्वरूप हूँ।**

**तात्पर्य :** भगवान् भन्नु हुन्छ— "हरेक वस्तु ममा आश्रित छ"— **मत्स्थानि सर्वभूतानि,** तर यसको गलत अर्थ लगाइनु हुन्न। भगवान् यस जगत्को संरक्षण र पालनसँग प्रत्यक्ष रूपले सम्बन्धित हुनु हुन्न। हामीले सम्पूर्ण पृथ्वीलाई आफ्ना काँधमा बोकिराखेको एटलसको चित्र देखेका छौँ। एटलस यो विशाल धर्तीलाई काँधमा उचालिराख्दा निकै थाकेजस्तो देखिन्छ। एटलसले पृथ्वी बोकेजस्तै गरी भगवान् श्रीकृष्णले पनि यो विशाल ब्रह्माण्डलाई आफ्ना काँधमा बोकिरहनुभएको होला भन्ने कल्पना हामीले गर्नु हुन्न। भगवान् भन्नु हुन्छ "सम्पूर्ण कुराहरू ममा आश्रित छन् तापनि म ती सबै कुराबाट अलग्ग छु।" सम्पूर्ण लोकहरू अन्तरिक्षमा अवस्थित छन् र त्यो अन्तरिक्ष भन्नु

भगवान्‌को शक्ति हो। तर, भगवान् अन्तरिक्षभन्दा भिन्न हुनुहुन्छ, अर्थात् भगवान्‌को अवस्थिति छुट्टै किसिमको छ। भगवान्‌ले भन्नुभएको छ— सम्पूर्ण सृजित तत्त्वहरू मेरो अचिन्त्य शक्तिमा निर्भर छन् तैपनि भगवान्‌का रूपमा म ती सम्पूर्ण तत्त्वभन्दा छुट्टै छु।" भगवान्‌को अचिन्त्य ऐश्वर्य भनेको यही हो।

निरूक्ति नामक वैदिक शब्दकोशमा भनिएको छ— **युज्यतेऽनेन दुर्घटेषु कार्येषु** अर्थात्, भगवान्‌ले आफ्नो शक्तिको प्रदर्शन गर्दै अकल्पनीय ढङ्गले आश्चर्यजनक लीलाहरू गरिरहनु हुन्छ। उहाँको व्यक्तित्व विभिन्न शक्तिहरूले पूर्ण छ र उहाँको सङ्कल्प स्वयम्‌मा एउटा वास्तविक तथ्य हो। भगवान्‌को व्यक्तित्वलाई यसरी नै बुझ्नु पर्दछ। जब हामी कुनै काम गर्ने विचार गर्दछौँ त्यहाँ विभिन्न विघ्नबाधाहरू उपस्थित हुन्छन्। कहिलेकाहीँ हामीले चाहेअनुसारको काम गर्न सम्भवै हुँदैन तर भगवान् श्रीकृष्णले कुनै काम गर्ने विचार गर्नासाथ उहाँको चाहनाले मात्रै हरेक काम यति राम्रोसँग सुसम्पन्न हुन्छ, जसको कल्पना गर्नसम्म पनि हामी सक्दैनौँ। यस तथ्यको व्याख्या गर्दै भगवान् भन्नु हुन्छ— "सम्पूर्ण भौतिक सृष्टिको पालनकर्ता र धारणकर्ता म नै हूँ तैपनि मैले यो भौतिक सृष्टिलाई स्पर्श गर्दिनँ।" भगवान्‌ले इच्छामात्र गर्नासाथ हरेक कुराको सृष्टि हुन्छ। सृष्टि भएका हरेक कुराको स्याहार तथा लालन-पालन हुन्छ र ती सबैको संहार पनि हुन्छ। भगवान् स्वयम् र उहाँको मनमा कुनै भिन्नता छैन तर हामी र हाम्रो भौतिक मनका बीचमा ठुलो भिन्नता छ। भगवान् परमात्मा हुनुभएकाले यस्तो भएको हो। भगवान् हरेक वस्तुमा उपस्थित हुनुहुन्छ तर साधारण मानिस भगवान् साकार रूपमा कसरी हरेक वस्तुमा उपस्थित हुनुहुन्छ भन्ने कुरा बुझ्न सक्दैन। प्रत्येक वस्तु भगवान्‌मा आश्रित हुने भए पनि भगवान् ती सबै भौतिक सृष्टिभन्दा भिन्न हुनुहुन्छ। यहाँ **योगमैश्वरम्** अर्थात् भगवान्‌को योगशक्ति भनेर यही कुराको व्याख्या गरिएको हो।

**यथाकाशस्थितो नित्यं वायुः सर्वत्रगो महान् ।**
**तथा सर्वाणि भूतानि मत्स्थानीत्युपधारय ॥ ६ ॥**

**यथा** — जसरी; **आकाशस्थितः** — आकाशमा रहेको; **नित्यम्** — सधैँ; **वायुः** — हावा; **सर्वत्र-गः** — सबै ठाउँमा प्रवाहित हुने; **महान्** — महान्; **तथा** — त्यसै गरी; **सर्वाणि भूतानि** — सबै प्राणीहरू; **मत्स्थानि** — ममा अवस्थित; **इति** — यस प्रकार; **उपधारय** — बुझ्ने प्रयास गर।

**जसरी सर्वत्र प्रवाहित हुने शक्तिशाली हावा आकाशमा स्थित रहन्छ त्यसै गरी सृष्टि भएका सम्पूर्ण प्राणीहरू ममा स्थित हुन्छन् भन्ने कुरा तिमीले बुझ।**

**तात्पर्य :** यति ठुलो भौतिक सृष्टि भगवान्मा कसरी स्थित छ भन्ने कुरा साधारण मानिसले बुझ्न र विचार गर्न सक्दैन। तर, हामीलाई बुझ्न सजिलो हुने उदाहरण भगवान्ले यहाँ प्रस्तुत गर्नुभएको छ। हाम्रो सोचाइमा आकाश सबैभन्दा ठुलो सृष्टि हो र त्यो आकाशमा बहने हावा पनि विश्व ब्रह्माण्डको सबैभन्दा ठुलो सृजना हो। हावाको गतिले प्रत्येक वस्तुको गतिविधिलाई प्रभावित पार्दछ तर जतिसुकै ठुलो भए पनि हावा आकाशमा नै अवस्थित छ, हावा आकाशभन्दा पर छैन। त्यसै गरी विचित्र किसिमको यो सम्पूर्ण सृष्टि भगवान्को इच्छाका आधारमा अवस्थित छ र हरेक कुरा उहाँको इच्छाका अधीनमा छ। सामान्यतया हामी भगवान्को इच्छाबिना घाँसको एउटा त्यान्द्रो पनि हल्लिँदैन भन्ने गर्दछौँ। यसरी संसारका हरेक वस्तु उहाँको अधीनमा रहेर गतिशील छ। उहाँको इच्छाले प्रत्येक कुराको सृष्टि हुन्छ, उहाँको इच्छाले प्रत्येक कुराको पालन-पोषण हुन्छ र उहाँको इच्छाले प्रत्येक कुराको संहार पनि हुन्छ। जसरी हावाका गतिविधिबाट आकाश प्रभावित हुँदैन त्यसै गरी भगवान् पनि सृष्टिका हरेक वस्तुबाट अलग्ग र अप्रभावित हुनुहुन्छ। तैत्तरीय उपनिषद् (२, ८, १) मा भनिएको छ— **यद्भीता वातः पवते** अर्थात्, भगवान्का डरले नै हावा बहन्छ। त्यसै गरी वृहदारण्यक उपनिषद्मा भनिएको छ— **एतस्य वा अक्षरस्य प्रशासने गार्गि सूर्यचन्द्रमसौ विधृतौ तिष्ठत, एतस्य वा अक्षरस्य प्रशासने गार्गि द्यावापृथिव्यौ विधृतौ तिष्ठतः।** अर्थात्, भगवान्का आदेश र नियन्त्रणमा रहेर सूर्य, चन्द्रसहितका अन्य ठुलाठुला ग्रहहरू घुमिरहेका छन्। ब्रह्मसंहिता (५,५२) मा पनि भनिएको छ—

*यच्चक्षुरेष सविता सकलग्रहाणाम्*
*राजा समस्तसुरमूर्तिरशेषतेजाः ।*
*यस्याज्ञया भ्रमति सम्भृतकालचक्रो*
*गोविन्दमादि पुरुषं तमहं भजामि ॥*

यो सूर्यको गतिको वर्णन हो। यहाँ भनिएको छ— सूर्य भगवान्को एउटा आँखा हुनुहुन्छ र त्यसमा ताप र प्रकाश फैलाउने अपार शक्ति छ, तैपनि सूर्य भगवान् गोविन्दको इच्छा र आदेशअनुसार आफ्नो निर्धारित कक्षमा घुमिरहनु हुन्छ। यसरी आफैँमा अत्यन्त विशाल र विचित्रको देखिने यो सारा चराचर सृष्टि भगवान्को अधीनमा छ भन्ने प्रमाण हामी वैदिक साहित्यमा पाउन सक्दछौँ। यस कुराको व्याख्या यसै अध्यायको आगामी श्लोकमा पनि गरिएको छ।

**सर्वभूतानि कौन्तेय प्रकृतिं यान्ति मामिकाम् ।**
**कल्पक्षये पुनस्तानि कल्पादौ विसृजाम्यहम् ॥ ७॥**

**सर्वभूतानि** — सबै प्राणीहरू; **कौन्तेय** — हे कुन्तीपुत्र; **प्रकृतिम्** — प्रकृतिमा; **यान्ति** — प्रवेश गर्दछन्; **मामिकाम्** — मेरो; **कल्पक्षये** — कल्पका अन्त्यमा; **पुनः** — फेरि; **तानि** — ती सबैलाई; **कल्पादौ** — कल्पका सुरुमा; **विसृजामि** — सृष्टि गर्दछु; **अहम्** — म।

**हे कुन्तीपुत्र! कल्पका अन्त्यमा सम्पूर्ण भौतिक सृष्टिहरू मेरो प्रकृतिमा प्रवेश गर्दछन् अनि अर्को कल्प सुरु हुँदा तिनलाई म आफ्नो शक्तिद्वारा फेरि सृष्टि गर्दछु।**

**तात्पर्य :** यो भौतिक जगत्को सृष्टि पालन र संहार पूर्णतः भगवान्का परमइच्छामा निर्भर छ, कल्पको अन्त्यमा भन्नुको तात्पर्य ब्रह्माको मृत्युसम्म भन्ने हुन्छ। ब्रह्मा एक सय वर्ष जीवित रहन्छन् र उनको एक दिन हाम्रो ४,३०, ००,००,००० (चार अरब तीस करोड) वर्ष बराबरको हुन्छ। उनको रात पनि यत्तिकै लामो हुन्छ। ब्रह्माको एक महिनामा यस्ता तीस दिन र तीस रात हुन्छन्। त्यसै गरी उनको एक वर्षमा यस्तै बाह्र महिना हुन्छन्, यस प्रकारको एक सय वर्षपछि ब्रह्माको मृत्यु हुन्छ अनि प्रलय हुन्छ, अर्थात् कल्पको अन्त्य हुन्छ। यसको अर्थ भगवान्ले प्रकट गर्नुभएको शक्ति समेटिएर फेरि उहाँमा विलीन हुनु हो। अनि जहिले यो ब्रह्माण्डलाई फेरि उत्पन्न गर्नुपर्ने आवश्यकता हुन्छ त्यस समय उहाँको इच्छाद्वारा यसको पुनः प्रकटीकरण हुन्छ। भगवान् भन्नु हुन्छ— **एकोऽहं बहुस्याम** अर्थात् म एक्लै छु, धेरै हुन्छु (छान्दोग्य उपनिषद् ६.२.३)। यो नै वैदिक शक्तिवाद हो। उहाँले यो भौतिक शक्तिमा स्वयम् आफ्नो विस्तार गर्नु हुन्छ। फलस्वरूप पुनः सम्पूर्ण जगत्को सृष्टि हुन्छ।

**प्रकृतिं स्वामवष्टभ्य विसृजामि पुनः पुनः ।**
**भूतग्राममिमं कृत्स्नमवशं प्रकृतेर्वशात् ॥ ८ ॥**

**प्रकृतिम्** — भौतिक प्रकृति; **स्वाम्** — मेरो आफ्नो; **अवष्टभ्य** — प्रवेश गरेर; **विसृजामि** — उत्पन्न गर्दछु; **पुनः पुनः** — फेरि फेरि (बारम्बार); **भूत-ग्रामम्** — सम्पूर्ण सृष्टिलाई; **इमम्** — यो; **कृत्स्नम्** — पूर्णरूपमा; **अवशम्** — स्वचालित ढङ्गले; **प्रकृतेः** — प्रकृतिका शक्तिको; **वशात्** — अधीनमा रहेर।

**यो सम्पूर्ण दृश्यमान जगत् मेरो अधीनमा छ। मेरो इच्छाद्वारा स्वचालित रूपमा यो सृष्टि बारम्बार प्रकट हुन्छ र मेरा इच्छाले अन्त्यमा यसको विनाश पनि हुन्छ।**

**तात्पर्य :** यो भौतिक जगत् भगवान्की अपराशक्तिको अभिव्यक्ति हो। यसको व्याख्या धेरै पटक पहिले पनि भइसकेको छ। सृष्टिका समयमा यो शक्ति

महत्तत्त्वका रूपमा प्रकट हुन्छ। यसभित्र भगवान् आफ्नो पहिलो पुरुष अवतार महाविष्णुका रूपमा प्रवेश गर्नु हुन्छ। भगवान् कारणोदक समुद्रमा शयन गर्नु हुन्छ र उहाँले सास फेर्दा असङ्ख्य ब्रह्माण्डहरू उत्पन्न हुन्छन् अनि ती प्रत्येक ब्रह्माण्डमा भगवान् गर्भोदकशायी विष्णुका रूपमा प्रवेश गर्नु हुन्छ। यस्तै किसिमले हरेक ब्रह्माण्डको उत्पत्ति हुन्छ। यसपछि पनि भगवान्ले आफूलाई क्षीरोदकशायी विष्णुका रूपमा प्रकट गर्नु हुन्छ र उक्त क्षीरोदकशायी विष्णु प्रत्येक वस्तुमा, ससाना अणुहरूमा समेत प्रवेश गर्नु हुन्छ। यही तथ्यको वर्णन यहाँ गरिएको छ। भगवान् हरेक वस्तुमा प्रवेश गर्नु हुन्छ।

जहाँसम्म जीवात्माहरूको कुरा छ तिनीहरू यही भौतिक प्रकृतिका गर्भमा अवस्थित हुन्छन् र आ-आफ्ना पूर्वजन्मका कर्मअनुसार विभिन्न तहका योनिहरूमा जन्मिन्छन्। यसरी नै यो भौतिक जगत्को क्रियाकलाप सुरु हुन्छ। सृष्टिको प्रारम्भिक क्षणदेखि नै विभिन्न योनिका जीवात्माहरूको क्रियाकलाप पनि सुरु भइहाल्दछ। यी जीवयोनिहरूको विकास क्रमशः भएको हो भन्ने कुरा गलत हो। यी विभिन्न प्रकारका जीवात्माहरूको उत्पत्ति ब्रह्माण्डको उत्पत्तिसँगसँगै भएको हो। अर्थात्, मानिस, पशु-पक्षी चरा-चुरूङ्गी, कीरा फटयाङ्ग्राहरू सबैको उत्पत्ति एकैसाथ भएको हो, किनभने अन्तिम प्रलयको समयमा जीवात्माहरूले जे-जस्तो इच्छा राख्दछन् त्यहीअनुसार उनीहरूको आगामी रूप निर्माण हुन्छ। यहाँ प्रयोग भएको **अवशम्** शब्दद्वारा हामी के कुराको स्पष्ट सङ्केत पाउँदछौँ भने, विकासक्रमको प्रक्रियासँग जीवात्माको कुनै सम्बन्ध छैन। पूर्वजन्ममा जो जुन-जुन अवस्थामा थियो आगामी जन्ममा पनि त्यो त्यही अवस्थामा प्रकट हुन्छ र यो कार्य भगवान्को इच्छामा निर्भर छ। यही नै भगवान्को अचिन्त्य शक्ति हो। यसरी विभिन्न योनिहरूको सृष्टि गरिसकेपछि ती योनिका जीवहरूसँग भगवान्को कुनै सम्बन्ध हुँदैन। विभिन्न प्रकारका जीवात्माहरूको अभिरुचिलाई पूरा गर्नका लागि नै सृष्टिको संरचना हुने गर्दछ, त्यसैले तिनीहरूसँग भगवान्को कुनै संलग्नता हुँदैन।

**न च मां तानि कर्माणि निबध्नन्ति धनञ्जय ।**
**उदासीनवदासीनमसक्तं तेषु कर्मसु ॥ ९ ॥**

**न** — होइन; **च** — पनि; **माम्** — मलाई; **तानि** — ती; **कर्माणि** — कर्महरू; **निबध्नन्ति** — बाँध्छन्; **धनञ्जय** — हे धनका विजेता; **उदासीनवत्** — तटस्थ भएजस्तै गरी; **आसीनम्** — रहेको; **असक्तम्** — आसक्तिरहित; **तेषु** — ती; **कर्मसु** — कर्महरूमा।

**हे धनञ्जय, ती सारा कर्महरूले मलाई बन्धनमा पार्न सक्दैनन्। म तटस्थ छु र यी सम्पूर्ण भौतिक क्रियाकलापहरूप्रति म सधैँ अनासक्त छु।**

**तात्पर्य :** त्यसो भए भगवान्को कुनै काम नै छैन? भन्ने प्रश्न उठ्न सक्दछ तर यस्तो सोच्नु हुँदैन। भगवान् आध्यात्मिक जगत्मा (वैकुण्ठ-लोकमा) सधैँ व्यस्त रहनु हुन्छ। ब्रह्मसंहिता (५.६) मा भनिएको छ— **आत्मारामस्य तस्यास्ति प्रकृत्या न समागमः।** अर्थात्, भगवान् सधैँ सत्चित् र आनन्दमय आध्यात्मिक क्रियाकलापमा संलग्न रहनु हुन्छ तर भौतिक गतिविधिसँग उहाँको कुनै सरोकार छैन। भौतिक क्रियाकलापहरू उहाँका विभिन्न शक्तिहरूबाट सम्पन्न हुने गर्दछन्। यस भौतिक जगत्का क्रियाकलापप्रति भगवान् सधैँ तटस्थ रहनु हुन्छ। यहाँ प्रयोग गरिएको **उदासीनवत्** भन्ने शब्दले उहाँको उक्त तटस्थतालाई सङ्केत गरेको छ। संसारका हरेक सानाभन्दा साना कार्यहरूमाथि उहाँको नियन्त्रण छ तैपनि उहाँ तटस्थ हुनुहुन्छ। जसरी न्यायाधीश आफ्नो आसनमा तटस्थभावले बसिरहेको हुन्छ, उसका आदेशअनुसार कामहरू भइरहेका हुन्छन्। कसैले मृत्युको सजाय पाउँदछ, कसैलाई कारावासको सजाय दिइन्छ र कसैले ठुलो धनराशिको पुरस्कार पनि पाइरहेको हुन्छ तर यी सबै कुराप्रति न्यायाधीश तटस्थ रहन्छ। विभिन्न मानिसलाई हुने लाभ वा हानिसँग उसको कुनै सरोकार हुँदैन। त्यसै गरी भगवान् पनि सधैँ तटस्थ रहनु हुन्छ, यद्यपि प्रत्येक काममा उहाँको हात नहुने होइन। वेदान्तसूत्र (२.१.३४)मा भनिएको छ— **वैषम्यनैर्घृण्ये न** अर्थात्, भगवान् यस जगत्को द्वन्द्वमा अवस्थित हुनु हुन्न। उहाँ सांसारिक द्वन्द्वभन्दा पर हुनुहुन्छ। न त उहाँलाई यो जगत्को सृष्टिप्रति अनुराग छ न यसको विनाशप्रति विराग। सम्पूर्ण जीवात्माहरू आ-आफ्ना पूर्वजन्मका कर्मअनुसार विभिन्न योनिहरूमा आई शरीर ग्रहण गर्दछन्। यसमा भगवान्ले कुनै हस्तक्षेप गर्नुहुन्न।

**मयाध्यक्षेण प्रकृतिः सूयते सचराचरम् ।**
**हेतुनानेन कौन्तेय जगद्विपरिवर्तते ॥ १० ॥**

**मया** — मद्वारा; **अध्यक्षेण** — अध्यक्षता गरिएका हुनाले; **प्रकृतिः** — प्रकृतिले; **सूयते** — प्रकट गर्दछिन्; **स** — दुवै; **चराचरम्** — चर र अचर वा स्थावर र जङ्गमलाई; **हेतुना** — कारणले; **अनेन** — यो; **कौन्तेय** — हे कुन्तीपुत्र; **जगत्** — यो दृश्यमान ब्रह्माण्ड; **विपरिवर्तते** — क्रियाशील छ।

**हे कुन्तीपुत्र! यो भौतिक संसार मेरो निर्देशनअनुसार काम गर्ने मेरो एउटा शक्ति हो। त्यही शक्तिले गर्दा यी सम्पूर्ण चर-अचर प्राणीहरू**

**उत्पन्न हुन्छन् र त्यसैका शासनमा रहेर यो जगत्को बारम्बार उत्पत्ति र विनाश हुन्छ।**

**तात्पर्य :** यहाँ स्पष्ट रूपमा के भनिएको छ भने, भगवान् यस भौतिक जगत्का सम्पूर्ण क्रियाकलापहरूबाट अलग्ग रहनुभएर पनि यसका परमनिर्देशक उहाँ नै हुनुहुन्छ। भगवान् नै परमइच्छाशक्ति हुनुहुन्छ र यस जगत् निर्माणका पृष्ठभूमि हुनुहुन्छ तर यसको व्यवस्थापनको सञ्चालन भौतिक प्रकृतिले गर्दछिन्। *भगवद्गीतामा* भगवान् श्रीकृष्णले भन्नुभएको छ—"संसारमा जति पनि जीवात्माहरू छन्, योनिहरू छन् ती सबैका पिता म हुँ" पिताले नै सन्तान उत्पत्तिका लागि माताका गर्भमा बीज प्रदान गर्दछ। भगवान् परमपिता हुनुहुन्छ। उहाँको दृष्टिपातले मात्र भौतिक प्रकृतिका गर्भमा सबै जीवात्माहरूको गर्भाधान हुन्छ अनि ती जीवात्माहरू आ-आफ्ना पूर्वजन्मका इच्छा र कर्मफलअनुसार विभिन्न प्रकारका रूप, आकार र योनिमा जन्म लिन पुग्दछन्। सबै जीवात्माहरूको जन्म भगवान्को दृष्टिपातबाट हुने भए पनि तिनले शरीर पाउने समयमा आ-आफ्ना पूर्वकर्मको फल तथा इच्छाअनुसार पाउने गर्दछन्, त्यसैले यो भौतिक सृष्टिप्रति प्रत्यक्ष रूपमा भगवान्को कुनै आसक्ति छैन। भगवान्ले प्रकृतिमाथि दृष्टिपात गर्नासाथ प्रकृति क्रियाशील भइहाल्दछिन् र तुरुन्त सम्पूर्ण कुराको सृष्टि हुन थाल्दछ। प्रकृतिमाथि दृष्टिपात गर्नुलाई भगवान्का तर्फबाट हुने क्रियाशीलता माने पनि जगत्को सृष्टि प्रक्रियासँग उहाँको प्रत्यक्ष सरोकार छैन। स्मृतिमा यससम्बन्धी एउटा उदाहरण दिइएको छ— मानौँ कसैका अगाडि एउटा सुगन्धित फूल विद्यमान छ। मानिसको घ्राणशक्ति (सुँघ्नेशक्ति) ले उक्त फूलको सुगन्धलाई अनुभव गर्दछ, तैपनि त्यो सुगन्ध र फूल एक अर्काबाट अनासक्त छन्। भगवान् र भौतिक जगत्का बीचमा पनि ठीक यस्तै किसिमको सम्बन्ध छ। यथार्थमा यो भौतिक जगत्सँग भगवान्को कुनै प्रयोजन छैन तापनि उहाँले आफ्नो दृष्टिपात (हेराइ) द्वारा यसको सृजना गर्नु हुन्छ। सारांशमा भन्दा भगवान्को अध्यक्षताबिना प्रकृतिले केही पनि गर्न सक्दैन, तैपनि भगवान् सम्पूर्ण भौतिक क्रियाकलापबाट पूर्णतया पृथक् र अनासक्त हुनुहुन्छ।

**अवजानन्ति मां मूढा मानुषीं तनुमाश्रितम् ।**
**परं भावमजानन्तो मम भूतमहेश्वरम् ॥ ११॥**

**अवजानन्ति** — उपहास गर्दछन्; **माम्** — मलाई; **मूढाः** — मूर्खहरू; **मानुषीम्** — मानिसको; **तनुम्** — शरीर; **आश्रितम्** — धारण गरेर; **परम्** — दिव्य; **भावम्** — स्वभावलाई; **अजानन्तः** — नजानेर; **मम** — मेरो; **भूत** — हरेक वस्तुका; **महा ईश्वरम्** — परमस्वामी।

**म मनुष्य रूपमा अवतीर्ण हुँदा मूर्खहरूले मेरो उपहास गर्दछन्। तिनीहरूले म परमेश्वरको दिव्य स्वभावलाई बुझ्दैनन्।**

**तात्पर्य :** यस अध्यायका पूर्ववर्ती श्लोकहरूको व्याख्याबाट के स्पष्ट भइसकेको छ भने, भगवान् मानिसजस्तो बनेर अवतरित हुनुभए पनि उहाँ साधारण मानिस हुनु हुन्न। सम्पूर्ण विश्वब्रह्माण्डको सृष्टि, पालन र संहार गर्ने भगवान्लाई एउटा मानिस मात्र मान्न सकिँदैन। तैपनि धेरै मूर्खहरू भगवान् श्रीकृष्णलाई एउटा शक्तिशाली मानिस मात्र ठान्छन्, त्योभन्दा बढी होइन। वास्तवमा श्रीकृष्ण नै परमपरमेश्वर हुनुहुन्छ। ब्रह्मसंहितामा पनि यसैको पुष्टि गर्दै भनिएको छ— **ईश्वरः परमः कृष्णः** अर्थात्, कृष्ण नै परमेश्वर हुनुहुन्छ।

ईश्वरको अर्थ नियन्त्रक (स्वामी) हो। त्यस्ता ईश्वरहरू धेरै छन् र प्रत्येक ईश्वर एक अर्कोभन्दा ठुलो देखिन्छन्। जुनसुकै सांसारिक कामहरूमा पनि एउटा समान्य व्यवस्थापन हुन्छ। व्यवस्था गर्नका लागि कोही न कोही व्यवस्थापक वा निर्देशक पनि हुन्छन। ती निर्देशकमाथि सचिव हुन्छन्। सचिवभन्दा माथि मन्त्री हुन्छन् र त्यसभन्दा माथि राजा वा राष्ट्रपति हुन्छन्। यिनीहरू सबै प्रशासक वा नियन्त्रक हुन् तर पनि एउटा अर्काको नियन्त्रण वा अधीनमा हुन्छ। ब्रह्मसंहितामा भनिएको छ— भगवान् श्रीकृष्ण सबैभन्दा माथिका परमनियन्त्रक हुनुहुन्छ। भौतिक र आध्यात्मिक दुवै क्षेत्रमा निःसन्देह धेरै नियन्त्रकहरू हुन्छन् तर ती सबैका परमनियन्त्रक हुनुहुन्छ भगवान् श्रीकृष्ण। **ईश्वरः परमः कृष्णः** उहाँको शरीर सच्चिदानन्दमय छ, अभौतिक छ।

यसभन्दा पहिलेका श्लोकहरूमा जुन आश्चर्यजनक कार्यहरूको वर्णन गरिएको छ, त्यस्ता कार्यहरू भौतिक शरीरद्वारा सम्पन्न हुन सक्दैनन्। भगवान्को शरीर शाश्वत छ, आनन्दमय छ र ज्ञानमय छ। भगवान् श्रीकृष्ण सामान्य मानिस हुनु हुन्न तैपनि मूर्खहरू एउटा मानिसजस्तो ठानेर उहाँको उपहास गर्दछन्। उहाँको शरीरलाई यहाँ **मानुषीम्** भनिएको छ, किनभने उहाँले यहाँ मानिसले जस्तै काम गर्नुभएको छ। उहाँ अर्जुनका मित्र र कुरुक्षेत्रका युद्धभूमिमा संलग्न एउटा राजनीतिक व्यक्तिजस्ता देखिनु हुन्छ। विभिन्न दृष्टिकोणबाट हेर्दा उहाँलाई साधारण मानिसले जस्तै काम गरिरहेको देखिन्छ तर यथार्थमा उहाँको शरीर सच्चिदानन्दमय छ। वैदिक भाषामा पनि यसको पुष्टि गरिएको छ। गोपालतापिनी उपनिषद्मा उहाँलाई **सच्चिदानन्द रूपाय कृष्णाय** भनिएको छ। अर्थात्, सत्चित् आनन्दमय र परमज्ञानमय भगवान् श्रीकृष्णलाई मेरो प्रणाम छ भनिएको छ। वैदिक भाषामा अन्यत्र पनि यस्ता वर्णनहरू छन्, जहाँ भनिएको छ— **तम् एकम् गोविन्दम्** अर्थात्, हजुर नै इन्द्रियहरूका र गाईहरूका आनन्ददाता हुनुहुन्छ र हजुर नै **सच्चिदानन्द विग्रह** हुनुहुन्छ।

यसरी भगवान् श्रीकृष्णको शरीर दिव्य गुणहरूले युक्त आनन्दमय र ज्ञानमय हुँदाहुँदै पनि तथाकथित विद्वान्हरू र *भगवद्गीताका* टीकाकारहरू उहाँलाई सामान्य मानिस मानेर उपहास गर्दछन्। चाहे कुनै मानिस आफ्नो पूर्वजन्मको पुण्यकर्मले गर्दा विद्वान् तथा विशिष्ट व्यक्ति बन्नपुगेको होस् तैपनि भगवान् श्रीकृष्णका बारेमा यस्तो धारणा हुनुलाई उसको अज्ञानता नै मान्नु पर्दछ। त्यस्तो व्यक्ति मूर्ख मानिसका लागि योग्य हुन्छ, किनभने मूर्खले मात्रै कृष्णलाई सामान्य मानिस मान्दछ। श्रीकृष्णका गोपनीय क्रियाकलाप तथा विभिन्न शक्तिहरूको जानकारी नभएका मूर्खले मात्रै उहाँलाई एउटा साधारण व्यक्ति ठान्दछ। श्रीकृष्णको शरीर आनन्द र परिपूर्ण ज्ञानको प्रतीक हो भन्ने कुरा पनि तिनलाई थाहा हुँदैन। वास्तवमा श्रीकृष्ण प्रत्येक वस्तुका स्वामी हुनुहुन्छ र उहाँ जोसुकैलाई पनि तुरून्त मुक्ति प्रदान गर्न सक्नु हुन्छ। तथाकथित विद्वान् मूर्खहरूले भगवान् श्रीकृष्णका यति धेरै दिव्य गुणहरूको जानकारी नभएरै उहाँको उपहास गर्नेगरेका हुन्।

यस भौतिक जगत्मा भगवान्को अवतरण हुनु भनेको भगवान्की अन्तरङ्गा शक्तिको अभिव्यक्ति हो। यो कुरा मूर्खहरू बुझ्दैनन्। भगवान् भौतिक शक्तिका स्वामी हुनुहुन्छ। भगवान्ले **मम माया दुरत्यया** भन्नुभएको छ। भौतिक शक्ति अति नै बलवान् छ, तैपनि त्यो शक्ति भगवान्को अधीनमा रहेको हुनाले भगवान्का शरणमा पर्ने व्यक्ति उक्त भौतिक शक्तिको नियन्त्रणबाट सजिलै पार हुन सक्दछ। यस कुराको व्याख्या धेरै ठाउँमा गरिसकिएको छ। यदि कुनै जीवात्मा भगवान्का चरणमा समर्पित हुन्छ मायाशक्तिको प्रभावबाट ऊ सजिलै मुक्त हुन्छ। सम्पूर्ण दृश्य जगत्को सृजन, पालन र संहार गर्ने भगवान्ले हामीको जस्तो शरीर कसरी धारण गर्न सक्नु हुन्छ। त्यसैले भगवान् श्रीकृष्णका बारेमा राखिने यस किसिमको धारणा मूर्खतापूर्ण हो। एउटा सामान्य व्यक्तिका रूपमा प्रकट हुने भगवान् श्रीकृष्ण परमाणुदेखि लिएर सम्पूर्ण विराट ब्रह्माण्डको नियन्त्रक बन्न कसरी सक्नु हुन्छ भन्ने विषय पनि मूर्ख मानिसले बुझ्न सक्दैनन्। **बृहत्तम र सूक्ष्मतम** तिनीहरूका विचार शक्तिभन्दा परका कुरा हुन्, त्यसैले तिनीहरू एउटा मानिसको जस्तो रूप लिएको व्यक्तिले एकैचोटि अनन्त र अणु दुवैलाई आफ्ना वशमा लिएर कसरी नियन्त्रण गर्न सक्दछ भन्ने कल्पना गर्न सक्दैनन्। भगवान् सीमित र असीमित दुवैलाई नियन्त्रण गर्नु हुन्छ, तैपनि स्वयम् आफू यस जगत्भन्दा अलग्ग रहनु हुन्छ, उहाँ अचिन्त्य दिव्य शक्तिले युक्त हुनुहुन्छ अर्थात् उहाँ योग-ऐश्वर्यले सम्पन्न हुनुहुन्छ। त्यसैले उहाँ सीमित र असीमित जगत्लाई सँगसँगै आफ्नो नियन्त्रणमा राख्न सक्नु हुन्छ र यी सबैबाट अलग्ग भएर बस्न पनि सक्नु हुन्छ। भगवान् श्रीकृष्ण कसरी

एउटा सामान्य मानिसजस्तै बनेर प्रकट हुनुहुन्छ र यत्रो सीमित तथा असीमित जगत्लाई कसरी नियन्त्रण गर्नु हुन्छ भन्ने कुरा उहाँका भक्तहरूले मात्र बुझ्न सक्दछन्। मूर्खहरू यस्तो कुराको कल्पनासम्म पनि गर्न सक्दैनन्। भक्तहरूका लागि श्रीकृष्ण परमपरमेश्वर हुनुहुन्छ, त्यसैले भक्तहरू पूर्णतया उहाँमा समर्पित हुन्छन् र कृष्णभावनामा लाग्दछन् अर्थात् भगवान् श्रीकृष्णका भक्तिसेवामा संलग्न हुन्छन्।

मानिसका रूपमा भगवान्को अवतरणसम्बन्धी विषयलाई लिएर निराकारवादीहरू र साकारवादीहरूबीच धरैँ मतभेदहरू छन्। तर, कृष्ण-विज्ञानको जानकारी दिने आधिकारिक ग्रन्थहरू *भगवद्गीता* र *श्रीमद्भागवत्को* अध्ययन गर्दा हामी श्रीकृष्ण स्वयम् भगवान् हुनुहुन्छ भन्ने बुझ्दछौँ। यस पृथ्वीमा एउटा साधारण मानिसजस्तो बनेर प्रकट हुनुभएको भए पनि भगवान् श्रीकृष्ण साधारण मानिस मात्र हुनु हुन्न। *श्रीमद्भागवत्को* प्रथम स्कन्धको पहिलो अध्यायमा शौनकादि ऋषिहरूले भगवान् श्रीकृष्णका क्रियाकलापहरूका सम्बन्धमा प्रश्न गरेका छन्। त्यहाँ भनिएको छ—

*कृतवान् किल कर्माणि सह रामेण केशवः ।*
*अतिमर्त्यानि भगवान् गूढ कपटमानुषः ॥*

अर्थात्, भगवान् श्रीकृष्ण मानिसजस्तै बनेर बलरामका साथमा खेल्नुभयो र उहाँले गोपनीय रूपमा रहेर विभिन्न अतिमानवीय लीलाहरू गर्नुभयो। भगवान् मानिसका रूपमा प्रकट हुनुभयो र उहाँको मानवीय रूपले मूर्खहरूलाई मोहित बनाएको छ। भगवान् श्रीकृष्णले यस धर्तीमा उपस्थित भएर जे जस्ता आश्चर्यजनक कार्यहरू सम्पन्न गर्नुभयो, त्यस्तो काम एउटा सामान्य मानिसले कहिल्यै गर्न सक्दैन। भगवान् श्रीकृष्ण आफ्ना पिता-माता वसुदेव-देवकीका अगाडि प्रकट हुँदा चार हातसहित भएर देखिनुभएको थियो। अनि वसुदेव-देवकीको स्तुति-प्रार्थनापछि उहाँ फेरि साधारण बालकका रूपमा परिवर्तित हुनुभयो। भागवत् (१०.३.४६) मा भनिएको छ— **बभूव प्राकृतः शिशुः** अर्थात् भगवान् श्रीकृष्ण तत्काल एउटा साधारण मानिस वा साधारण बालकजस्तो बन्नुभयो। सामान्य बालकका रूपमा भगवान्को प्रकटीकरण पनि उहाँको दिव्य शरीरको एउटा रूप हो भन्ने सङ्केत पनि यहाँ गरिएको छ। यस प्रकारको वर्णन *भगवद्गीताको* एघारौँ अध्यायमा पनि पाइन्छ। अर्जुनले भगवान् श्रीकृष्णलाई चतुर्बाहु रूपमा देख्नसकूँ भनेर प्रार्थना गरेका छन् **तेनैव रूपेण चतुर्भुजेन।** अर्जुनको प्रार्थनाअनुसार चतुर्बाहु रूपमा प्रकट भएपछि भगवान् श्रीकृष्णले फेरि उही आफ्नो वास्तविक मानिसको जस्तो रूप **मानुषम्**

**रूपम्** धारण गर्नुभयो। अवश्य नै भगवान्का यी विविध रूपहरू एउटा सामान्य मानिसका जस्ता छैनन्।

भगवान् श्रीकृष्णको उपहास गर्ने तथा मायावादी दर्शनबाट प्रभावित कतिपय व्यक्तिहरू श्रीकृष्णलाई एउटा सामान्य मानिस सिद्ध गर्नका लागि *श्रीमद्भागवत्को* निम्नलिखित श्लोक उद्धृत गर्दछन्—**अहं सर्वेषु भूतेषु भूतात्मावस्थितः सदा** अर्थात्, परमेश्वर प्रत्येक जीवात्मामा उपस्थित हुनुहुन्छ। यो श्लोकको अर्थ भगवान् श्रीकृष्णको उपहास गर्ने अनधिकारिक व्यक्तिहरूको व्याख्याबाट होइन, जीव गोस्वामी तथा विश्वनाथ चक्रवर्ती ठाकुर जस्ता वैष्णव आचार्यहरूले गरेको व्याख्याबाट ग्रहण गर्नु पर्दछ। यो श्लोकको टीकामा जीव गोस्वामी भन्नु हुन्छ—परमात्मा भन्नु श्रीकृष्णको विस्तारित रूप हो, अर्थात् श्रीकृष्ण परमात्माका रूपमा विस्तारित भएर प्रत्येक चर तथा अचर प्राणीहरूका हृदयमा निवास गर्नु हुन्छ। मन्दिरमा स्थापना गरिएको भगवान्को अर्चाविग्रह (मूर्ति) लाई मात्र विशेष ध्यान दिने तर अन्य प्राणीहरूलाई तिरस्कार गर्ने नवदीक्षित भक्तले मन्दिरमा गएर भगवान्का विग्रहको पूजा गर्नु अर्थहीन हुन्छ। भगवान्का भक्तहरू तीन प्रकारका छन्। माथि उल्लेख गरिएको नवदीक्षित भक्त सबैभन्दा तल्लो श्रेणी हो। यी नवदीक्षित भक्तहरू मन्दिरका मूर्तिहरूमा अरू भक्तले भन्दा विशेष ध्यान दिन्छन्। त्यसैले विश्वनाथ चक्रवर्ती ठाकुरले यस प्रकारको मानसिकतामा सुधार ल्याउनुपर्ने चेतावनी दिनुभएको छ। भक्तले परमात्माका रूपमा हरेकका हृदयमा भगवान् श्रीकृष्णको उपस्थिति हुनेहुनाले प्रत्येक व्यक्ति भगवान्को एउटा साकार रूप वा मन्दिर हो भन्ने देख्नु पर्दछ। अतः जसरी भगवान्को मन्दिरप्रति सम्मान गरिन्छ, त्यसरी नै हरेक व्यक्तिभित्र परमात्माको बास हुन्छ भन्ने ठानेर सबैलाई राम्रो किसिमले सम्मान गर्नु पर्दछ। प्रत्येक व्यक्तिलाई समुचित सम्मान दिइनु पर्दछ तथा कसैको पनि अपमान र उपेक्षा गर्नु हुँदैन।

मन्दिर वा मूर्तिपूजाको उपहास गर्ने धेरै निराकारवादीहरू छन्। तिनीहरू परमात्मा त सर्वव्यापक हुनुहुन्छ, त्यसैले मन्दिरको मूर्ति पूजामा मात्र किन आफूलाई सीमित राख्ने? भन्ने प्रश्न गर्दछन्। यदि ईश्वर सर्वत्र व्यापक हुनुहुन्छ भन्ने मान्ने भए मन्दिर वा मूर्तिमा पनि ईश्वर हुनुहुन्छ भन्ने कुरा किन नमान्ने? सगुण साकारवादी र निर्गुण निराकारवादीहरू यसरी निरन्तर झगडा गरिरहन्छन् तर कृष्णभावनामा लागेको भक्त यस्ता विवादमा नअल्झी श्रीकृष्णलाई सर्वव्यापी भगवान् मान्दछ। यस कुरालाई ब्रह्मसंहिताले पनि पुष्टि गरेको छ। हुनत गोलोक वृन्दावन उहाँको निजी धाम भएकाले उहाँ ती धाममा नित्य निवास गर्नु हुन्छ र सँगसँगै आफ्ना शक्तिका विभिन्न अभिव्यक्तिद्वारा

आफूलाई विभिन्न रूपमा विस्तारित गरेर भौतिक तथा आध्यात्मिक सृष्टिका हरेक अङ्ग-अङ्गमा र हरेक कण-कणमा सर्वव्यापक बन्नु हुन्छ।

**मोघाशा मोघकर्माणो मोघज्ञाना विचेतसः ।**
**राक्षसीमासुरीं चैव प्रकृतिं मोहिनीं श्रिताः ॥ १२ ॥**

**मोघ-आशा** — निष्फल आशा; **मोघकर्माणः** — निष्फल सकाम कर्म; **मोघज्ञानाः** — निष्फल ज्ञान; **विचेतसः** — मोहग्रस्त; **राक्षसीम्** — राक्षसी; **आसुरीम्** — नास्तिक; **च** — तथा; **एव** — निश्चय नै; **प्रकृतिम्** — प्रकृति (स्वभाव); **मोहिनीम्** — मोहित पार्ने; **श्रिताः** — शरण लिएको।

**यसरी मोहग्रस्त भएका व्यक्तिहरू नास्तिक एवं आसुरी दृष्टिकोणतर्फ आकर्षित हुन्छन्। यस्तो भ्रमित अवस्थामा तिनीहरूको मुक्ति पाउने आशा, सकाम कर्म र ज्ञानको विकास सबै निष्फल हुन्छन्।**

**तात्पर्य :** धेरै भक्तहरू यस्ता पनि छन् जो आफूलाई कृष्णभावनामा लागेको देखाउने अभिनय गर्दछन् तर हृदयले भगवान् श्रीकृष्णलाई परमब्रह्म र भक्तिमय सेवामा वा परमसत्यका रूपमा स्वीकार गर्दैनन्। यस्ता व्यक्तिले कहिल्यै पनि भक्तिको परमफल चाख्न पाउँदैनन् अर्थात् यस्ता मानिसहरू कहिल्यै भगवद्धाम (वैकुण्ठ) जान पाउँदैनन्। यसै गरी पवित्र सकाम कर्ममा लागेका र अन्त्यमा भवबन्धनबाट छुट्कारा पाई मुक्ति प्राप्त गर्ने आशा लिएका व्यक्तिहरू पनि भगवान् कृष्णको उपहास गर्ने हुनाले कहिल्यै सफल हुँदैनन्। अर्को शब्दमा भन्दा भगवान् श्रीकृष्णको उपहास गर्ने व्यक्तिलाई आसुरी वा नास्तिक ठान्नु पर्दछ। *भगवद्गीताको* सातौँ अध्यायमा त्यस्ता आसुरी दुष्टहरू कहिल्यै भगवान् श्रीकृष्णका शरणमा जाँदैनन् भनिएको छ। अतः परमसत्यसम्म पुग्न गरिएका तिनका मानसिक चिन्तनले तिनलाई जीवात्मा र भगवान् श्रीकृष्ण एउटै वा समान हुन् भन्ने झूटो निष्कर्षमा पुऱ्याउँदछ। यस किसिमको गलत धारणाले गर्दा तिनीहरू के सोच्दछन् भने, मानिसको शरीर अहिले भौतिक प्रकृतिद्वारा ढाकिएको छ तर यो स्थूल भौतिक शरीरबाट मुक्त हुनासाथ ऊ स्वयम् र ईश्वरमा कुनै भिन्नता हुँदैन। भगवान् श्रीकृष्णसँग एक हुने यो प्रयास भ्रमका कारणले निष्फल हुन्छ। आध्यात्मिक ज्ञानको यस प्रकारको आसुरी तथा नास्तिक विकास सधैँ व्यर्थ प्रमाणित हुन्छ। प्रस्तुत श्लोकले यही कुराको सङ्केत गरेको छ। यस्ता व्यक्तिले गर्ने वेदान्तसूत्र तथा उपनिषद् जस्ता वैदिक साहित्यसम्बन्धी ज्ञानको विकास सधैँ निष्फल हुन्छ। अतः भगवान् श्रीकृष्णलाई एउटा साधारण मानिस ठान्नु घोर अपराध हो। जसले यस्तो ठान्दछ निश्चय नै त्यो व्यक्ति भ्रमित छ, किनभने उसले

भगवान् श्रीकृष्णको शाश्वत स्वरूपलाई बुझ्न सक्दैन। बृहद् विष्णुस्मृतिमा स्पष्ट भनिएको छ—

*यो वेत्ति भौतिकं देहं कृष्णस्य परमात्मनः ।*
*स सर्वस्मात् बहिष्कार्यः श्रौतस्मार्तविधानतः ।*
*मुखं तस्यावलोक्यापि सचैलं स्नानमाचरेत् ॥*

जसले भगवान् श्रीकृष्णको शरीरलाई भौतिक ठान्दछ त्यसलाई श्रुति र स्मृतिका सम्पूर्ण अनुष्ठानहरूबाट वञ्चित गरिदिनु पर्दछ। यदि कसैले झुक्किएर त्यस्ता व्यक्तिको मुख हेरे पनि त्यो देख्ने व्यक्तिले उक्त दोषबाट बच्न लुगाहित गंगास्नान गर्नु पर्दछ। भगवान्को ईर्ष्या गर्ने व्यक्तिहरू कृष्णको उपहास गर्दछन्। तिनका भाग्यमा जन्मजन्मान्तरसम्म नास्तिक तथा आसुरी योनिमा जान लेखिएको छ भन्ने बुझ्नु पर्दछ। तिनीहरूको वास्तविक ज्ञान सधैँ भ्रमपूर्ण नै रहन्छ र विस्तारै तिनीहरू सृष्टिको गहन अन्धकारमा पुग्दछन्।

**महात्मानस्तु मां पार्थ दैवीं प्रकृतिमाश्रिताः ।**
**भजन्त्यनन्यमनसो ज्ञात्वा भूतादिमव्ययम् ॥ १३ ॥**

**महा-आत्मानः** — महान् आत्माहरू; **तु** — तर; **माम्** — मलाई; **पार्थ** — हे पृथापुत्र !; **दैवीम्** — दैवी; **प्रकृतिम्** — प्रकृति; **आश्रिताः** — शरण लिएको; **भजन्ति** — सेवा गर्दछन्; **अनन्यमनसः** — अविचलित मनले; **ज्ञात्वा** — जानेर; **भूत** — सृष्टिको; **आदिम्** — मूल उद्गम; **अव्ययम्** — अविनाशी।

**हे पार्थ! मोहमुक्त महात्माहरू दैवी प्रकृतिका संरक्षणमा हुन्छन्। तिनीहरू पूर्णतः भक्तिमय सेवामा लागेका हुन्छन्, किनभने तिनले मलाई नै सृष्टिका आदिकारण र अविनाशी भगवान् ठान्दछन्।**

**तात्पर्य :** यस श्लोकमा महात्माको स्पष्ट वर्णन गरिएको छ। दैवी प्रकृतिमा अवस्थित हुनु महात्माको पहिलो लक्षण हो। महात्मा भौतिक प्रकृतिको अधीनमा हुँदैनन्। यस्तो कसरी हुन्छ? यसको व्याख्या सातौँ अध्यायमा गरिएको छ। जुन व्यक्ति भगवान् श्रीकृष्णमा समर्पित हुन्छ त्यो तत्काल भौतिक प्रकृतिको नियन्त्रणबाट मुक्त हुन्छ। यही नै महात्माको योग्यता हो। आफ्नो आत्मालाई भगवान्का चरणमा समर्पित गर्नासाथ व्यक्ति भौतिक प्रकृतिको नियन्त्रणबाट मुक्त हुन्छ। यसको प्राथमिक सूत्र यही हो। तटस्था शक्ति भएको हुनाले जीवात्मा भौतिक प्रकृतिको नियन्त्रणबाट मुक्त हुनासाथ आध्यात्मिक प्रकृतिको मार्गदर्शनमा पुग्दछ। आध्यात्मिक प्रकृतिको मार्गदर्शनलाई नै दैवी

प्रकृति भनिन्छ। भगवान्मा समर्पित भएर जब कसैको यसरी प्रगति हुन्छ त्यसले महात्मा अर्थात् महान् आत्माको पद प्राप्त गर्दछ।

महात्माले भगवान् श्रीकृष्णभन्दा बाहेक कुनै वस्तुमा पनि ध्यान दिँदैन, किनभने श्रीकृष्ण नै सबै कारणहरूका पनि कारण परमपुरुष हुनुहुन्छ भन्ने कुरा उसले राम्ररी बुझिसकेको हुन्छ। यसमा कुनै शंका छैन। यस्ता महात्माले अन्य महात्माहरू वा शुद्ध भक्तहरूका सत्सङ्गबाट पनि आफ्नो उन्नति गर्दछन्। शुद्ध भक्तहरू चतुर्बाहु महाविष्णु आदि श्रीकृष्णका अन्य स्वरूपहरूप्रति पनि आकर्षित हुँदैनन्। उनीहरू केवल दुई भुजाधारी भगवान् श्रीकृष्णको स्वरूपप्रति मात्र आकर्षित हुन्छन्। श्रीकृष्णका अन्य रूपहरूप्रति पनि उनीहरूको आकर्षण हुँदैनन्। उनीहरूको कुनै सरोकार नै हुँदैन। यस्ता महात्माहरू कृष्णभावनामा रहेर केवल भगवान् श्रीकृष्णको ध्यान गर्दछन्। तिनीहरू सधैँ कृष्णभावनाभावित भएर भगवान्को अविचल सेवामा लागिरहन्छन्।

**सततं कीर्तयन्तो मां यतन्तश्च दृढव्रताः ।**
**नमस्यन्तश्च मां भक्त्या नित्ययुक्ता उपासते ॥ १४ ॥**

**सततम्** — सधैँ; **कीर्तयन्तः** — कीर्तन गर्दै; **माम्** — मेरो; **यतन्तः** — पूर्ण प्रयास गर्दै; **च** — पनि; **दृढव्रताः** — सङ्कल्पपूर्वक; **नमस्यन्तः** — नमस्कार गर्दै; **च** — तथा; **माम्** — मलाई; **भक्त्या** — भक्तिपूर्वक; **नित्ययुक्ताः** — निरन्तर संलग्न रहेर; **उपासते** — पूजा गर्दछन्।

**यी महात्माहरू मेरो महिमागान गर्दै, दृढ सङ्कल्पका साथ मलाई प्राप्त गर्ने प्रयास गर्दै, र मलाई दण्डवत् प्रणाम गर्दै सधैँ भक्तिपूर्वक मेरो उपासना गर्दछन्।**

**तात्पर्य :** साधारण मानिसलाई रबरको छाप लगाएर महात्मा बनाउन सकिँदैन। महात्माका लक्षणहरूको वर्णन यहाँ गरिएको छ। सधैँ परमपुरुष भगवान् श्रीकृष्णको महिमागानमा संलग्न रहनु महात्माको पहिलो लक्षण हो। भगवान्को गुणानुवादमा लागिरहनुबाहेक उसको अरू काम हुँदैन। अर्को शब्दमा ऊ निराकारवादी हुँदैन। जहाँसम्म महिमागान गर्ने कुरा छ, मानिसले निरन्तर भगवान्का पवित्र नाम, उहाँको शाश्वत रूप, उहाँका दिव्य गुण र उहाँका असाधारण लीलाहरूको प्रशंसा गर्नु पर्दछ। यिनै विषयका महिमाको कीर्तन उसले गर्नु पर्दछ। सधैँभरि भगवान्मा आसक्त हुनु महात्माको अर्को गुण हो।

*भगवद्गीतामा* भगवान्को निराकार रूप वा ब्रह्मज्योतिमा आसक्त हुने व्यक्तिलाई महात्मा भनिएको छैन। आगामी श्लोकमा त्यस्ता व्यक्तिलाई अर्कै

किसिमले चर्चा गरिने छ। *श्रीमद्भागवत्मा* उल्लेख भएअनुसार महात्मा सधैँ विभिन्न भक्तिमय कार्यहरू — भगवान्का बारेमा सुन्ने, भन्ने **श्रवण कीर्तन** आदिमा व्यस्त रहन्छ। श्रवण र कीर्तन देवता वा मानिसका बारेमा नभएर भगवान् विष्णुका बारेमा हुनु पर्दछ। भगवान् विष्णुको स्मरण, नाम जप र उहाँका लीलाहरूको श्रवण नै भक्ति हो। यस किसिमको महात्मा पाँचवटा दिव्य रसहरूमध्ये कुनै एउटा रसमा रहेर भगवान्का सान्निध्यको परमफल प्राप्त गर्न दृढ सङ्कल्पित हुन्छ। त्यो सफलता प्राप्त गर्नका लागि उसले आफ्नो शरीर, मन, वचन सबै कुरा परमपुरुष श्रीकृष्णका सेवामा समर्पण गर्दछ। यसैलाई पूर्ण कृष्णभावना भनिन्छ।

भक्तिमार्गमा केही यस्ता निश्चित क्रियाकलापहरू हुन्छन् जसलाई व्रत भनिन्छ, जस्तै — एकादशी, भगवान्को आविर्भाव दिवस (जन्माष्टमी) आदि निश्चित दिनहरूमा उपवास बस्नु इत्यादि। भगवान्को सान्निध्य प्राप्त गर्नका लागि वैकुण्ठलोकमा प्रवेश गर्नचाहने व्यक्तिहरूका लागि महान् आचार्यहरूले यस्ता विधिविधानहरू दिनुभएको छ। महात्मा अर्थात् महान् आत्माहरूले यी विधिविधानहरूको कडाइका साथ पालन गर्दछन्। त्यसैले उनीहरूले चाहेको फल पनि प्राप्त गर्दछन्।

यसै अध्यायको दोस्रो श्लोकमा भनिएको छ — यो भक्तिमार्ग वा भक्तियोग सरल छ र साथै यसलाई सजिलैसँग वा रमाइलोसँग सम्पन्न गर्न सकिन्छ। यसका लागि कुनै कठिन तपस्या गर्नुपर्ने आवश्यकता छैन। संन्यासी बनेर, ब्रह्मचारी भएर, गृहस्थमा रहेर र जुनसुकै अवस्थामा संसारको जुनसुकै ठाउँमा रहेर पनि मानिसले सुयोग्य गुरुका निर्देशनमा भक्तिमय जीवन बिताउन सक्दछ। यसरी कुनै पनि व्यक्तिले भगवान्को भक्ति गर्न सक्दछ र वास्तविक महात्मा बन्न सक्दछ।

**ज्ञानयज्ञेन चाप्यन्ये यजन्तो मामुपासते ।**<br>**एकत्वेन पृथक्त्वेन बहुधा विश्वतोमुखम् ॥ १५ ॥**

**ज्ञानयज्ञेन** — ज्ञानको विकासद्वारा; **च** — पनि; **अपि** — निश्चय नै; **अन्ये** — अरूहरू; **यजन्तः** — यज्ञ गर्दै; **माम्** — मलाई; **उपासते** — पूजा गर्दछन्; **एकत्वेन** — एकत्व भावले; **पृथक्त्वेन** — द्वित्व भावले (अनेकत्व भावले); **बहुधा** — विभिन्न प्रकारले; **विश्वतःमुखम्** — विश्वरूपमा।

**ज्ञानको विकासरूपी यज्ञ, अर्थात् ज्ञानयज्ञमा लागेका अन्य भक्तहरूमध्ये कसैले द्वैतभावमा, कसैले अद्वैतभावमा र कसैले विश्वरूपभावमा विभिन्न प्रकारले मेरो उपासना गर्दछन्।**

**तात्पर्य :** यो श्लोक पहिलेका श्लोकहरूको सारांश हो। भगवान्, अर्जुनसँग भन्नु हुन्छ, जो व्यक्ति शुद्ध कृष्णभावनामा स्थित छ र जसले श्रीकृष्णबाहेक अरू केही जान्दैन, त्यस्ता व्यक्तिलाई महात्मा भनिन्छ। महात्माको ठीक स्तरमा नपुगिसकेका तर विभिन्न किसिमले भगवान् श्रीकृष्णका उपासक बनेका व्यक्तिहरूको चर्चा पनि यहाँ गरिएको छ। तीमध्ये आर्त, जिज्ञासु, अर्थार्थी र ज्ञानीको वर्णन पहिले नै गरिसकिएको छ र यसभन्दा तल्ला श्रेणीका भक्तहरूको चर्चा यहाँ गरिन्छ। यी तल्ला श्रेणीका भक्तहरूलाई तीन भागमा वर्गीकरण गरिएको छ— १. जीवात्मा र परमात्मा एकै हो र परमात्मा मभित्र छन् भनी आफ्नो पूजा गर्नेहरू, २. मनले भगवान्‌को कुनै रूपको कल्पना गर्ने र त्यसैको पूजा गर्नेहरू, ३. भगवान्‌लाई विश्वरूप मानेर त्यही विश्वरूप परमात्माको पूजा गर्नेहरू। उपर्युक्त तीन किसिमका भक्तहरूमध्ये सबैभन्दा निम्न श्रेणीका ती हुन् जो आफूलाई अद्वैतवादी ठान्दछन् र ईश्वरका रूपमा आफ्नो पूजा गर्दछन्। अहिले यस्ता किसिमका मानिसहरूको बाहुल्यता छ। यस्ता मानिसहरूले आफैँलाई परमेश्वर मान्दछन् र त्यही मानसिकताले स्वयम् आफ्नो पूजा गर्दछन्। यो पनि एक प्रकारको ईश्वर-पूजा हो, किनभने उनीहरूका विचारमा उनीहरू भौतिक शरीर नभएर अविनाशी आत्मा हुन्। यस्तै किसिमको भावको प्रधानता तिनीहरूमा पाइन्छ। साधारणतया निराकारवादीहरू यही विधिले भगवान्‌को उपासना गर्दछन्। अर्का किसिमका मानिसहरू पनि छन्, तिनीहरू देवताको उपासना गर्दछन्। उनीहरू आफ्ना कल्पनामा आउने रूपलाई भगवान्‌को रूप मानेर पूजा गर्दछन्। तेस्रो किसिमका व्यक्ति ती हुन् जसले यो भौतिक सृष्टिभन्दा पनि पर केही छ भन्ने कुरा सोच्न सक्दैनन्। उनीहरू यही भौतिक ब्रह्माण्डलाई नै परमजीव या परमसत्ता मान्दछन् र यसैको उपासना गर्दछन्, किनभने यो विश्वब्रह्माण्ड पनि भगवान्‌को एउटा रूप हो।

**अहं क्रतुरहं यज्ञः स्वधाहमहमौषधम् ।**
**मन्त्रोऽहमहमेवाज्यमहमग्निरहं हुतम् ॥ १६ ॥**

**अहम्** — म; **क्रतुः** — वैदिक अनुष्ठान; **अहम्** — म; **यज्ञः** — स्मृति यज्ञ; **स्वधा** — तर्पण पिण्ड; **अहम्** — म; **औषधम्** — जडीबुटी; **मन्त्रः** — दिव्य ध्वनि; **अहम्** — म; **अहम्** — म; **एव** — निश्चय नै; **आज्यम्** — घिउ; **अहम्** — म; **अग्निः** — आगो; **अहम्** — म; **हुतम्** — आहुति।

**तर म नै वैदिक अनुष्ठान हूँ, म नै देवयज्ञ हूँ र म नै पितृतर्पण हूँ। त्यसै गरी यज्ञमा पढिने मन्त्र, होमिने घिउ, यज्ञको अग्नि र हवन वा आहूति सबै मै हूँ।**

**तात्पर्य :** ज्योतिष्टोम आदि वैदिक यज्ञ पनि भगवान् श्रीकृष्ण नै हुनुहुन्छ, स्मृति शास्त्रमा उल्लेख गरिएका महायज्ञ पनि उहाँ नै हुनुहुन्छ। पितृहरूलाई खुसी गराउन पितृलोकका लागि दिइने तर्पण तथा पिण्ड आदि पनि भगवान् श्रीकृष्ण नै हुनुहुन्छ। एक प्रकारको औषधिका रूपमा चढाइने घिउ र यी वस्तु अर्पण गर्दा उच्चारण गरिने मन्त्रहरू पनि भगवान् श्रीकृष्ण नै हुनुहुन्छ। यज्ञमा अर्पण गरिने दुग्धपदार्थबाट बनेका परिकारहरू र आहूति दिइने अग्नि पनि भगवान् श्रीकृष्ण नै हुनुहुन्छ। अग्नि पनि पाँच तत्त्वहरूमध्ये एउटा भएकाले यसलाई श्रीकृष्णकै भिन्न शक्ति मानिन्छ। अर्को शब्दमा, वेदको कर्मकाण्ड भागमा उल्लेख गरिएका वैदिक यज्ञहरू पूर्णरूपले भगवान् श्रीकृष्ण नै हुनुहुन्छ। त्यसैले कृष्णभक्तिमा वा श्रीकृष्णका सेवामा लागेका व्यक्तिहरूलाई सम्पूर्ण वेदविहित यज्ञ अनुष्ठानहरू सम्पन्न गरेसरह ठानिन्छन्।

**पिताहमस्य जगतो माता धाता पितामहः ।**
**वेद्यं पवित्रमोंकार ऋक्साम यजुरेव च ॥ १७ ॥**

**पिता** — बाबु; **अहम्** — म; **अस्य** — यो; **जगतः** — संसारको; **माता** — आमा; **धाता** — आश्रय दाता; **पितामहः** — हजुर बुबा; **वेद्यम्** — जान्नयोग्य वा ज्ञेय; **पवित्रम्** — शुद्धतम्; **ओंकार** — ॐ अक्षर; **ऋक्** — ऋग्वेद; **साम** — सामवेद; **यजुः** — यजुर्वेद; **एव** — निश्चय नै; **च** — तथा।

**म यस ब्रह्माण्डको पिता, माता आश्रय दाता र पितामह पनि हूँ, म नै जान्नयोग्य ज्ञेय वस्तु तथा शुद्धिकारक ॐकार हूँ र ऋग्वेद, सामवेद अनि यजुर्वेद पनि मै हूँ।**

**तात्पर्य :** भगवान् श्रीकृष्णका शक्तिहरूको विभिन्न क्रियाकलापहरूद्वारा सम्पूर्ण चराचर विश्वब्रह्माण्डको उत्पत्ति हुन्छ। यस जगत्मा विभिन्न व्यक्ति वा जीवात्मासँग हामीले विकसित गर्ने सम्बन्ध भगवान् श्रीकृष्णको तटस्था शक्तिबाहेक अरू केही होइन। प्रकृतिको उक्त सृष्टिअन्तर्गत कुनै जीव हाम्रो पिता भएर, कुनै आमा भएर, कुनै हजुरबुबा भएर प्रकट हुन्छन्। वास्तवमा ती सबै भगवान् श्रीकृष्णका अंश हुन्। हाम्रा आमा-बुबा आदिका रूपमा देखापर्ने व्यक्तिहरू पनि भगवान् श्रीकृष्णबाहेक अरू कोही होइनन्। यो श्लोकमा प्रयोग भएको **धाता** शब्दको अर्थ स्रष्टा वा सृष्टिकर्ता हो। हाम्रा बुबा-आमा, हजुरबुबा-हजुरआमा मात्र होइन स्वयम् सृष्टिकर्ता पनि श्रीकृष्णका अंश हुन्। वास्तवमा सम्पूर्ण जीवात्माहरू भगवान् श्रीकृष्णका अंश भएका हुनाले प्रकारान्तरले ती सबै श्रीकृष्ण नै हुन्। सम्पूर्ण वेदहरूको लक्ष्य पनि

भगवान् श्रीकृष्णलाई नै जान्नु हो। हामीले वेदबाट जे कुरा जान्ने जिज्ञासा राख्दछौँ त्यो श्रीकृष्णलाई नै बुझ्ने दिशामा बढाइएको प्रगतिशील कदम हो। जुन विषयवस्तुले हाम्रो वास्तविक स्वरूपलाई शुद्ध र स्पष्ट पार्दछ, त्यो पनि भगवान् श्रीकृष्ण नै हुनुहुन्छ। वैदिक सिद्धान्तलाई बुझ्ने जिज्ञासा राख्ने व्यक्तिहरू पनि भगवान् श्रीकृष्णका अंश हुन्, अतः तिनीहरू पनि श्रीकृष्ण नै हुन्। वैदिक मन्त्रहरूमा आउने दिव्य ध्वनि **ॐ,** जसलाई प्रणव भनिन्छ, त्यो पनि भगवान् श्रीकृष्ण हुनुहुन्छ। ऋक्, यजु, साम र अथर्व यी चारै वेदका सबै ऋचाहरूमा त्यही प्रणव वा ॐकारको प्रधानता हुनेहुनाले तिनलाई पनि भगवान् श्रीकृष्ण नै ठान्नु पर्दछ।

**गतिर्भर्ता प्रभुः साक्षी निवासः शरणं सुहृत् ।**
**प्रभवः प्रलयः स्थानं निधानं बीजमव्ययम् ॥ १८ ॥**

**गतिः** — लक्ष्य; **भर्ता** — पालनकर्ता; **प्रभुः** — स्वामी; **साक्षी** — साक्षी; **निवासः** — धाम; **शरणम्** — शरण; **सुहृत्** — अत्यन्त घनिष्ठ मित्र; **प्रभवः** — सृष्टि; **प्रलयः** — संहार; **स्थानम्** — भूमि वा आधार; **निधानम्** — विश्रामस्थल; **बीजम्** — बीज; **अव्ययम्** — अविनाशी।

**म नै सबैको लक्ष्य हूँ, पालनकर्ता हूँ, स्वामी हूँ, साक्षी हूँ, धाम हूँ, शरण लिने ठाउँ हूँ र परममित्र हूँ। म नै सृष्टि र प्रलयको आधार हूँ, आश्रयस्थल हूँ र अविनाशी बीज पनि हूँ।**

**तात्पर्य :** गतिको अर्थ गन्तव्यस्थल हो, जहाँ हामी जान चाहन्छौँ। मानिसहरूलाई थाहा छैन तैपनि हाम्रो अन्तिम गन्तव्यस्थल भनेको भगवान् श्रीकृष्ण हुनुहुन्छ। जसले भगवान् श्रीकृष्णलाई जान्न खोज्दैन त्यो पथभ्रष्ट हुन्छ। त्यसको तथाकथित प्रगति या आंशिक हुन्छ या भ्रमपूर्ण हुन्छ। धेरै मानिसहरूले विभिन्न देवताहरूलाई आफ्नो लक्ष्य बनाएका हुन्छन्। कडाइका साथ कठिन-कठिन विधिविधान सम्पन्न गरेर तिनीहरू चन्द्रलोक, सूर्यलोक, इन्द्रलोक, महर्लोक इत्यादि विभिन्न लोकहरूमा पुग्दछन् तर यी सबै लोकहरू भगवान् श्रीकृष्णका सृष्टि हुन्। भगवान् श्रीकृष्णका रचना भएका हुनाले यी लोकहरू कृष्णमय पनि छन्, सँगसँगै श्रीकृष्णभन्दा पृथक् पनि छन्। यस्ता लोकहरू भगवान् श्रीकृष्णका शक्तिका अभिव्यक्ति हुन्, त्यसैले ती सबै कृष्णमय छन्। वास्तवमा यी लोकहरू भगवान् श्रीकृष्णको साक्षात्कार गर्ने दिशामा अगाडि बढ्ने सिँढी मात्र हुन्। भगवान् श्रीकृष्णका विभिन्न शक्तिहरूसम्म पुग्नुको अर्थ अप्रत्यक्ष रूपले श्रीकृष्णसम्म पुग्नु हो। मानिसले सीधै भगवान् श्रीकृष्णसम्म पुग्ने काम गर्नु पर्दछ। यसो गर्दा उसको समय र शक्तिको बचत हुन्छ। उदाहरणका लागि

यदि कुनै अग्लो घरको माथिल्लो तलामा पुग्नका लागि लिफ्टको सुविधा भए भने एक एक पाइला गर्दै सिँढीको बाटो किन जानु पर्‍यो ? हरेक कुरा भगवान् श्रीकृष्णका शक्तिमा आश्रित छ, श्रीकृष्णको आश्रय नपाएसम्म केही पनि रहन सक्दैन। भगवान् श्रीकृष्ण परमशासक हुनुहुन्छ, किनभने सबै कुरा श्रीकृष्णको हो र श्रीकृष्णको शक्तिमा प्रत्येक वस्तु निर्भर छ। हरेकका हृदयमा निवास गर्ने हुनाले भगवान् श्रीकृष्ण परमसाक्षी पनि हुनुहुन्छ। हाम्रो निवास, हाम्रो देश, हाम्रो ग्रह, जहाँ हामी बसेका छौँ, सबै भगवान् श्रीकृष्णको हो। श्रीकृष्ण आश्रयका पनि परमआश्रय हुनुहुन्छ त्यसैले आफ्नो रक्षाका लागि वा आफ्ना कष्टहरूको विनाशका लागि मानिसले भगवान् श्रीकृष्णको शरण लिनु पर्दछ। हामीले आफ्नो सुरक्षाका लागि जहाँ गएर आश्रय लिए पनि हाम्रो आश्रय कुनै जीवित शक्ति नै हुनु पर्दछ। भगवान् श्रीकृष्ण नै परमजीवात्मा हुनुहुन्छ। हाम्रो उत्पत्तिको स्रोत वा पिता श्रीकृष्ण हुनुभएकाले हाम्रा लागि श्रीकृष्णभन्दा असल मित्र र श्रीकृष्णभन्दा ठुलो शुभचिन्तक अर्को कोही पनि हुन सक्दैन। भगवान् श्रीकृष्ण नै सृष्टिका मूलस्रोत हुनुहुन्छ, र प्रलयपछिका परमआश्रय पनि उहाँ नै हुनुहुन्छ त्यसैले भगवान् श्रीकृष्ण सम्पूर्ण कारणहरूका पनि शाश्वत कारण हुनुहुन्छ, मूलकारण हुनुहुन्छ।

**तपाम्यहमहं वर्षं निगृह्णाम्युत्सृजामि च ।**
**अमृतं चैव मृत्युश्च सदसच्चाहमर्जुन ॥ १९ ॥**

**तपामि** — तपाउँदछु; **अहम्** — म; **अहम्** — म; **वर्षम्** — वर्षालाई; **निगृह्-णामि** — रोक्दछु; **उत्सृजामि** — पठाउँछु (छोड्दछु); **च** — तथा; **अमृतम्** — अमरत्व; **च** — र; **एव** — निश्चय नै; **मृत्युः** — मृत्यु; **च** — तथा; **सत्** — आत्मा; **असत्** — पदार्थ; **च** — र; **अहम्** — म; **अर्जुन** — हे अर्जुन।

**हे अर्जुन! मैले नै पृथ्वीलाई ताप प्रदान गर्दछु, वर्षा गराउँदछु अनि रोक्दछु। म अमर हूँ र साक्षात् मृत्यु पनि हूँ। आत्मा र पदार्थ दुवै ममा नै छन्।**

**तात्पर्य :** भगवान् श्रीकृष्णले आफ्ना विभिन्न शक्तिहरूद्वारा बिजुली तथा सूर्यका माध्यमले प्रकाश र ताप फैलाउनु हुन्छ। ग्रीष्म ऋतुमा भगवान् श्रीकृष्णले नै आकाशबाट हुने वर्षालाई रोक्नु हुन्छ र वर्षा ऋतुमा उहाँले नै अविरल वर्षा गराउनु हुन्छ। जुन शक्तिले हामीलाई जीवन प्रदान गरेको छ त्यो भगवान् श्रीकृष्ण नै हुनुहुन्छ र जुन शक्ति हाम्रो मृत्यु बनेर आउँदछ त्यो पनि भगवान् श्रीकृष्ण नै हुनुहुन्छ। श्रीकृष्णका यी विभिन्न शक्तिहरूको विश्लेषण गर्दा

हामीलाई के कुराको निश्चय हुन्छ भने, भगवान् श्रीकृष्णका लागि पदार्थ र आत्मामा कुनै अन्तर छैन। अर्को शब्दमा भन्दा, पदार्थ र आत्मा दुवै कुरा भगवान् श्रीकृष्ण नै हुनुहुन्छ। कृष्णभावनाको उच्च अवस्थामा पुगेपछि मानिसले यस किसिमको विभेद पाउँदैन। उसले हरेक वस्तुमा केवल भगवान् श्रीकृष्ण मात्रै देख्न थाल्दछ।

आत्मा र पदार्थ दुवै श्रीकृष्ण नै भएकाले सम्पूर्ण भौतिक तत्त्वहरू मिलेर बनेको यो विराट विश्वब्रह्माण्ड पनि भगवान् श्रीकृष्णको रूप हो र उहाँले नै दुई भुजाधारी श्यामसुन्दरका रूपमा वृन्दावनमा मुरली बजाउँदै लीला प्रदर्शन गर्नु हुन्छ।

**त्रैविद्या मां सोमपाः पूतपापा**
**यज्ञैरिष्ट्वा स्वर्गतिं प्रार्थयन्ते ।**
**ते पुण्यमासाद्य सुरेन्द्रलोक**
**मश्नन्ति दिव्यान्दिवि देवभोगान् ॥ २० ॥**

**त्रैविद्या** — तीनै वेदहरूका ज्ञाता; **माम्** — मलाई; **सोमपाः** — सोमरस पान गर्ने; **पूतपापाः** — पापबाट पवित्र भएका; **यज्ञैः** — यज्ञहरूका साथ; **इष्ट्वा** — पूजा गरेर; **स्वर्गतिम्** — स्वर्ग पाउनका लागि; **प्रार्थयन्ते** — प्रार्थना गर्दछन्; **ते** — तिनीहरू; **पुण्यम्** — पवित्र फल; **आसाद्य** — प्राप्त गरेर; **सुरेन्द्रलोकम्** — इन्द्रको लोक; **अश्नन्ति** — उपभोग गर्दछन्; **दिव्यान्** — अलौकिक; **दिवि** — स्वर्गमा; **देवभोगान्** — देवताहरूको आनन्दलाई।

**जो मानिस वेदहरूको अध्ययन र सोमरसको पान गर्दछन् तिनीहरू स्वर्गप्राप्तिको खोजी गर्दै अप्रत्यक्ष रूपले मेरो पूजा गर्दछन्। पाप कर्मबाट शुद्ध भएर तिनीहरू पवित्र इन्द्रलोकमा जन्मिन्छन् र त्यहाँ देवताहरूले जस्तै आनन्दको उपभोग गर्दछन्।**

**तात्पर्य :** यहाँ प्रयोग भएको **त्रैविद्या** शब्दले ऋग्, यजु र साम यी तीन वेदलाई बुझाउँदछ। जुन ब्राह्मणले यी तीनवटा वेद पढेको छ त्यसलाई त्रिवेदी भनिन्छ। तीन वेदहरूबाट पाइने ज्ञानप्रति जो अत्यन्त आसक्त हुन्छ, समाजमा त्यसको आदर हुन्छ तर दुर्भाग्य वेदका त्यस्ता धेरै पण्डितहरूलाई आफ्नो अध्ययनको वास्तविक लक्ष्य के हो, थाहा हुँदैन। त्यसैले भगवान् श्रीकृष्णले यहाँ आफू स्वयम् त्रिवेदीहरूका परमलक्ष्य भएको घोषणा गर्नुभएको छ। वास्तविक त्रिवेदीहरूले भगवान्का चरणकमलको शरण लिएका हुन्छन् र भगवान्लाई प्रसन्न पार्नका लागि तिनीहरू पवित्र भक्तिसेवामा संलग्न हुन्छन्। **हरे कृष्ण** महामन्त्रको जप गर्ने र साथै यथार्थ रूपमा भगवान्

श्रीकृष्णलाई बुझ्ने प्रयास गर्नाले भक्तिको उदय हुन्छ। तर दुर्भाग्यवश वेदका विद्यार्थीहरू इन्द्र, चन्द्रजस्ता विभिन्न देवताहरूलाई आहूति दिने कार्यमा विशेष अभिरुचि राख्दछन्। यस्ता कार्यले पनि विभिन्न देवताहरूका उपासकहरू प्रकृतिका निम्नस्तरका गुणका दोषबाट शुद्ध हुन्छन्। त्यसको फलस्वरूप उनीहरू महर्लोक, जनलोक, तपलोक आदि उच्च लोकहरूमा पुग्दछन्। यसरी एक पटक उच्च लोकमा पुगिसकेपछि त्यहाँ यस लोकको भन्दा लाखौँ गुणा राम्रा भोग्यवस्तुको उपभोग गर्दछन् र आफ्ना इन्द्रियलाई सन्तुष्ट पार्दछन्।

**ते तं भुक्त्वा स्वर्गलोकं विशालं,**
**क्षीणे पुण्ये मर्त्यलोकं विशन्ति ।**
**एवं त्रयीधर्ममनुप्रपन्ना,**
**गतागतं कामकामा लभन्ते ॥ २१ ॥**

**ते** — तिनीहरू; **तम्** — त्यो; **भुक्त्वा** — भोगेर; **स्वर्गलोकम्** — स्वर्गलोकलाई; **विशालम्** — ठुलो; **क्षीणे** — सकिएपछि; **पुण्ये** — पुण्य कर्मको फल; **मर्त्यलोकम्** — पृथ्वीलोकमा; **विशन्ति** — तल झर्दछन्; **एवम्** — यस प्रकार; **त्रयी** — तीनै वेदहरूको; **धर्मम्** — शिक्षालाई; **अनुप्रपन्ना** — पालन गर्नेहरू; **गतागतम्** — जन्म र मृत्युलाई; **कामकामाः** — इन्द्रियको सुख चाहनेहरू; **लभन्ते** — पाउँदछन्।

**यसरी तिनीहरू स्वर्गमा गएर विशाल इन्द्रियसुखको उपभोग गर्दछन् र आफ्ना पुण्य कर्मको फल सकिएपछि पुनः यही मृत्युलोकमा फर्किन्छन्। अतः तीन वेदका सिद्धान्तमा दृढ रहेर इन्द्रियभोगको मात्र चाहना राख्ने व्यक्ति बारम्बार जन्मिने र मर्ने कालचक्रमा पर्दछ।**

**तात्पर्य :** स्वर्गलोकमा जाने व्यक्तिले जीवनको लामो अवधिसम्म त्यहाँ रहेर राम्रा-राम्रा सुख-सुविधाहरूको उपभोग गर्दछ तर पनि ऊ सधैँका लागि त्यहीँ बसिरहन पाउँदैन। आफूले गरेका पुण्य कर्मको फल भोगिसकेपछि उसलाई फेरि पृथ्वीमा पठाइन्छ। जसले वेदान्त सूत्रमा सङ्केत गरेअनुसार **जन्माद्यस्य यतः** ज्ञानको पूर्णता प्राप्त गरेको छैन, अर्थात् जसले सम्पूर्ण कारणहरूका पनि कारणस्वरूप भगवान् श्रीकृष्णलाई बुझेको छैन त्यसले जीवनको चरम लक्ष्य प्राप्त गर्न सक्दैन। त्यस्तो व्यक्ति कहिले माथि र कहिले तल भएर घुमिरहने चक्रमा स्थित भएजस्तै गरी बारम्बार स्वर्ग जाने र पृथ्वीमा फर्किने गरिरहन्छ। यसको तात्पर्य भएको, त्यो व्यक्ति फेरि फर्केर आउनु नपर्ने गरी वैकुण्ठ जानुको सट्टा जन्म र मृत्युका चक्रमा परी स्वर्गलोक र मर्त्यलोकका बीचमा घुमिरहन्छ। त्यसैले **सत्-चित् आनन्दमय** जीवन भोग्नका लागि

वैकुण्ठलोकमा पुग्ने प्रयत्न गर्नु राम्रो हो, किनभने त्यहाँ पुगिसकेपछि, यो दुःखमय संसारमा फर्किनु पर्दैन।

**अनन्याश्चिन्तयन्तो मां ये जनाः पर्युपासते ।**
**तेषां नित्याभियुक्तानां योगक्षेमं वहाम्यहम् ॥ २२ ॥**

**अनन्याः** — जसको अर्को कुनै लक्ष्य छैन; **चिन्तयन्तः** — चिन्तन गर्दै; **माम्** — मलाई; **ये** — जो; **जनाः** — मानिसहरू; **परि-उपासते** — ठीक ढङ्गले उपासना गर्दछन्; **तेषाम्** — तिनीहरूको; **नित्य** — सधैँ; **अभियुक्ता-नाम्** — भक्तिमा लागेका; **योग** — आवश्यकताहरू र; **क्षेमम्** — सुरक्षा; **वहामि** — धारण गर्दछु (जिम्मा लिन्छु); **अहम्** — म।

**जो अनन्य भावले सधैँ मेरो दिव्य स्वरूपको ध्यान तथा चिन्तन गर्दछन्, तिनीहरूको आवश्यकता मैले पूरा गरिदिन्छु र तिनीहरूसँग भएका वस्तुको संरक्षण पनि मैले नै गरिदिन्छु।**

**तात्पर्य :** जो व्यक्ति कृष्णभावनाबिना एक क्षण पनि रहन सक्दैन, त्यसले श्रवण, कीर्तन, स्मरण, स्तुति, वन्दना, पूजा, पादसेवन, समर्पण, सख्य र आत्मनिवेदनद्वारा दिनमा चौबीस घण्टा भगवान्‌लाई सम्झिरहन्छ। यी सबै क्रियाकलापहरू पावन छन्, आध्यात्मिक शक्तिले युक्त छन्। यस्ता भक्तिमय कार्यहरूले भक्तलाई आत्मसाक्षात्कारमा पूर्ण बनाउँदछ, अनि त्यस्ता भक्तहरूको एक मात्र इच्छा भगवान्‌को सङ्ग प्राप्त गर्नु हुन्छ। त्यस्ता भक्तहरूले निस्सन्देह बिनाकठिनाइ भगवान्‌लाई प्राप्त गर्दछन्। यही विधिलाई भनिन्छ, योग। भगवान्‌का कृपाले गर्दा यस्ता भक्तहरू फेरि यो भौतिक जीवनमा फर्किंदैनन्। क्षेम शब्दले यहाँ भगवान्‌को कृपापूर्ण संरक्षण भन्ने बुझाउँदछ। प्रथमतः भगवान्‌ले भक्तियोगद्वारा भक्तलाई कृष्णभावनामा पुग्न सहायता गर्नु हुन्छ, अनि जब भक्त पूर्णतः कृष्णभावनाभावित भइ सक्दछ त्यसपछि उहाँले उसलाई दुःखमय बद्ध जीवनमा पतित हुनबाट बचाउनु हुन्छ।

**येऽप्यन्यदेवता भक्ता यजन्ते श्रद्धयान्विताः ।**
**तेऽपि मामेव कौन्तेय यजन्त्यविधिपूर्वकम् ॥ २३ ॥**

**ये** — जो व्यक्ति; **अपि** — पनि; **अन्य** — अरू; **देवता** — देवताहरूलाई; **भक्ताः** — भक्तहरू; **यजन्ते** — पूजा गर्दछन्; **श्रद्धयान्विताः** — श्रद्धाले युक्त भएर; **ते** — तिनीहरू; **अपि** — पनि; **माम्** — मलाई; **एव** — नै; **कौन्तेय** — हे कुन्तीपुत्र!; **यजन्ति** — पूजा गर्दछन्; **अविधिपूर्वकम्** — अज्ञानपूर्वक (गलत ढङ्गले)।

**हे कुन्तीपुत्र! जो मानिस अरू देवताका भक्त छन् र श्रद्धापूर्वक तिनको पूजा गर्दछन्, वास्तवमा तिनले पनि त्रुटिपूर्ण ( अज्ञानजन्य ) तरिकाले मेरो पूजा गरिरहेका हुन्छन्।**

**तात्पर्य :** भगवान् श्रीकृष्ण भन्नु हुन्छ— "देवताहरूलाई गरिने पूजा पनि अप्रत्यक्ष रूपमा मेरो पूजा हो तैपनि त्यसरी देवताहरूको पूजा-आराधनामा संलग्न रहने व्यक्तिलाई त्यति बुद्धिमान् मान्न सकिँदैन। उदाहरणका लागि यदि कसैले रूख-बिरुवालाई पानी दिँदा त्यसका फेँद वा जरामा पानी नराखेर हाँगा र पातमा पानी राख्दछ त्यसलाई बुद्धिमान् व्यक्ति भनिँदैन। यसो गर्नु उसको अज्ञानता हो। पर्याप्त ज्ञान तथा विधिविधानको अभाव भएको मानिसले मात्रै त्यसो गर्दछ। शरीरका भिन्न भिन्न अङ्गप्रत्यङ्गलाई सेवा पुऱ्याउनका लागि पेटलाई नै खानेकुरा दिनु पर्दछ। विभिन्न देवताहरू भन्नु भगवान्को सरकारका विभिन्न अधिकारी तथा निर्देशकहरू मात्र हुन्। सरकारद्वारा बनाइएका नियम-कानूनको अनुसरण गर्नु आवश्यक छ तर भिन्न विभागका हाकिम तथा निर्देशकहरूका निजी नियम-कानूनको पालन गर्नु आवश्यक छैन। त्यसैले हरेकले परमपुरुष भगवान्को पूजा-आराधना गर्नु पर्दछ। यसरी सीधा भगवान्को पूजा गर्नाले भगवान्का अधिकारी तथा निर्देशकहरू स्वतः सन्तुष्ट हुन्छन्। कार्यलयमा प्रमुख तथा निर्देशकहरूले सरकारका प्रतिनिधि बनेर काम गर्नु पर्दछ, तिनलाई कुनै प्रकारको घूस दिनु अवैधानिक हो। **अविधिपूर्वकम्** भन्ने शब्दले यहाँ यही कुराको सङ्केत गरेको छ। अर्को शब्दमा भन्ने हो भने, भगवान् श्रीकृष्णले अनावश्यक देवपूजाको समर्थन गर्नु हुन्न।

**अहं हि सर्वयज्ञानां भोक्ता च प्रभुरेव च ।**
**न तु मामभिजानन्ति तत्त्वेनातश्च्यवन्ति ते ॥ २४ ॥**

**अहम्** — म; **हि** — निश्चय नै; **सर्व** — सबै; **यज्ञानाम्** — यज्ञहरूका; **भोक्ता** — भोगकर्ता; **च** — तथा; **प्रभुः** — स्वामी; **एव** — पनि; **च** — तथा; **न** — होइन; **तु** — तर; **माम्** — मलाई; **अभिजानन्ति** — जान्दछन्; **तत्त्वेन** — वास्तवमा; **अतः** — त्यसैले; **च्यवन्ति** — खस्दछन्; **ते** — तिनीहरू।

**सम्पूर्ण यज्ञहरूको एकमात्र भोक्ता र स्वामी म नै हूँ, अतः मेरो वास्तविक दिव्य स्वभावलाई जसले बुझ्दैन त्यसको अधोगति हुन्छ।**

**तात्पर्य :** यहाँ स्पष्टसँग के भनिएको छ भने, वैदिक शास्त्रहरूमा विभिन्न प्रकारका यज्ञ-अनुष्ठानहरू गर्ने आदेश दिइएको छ तर वास्तवमा ती सबै यज्ञहरूको उद्देश्य भगवान्लाई खुशी गराउनु हुन्छ। यज्ञको अर्थ नै भगवान्

विष्णु हो। *भगवद्गीताको* तेस्रो अध्यायमा स्पष्ट भनिएको छ— भगवान् विष्णु वा यज्ञलाई सन्तुष्ट पार्नका लागि नै मानिसले यज्ञ गर्नु पर्दछ। मानव सभ्यताको परिपूर्ण रूप भनेको वर्णाश्रम धर्म हो र वर्णाश्रम धर्मको विशेष उद्देश्य भगवान् विष्णुलाई प्रसन्न पार्नु हो। त्यसैले यो श्लोकमा भगवान् श्रीकृष्ण भन्नु हुन्छ— "सम्पूर्ण यज्ञहरूको भोक्ता म हूँ, किनभने म नै परमस्वामी हूँ।" अल्पज्ञ मानिसहरू यो तथ्यलाई नबुझेर अस्थायी लाभका लागि देवताहरूको पूजा गर्दछन्। त्यसैले तिनीहरू बारम्बार यही भौतिक संसारमा जन्म लिन बाध्य हुन्छन् र जीवनको अभीष्ट लक्ष्य प्राप्त गर्न सक्दैनन्। यदि कसैको कुनै भौतिक इच्छा पूरा हुनसकेको छैन त्यसका लागि उसले भगवान्‌को प्रार्थना गर्नु पर्दछ,। यसो गरेमा उसले इच्छित फल प्राप्त गर्नेछ। हुनत कुनै भौतिक फलका लागि भगवान्‌को स्तुति गर्नु शुद्ध भक्तिको लक्षण होइन।

**यान्ति देवव्रता देवान् पितृन् यान्ति पितृव्रताः ।**
**भूतानि यान्ति भूतेज्या यान्ति मद्याजिनोऽपि माम् ॥ २५ ॥**

**यान्ति** — जान्छन्; **देवव्रताः** — देवताको पूजा गर्नेहरू; **देवान्** — देवताहरूका धाममा; **पितृन्** — पितृहरूकोमा; **यान्ति** — जान्छन्; **पितृव्रताः** — पितृका उपासकहरू; **भूतानि** — भूतप्रेतहरूकोमा; **यान्ति** — जान्छन्; **भूतेज्याः** — भूतप्रेतका उपासकहरू; **यान्ति** — जान्छन्; **मद्याजिनः** — मेरा (भगवान्‌का) उपासकहरू, भक्तहरू; **अपि** — तर; **माम्** — मेरा धाममा।

**देवताहरूको उपासना गर्ने व्यक्ति देवताका बीचमा गएर जन्मिन्छन्, पितृहरूको उपासना गर्ने व्यक्ति पितृलोकमा जान्छन्, भूतप्रेतको पूजा गर्नेहरू भूतप्रेतको माझमा गएर जन्मिन्छन् र मेरा उपासकहरू मेरो लोकमा गएर मसँगै बस्न पाउँदछन्।**

**तात्पर्य :** यदि कसैले चन्द्रलोक, सूर्यलोक वा अन्य लोकहरूमा जाने चाहना राख्दछन् त्यस्तो लक्ष्य प्राप्त गर्न जुन कर्म वा नियम पालन गर्ने निर्देशन वैदिक शास्त्रले दिएको छ तदनुसार कर्म गर्नु पर्दछ, त्यसो गरेर मानिसले आफूले चाहेको फल प्राप्त गर्न सक्दछ। यस्तो प्रक्रियालाई दर्श-पौर्णमासी भनिन्छ। यी कुराहरूको विस्तृत वर्णन वेदको सकामकर्म नामक भागमा छ। यसमा विभिन्न स्वर्गीय लोकहरूमा अवस्थित देवताहरूको विशिष्ट पूजाको वर्णन छ। यसै गरी मानिसले विशेष किसिमको यज्ञ सम्पादन गरेर पितृलोक प्राप्त गर्न सक्दछ र त्यस्तै विशेष भूतयज्ञ सम्पन्न गरी मानिस यक्ष, रक्ष, पिशाच बनेर विभिन्न भूतलोकहरूमा पनि जान सक्दछ। पिशाचपूजालाई कालो विद्या वा कालो जादू भनिन्छ। धेरै मानिसहरू यस्तो कालो जादूको अभ्यास गर्दछन् र धार्मिक काम

गरिरहेका छौँ भन्ने विचार गर्दछन्। तर यस्ता क्रियाकलापहरू पूर्णतया भौतिक हुन्। त्यसै गरी शुद्ध भक्तहरू केवल भगवान्को उपासना गर्दछन् र निःसन्देह वैकुण्ठलोक अर्थात् कृष्णलोकमा पुग्दछन्। यस महत्त्वपूर्ण श्लोकबाट के कुरा सजिलै बुझ्न सकिन्छ भने, यदि देवताहरूको उपासना गर्नाले स्वर्गीय लोकहरूमा जान सकिन्छ, पितृको उपासना गर्नाले पितृलोकमा जान सकिन्छ र कालो जादूको अभ्यास गर्नाले भूतलोकमा पुग्न सकिन्छ र एउटा शुद्ध भक्त भगवान्को उपासना गरेर भगवद्धाम अर्थात् विष्णुलोक वा कृष्णलोकमा पुग्न किन सक्दैन ? दुर्भाग्यवश धेरै मानिसलाई कृष्णलोक वा विष्णुलोकका बारेमा कुनै जानकारी छैन, त्यसैले तिनीहरूको पतन हुन्छ। निराकारवादीहरू पनि ब्रह्मज्योतिबाट तल खस्दछन्। त्यसै कारणले यो कृष्णभावनामृत अभियानले सम्पूर्ण मानवजातिलाई केवल **हरे कृष्ण** महामन्त्रको जप गर्नाले मानिस जीवनमा पूर्णता प्राप्त गरेर भगवान्को धाममा पुग्दछ भन्ने दिव्य सूचना वितरण गर्दछ।

**पत्रं पुष्पं फलं तोयं यो मे भक्त्या प्रयच्छति ।**
**तदहं भक्त्युपहृतमश्नामि प्रयतात्मनः ॥ २६ ॥**

**पत्रम्** — पात; **पुष्पम्** — फूल; **फलम्** — फल; **तोयम्** — जल; **यो** — जसले; **मे** — मलाई; **भक्त्या** — प्रेमपूर्वक; **प्रयच्छति** — अपर्ण गर्दछ; **तत्** — त्यो; **अहम्** — मैले; **भक्ति उपहृतम्** — भक्तिपूर्वक दिइएको वस्तु; **अश्नामि** — ग्रहण गर्दछु; **प्रयत आत्मनः** — शुद्ध चित्त भएका भक्तहरूबाट।

**कसैले मलाई प्रेमपूर्वक वा भक्तिपूर्वक पत्र, पुष्प, फल, जल जे अर्पण गर्दछ त्यो म खुशीसाथ स्वीकार गर्दछु।**

**तात्पर्य :** स्थायी सुख र अनन्त आनन्द प्राप्तिका लागि बुद्धिमान् मानिसहरूले कृष्णभावनामा रहेर भगवान्का प्रेमाभक्तिमा संलग्न हुनु अनिवार्य छ। यस्तो आश्चर्यमय महान् फल प्राप्त गराउने विधि अत्यन्त सजिलो छ। निर्धनभन्दा निर्धन व्यक्तिले पनि यो विधि अपनाउन सक्दछ। यसमा व्यक्तिको योग्यताको पनि विचार गरिँदैन। यसका लागि हुनुपर्ने एउटै योग्यता छ, त्यो शुद्ध भक्ति अर्थात् भगवान्प्रति अनन्य श्रद्धा भक्ति हुनु नै हो। को कस्तो हो र कहाँ बस्दछ भन्ने कुरासँग यसको कुनै सरोकार छैन। यो विधि कतिसम्म सरल छ मानिसले प्रेमपूर्वक एउटा पत्र वा अलिकति जल वा फल जे अर्पण गर्दछ त्यसलाई भगवान्ले सहर्ष स्वीकार गर्नु हुन्छ, त्यसैले कृष्णभावनामा आउनुबाट कसैलाई पनि रोक्न सकिँदैन। किनभने यो अत्यन्त सजिलो र व्यापक छ। सजिलो विधिबाट जीवनको सर्वोच्च पूर्णता अर्थात् सच्चिदानन्दको प्राप्ति गराउने

कृष्णभावनालाई अँगाल्न नचाहने मूर्ख को होला? भगवान् श्रीकृष्णलाई प्रेमभक्तिबाहेक अरू केही चाहिँदैन। उहाँ आफ्ना शुद्ध भक्तले प्रेमपूर्वक दिएको एउटा सानो फूलको थूँगो पनि खुशीसाथ स्वीकार्नु हुन्छ तर प्रेमाभक्ति नभएका मानिसले दिएको वस्तु उहाँलाई स्वीकार्य छैन। वास्तवमा भन्ने हो भने उहाँलाई कसैबाट केही पाउने चाहना नै छैन, किनभने उहाँ आफैँमा परिपूर्ण तथा सन्तुष्ट हुनुहुन्छ। तैपनि आफ्ना भक्तहरूले अर्पण गरेको वस्तु तथा प्रेम स्नेहको बिनिमयका रूपमा स्वीकार्नु हुन्छ। कृष्णभावनाको विकास जीवनको सर्वोच्च पूर्णता हो। भगवान् श्रीकृष्णलाई प्राप्त गर्ने एक मात्र साधन भक्ति हो भन्ने कुरामा विशेष जोड दिनका लागि यस श्लोकमा दुई पटक भक्ति शब्दको उल्लेख भएको छ। ब्राह्मण हुनु, ठुलो विद्वान् हुनु, धेरै धनी हुनु वा महान् दार्शनिक हुनु आदि कुनै पनि अवस्थाले भगवान्लाई उपहार स्वीकार गर्न बाध्य बनाउन सकिँदैन। भक्तिको आधारभूत सिद्धान्तबाहेक अरू कुनै वस्तुले उहाँलाई कसैबाट केही कुरा स्वीकार गर्न सहमत बनाउन सकिँदैन। भक्तिको कहिल्यै कुनै हेतु वा कारण हुँदैन। भक्ति, यो सनातन प्रक्रिया हो। भक्ति परमब्रह्मको सेवाका निम्ति गरिने प्रत्यक्ष कर्म हो।

भगवान् श्रीकृष्णले यहाँ प्रथमतः आफू नै एकमात्र भोक्ता, परमस्वामी र सबै यज्ञहरूका वास्तविक लक्ष्य भएको कुरा स्थापित गर्नुभएको छ र कस्तो किसिमको उपहार उहाँलाई मन पर्दछ भन्ने कुरा पनि प्रकट गर्नुभएको छ। यदि कसैले स्वयम्लाई शुद्ध गराउन र जीवनको उद्देश्यरूपी भगवान्को दिव्य प्रेम प्राप्त गर्न चाहन्छ भगवान्ले उसबाट के चाहनु हुन्छ भन्ने कुरा पनि उसले थाहा पाउन पर्दछ। जसले भगवान् श्रीकृष्णलाई प्रेम गर्दछ त्यसले श्रीकृष्णले जे चाहनु हुन्छ त्यो मात्र उहाँलाई अर्पण गर्दछ र उहाँले नचाहेको कुनै पनि वस्तु उहाँलाई अर्पण गर्दैन, अतः मासु, माछा, फुल आदि उहाँलाई अर्पण गर्नु हुँदैन। यदि भगवान् श्रीकृष्णले यस्ता कुरा अर्पण गरियोस् भन्ने चाहनुभएको भए, त्यसै अनुरूप भन्नुहुन्थ्यो तर उहाँले स्पष्ट भन्नुभएको छ—"मलाई पत्र, पुष्प, फल र जल अर्पण गर। म यिनै वस्तु स्वीकार गर्दछु।" त्यसैले भगवान् माछा, मासु, अण्डा आदि ग्रहण गर्नुहुन्न भन्ने कुरा हामीले बुझ्नु पर्दछ। सागपात, फलफूल, अन्न, दूध, पानी नै मानव जातिका लागि उपयुक्त भोजन हुन्। स्वयम् भगवान् श्रीकृष्णले पनि यही कुरा भन्नुभएको छ। यी पदार्थबाहेक हामीले खाने अरू कुराहरू भगवान्लाई अर्पण गर्दैनौ, किनभने त्यस्ता पदार्थहरू भगवान्ले ग्रहण गर्नुहुन्न। यदि हामीले त्यस्ता अखाद्य पदार्थ भगवान्लाई अर्पण गरे हामी प्रेमाभक्तिका स्तरमा रहेर काम गर्ने हुँदैनौँ।

तेस्रो अध्यायको तेह्रौँ श्लोकमा भगवान् श्रीकृष्णले भन्नुभएको छ—यज्ञ

गरेर बाँकी रहेको खाद्यान्न नै पवित्र हुन्छ। जीवनमा आध्यात्मिक उन्नति चाहनेहरूका लागि यस्तै खाद्यान्न ग्रहण गर्नु राम्रो हुन्छ र यसो गर्नाले सांसारिक बन्धनबाट मुक्ति पाइन्छ। त्यसै श्लोकमा अर्कातिर के पनि भनिएको छ भने, यज्ञमा अर्पण नगरी खाने व्यक्तिले केवल पाप खाइरहेका हुन्छन्। तिनका प्रत्येक गाँसले तिनलाई सांसारिक जटिलताहरूमा अल्झिरहन बाध्य बनाउँदछन्। अतः सादा शाकाहारी भोजन राम्रोसँग तयार पारेर भगवान् श्रीकृष्णको श्रीविग्रह वा तस्बिर अगाडि अर्पण गर्नु अनि यसरी अर्पण गरिएको भोजन ग्रहण गरिदिनका लागि भुइँमा झुकेर भगवान्‌लाई विनम्र प्रार्थना गर्नु पर्दछ। यसो गर्नाले मानिसले आफ्ना जीवनमा निरन्तर प्रगति गर्दछ, उसको शरीर शुद्ध हुँदै जान्छ र मस्तिष्कमा श्रेष्ठ तन्तुहरू उत्पन्न हुन्छन्, जसले गर्दा उसलाई शुद्ध चिन्तनतिर अग्रसर गराउँदछ। सबैभन्दा ठुलो कुरा भगवान्‌लाई अर्पण गरिने भोग अत्यन्त प्रेमपूर्वक तयार पार्नु पर्दछ। भगवान् श्रीकृष्णसँग सबै वस्तु छ। उहाँ हरेक वस्तुका स्वामी भएको हुनाले उहाँलाई भोजनको कुनै आवश्यकता छैन, तैपनि कसैले यस्तै व्यञ्जनहरू अर्पण गरेर उहाँलाई प्रसन्न पार्न चाहेमा भने त्यसलाई उहाँ खुशीसाथ स्वीकार गर्नु हुन्छ। भोजन तयार पार्दा, पस्किँदा र अर्पण गर्दा आवश्यक पर्ने सबैभन्दा महत्त्वपूर्ण तत्त्व कृष्णप्रेम हो अर्थात् हरेक कार्य उहाँप्रति अनन्य प्रेमभाव राखेर गरिनु पर्दछ।

परमसत्य अर्थात् भगवान् इन्द्रियविहीन हुनुहुन्छ भन्ने निराकारवादीहरूले *भगवद्गीताको* यो श्लोकको अर्थ बुझ्न सक्दैनन्। तिनीहरूका लागि यो या रूपक हो या *भगवद्गीताका* वक्ता श्रीकृष्णको मानवीय चरित्रको प्रमाण हो। तर, यथार्थमा भगवान् श्रीकृष्णका इन्द्रियहरू छन्। भनिन्छ, उहाँका इन्द्रियहरू परस्पर परिवर्तनशील छन्। अर्को शब्दमाभन्दा, उहाँको एउटा इन्द्रियले अर्को इन्द्रियको काम गर्न सक्दछ। श्रीकृष्णलाई परमब्रह्म भन्नुको अर्थ पनि यही हो। इन्द्रियहरूले रहित हुनुभएका भए उहाँलाई सम्पूर्ण ऐश्वर्यले युक्त मानिने थिएन। सातौँ अध्यायमा भगवान् श्रीकृष्ण भन्नु हुन्छ—"मैले नै जीवात्माहरूलाई प्रकृतिका गर्भमा स्थापित गर्दछु।" यो काम प्रकृतिमाथि उहाँले अवलोकन गर्नासाथ सम्पन्न हुन्छ। त्यसैले यहाँ भोग लगाउँदा भक्तहरूले उच्चारण गर्ने प्रेमपूर्ण वचन सुन्नु भगवान् श्रीकृष्णका लागि खानु र स्वाद लिनुजस्तै हो, उहाँका लागि कानले सुन्नु भनेको भोजन गर्नु र स्वाद लिनुजस्तै हो। केवल भक्तहरूले मात्र भगवान् श्रीकृष्णलाई बिनाव्याख्या स्वयम् उहाँले भनेजस्तै गरी बुझ्न सक्दछन्— परमब्रह्मले पनि भोजन गर्न र स्वाद लिन सक्नु हुन्छ।

**यत्करोषि यदश्नासि यज्जुहोषि ददासि यत् ।**
**यत्तपस्यसि कौन्तेय तत्कुरुष्व मदर्पणम् ॥ २७॥**

**यत्** — जे; **करोषि** — गर्दछौ; **यद्** — जे; **अश्नासि** — खान्छौ; **यत्** — जे; **जुहोषि** — हवन गर्दछौ; **ददासि** — दिन्छौ; **यत्** — जे; **यत्** — जो; **तपस्यसि** — तपस्या गर्दछौ; **कौन्तेय** — हे कुन्तीपुत्र; **तत्** — त्यो; **कुरुष्व** — गर; **मत्** — ममा; **अर्पणम्** — अर्पण।

**हे कुन्तीपुत्र! तिमी जे गर्दछौ, जे खान्छौ, जे होम गर्दछौ, जे दान गर्दछौ र जस्तो तपस्या गर्दछौ त्यो सबै मलाई समर्पण गरेर गर।**

**तात्पर्य :** कुनै पनि परिस्थितिमा भगवान् श्रीकृष्णलाई नबिर्सिने किसिमको मार्गमा आफूलाई लगाउनु प्रत्येक व्यक्तिको कर्तव्य हो। आफ्नो आत्मा र शरीरको रक्षाका लागि हरेकले केही न केही काम गर्नै पर्दछ र त्यो काम भगवान्का लागि भनेर गर्न पर्दछ। श्रीकृष्णले यहाँ यही सुझाव दिनुभएको छ। प्रत्येकलाई जीवित रहनका लागि केही न केही खान पर्दछ त्यस्तो खाद्यान्न भगवान्लाई अर्पण गरेर मात्र खान पर्दछ। हरेक सभ्य व्यक्तिले केही न केही धार्मिक कार्य वा उत्सवहरू गर्दछ। भगवान् श्रीकृष्ण भन्नु हुन्छ—"त्यस्तो उत्सव मेरा लागि गर्न पर्दछ।" यसैलाई भनिन्छ अर्चना। केही न केही दान गर्ने प्रवृत्ति हरेक मानिसमा हुन्छ। भगवान् श्रीकृष्ण भन्नु हुन्छ—"त्यस्तो दान मलाई देऊ।" यसको अर्थ उपभोग गरेर बचत हुनआएको धन कृष्णभावनाको उन्नतिका लागि खर्च गर्नु पर्दछ भन्ने हो। विभिन्न ध्यान विधिहरूप्रति आजभोलिका मानिसहरूको विशेष झुकाव रहेको देखिन्छ, जो यस युगका लागि त्यति व्यावहारिक छैन तर यदि कसैले आफ्नो मालामा **हरे कृष्ण** महामन्त्रको जप गर्दै चौबीसै घण्टा श्रीकृष्णको स्मरण वा ध्यान गर्दछ त्यस्तो व्यक्ति निश्चय नै महान् ध्यानी वा महान् योगी हुन्छ। *भगवद्गीताको* छैटौँ अध्यायमा यस कुराको पुष्टि गरिएको छ।

**शुभाशुभफलैरेवं मोक्षसे कर्मबन्धनैः ।**
**संन्यासयोगयुक्तात्मा विमुक्तो मामुपैष्यसि ॥ २८ ॥**

**शुभ** — शुभ; **अशुभ** — अशुभ; **फलैः** — फलद्वारा; **एवम्** — यस प्रकार; **मोक्षसे** — मुक्त हुनेछौ; **कर्मबन्धनैः** — कर्मका बन्धनबाट; **संन्यास** — संन्यासको; **योग** — योगमा; **युक्त आत्मा** — मनलाई स्थिर गरेर; **विमुक्तः** — मुक्त भएको; **माम्** — मलाई; **उपैष्यसि** — पाउनेछौ।

**यस प्रकार तिमी कर्मको बन्धन तथा त्यसको शुभ र अशुभ फलद्वारा मुक्त हुनेछौ। यो संन्यास योगद्वारा आफ्नो मनलाई ममा स्थिर गराएर, तिमी मुक्त हुनेछौ र मलाई पाउनेछौ।**

**तात्पर्य :** गुरुको निर्देशनमा कृष्णभावनामा रहेर कर्म गर्ने व्यक्तिलाई युक्त भनिन्छ। यसको पारिभाषिक शब्द युक्तवैराग्य हो। यसको व्याख्या रूप गोस्वामीले भक्तिरसामृत सिन्धुमा यसरी गर्नुभएको छ—

*अनासक्तस्य विषयान्यथार्हमुपयुञ्जतः ।*
*निर्बन्धः कृष्णसम्बन्धे युक्तं वैराग्यमुच्यते ॥*

रूप गोस्वामी भन्नु हुन्छ—यस संसारमा रहुञ्जेल हामीले कर्म गर्नै पर्दछ, काम बन्द गर्नै सकिँदैन। त्यसैले यदि कर्म गरेर त्यसको फल भगवान् श्रीकृष्णलाई अर्पण गरिन्छ त्यसलाई युक्तवैराग्य भनिन्छ। वास्तवमा संन्यासमा स्थित हुनेजस्ता क्रियाकलापले मनरूपी ऐना सफा हुन्छ अनि कर्ताले विस्तारै आध्यात्मिक अनुभूति गर्न थाल्दछ। फलस्वरूप ऊ पूर्णतया भगवान्प्रति समर्पित हुन पुग्दछ। अन्त्यमा ऊ मुक्त हुन्छ र त्यो मुक्ति पनि विशिष्ट किसिमको हुन्छ। त्यो मुक्तिद्वारा ऊ ब्रह्मज्योतिमा एकाकार हुँदैन, बरु भगवान्का धाममा प्रवेश गर्दछ। **माम् उपैष्यसि** अर्थात् मलाई पाउनेछौ अर्थात् मेरै धाममा फर्किनेछौ भनेर यहाँ स्पष्ट उल्लेख गरिएको छ। मुक्ति पाँच प्रकारका छन्। यहाँ के स्पष्ट गरिएको छ भने, जो जीवनभरि भगवान्कै निर्देशनमा रहन्छ, त्यो व्यक्ति यस्तो अवस्थामा पुग्दछ जहाँबाट शरीर त्याग्नासाथ भगवद्धाममा पुग्न सक्दछ र भगवान्को प्रत्यक्ष सङ्गत प्राप्त गर्न सक्दछ।

जो व्यक्ति आफ्नो जीवनलाई भगवान्को सेवामा समर्पण गर्नुबाहेक अरू कुनै विषयमा रुचि राख्दैन त्यो नै वास्तविक संन्यासी हो। यस्ता व्यक्तिले आफूलाई सधैँ भगवान्कै इच्छामा निर्भर रहने, उहाँकै शाश्वत सेवक ठान्दछ। अतः उसले जे गर्दछ भगवान्को लाभका निमित्त गर्दछ र जस्ता कामहरू उसबाट सम्पन्न हुन्छन् ती पनि भगवान्कै सेवाका रूपमा गरिएका हुन्छन्। सकाम कर्म वा वेदमा उल्लेख भएका कर्तव्यकर्मप्रति उसले त्यति ध्यान दिँदैन। सर्वसाधारण व्यक्तिका लागि वेदमा उल्लेख गरिएका कर्महरू गर्नु अनिवार्य हुन्छ तर शुद्ध भक्तहरू पूर्णतया भगवत्सेवामा लाग्ने हुनाले कहिलेकाहीँ उनीहरूको काम वेदविहित कर्तव्यभन्दा भिन्न देखिए पनि वास्तवमा उनीहरू त्यसो गरिरहेका हुँदैनन्। त्यसैले वैष्णवाचार्यहरूले भनेका छन्—अत्यन्त बुद्धिमान् व्यक्तिले पनि शुद्ध भक्तका योजना र क्रियाकलापलाई बुझ्न सक्दैन। **ताँर वाक्य, क्रिया मुद्रा विज्ञेह ना बुझय** (चैतन्यचरितामृत मध्यलीला २३.३९) यसरी सधैँ भगवान्को सेवामा तल्लीन रहने वा भगवान्को सेवा कसरी गर्न सकिन्छ भन्ने कुरा मात्र सधैँ सोचिरहने अनि त्यस्तै योजना बनाइरहने व्यक्तिलाई वर्तमानमा पूर्णतः मुक्त ठान्नु पर्दछ र त्यस्तो व्यक्ति

भविष्यमा पनि निश्चित रूपले भगवद्धाममा जान्छ, यसमा कुनै शंका छैन। त्यस्तो भक्त सम्पूर्ण सांसारिक आलोचनाहरूभन्दा माथि हुन्छ, जसरी भगवान् श्रीकृष्ण सबै आलोचनाभन्दा माथि हुनुहुन्छ।

**समोऽहं सर्वभूतेषु न मे द्वेष्योऽस्ति न प्रियः ।**
**ये भजन्ति तु मां भक्त्या मयि ते तेषु चाप्यहम् ॥ २९ ॥**

**समः** — समान भाव; **अहम्** — म; **सर्वभूतेषु** — सबै प्राणीहरूमा; **न** — न कुनै; **मे** — मेरो; **द्वेष्यः** — अप्रिय; **अस्ति** — छ; **न** — न त; **प्रियः** — प्यारो; **ये** — जो; **भजन्ति** — दिव्य सेवा अर्पण गर्दछन्; **तु** — तर; **माम्** — मलाई; **भक्त्या** — भक्तिपूर्वक; **मयि** — ममा छन्; **ते** — त्यस्ता व्यक्तिहरू; **तेषु** — तिनीहरूमा; **च** — पनि; **अपि** — निश्चय नै; **अहम्** — म।

**म न त कसैप्रति द्वेष गर्दछु न कसैको पक्ष लिन्छु। म सबैप्रति समभाव राख्दछु तर जसले भक्तिपूर्वक मेरो सेवा गर्दछ, त्यो मेरो मित्र हो, त्यो मैमा रहन्छ र म पनि उसको मित्र हूँ।**

**तात्पर्य :** यहाँ कसैले प्रश्न गर्न सक्दछ— यदि भगवान् श्रीकृष्ण सबैप्रति समभाव राख्नु हुन्छ र कसैलाई पनि पक्षपात गर्नु हुन्न भने सधैँ आफ्नो अलौकिक सेवामा लागिरहने भक्तहरूप्रति उहाँ किन विशेष चासो राख्नु हुन्छ? हो, तर यो पक्षपात होइन, यो स्वाभाविक हो। यो संसारमा मानिस जतिसुकै दानी, परोपकारी किन नहोस्, आफ्ना बालबच्चाप्रति उसको विशेष अभिरुचि हुन्छ नै। भगवान् भन्नु हुन्छ— "जीवात्माहरू जुनसुकै रूप र आकारका हुन्, सबै मेरा सन्तान हुन्।" त्यसैले उहाँ हरेक प्राणीका जीवनका आवश्यकताहरू उदारतापूर्वक परिपूर्ति गरिदिनु हुन्छ। उहाँ वर्षायामका बादलजस्ता हुनुहुन्छ। बादलले स्थलमा परोस् कि जलमा परोस्, चट्टानमा परोस् वा जहाँसुकै परोस् त्यसमा सोचविचार नगरि पानी वर्षाउँदछ। तर, आफ्ना भक्तहरूप्रति भगवान् विशेष ध्यान दिनु हुन्छ। यी भक्तहरू त्यस्ता हुन्छन् जो सधैँ कृष्णभावनामा अवस्थित हुन्छन्, त्यसैले तिनीहरू भगवान् श्रीकृष्णमै हुन्छन्। यस्तो कृष्णभावनामा अवस्थित भएका व्यक्तिहरू नै यथार्थमा जीवन्त अध्यात्मवादी हुन् र भगवान् श्रीकृष्णमा स्थित व्यक्ति हुन् भन्ने कुरा यहाँ यो कृष्णभावना शब्दले सङ्केत गरिरहेको छ। भगवान् यहाँ स्पष्ट रूपले भन्नु हुन्छ— **मयि ते** अर्थात्, तिनीहरू ममा छन्। यसबाट के स्पष्ट हुन्छ भने, स्वभावैले भगवान् तिनीहरूमा पनि हुनुहुन्छ। यो सम्बन्ध पारस्परिक हुन्छ। **ये यथा मां प्रपद्यन्ते तांस्तथैव भजाम्यहम्** अर्थात्, जो जुन रूपमा मेरो शरणमा आउँदछ त्यसलाई म त्यसै रूपमा सहयोग गर्दछु। यस भनाई व्याख्या पनि यसले गरेको छ।

भगवान् र भक्त दुवै चैतन्य भएकाले ती दुईबीच यस किसिमको दिव्य आदान-प्रदान हुने गर्दछ। जब सुनको औँठीमा हीराको पत्थर जडिन्छ, अति राम्रो देखिन्छ। यसबाट एकातिर सुनको महिमा बढ्दछ सँगसँगै अर्कातिर हीराको महिमा बढ्दछ। भगवान् र जीवात्मा शास्वत रूपले उज्ज्वल (चमकिला) छन्। जब जीवात्मा भगवान्का सेवामा लाग्दछ त्यस समय ऊ सुनजस्तो देखिन्छ अनि भगवान् जीवात्माका साथमा हीराजस्तो देखिनु हुन्छ। यसरी दुवैको मेल वा मिश्रण अति राम्रो हुन्छ। शुद्ध अवस्थामा रहेका जीवात्मालाई भक्त भनिन्छ। भगवान् आफ्ना भक्तका पनि भक्त बन्नु हुन्छ। भक्त र भगवान्का बीच यस किसिमको पारस्परिक सम्बन्ध नहुने भए साकारवादी दर्शन नै हुने थिएन। निराकारवादी दर्शनमा भगवान् र भक्तबीच पारस्परिकता नै हुँदैन तर साकारवादी दर्शनमा त्यस्तो हुन्छ। भगवान्लाई कल्पवृक्षको उदाहरण दिँदै प्रायः भन्ने गरिन्छ— मानिसले कल्पवृक्षजस्ता भगवान्सँग जे कुराको चाहना गर्दछ, भगवान्ले त्यसको पूर्ति गरिदिनु हुन्छ। तर यहाँ जुन व्याख्या दिइएको छ त्यो अझ परिपूर्ण छ। यहाँ भगवान्लाई भक्तका पक्षधर हुनुहुन्छ भनिएको छ—यो नै भक्तप्रति भगवान्का कृपाको विशिष्ट अभिव्यक्ति हो। भगवान्को यस्तो पारस्परिक आदान-प्रदानलाई कर्मको नियमभित्र रहेको ठान्नु हुँदैन। यो त त्यो दिव्य अवस्थासँग सम्बन्धित कार्य भक्त र भगवान्बीच सम्पन्न हुन्छ। भगवान्को भक्तिलाई यो भौतिक जगत्को क्रियाकलाप ठान्नु हुन्न, यो त त्यो आध्यात्मिक जगत्को अङ्ग हो जहाँ सत्‌चित् र आनन्दको प्रधानता हुन्छ।

**अपि चेत्सुदुराचारो भजते मामनन्यभाक् ।**
**साधुरेव स मन्तव्यः सम्यग् व्यवसितो हि सः ॥ ३० ॥**

**अपि** — पनि; **चेत्** — यदि; **सुदुराचारः** — अत्यन्त निन्दित कर्म गरेको; **भजते** — भक्ति सेवामा संलग्न छ; **माम्** — मेरो; **अनन्यभाक्** — विचलित नभईकन; **साधुरेव** — साधु नै; **सः** — त्यो; **मन्तव्यः** — मान्नु पर्दछ; **सम्यक्** — पूर्णरूपले; **व्यवसितः** — सङ्कल्पमा दृढ; **हि** — निश्चय नै; **सः** — त्यो।

**अत्यन्तै जघन्य कर्म गर्ने दुराचारी नै भए पनि अनन्यभावले मेरो भक्तिसेवामा संलग्न भए त्यसलाई साधु नै मान्नु पर्दछ, किनभने ऊ आफ्नो सङ्कल्पमा अडिग भइसक्यो।**

**तात्पर्य** : यहाँ प्रयोग गरिएको **सुदुराचार** शब्द अत्यन्त महत्त्वपूर्ण छ। अतः यसलाई हामीले राम्ररी बुझ्नु पर्दछ। बद्ध अवस्थामा रहेका मानिसका कर्महरू दुई प्रकारका हुन्छन्— नियमबद्ध, र स्वाभाविक। जसरी मानिसले

शरीरको रक्षा गर्नका लागि र समाज तथा राज्यको नियम पालन गर्नका लागि विभिन्न प्रकारका कर्महरू गर्नु पर्दछ, त्यसै गरी भक्तहरूले पनि बद्ध जीवनको सम्पर्कमा रहँदा धेरै काम गर्नु पर्दछ। यस्ता कर्मलाई बद्धकर्म भन्दछन्। यसबाहेक आफ्नो आध्यात्मिक स्वभावप्रति पूर्णतया सचेत रहेर कृष्णभावनामा वा भगवद्भक्तिमा लागिरहने व्यक्तिले पनि त्यसैअनुरूपको कर्म गर्दछन् तर त्यस्तो कर्म साधारण नभएर दिव्य हुनजान्छ। स्वाभाविक स्थितिमा रहेर सम्पन्न हुने यस्ता कार्यलाई शास्त्रका भाषामा भक्ति भनिन्छ।

बद्ध अवस्थामा रहँदा कहिलेकाहीँ उसको शारीरिक सेवा र भक्तिसेवा एकअर्काका समानान्तर भएर अघि बढ्दछन् र फेरि कहिलेकाहीँ एकअर्काका विपरीत पनि हुन पुग्दछन्। सम्भव भएसम्म भक्त आफ्नो अनुकूल स्थिति भङ्ग हुने कार्यबाट सतर्क रहन्छ, किनभने कृष्णभावनामृतको अनुभूतिको प्रगतिमा नै आफ्ना कर्मको सिद्धि निर्भर छ भन्ने कुरा उसले बुझेको हुन्छ। तर, कहिलेकाहीँ कृष्णभावनामा लागेको व्यक्तिले सामाजिक वा राजनैतिक दृष्टिले निन्दनीय ठानिने काम पनि गर्न पुगेको देखिन्छ तैपनि यस्ता क्षणिक पतनका कारणले ऊ अयोग्य हुँदैन। *श्रीमद्भागवत्मा* भनिएको छ— कुनै व्यक्ति आफ्नो कर्मबाट पतित भइहाल्यो भने पनि यदि त्यो व्यक्ति भगवान्को भक्तिमा वा भक्तिसेवामा संलग्न रहेमा हृदयमा निवास गर्ने भगवान्ले उसलाई शुद्ध बनाइदिनु हुन्छ र त्यस निन्दनीय कार्यका लागि उसलाई क्षमा दिनु हुन्छ। भगवान्का सेवामा पूर्णरूपले लागेको योगी पनि कहिलेकाहीँ सांसारिक दोषको बन्धनमा पर्नजान्छ तर कृष्णभावना कति शक्तिशाली छ भने, यसरी आकस्मिक रूपले पतित हुनपुगेकालाई पनि यसले तुरून्त प्रशोधित गरिदिन्छ। त्यसैले भक्तियोग सधैँ सफल हुन्छ। कुनै व्यक्ति आफ्नो आदर्शपथबाट अकस्मात च्युत भएको देखेर उपहास गर्नु हुँदैन, किनभने यस्ता व्यक्तिहरू फेरि कृष्णभावनामा पूर्णरूपले अवस्थित हुनासाथ केही समयमै त्यस प्रकारको आकस्मिक पतन रोकिन्छ, यसको व्याख्या आगामी श्लोकमा गरिएको छ।

अतः कृष्णभावनामा अवस्थित रहेको र दृढ सङ्कल्पका साथ **हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे, हरे राम हरे राम राम राम हरे हरे** यो महामन्त्रको जपमा संलग्न रहेको व्यक्ति संयोगवश अचानक कुनै किसिमले पतन भएको देखिए पनि त्यसलाई दिव्य अवस्थामा रहेको व्यक्ति ठान्नु पर्दछ। यहाँ **साधुरेव** साधु नै हो, भन्ने शब्द अत्यन्त शक्तिशाली छ। यसले अभक्तहरूलाई के चेतावनी दिएको छ भने— आकस्मिक किसिमले पतन भएका भक्तहरूको पनि उपहास गर्नु हुँदैन। अचानक पतित हुन पुगेको भए पनि उसलाई साधु नै मान्नु पर्दछ। अनि अर्को **मन्तव्य** अर्थात् मान्नु पर्दछ

भन्ने शब्द झन् सशक्त देखिन्छ। यदि कसैले यो कुरालाई नमानेर अचानक पतन हुनपुगेका भक्तहरूको उपहास गर्दछ, उसले भगवान्‌को आज्ञा पालन नगरेको ठहरिन्छ। अविचलभावले वा अनन्यभावले भक्तिसेवामा संलग्न हुनु नै भक्तको एकमात्र योग्यता हो। नृसिंह पुराणमा निम्नलिखित वर्णन पाइन्छ—

*भगवति च हरावनन्यचेता*
*भृषमलिनोऽपिविराजते मनुष्यः।*
*न हि शशकलुषच्छविः कदाचित्*
*तिमिरपराभवतामुपैति चन्द्रः॥*

भन्नुको तात्पर्य के हो भने— भगवान्‌को भक्तिमा लागेको मानिस कुनै समय कुनै निन्दित काम गर्दै गरेको भेटियो भने पनि उसको त्यस्तो कार्यलाई चन्द्रमामा लागेको दागजस्तो मान्नु पर्दछ। चन्द्रमामा दाग वा कलङ्क छ तर त्यो दागले चन्द्रमाको प्रकाशको विस्तारमा कुनै बाधा पुऱ्याउँदैन, त्यसै गरी साधुहरूको आदर्श चरित्रबाट अचानक पतित पुगेको भक्तलाई निन्दनीय व्यक्ति मान्नु हुँदैन।

दिव्य भक्तियोगमा लागेको भक्तले सधैँ सबै प्रकारका निन्दित कर्म गरिरहन्छ भन्ने भ्रूटोधारणा पनि राख्नु हुँदैन। यो श्लोकले केवल सांसारिक सम्बन्धको बलियो शक्तिले कहिलेकाहीँ हुने दुर्घटनालाई मात्र सङ्केत गरेको हो। भक्तियोग एक प्रकारले मायाशक्तिका विरुद्धमा गरिने युद्धको घोषणा हो। मायाशक्तिसँग लड्नका लागि पर्याप्त शक्ति आर्जन नगरूञ्जेल मात्र भक्तहरू यस्तो दुर्घटनाजन्य पतनका सिकार हुन्छन्। तर, पर्याप्त शक्तिशाली बनेपछि पूर्व श्लोकमा भनेजस्तै यस प्रकारको पतनको भागी भइँदैन। तर, कसैले पनि यो श्लोकको दुरूपयोग गर्दै अनैतिक वा निन्दनीय कार्य गर्नु हुँदैन र यति अपराध भए पनि म भक्त नै बनिरहन्छु भन्ने सोच्नु पनि हुँदैन। भक्तिमार्गमा लागेर व्यक्तिले आफ्नो चरित्रमा सुधार ल्याउँदैन भने त्यसलाई उच्च श्रेणीको भक्त मान्नु हुँदैन।

**क्षिप्रं भवति धर्मात्मा शश्वच्छान्तिं निगच्छति ।**
**कौन्तेय प्रतिजानीहि न मे भक्तः प्रणश्यति ॥ ३१॥**

**क्षिप्रम्** — छिटै नै; **भवति** — हुन्छ; **धर्मात्मा** — धार्मिक; **शश्वत् शान्तिम्** — स्थायी शान्ति; **निगच्छति** — पाउँदछ; **कौन्तेय** — हे कुन्तीपुत्र; **प्रतिजानीहि** — घोषणा गरिदेऊ; **न** — हुँदैन; **मे** — मेरो; **भक्तः** — सेवक (भक्त); **प्रणश्यति** — नाशिन्छ।

**त्यो तुरुन्तै धर्मात्मा हुन्छ र त्यसले स्थायी शान्ति पनि पाउँदछ, त्यसैले**

**हे कुन्तीपुत्र! तिमी निर्भीक भएर घोषणा गर — मेरो भक्तको कहिल्यै विनाश हुँदैन।**

**तात्पर्य :** यसलाई गलत अर्थमा बुझ्नु हुँदैन। सातौँ अध्यायमा भगवान् भन्नु हुन्छ— दुष्कर्ममा संलग्न रहेको व्यक्ति भगवान्‌को भक्त हुन सक्दैन। भगवान्‌को भक्त नभएको व्यक्तिमा असल गुणहरू पनि हुँदैनन्। अब प्रश्न के रह्यो भने, संयोगवश होस् वा प्रवृत्तिवश होस् निन्दनीय क्रियाकलापमा संलग्न भएको व्यक्ति कसरी शुद्ध भक्त बन्न सक्दछ? यस्तो प्रश्न उठ्न सक्दछ। सातौँ अध्यायमा वर्णन गरिएजस्ता दुष्कर्म गर्नेहरू कहिल्यै पनि भगवान्‌को भक्तिमा आउँदैनन् र तिनीहरूसँग असल गुण पनि केही हुँदैन।

*श्रीमद्‌भागवत्‌मा* पनि यसको उल्लेख छ। साधारणतया नौ प्रकारका भक्तिप्रक्रियामा संलग्न भएको मानिस आफ्ना हृदयबाट सम्पूर्ण भौतिक प्रदूषणहरू सफा गर्ने प्रक्रियामा पनि लागेको हुन्छ। उसले भगवान्‌लाई आफ्ना हृदयमा विराजमान गराएको हुन्छ, त्यसैले उसका पापपूर्ण दोषहरू स्वतः सफा हुन्छन्। निरन्तर गरिने भगवान्‌को चिन्तनले उसलाई स्वाभाविक रूपमा शुद्ध बनाउँदछ। वेदहरूका अनुसार कुनै मानिस आफ्नो उच्च ओहोदाबाट पतित हुनगयो भने उसले कुनै विशेष किसिमको अनुष्ठान सम्पन्न गर्नु पर्दछ। यसो गरेपछि ऊ शुद्ध हुन्छ तर यहाँ यो भक्ति मार्गमा त्यस किसिमको कुनै प्रावधान छैन, किनभने निरन्तर भगवान्‌को चिन्तन गरिरहने हुनाले त्यो शुद्धीकरणको प्रक्रिया भक्तका हृदयमा पहिलेदेखि नै विद्यमान रहिरहेको हुन्छ। त्यसैले— **"हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे हरे राम हरे राम राम राम हरे हरे"** यो महामन्त्र निरन्तर जपिरहनु पर्दछ। यसले भक्तलाई अचानक पतन हुनबाट बचाउँदछ। यसरी ऊ सम्पूर्ण भौतिक कल्मषहरूबाट सधैँ मुक्त रहन्छ।

**मां हि पार्थ व्यपाश्रित्य येऽपि स्युः पापयोनयः ।**
**स्त्रियो वैश्यास्तथा शूद्रास्तेऽपि यान्ति परां गतिम् ॥ ३२ ॥**

**माम्** — मेरो; **हि** — निश्चय नै; **पार्थ** — हे पृथापुत्र; **व्यपाश्रित्य** — आश्रय लिएर; **ये** — जो; **अपि** — पनि; **स्युः** — छन्; **पापयोनयः** — नीचा कुलमा उत्पन्न भएका; **स्त्रियः** — स्त्रीहरू; **वैश्याः** — वैश्यहरू; **तथा** — तथा; **शूद्राः** — तल्ला वर्गका मानिसहरू; **ते अपि** — तिनीहरू पनि; **यान्ति** — जान्छन्; **परांगतिम्** — परमधाममा (लक्ष्यमा)।

**हे पृथापुत्र, मेरो शरणमा आउने तिनीहरू तल्लो कुलमा जन्मिएका स्त्री हुन्, वैश्य हुन् वा शूद्र हुन्, ती सबैले परमधाम प्राप्त गर्दछन्।**

**तात्पर्य :** यहाँ भगवान्‌ले स्पष्टसँग घोषणा गर्नुभएको छ— भक्तिसेवामा सानो

जाति र ठुलो जातिका मानिसहरूबीच कुनै भेदभाव हुँदैन। भौतिक धारणाअनुसार सानो र ठुलो भन्ने विभेद हुन सक्दछ तर भगवान्को दिव्य भक्तिमा लागेका मानिसहरूबीच त्यस्तो कुनै विभेद हुँदैन। हरेक व्यक्ति परमधाम प्राप्त गर्नयोग्य हुन्छ। *श्रीमद्भागवत्* (२.४.१८) मा भनिएको छ— सबैभन्दा अधम चाण्डाल (कुकुरको मासुखाने) श्रेणीका मानिस पनि शुद्ध भक्तहरूको सङ्गत पाएर पवित्र हुन सक्दछन्। त्यसैले भक्तिमार्ग र शुद्ध भक्तहरूको मार्गदर्शन यी दुवै कुरा कति शक्तिशाली छन् भने, त्यहाँ मानिस-मानिसबीच नीच र उचो भन्ने कुनै भेद हुँदैन, यसलाई जसले पनि ग्रहण गर्न सक्दछ। शुद्ध भक्तको सङ्गत र उसको उचित निर्देशन प्राप्त गरेर सामान्यभन्दा सामान्य व्यक्ति पनि शुद्ध हुन सक्दछ। प्रकृतिका विभिन्न गुणअनुसार मानिसहरू कसैलाई सात्त्विक (ब्राह्मण), कसैलाई राजसी (क्षत्रीय), कसैलाई रज र तम मिश्रित वैश्य र कसैलाई तमोगुणी (शूद्र) भनिएको छ। यी चारै वर्गभन्दा पनि तल्लो वर्गलाई चाण्डाल भनिन्छ र तिनीहरू त्यस्तै पापपूर्ण परिवारमा जन्मिएका हुन्छन्। साधारणतया ती पापपूर्ण नीच कुलमा जन्मिएकाहरूलाई तीभन्दा माथिका चारै वर्गका मानिसले आफ्ना समूहमा लिँदैनन् तर भक्तियोगको विधि कति शक्तिशाली छ भने, यस मार्गमा लागेका भगवान्का शुद्ध भक्तहरूले सम्पूर्ण तल्ला जातिका मानिसहरूलाई जीवनको सर्वोच्च पूर्णता प्राप्त गराउन सक्दछन्। भगवान् श्रीकृष्णका शरणमा गएर मात्र यो कुरा सम्भव हुन्छ। यहाँ **'व्यपाश्रित्य'** भन्ने शब्दले मानिसले पूर्णतया भगवान् श्रीकृष्णको शरण लिनु पर्दछ भन्ने सङ्केत गरेको छ। यसरी श्रीकृष्णको शरणागत भइसकेपछि मानिस ठुलाठुला ज्ञानी र योगीहरूभन्दा पनि महान् हुन पुग्दछ।

**किं पुनर्ब्राह्मणाः पुण्या भक्ता राजर्षयस्तथा ।**
**अनित्यमसुखं लोकमिमं प्राप्य भजस्व माम् ॥ ३३ ॥**

**किम्** — कति; **पुनः** — फेरि; **ब्राह्मणाः** — ब्राह्मणहरू; **पुण्याः** — धर्मात्मा; **भक्ताः** — भक्तहरू; **राजर्षयः** — राजर्षिहरू; **तथा** — पनि; **अनित्यम्** — अस्थायी; **असुखम्** — दुःखले परिपूर्ण; **लोकम्** — लोकलाई; **इमम्** — यो; **प्राप्य** — पाएर; **भजस्व** — प्रेमाभक्तिमा लाग; **माम्** — मेरो।

**फेरि धर्मात्मा ब्राह्मण, भक्त तथा राजर्षिहरूलाई भन् के भन्नपर्‍यो र? त्यसैले यो दुःखमय अनित्य संसारमा आएको हुनाले तिमी आफूलाई मेरै प्रेमाभक्तिमा लगाऊ।**

**तात्पर्य :** यो संसारमा धेरै वर्गका (तहका) मानिसहरू छन् तर पनि यो संसार कसैका लागि पनि सुखको ठाउँ होइन। यहाँ स्पष्ट भनिएको छ— **अनित्यं**

**असुखं लोकम्** अर्थात्, यो संसार अनित्य र दुःखमय छ। सन्त सज्जनहरूका लागि बसोबास गर्नयोग्य छैन। भगवान्ले यो संसार अस्थायी र दुःखपूर्ण छ भनेर घोषणा गर्नुभएको छ। केही दार्शनिकहरू, विशेष गरी मायावादी दार्शनिकहरू, यो संसार झूटो हो भन्दछन् तर *भगवद्गीताको* अध्ययनबाट हामी यो जगत् झूटो होइन अनित्य हो भन्ने बुझ्दछौँ। झूटो भन्नु र अनित्य भन्नुमा फरक छ। यो संसार अनित्य अस्थायी छ तर यो बाहेक अर्को संसार पनि छ त्यो नित्य छ, स्थायी छ। यो संसार दुःखमय छ तर अर्को संसार शाश्वत र आनन्दमय छ।

अर्जुनको जन्म राजर्षिका कुलमा भएको थियो। उनलाई पनि भगवान्ले भक्तिसेवामा लाग र छिट्टै आफ्नो घर भगवद्धाममा आऊ भन्नुभयो। यो दुःखैदुःखले भरिएको अनित्य संसारमा कोही पनि बस्नु हुन्न। हरेक व्यक्ति भगवान्का काखमा पुग्न इच्छुक हुनु पर्दछ, किनभने त्यहाँ मात्र ऊ सधैँ खुसीसँग रहन सक्दछ। भगवान्को भक्तिमार्ग एउटा यस्तो विधि हो, जसद्वारा सबै तहका मानिसहरूका सबै समस्याको समाधान हुन सक्दछ। त्यसैले प्रत्येक व्यक्तिले कृष्णभावनालाई अँगालेर आफ्नो जीवनलाई पूर्ण सफल बनाउनु पर्दछ।

**मन्मना भव मद्भक्तो मद्याजी मां नमस्कुरु ।**
**मामेवैष्यसि युक्त्वैवमात्मानं मत्परायणः ॥ ३४ ॥**

**मत् मनाः** — सधैँ मेरै चिन्तन गरिरहने; **भव** — होऊ; **मद्भक्तः** — मेरो भक्त; **मत् याजी** — मेरा पूजक; **माम्** — मलाई; **नमस्कुरु** — नमस्कार गर; **माम् एव** — मलाई नै; **एष्यसि** — पाउने छौ; **युक्त्वा** — लीन भएर; **एवम्** — यसरी; **आत्मानम्** — आफ्नो आत्मालाई; **मत् परायणः** — मेरो भक्तिमा अनुरक्त।

**मनलाई सधैँ मेरै चिन्तनमा लगाऊ, मेरै भक्त बन, मेरै पूजा गर, मलाई नमस्कार गर। यसरी पूर्णतया ममा तल्लीन भएपछि तिमीले निश्चय नै मलाई प्राप्त गर्नेछौ।**

**तात्पर्य :** यस श्लोकमा स्पष्ट रूपले के सङ्केत गरिएको छ भने, यो संक्रमणयुक्त सांसारिक बन्धनबाट मुक्त गराउने एउटै मात्र उपाय कृष्णभावना हो। कहिलेकाहीं कपटी भाष्यकारहरूले — सम्पूर्ण भक्ति भगवान् श्रीकृष्णमा समर्पित गर्नु पर्दछ भन्ने यो स्पष्ट भनाइलाई बङ्ग्याउने गर्दछन् र दुर्भाग्यवश यस्ता धूर्त भाष्यकारहरूले हुनैनसक्ने कुरातिर पाठकको मन मोडिदिन्छन्। यी भाष्यकारहरूलाई भगवान् श्रीकृष्ण र श्रीकृष्णको मनमा कुनै अन्तर छैन भन्ने कुरै थाहा छैन। भगवान् श्रीकृष्ण साधारण मानिस हुनु हुन्न, उहाँ त परमसत्य हुनुहुन्छ। उहाँको शरीर, उहाँको मन र स्वयम् उहाँ भन्नु

एउटै हो, अभिन्न सत्ता हो। यस सम्बन्धमा चैतन्य चरितामृतको टीकामा भक्तिसिद्धान्त सरस्वती गोस्वामीले कुर्मपुराणको एउटा भनाई उद्धृत गर्नुभएको छ— **देहेदेहीविभेदोऽयं नेश्वरेविद्यते क्वचित्** अर्थात्, परमेश्वर कृष्ण र उहाँको शरीरमा कुनै भिन्नता छैन तर भाष्यकारहरूले यो कृष्णविज्ञानलाई नबुझेका हुनाले उनीहरू भगवान् श्रीकृष्णलाई लुकाउँदछन् र उहाँको व्यक्तित्व उहाँको शरीर र मनभन्दा भिन्न हो भन्दछन्। यस्तो भनाइ कृष्णतत्त्वका बारेमा रहेको गहन अज्ञानताको उदाहरण हो तर पनि केही व्यक्तिहरू यस्तै कुरा प्रचार गर्दै जनतालाई भ्रममा पारेर लाभ उठाइरहेका छन्।

कुनै मानिसहरू आसुरी स्वभावका हुन्छन्, तिनीहरू पनि भगवान् श्रीकृष्णको चिन्तन गर्दछन् तर ईर्ष्यापूर्ण तरिकाले, जसरी श्रीकृष्णका मामा कंसले श्रीकृष्णको चिन्तन गर्दथे। कंसले पनि निरन्तर श्रीकृष्णलाई सम्झिरहन्थे, तर शत्रुका रूपमा। श्रीकृष्णले कहिले आएर मलाई मार्दछन् भन्ने चिन्ता कंसलाई थियो। यस प्रकारको चिन्तनले हामीलाई सहायता गर्दैन। भगवान् श्रीकृष्णको चिन्तन प्रेमाभक्तिमा रहेर नै गर्नु पर्दछ। यही नै विशेष भक्ति हो। मानिसले निरन्तर कृष्णतत्त्वको विकास गर्नु पर्दछ। अनुकूल विकास के हो? यो सुयोग्य गुरुबाट सिक्नु पर्दछ। श्रीकृष्ण साक्षात् भगवान् हुनुहुन्छ। हामीले धेरै पटक भनिसकेका छौँ— भगवान् श्रीकृष्णको शरीर भौतिक होइन। उहाँको शरीर **सत्चित् आनन्दमय** छ। यस किसिमका चर्चाहरूले मानिसलाई भक्त हुनमा सहायता पुऱ्याउँदछ। अन्यथा गलत स्रोतबाट श्रीकृष्णलाई बुझ्नखोज्ने काम निष्फल सिद्ध हुन्छ।

अतः श्रीकृष्णको शाश्वत स्वरूपमा वा मूल स्वरूपमा मनलाई स्थिर गराउनु पर्दछ र श्रीकृष्ण नै परमेश्वर हुनुहुन्छ भन्ने कुरा हृदयमा दृढ गरेर आफूलाई भगवान् श्रीकृष्णकै उपासनामा लगाउनु पर्दछ। भगवान् श्रीकृष्णको पूजा-अर्चना हुने सयौँ-हजारौँ मन्दिरहरू भारतमा छन् र ती ठाउँमा भक्तिको अभ्यास पनि गरिन्छ। यस प्रकारको प्रेमाभक्तिको अभ्यास गर्दा भगवान् श्रीकृष्णलाई दण्डवत् प्रणाम गर्नु पर्दछ, श्रीविग्रहका अगाडि शिर झुकाउनु पर्दछ र आफ्नो मन, शरीर तथा क्रियाकलापलाई कृष्णभक्तिमै संलग्न गराउनु पर्दछ। यसो गर्दा विचलनरहित भएर पूर्णतः श्रीकृष्णमै लीन हुन सकिन्छ। यसले भगवान् श्रीकृष्णका लोकमा स्थानान्तरित हुने काममा पनि सहायता पुऱ्याउँदछ। त्यसैले कपटी भाष्यकारहरूद्वारा विचलित हुनु हुँदैन। भगवान् श्रीकृष्णका बारेमा श्रवण गर्ने, कीर्तन गर्ने आदि भक्तिका विविध नौवटा प्रकृयाहरूमा मानिसले आफूलाई संलग्न गराइराख्नु पर्दछ, किनभने शुद्ध भक्ति प्राप्त गर्नु मानवसमाजको उच्चत्तम उपलब्धि हो।

*भगवद्गीताको* सातौँ र आठौँ अध्यायमा शुद्ध भक्तिको व्याख्या गरिएको छ र भनिएको छ— शुद्ध भक्ति काल्पनिक ज्ञान, यौगिक चमत्कार र सकाम कर्मबाट मुक्त हुन्छ। जो व्यक्ति पूर्णतया शुद्ध भइसकेको छैन त्यो निराकार ब्रह्मज्योति तथा अन्तर्यामी परमात्माजस्ता भगवान्‌का विविध रूपहरूबाट आकर्षित हुन सक्दछ तर शुद्ध भक्त भगवान्‌को प्रत्यक्ष सेवामा मात्र रमाउँदछ।

भगवान् श्रीकृष्णका बारेमा लेखिएको एउटा सुन्दर कवितामा वर्णन गरिएको छ— देवताहरूको पूजामा संलग्न हुने व्यक्ति सबैभन्दा बुद्धिहीन हो र त्यस्तो व्यक्तिले कहिल्यै पनि भगवान् श्रीकृष्णको उच्च वरदान प्राप्त गर्न सक्दैन। सुरुसुरुमा कहिलेकाहीँ कुनै भक्तहरू आफ्ना स्तरबाट तल झर्न सक्दछन्, तैपनि उनीहरूलाई अन्य दार्शनिकहरू तथा योगीहरूभन्दा श्रेष्ठ मान्नु पर्दछ। कृष्णभावनामा सधैँ तल्लीन रहने भक्तलाई पूर्णतया सन्त व्यक्ति मान्नु पर्दछ। ऊद्वारा आकस्मिक रूपमा हुनगएका भक्तिविहीन कार्यहरू बिस्तारै समाप्त हुँदै जान्छन् र निःसन्देह ऊ पूर्ण सिद्धिका अवस्थामा स्थित हुन पुग्दछ। यथार्थमा शुद्ध भक्तहरू पतन हुने अवस्था नै आउँदैन, किनभने आफ्ना शुद्ध भक्तहरूको रक्षा गर्ने जिम्मा भगवान् आफैँले लिनुभएको छ। त्यसैले बुद्धिमान् व्यक्तिहरूले सीधै कृष्णभावनाको मार्ग अपनाउन् र यो भौतिक संसारमा सुखपूर्वक जीवन बिताउन्। त्यस्ता व्यक्तिले अन्ततोगत्वा भगवान् श्रीकृष्णको परमवरदान प्राप्त गर्दछन्।

यस प्रकार *श्रीमद्भगवद्गीता* ग्रन्थअन्तर्गत 'परमगोपनीय ज्ञान' शीर्षक नवौँ अध्यायको भक्तिवेदान्त तात्पर्य समाप्त भयो।

## अध्याय-दश

# भगवान्‌को ऐश्वर्य

श्रीभगवानुवाच

**भूय एव महाबाहो श्रृणु मे परमं वचः ।**
**यत्तेऽहं प्रीयमाणाय वक्ष्यामि हितकाम्यया ॥ १ ॥**

**श्रीभगवान् उवाच** — भगवान्‌ले भन्नुभयो; **भूयः** — फेरि; **महाबाहो** — हे बलिष्ठ भुजाधारी (अर्जुन); **श्रृणु** — सुन; **मे** — मेरो; **परमम्** — श्रेष्ठ; **वचः** — उपदेश; **यत्** — जो; **ते** — तिमीलाई; **अहम्** — म; **प्रीयमाणाय** — तिमीलाई अति प्यारो ठानेर; **वक्ष्यामि** — भन्दछु; **हितकाम्यया** — तिम्रा हितका लागि।

**भगवान्‌ले भन्नुभयो — हे महाबाहु अर्जुन! फेरि सुन। तिमी मेरा प्रिय मित्र भएका हुनाले तिम्रा हितका लागि म यस्तो ज्ञान दिन्छु, जुन मैले अहिलेसम्म दिएका ज्ञानमध्ये सर्वश्रेष्ठ ज्ञान हो।**

**तात्पर्य :** भगवान् शब्दको व्याख्या पराशर मुनिले यसरी गरेका छन् — जोसँग सम्पूर्ण शक्ति, सम्पूर्ण यश, सम्पूर्ण धन, सम्पूर्ण ज्ञान, सम्पूर्ण सौन्दर्य र सम्पूर्ण त्याग यी छःवटै ऐश्वर्य छन् उहाँलाई भगवान् भनिन्छ। भगवान् श्रीकृष्ण यो धराधाममा उपस्थित हुनुहुँदा उहाँले उपर्युक्त छःवटै ऐश्वर्यको प्रदर्शन गर्नुभएको थियो। त्यसैले, पराशरजस्ता महान् ऋषिहरूले उहाँलाई भगवान्‌का रूपमा स्वीकारेका थिए। अहिले यहाँ श्रीकृष्णले अर्जुनलाई आफ्ना कार्य तथा ऐश्वर्यहरूसम्बन्धी अत्यन्त गोपनीय ज्ञानको शिक्षा दिइरहनुभएको छ। पहिला नै सातौँ अध्यायको प्रारम्भसँगै भगवान्‌ले आफ्ना विभिन्न शक्तिहरू र ती शक्तिले कसरी कार्य गर्दछन् भन्नेबारे भनिसक्नुभएको छ। अब यो अध्यायमा उहाँले अर्जुनसमक्ष आफ्ना विशिष्ट ऐश्वर्यहरूको वर्णन गर्नु हुन्छ। पहिलेको अध्यायमा उहाँले दृढ विश्वासका साथ भक्ति स्थापना गर्ने आफ्ना विविध शक्तिहरूको स्पष्ट व्याख्या गरिसक्नुभएको छ। फेरि यस अध्यायमा पनि उहाँले अर्जुनसँग आफ्ना अभिव्यक्तिहरू तथा विभिन्न ऐश्वर्यहरूका बारेमा चर्चा गर्नु हुन्छ।

मानिसले भगवान्‌का बारेमा जतिजति सुन्दैजान्छ त्यति-त्यति ऊ भगवद्भक्तिमा दृढ हुँदैजान्छ, अतः मानिसले भक्तहरूको सत्सङ्गमा रहेर

निरन्तर भगवान्‌का लीलाचर्चाहरू सुन्नु पर्दछ। यसो गर्नाले भक्तिभावनाको विकास हुन्छ। भक्तहरूका समाजमा हुने यस्ता चर्चाहरू केवल ती व्यक्तिहरूका बीचमा हुन सक्दछन् जो वास्तवमा कृष्णभावनाका लागि उत्सुक छन्। यस्ता चर्चाहरूमा अरूहरूले भाग लिन सक्दैनन्। भगवान् अर्जुनलाई स्पष्ट भन्नु हुन्छ—"अर्जुन! तिमी मेरा अत्यन्त प्यारा छौ, त्यसैले तिम्रै हितका लागि मैले यो चर्चा गरेको हूँ।"

**न मे विदुः सुरगणाः प्रभवं न महर्षयः ।**
**अहमादिर्हि देवानां महर्षीणां च सर्वशः ॥ २ ॥**

**न** — होइन; **मे** — मेरो; **विदुः** — जान्दछन्; **सुरगणाः** — देवताहरू; **प्रभवम्** — उत्पत्ति र ऐश्वर्यलाई; **न** — न त; **महर्षयः** — ठुलाठुला ऋषिहरूले; **अहम्** — म हूँ; **आदिः** — मूल; **हि** — निश्चय नै; **देवानाम्** — देवताहरूको; **महर्षिणाम्** — महान् ऋषिहरूको; **च** — पनि; **सर्वशः** — सबै प्रकारबाट।

**मेरो उत्पत्ति र ऐश्वर्यलाई न देवताहरूले जान्दछन् न महर्षिहरूले जान्दछन्, किनभने म हरेक दृष्टिबाट ती देवताहरू र महर्षिहरूको पनि उत्पत्तिको स्रोत हुँ।**

**तात्पर्य :** ब्रह्मसंहितामा भनिएको छ— भगवान् श्रीकृष्ण नै परमेश्वर हुनुहुन्छ। श्रीकृष्णभन्दा ठुलो कोही छैन र उहाँ सम्पूर्ण कारणहरूका पनि कारण हुनुहुन्छ। यहाँ स्वयम् भगवान्‌ले आफूलाई सम्पूर्ण देवताहरू तथा ऋषिहरूका कारण हूँ भन्नुभएको छ। देवता तथा महर्षिहरूले पनि भगवान् श्रीकृष्णलाई बुझ्न सक्दैनन्। उनीहरूले श्रीकृष्णको नाम तथा व्यक्तित्वलाई बुझ्न सक्दैनन् भने यस क्षुद्र पृथ्वीलोकका तथाकथित विद्वान्‌हरूको के कुरा। भगवान् किन सामान्य मानिसका रूपमा पृथ्वीमा आउनु हुन्छ र यस्ता असाधारण एवं आश्चर्यजनक कार्यहरू गर्नु हुन्छ भन्ने कुरा कसैलाई थाहा छैन। त्यसैले भगवान् श्रीकृष्णलाई जान्नका लागि त्यस्तो योग्यता र विद्वत्ताको आवश्यकता छैन, देवताहरू तथा महर्षिहरूले पनि आफ्ना मानसिक चिन्तनद्वारा श्रीकृष्णलाई बुझ्ने प्रयास गरेका छन् तर यस कार्यमा तिनीहरू सफल भएका छैनन्। महान् देवताहरू पनि भगवान्‌लाई बुझ्न सक्दैनन् भन्ने कुरा *श्रीमद्भागवतमा* स्पष्ट बताइएको छ। तिनीहरूको चिन्तन सीमित हुन्छ किनभने तिनका इन्द्रियहरू अपूर्ण छन्, त्यसैले तिनीहरूको निष्कर्ष पनि विपरीत हुन्छ, निराकारवादी हुन्छ। प्रकृतिका तीन गुणहरूद्वारा निराकारको अभिव्यक्ति हुँदैन। मानसिक चिन्तनद्वारा मात्रै तिनीहरू कुनै वस्तुको कल्पना गर्न सक्दछन् तर यस्ता मूर्खतापूर्ण चिन्तनद्वारा भगवान् श्रीकृष्णलाई बुझ्न सम्भव छैन।

भगवान् यहाँ अप्रत्यक्ष रूपले भन्नु हुन्छ— "यदि कसैले परमसत्यलाई जान्न चाहन्छ भने म भगवान्का रूपमा यहाँ उपस्थित भएको छु, म नै परमात्मा हूँ।" यो कुरा मानिसले बुझ्नु पर्दछ। भगवान् अचिन्त्य हुनुहुन्छ। त्यस्ता अचिन्त्य भगवान्लाई प्रत्यक्ष रूपमा उपस्थित हुँदा मानिसले चिन्न सक्दैन, तैपनि उहाँ त्यहा विद्यमान रहिरहनु हुन्छ। हामीले *श्रीमद्भगवद्गीता* र *श्रीमद्भागवत्मा* उहाँका वाणीहरूको अध्ययन गरेपछि मात्र सच्चिदानन्दले परिपूर्ण श्रीकृष्णलाई यथार्थमा बुझ्न सक्दछौँ। भगवान्को अपराशक्तिअन्तर्गत रहेका व्यक्तिले भगवान्लाई कुनै शासक शक्ति वा निराकार ब्रह्मका रूपमा अनुभव गर्दछन् तर भगवान्लाई यथार्थ रूपमा अनुभव गर्नका लागि मानिसले आफूलाई दिव्य अवस्थामा पुऱ्याउनु पर्दछ।

अधिकांश मानिसहरूले भगवान् श्रीकृष्णलाई यथार्थ रूपमा बुझ्न सक्दैनन्। यस्ता विचारकहरूमाथि दया देखाउनका लागि अहैतुकी कृपावश उहाँले अवतार लिनु हुन्छ। यी चिन्तकहरू भगवान्का असामान्य क्रियाकलापलाई देख्दादेख्दै पनि मायाशक्तिको कल्मषले गर्दा निराकार ब्रह्म नै सर्वश्रेष्ठ हो भन्ने सोच्दछन्। भगवान्का चरणमा पूर्णतः समर्पित भएका भक्तहरूले मात्र परमेश्वरका कृपाले श्रीकृष्ण नै परमात्मा हुनुहुन्छ भन्ने कुरा बुझ्न सक्दछन्। भगवान्का भक्तहरूले निराकार ब्रह्मको वास्ता गर्दैनन्। आफ्नै श्रद्धा र भक्तिले तिनीहरूलाई तुरुन्त भगवान्मा समर्पित बनाउँदछ अनि श्रीकृष्णका कृपाले तिनीहरू कृष्णतत्त्व बुझ्न सक्ने हुन्छन्। यी बाहेक अरू कसैले पनि उहाँलाई चिन्दैनन्। जसलाई हामी आत्मा वा परमात्मा भनेर पूजा गर्दछौँ उहाँ भगवान् श्रीकृष्ण नै हुनुहुन्छ भन्ने कुरामा ठुलाठुला महर्षिहरू पनि सहमत छन्।

**यो मामजमनादिं च वेत्ति लोकमहेश्वरम् ।**
**असम्मूढः स मर्त्येषु सर्वपापैः प्रमुच्यते ॥ ३ ॥**

**यः** — जो; **माम्** — मलाई; **अजम्** — अजन्मा; **अनादिम्** — आदिरहित; **च** — पनि; **वेत्ति** — जान्दछ; **लोक** — लोकहरूका; **महेश्वरम्** — परमस्वामी; **असम्मूढः** — मोहरहित; **सः** — त्यो; **मर्त्येषु** — मरणशीलहरूका बीचमा; **सर्वपापैः** — सबै पापकर्महरूबाट; **प्रमुच्यते** — मुक्त हुन्छ।

**जसले मलाई अजन्मा, अनादि, सबै लोकका महान् ईश्वर भनेर बुझेको छ त्यही व्यक्ति मानिसहरूमा मोहरहित हो र त्यही व्यक्ति सबै पापहरूबाट मुक्त पनि हुन्छ।**

**तात्पर्य :** *भगवद्गीताको* सातौँ अध्यायमा भनिएको छ— **मनुष्याणां सहस्त्रेषु**

**कश्चित् यतति सिद्धये।** अर्थात्, जसले आध्यात्मिक क्षेत्रमा आफूलाई आत्मसाक्षात्कारको स्तरसम्म उठाउने प्रयास गरिरहेका छन् ती साधारण मानिस होइनन्। तिनीहरू अध्यात्मज्ञान नभएका साधारण व्यक्तिहरूभन्दा लाखौँ गुण श्रेष्ठ हुन्। तर जो वास्तवमा आफ्नो आध्यात्मिक स्थितिलाई बुझ्ने प्रयास गर्दछ, त्यसले श्रीकृष्ण भगवान् नै हुनुहुन्छ भन्ने बुझ्दछ वा श्रीकृष्ण नै हरेक वस्तुका सञ्चालक, अजन्मा हुनुहुन्छ भन्ने कुरा अनुभव गर्दछ। त्यो अत्यन्त सफल आध्यात्मिक अनुभूति प्राप्त गरेको व्यक्ति हो। भगवान् श्रीकृष्णको वास्तविक अवस्थालाई पूर्णतया बुझेको व्यक्ति मात्रै सम्पूर्ण पापकर्महरूबाट राम्ररी मुक्त हुन्छ।

यहाँ भगवान्लाई अज वा अजन्मा भनिएको छ तर दोस्रो अध्यायमा उहाँ जीवात्मालाई भनिएको अजभन्दा भिन्न हुनुहुन्छ। भगवान् भौतिक आसक्तिका कारणले जन्म लिने र मर्ने जीवात्माहरूभन्दा भिन्दै हुनुहुन्छ। बद्धजीवहरूले आफ्नो शरीर परिवर्तन गर्दछन् तर भगवान्को शरीर अपरिवर्तनशील छ। उहाँ यो भौतिक संसारमा आउनुहुँदा पनि उस्तै शरीरमा अजन्मा नै भएर आउनु हुन्छ, त्यसैले चौँथो अध्यायमा भनिएको छ— भगवान् आफ्नो अन्तरङ्ग शक्तिको सहायताले गर्दा भौतिकशक्ति वा अपराशक्तिका अधीनमा रहनु हुन्न। उहाँ सधैँ पराशक्तिकै अधीनमा रहनु हुन्छ।

यस श्लोकमा आएका **वेत्तिलोक महेश्वरम्** भन्ने शब्दावलीले के सङ्केत गरेको छ भने, भगवान् कृष्ण यस ब्रह्माण्डका सबै लोकहरूका परमस्वामी हुनुहुन्छ। सृष्टिभन्दा पूर्व पनि उहाँको अस्तित्व थियो र उहाँ सृष्टिभन्दा भिन्न पनि हुनुहुन्छ। सबै देवताहरू यसै जगत्मा जन्मिएका हुन् तर जहाँसम्म कृष्णको सम्बन्ध छ, उहाँ अजन्मा हुनुहुन्छ। त्यसैले कृष्ण शिव, ब्रह्माजस्ता महान् देवताहरूभन्दा पनि भिन्न हुनुहुन्छ। उहाँ ब्रह्मा, शिव र अरू सबै देवताहरूका स्रष्टा हुनुभएकाले सम्पूर्ण लोकहरूका परमपुरुष हुनुहुन्छ।

अतः कृष्ण सृष्टि गरिएका सबै कुराहरूदेखि भिन्न हुनुहुन्छ। जसले उहाँलाई यस रूपमा चिन्दछ त्यो व्यक्ति तुरुन्त समस्त पापपूर्ण कर्मफलहरूबाट मुक्त हुन्छ। परमज्ञान प्राप्त गर्नका लागि मानिस सबै पापपूर्ण क्रियाकलापबाट मुक्त हुनु पर्दछ। *भगवद्गीतामा* भनिएअनुसार भगवान्लाई भक्तिबाट मात्र जान्न सकिन्छ, अरू उपायबाट होइन। कृष्णलाई सामान्य मानिस मान्नु हुँदैन। पहिले नै भनिसकिएको छ— केवल मूर्खहरू मात्र कृष्णलाई सामान्य मानिस ठान्दछन्। यसलाई फेरि यहाँ अलि भिन्नै प्रकारले वर्णन गरिएको छ। जो मूर्ख छैन र जसले भगवान्को वास्तविक स्वरूपलाई राम्रोसँग बुझ्न सक्दछ त्यो सबै प्रकारका पापपूर्ण गतिविधिहरूबाट सधैँ मुक्त रहन्छ।

देवकीका छोराका रूपमा चिनिनुहुने भगवान्लाई कसरी अजन्मा मान्न सकिन्छ? यो प्रश्नको उत्तर *श्रीमद्भागवत्मा* व्याख्या गरिएको छ। वसुदेव र देवकीका अगाडि श्रीकृष्ण प्रकट हुनुहुँदा उहाँ साधारण बालकका रूपमा जन्मिनुभएको थिएन। त्यस समय उहाँ आफ्नो वास्तविक स्वरूपमा प्रकट हुनुभएको थियो र पछिमात्र उहाँले सामान्य बालकका रूपमा आफूलाई परिवर्तन गर्नुभएको थियो।

भगवान् श्रीकृष्णका निर्देशनमा रहेर जे गरिन्छ त्यो दिव्य हुन्छ, त्यस्तो कार्य शुभ वा अशुभ फलबाट दूषित हुन सक्दैन। भौतिक संसारमा यो शुभ र यो अशुभ भन्ने धारणा नै ठीक होइन, यो त मानिसको मानसिक चिन्तनमा निर्भर पर्ने कुरा हो। वास्तवमा भन्ने हो भने भौतिक संसारमा शुभ भन्ने वस्तु नै केही छैन। प्रकृति स्वयम् नै अशुभ भएका कारणले यहाँको हरेक वस्तु अशुभ छ। यो वस्तु पवित्र वा शुभ हो भन्नु हाम्रो कल्पना मात्र हो। वास्तविक शुभ वा पवित्रता भक्तिभाव र सेवाभावले पूर्ण कृष्णभावनाभावित क्रियाकलापमा निर्भर हुन्छ। यदि हामी हाम्रा क्रियाकलापहरू शुभ वा पवित्र होऊन् भन्ने चाहना गर्दछौँ भने परमेश्वरकै निर्देशनमा रहेर काम गर्नु पर्दछ। भगवान्का यस्ता निर्देशनहरू *श्रीमद्भागवत्* तथा *भगवद्गीताजस्ता* प्रामाणिक शास्त्रहरूमा दिइएको छ। साथै सुयोग्य गुरुबाट पनि हामी यस्ता निर्देशन पाउन सक्दछौँ। सुयोग्य गुरु पनि भगवान्कै प्रतिनिधि हुनेहुनाले गुरुले दिने निर्देशन पनि प्रत्यक्ष रूपले भगवान्कै निर्देशन हो। गुरुले, सन्तले र शास्त्रले दिने निर्देशन उस्तै प्रकारका हुन्छन्। यी तीन स्रोतहरूमा कुनै विरोधाभास हुँदैन। यस्ता निर्देशनमा गरिने सबै कार्यहरू संसारका शुभ वा अशुभ कर्मफलबाट मुक्त हुन्छन्। भक्तहरूको काम गर्ने शैली र मनोवृत्ति नै दिव्य र त्यागपूर्ण हुन्छन्। त्यसैलाई संन्यास भनिन्छ। *भगवद्गीताको* छैठौँ अध्यायको पहिलो श्लोकमा **अनाश्रित कर्मफलं** भनिएको छ—जसले भगवान्को आज्ञानुसार काम गर्नु नै मेरो कर्तव्य हो भन्ने ठानेर कर्म गर्दछ र आफ्ना कर्मको प्रतिफलको आशा राख्दैन त्यो नै सच्चा संन्यासी हो। भगवान्को निर्देशनमा रहेर कर्म गर्ने व्यक्ति नै यथार्थ संन्यासी वा योगी हो। संन्यासीको लुगा लगाएर मात्रै र योगीको अभिनय गरेर मात्रै कोही पनि संन्यासी वा योगी हुन सक्दैन।

**बुद्धिर्ज्ञानमसम्मोहः क्षमा सत्यं दमः शमः ।**
**सुखं दुःखं भवोऽभावो भयं चाभयमेव च ॥ ४ ॥**
**अहिंसा समता तुष्टिस्तपो दानं यशोऽयशः ।**
**भवन्ति भावा भूतानां मत्त एव पृथग्विधाः ॥ ५ ॥**

**बुद्धिः** — बुद्धि; **ज्ञानम्** — ज्ञान; **असम्मोहः** — शङ्का नहुनु; **क्षमा** — क्षमा; **सत्यम्** — सत्यता; **दमः** — इन्द्रियनियन्त्रण; **शमः** — मनको नियन्त्रण; **सुखम्** — सुख; **दुःखम्** — दुःख; **भवः** — जन्म; **अभावः** — मृत्यु; **भयम्** — डर; **च** — पनि; **अभयम्** — अभय (निडरता); **एव** — पनि; **च** — तथा; **अहिंसा** — अहिंसा; **समता** — समभाव; **तुष्टिः** — सन्तुष्टि; **तपः** — तपस्या; **दानम्** — दान; **यशः** — कीर्ति; **अयशः** — अपयश (अपकीर्ति); **भवन्ति** — हुन्छन्; **भावाः** — अवस्थाहरू; **भूतानाम्** — प्राणीहरूका; **मत्तः** — मबाटै; **एव** — निश्चय नै; **पृथग्विधाः** — विभिन्न प्रकारका।

**बुद्धि, ज्ञान, सन्देह र मोहबाट मुक्ति, क्षमा, सत्य, इन्द्रिय नियन्त्रण, मनको नियन्त्रण, सुख, दुःख, जन्म, मृत्यु, डर, निर्भयता, अहिंसा, समता, सन्तोष, तप, दान, यश, अपयशलगायत जीवात्माका सबै गुण वा भावहरू मबाट नै उत्पन्न हुन्छन्।**

**तात्पर्य :** जीवात्माका विविध किसिमका राम्रा नराम्रा सम्पूर्ण गुणहरूको उत्पत्ति भगवान् श्रीकृष्णबाटै हुन्छ, जसको चर्चा यहाँ गरिन्छ।

**बुद्धि** शब्दको अर्थ सही-गलत छुट्याउने शक्ति हो भने **ज्ञानको** तात्पर्य आत्मा र पदार्थलाई चिन्नु हो। सामान्यतया, विश्वविद्यालयीय शिक्षाबाट प्राप्त हुने ज्ञान पदार्थसँग मात्र सम्बन्धित हुन्छ। यस्तो ज्ञानलाई यहाँ ज्ञानका रूपमा स्वीकार गरिएको छैन। ज्ञानको अर्थ नै आत्मा र पदार्थबीचको अन्तर थाहा पाउनु हो। आधुनिक शिक्षामा आत्माका सम्बन्धमा कुनै ज्ञान दिइँदैन। त्यहाँ केवल भौतिक पदार्थहरू र शारीरिक आवश्यकताका बारेमा मात्र ध्यान दिइन्छ। त्यसैले उक्त शैक्षिक ज्ञान पूर्ण छैन। **असम्मोहको** अर्थ शंका र भ्रमबाट मुक्ति हो। यस्तो अवस्थामा पुग्नका लागि मानिसले प्रथमतः दिव्य दर्शनलाई बुझ्नु पर्दछ। अनि द्विविधाबाट मुक्त हुनु पर्दछ। यति भएपछि ऊ विस्तारै तर निश्चित रूपले मोहबाट मुक्त हुन्छ। हरेक कुरालाई ध्यानपूर्वक र सतर्कतापूर्वक स्वीकार गर्नुपर्छ, अन्धो बनेर कुनै कुरालाई ग्रहण गर्नु हुँदैन। **क्षमा** वा सहनशीलताको अभ्यास गर्नु पर्दछ। अरूका सानातिना अपराध वा गल्तीलाई सहन गर्नु पर्दछ वा क्षमा दिनु पर्दछ। मानिसहरूको हितका लागि जे जस्तो छ त्यसलाई जस्ताको तस्तै प्रस्तुत गर्नुलाई **सत्य** भनिन्छ। सत्यलाई गलत तरिका प्रस्तुत गर्नु हुँदैन। हाम्रो सामाजिक चलनअनुसार भन्ने गरिन्छ— सत्य बोल्नु पर्दछ तर त्यो श्रवण गर्नेका लागि रुचिकर हुनु पर्दछ। तर त्यो सत्यता होइन। सत्य जस्ताको तस्तै बोलिदिनु पर्दछ, जसले गर्दा अरूहरूले पनि वास्तविक कुरा के हो भन्ने बुझ्नसकून्। यदि कुनै मानिस चोर छ, र ऊ चोर भएको जानकारी अरूलाई पनि दिइन्छ, भने त्यो सत्य हो।

कहिलेकाहीँ सत्य अप्रिय हुन सक्दछ। तापनि सत्य बोल्न हिच्किचाउनु हुँदैन। मानिसहरूको लाभका लागि वास्तविकता जे हो त्यही भनिदिनु नै सत्यको माग हो। सत्यको परिभाषा पनि यही हो।

इन्द्रियनियन्त्रण वा **दम**को अर्थ अनावश्यक एवं वैयक्तिक भोगमा इन्द्रियहरूलाई नलगाउनु हो। इन्द्रियहरूका उचित आवश्यकताको पूर्ति गर्नुलाई निषेध गरिएको छैन तर आवश्यकताभन्दा बढी इन्द्रियभोग गर्नु आध्यात्मिक उन्नतिमा बाधक बन्दछ, त्यसैले इन्द्रियहरूको अनावश्यक दुरुपयोग गर्नु हुँदैन। त्यसै गरी मनलाई पनि अनावश्यक विचारबाट रोक्नुपर्छ, यसैलाई **शम** भनिन्छ। मानिसले धेरै धन कमाउने विचारमा मात्रै पनि आफ्नो समय खर्च गर्नुहुन्न। यो सोच्ने शक्तिको दुरुपयोग हो। मनलाई मानिसका मूलभूत आवश्यकताहरू बुझ्ने काममा लगाउनु पर्दछ र त्यसलाई आधिकारिक रूपमा प्रस्तुत गर्नु पर्दछ। शास्त्रवेत्ता सन्तपुरुषहरू आध्यात्मिक गुरुजन र ठुलाठुला विचारकहरूका सङ्गतमा रहेर आफ्नो विचारशक्ति वा चिन्तनशक्तिको विकास गर्नु पर्दछ। आध्यात्मिक ज्ञान वा कृष्णभावनाको विकास गर्नका लागि सधैँ अनुकूल प्राप्तहुनु नै **सुख** वा खुशी हो। त्यसै गरी, कृष्णभावनाको विकासमा असुविधा हुनु **दुःख** वा पीडाको स्थिति हो। कृष्णभावनाको विकासका लागि जे कुरा अनुकूल हुन्छ त्यसलाई स्वीकार गर्नु पर्दछ र जुन कुरा प्रतिकूल हुन्छ त्यसलाई अस्वीकार गर्नु पर्दछ।

**भव** अर्थात् जन्म शरीरसँग सम्बन्धित कुरा हो। जहाँसम्म आत्माको सम्बन्ध छ, आत्मा न कहिल्यै जन्मिन्छ, न कहिल्यै मर्दछ, यसको चर्चा हामीले *भगवद्गीताको* सुरुमै गरेका छौँ। जन्म र मृत्युको सम्बन्ध संसारमा आएर शरीर धारण गर्नुसँग छ। भविष्यका बारेमा गरिने चिन्ताका कारणले डर उत्पन्न हुन्छ। कृष्णभावनामा लागेका मानिसलाई डर हुँदैन, किनभने आफ्ना कर्मद्वारा स्वधाम अर्थात् भगवद्धाममा पुग्दछु भन्ने कुरामा ऊ ढुक्क हुन्छ। फलस्वरूप, उसको भविष्य पनि उज्ज्वल हुन्छ तर अरूहरूलाई आफ्ना भविष्यका बारेमा केही जानकारी हुँदैन। आगामी जीवनमा के हुन्छ भन्ने ज्ञान तिनीहरूसँग हुँदैन। फलस्वरूप, उनीहरू निरन्तर चिन्ताग्रस्त रहन्छन्। यदि चिन्ताबाट मुक्त हुनचाहने हो भने त्यसको सबैभन्दा राम्रो उपाय भगवान् श्रीकृष्णलाई बुझ्नु र सधैँ कृष्णभावनामा स्थित रहनु हो। यसो गर्नाले हामी सबै डरबाट मुक्त हुन्छौँ। *श्रीमद्भागवत्* (११.२.३७)मा भनिएको छ— **भयं द्वितीयाभिनिवेशतः स्यात्** अर्थात्, मायाका शक्तिमा फँसेको कारणले हामीमा भय उत्पन्न हुन्छ। तर, जो मायाका शक्तिबाट मुक्त छन्, जसलाई म भौतिक शरीर होइन भन्ने दृढ विश्वास छ, जसले आफूलाई भगवान्‌कै अंश

हूँ भन्ने ठानेका छन् र भगवान्कै सेवामा आफूलाई संलग्न गराइराखेका छन् तिनीहरूलाई कुनै डर हुँदैन। तिनीहरूको भविष्य अत्यन्त उज्ज्वल हुन्छ। यस्तो डर तिनीहरूलाई मात्र हुन्छ जो कृष्णभावनामा संलग्न छैनन्। भगवान् श्रीकृष्णका सेवामा अर्थात् श्रीकृष्णका भक्तिमा संलग्न व्यक्तिहरूलाई मात्रै निर्भय वा **अभय** हुनु सम्भव छ।

**अहिंसाको** तात्पर्य कसैलाई पनि दुःख नदिनु वा नसताउनु हो। धेरै राजनेताहरू, समाजसेवीहरू, परोपकारीहरू आदिबाट विभिन्न भौतिक कार्यहरू सम्पन्न हुन्छन् तर त्यस्ता कार्यबाट त्यति राम्रो प्रतिफल निस्कँदैन, किनभने ती राजनीतिज्ञहरू र परोपकारीहरूसँग कुनै दिव्य दृष्टि हुँदैन अनि मानव समाजका लागि वास्तविक लाभदायक कुरा के हो भन्ने पनि तिनीहरूलाई थाहा हुँदैन। मानव शरीरको पूर्णरूपमा सदुपयोग हुने काममा मानिसलाई प्रशिक्षित तुल्याउनु नै अहिंसा हो। मानिसको शरीर आत्मसाक्षात्कार गर्नका लागि हो। जुन संस्था वा संगठनबाट यस प्रकारको उद्देश्यपूर्तिमा प्रोत्साहन पाइदैन त्यसबाट मानवशरीरप्रति हिंसा भएको ठहरिन्छ। सामान्यतया, जुन कार्यबाट मानिसका भविष्यमा आध्यात्मिक सुखको वृद्धि हुन्छ त्यसैलाई अहिंसा भनिन्छ।

**समता** भन्ने शब्दले राग र द्वेषबाट मुक्ति भन्ने अर्थ बुझाउँदछ। अत्यन्त अनुराग पनि राम्रो होइन र अत्यन्त द्वेष पनि राम्रो होइन। राग र द्वेषबाट मुक्त भएर यो संसारलाई स्वीकार गर्नु पर्दछ। जुनजुन कुराले कृष्णभावना वा कृष्णप्रेम उत्पन्न गर्नमा सहयोग पुऱ्याउँदछन् तिनलाई स्वीकार्नु पर्दछ र जुन कुरा कृष्णभावनाका प्रतिकूल छन् तिनलाई अस्वीकार गर्नु पर्दछ। यसैलाई भनिन्छ-समता। कृष्णभावनामा लागेका व्यक्तिहरूका निमित्त न कुनै कुरा ग्राह्य हुन्छ न त्याज्य नै। कृष्णभावना सम्पन्न गर्नका लागि त्यस वस्तुको उपयोगिता कति छ त्योसँग मात्र उसको सम्बन्ध हुन्छ।

**तुष्टि** शब्दको अर्थ हो सन्तोष। अनावश्यक काम गरेर धेरैभन्दा धेरै भौतिक वस्तुहरूको सङ्ग्रह गर्ने कामप्रति इच्छुक हुनु हुँदैन। ईश्वरका कृपाले जेजति प्राप्त हुन्छ त्यसैमा सन्तोष गर्नु पर्दछ, त्यसैलाई **तुष्टि** भनिन्छ। **तपस** को अर्थ तपस्या हो। यसअन्तर्गत वेदमा भनिएका विभिन्न विधिविधानहरूको पालन गर्नु पर्दछ, जस्तै-बिहानै उठ्नु, स्नान गर्नु इत्यादि। कहिलेकाहीँ बिहानै उठ्ने काम निकै गाह्रो हुन्छ तर स्वेच्छाले यस्ता कष्टहरू सहनुलाई तपस्या भनिन्छ। त्यसै गरी, महिनाका केही निश्चित दिनहरूमा उपवास बस्ने विधान पनि छ। कसैलाई यस्तो उपवास बस्ने इच्छा नहुन पनि सक्दछ तर कृष्णभावनाको विज्ञानमा प्रगति गर्ने सङ्कल्प लिइसकेपछि यस किसिमका

शारीरिक कष्टहरू पनि उठाउनैपर्ने हुन्छ। तर, वैदिक निर्देशनका विरुद्ध उपवास गर्नु कुनै आवश्यकता छैन। मानिसले कुनै राजनीतिक कारणले उपवास गर्नुहुन्न। त्यस्तो उपवासलाई *भगवद्गीतामा* तामसी उपवास भनिएको छ। तामसी वा राजसी तरिकाले गरिएको कुनै पनि कार्यले आध्यात्मिक उन्नति हुन सक्दैन। सतोगुणमा रहेर गरिएको कुनै पनि कार्यले मानिसलाई समुन्नत बनाउँदछ, त्यसैले वैदिक निर्देशनहरूका अनुसार गरिएको उपवासले आध्यात्मिक ज्ञानलाई अझ समृद्ध बनाउँदछ।

जहाँसम्म **दान**-को सम्बन्ध छ, मानिसले आफ्नो आयआर्जनको ५० प्रतिशत अंश कुनै पुण्यकार्यमा लगाउनु पर्दछ। तर कस्तो कार्यलाई पुण्य कर्म भन्ने ? निश्चय नै कृष्णभावनामा रहेर गरिने कार्यहरू पुण्य कर्म हुन् वा शुभ कार्य हुन्। यस्ता कार्यलाई शुभ कार्य मात्र नभनेर सर्वोत्तम भन्नु पर्दछ। किनभने भगवान् श्रीकृष्ण स्वयम् शुभ, पुण्यमय हुनुहुन्छ, त्यसैले उहाँका कार्यहरू पनि शुभ, मङ्गलमय हुन्छन्। अतः कृष्णभावनामा संलग्न व्यक्तिहरूलाई मात्रै यस प्रकारको दान दिनु पर्दछ। वैदिक साहित्यमा ब्राह्मणलाई दान दिनु पर्दछ भनिएको छ। यो प्रचलन अझ पनि चलिआएको छ, हुनत अहिले यसको रूप वेदमा वर्णन गरिएजस्तो छैन। तैपनि वेदको आदेश छ— दान ब्राह्मणहरूलाई नै दिनु पर्दछ। किन ? किनभने तिनीहरू आध्यात्मिक ज्ञानको उच्च विकासमा लागेका हुन्छन्। आफ्नो सम्पूर्ण जीवनलाई ब्रह्मज्ञान प्राप्त गर्ने कार्यमा लगाएका व्यक्ति ब्राह्मण मानिन्छन्। भनिएको पनि छ, **ब्रह्मं जानाति ब्राह्मणः** अर्थात् जसले ब्रह्मलाई जानेको छ त्यो ब्राह्मण हो। त्यसैले ब्राह्मणलाई दान दिइनेगरेको हो, किनभने उनीहरू निरन्तर उच्चतम आध्यात्मिक सेवामा लागिरहेका हुन्छन् र जीविकोपार्जन गर्ने समय तिनले पाउँदैनन्। वैदिक साहित्यमा संन्यासीलाई पनि दान दिने आदेश छ। संन्यासीहरू ढोकाढोकामा गएर भिक्षा माग्दछन् तर यस्तो भिक्षा उनीहरूले आयआर्जनका लागि होइन ज्ञानको प्रचारका लागि माग्दछन्। गृहस्थहरूलाई अज्ञानको घोर निद्राबाट उठाउनका लागि संन्यासीहरू भिक्षा माग्ने बहानाले घरघरमा जाने गर्दछन्। पारिवारिक क्रियाकलापमा संलग्न रहँदा गृहस्थहरू आफ्नो जीवनको वास्तविक उद्देश्य, कृष्णभावना जागृत गर्ने कार्य नै बिर्सिन पुग्दछन्। त्यसैले भिक्षार्थी बनेर संन्यासीहरू गृहस्थकहाँ पुग्दछन् र तिनलाई कृष्णभावनामा उत्प्रेरित गर्दछन्, यो उनीहरूको कर्तव्य पनि हो। वेदमा भनिएको छ मानिसले जागरूक भएर मानव जीवनमा प्राप्त गर्नुपर्ने कुरा पाएरै छोड्नु पर्दछ। संन्यासीहरूद्वारा यही विधि र यही ज्ञान वितरण गरिन्छ। त्यसैले संन्यासीलाई र ब्राह्मणलाई यस्तै उत्तम कार्य गरेबापत दान दिनु पर्दछ। दान भन्ने कुरा मनमानी किसिमले जोसुकैलाई दिने विषय होइन।

**यशस्** अर्थात् कीर्ति वा प्रसिद्धि पनि भगवान् चैतन्य महाप्रभुले भनेअनुसारको हुनु पर्दछ। उहाँले भन्नुभएको छ— त्यही व्यक्ति प्रसिद्ध हुन्छ जो महान् भक्तका रूपमा चिनिएको छ। वास्तविक कीर्ति भनेकै यही हो। कृष्णभावनामा महान् भएको व्यक्ति नै विख्यात हुन्छ र त्यो मानिस वास्तवमै प्रसिद्ध हुन्छ। यी सारा गुणहरू संसारभरिका मानवसमाजमा र देवसमाजमा पनि प्रकट हुन्छन्। अन्य लोकहरूमा पनि विभिन्न किसिमका मानिसहरू छन् र यी गुणहरू त्यहाँ पनि छन्। कृष्णभावनामा उन्नति गर्नचाहनेहरूका लागि भगवान् श्रीकृष्णले यी सबै गुणहरू उत्पन्न गरिदिनु हुन्छ तर यिनको विकास मानिसले स्वयम् आफैंभित्रबाट गर्नु पर्दछ। भगवान्‌को भक्तिमय सेवामा लागेको व्यक्तिले भगवान्‌को योजनाअनुसार सम्पूर्ण असल गुणको विकास गर्दछ।

हामीले संसारमा राम्रा वा नराम्रा जेजस्ता वस्तुहरू देख्दछौँ ती सबैको मूल भगवान् श्रीकृष्ण नै हुनुहुन्छ। भगवान् श्रीकृष्णमा नभएको कुनै पनि वस्तु यस संसारमा स्वतः उत्पन्न हुन सक्दैन। यही नै वास्तविक ज्ञान हो। हामीले वस्तुहरूलाई भिन्दाभिन्दै किसिमले अवस्थित भएको देखे पनि ती हरेक वस्तु भगवान् श्रीकृष्णबाटै प्रवाहित हुन्छन्, उत्पन्न हुन्छन्। यसको अनुभूति हामीमा हुनु पर्दछ।

**महर्षयः सप्त पूर्वे चत्वारो मनवस्तथा ।**
**मद्भावा मानसा जाता येषां लोक इमाः प्रजाः ॥ ६ ॥**

**महर्षयः** — महर्षिहरू; **सप्त** — सात; **पूर्वे** — पहिले; **चत्वारः** — चार; **मनवः** — मनुहरू; **तथा** — तथा; **मत्भावाः** — मबाट उत्पन्न; **मानसाः** — मनबाट; **जाताः** — पैदा भएका; **येषाम्** — जसका; **लोक** — संसारमा; **इमाः** — यी सबै; **प्रजाः** — सन्तानहरू (जीवहरू)।

**सातजना महर्षिहरू, त्योभन्दा पूर्वका चारजना महर्षिहरू, मनुहरू ( मनुष्य जातिका पूर्वज ) सबै मबाट अर्थात् मेरा मनबाट उत्पन्न भएका हुन् र विभिन्न लोकमा निवास गर्ने सम्पूर्ण जीवात्माहरू तिनीहरूबाट उत्पन्न भएका हुन्।**

**तात्पर्य** : भगवान्‌ले यहाँ ब्रह्माण्डका प्रजाहरूको आनुवंशिक वर्णन गरिरहनुभएको छ। ब्रह्माजी सबैभन्दा जेष्ठ जीव हुन् र उनी हिरण्यगर्भका नामले चिनिने परमेश्वरको शक्तिबाट जन्मेका हुन्। ब्रह्माबाट सात महर्षिहरू र तीभन्दा पहिले सनक, सनन्दन, सनातन र सनतकुमार यी चार महर्षिहरू उत्पन्न भए अनि त्यसपछि मनुहरूको जन्म भयो। यी पच्चीसजना महान्

ऋषिहरू सम्पूर्ण विश्वब्रह्माण्डभरिका प्राणीहरूका प्रजापति मानिन्छन्। सृष्टिमा अनगिन्ती ब्रह्माण्डहरू र अनगिन्ती लोकहरू छन् र ती प्रत्येक ब्रह्माण्ड तथा लोकहरू विभिन्न प्रकारका जीवयोनिहरूले भरिएका छन्। ती सम्पूर्ण जीवात्माहरू यिनै पच्चीसजना प्रजापतिहरूबाट जन्मिएका हुन्। भगवान् श्रीकृष्णका कृपाले आत्मसाक्षात्कार गर्नुअघि ब्रह्माजीले एक हजार दिव्य वर्ष तपस्या गरे। अनि उनलाई सृष्टि कसरी गर्ने भन्ने कुराको ज्ञान भयो। त्यसपछि ब्रह्माबाट सनक, सनन्दन, सनातन र सनतकुमारको जन्म भयो, त्यसपछि रुद्रको जन्म भयो र त्यसपछि सप्तर्षिहरू जन्मिए। यस्तै प्रकारले भगवान्‌की शक्तिबाट सम्पूर्ण ब्राह्मणहरू र क्षत्रीयहरूको जन्म भयो। ब्रह्मालाई पितामह भनिन्छ र भगवान् श्रीकृष्णलाई प्रपितामह, अर्थात् उहाँलाई पितामहका पनि पिता भनिन्छ। *भगवद्गीताको* एघारौँ अध्यायमा यसको चर्चा गरिएको छ।

**एतां विभूतिं योगं च मम यो वेत्ति तत्वतः ।**
**सोऽविकल्पेन योगेन युज्यते नात्र संशयः ॥ ७ ॥**

**एताम्** — यी सबै; **विभूतिम्** — ऐश्वर्यलाई; **योगम्** — योगलाई; **च** — पनि; **मम** — मेरो; **यः** — कसैले; **वेत्ति** — जान्दछ; **तत्वतः** — यथार्थ रूपमा; **सः** — त्यो; **अविकल्पेन** — अखण्डित रूपले; **योगेन** — भक्तिपूर्वक; **युज्यते** — लागिरहन्छ; **न** — छैन; **अत्र** — यहाँ; **संशयः** — सन्देह।

**मेरो यो ऐश्वर्य र योगमा जसलाई वास्तवमा पूर्ण विश्वास छ, त्यो व्यक्ति मेरो अहैतुकी भक्तिमा लाग्दछ, यसमा कुनै शंका छैन।**

**तात्पर्य :** आध्यात्मिक पूर्णताको सर्वोच्च परिणति भगवद्ज्ञान हो। भगवान्‌का विभिन्न ऐश्वर्यहरूमा दृढ विश्वास नभएसम्म मानिस भक्तिसेवामा लाग्न सक्दैन। भगवान् महान् हुनुहुन्छ भन्ने कुरा साधारणतया सबैलाई थाहा छ तर भगवान् कसरी महान् हुनुहुन्छ भन्ने कुराको पूर्ण जानकारी सबै मानिसलाई हुँदैन। त्यसको विस्तृत विवरण यहाँ दिइएको छ। भगवान् कसरी महान् हुनुहुन्छ भन्ने कुरा यथार्थ रूपमा जानेपछि मानिस स्वाभाविक रूपले भगवान्‌को शरणागत बन्न पुग्दछ र आफूलाई सधैँ भगवान्‌कै सेवामा संलग्न गराउँदछ। भगवान्‌का ऐश्वर्यको वास्तविक जानकारी पाएपछि भगवान्‌का शरणमा पर्नुबाहेक अर्को विकल्प रहँदैन। *श्रीमद्भागवत्, भगवद्गीता* र यस्तै अन्य साहित्यमा गरिएको वर्णनबाट यस किसिमको वास्तविक ज्ञान प्राप्त गर्न सकिन्छ। यस ब्रह्माण्डको प्रशासन व्यवस्था चलाउनका लागि सबै लोकहरूमा विभिन्न देवताहरूलाई नियुक्ति गरिएको छ, तीमध्ये केही

प्रमुख देवताहरू हुन्— ब्रह्मा, शिव, चार कुमारहरू र अन्य प्रजापतिहरू। ब्रह्माण्डभरिका प्रजाहरूका धेरै पितृ-पितामहहरू छन् र ती सबैको जन्म भगवान् श्रीकृष्णबाट भएको हो। भगवान् श्रीकृष्ण नै समग्र पितामहहरूका पनि आदिपितामह हुनुहुन्छ।

यी हुन् भगवान्का केही ऐश्वर्यहरू। भगवान्का यी ऐश्वर्यहरूप्रति दृढ विश्वास भएपछि मानिसले निःसन्देह महान् श्रद्धा र विश्वासका साथ भगवान् श्रीकृष्णलाई स्वीकार गर्दछ र आफूलाई भगवत्-सेवामा संलग्न गराउँदछ। भगवान्को प्रेमाभक्तिमा रुचि बढाउनका लागि नै यो विशिष्ट ज्ञानको आवश्यकता पर्दछ। भगवान् श्रीकृष्णको महान्तालाई बुझ्ने कुरामा उपेक्षा गर्नुहुन्न, किनभने श्रीकृष्णको महान्ता बुझेपछि मात्र भक्तिविज्ञानमा एकनिष्ठ हुन सकिन्छ।

**अहं सर्वस्य प्रभवो मत्तः सर्वं प्रवर्तते ।**
**इति मत्वा भजन्ते मां बुधा भावसमन्विताः ॥ ८ ॥**

**अहम्** — म; **सर्वस्य** — सबैको; **प्रभवः** — उत्पत्तिको कारण; **मत्तः** — मबाटै; **सर्वम्** — सबै वस्तुहरू; **प्रवर्तते** — उत्पन्न हुन्छन्; **इति** — यस प्रकार; **मत्वा** — जानेर; **भजन्ते** — भक्ति गर्दछन्, भज्दछन्; **माम्** — मलाई; **बुधाः** — विद्वान्जन; **भाव-समन्विताः** — भावले युक्त भएर।

**सम्पूर्ण आध्यात्मिक तथा भौतिक जगत्को उत्पत्तिको स्रोत म नै हूँ, हरेक वस्तु मबाट नै उत्पन्न हुन्छ। यो कुरा बुझेका बुद्धिमान्जन पूरा हृदय लगाएर मेरै भक्तिमा संलग्न हुन्छन् र मेरै पूजा गर्दछन्।**

**तात्पर्य :** राम्रोसँग वेदको अध्ययन गरेको र चैतन्यमहाप्रभुजस्ता महापुरुषबाट ज्ञान प्राप्त गरेको विद्वान्ले नै यी ज्ञानहरूको उपयोग कसरी गर्नु पर्दछ भन्ने जानेको हुन्छ र त्यही व्यक्तिले भौतिक र आध्यात्मिक दुवै जगत्का हरेक वस्तुका मूल कारण भगवान् श्रीकृष्ण नै हुनुहुन्छ भन्ने पनि बुझेको हुन्छ। यस प्रकारको ज्ञानले ऊ भगवद्भक्तिमा स्थिर हुन्छ। यस्तो व्यक्ति कुनै मूर्खता वा व्यर्थका टीका-टिप्पणीहरूबाट कहिल्यै पथभ्रष्ट हुन सक्दैन। भगवान् श्रीकृष्ण नै ब्रह्मा, शिव र अन्य सबै देवताहरूका मूल स्रोत हुनुहुन्छ भन्ने कुरामा वैदिक साहित्य सहमत छ। अथर्ववेद (गोपालतापिनी उपनिषद् १.२४) मा भनिएको छ— **यो ब्रह्माणं विदधाति पूर्वं यो वै वेदाँश्च गापयति स्म कृष्णः** अर्थात्, सुरुमा भगवान् श्रीकृष्णले नै ब्रह्मालाई वैदिक ज्ञानको उपदेश दिनुभएको हो र उहाँले नै भूतकालमा वैदिक ज्ञानको प्रचार गर्नुभएको हो। फेरि नारायण उपनिषद्मा भनिएको छ— **अथ पुरुषो ह वै नारायणोऽकामयत प्रजाः**

**सृजेयेति** अर्थात्, त्यसपछि भगवान् नारायणले जीवहरूको सृष्टि गर्ने इच्छा गर्नुभयो। उपनिषद्मा अगाडि भनिएको छ— **नारायणाद्, ब्रह्मा जायते, नारायणाद् प्रजापतिः प्रजायते, नारायणाद् इन्द्रो जायते, नारायणादष्टौ वसवो जायन्ते नारायणादेकादश रुद्रा जायन्ते नारायणाद् द्वादशादित्याः** अर्थात्, नारायणबाट ब्रह्माको जन्म हुन्छ, नारायणबाट प्रजापतिहरूको उत्पत्ति हुन्छ, नारायणबाट इन्द्र र आठ वसुहरू उत्पन्न हुन्छन्, नारायणबाट एघार रुद्रहरू तथा बाह्र आदित्यहरू उत्पन्न हुन्छन्। नारायण भगवान् श्रीकृष्णका अंश विस्तार हुनुहुन्छ।

उक्त वेदमा (नारायण उपनिषद्मा) भनिएको छ— **ब्रह्मण्यो देवकीपुत्र** देवकीका छोरा कृष्ण नै भगवान् हुनुहुन्छ। अनि फेरि भनिएको छ— **एको वै नारायण आसीन्न ब्रह्मा न ईशानो, नापो नाग्निसमौ नेमेद्यावापृथिवी न नक्षत्राणि नसूर्यः** अर्थात्, सृष्टिका प्रारम्भमा केवल भगवान् नारायण हुनुहुन्थ्यो, त्यस समय न ब्रह्मा थिए न शिव थिए, न आगो थियो, न चन्द्रमा थियो, न ताराहरू थिए, न आकाश थियो, न त सूर्य नै थियो। महाउपनिषद् (१) मा पनि भनिएको छ— शिवजी भगवान्का निधारबाट जन्मिनुभएको हो। वेदहरू भन्छन् ब्रह्माजी र शिवजीका जन्मदाता भगवान् नै हुनुहुन्छ, त्यसैले उहाँकै उपासना गर्नु पर्दछ। मोक्षधर्ममा भगवान् श्रीकृष्ण भन्नु हुन्छ—

*प्रजापतिं च रुद्रं च अहमेव सृजामि वै ।*
*तौ हि मां न विजानीतो मम मायाविमोहितौ ॥*

अर्थात्, प्रजापतिहरू, शिव तथा अन्य देवताहरूको जन्म मबाट भएको हो, यद्यपि उनीहरूलाई "हामी भगवान्बाट उत्पन्न भएका हौँ" भन्ने जानकारी छैन, किनभने तिनीहरू मेरी मायाशक्तिबाट मोहित छन्। वराहपुराणमा पनि भनिएको छ—

*नारायणः परो देवस्तस्माज्जातश्चतुर्मुखः ।*
*तस्माद्रुद्रोऽभवद्देवः स च सर्वज्ञतां गतः ॥*

अर्थात्, नारायण स्वयम् भगवान् हुनुहुन्छ, उहाँबाट ब्रह्मा उत्पन्न भए र ब्रह्माबाट शिवको उत्पत्ति भयो।

भगवान् श्रीकृष्ण सम्पूर्ण प्रजाहरूका उत्पत्तिका स्रोत हुनुहुन्छ र उहाँ नै हरेक वस्तुका सबैभन्दा प्रभावशाली कारण मानिनुहुन्छ। उहाँ भन्नु हुन्छ— "हरेकको जन्म मबाटै हुनेभएकाले म नै सबैका पिता वा आदिस्रोत हूँ। प्रत्येक वस्तु मेरा अधीनमा छ र मभन्दा माथि कोही छैन।" भगवान् श्रीकृष्णभन्दा

अर्को कुनै परमनियन्त्रक छैन। जसले वैदिक साहित्यलाई आधार बनाएर प्रामाणिक गुरुबाट यस किसिमले कृष्णतत्त्वलाई बुझ्दछ, उसले आफ्ना सम्पूर्ण शक्तिहरू कृष्णभावनामा लगाउँदछ र स्वयम् आफू सच्चा विद्वान् बन्दछ। त्यस्ता व्यक्तिका तुलनामा भगवान् श्रीकृष्णलाई राम्ररी नबुझ्ेका अरू सबै व्यक्ति मूर्ख ठहरिन्छन्। केवल मूर्खले मात्र श्रीकृष्णलाई सामान्य व्यक्ति ठान्दछ। कृष्णभावनामा भावित भएको व्यक्ति मूर्खहरूद्वारा भ्रमित हुँदैन। त्यस्तो व्यक्तिले *भगवद्गीताका* अप्रामाणिक टीकाहरू तथा व्याख्याहरूबाट आफूलाई टाढै राख्नु पर्दछ अनि दृढ सङ्कल्पका साथ कृष्णभावनामा अग्रसर हुनु पर्दछ।

**मच्चित्ता मद्गतप्राणा बोधयन्तः परस्परम् ।**
**कथयन्तश्च मां नित्यं तुष्यन्ति च रमन्ति च ॥ ९ ॥**

**मत्चित्ताः** — जसको मन पूर्णरूपले ममा लागेको छ; **मद्गतप्राणाः** — जसको जीवन ममा समर्पित छ; **बोधयन्तः** — बुझाउँदै; **परस्परम्** — एक आपसमा; **कथयन्तः** — कुरा गर्दै; **च** — पनि; **माम्** — मेरा विषयमा; **नित्यम्** — निरन्तर; **तुष्यन्ति** — प्रसन्न हुन्छन्; **च** — पनि; **रमन्ति** — दिव्य आनन्दको अनुभव गर्दछन्; **च** — पनि।

**मेरा शुद्ध भक्तहरू मेरो बारेमा चिन्तन गर्दछन्, तिनीहरूको जीवन मेरो सेवामा पूर्ण समर्पित हुन्छ अनि तिनीहरू सधैँ आपसमा ज्ञानको आदान-प्रदान गरेर र मेरो चर्चा-परिचर्चा गरेर परमसन्तोष तथा आनन्दको अनुभव गर्दछन्।**

**तात्पर्य :** यहाँ शुद्ध भक्तहरूका विशेषताहरूको उल्लेख गरिएको छ। शुद्ध भक्तहरूले आफूलाई भगवान्को दिव्य प्रेमाभक्तिमा पूर्णतया संलग्न राख्दछन्। उनीहरूको मन भगवान् श्रीकृष्णको चरणकमलबाट पर जाँदैन। दिव्य विषयको मात्र चर्चा तिनीहरू गर्दछन्। यस श्लोकमा विशेष गरी शुद्ध भक्तका लक्षणहरूको वर्णन गरिएको छ। भगवान्का भक्तहरू दिनको चौबीसै घण्टा भगवान्का गुण र लीलाहरूको गुणगान गर्नमा संलग्न रहन्छन्। तिनीहरूको हृदय तथा आत्मा निरन्तर भगवान् श्रीकृष्णमा निमग्न भइरहन्छ र अरू भक्तहरूसँग भगवान्को चर्चा गर्नपाउँदा प्रसन्न हुन्छन्।

भक्तिको प्रारम्भिक अवस्थामा सेवाबाट उनीहरूले दिव्य आनन्दको अनुभव गर्दछन् र परिपक्व अवस्थामा वास्तविक भगवद्प्रेममा अवस्थित हुन्छन्। त्यस्तो दिव्य अवस्थामा पुगिसकेपछि उनीहरूले भगवद्धाममा प्राप्त हुने सर्वोच्च पूर्णताको आस्वादन गर्दछन्। चैतन्य महाप्रभु भन्नु हुन्छ— यो दिव्य भगवद्भक्ति

प्राणीहरूका हृदयमा बीज रोप्नुजस्तै हो। ब्रह्माण्डका विभिन्न लोकहरूमा असङ्ख्य जीवात्माहरू विचरण गरिरहेका छन्, तीमध्ये केही जीवहरू मात्र महाभाग्यशाली हुन्छन्, फलस्वरूप तिनको भेट शुद्ध भक्तहरूसँग हुन्छ र तिनले भक्तिका बारेमा बुझ्ने अवसर प्राप्त गर्दछन्। यो भक्ति बीजजस्तै हुन्छ। यदि यो भक्तिको बीज जीवका हृदयमा रोपियो र **हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे, हरे राम हरे राम राम राम हरे हरे** यो मन्त्रको श्रवण तथा कीर्तन गरिराखेमा निरन्तर मलजल दिनाले कुनै वृक्षको बीज वृक्षमा परिणत भएर फल दिएजस्तै भक्तिरूपी बीजले पनि उम्रिएर बढेर फल दिन थाल्दछ। भौतिक जगत्‌को आवरणलाई चिरेर ब्रह्मज्योति वा आध्यात्मिक आकाशमा प्रवेश नगरेसम्म उक्त भक्तिरूपी आध्यात्मिक बिरुवा पनि विस्तारै बढिराख्दछ। आध्यात्मिक आकाशमा पुगेर पनि यो भक्तिरूपी बिरुवा सर्वोच्च लोक अर्थात् भगवान् श्रीकृष्णको लोक, गोलोक वृन्दावनमा नपुगेसम्म बढिरहन्छ। अन्ततोगत्वा यो बिरुवा भगवान्‌का चरणकमलको शरणमा पुगेर त्यहीँ विश्राम गर्दछ। विस्तारै एउटा बिरुवा वृक्षका रूपमा बढेर फूलफल दिन शुरु गरेजस्तै यो भक्तिरूपी बिरुवा पनि श्रवण-कीर्तनरूपी सिँचन प्रक्रियाले बढ्दछ र फल दिन थाल्दछ। चैतन्यचरितामृत, मध्यलीला अध्याय १९ मा यसको वर्णन गरिएको छ। त्यहाँ भनिएको छ— भक्तिरूपी पूर्ण वृक्षले जब भगवान्‌का चरणकमलको आश्रय ग्रहण गर्दछ, मानिस भगवान्‌को प्रेममा मग्न हुन्छ। जसरी पानीबिना माछा जीवित रहन सक्दैन त्यसै गरी भगवत्प्रेममा मग्न भएको व्यक्ति पनि भगवान्‌को सम्पर्कबिना एक क्षण पनि रहन सक्दैन। यस्तो अवस्थामा भगवान्‌सँगको सम्पर्कका कारणले भक्तले पनि दिव्य गुणहरू प्राप्त गर्दछ।

भगवान् र भक्तका बीच कस्तो सम्बन्ध हुन्छ भन्ने विषयको वर्णनले *श्रीमद्भागवत्* भरिएको छ, त्यसैले भक्तहरूका लागि *श्रीमद्भागवत्* अति नै प्रिय ग्रन्थ हुनपुगेको छ। यसको उल्लेख स्वयम् भागवत् (१२.१३.१८) मा पाइन्छ। **श्रीमद्भागवत् पुराणममलं यद्वैष्णवानां प्रियम्।** यस वर्णनमा भौतिक क्रियाकलापका बारेमा, आर्थिक विकासका सम्बन्धमा तथा इन्द्रियतृप्ति वा मुक्तिका विषयमा केही वर्णन गरिएको छैन। *श्रीमद्भागवत्* मात्रै एउटा यस्तो ग्रन्थ हो जसमा भगवान् र भगवान्‌का भक्तहरूको दिव्य स्वभावको पूर्ण विवरण पाइन्छ। यस प्रकार कृष्णचेतनालाई आत्मसात् गरेका व्यक्तिहरू यस्ता दिव्य साहित्यको श्रवणबाट निरन्तर आनन्द लिने गर्दछन्, जसरी वयस्क युवा-युवतीहरू पारस्परिक मिलनबाट आनन्दित हुन्छन्।

**तेषां सततयुक्तानां भजतां प्रीतिपूर्वकम् ।**
**ददामि बुद्धियोगं तं येन मामुपयान्ति ते ॥ १० ॥**

**तेषाम्** — तिनीहरूलाई; **सततयुक्तानाम्** — सधैँ तल्लीन रहने; **भजताम्** — भक्ति गर्ने; **प्रीतिपूर्वकम्** — प्रेमपूर्वक; **ददामि** — दिन्छु; **बुद्धियोगम्** — सही बुद्धि; **तम्** — त्यो; **येन** — जसद्वारा; **माम्** — ममा; **उपयान्ति** — प्राप्त हुन्छन्; **ते** — तिनीहरू।

**प्रेमपूर्वक मेरो सेवा गर्ने कार्यमा जो निरन्तर लागिरहन्छ, त्यसलाई म बुद्धि दिन्छु र त्यही बुद्धिका सहायताले उसले मलाई प्राप्त गर्दछ।**

**तात्पर्य :** यस श्लोकमा प्रयोग भएको **बुद्धियोगं** शब्द अत्यन्त अर्थपूर्ण छ। हामीलाई थाहा छ, दोस्रो अध्यायमा अर्जुनलाई उपदेश दिँदै भगवान्‌ले भन्नुभएको थियो—"तिमीलाई मैले धेरै कुरा भनिसकेँ र अब म तिमीलाई बुद्धियोगको शिक्षा दिन्छु।" त्यसैले यहाँ बुद्धियोगको व्याख्या गरिएको छ। कृष्णभावनामा रहेर कार्य गर्नुलाई बुद्धियोग भनिन्छ र यही नै उत्तम बुद्धि हो। बुद्धिको अर्थ हो बुद्धि र योगको अर्थ हो यौगिक गतिविधि वा यौगिक उन्नति। यदि कोही आफ्नो नित्यधाम भगवद्धाममा जाने प्रयासमा लागेको छ र भक्तिमार्गमा रहेर पूर्णतया कृष्णभावनालाई अपनाएको छ त्यस्ता व्यक्तिका क्रियाकलापलाई बुद्धियोग भनिन्छ। अर्को शब्दमा भन्दा, बुद्धियोग भनेको त्यो विधि हो जसद्वारा मानिस सांसारिक बन्धनबाट बाहिर निस्किन्छ। प्रगतिको परमलक्ष्य भनेको नै भगवान् श्रीकृष्ण हुनुहुन्छ। मानिसले यसलाई बुझेका छैनन्। त्यसैले भक्तहरूको सङ्गत र प्रामाणिक गुरुको आवश्यकता पर्दछ। सर्वप्रथम त मानिसलाई उन्नतिको चरम लक्ष्य भनेको भगवान् श्रीकृष्ण नै हुनुहुन्छ भन्ने जानकारी हुनुपर्‍यो। यसरी लक्ष्य स्पष्ट भइसकेपछि उक्त मार्गमा मन्द गतिमा भए पनि प्रगतिका पाइला बढ्दै जान्छन् र अन्त्यमा परमलक्ष्य प्राप्त हुन्छ।

जीवनको परमलक्ष्य जानेर पनि यदि कुनै मानिस कर्मका फलमा लिप्त रहिरहन्छ, त्यस्ता व्यक्तिका कामलाई कर्मयोग भन्दछन्। भगवान् श्रीकृष्ण नै जीवनको लक्ष्य भन्ने जानेर पनि श्रीकृष्णलाई बुझ्नका लागि मानसिक चिन्तनमा रमाउने मानिसको कार्यलाई ज्ञानयोग भनिन्छ। अनि, यदि कसैले लक्ष्यको पहिचान गरिसकेर कृष्णभावना तथा भक्तियोगमा रहेर भगवान् श्रीकृष्णको खोजी गर्दछ, त्यसले भक्तियोग वा बुद्धियोगमा काम गरिरहेको हुन्छ। यो नै परिपूर्ण योग हो। यो पूर्णयोग नै जीवनको सर्वोच्च सिद्ध अवस्था हो।

प्रामाणिक गुरु पाएर पनि र आध्यात्मिक संगठनमा लागेर पनि यदि कसैलाई प्रगति गर्नका लागि पर्याप्त बुद्धि नभए अन्तर्हृदयमा विराजमान भगवान् श्रीकृष्णले उसलाई उपदेश दिनु हुन्छ। त्यो उपदेशद्वारा उसले बिनाकठिनाइ भगवान्‌लाई प्राप्त गर्न सक्दछ। यसका लागि चाहिने योग्यता भनेको निरन्तर

कृष्णभावनामा रहेर प्रेम र भक्तिका साथ भगवान् श्रीकृष्णलाई सबै प्रकारका सेवा अर्पण गर्नु हो। उसले श्रीकृष्णका लागि केही न केही सेवा गरिरहेकै हुनु पर्दछ तर त्यो सेवा प्रेमपूर्वक हुनु पर्दछ। यदि कुनै भक्तसँग आत्मसाक्षात्कारका मार्गमा प्रगति गर्नका लागि पर्याप्त बुद्धि छैन तर भक्तिकार्यमा निष्ठावान् र समर्पित छ भने त्यस्तालाई प्रगति गर्ने अवसर भगवान्‌ले दिनु हुन्छ अनि अन्त्यमा उसले भगवान्‌लाई प्राप्त गर्दछ।

**तेषामेवानुकम्पार्थमहमज्ञानजं तमः ।**
**नाशयाम्यात्मभावस्थो ज्ञानदीपेन भास्वता ॥ ११॥**

**तेषाम्** — तिनीहरूका लागि; **एव** — निश्चय नै; **अनुकम्पार्थम्** — विशेष कृपा गर्नका लागि; **अहम्** — म; **अज्ञानजम्** — अज्ञानका कारणले उत्पन्न; **तमः** — अन्धकार; **नाशयामि** — नष्ट गरिदिन्छु; **आत्मभाव** — तिनका हृदयमा; **स्थः** — रहेको; **ज्ञान** — ज्ञानको; **दीपेन** — बत्तीद्वारा; **भास्वता** — प्रकाशित भइरहेको।

**उनीहरूलाई विशेष कृपा गर्नका लागि, तिनीहरूको हृदयमा निवास गरेर ज्ञानको उज्यालो बत्तीद्वारा अज्ञानबाट उत्पन्न अन्धकारलाई मैले नाश गरिदिन्छु।**

**तात्पर्य :** जब भगवान् चैतन्य महाप्रभु बनारसमा **हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे, हरे राम हरे राम राम राम हरे हरे** यो महामन्त्रको प्रचार-प्रसार गरिरहनुभएको थियो, त्यस समय हजारौँ हजार मानिसहरूले उहाँको अनुसरण गरिरहेका थिए। तर, त्यस समयका बनारसका अत्यन्त प्रभावशाली विद्वान् प्रकाशानन्द सरस्वतीले चैतन्य महाप्रभुलाई भावुक भनेर उपहास गर्दथे। कहिलेकाहीँ दार्शनिकहरू भक्तहरूलाई अज्ञानका अन्धकारमा परेका र दार्शनिक रूपले सोझा भावुकतावादी भनेर आलोचना गर्दछन्। वास्तवमा त्यो सत्य होइन। भक्तिमार्गमा धेरै ठुलाठुला विद्वान्‌हरू छन् जसले भक्तिदर्शन प्रस्तुत गरेका छन्। तर, यदि कुनै भक्तले तिनका दार्शनिक ग्रन्थहरू तथा गुरुबाट पर्याप्त लाभ नलिएका भए पनि भगवान्‌को भक्तिमा एकनिष्ठ भएमा उसका भित्रबाट स्वयम् भगवान्‌ले उसको सहायता गर्नु हुन्छ। त्यसैले कृष्णभावनामा लागेको सच्चा भक्त ज्ञानविहीन हुँदैन। पूर्णरूपले कृष्णभावनामा रहेर भक्ति गर्नु नै उसको एकमात्र योग्यता हो।

विवेकबिना कसैले पनि शुद्ध ज्ञान प्राप्त गर्न सक्दैन भन्ने विचार आधुनिक दार्शनिकहरूको छ। तिनीहरूलाई भगवान्‌ले यस्तो उत्तर दिनुभएको छ— पर्याप्त शिक्षा नपाएका भए पनि र वैदिक नियमहरूको पर्याप्त ज्ञान

नभएका भए पनि यदि कोही शुद्ध भक्तिमा संलग्न भएमा यो श्लोकमा उल्लेख भएअनुसार भगवान्ले तिनको सहायता गर्नु हुन्छ।

भगवान् अर्जुनलाई भन्नु हुन्छ—चिन्तन्द्वारा मात्रै आधारभूत रूपमा परमसत्य भगवान्लाई बुझ्न सम्भव छैन। मानसिक प्रयत्न गरेर मात्रै भगवान्लाई पाउन वा भगवान्लाई बुझ्न असम्भव छ, किनभने परमसत्य भन्ने कुरा नै अति महान् छ। चाहे कसैले लाखौँ वर्षसम्म चिन्तन गरिरहोस् तापनि यदि ऊ समर्पित छैन र परमसत्यको प्रेमी छैन उसले कहिल्यै पनि परमसत्य भगवान् श्रीकृष्णलाई बुझ्न सक्दैन। केवल भक्तिसेवाद्वारा मात्र परमसत्य श्रीकृष्ण खुशी हुनुहुन्छ र आफ्नै अचिन्त्य शक्तिद्वारा उहाँले शुद्ध भक्तका हृदयमा आफूलाई प्रकट गर्नु हुन्छ। शुद्ध भक्तका हृदयमा सधैँ भगवान् श्रीकृष्णको निवास हुन्छ। श्रीकृष्णको उपस्थिति सूर्यजस्तो प्रकाशवान् हुन्छ र त्यहाँ अज्ञानको अन्धकार तुरुन्तै समाप्त हुन्छ। शुद्ध भक्तमाथि हुने भगवान् श्रीकृष्णको विशेष कृपा भनेको यही हो।

करोडौँ जन्मदेखि जम्मा भएको भौतिक सङ्गतको प्रदूषण र भौतिकवादी धूलोले मानिसको हृदय सधैँ ढाकिएको हुन्छ तर यदि भगवान्को भक्तिमा संलग्न भएर निरन्तर हरे कृष्ण महामन्त्रको जप गरिराख्ने हो भने उक्त धूलो तुरुन्तै सफा हुन्छ र उसले विशुद्ध ज्ञान प्राप्त गर्दछ। मनुष्यजीवनका परमलक्ष्य भगवान् विष्णुलाई बौद्धिक चिन्तन वा तर्कद्वारा होइन, नाम सङ्कीर्तन र भक्तिद्वारा प्राप्त गर्न सकिन्छ भन्ने हो। शुद्ध भक्तले जीवनका आवश्यकताहरूका बारेमा चिन्ता गर्दैन। उसलाई कुनै कुराको चिन्ता गर्नै पर्दैन। किनभने उसका हृदयबाट अज्ञानको अन्धकार हट्नासाथ, प्रेमाभक्तिबाट प्रसन्न हुनुभएका भगवान्ले उसका हरेक आवश्यकताको परिपूर्ति स्वतः गरिदिनु हुन्छ। यही नै *भगवद्गीताको* उपदेशको सार हो। *भगवद्गीताको* अध्ययनबाट मानिस पूर्णतः भगवान्मा समर्पित हुन सक्दछ र आफूलाई शुद्ध भक्तिमा लगाउन सक्दछ। भगवान्ले जिम्मेवारी लिनासाथ ऊ सबै प्रकारका भौतिकतावादी प्रयासहरूबाट पूर्णतः मुक्त हुन्छ।

अर्जुन उवाच

**परं ब्रह्म परं धाम पवित्रं परमं भवान् ।**
**पुरुषं शाश्वतं दिव्यमादिदेवमजं विभुम् ॥ १२ ॥**
**आहुस्त्वामृषयः सर्वे देवर्षिर्नारदस्तथा ।**
**असितो देवलो व्यासः स्वयं चैव ब्रवीषि मे ॥ १३ ॥**

**अर्जुन उवाच** — अर्जुनले भने; **परंब्रह्म** — परमसत्य; **परंधाम** — परमधाम

(आधार); **पवित्रम्** — पवित्र; **परमम्** — परम; **भवान्** — हजुर; **पुरुषम्** — पुरुष; **शाश्वतम्** — अनादि; **दिव्यम्** — अलौकिक; **आदिदेवम्** — आदिदेव (स्वामी); **अजम्** — अजन्मा; **विभुम्** — सबैभन्दा ठुला; **आहुः** — भन्छन्; **त्वाम्** — हजुरलाई; **ऋषयः** — ऋषिहरूले; **सर्वे** — सबै; **देवर्षिः** — देवताहरूका ऋषि; **नारदः** — नारद; **तथा** — पनि; **असितः** — असित; **देवलः** — देवल; **व्यासः** — व्यास; **स्वयंम्** — आफैँ; **च** — पनि; **एव** — निश्चय नै; **ब्रवीषि** — भन्दै हुनुहुन्छ; **मे** — मलाई

**अर्जुनले भने — भगवान्! हजुर परमब्रह्म हुनुहुन्छ, परमधाम हुनुहुन्छ, परमसत्य हुनुहुन्छ, शाश्वत हुनुहुन्छ, दिव्य हुनुहुन्छ, अजन्मा हुनुहुन्छ र महान्तम हुनुहुन्छ। नारद, असित, देवल, व्यासजस्ता ऋषिहरूले यही सत्यको पुष्टि गरिरहेका छन् र स्वयम् हजुरले पनि मसँग यही कुराको घोषणा गरिरहनुभएको छ।**

**तात्पर्य :** यी दुईवटा श्लोकहरूमा भगवान्ले मायावादी दार्शनिकहरूलाई एउटा अवसर प्रदान गर्नुभएको छ। किनभने यहाँ परमात्मा जीवात्माभन्दा भिन्न छ भन्ने कुरा स्पष्ट छ। यस अध्यायका चारवटा सारभूत श्लोकहरू सुनेपछि अर्जुन सम्पूर्ण शंकाहरूबाट पूर्णतः मुक्त भए र उनले श्रीकृष्णलाई भगवान्का रूपमा स्वीकार गरे। उनले तुरुन्तै "हजुर त परमब्रह्म हुनुहुन्छ" भनेर दृढतापूर्वक घोषणा गरे। योभन्दा पहिल्यै पनि भगवान् श्रीकृष्णले "म नै प्रत्येक वस्तु र प्रत्येक प्राणीहरूको आदिकारण हूँ" भनिसक्नुभएको थियो। प्रत्येक देवता तथा प्रत्येक मनुष्य भगवान् श्रीकृष्णमा निर्भर छ। अज्ञानका कारणले गर्दा नै मानिसहरू तथा देवताहरूले आफैँलाई ईश्वर र भगवान्बाट स्वतन्त्र व्यक्ति ठानेका हुन्। भक्ति गर्नाले यस प्रकारको अज्ञानता पूर्णतः समाप्त हुन्छ। अघिल्लो श्लोकमा भगवान्ले यस कुराको पूर्ण व्याख्या गरिसक्नुभएको छ। अब यहाँ भगवान्का कृपाले गर्दा वैदिक उपदेशअनुसार नै अर्जुनले उहाँलाई परमसत्यका रूपमा स्वीकार गरिरहेका छन्। आफ्ना घनिष्ठ मित्र भएका कारणले चाप्लुसीका भाषामा अर्जुनले उहाँलाई परमसत्य भगवान् भनेका होइनन्। यी दुई श्लोकहरूमा अर्जुनले जे भनेका छन्, त्यसको पुष्टि वेदका सत्य वचनहरूमा पनि भएको छ। वेदमा भनिएको छ — जसले भगवान्को भक्ति गर्दछ, त्यसले मात्र भगवान्लाई बुझ्न सक्दछ, अरू कसैले पनि सक्दैनन्। यी श्लोकहरूमा अर्जुनले भनेका शब्दहरूलाई वैदिक आदेशहरूले पनि पुष्टि गरेका छन्।

केनोपनिषद्मा भनिएको छ — परमब्रह्म प्रत्येक वस्तुको आश्रय हुनुहुन्छ र सम्पूर्ण कुरा उनै परमब्रह्म श्रीकृष्णमा आश्रित छ। यसको व्याख्या पहिल्यै

भइसकेको छ। मुण्डक उपनिषद्मा उल्लेख गरिएको छ— जुन परमेश्वरमा हरेक वस्तु आश्रित छ, उनै परमेश्वरलाई निरन्तर चिन्तन गरिरहनेहरूले मात्र अनुभूति गर्न सक्दछन्। भगवान् श्रीकृष्णको यो निरन्तर चिन्तनलाई **स्मरणम्** भन्दछन्। यो नवधा भक्तिमध्येको एउटा विधि हो। कृष्णभक्तिकै माध्यमद्वारा मानिसले आफ्नो अवस्थालाई बुझ्न सक्दछ र यो भौतिक शरीरबाट छुट्कारा पाउन सक्दछ।

वेदहरूमा परमेश्वरलाई परमपवित्र भनिएको छ। जसले भगवान् श्रीकृष्णलाई पवित्रका पनि पवित्रतम मान्दछ त्यो सम्पूर्ण पापकर्महरूबाट शुद्ध हुन सक्दछ। भगवान्‌का शरणमा नगई कोही पनि पापकर्मबाट शुद्ध हुन सक्दैन। अर्जुनले श्रीकृष्णलाई वैदिक साहित्यको निर्देशनअनुसार नै भगवान् मानेका हुन्। यसको पुष्टि नारद आदि महर्षिहरूद्वारा पनि गरिएको छ।

श्रीकृष्ण साक्षात् भगवान् हुनुहुन्छ, त्यसैले मानिसले सधैँ उहाँको ध्यान गर्नु पर्दछ र उहाँसँग दिव्य सम्बन्ध स्थापित गर्नु पर्दछ। भगवान् श्रीकृष्ण परमअस्तित्व हुनुहुन्छ। उहाँ सम्पूर्ण शारीरिक आवश्यकता तथा जन्म र मृत्युबाट पनि मुक्त हुनुहुन्छ यस कुराको पुष्टि अर्जुनले मात्र होइन सम्पूर्ण वेद, पुराण र इतिहास ग्रन्थहरूले पनि गरेका छन्। सारा वैदिक साहित्यहरूमा भगवान् श्रीकृष्णको यस्तै वर्णन गरिएको पाइन्छ र भगवान् आफैँले पनि चौथो अध्यायमा भन्नुभएको छ— "म अजन्मा छु तर पनि धार्मिक सिद्धान्तको स्थापना गर्नका लागि यस पृथ्वीमा प्रकट हुन्छु।" भगवान् परमपुरुष हुनुहुन्छ। उहाँको कुनै कारण छैन, किनभने उहाँ सम्पूर्ण कारणहरूका पनि कारण हुनुहुन्छ र सबै कुरा उहाँबाटै उत्पन्न हुन्छन्। यस्तो पूर्ण ज्ञान केवल भगवान्‌का कृपाद्वारा प्राप्त गर्न सकिन्छ।

यहाँ पनि अर्जुनले भगवान् श्रीकृष्णका कृपाले गर्दा नै आफ्नो विचार यसरी व्यक्त गरिरहेकाछन्। *भगवद्गीतालाई* बुझ्नचाहने भए हामीले यी दुई श्लोकको भनाइलाई स्वीकार्नु पर्दछ। यसलाई भनिन्छ परम्परा-प्रणाली अर्थात् गुरुपरम्पराको स्वीकृति। परम्परागत पद्धतिबिना *भगवद्गीतालाई* बुझ्न सकिँदैन। तथाकथित विद्यालयीय शिक्षाद्वारा यो बुझ्नु सम्भव छैन। दुर्भाग्यवश विद्यालयको उच्च शिक्षामा घमण्ड गर्नेहरू वैदिक साहित्यका यति धेरै प्रमाणहरू हुँदाहुँदै पनि श्रीकृष्ण एउटा सामान्य व्यक्ति हुनुहुन्छ भन्ने दुराग्रहमा दृढ देखिन्छन्।

**सर्वमेतदृतं मन्ये यन्मां वदसि केशव ।**
**न हि ते भगवन्व्यक्तिं विदुर्देवा न दानवाः ॥१४॥**

**सर्वम्** — सबै; **एतत्** — यो; **ऋतम्** — सत्य; **मन्ये** — म स्वीकार गर्दछु; **यत्** — जो; **माम्** — मलाई; **वदसि** — भन्नु हुन्छ; **केशव** — हे केशव; **न** — होइन; **हि** — निश्चय नै; **ते** — हजुरको; **भगवन्** — हे भगवान्; **व्यक्तिम्** — स्वरूपलाई; **विदुः** — जान्न सक्दछन्; **देवाः** — देवताहरू; **न** — न त; **दानवाः** — असुरहरू।

**हे कृष्ण! हजुरले मसँग भन्नुभएका सबै कुरा म पूर्ण सत्यका रूपमा स्वीकार गर्दछु। हे प्रभु! हजुरको व्यक्तित्वलाई न देवताहरूले बुझ्न सक्दछन् न असुरहरूले।**

**तात्पर्य :** श्रद्धाहीन आसुरी स्वभाव भएका मानिसले भगवान् श्रीकृष्णलाई बुझ्न सक्दैनन् भन्ने कुरा अर्जुनले यहाँ स्पष्ट पारेका छन्। देवताहरूले त उहाँलाई बुझ्न सक्दैनन् भने आधुनिक विश्वका तथाकथित विद्वान्हरूको के कुरा। परमेश्वरका कृपाले अर्जुनले श्रीकृष्ण नै परमसत्य हुनुहुन्छ, र उहाँ नै पूर्णपुरुष हुनुहुन्छ भन्ने बुझ्नसके। त्यसैले हामी पनि अर्जुनले देखाएका मार्गमा हिँड्नु पर्दछ। अर्जुनले *भगवद्गीता* श्रवण गर्ने अधिकार प्राप्त गरेका थिए।

चौथो अध्यायमा भनिएको छ— *भगवद्गीताको* ज्ञान प्राप्त गर्ने गुरु-परम्परा हराइसकेको थियो, त्यसैले अर्जुनद्वारा भगवान् श्रीकृष्णले पुनः गुरुपरम्पराको स्थापना गर्नुभयो, किनभने श्रीकृष्णले अर्जुनलाई आफ्ना परमप्रिय मित्र तथा महान् भक्त मान्नु हुन्थ्यो। अतः प्रस्तुत गीतोपनिषद्को भूमिकामा उल्लेख गरिएअनुसार *भगवद्गीताको* ज्ञान गुरुपरम्पराबाट प्राप्त गर्नु पर्दछ। पहिले यो परम्परा-विधि लुप्त हुनगएकाले यो प्रणाली पुनः सञ्चालन गर्न भगवान् श्रीकृष्णले अर्जुनलाई रोज्नुभएको हो। श्रीकृष्णले भन्नुभएका सबै कुरा अर्जुनले स्वीकार गरेका थिए। त्यसैले हामीले अर्जुनको अनुसरण गर्नु पर्दछ, अनि मात्र हामीले *भगवद्गीताको* सारतत्त्व बुझ्न सक्दछौँ र श्रीकृष्णलाई भगवान् भनेर मान्न सक्दछौँ।

**स्वयंमेवात्मनात्मानं वेत्थ त्वं पुरुषोत्तम ।**
**भूतभावन भूतेश देवदेव जगत्पते ॥ १५ ॥**

**स्वयम्** — आफैँ; **एव** — नै; **आत्मना** — आफूसुकै; **आत्मानम्** — आफूलाई; **वेत्थ** — जान्नु हुन्छ; **त्वम्** — हजुर; **पुरुषोत्तम** — हे पुरुषोत्तम; **भूतभावन** — हे सबैका सृष्टिकर्ता; **भूतईश** — सबै जीवात्माका स्वामी; **देवदेव** — हे सम्पूर्ण देवताहरूका स्वामी; **जगत्पते** — हे सम्पूर्ण ब्रह्माण्डका स्वामी।

**हे परमपुरुष! हे सबैका उद्गम स्रोत! हे सम्पूर्ण प्राणीहरूका स्वामी! हे देवताहरूका पनि देवता! हे ब्रह्माण्डका अधिपति! स्वयम् हजुरले मात्रै आफ्नी अन्तरङ्गा शक्तिद्वारा आफूले आफैँलाई जान्नु हुन्छ।**

**तात्पर्य :** अर्जुन र अर्जुनका अनुयायीजस्ता बनेर भक्तिका माध्यमबाट उहाँको सम्पर्कमा रहने व्यक्तिले मात्र परमेश्वर श्रीकृष्णलाई बुझ्न सक्दछन्। नास्तिक तथा आसुरी स्वभावका मानिसले उहाँलाई बुझ्न सक्दैनन्। भगवान्बाट टाढा लैजाने मानसिक चिन्तन एउटा गम्भीर पाप हो। अनि जसले भगवान्लाई बुझेको छैन त्यसले *भगवद्गीताको* टीका लेख्ने प्रयास नगरे पनि हुन्छ। *भगवद्गीता* भगवान् श्रीकृष्णको वाणी भएको हुनाले र यो एउटा कृष्णविज्ञान नै भएको हुनाले यसलाई अर्जुनले जस्तै श्रीकृष्णबाट बुझ्नु पर्दछ। यो गीताज्ञान नास्तिक व्यक्तिहरूबाट ग्रहण गर्न हुँदैन। *श्रीमद्भागवत्* (१.२.११) मा भनिएको छ—

*वदन्ति तत्तत्त्वविदस्तत्त्वं यद्ज्ञानमद्वयम् ।*
*ब्रह्मेति परमात्मेति भगवानिति शब्द्यते ॥*

तीनवटा रूपमा परमसत्यको अनुभूति गर्न सकिन्छ—१. निराकार ब्रह्मका रूपमा, २. अन्तर्यामी परमात्माका रूपमा र ३. भगवान्का रूपमा। त्यसैले परमसत्यको ज्ञानको अन्तिम अवस्थामा मानिस भगवान्मा आइ पुग्दछ। समान्य मानिसले वा अन्तर्यामी परमात्मा अर्थात् निराकार ब्रह्मलाई साक्षात्कार गरेका व्यक्तिले पनि भगवान्को व्यक्तित्वलाई नबुझ्न सक्दछन्। अतः यस्ता मानिसले स्वयम् भगवान् श्रीकृष्णले भन्नुभएको *भगवद्गीताका* श्लोकहरूका माध्यमबाट भगवान्लाई बुझ्ने प्रयत्न गर्नु पर्दछ। कहिलेकाहीँ निराकारवादीहरू श्रीकृष्णलाई भगवान्का रूपमा वा भगवान्को प्रमाणका रूपमा स्वीकार गर्दछन्, तापनि धेरै मुक्तपुरुषहरू श्रीकृष्णलाई पुरुषोत्तमका रूपमा वा परमपुरुषका रूपमा बुझ्न सक्दैनन्। त्यसैले यहाँ अर्जुनले उहाँलाई पुरुषोत्तम भनेर सम्बोधन गरेका हुन्।

यस्तो हुँदाहुँदै पनि मानिसले भगवान् श्रीकृष्णलाई सम्पूर्ण जीवात्माका पिता हुन् भन्ने कुरा बुझ्न सकिरहेको छैन। अर्जुनले यहाँ उहाँलाई भूतभावन भनेर पनि सम्बोधन गरेका छन्। यदि कसैले उहाँलाई सम्पूर्ण जीवात्माका पिता हुनुहुन्छ भनेर जाने पनि उसले उहाँलाई परमनियन्त्रक पनि हुनुहुन्छ भन्ने कुरा बुझेको हुँदैन। त्यसैले उहाँलाई यहाँ प्रत्येकका परमनियन्ता, भूतेश भनेर सम्बोधन गरिएको हो। यदि कसैले भगवान् श्रीकृष्णलाई सम्पूर्ण जीवात्माका परमनियन्त्रक हुनुहुन्छ भनेर बुझिहाल्यो भने पनि उसले उहाँलाई सबै देवताहरूका पनि मूल हुनुहुन्छ भन्ने कुरा नबुझेको हुन सक्दछ, त्यसैले

यहाँ देवदेव अर्थात् देवताहरूका पनि पूजनीय देवता भनेर उहाँलाई सम्बोधन गरिएको हो। कसैले उहाँलाई सम्पूर्ण देवताहरूका पूजनीय देवता मानेर पनि उहाँ हरेक वस्तुका परमसञ्चालक स्वामी हुनुहुन्छ भन्ने कुरा नबुझेको हुन सक्दछ, त्यसैले यहाँ जगत्पति भनेर पनि उहाँलाई सम्बोधन गरिएको छ। यसरी यो श्लोकमा अर्जुनको अनुभूतिद्वारा कृष्णसम्बन्धी सत्यको स्थापना भएको छ र हामीले पनि भगवान् श्रीकृष्णलाई सही रूपमा बुझ्नका लागि अर्जुनका चरणचिन्हको अनुसरण गर्नु पर्दछ।

**वक्तुमर्हस्यशेषेण दिव्या ह्यात्मविभूतयः ।**
**याभिर्विभूतिभिर्लोकानिमांस्त्वं व्याप्यतिष्ठसि ॥ १६ ॥**

**वक्तुम्** — भन्नका लागि; **अर्हसि** — तपाईं योग्य हुनुहुन्छ; **अशेषेण** — विस्तारपूर्वक; **दिव्याः** — दैवी; **हि** — निश्चय नै; **आत्मविभूतयः** — आफ्ना ऐश्वर्यहरूलाई; **याभिः** — जुन; **विभूतिभिः** — ऐश्वर्यहरूद्वारा; **लोकान्** — सम्पूर्ण लोकहरूलाई; **इमान्** — यी; **त्वम्** — तपाईं; **व्याप्य** — व्याप्त भएर; **तिष्ठसि** — बस्नु हुन्छ।

**जुन जुन विभूतिहरूद्वारा हजुर यस संसारमा व्याप्त भएर बस्नुभएको छ, कृपा गरेर ती सबै विभूतिहरूका बारेमा विस्तारपूर्वक मलाई भन्नुहोस्।**

**तात्पर्य :** यस श्लोकमा भगवान् श्रीकृष्णसम्बन्धी आफ्नो ज्ञानबाट अर्जुन पहिलेदेखि नै सन्तुष्ट थिए जस्तो देखिन्छ। श्रीकृष्णका कृपाले अर्जुनलाई उनको व्यक्तिगत अनुभव, बुद्धि, ज्ञान र यी साधनहरूबाट जेजति कुरा प्राप्त हुन सक्दथ्यो सबै प्राप्त भएको थियो। यहाँ उनले श्रीकृष्णलाई भगवान् नै मानिराखेका छन्। उनलाई श्रीकृष्ण भगवान् हुनुहुन्छ भन्ने कुरामा कुनै शङ्का छैन, तैपनि भगवान् श्रीकृष्णको सर्वव्यापी स्वभावका बारेमा व्याख्या गर्नका लागि उनी उहाँसँग अनुरोध गर्दैछन्। सर्वसाधारण व्यक्तिहरू र निराकारवादीहरू विशेष गरेर भगवान्‌को सर्वव्यापकताका विषयमा चिन्तनशील रहन्छन्। त्यसैले यहाँ अर्जुनले श्रीकृष्णसँग आफ्ना विभिन्न शक्तिहरूद्वारा कसरी हजुर सर्वव्यापी रूपमा विद्यमान रहनु हुन्छ? भनी सोधे। यहाँ के कुरा बुझ्नु पर्दछ भने, अर्जुनले यो प्रश्न सामान्य मानिसका तर्फबाट, सर्वसाधारणको हितका लागि सोधिराखेका छन्।

**कथं विद्यामहं योगिंस्त्वां सदा परिचिन्तयन् ।**
**केषु केषु च भावेषु चिन्त्योऽसि भगवन्मया ॥ १७ ॥**

**कथम्** — कसरी; **विद्याम्अहम्** — मैले जानूँ; **योगिन्** — हे परमयोगी;

**त्वाम्** — हजुरलाई; **सदा** — सधैँ; **परिचिन्तयन्** — चिन्तन गर्दै; **केषु केषु** — कुन कुन; **च** — पनि; **भावेषु** — भावमा; **चिन्त्यः असि** — स्मरण गर्न सकिने हुनुहुन्छ; **भगवान्** — हे भगवान्; **मया** — मद्वारा।

**हे कृष्ण! हे परमयोगी! मैले कसरी निरन्तर हजुरको चिन्तन गरूँ, हजुरलाई मैले कसरी जानूँ। हे भगवान् हजुरलाई म कुन कुन रूपमा स्मरण गरूँ।**

**तात्पर्य :** भगवान् आफ्नै योगमायाद्वारा ढाकिनुभएको छ भन्ने कुरा यसभन्दा पहिलेका अध्यायहरूमा भनिसकिएको छ, त्यसैले केवल समर्पित आत्मा र भक्तहरूले मात्र उहाँलाई देख्न सक्दछन्। आफ्ना मित्र श्रीकृष्ण साक्षात् भगवान् हुनुहुन्छ भन्ने कुरामा अर्जुन पूर्ण विस्वस्त भइसकेका छन् तर उनी यहाँ त्यस्तो सामान्य विधि जान्न चाहन्छन् जसका सहायताले सर्वसाधारण मानिसहरूले पनि सर्वव्यापी भगवान्लाई बुझ्न सकून्। भगवान् आफ्नै योगमाया शक्तिद्वारा ढाकिएर रहने हुनाले सर्वसाधारण मानिस तथा नास्तिक र असुरहरूले उहाँलाई जान्न सक्दैनन्। फेरि पनि तिनीहरूकै लाभका लागि अर्जुन भगवान् श्रीकृष्णसँग यी प्रश्नहरू सोधिरहेका छन्। माथिल्ला स्तरका भक्तहरू केवल आफ्नै जानकारीका लागि मात्र चिन्तित हुँदैनन् बरु सम्पूर्ण मनुष्यजातिको ज्ञानका लागि चिन्तित रहन्छन्। त्यसैले अर्जुनले एउटा वैष्णव तथा भक्त भएका नाताले दयावश सर्वसाधारणका लागि भगवान् सर्वव्यापी हुनुहुन्छ भन्ने ज्ञानको ढोका खोलिदिएका छन्। श्रीकृष्ण योगमाया शक्तिका स्वामी हुनुहुन्छ, जसले गर्दा उहाँ सर्वसाधारणका लागि कहिले ढाकिने र कहिले नढाकिने गर्नु हुन्छ, त्यसैले उहाँलाई यहाँ **योगिन्** भनेर सम्बोधन गरिएको छ। भगवान् श्रीकृष्णप्रति प्रेम नभएका सामान्य मानिसहरू श्रीकृष्णका बारेमा निरन्तर चिन्तन गर्न सक्दैनन्। फलस्वरूप उनीहरू भौतिक विषयको चिन्तन गर्न सुरु गर्दछन्। अर्जुनले यहाँ यस संसारका भौतिकवादी मानिसहरूको चिन्तनका विषयमा सोचिरहेका छन्। यहाँ प्रयोग गरिएको **केषु केषु च भावेषु** भन्ने शब्दावलीले भौतिक प्रकृतितर्फ सङ्केत गरेको छ। भाव शब्दको अर्थ हुन्छ— भौतिक वस्तु। भौतिकवादी मानिसहरूले आध्यात्मिक रूपमा भगवान् श्रीकृष्णलाई बुझ्न सक्दैनन्। उनीहरूलाई भौतिक वस्तुहरूमाथि मन एकाग्र गर्ने र भौतिक रूपमा श्रीकृष्ण कसरी प्रकट हुनुहुन्छ, त्यसको दर्शन गर्ने प्रयास गर्न सल्लाह दिइएको हुन्छ।

**विस्तरेणात्मनो योगं विभूतिं च जनार्दन ।**
**भूयः कथय तृप्तिर्हि शृण्वतो नास्ति मेऽमृतम् ॥ १८॥**

**विस्तरेण** — विस्तारपूर्वक; **आत्मनः** — आफ्नो; **योगम्** — योगशक्ति;

**विभूतिम्** — ऐश्वर्यहरूलाई; **च** — पनि; **जनार्दन** — हे जनार्दन (हे नास्तिकहरूका संहारकर्ता); **भूयः** — फेरि; **कथय** — भन्नुहोस्; **तृप्तिः** — सन्तुष्टि; **हि** — निश्चय नै; **शृण्वतः** — सुन्दै; **न अस्ति** — छैन; **मे** — मेरो; **अमृतम्** — अमृतलाई।

**हे जनार्दन! कृपा गरेर फेरि पनि हजुरको योगशक्ति तथा ऐश्वर्यहरूका बारेमा विस्तारपूर्वक वर्णन गर्नुहोस्। हजुरका शब्दरूपी अमृतको स्वाद जति सुन्यो उति मीठो हुनेभएकाले हजुरका बारेमा सुनेर म कहिल्यै अघाउँदिनँ।**

**तात्पर्य :** यस्तै प्रकारको निवेदन नैमिषारण्यका शौनकादि ऋषिहरूले सूत गोस्वामीसँग गरेका थिए। त्यो निवेदन यस प्रकार छ—

*वयं तु न वितृप्याम उत्तमश्लोकविक्रमे ।*
*यच्छृण्वतां रसज्ञानां स्वादु स्वादु पदे पदे ॥*

*श्रीमद्भागवत्* (१-१.१९)

अर्थात्, उत्तम स्तुति प्रार्थनाहरूद्वारा प्रशंसित श्रीकृष्णका दिव्य लीलाहरू निरन्तर सुनिरहँदा पनि मानिस कहिल्यै तृप्त हुँदैन तर जसले भगवान् श्रीकृष्णसँग आफ्नो दिव्य सम्बन्ध स्थापित गरेका छन् तिनले पाइला-पाइलामा भगवान्‌का लीला-वर्णनको अलौकिक आनन्द अनुभूति गर्दछन्। यस प्रकार अर्जुन श्रीकृष्णका बारेमा विशेष गरी उहाँ सर्वव्यापी भएर कसरी रहनुभएको छ भन्ने बारेमा सुन्न उत्सुक छन्।

जहाँसम्म **अमृतम्** शब्दको कुरा छ, कृष्णसम्बन्धी कुनै पनि चर्चा वा वर्णन अमृतजस्तै छ र यो अमृतको परीक्षण व्यावहारिक अनुभवद्वारा गर्न सकिन्छ। आधुनिक कथा, उपन्यास, इतिहास आदि भगवान्‌का दिव्य लीलाहरूभन्दा भिन्न छन्। किनभने त्यस्ता सांसारिक कथा सुन्दा थकित हुन्छन् तर कृष्णसम्बन्धी कुरा सुनेर मानिस कहिल्यै थकित हुँदैन। यसै कारणले गर्दा सारा संसारको इतिहास भगवान्‌का अवतारका लीला प्रसङ्गले भरिएको छ। पुराणहरू विगत युगका इतिहास हुन्, जो भगवान्‌का विविध अवतारका लीलाहरूसँग सम्बन्धित छन्। त्यसैले गर्दा बारम्बार दोहोऱ्याएर पढिरहँदा पनि त्यहाँका विषयवस्तु सधैँ ताजा लागिरहन्छन्।

श्रीभगवानुवाच

**हन्त ते कथयिष्यामि दिव्या ह्यात्मविभूतयः ।**
**प्राधान्यतः कुरुश्रेष्ठ नास्त्यन्तो विस्तरस्य मे ॥ १९ ॥**

**श्रीभगवान् उवाच** — श्रीभगवान्ले भन्नुभयो; **हन्त** — हो; **ते** — तिमीलाई; **कथयिष्यामि** — भन्नेछु; **दिव्याः** — दैवी; **हि** — निश्चय नै; **आत्मविभूतयः** — आफ्ना ऐश्वर्यहरू; **प्राधान्यतः** — मुख्य मुख्य; **कुरुश्रेष्ठ** — कुरुहरूमा श्रेष्ठ; **नास्ति** — छैन; **अन्तः** — समाप्ति; **विस्तरस्य** — विस्तारको; **मे** — मेरो।

**भगवानले भन्नुभयो — हुन्छ अब म तिमीलाई मेरा मुख्य-मुख्य वैभव वा ऐश्वर्यले युक्त रूपहरूको वर्णन गर्दछु, तर अर्जुन! मेरा ऐश्वर्यको कुनै अन्त्य छैन।**

**तात्पर्य :** भगवान् श्रीकृष्णको महान्ता र उहाँका विभूतिहरूलाई बुझ्न सम्भव छैन। व्यष्टि जीवात्माका इन्द्रियहरू सीमित छन्, त्यसैले ती सीमित इन्द्रियहरूका सहायताले कृष्णका समग्र क्रियाकलापलाई बुझ्नु असम्भव हुन्छ। कुनै विशेष समय र जीवनको कुनै विशेष अवस्थामा भगवान् श्रीकृष्णलाई पूर्णरूपले बुझ्नसकिँदैन तैपनि भक्तहरू उहाँलाई बुझ्ने तथा उहाँका विषयमा जान्ने प्रयास गर्दछन्, किनभने श्रीकृष्ण सम्बन्धित विषयहरू अति रोचक हुन्छन्। भक्तहरूका लागि ती अमृतजस्ता हुन्छन्। यसरी भक्तहरूले ती कथा-वार्ताबाट आनन्द लिन्छन्। भगवान्का ऐश्वर्यहरू र उहाँका विभिन्न शक्तिहरूको चर्चा गर्दा शुद्ध भक्तलाई दिव्य आनन्दको अनुभव हुन्छ, त्यसैले भक्तहरू भगवान्का गुणानुवादहरू सुनिरहन र तिनका बारेमा चर्चा गरिरहन चाहन्छन्। प्राणीहरूले (जीवात्माले) उहाँको ऐश्वर्य विस्तारलाई बुझ्न सक्दैनन्। यो कुरा भगवान् श्रीकृष्णलाई थाहा छ, त्यसैले उहाँ आफ्ना विभिन्न शक्तिका मुख्य मुख्य रूपको मात्र वर्णन गर्न सहमत हुनुभयो। यस श्लोकमा प्रयोग गरिएको **प्राधान्यतः** शब्द अत्यन्त महत्त्वपूर्ण छ। किनभने हामीले भगवान्का असीमित रूपहरूमध्ये केही प्रमुख विस्तारलाई मात्र बुझ्न सक्दछौँ। ती सबैलाई बुझ्न सम्भवै छैन। यहाँ प्रयोग भएको अर्को शब्द **विभूति**ले भगवान्को त्यो ऐश्वर्यलाई सङ्केत गरेको छ, जसद्वारा भगवान्ले सम्पूर्ण विश्व-ब्रह्माण्डलाई नियन्त्रण गर्नुभएको छ। अमरकोशअनुसार **विभूति** शब्दले विलक्षण ऐश्वर्यलाई बुझाउँदछ।

निराकारवादी वा अद्वैतवादीहरू न भगवान्को विलक्षण ऐश्वर्यलाई बुझ्न सक्दछन् न उहाँका दैवी शक्तिहरूको प्रकाशलाई। भौतिक जगत्मा र वैकुण्ठलोकमा पनि विभिन्न रूपमा उहाँका शक्तिहरू विस्तारित भएका छन्। अब यहाँ भगवान् श्रीकृष्णले सामान्य मानिसले पनि प्रत्यक्ष रूपमा दर्शन गर्न सक्ने आफ्ना ती रूपहरूको वर्णन गर्दै हुनुहुन्छ। श्रीकृष्णले आफ्ना बहुरङ्गी शक्तिहरूको आंशिक वर्णन यसरी गर्नु हुन्छ।

**अहमात्मा गुडाकेश सर्वभूताशयस्थितः ।**
**अहमादिश्च मध्यं च भूतानामन्त एव च ॥ २० ॥**

**अहम्** — म; **आत्मा** — आत्मा; **गुडाकेश** — हे अर्जुन; **सर्वभूत** — सम्पूर्ण प्राणीहरूको; **आशयस्थित** — हृदयमा अवस्थित; **अहम्** — म छु; **आदिः** — आदि (प्रारम्भ); **च** — पनि; **मध्यम्** — मध्य (माझ); **च** — पनि; **भूतानाम्** — सम्पूर्ण जीवात्माको; **अन्तः** — अन्त; **एव** — नै; **च** — तथा।

**हे अर्जुन, म सम्पूर्ण जीवात्माका हृदयमा निवास गर्ने परमात्मा हूँ र म नै सम्पूर्ण जीवहरूको आदि, मध्य र अन्त पनि हूँ।**

**तात्पर्य :** यस श्लोकमा अर्जुनलाई **गुडाकेश** भनेर सम्बोधन गरिएको छ। निद्रारूपी अन्धकारलाई जित्नेलाई गुडाकेश भनिन्छ। अज्ञानको अन्धकारमा सुतेका मानिसलाई भगवान् कसरी यो संसारमा र वैकुण्ठलोकमा प्रकट हुनुहुन्छ भन्ने कुरा बुझ्नु सम्भव छैन। त्यसैले यहाँ भगवान् श्रीकृष्णले अर्जुनलाई गुडाकेश भनेर सम्बोधन गर्नु महत्त्वपूर्ण छ। अर्जुन यस प्रकारको अज्ञानरूपी अन्धकारभन्दा माथि उठेका हुनाले भगवान् उनलाई आफ्ना विभिन्न ऐश्वर्यहरूको वर्णन गर्न सहमत हुनुभएको हो।

सर्वप्रथम भगवान् श्रीकृष्णले अर्जुनलाई भन्नुभयो—"मेरो आफ्नो प्रारम्भिक विस्तारका कारणले म नै सम्पूर्ण सृष्टिको आत्मा हूँ।" सृष्टि हुनुभन्दा पहिले, भगवान्ले आफ्नो मूल विस्तारद्वारा पुरुषको अवतार धारण गर्नु हुन्छ अनि उहाँबाट हरेक कुराको सुरुआत हुन्छ। त्यसैले उहाँ महत् तत्त्वका (सार्वभौमिक तत्त्वका) आत्मा हुनुहुन्छ। महत्तत्त्व नै सृष्टिको कारण होइन। वास्तवमा त्यो महत्तत्त्व (सम्पूर्ण भौतिक शक्ति) भित्र त स्वयम् महाविष्णु प्रवेश गर्नुभएको छ, त्यसैले उहाँ सबैका आत्मा हुनुहुन्छ। यो दृश्यमान जगत्मा आत्मा बनेर प्रवेश गर्ने महाविष्णु नै प्रत्येक प्राणीका परमात्मा बनेर प्रकट हुनुहुन्छ। आत्माको झिल्कोको उपस्थितिका कारणले नै प्राणीहरूको अस्तित्व रहेको हो भन्ने कुराको अनुभव हामीलाई छ। जसरी आत्माको अस्तित्वबिना शरीरको विकास हुन सक्दैन त्यसै गरी परमआत्मा श्रीकृष्ण प्रवेश नगरेसम्म यो भौतिक सृष्टिको विकास हुन सक्दैन। **सुवल** उपनिषद्मा भनिएको छ—**प्रकृत्यादि सर्वभूतान्तर्यामी सर्वशेषी च नारायणः** अर्थात्, भगवान् सम्पूर्ण ब्रह्माण्डहरूमा परमात्मा रूपले अवस्थित हुनुहुन्छ।

*श्रीमद्भागवत्मा* तीनवटा पुरुष अवतारको वर्णन गरिएको छ र तिनको वर्णन सात्वत तन्त्रमा पनि गरिएको छ। **विष्णोस्तु त्रीणि रूपाणि पुरुषाख्यान्यथो विदुः** अर्थात्, भगवान्ले यस लोकमा आफ्ना तीनवटा

स्वरूपहरू — **कारणोदकशायी विष्णु, गर्भोदकशायी विष्णु** र **क्षीरोदकशायी विष्णुलाई** प्रकट गर्नुभएको छ। ब्रह्मसंहिता (५.४७) मा महाविष्णु वा कारणोदकशायी विष्णुको वर्णन पाइन्छ। जस्तै — **यः कारणार्णवजले भजति स्म योगनिद्रामनन्त जगदण्डसरोमकूपः।** सबै कारणहरूका पनि कारण भगवान् श्रीकृष्ण महाविष्णुका रूपमा समुद्रमा शयन गर्नु हुन्छ। त्यसैले भगवान् यस विश्वब्रह्माण्डका सृष्टिकर्ता हुनुहुन्छ, जगत्का पालनकर्ता हुनुहुन्छ र सम्पूर्ण शक्तिका संहारकर्ता पनि हुनुहुन्छ।

**आदित्यानामहं विष्णुर्ज्योतिषां रविरंशुमान् ।**
**मरीचिर्मरुतामस्मि नक्षत्राणामहं शशी ॥ २१॥**

**आदित्यानाम्** — आदित्यहरूमा; **अहम्** — म हूँ; **विष्णुः** — विष्णु (परमेश्वर); **ज्योतिषाम्** — ज्योतिहरूमा; **रविः** — सूर्य; **अंशुमान्** — देदीप्यमान् (किरणयुक्त); **मरीचिः** — मरीचि; **मरूताम्** — वायुहरूमा; **अस्मि** — हूँ; **नक्षत्राणाम्** — ताराहरूमा; **अहम्** — म हूँ; **शशी** — चन्द्रमा।

**म आदित्यहरूमा म विष्णु हूँ, ज्योतिहरूमा म तेजस्वी सूर्य हूँ, वायुहरूमा म मरीचि हूँ र नक्षत्रहरूमा म चन्द्रमा हूँ।**

**तात्पर्य :** बाह्रवटा आदित्यहरू छन्, तीमध्ये श्रीकृष्ण प्रमुख हुनुहुन्छ। आकाशमा चम्किरहेका ज्योतिपुञ्जहरूमा सूर्य प्रमुख हुन्। ब्रह्मसंहितामा सूर्यलाई भगवान्कै तेजस्वी नेत्र भनिएको छ। अन्तरिक्षमा पचास किसिमका वायुहरू प्रवाहित छन्, तीमध्ये सबैका अधिष्ठाता मरीचिले भगवान् श्रीकृष्णको प्रतिनिधित्व गर्दछन्। रातमा चम्किने ताराहरूमध्ये चन्द्रमा प्रमुख छन्। अतः चन्द्रमाले श्रीकृष्णको प्रतिनिधित्व गर्दछन्। यो श्लोकबाट के बुझिन्छ भने, चन्द्रमा एउटा तारा (नक्षत्र) हो, र आकाशमा चम्किने यस्ता ताराहरूले सूर्यको प्रकाशलाई पनि परावर्तन गरिदिन्छन्। ब्रह्माण्डभित्र धेरै सूर्य छन् भन्ने सिद्धान्तलाई वैदिक साहित्यले स्वीकार गरेको छैन। सूर्य एउटै छन् र सूर्यका प्रकाशले चन्द्रमा प्रकाशित हुन्छन्, त्यसै गरी अन्य तारागण पनि प्रकाशित हुन्छन्। चन्द्रमा पनि धेरै ताराहरूमध्येको एउटा तारा हो भन्ने सङ्केत यहाँ *भगवद्गीतामा* गरिएको छ। *भगवद्गीतामा* संकेत गरेअनुसार चन्द्रमा एउटा तारा हो न चम्किरहेका ताराहरू सूर्य नभएर चन्द्रमाजस्तै हुन्।

**वेदानां सामवेदोऽस्मि देवानामस्मि वासवः ।**
**इन्द्रियाणां मनश्चास्मि भूतानामस्मि चेतना ॥ २२॥**

**वेदानाम्** — वेदहरूमा; **सामवेदः** — सामवेद; **अस्मि** — हूँ; **देवानाम्** — देवताहरूमा; **अस्मि** — हूँ; **वासवः** — स्वर्गका राजा; **इन्द्रियाणाम्** — इन्द्रियहरूमा; **मनः** — मन; **अस्मि** — हूँ; **भूतानाम्** — जीवात्माहरूमा; **अस्मि** — हूँ; **चेतना** — प्राणशक्ति वा जीवन।

**म वेदहरूमा सामवेद हूँ, देवताहरूमा म स्वर्गको राजा हूँ, इन्द्रियहरूमा म मन हूँ, र सम्पूर्ण प्राणीहरूमा म जीवनशक्ति वा चेतना हूँ।**

**तात्पर्य :** पदार्थ र आत्मामा के भिन्नता छ भने, पदार्थमा जीवात्माको जस्तो चेतना हुँदैन त्यसैले जीवनको यो चेतनातत्त्व परम छ, शास्वत छ। पदार्थको सम्मिश्रणबाट चेतना उत्पन्न गर्न सकिँदैन।

**रुद्राणां शंकरश्चास्मि वित्तेशो यक्षरक्षसाम् ।**
**वसूनां पावकश्चास्मि मेरुः शिखरिणामहम् ॥ २३ ॥**

**रुद्राणाम्** — सबै रुद्रहरूमा; **शंकरः** — भगवान् शङ्कर; **अस्मि** — हूँ; **वित्त-ईशः** — देवताहरूका कोषाध्यक्ष; **यक्षरक्षसाम्** — यक्ष र राक्षसहरूमा; **वसूनाम्** — वसुहरूमा; **पावकः** — अग्नि; **च** — पनि; **अस्मि** — हूँ; **मेरूः** — सुमेरू; **शिखरिणाम्** — सम्पूर्ण पर्वतहरूमा; **अहम्** — म हूँ।

**म सम्पूर्ण रुद्रहरूमा शिव हूँ, यक्ष र राक्षसहरूमा म धनका देवता कुवेर हूँ, वसुहरूमा म अग्नि हूँ र सम्पूर्ण पर्वतहरूमा म सुमेरू हूँ।**

**तात्पर्य :** रुद्रहरू एघार छन्, तिनीहरूमा शङ्कर अर्थात् शिवजी प्रमुख हुनुहुन्छ। उहाँ भगवान्का अवतार हुनुहुन्छ र उहाँ यस ब्रह्माण्डमा तमोगुणका अधिपति मानिनु हुन्छ। कुबेर यक्षहरू र राक्षसहरूका नायक हुन्, देवताहरूका कोषाध्यक्ष हुन् र उनले परमेश्वरको प्रतिनिधित्व गरेका छन्। सुमेरू पर्वत प्राकृतिक स्रोत र साधनका दृष्टिले प्रसिद्ध सम्पन्न पर्वत हो।

**पुरोधसां च मुख्यं मां विद्धि पार्थ वृहस्पतिम् ।**
**सेनानीनामहं स्कन्दः सरसामस्मि सागरः ॥ २४ ॥**

**पुरोधसाम्** — सम्पूर्ण पुरोहितहरूमा; **च** — पनि; **मुख्यम्** — प्रमुख; **माम्** — मलाई; **विद्धि** — जान; **पार्थ** — हे पृथापुत्र; **वृहस्पतिम्** — वृहस्पति; **सेनानीनाम्** — सम्पूर्ण सेनापतिहरूमा; **अहम्** — म; **स्कन्दः** — कार्तिकेय; **सरसाम्** — सम्पूर्ण जलाशयहरूमा; **अस्मि** — म हूँ; **सागरः** — समुद्र।

**हे अर्जुन! म सम्पूर्ण पुरोहितहरूमा प्रमुख वृहस्पति हूँ, सबै सेनापतिहरूमा म कार्तिकेय हूँ र जलाशयहरूमा म समुद्र हूँ।**

**तात्पर्य :** इन्द्र स्वर्गका प्रमुख देवता हुन्, त्यसैले उनलाई स्वर्गका राजा भनिन्छ। जुन लोकमा उनले शासन गर्दछन् त्यसलाई इन्द्रलोक भनिन्छ। वृहस्पति इन्द्रका पुरोहित हुन् र इन्द्र सम्पूर्ण राजाहरूमा प्रमुख भएका हुनाले उनका पुरोहित वृहस्पति पनि पुरोहितहरूका प्रमुख हुन्। जसरी इन्द्र सबै राजाहरूमा प्रमुख छन् त्यसै गरी पार्वती र शिवका सुपुत्र कार्तिकेय पनि सबै सेनापतिहरूमा प्रमुख छन्। सम्पूर्ण पानीका भण्डारहरूमा समुद्र नै सबैभन्दा ठुलो जलभण्डार हो। भगवान् श्रीकृष्णको प्रतिनिधित्व गर्ने यी सारा कुराले उहाँको महान्ताको परिचय दिइरहेका छन्।

**महर्षिणां भृगुरहं गिरामस्म्येकमक्षरम् ।**
**यज्ञानां जपयज्ञोऽस्मि स्थावराणां हिमालयः ॥ २५ ॥**

**महा-ऋषिणाम्** — महान् ऋषिहरूमा; **भृगुः** — भृगु; **अहम्** — म हूँ; **गिराम्** — वाणीमा; **अस्मि** — हूँ; **एकम्** — एउटा; **अक्षरम्** — ॐ अक्षर; **यज्ञानाम्** — सम्पूर्ण यज्ञहरूमा; **जपयज्ञः** — कीर्तन वा जप; **अस्मि** — हूँ; **स्थावराणाम्** — जड वस्तुहरूमा; **हिमालयः** — हिमालय पर्वत।

**म महर्षिहरूमा भृगु हूँ, वाणीमा म दिव्य ध्वनि ओंकार हूँ, सबै यज्ञहरूमा म पवित्र जप यज्ञ (सङ्कीर्तन) हूँ र सम्पूर्ण अचल वस्तुहरूमा म हिमालय हूँ।**

**तात्पर्य :** ब्रह्माण्डका प्रथम जीवात्मा ब्रह्माजीले विभिन्न योनिहरूको विस्तार गर्नका लागि धेरै पुत्रहरू उत्पन्न गर्नुभयो। ब्रह्माजीका ती पुत्रहरूमा भृगु सबैभन्दा शक्तिशाली ऋषि थिए। सम्पूर्ण दिव्य ध्वनिहरूमा ॐकार ध्वनिले भगवान् श्रीकृष्णको प्रतिनिधित्व गर्दछ। सम्पूर्ण यज्ञहरूमा — **हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे, हरे राम हरे राम राम राम हरे हरे** यो महामन्त्रको जप नै श्रीकृष्णको पवित्रतम प्रतिनिधि हो। कहिलेकाहीं यज्ञमा पशुहरूको वध गर्ने पनि विधान छ, त्यहाँ हिंसा हुन्छ तर यो हरे कृष्ण जपरूपी यज्ञमा हिंसा हुँदैन। यो सरलतम र पवित्रतम यज्ञ हो। संसारमा जुन जुन कुरा शुभ छन् ती सबैले भगवान् श्रीकृष्णको प्रतिनिधित्व गर्दछन्। त्यसैले संसारको सबैभन्दा ठुलो पर्वत हिमालय पनि भगवान्को प्रतिनिधि रूप हो। पहिलेको श्लोकमा मेरू पर्वतको उल्लेख छ तर मेरू पर्वत अचल छैन। हिमालय सधैँ अचल छ, त्यसैले हिमालय मेरूभन्दा ठुलो हो।

**अश्वत्थः सर्ववृक्षाणां देवर्षीणां च नारदः ।**
**गन्धर्वाणां चित्ररथः सिद्धानां कपिलो मुनिः ॥ २६ ॥**

**अश्वत्थः** — पीपलको वृक्ष; **सर्ववृक्षाणाम्** — सबै वृक्षहरूमा; **देवर्षीणाम्** — सबै देवऋषिहरूमा; **च** — तथा; **नारदः** — नारद; **गन्धर्वाणाम्** — गन्धर्व लोकका निवासीहरूमा; **चित्ररथः** — चित्ररथ; **सिद्धानाम्** — सिद्धिप्राप्त गर्नेहरूमा; **कपिलःमुनिः** — कपिल मुनि।

**सबै वृक्षहरूमा म पीपलको वृक्ष हूँ, देवर्षिहरूमा म नारद हूँ, गन्धर्वहरूमा म चित्ररथ हूँ र सिद्धपुरुषहरूमा म कपिल मुनि हूँ।**

**तात्पर्य :** पीपलको रूख अग्ला रूखहरूमध्येको अति सुन्दर रूख हो। भारतवर्षका मानिसहरू आफ्ना प्रातःकालीन नित्यक्रियाका रूपमा प्रायः पीपलवृक्षको पूजा गर्दछन्। नारद देवताहरूका पनि पुजनीय ऋषि हुन्। उनी विश्व ब्रह्माण्डभरि नै महान् भक्तका रूपमा मानिन्छन्। यस प्रकार भक्तका रूपमा उनी भगवान् श्रीकृष्णका प्रतिनिधि हुन्। गन्धर्वलोक अति सुमधुर गायकहरूको निवास स्थल हो। तिनीहरूमा सबभन्दा राम्रा गायक चित्ररथ हुन्। सिद्ध-पुरुषहरूमा देवहूतिका छोरा कपिल मुनिले श्रीकृष्णको प्रतिनिधित्व गर्दछन्। उनी भगवान् श्रीकृष्णका एउटा अवतार पनि मानिन्छन् र *श्रीमद्भागवत्मा* उनको दर्शनको उल्लेख गरिएको छ। पछि एक अर्का पनि कपिल भए परन्तु तिनी नास्तिक थिए, अतः यी दुईजना कपिलमा निकै ठुलो अन्तर छ।

**उच्चैःश्रवसमश्वानां विद्धि माममृतोद्भवम् ।**
**ऐरावतं गजेन्द्राणां नराणां च नराधिपम् ॥ २७॥**

**उच्चैःश्रवसम्** — उच्चैश्रवा; **अश्वानाम्** — घोडाहरूमा; **विद्धि** — जान; **माम्** — मलाई; **अमृत-उद्भवम्** — समुद्रमन्थनबाट उत्पन्न भएका; **ऐरावतम्** — ऐरावत; **गजेन्द्राणाम्** — मुख्य हात्तीहरूमा; **नराणाम्** — मानिसहरूमा; **च** — तथा; **नर-अधिपम्** — राजा।

**मलाई घोडाहरूमा अमृतका लागि समुद्रमन्थन गर्दा उत्पन्न भएको उच्चैःश्रवा घोडा भन्ने जान, राजहात्तीहरूमा म ऐरावत हूँ र मानिसहरूमा म राजा हूँ।**

**तात्पर्य :** एक पटक देवताहरू र असुरहरू मिलेर समुद्रमन्थन गर्ने कार्यमा भाग लिएका थिए। यस मन्थनबाट अमृत र विष उत्पन्न भए। अनि भगवान् शिवले उक्त विष पिइदिनुभयो। अमृतका साथमा धेरै जीवात्मा पनि उत्पन्न भएका थिए। तीमध्ये एउटा थियो घोडा, जसलाई उच्चैःश्रवा भनिन्छ। अमृतबाट अर्को पनि एउटा ऐरावत नाम गरेको हात्ती उत्पन्न भयो। यी दुई पशुहरू अमृतबाट उत्पन्न भएका हुनाले, तिनीहरूको विशेष महत्त्व छ र तिनीहरू भगवान् श्रीकृष्णका प्रतिनिधि हुन्।

मानिसहरूमा राजा श्रीकृष्णको प्रतिनिधि हो। भगवान् श्रीकृष्ण ब्रह्माण्डका पालनकर्ता हुनुहुन्छ र आफ्ना असल गुणका कारणले नियुक्त गरिएका राजाहरू पनि आफ्ना राज्यका पालनकर्ता हुन्छन्। महाराज युधिष्ठिर, महाराज परीक्षित र भगवान् रामजस्ता राजाहरू सबै अत्यन्त उच्च कोटिका धर्मात्मा थिए र तिनीहरू सधैँ आफ्ना जनताका हितका कुरा सोचि रहन्थे। वैदिक साहित्यमा राजालाई ईश्वरको प्रतिनिधि मानिएको छ तर यस युगमा धार्मिक सिद्धान्तहरूको ह्राससँगै राजतन्त्रको पनि पतन भयो र अन्त्यमा अब विनाश नै हुन लाग्यो। तर बुझ्नुपर्ने कुरा के छ भने, विगतमा धार्मिक राजाहरूका अधीनमा रहँदा मानिसहरू धेरै सुखी थिए।

**आयुधानामहं वज्रं धेनूनामस्मि कामधुक् ।**
**प्रजनश्चास्मि कन्दर्पः सर्पाणामस्मि वासुकिः ॥ २८ ॥**

**आयुधानाम्** — हतियारहरूमा; **अहम्** — म हूँ; **वज्रम्** — वज्र; **धेनूनाम्** — गाईहरूमा; **अस्मि** — हूँ; **कामधुक्** — सुरभि गाई (कामधेनु); **प्रजनः** — सन्तान उत्पत्तिका कारण; **अस्मि** — हूँ; **कन्दर्पः** — कामदेव; **सर्पाणाम्** — सर्पहरूमा; **अस्मि** — हूँ; **वासुकिः** — वासुकि नाग।

**हतियारहरूमा म वज्र हूँ, गाईहरूमा म सुरभि हूँ, सन्तान उत्पत्तिका कारणहरूमा म प्रेमका देवता कामदेव हूँ र सर्पहरूमा म वासुकि हूँ।**

**तात्पर्य :** वज्र साँच्चैको शक्तिशाली हतियार हो। यसले भगवान् श्रीकृष्णका शक्तिको प्रतिनिधित्व गर्दछ। कृष्णलोक वा वैकुण्ठलोकका गाईहरूलाई जुनसुकै समयमा पनि दुहुन सकिन्छ र जति आवश्यकता पर्दछ त्यति दूध तिनीहरूबाट लिन सकिन्छ। वास्तवमा यस्ता गाईहरू यस लोकमा पाइँदैनन् तर कृष्णलोकमा यस्ता गाईहरू रहेको उल्लेख छ। भगवान्ले यस्ता धेरै गाईहरू राख्नुहुन्छ, जसलाई सुरभि भनिन्छ। भनिन्छ— भगवान् यस्तै गाईहरू चराउने काममा व्यस्त रहनु हुन्छ। कन्दर्प भनेको कामवासनाको इच्छा हो, जसबाट असल सन्तान जन्मिन सक्दछन्। त्यसैले कन्दर्प पनि भगवान् श्रीकृष्णको प्रतिनिधि हो। कहिलेकाहीँ इन्द्रियतृप्तिका लागि मात्रै पनि सम्भोग गरिन्छ तर त्यस्तो सम्भोग श्रीकृष्णको प्रतिनिधि हुन सक्दैन। असल छोराछोरी जन्माउनका लागि गरिने सम्भोगलाई नै कन्दर्प भनिन्छ र त्यो श्रीकृष्णको प्रतिनिधिरूप हुन्छ।

**अनन्तश्चास्मि नागानां वरुणो यादसामहम् ।**
**पितॄणामर्यमा चास्मि यमः संयमतामहम् ॥ २९ ॥**

**अनन्तः** — अनन्त; **च** — पनि; **अस्मि** — हूँ; **नागानाम्** — धेरै फणाधारी सर्पहरूमा; **वरुणः** — जलका देवता; **यादसाम्** — सम्पूर्ण जलचरहरूमा; **अहम्** — म हूँ; **पितृणाम्** — पितृहरूमा; **अर्यमा** — अर्यमा; **च** — पनि; **अस्मि** — हूँ; **यमः** — मृत्युका नियन्त्रक; **संयमताम्** — सम्पूर्ण शासकहरूमा; **अहम्** — म हूँ।

**धेरै फणाधारी नागहरूमा म अनन्त हूँ, जलचरहरूमा म वरुण देवता हूँ, पितृहरूमा म अर्यमा हूँ र नियम पालनकर्ताहरूमा म मृत्युका देवता यम हूँ।**

**तात्पर्य :** धेरै फणा हुने नाग वा सर्पहरूमा सबैभन्दा ठुलो अनन्त नाग हो र जलचरहरूमा वरुण देवता ठुला हुन्। ती दुवैले भगवान् श्रीकृष्णको प्रतिनिधित्व गर्दछन्। अर्यमाले नेतृत्व गरेको एउटा पितृलोक पनि छ र ती अर्यमा श्रीकृष्णका प्रतिनिधि हुन्। त्यस्तै दुष्टहरूलाई दण्ड दिने पनि विभिन्न जीवात्माहरू छन्, तीमध्ये यम प्रमुख हुन्। यम यो पृथ्वीलोकको नजिकैको लोकमा बस्दछन्। धेरै पाप गर्नेहरूलाई मृत्युपछि त्यहाँ लगिन्छ र तिनलाई यमले विभिन्न प्रकारका दण्ड सजायको व्यवस्था गर्दछन्।

**प्रल्हादश्चास्मि दैत्यानां कालः कलयतामहम् ।**
**मृगाणां च मृगेन्द्रोऽहं वैनतेयश्च पक्षिणाम् ॥ ३० ॥**

**प्रल्हादः** — प्रल्हाद; **च** — पनि; **अस्मि** — हूँ; **दैत्यानाम्** — असुरहरूमा; **कालः** — समय; **कलयताम्** — दमनकर्ताहरूमा; **अहम्** — म हूँ; **मृगाणाम्** — जनावरहरूमा; **च** — तथा; **मृगेन्द्रः** — सिंह; **अहम्** — म हूँ; **वैनतेयः** — गरुड; **च** — पनि; **पक्षिणाम्** — चराहरूमा।

**दैत्यहरूमा म भक्त प्रल्हाद हूँ, दमनकारीहरूमा म समय हूँ, पशुहरूमा सिंह हूँ र पक्षीहरू म गरूड हूँ।**

**तात्पर्य :** दिति र अदिति दुई दिदी-बहिनी थिए। अदितिका छोराहरू आदित्य भनिए र दितिका छोराहरूलाई दैत्य भनियो। सम्पूर्ण आदित्यहरू भगवान्का भक्त थिए र दैत्यहरू सबै नास्तिक थिए। प्रल्हाद दैत्य कुलमा जन्मिएका थिए तैपनि बाल्यकालदेखि नै उनी महान् भक्त थिए। उनको भगवद्भक्ति र असल स्वभावले गर्दा उनी भगवान् श्रीकृष्णका प्रतिनिधि मानिन्छन्।

दमन गर्नका लागि विभिन्न नियमहरू छन् तर समयले यस भौतिक जगत्का सबै कुरालाई क्षीण बनाइदिन्छ, त्यसैले काल अर्थात् समय भगवान् श्रीकृष्णको प्रतिनिधि हो। पशुहरूमा सिंह सबैभन्दा बलियो र हिंस्रक जनावर

हो भने लाखौँ प्रकारका चराहरूमा भगवान् श्रीविष्णुको वाहन गरुड सबैभन्दा ठुलो हो।

**पवनः पवतामस्मि रामः शस्त्रभृतामहम् ।**
**झषाणां मकरश्चास्मि स्रोतसामस्मि जाह्नवी ॥ ३१॥**

**पवनः** — हावा; **पवताम्** — पवित्र गर्नेहरूमा; **अस्मि** — म हूँ; **राम** — रामचन्द्र; **शस्त्रभृताम्** — हतियार लिनेहरूमा; **अहम्** — म हूँ; **झषाणाम्** — सम्पूर्ण माछाहरूमा; **मकरः** — ग्राह (गोही); **च** — पनि; **अस्मि** — हूँ; **स्रोतसाम्** — बगेका नदीहरूमा; **अस्मि** — हूँ; **जाह्नवी** — गङ्गा नदी।

**पवित्र गर्नेहरूमा म वायु हूँ, शस्त्रधारीहरूमा म राम हूँ, माछाहरूमा म गोही हूँ र नदीहरूमा म गङ्गा ( भागीरथी ) हूँ।**

**तात्पर्य :** सम्पूर्ण जलचर प्राणीहरूमा गोही अत्यन्त ठुलो र मानिसहरूका लागि अत्यन्त डरलाग्दो जन्तु हो। यस प्रकार गोहीले भगवान् श्रीकृष्णको प्रतिनिधित्व गर्दछ।

**सर्गाणामादिरन्तश्च मध्यं चैवाहमर्जुन ।**
**अध्यात्मविद्या विद्यानां वादः प्रवदतामहम् ॥ ३२॥**

**सर्गाणाम्** — सम्पूर्ण सृष्टिहरूको; **आदि** — प्रारम्भ; **अन्तः** — समाप्ति; **च** — तथा; **मध्यम्** — माझ; **च** — पनि; **एव** — निश्चय नै; **अहम्** — म हूँ; **अर्जुन** — हे अर्जुन; **अध्यात्मविद्या** — आध्यात्मिक ज्ञान; **विद्यानाम्** — सम्पूर्ण शिक्षाहरूमा; **वादः** — स्वाभाविक निर्णय; **प्रवदताम्** — तर्कहरूको; **अहम्** — म हूँ।

**हे अर्जुन! सम्पूर्ण सृष्टिको आदि, मध्य र अन्त्य म हूँ, म सम्पूर्ण विज्ञान ( विद्या ) हरूमा आत्म विज्ञान हूँ, र तर्कशास्त्रहरूमा म सारभूत सत्य हूँ।**

**तात्पर्य :** सृजित सृष्टिहरूमा सबैभन्दा पहिले सम्पूर्ण भौतिक तत्त्वहरूको सृष्टि भयो। यसको व्याख्या पहिल्यै भइसकेको छ। महाविष्णु, गर्भोदकशायी विष्णु र क्षीरोदकशायी विष्णुद्वारा यो सम्पूर्ण जगत् सृजित र सञ्चालित हुन्छ। अनि शिवजीद्वारा यसको संहार हुन्छ। ब्रह्माजी गौण स्रष्टा हुनुहुन्छ। जगत्को सृष्टि, सञ्चालन र संहार गर्ने यी सबै अधिकारीहरू भगवान्का भौतिक गुणका अवतार हुन्। त्यसैले भगवान् समग्र सृष्टिका, प्रारम्भ, मध्य र अन्त्य हुनुहुन्छ।

उच्च शिक्षा प्राप्त गर्नका लागि ज्ञानका विभिन्न किसिमका धेरै पुस्तकहरू छन्, जस्तै — चार वेदहरू, तिनका छःवटा अङ्गहरू, वेदान्त सूत्र, तर्क

शास्त्रहरू, धर्मशास्त्रहरू, पुराणहरू इत्यादि। यसरी सबै मिलाएर जम्मा विद्याका चौध प्रकारका ग्रन्थहरू छन्। यीमध्ये अध्यात्म विद्यासम्बन्धी पुस्तकहरूमा विशेष गरी वेदान्त सूत्रलाई भगवान् श्रीकृष्णको प्रतिनिधि ग्रन्थ मानिन्छ।

तर्कशास्त्रीहरूका बीचमा विभिन्न प्रकारका तर्कहरू चलिरहन्छन्। विपक्षीहरूको तर्कलाई पनि समर्थन गर्दै प्रमाणका साथ एउटा पक्षको तर्कलाई पुष्टि गर्नुलाई जल्प भनिन्छ। प्रतिपक्षीलाई हराउने मात्र प्रयास गरिन्छ, त्यसलाई वितण्डा भनिन्छ। तर, वास्तविक निष्कर्षलाई **वाद** भनिन्छ। यही निर्णायक सत्य नै भगवान् श्रीकृष्णको स्वरूप हो।

**अक्षराणामकारोऽस्मि द्वन्द्वः सामासिकस्य च ।**
**अहमेवाक्षयः कालो धाताहं विश्वतोमुखः ॥ ३३ ॥**

**अक्षराणाम्** — अक्षरहरूमा; **अकारः** — पहिलो अक्षर अ; **अस्मि** — म हूँ; **द्वन्द्वः** — द्वन्द्व समास; **सामासिकस्य** — सबै शब्दहरूमा; **च** — तथा; **अहम्** — म हूँ; **एव** — निश्चय नै; **अक्षयः** — शाश्वत; **कालः** — समय; **धाता** — स्रष्टा; **अहम्** — म; **विश्वतः मुखः** — ब्रह्मा।

**अक्षरहरूमा म अकार हूँ, समासहरूमा म द्वन्द्व समास हूँ, म अक्षय (शास्वत) समय पनि हूँ र सृष्टिकर्ताहरूमा ब्रह्मा पनि मै हूँ।**

**तात्पर्य :** 'अ' कार संस्कृत वर्णमालाको पहिलो अक्षर हो। यसैबाट वैदिक साहित्यको प्रारम्भ हुन्छ। अकारबिना कुनै कुरा ध्वनित हुँदैन, त्यसैले यो आदि स्वर हो, प्रथम ध्वनि हो। संस्कृतमा धेरै समास शब्दहरू छन् जसमध्ये रामकृष्णजस्ता दुई शब्दको जोड भएका शब्दलाई द्वन्द्व समास भनिन्छ। यस समास शब्दमा राम र कृष्ण दुवै शब्द अविकृत रूपमा छन्, त्यसैले यो समास शब्दलाई द्वन्द्व भनिएको हो।

सबै प्रकारका मृत्यु प्रदान गर्ने (काल) हरूमा समय सबैभन्दा ठुलो छ, किनभने समयले हरेक वस्तुलाई मारिदिन्छ। समय पनि भगवान् श्रीकृष्णको प्रतिनिधिरूप हो, किनभने निश्चित समयावधिमा एउटा महान् अग्नि उत्पन्न हुनेछ र सम्पूर्ण वस्तु ध्वस्त हुनेछ (प्रलय हुनेछ)। सृजनशील जीवात्माहरूमा चतुर्मुखी ब्रह्मा प्रमुख छन्। त्यसैले उनी पनि भगवान् श्रीकृष्णका प्रतिनिधि हुन्।

**मृत्युः सर्वहरश्चाहमुद्भवश्च भविष्यताम् ।**
**कीर्तिः श्रीर्वाक्च नारीणां स्मृतिर्मेधा धृतिः क्षमा ॥ ३४ ॥**

**मृत्युः** — मृत्यु; **सर्वहरः** — सर्वभक्षी; **च** — पनि; **अहम्** — म; **उद्भवः** — सृष्टि; **च** — पनि; **भविष्यताम्** — भावी सृष्टिको; **कीर्तिः** — यश; **श्रीः** —

ऐश्वर्य वा सौन्दर्य; **वाक्** — मीठो वाणी; **च** — पनि; **नारीणाम्** — नारीहरूको; **स्मृतिः** — स्मरणशक्ति; **मेधा** — बुद्धि; **धृतिः** — धैर्य; **क्षमा** — क्षमा।

**म सर्वभक्षी मृत्यु हूँ र पछि उत्पन्न हुनेहरूको सृष्टि नियम पनि म नै हूँ। स्त्रीहरूमा कीर्ति, लक्ष्मी, वाणी, स्मृति, बुद्धि, धृति र क्षमा पनि म नै हूँ।**

**तात्पर्य :** जन्मदेखि नै मानिस प्रत्येक क्षण मृत्यु भइरहेको हुन्छ। यसरी मृत्युले प्रत्येक क्षण प्रत्येक प्राणीलाई खाइरहेको हुन्छ तर त्यसको अन्तिम प्रहारलाई मृत्यु भन्दछन्। त्यो मृत्यु पनि भगवान् श्रीकृष्ण हुनुहुन्छ। जहाँसम्म भविष्यको विकासको कुरा छ, सारा जीवात्माहरूले छः किसिमका आधारभूत परिवर्तनबाट पार हुनु पर्दछ। तिनीहरू जन्मिन्छन्, बढ्दछन्, केही समय यथावत् रहन्छन्, सन्तान उत्पन्न गर्दछन्, क्षीण हुन्छन् र अन्त्यमा नष्ट हुन्छन् वा मर्छन्। ती परिवर्तनहरूमा पहिलोले गर्भबाट छुट्कारा दिन्छ र उहाँ नै भगवान् श्रीकृष्ण हुनुहुन्छ। पहिलो उत्पत्ति नै सम्पूर्ण भविष्यका क्रियाकलापको थालनी हो।

यहाँ उल्लिखित सात ऐश्वर्यहरू कीर्ति, श्री, वाणी, स्मृति, मेधा, धृति, क्षमा सबै स्त्रीवाचक मानिन्छन्। यीमध्ये सबै वा केही ऐश्वर्य प्राप्त गर्ने व्यक्ति प्रतापी हो, भाग्यमानी हो। यदि कुनै मानिस धार्मिक व्यक्तिका रूपमा प्रसिद्ध छ भने त्यो नै यशस्वी हो। संस्कृत एउटा पूर्णभाषा हो, त्यसैले यो भाषा अत्यन्त गौरवशाली छ। यदि कसैले कुनै विषय पढेर त्यसलाई सम्झिराख्न सक्दछ भने त्यसले स्मृतिशक्ति प्राप्त गरेको मानिन्छ। जसले धेरै विषयका धेरै पुस्तकहरू पढ्ने मात्र होइन तिनलाई बुझ्ने र आवश्यक परेका अवस्थामा प्रयोग पनि गर्न सक्ने क्षमता छ त्यसलाई बुद्धि वा मेधा भनिन्छ। यो पनि एउटा अर्को ऐश्वर्य हो। अस्थिरतामाथि विजय पाउने क्षमतालाई दृढता वा **धृति** भन्दछन्। पूर्णतया योग्य भएर पनि जो विनीत छ, विनम्र छ र सुख-दुःखमा समभाव राख्न पनि समर्थ छ त्यसलाई क्षमा नामक ऐश्वर्य प्राप्त भएको ठान्नु पर्दछ।

**बृहत्साम तथा साम्नां गायत्री छन्दसामहम् ।**
**मासानां मार्गशीर्षोऽहमृतुनां कुसुमाकरः ॥ ३५ ॥**

**बृहत्-साम** — बृहत्साम; **तथा** — पनि; **साम्नाम्** — सामवेदका गीतहरूमा; **गायत्री** — गायत्री मन्त्र; **छन्दसाम्** — छन्दहरूमा; **अहम्** — म हूँ; **मासानाम्** — महिनाहरूमा; **मार्गशीर्षः** — मंसीर; **अहम्** — म हूँ; **ऋतुनाम्** — सबै ऋतुहरूमा; **कुसुमाकरः** — बसन्त।

**सामवेदका ऋचाहरूमा म बृहत्साम हूँ, कविताहरूमा म गायत्री हूँ, महिनाहरूमा मार्ग महिना हूँ र ऋतुहरूमा म फूलहरू फुलाउने बसन्त ऋतु हूँ।**

**तात्पर्य :** "म सबै वेदहरूमा सामवेद हूँ" भनेर भगवान्‌ले भनिसक्नुभएको छ। सामवेद विभिन्न देवताहरूद्वारा गाइने राम्रा-राम्रा गीतहरूले सम्पन्न छ। ती गीतहरूमध्ये **बृहत्साम** नामक गीत सर्वोत्तम वा परममधुर छ। यो गीत रातमा गाइन्छ।

संस्कृतमा कविता रचना गर्ने केही निश्चित विधिविधान छन्। यसमा प्रयोग गरिएका छन्द लय तथा अन्य तत्त्वहरू आधुनिक कवितामा जस्तै मनोमानी ढङ्गका हुँदैनन्। यस्ता नियमबद्ध कविताहरूमा सुयोग्य ब्राह्मणहरूले नित्य उच्चारण गर्ने गायत्री मन्त्र सबैभन्दा प्रसिद्ध छ। गायत्री मन्त्रको उल्लेख *श्रीमद्भागवत्‌मा* पनि पाइन्छ। किनभने गायत्री मन्त्रको विशेष प्रयोजन ईश्वरलाई साक्षात्कार गर्नु हो। यसले परमेश्वरको प्रतिनिधित्व गर्दछ। यो मन्त्र आध्यात्मिक रूपले उन्नत व्यक्तिहरूका लागि हो। यसको जप गर्दा जसले सफलता पाउन सक्दछ त्यो भगवान्‌को दिव्य स्थितिमा पुग्न सक्दछ। गायत्री मन्त्र जप गर्नका लागि सर्वप्रथम, मानिसले सिद्धपुरुषका गुणहरू आर्जन गर्नु पर्दछ तथा भौतिक प्रकृतिका नियमअनुसार सात्विक गुणहरू प्राप्त गर्नु पर्दछ। वैदिक सभ्यतामा गायत्री मन्त्रको स्थान अत्यन्त महत्त्वपूर्ण छ, त्यसैले यसलाई ब्रह्मको शब्द अवतार मानिएको छ। ब्रह्माको गायत्री मन्त्रकादाता गुरु हुन् र त्यही गुरुपरम्पराबाट यो अगाडि बढ्दैआएको छ।

मङ्सिर महिनालाई सबै महिनाहरूमा उत्तम मानिएको छ, किनभने भारतवर्षमा यसै महिनामा खेतबाट अन्नबालीहरू जम्मा गरिइन्छ र मानिसहरू अत्यन्त प्रसन्न हुन्छन्। वसन्त ऋतुलाई सारा संसारले मनपराउँछ, किनभने वसन्तमा धेरै जाडो पनि हुँदैन, धेरै गर्मी पनि हुँदैन र यस समयमा रूख-बिरूवाहरू, फल-फूलहरूले सजिन्छन्। वसन्त ऋतुमै भगवान् श्रीकृष्णका लीलाहरूसँग सम्बन्धित धेरै उत्सवहरू मनाइन्छन्। त्यसैले यसलाई सबै ऋतुहरूमध्ये सबैभन्दा रमाइलो मानिएको हो र यो ऋतु पनि परमेश्वर श्रीकृष्णकै प्रतिनिधिरूप हो।

**द्यूतं छलयतामस्मि तेजस्तेजस्विनामहम् ।**
**जयोऽस्मि व्यवसायोऽस्मि सत्त्वं सत्त्ववतामहम् ॥ ३६ ॥**

**द्यूतम्** — जूवा; **छलयताम्** — सबै धोकाहरूमा; **अस्मि** — म हूँ; **तेजः** — तेज; **तेजस्विनाम्** — तेजस्वीहरूमा; **अहम्** — म हूँ; **जयः** — विजय; **अस्मि** — हूँ; **व्यवसायः** — उद्योग वा साहसिक कार्य; **अस्मि** — हूँ; **सत्त्वम्** — बल; **सत्त्ववताम्** — बलियाहरूको; **अहम्** — म हूँ।

**म धोकाहरूमा जूवा हूँ, तेजस्वीहरूमा म तेज हूँ, म विजय हूँ, म नै साहस हूँ र बलवान्‌हरूको बल पनि मै हूँ।**

**तात्पर्य :** सारा संसारभरि विभिन्न प्रकारका ठगहरू छन्। सबै किसिमका छलकपटहरूमा जूवा सर्वोपरि छ, त्यसैले यो श्रीकृष्णको प्रतिनिधि हो। परमेश्वर भएका हुनाले श्रीकृष्ण कुनै पनि सामान्य मानिसभन्दा बढ्ता छली वा धूर्त हुन सक्नु हुन्छ। यदि भगवान् श्रीकृष्णले कसैलाई झुक्याउन वा छल्न चाहनुभयो भने त्यस्तो छलकपटमा उहाँलाई कसैले भेट्न सक्दैन। उहाँको महान्ता एकपक्षीय नभएर बहुपक्षीय वा सर्वाङ्गपूर्ण छ।

उहाँ सबै विजयीहरूका पनि विजयी हुनुहुन्छ। उहाँ तेजस्वीहरूका पनि तेज हुनुहुन्छ। उद्योगी र कर्मठहरूमा उहाँ सबैभन्दा ठुलो उद्योगी र कर्मठ हुनुहुन्छ। साहसीहरूमा सबैभन्दा बढी साहसी र बलियाहरूमा सबैभन्दा बलियो हुनुहुन्छ। भगवान् श्रीकृष्ण यस धर्तीमा हुँदा बलमा उहाँलाई कसैले पनि जित्न सकेनन्। उहाँले बाल्यावस्थामा गोवर्द्धन पर्वत उठाउनुभयो। ठगनमा पनि उहाँलाई कसैले जित्न सक्दैन र तेजमा पनि कसैले उहाँलाई जित्न सक्दैन। विजयमा पनि उहाँलाई कसैले भेट्न सक्दैन, उद्योगमा पनि उहाँलाई कसैले भेट्न सक्दैन र त्यसै गरी बलमा पनि उहाँलाई कसैले जित्न सक्दैन।

**वृष्णीनां वासुदेवोऽस्मि पाण्डवानां धनञ्जयः ।**
**मुनीनामप्यहं व्यासः कवीनामुशना कविः ॥ ३७ ॥**

**वृष्णीनाम्** — वृष्णि कुलमा जन्मिएकाहरूमा; **वासुदेवः** — द्वारकावासी कृष्ण; **अस्मि** — म हूँ; **पाण्डवानाम्** — पाण्डवहरूमा; **धनञ्जयः** — अर्जुन; **मुनीनाम्** — मुनिहरूमा; **अपि** — पनि; **अहम्** — म; **व्यासः** — सम्पूर्ण वैदिक साहित्यका सङ्ग्रहकर्ता; **वेदव्यास**; **कवीनाम्** — सम्पूर्ण महान् चिन्तकहरूमा; **उशना** — उसना (शुक्राचार्य); **कविः** — विचारक।

**वृष्णिकुलमा म वासुदेव हूँ, पाण्डवहरूमा म अर्जुन हूँ, मुनिहरूमा म व्यास हूँ र महान् विचारकहरूमा म उशना ( शुक्राचार्य ) हूँ।**

**तात्पर्य :** श्रीकृष्ण मूल भगवान् हुनुहुन्छ र श्रीबलदेव उहाँका निकटतम अंशविस्तार हुनुहुन्छ। श्रीकृष्ण र श्रीबलराम दुवै वसुदेवका छोरा भएर जन्मिनुभएको हुनाले दुवैलाई वासुदेव भन्न सकिन्छ। अर्को दृष्टिकोणबाट हेर्दा, भगवान् श्रीकृष्ण कहिल्यै वृन्दावन छोडेर अन्यत्र नजाने हुनाले अन्यत्र देखापर्ने श्रीकृष्णका अन्य रूपहरू उहाँकै विस्तार हुन्। वासुदेव भगवान् श्रीकृष्णका निकटतम अंशविस्तार हुनुहुन्छ, त्यसैले वासुदेव श्रीकृष्णभन्दा भिन्न हुनु हुन्न। अतः *भगवद्गीताको* यो श्लोकमा प्रयोग भएको वासुदेव शब्दले बलदेव वा बलरामलाई सङ्केत गरेको कुरा बुझ्नु पर्दछ। किनभने उहाँ सबै अवतारहरूका मूलस्रोत हुनुहुन्छ र यसरी वासुदेवका पनि एकमात्र

उद्गम हुनुहुन्छ। भगवान्को निकटतम विस्तारलाई **स्वांश** (स्वकीय विस्तार) र अर्को पृथक् वा भिन्न विस्तारलाई **विभिन्नांश** भनिन्छ।

पाण्डुका छोराहरूमा अर्जुन धनञ्जय नामले प्रसिद्ध छन्। उनी पुरुषहरूमा श्रेष्ठ भएका हुनाले भगवान् श्रीकृष्णका प्रतिनिधि हुन्। वैदिक ज्ञानमा निपुण विद्वान् मुनिहरूमा व्यास सबैभन्दा ठुला हुन्, किनभने उनले कलियुगका सर्वसाधारण मानिसहरूलाई सम्झाउनका लागि वैदिक ज्ञानलाई विभिन्न किसिमले व्याख्या गरेका छन्। व्यास भगवान् श्रीकृष्णका अवतार भनेर चिनिन्छन्, त्यसैले व्यास पनि श्रीकृष्णकै प्रतिनिधि हुन्। कविहरू कुनै विषयवस्तुको विस्तृत रूप विचार गर्नमा समर्थ हुन्छन्। त्यस्ता कविहरूमध्ये उशना कवि अर्थात् दैत्यहरूका गुरु शुक्राचार्य प्रमुख मानिन्छन्। उनी अत्यन्त बुद्धिमान् तथा दूरदर्शी राजनीतिज्ञ थिए। यसप्रकार ती शुक्राचार्य पनि भगवान् श्रीकृष्णका विभूतिस्वरूप हुन्।

**दण्डो दमयतामस्मि नीतिरस्मि जिगीषताम् ।**
**मौनं चैवास्मि गुह्यानां ज्ञानं ज्ञानवतामहम् ॥ ३८ ॥**

**दण्डः** — सजाय; **दमयताम्** — दमनका सम्पूर्ण साधनहरूमा; **अस्मि** — म हूँ; **नीतिः** — नैतिकता; **अस्मि** — हूँ; **जिगीषताम्** — विजयको चाहना गर्नेहरूमा; **मौनम्** — मौन; **च** — तथा; **एव** — पनि; **अस्मि** — हूँ; **गुह्यानाम्** — रहस्यहरूमा; **ज्ञानम्** — ज्ञान; **ज्ञानवताम्** — ज्ञानीहरूमा; **अहम्** — म हूँ।

**अराजकतालाई दमन गर्ने सम्पूर्ण साधनहरूमा म दण्ड हूँ, विजयको चाहना गर्नेहरूमा म नैतिकता हूँ, गोप्य कुराहरूमा मौन हूँ, बुद्धिमान्हरूमा म बुद्धि हूँ।**

**तात्पर्य :** दमन गर्नका लागि धेरै साधनहरू छन्, जसमध्ये सबैभन्दा महत्त्वपूर्ण हो दुष्टहरूको विनाश। दुष्टहरूलाई दण्ड दिएपछि, दण्ड दिने व्यक्ति भगवान् श्रीकृष्णकै प्रतिनिधि बन्न बन्दछ। कुनै कामका क्षेत्रमा विजय प्राप्त गर्न प्रयत्न गर्नेहरूमा विजयसूचक तत्त्व नैतिकता हो। सुन्ने, सोच्ने, र ध्यान गर्ने गोपनीय कार्यमा मौनधारण गर्नु सबैभन्दा महत्त्वपूर्ण कुरा हो। किनभने मौनधारण गर्नाले मानिसले अति छिटो प्रगति गर्दछ। जसले पदार्थ र आत्माका बीचमा तथा भगवान्का पराशक्ति र अपराशक्तिका बीचमा रहेको भेद छुट्याउन सक्दछ, त्यो बुद्धिमान् हो। यस्तो ज्ञान त स्वयम् भगवान् श्रीकृष्णको रूप हो।

**यच्चापि सर्वभूतानां बीजं तदहमर्जुन ।**
**न तदस्ति विना यत्स्यान्मया भूतं चराचरम् ॥ ३९ ॥**

**यत्** — जो; **च** — पनि; **अपि** — हुन सक्दछ; **सर्वभूतानाम्** — सम्पूर्ण सृष्टिमा; **बीजम्** — बीज; **तत्** — त्यो; **अहम्** — म हूँ; **अर्जुन** — हे अर्जुन; **न** — होइन; **तत्** — त्यो; **अस्ति** — हो; **विना** — रहित; **यत्स्यान्** — जो होस्; **मया** — मबाट; **भूतम्** — जीव; **चर-अचरम्** — जड र चेतन।

**हे अर्जुन! म अभ्र सम्पूर्ण अस्तित्वलाई जन्माउने बीज हूँ, त्यस्तो कुनै चर वा अचर प्राणी छैन जो म बिना रहन सकोस्।**

**तात्पर्य :** प्रत्येक वस्तुको कारण हुन्छ र सृष्टिको बीज वा कारण भगवान् श्रीकृष्ण हुनुहुन्छ। श्रीकृष्णको शक्तिबिना कुनै वस्तु पनि रहन सक्दैन, त्यसैले उहाँलाई सर्वशक्तिमान् भनिन्छ। उहाँको शक्तिबिना न त चर प्राणीको अस्तित्व सम्भव छ न अचर वस्तुको। कुनै कुरा भगवान् श्रीकृष्णको शक्तिमा आधारित छैन भन्नु नै माया हो अर्थात् माया त्यो हो, जो छँदैछैन।

**नान्तोऽस्ति मम दिव्यानां विभूतीनां परन्तप ।**
**एष तूद्देशतः प्रोक्तो विभूतेर्विस्तरो मया ॥ ४० ॥**

**न** — न त; **अन्तः** — सीमा; **अस्ति** — छ; **मम** — मेरा; **दिव्यानाम्** — दिव्य; **विभूतीनाम्** — विभूतिहरूको; **परन्तप** — हे शत्रुहरूका विजेता; **एषः** — यो सबै; **तु** — तर; **उद्देशतः** — उदाहरण स्वरूप; **प्रोक्तः** — भनियो; **विभूतेः** — ऐश्वर्यहरूको; **विस्तरः** — विस्तार; **मया** — मद्वारा।

**हे परन्तप! मेरा दिव्य विभूतिहरूको कुनै अन्त्य छैन। मैले तिमीसँग जे भने त्यो त मेरो अनन्त विभूतिहरूको सङ्केत मात्रै हो।**

**तात्पर्य :** वैदिक साहित्यमा भनिएको छ—भगवान्का शक्तिहरू तथा विभूतिहरूलाई विभिन्न प्रकारले बुझ्न सकिन्छ तैपनि त्यस्ता विभूतिहरूको कुनै सीमा छैन। त्यसले सम्पूर्ण विभूति तथा शक्तिहरूको वर्णन गर्न सम्भव छैन। अर्जुनको जिज्ञासा शान्त पार्नका लागि मात्र केही उदाहरणको चर्चा गरिएको हो।

**यद्यद्विभूतिमत्सत्त्वं श्रीमदूर्जितमेव वा ।**
**तत्तदेवावगच्छ त्वं मम तेजोंऽशसम्भवम् ॥ ४१ ॥**

**यत्यत्** — जुन जुन; **विभूतिमत्** — ऐश्वर्यले युक्त; **सत्त्वम्** — अस्तित्व; **श्रीमत्** — सुन्दर; **उर्जितम्** — गौरवशाली; **एव** — निश्चय नै; **वा** — अथवा; **तत्तत्** — ती सबै; **एव** — निश्चय नै; **अवगच्छ** — जान्नु पर्दछ; **त्वम्** — तिमीले; **मम** — मेरो; **तेजः** — तेजको; **अंश** — अंशबाट; **सम्भवम्** — उत्पन्न भएको।

**सम्पूर्ण ऐश्वर्य, सौन्दर्य र यो गौरवशाली सृष्टि, मेरा तेजको एउटा झिल्कोबाट उत्पन्न भएको हो भन्ने कुरा तिमीले बुझ।**

**तात्पर्य :** आध्यात्मिक जगत्‌मा होस् वा भौतिक जगत्‌मा, कुनै पनि तेजस्वी वा सुन्दर सृष्टि देखिन्छ, त्यसलाई भगवान् श्रीकृष्णकै विभूतिको एउटा अंशप्रकाश मान्नु पर्दछ। कुनै पनि वस्तु यदि असाधारण किसिमको ऐश्वर्यले सम्पन्न छ त्यसलाई भगवान् श्रीकृष्णकै विभूतिको प्रतिनिधिरूप मान्नु पर्दछ।

**अथवा बहुनैतेन किं ज्ञातेन तवार्जुन ।**
**विष्टभ्याहमिदं कृत्स्नमेकांशेन स्थितो जगत् ॥ ४२ ॥**

**अथवा** — अथवा; **बहुना** — धेरै; **एतेन** — यस किसिमले; **किम्** — के; **ज्ञातेन** — जान्नाले; **तव** — तिम्रो; **अर्जुन** — हे अर्जुन; **विष्टभ्य** — व्याप्त भएर; **अहम्** — म; **इदम्** — यो; **कृत्स्नम्** — सम्पूर्ण; **एक** — एक; **अंशेन** — अंशद्वारा; **स्थितः** — अवस्थित छु; **जगत्** — ब्रह्माण्डमा।

**तर अर्जुन! यो सम्पूर्ण विस्तृत ज्ञानको आवश्यकता नै के छ र ? मैले त आफ्नो एउटा मात्र अंशले यो सम्पूर्ण ब्रह्माण्डमा व्याप्त भएर यसलाई धारण गर्दछु।**

**तात्पर्य :** भगवान् सम्पूर्ण वस्तुहरूमा परमात्माका रूपमा प्रविष्ट भएर रहनुभएको छ। त्यसैले भगवान्‌ले सम्पूर्ण भौतिक ब्रह्माण्डको प्रतिनिधित्व गर्नु हुन्छ। भगवान् अर्जुनलाई भन्नु हुन्छ— प्रत्येक वस्तुहरू आ-आफ्ना ऐश्वर्य र महिमा कसरी स्थित छन् भन्ने कुरा जानिराख्नुपर्ने आवश्यकता छैन, मानिसले हरेक वस्तुमा भगवान् श्रीकृष्ण नै परमात्माका रूपमा अन्तर्निहित हुनुहुन्छ र त्यसकारण ती वस्तुहरू अस्तित्वमा रहेका हुन् भन्ने मात्र बुझे पुग्दछ। ब्रह्माजस्ता विराट जीवात्मादेखि लिएर कमिलाजस्ता अत्यन्त साना जीवात्माभित्र पनि भगवान् परमात्मा रूपले विराजमान हुनुहुन्छ र सबैको पालन गर्नु हुन्छ, त्यसैले सबैको अस्तित्व छ।

संसारमा यस्ता धार्मिक संस्था छन् जसले कुनै पनि देवताको निरन्तर पूजा गर्नाले जीवनको परमलक्ष्य वा भगवान् प्राप्त गर्न सकिन्छ भन्ने कुरा सधैँ प्रचार गर्दछन्। तर, यहाँ देवताहरूको पूजा गर्ने कार्यलाई पूर्णतया निरुत्साहित गरिएको छ। किनभने ब्रह्मा र शिवजस्ता महानतम देवताहरू पनि भगवान्‌का विभूतिका ऐश्वर्यको एउटा अंश मात्रै हुन्। जगत्‌मा जन्म लिएका हरेक प्राणीका जन्मदाता भगवान् श्रीकृष्ण नै हुनुहुन्छ र उहाँभन्दा ठुलो कोही छैन। उहाँ **असमौर्ध्व** हुनुहुन्छ, अर्थात् न कोही उहाँभन्दा श्रेष्ठ छ न कोही उहाँको

बराबर नै। पद्मपुराणमा भनिएको छ— जसले भगवान् श्रीकृष्णलाई देवताको श्रेणीको व्यक्ति ठान्दछ त्यो ब्रह्मा वा शिव नै भए पनि तत्काल नास्तिक (पाखण्डी) हुन पुग्दछ। तर कसैले भगवान् श्रीकृष्णका शक्तिको वैभव र विस्तारसम्बन्धी विवेचनालाई राम्रोसँग अध्ययन गर्दछ त्यसले शंकारहित भएर भगवान् श्रीकृष्णको स्थितिलाई बुझ्न सक्दछ र अविचल भावले आफ्नो मनलाई श्रीकृष्णको उपासनामा स्थिर बनाउन सक्दछ। आफ्नो अंशविस्तार गरेर भगवान्ले आफूलाई परमात्माका रूपमा सर्वव्यापी बनाउनुभएको छ। उहाँ हरेक वस्तुमा प्रवेश गर्नु हुन्छ। शुद्ध भक्तहरू परिपूर्ण भक्तिभावले युक्त भएर आफूलाई कृष्णभावनामा एकाग्र पार्दछन्। त्यसैले तिनीहरू सधैँ दिव्य अवस्थामा विद्यमान रहन्छन्। यस अध्यायका ८ देखि ११ श्लोकमा भगवान् श्रीकृष्णको भक्ति र श्रीकृष्णको पूजासम्बन्धी विषयको स्पष्ट सङ्केत गरिएको छ। शुद्धभक्तिको मार्ग पनि यही हो। मानिस कसरी चरमसिद्धि प्राप्त गरेर भगवान्को सङ्गतिमा पुग्दछ भन्ने कुराको राम्रो व्याख्या यस अध्यायमा गरिएको छ। भगवान् श्रीकृष्णबाटै सुरु भएको गुरुपरम्पराका महान् आचार्य श्रील बलदेव विद्याभूषण निम्नलिखित भनाइबाट यो अध्यायको आफ्नो टीका (भाष्य) पूरा गर्नु हुन्छ।

*यच्छक्तिलेशात्सुर्याद्या भवन्त्यत्युग्रतेजसः ।*
*यदंशेन धृतं विश्वं स कृष्णो दशमेऽर्च्यते ॥*

भगवान् श्रीकृष्णको प्रचण्ड शक्तिबाट शक्तिशाली सूर्यले आफ्नो तेज आर्जन गर्दछन् र श्रीकृष्णको एउटा सानो अंशद्वारा यो सारा संसारको पालन भइराखेको छ, त्यसैले भगवान् श्रीकृष्ण नै पूजनीय हुनुहुन्छ।

यस प्रकार *श्रीमद्भगवद्गीता* ग्रन्थअन्तर्गत 'भगवान्को ऐश्वर्य' शीर्षक दसौँ अध्यायको भक्तिवेदान्त तात्पर्य समाप्त भयो।

# अध्याय-एघार

# विराट स्वरूप

अर्जुन उवाच

**मदनुग्रहाय परमं गुह्यमध्यात्मसंज्ञितम् ।**
**यत्त्वयोक्तं वचस्तेन मोहोऽयं विगतो मम ॥ १ ॥**

**अर्जुन उवाच** — अर्जुनले भने; **मत् अनुग्रहाय** — ममाथि कृपा गर्नका लागि; **परमम्** — परम; **गुह्यम्** — गोपनीय; **अध्यात्मसंज्ञितम्** — अध्यात्म भन्ने नाम भएको; **यत्** — जुन; **त्वया** — हजुरले; **उक्तम्** — भन्नुभयो; **वचः** — वचन (शब्द); **तेन** — त्यसले; **मोहः** — मोह; **अयम्** — यो; **विगतः** — हट्यो; **मम** — मेरो।

**अर्जुनले भने — हजुरले मलाई अनुग्रह गरेर दिनुभएको अध्यात्म-विषयक अत्यन्त गोपनीय उपदेशहरू सुनेर मेरो मोह ( भ्रम ) समाप्त भयो।**

**तात्पर्य :** यस अध्यायले भगवान् श्रीकृष्णलाई नै सबै कारणहरूका मूल कारण साबित गरेको छ। जसबाट यो भौतिक जगत्को उत्पत्ति भयो ती महाविष्णुका पनि कारण श्रीकृष्ण नै हुनुहुन्छ। श्रीकृष्ण अवतार हुनु हुन्न, उहाँ सबै अवतारहरूका स्रोत हुनुहुन्छ। यसभन्दा पूर्वको अध्यायमा पनि यस कुराको पूर्ण व्याख्या भइसकेको छ।

जहाँसम्म अर्जुनको प्रसङ्ग छ, उनी भन्छन् "अब मेरो भ्रम हट्यो"। यसको अर्थ हो — अर्जुनले भगवान् श्रीकृष्णलाई अब एउटा साधारण मानिस र आफ्नो मित्र मात्र नभएर सबै वस्तुहरूका मूलस्रोत हुनुहुन्छ भनेर महशुश गरे। अर्जुन अत्यन्त प्रबुद्ध व्यक्ति हुन्। श्रीकृष्णजस्ता महान् व्यक्तित्वलाई आफ्ना मित्रका रूपमा पाउँदा उनी साह्रै प्रसन्न छन्। तर यहाँ उनीले के सोच्न थालेका छन् भने, "मैले कृष्णलाई हरेक वस्तुका स्रोत मानेको छु तर अरूले नमान्न सक्दछन्।" त्यसैले यस अध्यायमा सबैका दृष्टिमा भगवान् श्रीकृष्णको अलौकिकता स्थापित गर्नका लागि उनले श्रीकृष्णसँग आफ्नो विराट रूपको दर्शन दिन अनुरोध गरे। वास्तवमा अर्जुनले जस्तै भगवान् श्रीकृष्णको विराट रूपको दर्शन गर्दा मानिसहरू भयभीत हुन्छन्। त्यसैले श्रीकृष्णले अर्जुनलाई विराट स्वरूपको प्रदर्शन गराइसक्नु भएपछि त्यो विराट रूपलाई फेरि आफ्नो वास्तविक रूपमा रूपान्तरित गर्नुभयो। श्रीकृष्णले अर्जुनलाई बारम्बार जे भन्नु

हुन्थ्यो त्यो उनकै हितका लागि भन्नुहुन्थ्यो भन्ने कुरामा अर्जुन सहमत भएका छन्। अतः जे भइरहेको छ त्यो सबै भगवान् श्रीकृष्णका कृपाले भइरहेको छ भन्ने तथ्यलाई अर्जुनले स्वीकार गरे। श्रीकृष्ण सम्पूर्ण कारणहरूका पनि कारण हुनुहुन्छ र परमात्मा बनेर हरेकका हृदयमा उपस्थित हुनुहुन्छ भन्ने विश्वास पनि अब अर्जुनलाई भयो।

**भवाप्ययौ हि भूतानां श्रुतौ विस्तरशो मया ।**
**त्वत्तः कमलपत्राक्ष महात्म्यमपि चाव्ययम् ॥ २ ॥**

**भव** — उत्पत्ति; **अप्ययौ** — प्रलय; **हि** — निश्चय नै; **भूतानाम्** — सम्पूर्ण जीवात्माको; **श्रुतौ** — श्रवण गरिइसकिएको छ; **विस्तरशः** — विस्तारपूर्वक; **मया** — मद्वारा; **त्वत्तः** — तपाईंबाट; **कमलपत्र-अक्ष** — हे कमलनयन भगवान्; **माहात्म्यम्** — महिमा; **अपि** — पनि; **च** — तथा; **अव्ययम्** — अक्षय, अविनाशी।

**हे कमलनयन प्रभु! मैले हजुरबाट प्रत्येक जीवात्माको सृष्टि र विनाशका बारेमा विस्तारपूर्वक सुनेँ र हजुरको अविनाशी महिमाको अनुभव पनि गरेँ।**

**तात्पर्य :** यहाँ अर्जुन अत्यन्त प्रसन्न देखिएका छन्। उनले भगवान् श्रीकृष्णलाई कमलनयन भनेर सम्बोधन गरेका छन्। कमलका दल (पत्र) जस्ता मनोहर आँखा भएकाले श्रीकृष्णलाई कमलनयन भनिएको हो। सातौँ अध्यायमा **अहं कृत्स्नस्य जगतः प्रभवः प्रलयस्तथा** अर्थात्, "यो सधैँ भौतिक जगत्को उत्पत्ति र प्रलयको कारण मै हूँ" भनेर भगवान् श्रीकृष्णले अर्जुनलाई विश्वस्त पारिसक्नुभएको छ। भगवान्बाट अर्जुनले यस विषयमा विस्तारपूर्वक श्रवण गरिसकेका छन्। सम्पूर्ण जगत्का उत्पत्ति र विनाशका कारण भएर पनि भगवान् यो जगत्भन्दा अलग्गै हुनुहुन्छ भन्ने ज्ञान अर्जुनलाई छ। "म सर्वव्यापी छु तापनि सबै स्थानमा उपस्थित हुन्न" भनेर भगवान्ले नवौँ अध्यायमा भन्नुभएको छ। श्रीकृष्णको अचिन्त्य ऐश्वर्य भनेको यही हो। अर्जुनले यो कुरा राम्रोसँग बुझेको छु भनेर स्वीकार गर्दछन्।

**एवमेतद् यथात्थ त्वमात्मानं परमेश्वर ।**
**द्रष्टुमिच्छामि ते रूपमैश्वरं पुरुषोत्तम ॥ ३ ॥**

**एवम्** — यस प्रकार; **एतत्** — यो; **यथा** — जस्तो; **आत्थ** — भनिएको छ; **त्वम्** — तपाईंले; **आत्मानम्** — आफूलाई; **परम-ईश्वर** — हे परमेश्वर; **द्रष्टुम्** — देख्न; **इच्छामि** — इच्छा गर्दछु; **ते** — तपाईंको; **रूपम्** — रूप; **ऐश्वर्यम्** — दैवी; **पुरुष उत्तम** — हे पुरुषहरूमा उत्तम।

**हे पुरुषोत्तम, हे परमेश्वर! मैले मेरा अगाडि हजुरले वर्णन गरेजस्तै हजुरको वास्तविक स्वरूपमा हजुरलाई देखिरहेको छु र हजुर यो विशाल ब्रह्माण्डभित्र प्रविष्ट भएर कसरी रहनुभएको छ, म त्यो रूपको पनि दर्शन गर्न चाहन्छु।**

**तात्पर्य :** भगवान् भन्नु हुन्छ—"म मेरो निजी स्वरूपमा यो भौतिक ब्रह्माण्डभित्र प्रवेश गरेको हुनाले नै यो सृष्टि प्रकट भएको हो र मेरो कारणले यो चलिरहेको छ।" अब जहाँसम्म अर्जुनको प्रश्न छ, उनी भगवान् श्रीकृष्णकै वचनद्वारा प्रोत्साहित भइरहेका छन् तर श्रीकृष्णलाई एउटा सामान्य मानिस ठान्न सक्ने भविष्यका मानिसहरूलाई विश्वस्त पार्नका लागि अर्जुनले भगवान्लाई उहाँको वास्तविक विश्वरूपमा देख्न चाहेका हुन्। उनलाई भगवान् सृष्टिभन्दा पृथक् रहेर पनि ब्रह्माण्डभित्रबाट कसरी काम गरिरहनु हुन्छ भन्ने देखाउन इच्छा लागेको छ। यहाँ अर्जुनले भगवान्लाई **पुरुषोत्तम** भनेर सम्बोधन गर्नु पनि महत्त्वपूर्ण छ। उहाँ भगवान् हुनुभएकाले स्वयम् अर्जुनभित्र पनि उहाँको उपस्थिति छ। त्यसैले, भगवान् अर्जुनको इच्छा बुझ्नुहुन्छ। अर्जुन भगवान्को साक्षात् "कृष्ण" रूप नै देखेर पूर्णतया सन्तुष्ट थिए, त्यसैले उनलाई उहाँको विश्वरूपको दर्शन गर्न कुनै विशेष इच्छा थिएन। तर, अर्जुन अरूलाई विश्वस्त पार्नका लागि मात्रै पनि भगवान्को विराट रूपको दर्शन गर्न चाहन्छन् भन्ने कुरा पनि भगवान् श्रीकृष्णलाई थाहा थियो। अर्जुनलाई यस कुराको पुष्टि गरिरहने कुनै विशेष इच्छा थिएन। आफूलाई ईश्वरको अवतार प्रमाणित गर्न चाहने भविष्यका धूर्तहरूका अगाडि अर्जुन एउटा आदर्श स्थापित गर्न चाहन्छन्। त्यसैले, उनी विराट रूपको दर्शन गर्न इच्छा गरिरहेका छन् भन्ने कुरा श्रीकृष्णले बुझ्नुभएको थियो। अतः जसले आफूलाई भगवान् श्रीकृष्ण हूँ भन्ने दाबी गर्न चाहन्छन् ती सबै सावधान रहून्। त्यस्ता व्यक्तिले आफ्नो दाबीको पुष्टिका लागि विराट रूप देखाउन पनि तयार रहनु पर्दछ।

**मन्यसे यदि तच्छक्यं मया द्रष्टुमिति प्रभो ।**
**योगेश्वर ततो मे त्वं दर्शयात्मानमव्ययम् ॥ ४॥**

**मन्यसे** — मान्नुहुन्छ; **यदि** — यदि; **तत्** — त्यो; **शक्यम्** — समर्थ छ (सकिन्छ); **मया** — मद्द्वारा; **द्रष्टुम्** — देख्न; **इति** — यसरी; **प्रभो** — हे स्वामी; **योग-ईश्वर** — हे योगेश्वर; **ततः** — त्यसो भए; **मे** — मलाई; **त्वम्** — तपाईंले; **दर्शय** — देखाउनुहोस्; **आत्मानम्** — आफ्नो स्वरूपलाई; **अव्ययम्** — अविनाशी।

**हे प्रभु, हे योगेश्वर! यदि मलाई हजुरको विराटरूपको दर्शन गर्नयोग्य व्यक्ति ठान्नुहुन्छ भने कृपा गरेर मलाई हजुरको त्यो असीम विश्वरूपको दर्शन गराउनुहोस्।**

**तात्पर्य :** भनिन्छ— भौतिक इन्द्रियद्वारा भगवान् श्रीकृष्णलाई न देख्न सकिन्छ, न सुन्न सकिन्छ, न बुझ्न सकिन्छ न त अनुभव नै गर्न सकिन्छ। सुरुदेखि नै भगवान्को दिव्य प्रेम तथा सेवामा संलग्न रहेको मानिसले मात्र आफ्नो अनुभूतिद्वारा भगवान्लाई देख्न सक्दछ। प्रत्येक जीव एउटा आध्यात्मिक स्फुलिङ्ग हो। अतः भगवान्लाई देख्न र बुझ्न उसका लागि सम्भव छैन। भक्तका रूपमा अर्जुनलाई आफ्नो चिन्तन-शक्तिप्रति विश्वास छैन बरु एउटा जीवात्मा भएकाले उनी आफ्ना सीमाहरू तथा श्रीकृष्णको अकल्पनीय स्थितिलाई स्वीकार गर्दछन्। एउटा क्षुद्र जीवले असीम आनन्दलाई बुझ्नु सम्भव छैन भन्ने कुरा अर्जुन जान्दथे।

अनन्त सत्ता स्वयम् प्रकट भइदिएमा मात्र अनन्त सत्ताको कृपाले जीवले उहाँका स्वभावलाई बुझ्न सक्दछ। यहाँ प्रयोग गरिएको योगेश्वर शब्द पनि अत्यन्त अर्थपूर्ण छ। किनभने भगवान्सँग अचिन्त्य शक्ति छ। भगवान् अनन्त हुनुहुन्छ तर पनि यदि उहाँको इच्छा भयो भने उहाँ आफूलाई प्रकट गर्न सक्नु हुन्छ। त्यसैले, यहाँ अर्जुन भगवान् श्रीकृष्णको त्यही अचिन्त्य कृपाका निमित्त निवेदन गरिरहेका छन्। उनी श्रीकृष्णलाई यसो गर्नुहोस् भनेर आदेश दिन सक्दैनन्। कुनै व्यक्ति भक्तिसेवामा लागेर तथा कृष्णभावनाभावित भएर पूर्णरूपले समर्पित नभएमा श्रीकृष्ण आफूलाई प्रकट गर्न बाध्य हुनु हुन्न। यस प्रकार आफ्नो बौद्धिक चिन्तनशक्तिमा निर्भर रहने व्यक्तिका लागि भगवान् श्रीकृष्णको दर्शन पाउनु सम्भव छैन।

श्रीभगवानुवाच

**पश्य मे पार्थ रूपाणि शतशोऽथ सहस्रशः ।**
**नानाविधानि दिव्यानि नानावर्णाकृतीनि च ॥ ५ ॥**

**श्रीभगवानुवाच** — भगवान्ले भन्नुभयो; **पश्य** — हेर; **मे** — मेरा; **पार्थ** — हे पृथापुत्र; **रूपाणि** — रूपहरू; **शतशः** — सयौँ; **अथ** — पनि; **सहस्रशः** — हजारौँ; **नानाविधानि** — विभिन्न प्रकारका; **दिव्यानि** — अलौकिक; **नाना** — विभिन्न; **वर्ण** — रङ; **आकृतीनि** — आकारहरू; **च** — पनि।

**भगवान्ले भन्नुभयो, हे पृथापुत्र अर्जुन! अब तिमी मेरा ऐश्वर्यहरू तथा विभिन्न रङ्ग र आकारका सयौँ-हजारौँ दिव्य रूपहरूलाई हेर।**

**तात्पर्य :** अर्जुन भगवान् श्रीकृष्णलाई विराट रूपमा देख्न चाहन्थे। त्यो विराट रूप अलौकिक भएर पनि सम्पूर्ण सृष्टिकै निमित्त प्रकट गरिन्छ, त्यसैले त्यो रूप भौतिक प्रकृतिको अस्थायी कालचक्रको अधीनस्थ हुन्छ। जसरी भौतिक प्रकृति कहिले प्रकट हुने र कहिले अप्रकट रहने गर्दछ, त्यसै गरी भगवान् श्रीकृष्णको यो विश्वरूप पनि कहिले प्रकट हुन्छ र कहिले अप्रकट। यो विश्वरूप श्रीकृष्णका अन्य रूपहरूजस्तै आध्यात्मिक जगत्मा सधैँ विद्यमान रहँदैन। जहाँसम्म भक्तहरूको कुरा छ, उनीहरू विराट रूप देख्नका लागि त्यति उत्सुक हुँदैनन्, तैपनि अर्जुन भगवान्लाई यस्तो रूपमा देख्न चाहन्थे। फलस्वरूप, भगवान् श्रीकृष्णले आफ्नो विराट स्वरूपको प्रदर्शन गर्नुभयो। यो विराट रूप कुनै अन्य साधारण मानिसद्वारा देख्न सम्भव छैन। विराट रूपको दर्शनका लागि श्रीकृष्णले नै विशेष शक्ति दिनु पर्दछ।

**पश्यादित्यान्वसून्रुद्रानश्विनौ मरुतस्तथा ।**
**बहून्यदृष्टपूर्वाणि पश्याश्चर्याणि भारत ॥ ६ ॥**

**पश्य** — हेर; **आदित्यान्** — अदितिका बाह्रभाइ छोराहरू; **वसून्** — अष्ट वसुहरू; **रुद्रान्** — एघारवटा रुद्रहरू; **अस्विनौ** — दुई अश्विनीकुमारहरू; **मरुतः** — उनन्चास वायुहरू (वायुका देवताहरू); **तथा** — तथा; **बहूनि** — धेरै; **अदृष्ट** — नदेखिएका; **पूर्वाणि** — पहिले; **पश्य** — हेर; **आश्चर्याणि** — सबै आश्चर्यहरू; **भारत** — हे भरतवंशीहरूमा श्रेष्ठ (अर्जुन)।

**हे भारत! यहाँ आदित्यहरू, वसुहरू, रुद्रहरू, अश्विनीकुमारहरू र सम्पूर्ण अरू देवताहरूका विभिन्न रूपहरूलाई तिमी हेर र अरू पनि धेरै आश्चर्यजनक कुराहरूलाई हेर, जसलाई योभन्दा पहिले न कसैले देखेको थियो न सुनेको थियो।**

**तात्पर्य :** अर्जुन भगवान् श्रीकृष्णका घनिष्ठ मित्र तथा विद्वान्हरूमा अग्रगण्य थिए तापनि अहिलेसम्म उनलाई श्रीकृष्णका बारेमा सम्पूर्ण कुरा जान्न सम्भव भएको थिएन। यहाँ भनिएको छ— यी सम्पूर्ण रूप र प्रस्तुतिहरूलाई यसअघि कुनै पनि मानिसले कहिल्यै पनि जानेको वा सुनेको थिएन। यी आश्चर्यजनक रूपहरूलाई अहिले भगवान् श्रीकृष्णले देखाउँदै हुनुहुन्छ।

**इहैकस्थं जगत्कृत्स्नं पश्याद्य सचराचरम् ।**
**मम देहे गुडाकेश यच्चान्यद् द्रष्टुमिच्छसि ॥ ७ ॥**

**इह** — यसमा; **एकस्थम्** — एकै ठाउँमा; **जगत्** — ब्रह्माण्ड; **कृत्स्नम्** — पूर्णतया; **पश्य** — हेर; **अद्य** — अहिले भर्खर; **सचराचरम्** — चर र

अचरसहित; **मम** — मेरो; **देहे** — शरीरमा; **गुडाकेश** — हे अर्जुन; **यत्** — जो; **च** — पनि; **अन्यत्** — अरू; **द्रष्टुम्** — देख्न; **इच्छसि** — चाहन्छौ।

**हे अर्जुन! तिमी जे जे कुरा हेर्न चाहन्छौ त्यो सबै अहिले यो मेरो शरीरमा हेर। अहिले र भविष्यको बारेमा पनि तिमी जे जे हेर्न चाहन्छौ त्यो यही विराट-स्वरूपमा देख्न सक्नेछौ। सम्पूर्ण चर र अचर वस्तुहरू तिमी यहाँ एकै ठाउँमा देख्नेछौ।**

**तात्पर्य :** एकै ठाउँमा बसेर कसैले पनि सम्पूर्ण विश्वब्रह्माण्डको दर्शन गर्न सक्दैन। ठुलाठुला वैज्ञानिकहरू पनि विश्वका अन्य भागमा के भइरहेछ भन्ने कुरा जान्न सक्दैनन्। तर, अर्जुनजस्ता भक्तले ब्रह्माण्डका कुनै पनि भागमा विद्यमान हरेक वस्तुहरू एकै ठाउँमा बसेर देख्न सक्दछन्। भगवान्‌ले भूत, भविष्य र वर्तमानका जुनसुकै वस्तुलाई पनि देख्न सक्ने शक्ति उनलाई दिनु हुन्छ। यस प्रकार, भगवान् श्रीकृष्णका कृपाले अर्जुन सबै कुरा देख्न समर्थ भए।

**न तु मां शक्यसे द्रष्टुमनेनैव स्वचक्षुषा ।**
**दिव्यं ददामि ते चक्षुः पश्य मे योगमैश्वरम् ॥ ८॥**

**न** — होइन; **तु** — तर; **माम्** — मलाई; **शक्यसे** — सक्दछौ; **द्रष्टुम्** — देख्न; **अनेन** — यी; **एव** — निश्चय नै; **स्वचक्षुषा** — आफ्ना आँखाले; **दिव्यम्** — दिव्य; **ददामि** — दिन्छु; **ते** — तिमीलाई; **चक्षुः** — आँखा; **पश्य** — हेर; **मे** — मेरो; **योगम्-ऐश्वरम्** — अचिन्त्य योगशक्ति।

**तर तिमी तिम्रा यी आँखाले मलाई देख्न सक्दैनौ, त्यसैले म तिमीलाई दिव्य नेत्र दिन्छु, तिनै दिव्य नेत्रले मेरो योग-ऐश्वर्य ( विभूति ) लाई हेर।**

**तात्पर्य :** शुद्ध भक्तले भगवान्‌को दुई भुजाधारी रूपबाहेक अरू कुनै रूपको दर्शन गर्ने इच्छा राख्दैन। भक्तले त भगवान्‌का कृपाले प्राप्त दिव्य दृष्टिद्वारा नै उहाँको विराट स्वरूपको दर्शन गर्नु पर्दछ, मनद्वारा होइन। भगवान् श्रीकृष्णको विराट रूप हेर्नका लागि अर्जुनलाई मन परिवर्तन गर्न होइन दृष्टि परिवर्तन गर्न भनिएको थियो। भगवान् श्रीकृष्णको यो विराट रूप त्यति महत्त्वपूर्ण छैन। यो कुरा आगामी श्लोकहरूमा स्पष्ट हुनेछ। तैपनि अर्जुनले उक्त विराट स्वरूपको दर्शन गर्ने इच्छा गरेकाले उनलाई भगवान् श्रीकृष्णले यस्तो स्वरूप देख्न सक्ने विशिष्ट दृष्टि प्रदान गर्नुभयो।

भगवान् श्रीकृष्णसँगको दिव्य सम्बन्धमा राम्रोसँग आबद्ध भएका

भक्तहरू भगवान्‌का प्रेमपूर्ण रूपहरूबाट त आकर्षित हुन्छन् तर ईश्वरविहीन ऐश्वर्यको प्रदर्शनबाट आकृष्ट हुँदैनन्। श्रीकृष्णका बालसखाहरू, उहाँका साथीहरू र उहाँका बुबा-आमाले कहिल्यै पनि श्रीकृष्णले ऐश्वर्यको प्रदर्शन गरून् भन्ने चाहना गरेनन्। उनीहरू श्रीकृष्णका प्रेममा कतिसम्म डुबेका थिए भने, उनीहरूलाई श्रीकृष्ण भगवान् हुनुहुन्छ भन्नेसम्म पनि जानकारी थिएन। प्रेमको विनिमयमा आत्मविभोर भएका तिनीहरूले श्रीकृष्ण साक्षात् परमेश्वर हुनुहुन्छ भन्ने कुरा नै भुलेका थिए। *श्रीमद्‌भागवत्‌मा* भनिएको छ—श्रीकृष्णका साथमा खेल्ने बालकहरू सबै अति पवित्र आत्मा हुन्। धेरै जन्मपछि मात्र तिनीहरूले श्रीकृष्णसँग खेल्ने सामर्थ्य एवं सौभाग्य पाएका हुन्। ती बालकहरू श्रीकृष्ण भगवान् हुनुहुन्छ भन्ने जान्दैनन्। तिनले त श्रीकृष्णलाई आफ्नै मित्र मात्र ठानिरहेका छन्। अतः शुकदेव गोस्वामी तलको श्लोकमा भन्नु हुन्छ—

*इत्थं सतां ब्रह्मसुखानुभूत्या,*
*दास्यं गतानां परदैवतेन ।*
*मायाश्रितानां नरदारकेण,*
*साकं विजह्रुः कृतपुण्यपुञ्जाः ॥*

अर्थात्—उहाँ त्यो परमपुरुष हुनुहुन्छ, जसलाई महान् ऋषिहरू निराकार ब्रह्मका रूपमा चिन्दछन्, भक्तहरू भगवान् भनेर चिन्दछन् र सामान्य मानिसहरू प्रकृतिका एउटा उपज हुनुहुन्छ भनेर मान्दछन्। आफ्ना पूर्वजन्महरूमा धेरै-धेरै पुण्य कर्म गरेका यी बालकहरू अहिले भगवान्‌सँग खेलिरहेका छन्। (*भागवत्* १०.१२.११) सत्य कुरा के हो भने, भक्तहरू भगवान्‌को विराट रूपको दर्शन गर्ने कुरासँग त्यति सरोकार राख्दैनन् तर अर्जुन भगवान् श्रीकृष्णको भनाइलाई पुष्टि गर्नका लागि उहाँको विश्वरूपको दर्शन गर्न चाहन्थे। यसो गर्नाले भविष्यका मानिसहरूले श्रीकृष्ण केवल सैद्धान्तिक कुराले वा दार्शनिक रूपले मात्र भगवान्‌का रूपमा उपस्थित नभएर व्यावहारिक वा प्रत्यक्ष रूपमा अर्जुनका सामु भगवान्‌का रूपमा उपस्थित हुनुभएको थियो भन्ने बुझ्न सक्नेछन्। अर्जुनदेखि नै यो परम्पराको सुरुवात भएको हुनाले उनले यस कुराको पुष्टि गर्नै पर्दथ्यो। यथार्थ रूपमा भगवान्‌लाई बुझ्न र अर्जुनका पदचिन्हको अनुसरण गर्न चाहनेहरूले के बुझ्नु पर्दछ भने, श्रीकृष्ण सैद्धान्तिक रूपले मात्रै होइन वास्तविक रूपमा अर्जुनका अगाडि भगवान्‌का रूपमा प्रकट हुनुभएको हो। आफ्नो विश्वरूप हेर्नसक्ने शक्ति भगवान्‌ले अर्जुनलाई दिनुभयो, किनभने भगवान् श्रीकृष्णलाई थाहा थियो

अर्जुन यथार्थमा विश्वरूप हेर्न इच्छुक थिएनन्। यसको व्याख्या पहिल्यै भइसकेको छ।

सञ्जय उवाच

**एवमुक्त्वा ततो राजन् महायोगेश्वरो हरिः ।**
**दर्शयामास पार्थाय परमं रूपमैश्वरम् ॥ ९ ॥**

**सञ्जय उवाच** — सञ्जयले भने; **एवम्** — यस प्रकार; **उक्त्वा** — भनेर; **ततः** — त्यसपछि; **राजन्** — हे राजा; **महा-योग-ईश्वरः** — महान् शक्तिशाली योगी; **हरिः** — भगवान् श्रीकृष्णले; **दर्शयामास** — देखाउनुभयो; **पार्थाय** — अर्जुनलाई; **परमम्** — दिव्य; **रूपम्-ऐश्वर्यम्** — विराट स्वरूप।

**सञ्जयले भने — हे राजन्! यति भनेर महायोगी भगवान् श्रीकृष्णले अर्जुनलाई आफ्नो विश्वरूप देखाउनुभयो।**

**अनेकवक्त्रनयनमनेकाद्भुतदर्शनम् ।**
**अनेकदिव्याभरणं दिव्यानेकोद्यतायुधम् ॥ १० ॥**
**दिव्यमाल्याम्बरधरं दिव्यगन्धानुलेपनम् ।**
**सर्वाश्चर्यमयं देवमनन्तं विश्वतोमुखम् ॥ ११ ॥**

**अनेक** — धेरै-धेरै; **वक्त्र** — मुख; **नयनम्** — आँखा; **अनेक** — कैयौँ; **अद्भुत** — विचित्र; **दर्शनम्** — दृश्यहरू; **अनेक** — धेरै; **दिव्य** — दिव्य; **आभरणम्** — आभूषणहरू; **दिव्य** — अलौकिक; **अनेक** — धेरै; **उद्यत** — उचालिएका; **आयुधम्** — हतियारहरू; **दिव्य** — दिव्य; **माल्यम्** — मालाहरू; **अम्बर** — वस्त्रहरू; **धरम्** — धारण गरेका; **दिव्य** — दिव्य; **गन्ध** — सुगन्ध; **अनुलेपनम्** — लेप लगाएको; **सर्व** — सबै; **आश्चर्यमयम्** — आश्चर्यजनक; **देवम्** — प्रकाशमान्; **अनन्तम्** — असीम (सीमारहित); **विश्वतः मुखम्** — सर्वव्यापी।

**अर्जुनले भगवान्को उक्त विश्वरूपमा असङ्ख्य मुख, असङ्ख्य आँखा र अनन्त आश्चर्यजनक दृश्यहरू देखे। विश्वरूप विभिन्न दिव्य आभूषणहरूद्वारा विभूषित हुनुहुन्थ्यो। उहाँ विभिन्न दिव्य हतियारहरूद्वारा सुसज्जित हुनुहुन्थ्यो, दिव्य मालाहरूले सुशोभित हुनुहुन्थ्यो र विभिन्न प्रकारका दिव्य सुगन्धित द्रव्यहरू लेपन गरिएको थियो। सबै कुरा आश्चर्यमय थियो, तेजोमय थियो, असीमित थियो र सर्वत्र फैलिएको थियो।**

**तात्पर्य :** यी श्लोकहरूमा बारम्बार दोहोरिएको अनेक शब्दले अर्जुन जुन

विश्वरूप देख्न चाहन्थे त्यस रूपका हात, मुख र पाउहरूको सङ्ख्या असीमित थिए भन्ने सङ्केत गर्दछ। यो विश्वरूप पूरै ब्रह्माण्डभरि फैलिएको थियो तैपनि भगवान्‌का कृपाले अर्जुनले एकै ठाउँमा बसेर त्यो सबै देख्न सकेका थिए। भगवान् श्रीकृष्णको अचिन्त्य शक्तिका कारणले यस्तो हुन सम्भव भएको हो।

**दिवि सूर्यसहस्रस्य भवेद्युगपदुत्थिता ।**
**यदि भाः सदृशी सा स्याद्भासस्तस्य महात्मनः ॥ १२ ॥**

दिवि — आकाशमा; **सूर्य** — सूर्य; **सहस्रस्य** — हजारौँ; **भवेत्** — होउन्; युगपत् — एकैचोटि; **उत्थिता** — उपस्थित; **यदि** — यदि; **भाः** — प्रकाश; सदृशी — त्यो जस्तै; **सा** — त्यो; **स्यात्** — हुन सक्दछ; **भासः** — तेज; तस्य — त्यसको; **महा-आत्मनः** — महान् आत्मा, परमेश्वर।

**आकाशमा एकैपटक हजारौँ सूर्यहरू उदाए भने तिनका प्रकाशको उज्ज्वलता जति होला त्यत्ति नै जाज्वल्यमान् प्रकाश विश्वरूपधारी भगवान्‌को थियो।**

**तात्पर्य :** अर्जुनले जे देखे त्यो वर्णन गर्नै नसकिने किसिमको थियो तैपनि सञ्जयले धृतराष्ट्रलाई त्यो अद्‌भुत दर्शनको एउटा मानसिक चित्र दिने प्रयास गरिरहेका छन्। त्यहाँ न सञ्जय उपस्थित थिए न धृतराष्ट्र, तर भगवान् व्यासका कृपाले सञ्जयले त्यहाँ जे भइरहेको थियो, सबै देख्न सक्दथे। यसरी उनले बुझ्न सहज होस् भनी हजारौँ सूर्य भन्ने एउटा विचित्रको काल्पनिक घटनासँग त्यस अवस्थाको तुलना गरे।

**तत्रैकस्थं जगत्कृत्स्नं प्रविभक्तमनेकधा ।**
**अपश्यद्देवदेवस्य शरीरे पाण्डवस्तदा ॥ १३ ॥**

**तत्र** — त्यहाँ; **एकस्थम्** — एकै ठाउँमा; **जगत्** — ब्रह्माण्ड; **कृत्स्नम्** — सम्पूर्ण; **प्रविभक्तम्** — विभाजित; **अनेकधा** — विभिन्न धारामा; **अपश्यत्** — देखे; **देवदेवस्य** — भगवान्‌को; **शरीरे** — विश्वरूपमा; **पाण्डवः** — अर्जुनले; **तदा** — त्यस समय।

**त्यस समय अर्जुनले भगवान्‌को विराट स्वरूपमा हजारौँ-हजार भागमा विभाजित भएर रहेको ब्रह्माण्डको असीमित विस्तारलाई एकै ठाउँमा देखे।**

**तात्पर्य :** यहाँ यो **तत्र** (त्यहाँ) शब्द निकै महत्त्वपूर्ण छ। अर्जुनले विश्वरूप देख्दा भगवान् श्रीकृष्ण र अर्जुन दुवैजना रथमा रहनुभएको थियो। यहाँ

त्यसैको सङ्केत गरिएको छ। युद्धभूमिमा रहेका अन्यले यो विश्वरूप देख्न सकेनन्, किनभने भगवान् श्रीकृष्णले अर्जुनलाई मात्र त्यस्तो दृष्टि प्रदान गर्नुभएको थियो। अर्जुनले श्रीकृष्णका शरीरमा हजारौँ-हजार लोकहरू देखे। सृष्टिमा धेरै ब्रह्माण्डहरू र धेरै लोकहरूको अस्तित्व रहेको कुरा हामी वैदिक शास्त्रहरूबाट थाहा पाउँदछौँ। ती लोकहरूमध्ये कुनै माटोबाट निर्मित, कुनै सुनबाट निर्मित र कुनै रत्नहरूबाट निर्मित छन् तथा ती लोकहरू कुनै धेरै ठुला र कुनै सामान्य प्रकारका छन्। आफ्नै रथमा बसेर अर्जुनले यी सबैको दर्शन गरे तर अरूले अर्जुन र भगवान् श्रीकृष्णका बीचमा के भइरहेको छ भन्ने कुरा केही बुझ्नै सकेनन्।

**ततः स विस्मयाविष्टो हृष्टरोमा धनञ्जयः ।**
**प्रणम्य शिरसा देवं कृताञ्जलिरभाषत ॥ १४ ॥**

**ततः** — त्यसपछि; **सः** — उनी; **विस्मय आविष्टः** — आश्चर्यचकित भएर; **हृष्टरोमा** — हर्षले रोमाञ्चित; **धनञ्जयः** — अर्जुन; **प्रणम्य** — प्रणाम गरेर; **शिरसा** — शिरले; **देवम्** — भगवान्लाई; **कृतअञ्जलिः** — हात जोडेर; **अभाषत** — भन्नलागे।

**त्यसपछि, भ्रमित, चकित, र रोमाञ्चित भएका अर्जुनले शिर झुकाएर प्रणाम गरे र हात जोडेर भगवान्को यसरी प्रार्थना गर्न थाले।**

**तात्पर्य :** एकपटक दिव्य दर्शन पाउनेबित्तिकै भगवान् श्रीकृष्ण र अर्जुनको सम्बन्ध तुरुन्त परिवर्तन भयो। पहिले श्रीकृष्ण र अर्जुनको सम्बन्ध मित्रतामा आधारित थियो तर विश्वरूपको दर्शन पाएपछि अर्जुनले श्रीकृष्णलाई बडो आदरसाथ प्रणाम गरिरहेका छन् र हात जोडेर उहाँको प्रार्थना गरिरहेका छन्। अर्जुन भगवान् श्रीकृष्णको विश्वरूपको प्रशंसा गरिरहेका छन्। यसरी अर्जुनको सम्बन्ध मित्रतामा होइन बरु आश्चर्यमा आधारित हुनगयो। महान् भक्तहरू भगवान् श्रीकृष्णलाई सम्पूर्ण सम्बन्धहरूका भण्डारका रूपमा देख्दछन्। शास्त्रहरूमा बाह्र प्रकारका आधारभूत सम्बन्धहरूको उल्लेख छन् र ती सबै श्रीकृष्णमा विद्यमान छन्। भनिन्छ— भगवान् सम्पूर्ण सम्बन्धहरूका सागर हुनुहुन्छ— त्यो दुई प्राणीबीचको पारस्परिक सम्बन्ध होस् वा देवताहरूबीचको सम्बन्ध होस् वा भक्त र भगवान्का बीचको सम्बन्ध होस्।

यहाँ अर्जुन आश्चर्यमय सम्बन्धबाट प्रेरित छन्। उनी स्वभावैले गम्भीर र शान्त भएतापनि त्यही आश्चर्यमय भावमा रहेर आनन्दित भए, रोमाञ्चित भए र हात जोडेर भगवान्लाई प्रणाम गर्न थाले। उनी निश्चय नै भयभीत थिएनन्।

उनी भगवान्‌को आश्चर्यपूर्ण दर्शनबाट प्रभावित बनेका थिए। तत्कालीन परिवेश आश्चर्यमय थियो, उनको स्वाभाविक प्रेमपूर्ण मित्रता आश्चर्यबाट अभिभूत भएको हुनाले उनले आफ्नो प्रतिक्रिया यसरी व्यक्त गरे।

अर्जुन उवाच

**पश्यामि देवांस्तवदेव देहे**
**सर्वांस्तथा भूतविशेषसङ्घान् ।**
**ब्रह्माणमीशं कमलासनस्थम्**
**ऋषींश्च सर्वानुरगांश्च दिव्यान् ॥ १५ ॥**

**अर्जुन उवाच** — अर्जुनले भने; **पश्यामि** — देख्दछु; **देवान्** — सबै देवताहरूलाई; **तव** — हजुरका; **देव** — हे प्रभु; **देहे** — शरीरमा; **सर्वान्** — सबै; **तथा** — पनि; **भूत** — जीवात्मा; **विशेषसङ्घान्** — विशेष रूपले जम्मा भएका; **ब्रह्माणम्** — ब्रह्माजीलाई; **ईशम्** — शिवजीलाई; **कमलासनस्थम्** — कमलका फूलमा विराजमान; **ऋषीन्** — महर्षिहरूलाई; **च** — पनि; **सर्वान्** — सबै; **उरगान्** — सर्पहरूलाई; **च** — पनि; **दिव्यान्** — दिव्य (अलौकिक)।

**अर्जुनले भने — प्रिय भगवान् कृष्ण! मैले हजुरका शरीरमा सबै देवताहरू र विभिन्न प्रकारका अन्य जीवात्माहरू एकत्र भएको देख्दैछु। मैले यहाँ कमलका फूलमा विराजमान ब्रह्माजी, शिवजी, सम्पूर्ण ऋषिहरू र दिव्य नागहरूलाई पनि देखिरहेको छु।**

**तात्पर्य :** अर्जुनले ब्रह्माण्डका हरेक वस्तुलाई त्यहाँ देखे। ब्रह्माण्डका प्रथम प्राणी ब्रह्माजी त्यहाँ देखिए र ब्रह्माण्डको तल्लो भागमा रहने त्यो दिव्य सर्प (नाग) पनि देखियो जसमा गर्भोदकशायी विष्णु शयन गर्नु हुन्छ। यो सर्परूपी शय्यालाई वासुकी भन्दछन्। वासुकी नागका नामले चिनिने अर्को पनि एउटा सर्प छ। अर्जुनले गर्भोदकशायी विष्णुदेखि लिएर ब्रह्माण्डका शीर्षभागमा निवास गर्ने विश्वका प्रथम जीव कमलासन ब्रह्माजीसम्मलाई देखे। यसको तात्पर्य हो — अर्जुनले आदिदेखि अन्त्यसम्मका हरेक वस्तुलाई एकै ठाउँमा आफ्नै रथमा बसेर देखिरहेका थिए। यो कुरा भगवान् श्रीकृष्णका कृपाले सम्भव भएको थियो।

**अनेकबाहूदरवक्त्रनेत्रं**
**पश्यामि त्वां सर्वतोऽनन्तरूपम् ।**
**नान्तं न मध्यं न पुनस्तवादिं**
**पश्यामि विश्वेश्वर विश्वरूप ॥ १६ ॥**

**अनेक** — धेरै; **बाहु** — हातहरू; **उदर** — पेटहरू; **वक्त्र** — मुखहरू; **नेत्रम्** — आँखाहरू; **पश्यामि** — देख्दछु; **त्वाम्** — तपाईँलाई; **सर्वतः** — चारैतिर; **अनन्तरूपम्** — असङ्ख्य रूपहरू; **न अन्तम्** — कुनै अन्त छैन; **न मध्यम्** — कुनै मध्य छैन; **न पुनः** — न फेरि; **तव** — तपाईँको; **आदिम्** — प्रारम्भ; **पश्यामि** — देख्दछु; **विश्वईश्वर** — हे विश्वका स्वामी; **विश्वरूप** — हे विश्वरूप!

**हे विश्वेश्वर, हे विश्वरूप! मैले हजुरका शरीरमा चारैतिर फैलिएका अनन्त हातहरू, पेटहरू, मुखहरू र आँखाहरू देखिरहेको छु। मैले हजुरको आदि, मध्य र अन्त्य केही देखिनँ।**

**तात्पर्य :** श्रीकृष्ण साक्षात् भगवान् हुनुहुन्छ र असीम हुनुहुन्छ, त्यसैले उहाँका माध्यमबाट हरेक कुरा देख्न सकिन्छ।

**किरीटिनं गदिनं चक्रिणं च**
**तेजोराशिं सर्वतो दीप्तिमन्तम् ।**
**पश्यामि त्वां दुर्निरीक्ष्यं समन्ताद्**
**दीप्तानलार्कद्युतिमप्रमेयम् ॥ १७ ॥**

**किरीटिनम्** — मुकुट लगाउनु भएका; **गदिनम्** — गदा धारण गर्नुभएका; **चक्रिणम्** — चक्र लिनुभएका; **च** — तथा; **तेजोराशिम्** — तेजको पुञ्ज; **सर्वतः** — सबैतिरबाट; **दीप्तिमन्तम्** — प्रकाशवान्; **पश्यामि** — देख्दछु; **त्वाम्** — हजुरलाई; **दुर्निरीक्ष्यम्** — हेर्नै नसकिने; **समन्तात्** — सबैतिरबाट; **दीप्त-अनल** — प्रज्ज्वलित अग्नि; **अर्क** — सूर्यको; **द्युतिम्** — तेज (प्रकाश); **अप्रमेयम्** — अनुमानै गर्न नसकिने।

**प्रज्ज्वलित अग्नि वा सूर्यको अपार प्रकाश जस्तै चारैतिर फैलिएको जाज्वल्यमान तेजका कारणले मलाई हजुरको रूप देख्न कठिन परिरहेछ। तैपनि धेरै मुकुटहरू, गदाहरू र चक्रहरूले विभूषित हजुरको तेजोमय स्वरूपलाई सर्वत्र देखिरहेछु।**

**त्वमक्षरं परमं वेदितव्यं**
**त्वमस्य विश्वस्य परं निधानम् ।**
**त्वमव्ययः शाश्वत-धर्मगोप्ता**
**सनातनस्त्वं पुरुषो मतो मे ॥ १८ ॥**

**त्वम्** — तपाईँ; **अक्षरम्** — अच्युत; **परमम्** — परम; **वेदितव्यम्** — ज्ञेय (जान्नलायक); **त्वम्** — तपाईँ; **अस्य** — यस; **विश्वस्य** — विश्वको;

**परम्** — परम; **निधानम्** — आधार; **त्वम्** — तपाईं; **अव्ययः** — अविनाशी; **शास्वत-धर्म-गोप्ता** — सनातन धर्मका पालनकर्ता; **सनातनः** — नित्य; शाश्वत; **त्वम्** — तपाईं; **पुरुषः** — परमपुरुष; **मतःमे** — मेरो विचारमा।

**मेरो विचारमा हजुर नै पहिलो जान्नुपर्ने विषय हुनुहुन्छ, हजुर नै सम्पूर्ण विश्व-ब्रह्माण्डका परमआश्रयस्थल हुनुहुन्छ, हजुर अविनाशी हुनुहुन्छ, पुराणपुरुष हुनुहुन्छ र हजुर नै सनातन धर्मका पालनकर्ता हुनुहुन्छ।**

**अनादिमध्यान्तमनन्तवीर्यम्**
**अनन्तबाहुं शशिसूर्यनेत्रम् ।**
**पश्यामि त्वां दीप्तहुताशवक्त्रं**
**स्वतेजसा विश्वमिदं तपन्तम् ॥ १९ ॥**

**अनादि** — आदिरहित; **मध्य** — माझ; **अन्तम्** — अन्त्य; **अनन्त** — अनन्त; **वीर्यम्** — पराक्रम (बहादुरी), **अनन्त** — असङ्ख्य; **बाहुम्** — हातहरू; **शशि** — चन्द्रमा; **सूर्य** — सूर्य; **नेत्रम्** — आँखाहरू; **पश्यामि** — देख्दछु; **त्वाम्** — तपाईंलाई; **दीप्त** — प्रज्ज्वलित; **हुताशवक्त्रम्** — मुखबाट आगोका ज्वाला निस्किरहेको; **स्वतेजसा** — आफ्नै तेजद्वारा; **विश्वम्** — संसारलाई; **इदम्** — यो; **तपन्तम्** — ताप दिइरहनु भएको।

**हजुर आदि, मध्य र अन्त्यरहित हुनुहुन्छ, हजुरको महिमा अनन्त छ, हजुरका असङ्ख्य हातहरू छन्, सूर्य र चन्द्रमा हजुरका आँखा हुन्, मैले त हजुरलाई मुखबाट आगोका ज्वाला निस्किरहेको र आफ्नै तेजले सारा संसारलाई डढाउन लागिरहे जस्तो देख्दैछु।**

**तात्पर्य :** भगवान्‌का षड्-ऐश्वर्यका विस्तारको कुनै सीमा छैन। यहाँ र अन्यत्र पनि भगवान्‌का गुणहरूको बारम्बार वर्णन गरिएको छ। तर शास्त्रअनुसार भगवान् श्रीकृष्णका महिमाको पुनरुक्ति हुनुलाई साहित्यिक कमजोरी मानिँदैन। भनिन्छ, भावविभोर भएका समयमा, आश्चर्यचकित भएका समयमा र हर्षविभोर भएका समयमा प्रसङ्गहरू बारम्बार दोहोरिन्छन्। त्यो कुनै दोष होइन।

**द्यावापृथिव्योरिदमन्तरं हि**
**व्याप्तं त्वयैकेन दिशश्च सर्वाः ।**
**दृष्ट्वाद्भुतं रूपमुग्रं तवेदं**
**लोकत्रयं प्रव्यथितं महात्मन् ॥ २० ॥**

**द्यौ** — बाह्य आकाशदेखि लिएर; **आ-पृथिव्योः** — पृथ्वीसम्म; **इदम्** —

यो; **अन्तरम्** — माझमा; **हि** — निश्चय नै; **व्याप्तम्** — व्याप्त; **त्वया** — तपाईंद्वारा; **एकेन** — एक्लै; **दिशः** — दिशाहरू; **च** — तथा; **सर्वाः** — सबै; **दृष्ट्वा** — देखेर; **अद्भुतम्** — आश्चर्यजनक; **रूपम्** — स्वरूपलाई; **उग्रम्** — डरलाग्दो; **तव** — हजुर; **इदम्** — यो; **लोक** — लोक; **त्रयम्** — तीन; **प्रव्यथितम्** — विचलित; **( पीडित छ )**; **महात्मन्** — हे महान्।

**हजुर एक हुनुहुन्छ तापनि आकाशमा, विभिन्न लोकहरूमा र बीचका सम्पूर्ण भागहरूमा सर्वत्र फैलिनुभएको छ। हे महापुरुष! हजुरको यो डरलाग्दो र आश्चर्यजनक रूप देखेर तीनै लोक व्याकुल भइरहेका छन्।**

**तात्पर्य :** यस श्लोकमा **द्यौ, आ-पृथिव्यो** (स्वर्ग र पृथ्वीबीचको स्थान) तथा **लोकत्रयम्** (तीनै लोकहरू) यी शब्दहरू महत्त्वपूर्ण छन्। किनभने यसबाट अर्जुनले मात्रै भगवान्को विराट रूप दर्शन गरेका होइनन्, अन्य लोकका बासिन्दाहरूले पनि यो विश्वरूप दर्शन गरे भन्ने बुझिन्छ। अर्जुनले विश्वरूपको दर्शन गरेको कुरा सपना होइन। भगवान्ले जस-जसलाई दिव्य दृष्टि प्रदान गर्नुभयो ती सबैले युद्धभूमिमा उहाँको त्यो विराटरूप देखे।

**अमी हि त्वां सुरसङ्घा विशन्ति**
**केचिद्भीताः प्राञ्जलयो गृणन्ति ।**
**स्वस्तीत्युक्त्वा महर्षिसिद्धसङ्घाः**
**स्तुवन्ति त्वां स्तुतिभिः पुष्कलाभिः ॥ २१ ॥**

**अमी** — यी सबै; **हि** — निश्चय नै; **त्वाम्** — हजुरमा; **सुरसङ्घा** — देवताहरूको समूह; **विशन्ति** — प्रवेश गर्दछन्; **केचित्** — कोही; **भीताः** — डराएका; **प्राञ्जलयः** — हात जोडेर; **गृणन्ति** — स्तुति गर्दछन्; **स्वस्ति** — मङ्गल होस्; **इति** — यस्तो; **उक्त्वा** — भनेर; **महात्रृषि** — महर्षिहरू; **सिद्धसङ्घाः** — सिद्ध पुरुषहरू; **स्तुवन्ति** — प्रार्थना गर्दछन्; **स्तुतिभिः** — स्तुतिहरूद्वारा; **पुष्कलाभिः** — वैदिक ऋचाहरूद्वारा।

**सम्पूर्ण देवगण हजुरको शरण ग्रहण गर्दै हजुरमा प्रवेश गरिरहेका छन् र तीमध्ये केही अत्यन्त भयभीत हुँदै हात जोडेर प्रार्थना गरिरहेका छन्। महर्षिहरू तथा सिद्धहरूको समुदाय कल्याण होस् भन्दै वेदका ऋचाहरू उच्चारण गरेर हजुरको स्तुति गरिरहेका छन्।**

**तात्पर्य :** सम्पूर्ण लोकका देवताहरू विश्वरूप भगवान्को विकराल रूप र जाज्वल्यमान तेजबाट भयभीत भएर रक्षाका लागि उहाँको प्रार्थना गर्न लागे।

**रुद्रादित्या वसवो ये च साध्या**
**विश्वेऽश्विनौ मरुतश्चोष्मपाश्च ।**
**गन्धर्वयक्षासुरसिद्धसङ्घा**
**वीक्षन्ते त्वां विस्मिताश्चैव सर्वे ॥ २२ ॥**

**रुद्र** — भगवान् शिवका रूपहरू; **आदित्याः** — आदित्यहरू; **वसवः** — वसुहरू; **ये** — ती सबै; **च** — तथा; **साध्याः** — साध्यगण; **विश्वे** — विश्वेदेव; **अश्विनौ** — अश्विनीकुमारहरू; **मरूतः** — मरूत्गण; **च** — तथा; **उष्मपाः** — पितृहरू; **च** — र; **गन्धर्व** — गन्धर्व; **यक्ष** — यक्ष; **असुर** — असुर; **सिद्ध** — सिद्ध देवताहरू; **सङ्घाः** — समूह; **वीक्षन्ते** — हेरिरहेछन्; **त्वाम्** — हजुरलाई; **विस्मिताः** — आश्चर्यचकित भएर; **च** — पनि; **एव** — निश्चय नैं; **सर्वे** — सबै।

**भगवान् शिवका सबै रूपहरूले अर्थात् एकादश रुद्रले, आदित्यहरूले, वसुहरूले, साध्यहरूले, विश्वेदेवहरूले, दुई अश्विनीकुमारहरूले, वायुहरूले, पितृहरूले, गन्धर्वहरूले, यक्ष, असुर तथा सिद्ध देवताहरूले आश्चर्य मानेर हजुरलाई नै हेरिरहेका छन्।**

**रूपं महत्ते बहुवक्त्रनेत्रं**
**महाबाहो बहुबाहूरूपादम् ।**
**बहूदरं बहुदंष्ट्राकरालं**
**दृष्ट्वा लोकाः प्रव्यथितास्तथाहम् ॥ २३ ॥**

**रूपम्** — रूप; **महत्** — विशाल; **ते** — हजुरको; **बहु** — धेरै; **वक्त्र** — अनुहारहरू; **नेत्रम्** — आँखाहरू; **महाबाहो** — हे बलशाली; **बहु** — धेरै; **बाहु** — हातहरू; **उरु** — जाँघहरू; **पादम्** — गोडाहरू; **बहु-उदरम्** — धेरै पेटहरू; **बहुदंष्ट्रा** — धेरै दाँतहरू; **करालम्** — भयानक; **दृष्ट्वा** — देखेर; **लोकाः** — सबै लोकहरू; **प्रव्यथिताः** — विचलित; **तथा** — त्यसै गरी; **अहम्** — म।

**हे महाबाहु! धेरै-धेरै अनुहार, आँखा, हात, जाँघ, गोडा, पेट र भयङ्कर दाँतहरूसहितको हजुरको विराट रूपलाई देखेर देवताहरूका साथै सबै लोकहरू व्याकुल भइरहेछन् र मेरो पनि त्यही स्थिति छ।**

**नभःस्पृशं दीप्तमनेकवर्णं**
**व्यात्ताननं दीप्त विशालनेत्रम् ।**
**दृष्ट्वा हि त्वां प्रव्यथितान्तरात्मा**
**धृतिं न विन्दामि शमं च विष्णो ॥ २४ ॥**

**नभःस्पृशम्** — आकाशलाई छोइरहेको; **दीप्तम्** — ज्योतिर्मय; **अनेक** — धेरै; **वर्णम्** — रङहरू; **व्यात्त** — खुलेको; **आननम्** — मुख; **दीप्त** — चमकदार; **विशाल** — ठुला; **नेत्रम्** — आँखाहरू; **दृष्ट्वा** — देखेर; **हि** — निश्चय नै; **त्वाम्** — तपाईंलाई; **प्रव्यथित** — डरले व्याकुल; **अन्तर** — भित्री; **आत्मा** — आत्मा; **धृतिम्** — धैर्य; **न विन्दामि** — पाउँदिनँ; **शमम्** — मानसिक शान्ति; **च** — पनि; **विष्णो** — हे प्रभु विष्णु।

**हे सर्वव्यापी विष्णु! ठुलाठुला ज्योतिर्मय आँखा भएको, मुख खोलेको र धेरै तेजिला रङ्ग रूपले आकाशलाई छोइरहेको हजुरको विराटरूपलाई देखेर डरले मेरो मन व्याकुल भएको छ। यस समय न मैले धैर्य धारण गर्न सकिरहेको छु न त मानसिक सन्तुलन।**

**दंष्ट्राकरालानि च ते मुखानि**
**दृष्ट्वैव कालानलसन्निभानि ।**
**दिशो न जाने न लभे च शर्म**
**प्रसीद देवेश जगन्निवास ॥ २५ ॥**

**दंष्ट्रा** — दाँतहरू; **करालानि** — डरलाग्दा; **च** — पनि; **ते** — हजुर; **मुखानि** — मुखहरू; **दृष्ट्वा** — देखेर; **एव** — यस प्रकार; **काल-अनल** — मृत्युरूपी अग्नि; **सन्निभानि** — समान (जस्तै); **दिशः** — दिशाहरू; **न जाने** — जान्दिनँ; **न लभे** — पाउँदिनँ; **च** — र; **शर्म** — आनन्द; **प्रसीद** — प्रसन्न हुनुहोस्; **देव-ईश** — हे देवताहरूका पनि देवता; **जगत् निवास** — हे सम्पूर्ण जगत्का आश्रय।

**हे देवेश! हे जगन्निवास! कृपया मसँग प्रसन्न हुनुहोस्। हजुरको यस प्रकारको विकराल दाँत र कालसमान दन्किरहेको आगोको ज्वाला जस्तो अनुहार देखेर मैले आफूलाई सन्तुलित राख्न सकिरहेको छैन। म सबैतिरबाट दिग्भ्रमित भएको छु।**

**अमी च त्वां धृतराष्ट्रस्य पुत्राः**
**सर्वे सहैवावनिपालसङ्घैः ।**
**भीष्मो द्रोणः सूतपुत्रस्तथासौ**
**सहास्मदीयैरपि योधमुख्यैः ॥ २६ ॥**
**वक्त्राणि ते त्वरमाणा विशन्ति**
**दंष्ट्राकरालानिभयानकानि ।**
**केचिद्विलग्ना दशनान्तरेषु**
**सन्दृश्यन्ते चूर्णितैरुत्तमाङ्गैः ॥ २७ ॥**

अमी — यी; **च** — पनि; **त्वाम्** — हजुरमा; **धृतराष्ट्रस्य** — धृतराष्ट्रका; **पुत्राः** — छोराहरू; **सर्वे** — सबै; **सह** — सँगै; **इव** — निश्चय नै; **अवनिपाल** — विजेता राजाहरूको; **संघैः** — समूह; **भीष्मः** — भीष्मदेव; **द्रोणः** — द्रोणाचार्य; **सूतपुत्रः** — कर्ण; **तथा** — पनि; **असौ** — त्यो; **सह** — साथमा; **अस्मदीयैः** — हाम्रा; **अपि** — पनि; **योधमुख्यैः** — योद्धाहरूमा प्रमुख; **वक्त्राणि** — मुखमा; **ते** — हजुर; **त्वरमाणाः** — अत्यन्त वेगपूर्वक; **विशन्ति** — प्रवेश गरिरहेका छन्; **दंष्ट्रा** — दाह्राहरू; **करालानि** — विकराल; **भयानकानि** — अत्यन्त डरलाग्दा; **केचित्** — तीमध्ये केही; **विलग्नाः** — टाँसिएका; **दशनान्तरेषु** — दाँतका बीचमा; **सन्दृश्यन्ते** — देखिन्छन्; **चूर्णितैः** — धूलो भएका; **उत्तमाङ्गैः** — शिरहरूले।

**आफ्ना सम्पूर्ण सहयोगी राजाहरूका साथमा धृतराष्ट्रका सबै छोराहरू तथा भीष्म, द्रोण, कर्ण र हाम्रा तर्फका प्रमुख योद्धाहरूसमेत हजुरको भयङ्कर मुखमा प्रवेश गरिरहेका छन्। अझ कसैका शिर हजुरका दाँतका बीचमा पिसिएर दाँतका बीचमा धूलो भएको पनि देखिरहेछु।**

**तात्पर्य :** अर्जुनले जुन कुरा देख्न अति चाहना गरेका थिए ती कुराहरू देखाइदिने वाचा भगवान्ले पूर्ववर्ती श्लोकहरूमा गर्नुभएको छ। अहिले अर्जुनले भीष्म, द्रोण, कर्ण र धृतराष्ट्रका सबै छोराहरूलगायत विपक्षी समूहका नेताहरू, तिनका सैनिकहरू र अर्जुनका आफ्नै सैनिकहरू पनि नष्ट भइरहेको देखिरहेका छन्। यो कुरुक्षेत्रमा एकत्र भएका सबैजसो व्यक्तिहरूको मृत्यु हुन्छ र अर्जुनको विजय हुन्छ भन्ने कुराको सङ्केत हो। अजेय मानिएका भीष्म पनि ध्वस्त हुनेछन् भनेर समेत यहाँ उल्लेख गरिएको छ। यस्तै अवस्था कर्णको पनि हुनेछ। केवल विपक्षतिरका भीष्मजस्ता महान् योद्धाहरू मात्र नभएर अर्जुनको पक्षका केही महान् योद्धाहरूसमेत त्यहाँ समाप्त हुनेछन्।

**यथा नदीनां बहवोऽम्बुवेगाः**
**समुद्रमेवाभिमुखा द्रवन्ति ।**
**तथा तवामी नरलोकवीरा**
**विशन्ति वक्त्राण्यभिविज्वलन्ति ॥ २८॥**

**यथा** — जसरी; **नदीनाम्** — नदीहरूको; **बहवः** — धेरै; **अम्बुवेगाः** — जलको प्रवाह; **समुद्रम्** — समुद्र; **एवं** — निश्चय नै; **अभिमुखाः** — तर्फ (तिर); **द्रवन्ति** — बहन्छ; **तथा** — त्यसरी नै; **तव** — हजुरका; **अमी** — यी सबै; **नरलोक वीराः** — मानवसमाजका वीर राजाहरू; **विशन्ति** — प्रवेश गरिरहेछन्; **वक्त्राणि** — मुखमा; **अभिविज्वलन्ति** — सबैतिरबाट प्रज्ज्वलित भइरहेका छन्।

**जसरी नदीका तरङ्गहरू समुद्रमा प्रवाहित हुन्छन्, त्यसै गरी यी सम्पूर्ण महान् योद्धाहरू पनि हजुरको प्रज्वलनशील मुखमा प्रवेश गर्दैछन् ।**

**यथा प्रदीप्तं ज्वलनं पतङ्गा**
**विशन्ति नाशाय समृद्धवेगाः ।**
**तथैव नाशाय विशन्ति लोका**
**स्तवापि वक्त्राणि समृद्धवेगाः ॥ २९ ॥**

**यथा** — जसरी; **प्रदीप्तम्** — जलिरहेको; **ज्वलनम्** — आगो; **पतङ्गाः** — पुतली तथा कीराहरू; **विशन्ति** — प्रवेश गर्दछन्; **नाशाय** — नष्ट हुनका लागि; **समृद्धवेगाः** — अत्यन्त वेगपूर्वक; **तथैव** — त्यसै गरी; **नाशाय** — नष्ट हुनका लागि; **विशन्ति** — प्रवेश गरिरहेछन्; **लोकाः** — सबै मानिसहरू; **तव** — हजुरका; **अपि** — पनि; **वक्त्राणि** — मुखमा; **समृद्धवेगाः** — अत्यन्त वेगपूर्वक।

**जसरी पुतलीहरू आफ्नै विनाशका लागि अत्यन्त जोडले जलिरहेको आगो ( बत्ती ) मा प्रवेश गर्दछन्, त्यसै गरी सबै मानिसहरू पूर्ण गतिका साथ हजुरका मुखमा प्रवेश गरिरहेछन्।**

**लेलिह्यसे ग्रसमानः समन्ता**
**ल्लोकान्समग्रान्वदनैर्ज्वलद्भिः ।**
**तेजोभिरापूर्य जगत्समग्रं**
**भासस्तवोग्राः प्रतपन्ति विष्णो ॥ ३० ॥**

**लेलिह्यसे** — चाटिरहनु भएको छ; **ग्रसमानः** — निल्दै; **समन्तात्** — चारै दिशाबाट; **लोकान्** — मानिसहरूलाई; **समग्रान्** — सबै; **वदनैः** — मुखहरूले; **ज्वलद्भिः** — जलिरहेका; **तेजोभिः** — तेजहरूद्वारा; **आपूर्य** — ढाकेर; **जगत्** — ब्रह्माण्डलाई; **समग्रम्** — समस्त; **भासः** — किरणहरू; **तव** — तपाईँको; **उग्राः** — भयङ्कर; **प्रतपन्ति** — तपाउँदछन्; **विष्णो** — हे सर्वव्यापी भगवान्!

**हे विष्णु! हजुरले आफ्ना दन्दन जलिरहेका मुखहरूद्वारा सबैतिरका सबै मानिसहरूलाई निलिरहनुभएको छ। आफ्नो तेजले सम्पूर्ण ब्रह्माण्डलाई ढाकेर चर्का किरणहरूसहित भयङ्कर रूपमा प्रकट हुनुभएको छ।**

**आख्याहि मे को भवानुग्ररूपो**
**नमोऽस्तु ते देववर प्रसीद ।**

**विज्ञातुमिच्छामि भवन्तमाद्यं**
**न हि प्रजानामि तव प्रवृत्तिम् ॥ ३१ ॥**

**आख्याहि** — कृपया भन्नुहोस्; **मे** — मलाई; **कः** — को; **भवान्** — हजुर; **उग्ररूपः** — भयानक रूप; **नमःअस्तु** — नमस्कार छ; **ते** — हजुरलाई; **देववर** — हे देवताहरूमा महान्; **प्रसीद** — प्रसन्न हुनुहोस्; **विज्ञातुम्** — जान्नका लागि; **इच्छामि** — इच्छा गर्दछु; **भवन्तम्** — हजुरलाई; **आद्यम्** — आदि; **न** — होइन; **हि** — निश्चय नै; **प्रजानामि** — जान्दछु; **तव** — हजुरको; **प्रवृत्तिम्** — उद्देश्य (चेष्टा)।

**हे देवताहरूका पनि देवता! यति उग्र रूपमा प्रकट हुनुभएका हजुर को हुनुहुन्छ, मलाई भन्नुहोस्। म हजुरलाई नमस्कार गर्दछु, कृपया प्रसन्न हुनुहोस्। हजुर आदिपुरुष हुनुहुन्छ, म हजुरका बारेमा जान्न चाहन्छु। हजुरको उद्देश्य के हो मलाई थाहा छैन।**

श्रीभगवानुवाच
**कालोऽस्मि लोकक्षयकृत्प्रवृद्धो**
**लोकान्समाहर्तुमिह प्रवृत्तः ।**
**ऋतेऽपि त्वां न भविष्यन्ति सर्वे**
**येऽवस्थिताः प्रत्यनीकेषु योधाः ॥ ३२ ॥**

**श्रीभगवानुवाच** — भगवान्‌ले भन्नुभयो; **कालः** — काल (समय); **अस्मि** — हूँ; **लोक** — संसारलाई; **क्षयकृत्** — नाश गर्ने; **प्रवृद्धः** — महान्; **लोकान्** — सबै मानिसलाई; **समाहर्तुम्** — संहार गर्न; **इह** — यस जगत्‌मा; **प्रवृत्तः** — लागेको; **ऋते** — बिना; **अपि** — पनि; **त्वाम्** — तिमीलाई; **न भविष्यन्ति** — हुने छैनन्; **सर्वे** — सबै; **ये** — जो; **अवस्थिताः** — रहेका छन्; **प्रतिअनीकेषु** — विपक्षतर्फ; **योधाः** — सैनिकहरू।

**भगवान्‌ले भन्नुभयो — म संसारलाई ध्वस्त पार्ने काल हूँ, म अहिले सबैलाई नाश गर्न यहाँ आएको छु। तिमीबिना पनि दुवैतिरका यी सारा सैनिकहरू मारिने छन्।**

**तात्पर्य :** श्रीकृष्ण आफ्नै सखा तथा भगवान् हुनुहुन्छ भन्ने कुरा अर्जुनलाई थाहा थियो तापनि अहिले भगवान्‌द्वारा प्रदर्शित विविध रूपहरू देखेर उनी चकित भए। त्यसैले, यो विनाशकारी शक्तिको विशेष उद्देश्यका बारेमा उनी यहाँ प्रश्न गर्दछन्। परमसत्यले हरेक वस्तुलाई, ब्राह्मणहरूलाई समेत समाप्त पारिदिन्छ भन्ने कुरा वेदमा लेखिएको छ। कठोपनिषद् (१.२.२५) मा भनिएको छ—

*यस्य ब्रह्म च क्षत्रं च उभे भवत ओदनः ।*
*मृत्युर्यस्योपसेचनं क इत्था वेद यत्र सः ॥*

अन्त्यमा सम्पूर्ण ब्राह्मणहरू, क्षत्रीयहरू र अरू सबै कुरा परमेश्वरका भोजनजस्तै बनेर नष्ट हुन्छन्। यो परमेश्वरको सर्वभक्षी असाधारण रूप हो र यहाँ सर्व-संहारकारी काल बनेर भगवान् श्रीकृष्ण आफैँ उपस्थित हुनुभएको छ। पाण्डवहरूबाहेक युद्धस्थलमा उपस्थित सबैलाई भगवान्ले निलिदिनुहुने छ। अर्जुन युद्ध गर्ने पक्षमा थिएनन्। उनका विचारमा युद्ध नगर्नु नै उचित थियो र त्यसबाट नैराश्यता आउने थिएन। यसका प्रत्युत्तरमा भगवान् भन्नु हुन्छ— "तिमीले लडाईं नगरे पनि यहाँका हरेक व्यक्ति मारिने छन्, यो मेरो योजना हो।" यदि अर्जुनले युद्ध रोकेका भए तिनीहरू अर्कै तरिकाले मारिन्थे। उनी नलडे पनि मृत्युलाई रोक्न सकिँदैन। वास्तवमा तिनीहरू पहिल्यै मरिसकेका थिए। समय नै विनाश हो। भगवान्को इच्छाअनुसार सम्पूर्ण सृष्टिको विनाश हुन्छ। यही नै प्रकृतिको नियम हो।

**तस्मात्त्वमुत्तिष्ठ यशो लभस्व**
**जित्वा शत्रून् भुङ्क्ष्व राज्यं समृद्धम् ।**
**मयैवैते निहताः पूर्वमेव**
**निमित्तमात्रं भव सव्यसाचिन् ॥ ३३ ॥**

**तस्मात्** — त्यसैले; **त्वम्** — तिमी; **उत्तिष्ठ** — उठ; **यशः** — यश (कीर्ति); **लभस्व** — पाऊ; **जित्वा** — जितेर; **शत्रुम्** — शत्रुहरूलाई; **भुङ्क्ष्व** — भोग गर; **राज्यम्** — राज्यलाई; **समृद्धम्** — सम्पन्न; **मया** — मद्वारा; **एव** — निश्चय नै; **एते** — यी सबै; **निहताः** — मारिए; **पूर्वम् एव** — पहिले नै; **निमित्त मात्रम्** — कारण मात्रै; **भव** — होऊ; **सव्यसाचिन्** — हे सव्यसाची।

**त्यसैले उठ, लड्नका लागि तयार होऊ, विजयको यश प्राप्त गर, शत्रुहरूलाई जितेर सम्पन्न राज्यको भोग गर। तिनीहरूलाई मैले अगाडि नै मृत्युका मुखमा पुऱ्याइसकेको छु। अतः हे सव्यसाची! तिमी लडाईंको एउटा माध्यम मात्र बनिदेऊ।**

**तात्पर्य :** युद्धमा अत्यन्त कुशलतापूर्वक वाण प्रहार गर्न सक्नेलाई **सव्यसाची** भन्दछन्। त्यसैले यहाँ आफ्ना शत्रुहरूलाई वाण प्रहार गरेर मार्न सक्ने अत्यन्त निपुण योद्धाका रूपमा अर्जुनलाई सम्बोधन गरिएको हो। **निमित्तमात्रम्** अर्थात् कारण मात्र बनिदेऊ भन्ने उक्ति पनि यहाँ महत्त्वपूर्ण छ। सम्पूर्ण संसार भगवान्को योजनाअनुसार चलिरहेको छ। पर्याप्त ज्ञान नभएका मूर्खहरू यो प्रकृतिबिना कुनै योजना चलिरहेको छ र सम्पूर्ण सृष्टि आकस्मिक रूपले

प्रकट भएको हो भन्ने सोच्दछन्। कतिपय तथाकथित वैज्ञानिकहरू भन्ने गर्दछन्—"सम्भवतः यो यस्तो थियो वा यस्तो हुन सक्दछ" तर "सम्भवत" "हुन सक्दछ" इत्यादि भन्ने कुनै प्रश्न नै छैन। यो भौतिक जगत् कुनै विशेष योजनाद्वारा सञ्चालित छ। त्यो योजना के हो त? यो सम्पूर्ण सृष्टि बद्ध जीवहरूका निमित्त आफ्नो घर भगवद्धाममा फर्किने एउटा अवसर हो। जबसम्म उनीहरू प्रकृतिमाथि प्रभुत्व कायम गर्ने प्रयत्न गरिरहन्छन् तबसम्म ती बद्ध अवस्थामै रहन्छन्। तर, जसले भगवान्‌को योजनालाई बुझेर कृष्णभावनाको विकास गर्दछ त्यो अति बुद्धिमान् हो। सारा विश्वब्रह्माण्डको सृष्टि र विनाश भगवान्‌कै परमनिर्देशनअनुसार हुने गर्दछ। त्यसैले कुरुक्षेत्रको युद्ध पनि भगवान्‌को योजनाअनुसार नै भएको थियो। अर्जुन युद्ध गर्न अस्वीकार गर्दै थिए तर उनलाई भगवान्‌को इच्छाअनुसार युद्ध गर्न भनियो। अनि मात्र उनी सुखी हुनेछन्। यदि कुनै मानिसले आफूलाई पूर्णरूपले कृष्णभावनामा लगाएको छ र आफ्नो जीवन भगवान्‌कै दिव्य सेवामा समर्पित गरेको छ त्यस्तो व्यक्तिलाई पूर्ण तथा सिद्ध मान्नु पर्दछ।

**द्रोणं च भीष्मं च जयद्रथं च**
**कर्णं तथान्यानपि योधवीरान् ।**
**मया हतांस्त्वं जहि मा व्यथिष्ठा**
**युध्यस्व जेतासि रणे सपत्नान् ॥ ३४ ॥**

**द्रोणम् च** — द्रोण पनि; **भीष्मं च** — भीष्म पनि; **जयद्रथं च** — जयद्रथ पनि; **कर्णम्** — कर्ण; **तथा** — पनि; **अन्यान्** — अरूहरू; **अपि** — निश्चय नै; **योधवीरान्** — महान् योद्धाहरू; **मया** — मद्वारा; **हतान्** — मारिसकिएका छन्; **त्वाम्** — तिमीले; **जहि** — मार; **मा व्यथिष्ठाः** — विचलित नहोऊ; **युध्यस्व** — युद्ध गर; **जेताअसि** — विजयी हुनेछौ; **रणे** — युद्धमा; **सपत्नान्** — शत्रुहरूलाई।

**द्रोण, भीष्म, जयद्रथ, कर्ण र अन्य महान् योद्धाहरूलाई मैले अगाडि नै संहार गरिसकेको छु, अतः तिमी तिनलाई मार, विचलित नहोऊ, केवल युद्ध मात्रै गर तिमीले यस युद्धमा आफ्ना शत्रुहरूको विनाश गर्नेछौ।**

**तात्पर्य :** प्रत्येक योजनाका योजनाकार भगवान् हुनुहुन्छ तापनि उहाँको इच्छाअनुसार उहाँका योजनाहरूलाई अघि बढाउने भक्तहरूलाई उहाँले त्यो श्रेय प्रदान गर्नु हुन्छ, किनभने भगवान् आफ्ना भक्तहरूप्रति अति नै दयालु

र कृपालु हुनुहुन्छ। त्यसैले हरेक व्यक्तिले आफ्नो जीवनलाई कृष्णभावनामय क्रियाकलापतिर गतिशील बनाउनु पर्दछ र गुरुबाट भगवान्सम्बन्धी ज्ञान प्राप्त गर्नु पर्दछ। भगवान्का योजनाहरू बुझ्न भगवान्कै कृपा आवश्यक हुन्छ र भक्तका योजनाहरू पनि भगवान्का योजनासरह कल्याणकारी हुन्छन्। यस्तै दिव्य योजनाहरूको अनुसरण गरेर मानिस आफ्नो जीवन-सङ्घर्षमा विजयी हुनु पर्दछ।

सञ्जय उवाच

**एतच्छ्रुत्वा वचनं केशवस्य**
**कृताञ्जलिर्वेपमानः किरीटी ।**
**नमस्कृत्वा भूय एवाह कृष्णं**
**सगद्गदं भीतभीतः प्रणम्य ॥ ३५ ॥**

**सञ्जय उवाच** — सञ्जयले भने; **एतत्** — यस प्रकार; **श्रुत्वा** — सुनेर; **वचनम्** — वाणी; **केशवस्य** — श्रीकृष्णका; **कृत-अञ्जलिः** — हात जोडेर; **वेपमानः** — थरथर काम्दै; **किरीटी** — अर्जुन; **नमस्कृत्वा** — नमस्कार गरेर; **भूय** — फेरि; **एव** — पनि; **आह** — भने; **कृष्णम्** — श्रीकृष्णलाई; **सगद्गदम्** — अवरुद्ध स्वरले; **भीतभीतः** — डराई-डराईकन; **प्रणम्य** — प्रणाम गरेर (निहुरेर)।

**सञ्जयले धृतराष्ट्रसँग भने — हे राजन्! भगवान्का यी वचनहरू सुनेर अर्जुनले थरथर काँम्दै हात जोडेर बारम्बार प्रणाम गरे अनि डराई-डराई गद्गद् स्वरमा यसो भने।**

**तात्पर्य :** भगवान्का विराट रूपको प्रदर्शनले जुन स्थितिको सिर्जना भयो, त्यसको व्याख्या अगाडि पनि गरिसकिएको छ र त्यही कारणले गर्दा अर्जुन आश्चर्यचकित भए अनि गद्गद् वाणीले भगवान्को प्रार्थना गर्दै मित्रका रूपमा होइन, एउटा भक्तका रूपमा उहाँलाई बारम्बार प्रणाम गर्न थाले।

अर्जुन उवाच

**स्थाने हृषीकेश तव प्रकीर्त्या**
**जगत् प्रहृष्यत्यनुरज्यते च ।**
**रक्षांसि भीतानि दिशो द्रवन्ति**
**सर्वे नमस्यन्ति च सिद्धसङ्घाः ॥ ३६ ॥**

**अर्जुन उवाच** — अर्जुनले भने; **स्थाने** — यो उचित छ; **हृषीकेश** — हे इन्द्रियहरूका स्वामी; **तव** — हजुरको; **प्रकीर्त्या** — गुणकीर्तनद्वारा; **जगत्** —

सम्पूर्ण संसार; **प्रहृष्यति** — हर्षित भइरहेको छ; **अनुरज्यते** — आसक्त भइरहेको छ; **च** — तथा; **रक्षांसि** — असुरहरू; **भीतानि** — डरले; **दिशः** — सबै दिशाहरूमा; **द्रवन्ति** — भागिरहेका छन्; **सर्वे** — सबै; **नमष्यन्ति** — नमस्कार गरिरहेका छन्; **च** — पनि; **सिद्धसङ्घाः** — सिद्ध पुरुषहरूको समूह।

**अर्जुनले भने — हे हृषीकेश! हजुरको नाम सुनेर सम्पूर्ण जगत् हर्षित भइरहेको छ र हरेक व्यक्ति हजुरप्रति आसक्त भइरहेको छ। सिद्ध पुरुषहरू हजुरलाई सादर अभिवादन अर्पण गरिरहेका छन् र असुरहरू डरले यता र उता भागाभाग गरिरहेका छन्। यो ठीकै हो।**

**तात्पर्य :** भगवान् श्रीकृष्णबाट कुरुक्षेत्रको युद्धको परिणामसम्बन्धी कुरा सुनेपछि अर्जुन जागरूक भए र भगवान्का एउटा महान् भक्त तथा मित्रका रूपमा उनले भने — श्रीकृष्णले गर्नुभएका हरेक कुरा एकदम ठीक छन्। श्रीकृष्ण पालनकर्ता हुनुहुन्छ, पूजनीय व्यक्तित्व हुनुहुन्छ र अवाञ्छित तत्त्वका संहारकर्ता पनि हुनुहुन्छ भन्ने कुरा अर्जुनले पुष्टि गरे। उहाँका कार्यहरू सबैका लागि बराबर कल्याणकारी छन्। कुरुक्षेत्रको युद्ध समाप्त हुने समयमा धेरै धेरै देवताहरू, सिद्धहरू र उच्च लोकका बुद्धिजीवीवर्ग अन्तरिक्षमा उपस्थित भएर युद्ध हेरिरहेका थिए, किनभने त्यस युद्धमा श्रीकृष्ण स्वयम् उपस्थित हुनुहुन्थ्यो। यो कुरा अर्जुनले बुझेका थिए। अर्जुनले भगवान्को विश्वरूप देख्दा देवताहरू आनन्दित भए तर अरू नास्तिक तथा असुरहरू भगवान्को प्रशंसा भएको सुनेर रहन सकेनन्। तिनीहरू भगवान्को विनाशकारी रूपदेखि भयभीत भई भागे। भक्तहरूप्रति र नास्तिकहरूप्रति श्रीकृष्णले गर्ने व्यवहारको अर्जुनले प्रशंसा गरे। जुनसुकै अवस्थामा पनि भक्तहरू भगवान्को गुणगान गर्दछन्, किनभने भगवान् जे गर्नु हुन्छ त्यसबाट सबैको कल्याण हुन्छ भन्ने कुरा उनीहरूले जानेका हुन्छन्।

**कस्माच्च ते न नमेरन्महात्मन्**
**गरीयसे ब्रह्मणोऽप्यादिकर्त्रे ।**
**अनन्त देवेश जगन्निवास**
**त्वमक्षरं सदसत्तत्परं यत् ॥ ३७॥**

**कस्मात्** — किन; **च** — पनि; **ते** — तपाईंलाई; **न नमेरन्** — नमस्कार नगरून्?; **महात्मन्** — हे महापुरुष; **गरीयसे** — असल मानिसहरू; **ब्रह्मणः** — ब्रह्माभन्दा; **अपि** — यद्यपि; **आदिकर्त्रे** — परमस्रष्टालाई; **अनन्त** — हे अनन्त!; **देव-ईश** — हे देवताहरूका पनि ईश्वर; **जगत्-**

**निवास** — हे जगत्का आश्रय; **त्वम्** — हजुर हुनुहुन्छ; **अक्षरम्** — अविनाशी; **सत्-असत्** — कार्य र कारण; **तत्परम्** — दिव्य (ती दुवैदेखि पर); **यत्** — किनभने।

**हे महान्! हजुर ब्रह्माभन्दा पनि ठुला, सबैका आदि स्रष्टा हुनुहुन्छ, अनि उहाँहरूले हजुरलाई सादर नमस्कार किन नगरून्? हे अनन्त, हे देवेश, हे जगन्निवास! हजुर सबै कारणहरूका पनि कारण र अविजेय स्रोत हुनुहुन्छ अनि यो भौतिक जगत्भन्दा पर हुनुहुन्छ।**

**तात्पर्य :** यस प्रकार बारम्बार प्रणाम गरेर अर्जुनले भगवान् श्रीकृष्ण हरेकका पूजनीय हुनुहुन्छ भन्ने सङ्केत गरेका छन्। उहाँ सर्वव्यापी हुनुहुन्छ र हरेक आत्माका आत्मा हुनुहुन्छ। अर्जुनले श्रीकृष्णलाई **महात्मा** भनेर सम्बोधन गरेका छन्। यसको अर्थ हो उहाँ सर्वाधिक उदार तथा अनन्त हुनुहुन्छ। **अनन्त** शब्दले भगवान्को शक्ति र प्रभावले नढाक्ने कुनै वस्तु छैन भन्ने सङ्केत गर्दछ र **देवेश** शब्दले उहाँ सबै देवताहरूका नियन्ता हुनुहुन्छ र ती सबैभन्दा माथि हुनुहुन्छ भन्ने बुझाउँदछ। उहाँ सम्पूर्ण जगत्का आश्रय हुनुहुन्छ। अर्जुनले पनि विचार गरे— सम्पूर्ण सिद्ध महात्मा र शक्तिशाली देवताहरूले उहाँलाई प्रणाम गर्नु एकदम ठीक हो। किनभने उहाँभन्दा ठुलो अरू कोही छैन। अर्जुन विशेष रूपले के उल्लेख गर्दछन् भने-ब्रह्माको सृष्टि भगवान् श्रीकृष्णबाट भएको हुनाले श्रीकृष्ण ब्रह्माभन्दा महान् हुनुहुन्छ। गर्भोदकशायी विष्णुका नाभिबाट उत्पन्न भएको कमलको फूलमा ब्रह्माको जन्म भएको हो र गर्भोदकशायी विष्णु भगवान् श्रीकृष्णका अंशविस्तार हुनुहुन्छ। अतः ब्रह्माजी, ब्रह्माजीबाट उत्पन्न हुनुभएका शिवजी र अन्य सबै देवताहरूले भगवान् श्रीकृष्णलाई प्रणाम गर्नै पर्दछ। *श्रीमद्भागवत्मा* भनिएको छ— भगवान् शिव तथा ब्रह्मा र यस्तै अरू देवताहरूले भगवान् श्रीकृष्णको आदर गर्दछन्। यहाँ यो **अक्षरम्** शब्द अत्यन्त महत्त्वपूर्ण छ, किनभने भौतिक सृष्टिको विनाश हुन्छ तर भगवान् यो भौतिक सृष्टिभन्दा माथि हुनुहुन्छ। उहाँ सबै कारणहरूका पनि कारण हुनुहुन्छ। त्यसकारण उहाँ भौतिक प्रकृतिका सबै बद्ध जीवहरू तथा स्वयम् भौतिक सृष्टिभन्दा श्रेष्ठ हुनुहुन्छ, त्यसैले उहाँ परमेश्वर हुनुहुन्छ।

**त्वमादिदेवः पुरुषः पुराण**
**स्त्वमस्य विश्वस्य परं निधानम् ।**
**वेत्तासि वेद्यं च परं च धाम**
**त्वया ततं विश्वमनन्त रूप ॥ ३८॥**

**त्वम्** — हजुर; **आदि देवः** — आदि परमेश्वर; **पुरुषः** — पुरुष; **पुराणः** — प्राचीन (बूढो); **त्वम्** — हजुर; **अस्य** — यसको; **विश्वस्य** — संसारको; **परम** — दिव्य; **निधानम्** — आश्रय; **वेत्ता** — ज्ञाता; **असि** — हुनुहुन्छ; **वेद्यम्** — ज्ञेय (जान्न योग्य); **च** — र; **परम्** — दिव्य; **च** — र; **धाम** — आश्रय; **त्वया** — हजुरद्वारा; **ततम्** — व्याप्त; **विश्वम्** — विश्व; **अनन्त रूप** — हे अनन्त रूप।

**हजुर सबैभन्दा प्राचीन आदिदेव हुनुहुन्छ, यो विश्वब्रह्माण्डका परमआधार हुनुहुन्छ। हजुर नै सबै वस्तुका ज्ञाता हुनुहुन्छ र स्वयम् सम्पूर्ण रूपले जान्न योग्य पनि हुनुहुन्छ। हजुर भौतिक गुणहरूभन्दा माथि रहने सबैका आधार हुनुहुन्छ र हे अनन्तरूप! यो सम्पूर्ण सृष्टिमा हजुर व्याप्त हुनुहुन्छ।**

**तात्पर्य :** हरेक वस्तु भगवान्मा आश्रित हुन्छन्, त्यसैले उहाँलाई परमआश्रय भनिएको हो। **निधानम्**को अर्थ हो आश्रय। ब्रह्मतेजलगायत हरेक वस्तुहरू भगवान् श्रीकृष्णमा आश्रित छन्। उहाँ यस जगत्मा जे भइरहेछ, सबै कुराका ज्ञाता हुनुहुन्छ। यदि ज्ञानको कुनै अन्त्य भए उहाँ नै सम्पूर्ण ज्ञानका अन्त्य हुनुहुन्छ, त्यसैले उहाँ ज्ञाता हुनुहुन्छ अनि जान्न योग्य पनि हुनुहुन्छ। उहाँ ज्ञानका विषय हुनुहुन्छ, किनभने उहाँ सर्वव्यापी हुनुहुन्छ। उहाँ आध्यात्मिक जगत्का पनि कारण हुनुहुन्छ, त्यसैले दिव्य हुनुहुन्छ। उहाँ दिव्य लोकका पनि प्रमुख पुरुष (व्यक्तित्व) हुनुहुन्छ।

**वायुर्यमोऽग्निर्वरुणः शशांकः**<br>**प्रजापतिस्त्वं प्रपितामहश्च ।**<br>**नमो नमस्तेऽस्तु सहस्रकृत्वः**<br>**पुनश्च भूयोऽपि नमो नमस्ते ॥ ३९ ॥**

**वायुः** — हावा; **यमः** — नियन्ता (यमराज); **अग्निः** — आगो; **वरुणः** — जल; **शशाङ्क** — चन्द्रमा; **प्रजापतिः** — ब्रह्मा; **त्वम्** — हजुर; **प्रपितामहः** — बूढा हजुरबुबा (जिजुबाजे); **च** — पनि; **नमः** — नमस्कार; **नमः** — फेरि नमस्कार; **ते** — हजुरलाई; **अस्तु** — छ; **सहस्रकृत्वः** — हजार पटक; **पुनः** — फेरि; **च** — तथा; **भूयः** — फेरि; **अपि** — पनि; **नमः** — नमस्कार छ; **नमस्ते** — हजुरलाई नमस्कार छ।

**हजुर नै वायु, यमराज, अग्नि, वरुण, चन्द्रमा, सृष्टिका प्रथम जीव ब्रह्मा र बूढा हजुरबुबा पनि हुनुहुन्छ, त्यसैले हजुरलाई हजार पटक नमस्कार छ र बारम्बार नमस्कार छ।**

**तात्पर्य :** यहाँ भगवान्‌लाई वायु भनेर पनि सम्बोधन गरियो, किनभने हावा सबैभन्दा महत्त्वपूर्ण र सर्वव्यापी भएको हुनाले यसले सबै देवताहरूको प्रतिनिधित्व गर्दछ। अर्जुनले भगवान् श्रीकृष्णलाई जिजुबाजे (प्रपितामह) भनेर पनि सम्बोधन गरे, किनभने उहाँ विश्व-ब्रह्माण्डको पहिलो जीव ब्रह्माजीका पनि पिता हुनुहुन्छ।

**नमः पुरस्तादथ पृष्ठतस्ते,**
**नमोऽस्तु ते सर्वत एव सर्व ।**
**अनन्तवीर्यामितविक्रमस्त्वं,**
**सर्वं समाप्नोषि ततोऽसि सर्वः ॥ ४० ॥**

**नमः** — नमस्कार गर्दै; **पुरस्तात्** — अगाडिबाट; **अथ** — पनि; **पृष्ठतः** — पछाडिबाट; **ते** — तपाईँलाई; **नमःअस्तु** — म नमस्कार गर्दछु; **ते** — तपाईँलाई; **सर्वतः** — सबैतिरबाट; **एव** — निःसन्देह; **सर्व** — किनभने हजुर नै हरेक कुरा हुनुहुन्छ; **अनन्तवीर्य** — असीमित पुरुषार्थ; **अमित विक्रमः** — असीमित शक्ति; **त्वम्** — हजुर; **सर्वं** — सबै वस्तुलाई; **समाप्नोषि** — ढाक्नुभएको छ; **ततः** — त्यसैले; **असि** — हुनुहुन्छ; **सर्वः** — सबै वस्तु।

**हजुरलाई अगाडि, पछाडि र चारैतिरबाट नमस्कार छ। हे अनन्त शक्ति! हजुर त अनन्त पराक्रमका स्वामी हुनुहुन्छ तथा सर्वव्यापक हुनुहुन्छ। यसरी हजुर सबै हुनुहुन्छ।**

**तात्पर्य :** श्रीकृष्णको प्रेममा डुबेका अर्जुनले आफ्ना मित्रलाई चारैतिरबाट नमस्कार गरिरहेछन्। श्रीकृष्ण सम्पूर्ण पराक्रम र सम्पूर्ण पुरुषार्थका स्वामी हुनुहुन्छ र युद्धभूमिमा जम्मा भएका सम्पूर्ण योद्धाभन्दा धेरै शक्तिशाली हुनुहुन्छ भन्ने कुरा अर्जुनले स्वीकार गरेका छन्। विष्णु पुराण (१.९.६९) मा भनिएको छ—

*योऽयं तवागतो देवः समीपं देवतागणः ।*
*स त्वमेव जगत्स्रष्टा यतः सर्वगतो भवान् ॥*

हे भगवान्, हजुरका अगाडि आउने देवता होस् वा जोसुकै होस्, सबै हजुरबाटै उत्पन्न भएका हुन्।

**सखेति मत्वा प्रसभं यदुक्तं**
**हे कृष्ण! हे यादव! हे सखेति ।**
**अजानता महिमानं तवेदं**
**मया प्रमादात् प्रणयेन वापि ॥ ४१ ॥**

**यच्चावहासार्थमसत्कृतोऽसि**
**विहारशय्यासनभोजनेषु ।**
**एकोऽथवाप्यच्युत तत्समक्षं**
**तत्क्षामहे त्वामहमप्रमेयम् ॥ ४२ ॥**

सखा — मित्र; **इति** — यस्तो; **मत्वा** — मानेर; **प्रसभम्** — हठपूर्वक; **यत्-उक्तम्** — जे भनें; **हे कृष्ण** — हे कृष्ण!; **हे यादव!** — हे यादव!; **हे सखा** — हे मित्र; **इति** — यस प्रकार; **अजानता** — नजानेर; **महिमानम्** — महिमा; **तव** — हजुरको; **इदम्** — यो; **मया** — मद्द्वारा; **प्रमादात्** — मूर्खतावश; **प्रणयेन** — प्रेमवश; **वा अपि** — या त; **यत्** — जो; **च** — पनि; **अवहास-अर्थम्** — हाँसो गर्नका लागि; **असत्कृतः** — अनादर हुनपुग्यो; **असि** — होस्; **विहार** — विश्राम गर्दा; **शय्या** — सुत्दा; **आसन** — बस्दा; **भोजनेषु** — सँगै खाँदा; **एकः** — एक्लै; **अथवा** — अथवा; **अपि** — पनि; **अच्युत** — हे अच्युत; **तत्समक्षम्** — साथीहरूका बीचमा पनि; **तत्** — ती सबै; **क्षामये** — क्षमा माग्दछु; **त्वाम्** — हजुरबाट; **अहम्** — मैले; **अप्रमेयम्** — अचिन्त्य।

**हजुरलाई केवल एक मित्र ठानेर हजुरको महिमालाई नजानी मैले हजुरलाई दुस्साहसपूर्ण शब्द प्रयोग गरेर हे कृष्ण! हे यादव! हे सखा! भनेर सम्बोधन गरेँ। प्रेमवश वा मूर्खतावश, मैले जे गरेँ त्यसमा क्षमा पाऊँ। यत्ति मात्र नभएर सँगै विश्राम गर्दा, सँगै सुत्दा, बस्दा वा सँगसँगै भोजन गर्दा, कहिले एक्लै र कहिले साथीहरूका बीचमा ठट्टाका रूपमा धेरै पटक मैले हजुरको अनादर गरेँ होला। हे अच्युत! मेरा यी सबै अपराधहरू क्षमा गरिदिनु होला।**

**तात्पर्य :** भगवान् श्रीकृष्ण अर्जुनका अगाडि आफ्नो विराट रूपमा उपस्थित हुनुहुन्छ, तापनि अर्जुनलाई श्रीकृष्णसँगको उही पूर्ववत् मैत्रीपूर्ण सम्बन्धको सम्झना आइरहेछ, त्यसैले अर्जुन श्रीकृष्णसँग क्षमायाचना गरिरहेछन् र साथीका रूपमा व्यवहार गर्दा आफूबाट हुन पुगेका विभिन्न अनौपचारिक गल्तीहरूप्रति क्षमा मागिरहेछन्। एउटा मित्रका हैसियतले श्रीकृष्णले अर्जुनलाई धेरै कुरा सम्झाउनुभएको थियो, तैपनि श्रीकृष्णले यस्तो विश्वरूप धारण गर्नु हुन्छ होला भन्ने ज्ञान उनलाई थिएन। भगवान्को ऐश्वर्यलाई नचिनेर अर्जुनले धेरै पटक उहाँलाई हे मित्र! हे यादव! हे कृष्ण! इत्यादि सम्बोधन गर्दै अनादर गरेका थिए। यसको जानकारी अर्जुनलाई पनि थिएन। तर भगवान् श्रीकृष्ण अत्यन्त दयालु एवं कृपालु हुनुहुन्छ, त्यसैले

त्यत्रो ऐश्वर्यशाली भएर पनि उहाँ अर्जुनसँग उनका साथीजस्तो बनेर क्रीडा गर्नुभयो। भक्त र भगवान्बीचको दिव्य प्रेम-सम्बन्धको आदान-प्रदान यस्तो हुन्छ। जीवात्मा र श्रीकृष्ण बीचको सम्बन्ध शाश्वत रूपमा स्थिर छ, यसलाई बिर्सन सकिँदैन। अर्जुनको व्यवहारबाट यस्तो देखिन्छ। अर्जुनले विश्वरूपको वैभव देखिसकेका भए पनि श्रीकृष्णसँगको आफ्नो पूर्ववत् मैत्री सम्बन्ध बिर्सन सकेका छैनन्।

**पितासि लोकस्य चराचरस्य,**
**त्वमस्य पूज्यश्च गुरुर्गरीयान् ।**
**न त्वत्समोऽस्त्यभ्यधिकः कुतोऽन्यो**
**लोकत्रयेऽप्यप्रतिमप्रभाव ॥ ४३ ॥**

**पिता-असि** — पिता हुनुहुन्छ; **लोकस्य** — सम्पूर्ण जगत्का; **चर-अचरस्य** — चर र अचरका; **त्वम्** — हजुर हुनुहुन्छ; **अस्य** — यसका; **पूज्यः** — पूजनीय; **च** — पनि; **गुरुः** — गुरु; **गरीयान्** — महिमाशाली; **न** — छैन; **त्वत् समः** — हजुरको बराबर; **अस्ति** — छ; **अभ्यधिकः** — बढ्ता; **कुतः** — कसरी सम्भव छ; **अन्यः** — अर्को; **लोकत्रये** — तीनै लोकमा; **अपि** — पनि; **अप्रतिम-प्रभाव** — हे अचिन्त्य शक्तिशाली।

**हजुर यो समग्र चराचर सृष्टिका पिता हुनुहुन्छ। हजुर नै प्रमुख पूजनीय र परमआध्यात्मिक गुरु हुनुहुन्छ। हजुर बराबर कोही छैन र हजुरसमान पनि कोही हुन सक्दैन। हे असीम शक्तिशाली प्रभु! यो तीनै लोकमा हजुरभन्दा ठुलो अरू को हुन सक्दछ?**

**तात्पर्य :** जसरी छोराहरूका लागि पिता पूजनीय हुन्छ, त्यसै गरी भगवान् श्रीकृष्ण सबैका लागि पूजनीय हुनुहुन्छ। उहाँ गुरु हुनुहुन्छ, किनभने उहाँले नै सर्वप्रथम ब्रह्मालाई वेदको उपदेश दिनुभएको हो र अहिले पनि अर्जुनलाई उहाँले *भगवद्गीताको* उपदेश दिँदै हुनुहुन्छ, त्यसैले उहाँ आदिगुरु हुनुहुन्छ। अहिले पनि प्रामाणिक गुरु हुनका लागि कुनै पनि व्यक्ति भगवान् श्रीकृष्णबाट सुरु भएको गुरुशिष्य परम्पराको उत्तराधिकारी हुनु पर्दछ। श्रीकृष्णको प्रतिनिधि नभई कोही पनि अलौकिक विषयको ज्ञान दिने आध्यात्मिक गुरु हुन सक्दैन।

यहाँ भगवान्लाई सबैतिरबाट सबै प्रकारले नमस्कार गरिँदैछ। उहाँको महान्ता अपरिमेय छ, भौतिक जगत्मा होस् अथवा आध्यात्मिक जगत्मा, भगवान् श्रीकृष्णभन्दा श्रेष्ठ वा श्रीकृष्णको बराबर अरू कोही नभएकाले

भगवान् श्रीकृष्णभन्दा महान् कोही पनि हुन सक्दैनन्। हरेक व्यक्ति श्रीकृष्णभन्दा तल नै छ। श्रीकृष्णलाई पराजित गर्न कसैले सक्दैन। स्वेताश्वरतर उपनिषद् (६.८) मा भनिएको छ—

*न तस्य कार्यं करणं च विद्यते*
*न तत्समश्चाभ्यधिकश्च दृश्यते ।*

परमेश्वर श्रीकृष्णको पनि सामान्य मानिसको जस्तै शरीर छ, इन्द्रियहरू छन् तर उहाँका लागि उहाँको शरीर, उहाँका इन्द्रियहरू, उहाँको मन र स्वयम् उहाँमा कुनै अन्तर छैन। श्रीकृष्णलाई पूर्णरूपले नबुझेका मूर्खहरूले मात्रै श्रीकृष्णको आत्मा, मन, हृदय तथा अन्य प्रत्येक वस्तुलाई उहाँभन्दा भिन्न ठान्दछन्। श्रीकृष्ण परमपुरुष हुनुहुन्छ, त्यसैले उहाँका क्रियाकलाप तथा शक्तिहरू पनि परमश्रेष्ठ छन्। भनिन्छ, उहाँका इन्द्रियहरू हाम्राजस्ता छैनन् तर पनि उहाँ सबै इन्द्रियहरूले गर्ने कार्य गर्नु हुन्छ त्यसैले उहाँका इन्द्रियहरू न अपूर्ण छन् न सीमित नै। उहाँभन्दा ठुलो पनि कोही छैन र उहाँको बराबर पनि कोही छैन। सबै व्यक्ति उहाँभन्दा निम्न श्रेणीका छन्। भगवान्को ज्ञान, शक्ति र क्रियाकलापहरू सबै दिव्य छन्। *भगवद्गीतामा* भनिएको छ—

*जन्म कर्म च मे दिव्यमेवं यो वेत्ति तत्त्वतः ।*
*त्यक्त्वा देहं पुनर्जन्म नैति मामेति सोऽर्जुन ॥*

जसले भगवान् श्रीकृष्णको दिव्य शरीर, कर्म र पूर्णतालाई जान्दछ त्यो व्यक्ति शरीर छोडेपछि श्रीकृष्णकै धाममा फर्किन्छ र यो दुःखमय संसारमा पुनः फर्केर आउँदैन। त्यसैले श्रीकृष्णका क्रियाकलापहरू अरूका क्रियाकलापहरू भन्दा भिन्न किसिमका हुन्छन् भन्ने कुरा मानिसले बुझ्नु पर्दछ। भगवान् श्रीकृष्णका सिद्धान्तहरूको अनुसरण गर्नु नै सबैभन्दा उत्तम नीति हो। यसो गर्नाले मानिस सिद्ध हुन्छ। के पनि भनिएको छ भने, श्रीकृष्णका गुरु वा स्वामी कोही छैनन् र जे-जति छन् ती सबै श्रीकृष्णका सेवक मात्र छन्। यसको पुष्टि गर्दै *चैतन्यचरितामृत* (*आदि* ५.१४२) मा भनिएको छ—**एकले ईश्वर कृष्ण, आर सव भृत्य** अर्थात्, ईश्वर केवल श्रीकृष्ण मात्रै हुनुहुन्छ र बाँकी सबै उहाँका दास हुन्। हरेकले उहाँको आदेश पालन गर्दछन्। उहाँको आज्ञालाई अवज्ञा गर्ने कोही छैन। उहाँकै अध्यक्षतामा रहने हुनाले हरेकले उहाँकै निर्देशनअनुसार कार्य गर्दछन्। ब्रह्मसंहितामा भनिएको छ— उहाँ सबै कारणहरूका पनि कारण हुनुहुन्छ।

**तस्मात्प्रणम्य प्रणिधाय कायं**
**प्रसादये त्वामहमीशमीड्यम् ।**

**पितेव पुत्रस्य सखेव सख्युः**
**प्रियः प्रियायार्हसि देव सोढुम् ॥ ४४ ॥**

**तस्मात्** — त्यस कारण; **प्रणम्य** — नमस्कार गरेर; **प्रणिधाय** — झुकेर; **कायम्** — शरीरलाई; **प्रसादये** — कृपाको याचना गर्दछु; **त्वाम्** — हजुरसँग; **अहम्** — म; **ईशम्** — भगवान्सँग; **ईड्यम्** — पूजनीय; **पिता इव** — पिता जस्तो; **पुत्रस्य** — पुत्रको; **सखा इव** — साथीजस्तै; **सख्युः** — मित्रसँग; **प्रियः** — प्रेमी; **प्रियायाः** — प्रेयसीसँग; **अर्हसि** — गर्नुहोस्; **देव** — मेरा प्रभु; **सोढुम्** — सहन गर्न।

**हजुर प्रत्येक जीवात्माका पूजनीय परमेश्वर हुनुहुन्छ, त्यसैले म हजुरलाई सविनय सादर प्रणाम गर्दछु र हजुरको कृपाको याचना गर्दछु। जसरी बाबुले छोराको धृष्टतालाई सहन गरिदिन्छ, जसरी एउटा मित्रले आफ्नो साथीको अशिष्टतालाई सहीदिन्छ र पतिले प्रिय पत्नीको त्रुटिलाई सहीदिन्छ, त्यसै गरी हजुरले पनि कृपा गरेर मेरा त्रुटिहरूलाई सहन गरिदिनुहोस्।**

**तात्पर्य :** भगवान् श्रीकृष्णका भक्तहरू श्रीकृष्णसँग विभिन्न प्रकारका सम्बन्ध राख्दछन्, कोही श्रीकृष्णलाई पुत्रवत् व्यवहार गर्न चाहन्छन्, कोही पतिका रूपमा, कसैले साथीका रूपमा र कसैले गुरुका रूपमा श्रीकृष्णसँग सम्बन्ध स्थापित गरेका हुन्छन्। श्रीकृष्ण र अर्जुन मैत्री सम्बन्धमा बाँधिएका थिए। त्यसैले, जसरी पिताले पुत्रको, पतिले पत्नीको र गुरुले शिष्यको धृष्टतालाई सहन गरिदिन्छन् त्यसै गरी श्रीकृष्णले पनि (आफ्ना भक्तको भूललाई) सहन गरिदिनु हुन्छ।

**अदृष्टपूर्वं हृषितोऽस्मि दृष्ट्वा**
**भयेन च प्रव्यथितं मनो मे ।**
**तदेव मे दर्शय देव रूपं**
**प्रसीद देवेश जगन्निवास ॥ ४५ ॥**

**अदृष्टपूर्वम्** — पहिले कहिल्यै नदेखिएको; **हृषितः** — हर्षित; **अस्मि** — छु; **दृष्ट्वा** — देखेर; **भयेन** — डरले; **च** — पनि; **प्रव्यथितम्** — व्याकुल भयो; **मनः** — मन; **मे** — मेरो; **तत्** — त्यो; **एव** — निश्चय नै; **मे** — मलाई; **दर्शय** — देखाउनुहोस्; **देव** — हे ईश्वर!; **रूपम्** — रूप; **प्रसीद** — प्रसन्न हुनुहोस्; **देव-ईश** — ईश्वरका पनि ईश्वर; **जगत्निवास** — हे जगत्का आश्रय।

**पहिले कहिल्यै नदेखेको हजुरको विराट रूप देखेर म हर्षित छु, तर**

**मेरो मन भयले विचलित भएको छ, त्यसैले हे देवेश, हे जगन्निवास! ममाथि कृपा गरेर मलाई फेरि त्यही पुरुषोत्तम रूप नै देखाउनुहोस्।**

**तात्पर्य :** अर्जुन श्रीकृष्णका परमप्रिय मित्र भएकाले श्रीकृष्णमाथि अर्जुनको अटुट विश्वास छ र प्रिय मित्र भएको कारणले अर्जुन श्रीकृष्णको ऐश्वर्य देखेर पुलकित हुन पुगे। आफ्नो मित्र श्रीकृष्ण विराट स्वरूप देखाउन समर्थ स्वयम् भगवान् भएकोमा अर्जुन साह्रै खुसी थिए तर सँगसँगै विराट स्वरूप देखेपछि विशुद्ध मित्रताका कारणले श्रीकृष्णप्रति धेरै अपराध भएको ठानेर उनी भयभीत पनि भए। उनी भयभीत हुनुपर्ने कुनै कारण थिएन तापनि भयले उनको मन विचलित भइरह्यो, त्यसैले अर्जुन श्रीकृष्णलाई फेरि आफ्नो नारायण रूप देखाउन अनुरोध गरिरहेका छन्। किनभने भगवान् श्रीकृष्ण कुनै पनि रूप ग्रहण गर्न सक्नु हुन्छ। यो विश्वरूप भौतिक जगत्जस्तै अस्थायी वा क्षणभङ्गुर हुन्छ। तर वैकुण्ठलोकमा उहाँ चतुर्बाहुयुक्त दिव्य नारायण स्वरूपमा रहनु हुन्छ। आध्यात्मिक आकाशमा असङ्ख्य लोकहरू छन् र ती सबैमा उहाँ आफ्ना विभिन्न नामले अंश रूपमा उपस्थित हुनुहुन्छ। त्यसैले, यहाँ अर्जुनले वैकुण्ठ-लोकमा देखिने एउटा रूपको दर्शन गर्न चाहेका हुन्। अवश्य नै प्रत्येक वैकुण्ठलोकमा नारायण चतुर्बाहु रूपमा रहनु हुन्छ र ती चार हातमा शङ्ख, चक्र, गदा र पद्मजस्ता विविध चिन्ह (प्रतीक) हरू धारण गर्नु हुन्छ। चार हातमा यी चार शास्त्र धारण गर्नुहुने नारायणका विभिन्न नामहरू छन्। यी सबै रूपहरू भगवान् श्रीकृष्णका हुन्, त्यसैले अर्जुन श्रीकृष्णसँग त्यही चतुर्बाहु रूप प्रदर्शनका लागि अनुरोध गर्दैछन्।

**किरीटिनं गदिनं चक्रहस्तम्**
**इच्छामि त्वां द्रष्टुमहं तथैव ।**
**तेनैव रूपेण चतुर्भुजेन**
**सहस्रबाहो भव विश्वमूर्ते ॥ ४६ ॥**

**किरीटिनम्** — मुकुट धारण गरेका; **गदिनम्** — गदा लिएका; **चक्र हस्तम्** — हातमा चक्र धारण गरेका; **इच्छामि** — चाहन्छु; **त्वाम्** — हजुरलाई; **द्रष्टुम्** — देख्न; **अहम्** — म; **तथा एव** — त्यस्तै; **तेनएव** — त्यही नै; **रूपेण** — रूपमा; **चतुर्भुजेन** — चार हात भएको; **सहस्रबाहो** — हे हजार हात धारण गर्ने प्रभु; **भव** — हुनुहोस्; **विश्वमूर्ते** — हे विश्वरूप धारी।

**हे विराट स्वरूप, हे सहस्रबाहु भगवान्! म हातमा शङ्ख, चक्र, गदा, पद्म लिएको, शिरमा मुकुट लगाएको हजुरको उही चतुर्बाहु रूपको दर्शन गर्न चाहन्छु। हजुरको त्यही रूपको दर्शन गर्ने मेरो अभिलाषा छ।**

**तात्पर्य :** ब्रह्मसंहिता (५.३९) मा भनिएको छ—**रामादिमूर्तिषु कला नियमेन तिष्ठन्** अर्थात्, भगवान् नित्य लाखौँ हजारौँ रूपमा विद्यमान रहनु हुन्छ र तीमध्ये राम, नृसिंह, नारायण आदि मुख्य हुन्। भगवान्का असङ्ख्य रूपहरू छन् तर "कृष्ण" उहाँको मूल स्वरूप हो र यो विश्वरूप उहाँको अस्थायी रूप हो। अहिले अर्जुन भगवान्को आध्यात्मिक स्वरूप अर्थात् नारायण स्वरूपको दर्शन पाउनका लागि अनुरोध गर्दैछन्। यस श्लोकले श्रीकृष्ण निःसन्देह आदिभगवान् हुनुहुन्छ र अन्य रूपहरू उहाँबाटै उत्पन्न हुन्छन् भन्ने *श्रीमद्भागवत्*को भनाइलाई पुष्टि गरेको छ। भगवान् आफ्ना अंशविस्तारभन्दा भिन्न हुनु हुन्न र उहाँ आफ्ना असङ्ख्य रूपहरूमध्ये हरेक रूपमा ईश्वर नै बनेर रहनु हुन्छ। यी सम्पूर्ण रूपहरूमा उहाँ एउटा युवकजस्तै फूर्तिला देखिनु हुन्छ। यही नै भगवान्को स्थायी स्वरूप हो। अतः भगवान् श्रीकृष्णलाई राम्ररी बुझ्ने व्यक्ति यो भौतिक संसारको संक्रमणबाट तुरुन्त मुक्त हुन्छ।

श्रीभगवानुवाच

**मया प्रसन्नेन तवार्जुनेदं**
**रूपं परं दर्शितमात्मयोगात् ।**
**तेजोमयं विश्वमनन्तमाद्यं**
**यन्मे त्वदन्येन न दृष्टपूर्वम् ॥ ४७॥**

**श्रीभगवानुवाच** — भगवान्ले भन्नुभयो; **मया** — मद्वारा; **प्रसन्नेन** — प्रसन्न भएको; **तव** — तिमीलाई; **अर्जुन** — हे अर्जुन; **इदम्** — यो; **रूपम्** — रूप; **परम्** — दिव्य; **दर्शितम्** — देखाएँ; **आत्मयोगात्** — मेरै अन्तरङ्गा शक्तिबाट; **तेजोमयम्** — तेजले परिपूर्ण; **विश्वम्** — समस्त ब्रह्माण्ड; **अनन्तम्** — असीम; **आद्यम्** — आदि (पहिलो); **यत्** — जो; **मे** — मेरो; **त्वत्-अन्येन** — तिमीबाहेक; **न दृष्टपूर्वम्** — पहिले कसैले देखेको थिएन।

**भगवान्ले भन्नुभयो — प्रिय अर्जुन! मैले प्रसन्न भएर आफ्नी अन्तरङ्गा शक्तिका बलले तिमीलाई यही भौतिक जगत्मा मेरो अलौकिक विश्वरूपको दर्शन गराएँ। यसभन्दा अगाडि अरू कसैले पनि यस्तो उज्ज्वल तेजोमय अनादि अनन्त रूप कहिल्यै देखेका थिएनन्।**

**तात्पर्य :** अर्जुन भगवान्को विश्वरूप हेर्न चाहन्थे। त्यसैले भगवान् श्रीकृष्णले आफ्ना भक्त अर्जुनलाई कृपा गरेर आफ्नो पूर्ण तेजोमय तथा

ऐश्वर्यमय विराट रूप देखाउनुभयो। यो रूप सूर्यजस्तै चम्किरहेको थियो र यसका अनेक अनुहारहरू छिटो-छिटो परिवर्तित भइरहेका थिए। श्रीकृष्णले आफ्ना मित्र अर्जुनको इच्छा पूर्ण गराउनका लागि यो रूप देखाउनुभएको हो। श्रीकृष्णले यो स्वरूप आफ्नी अन्तरङ्गा शक्तिका माध्यमबाट देखाउनुभयो। श्रीकृष्णकी अन्तरङ्गा शक्ति मानवीय चिन्तन वा कल्पनाभन्दा पर हुनुहुन्छ। भगवान्को यस रूपलाई अर्जुनभन्दा पहिले अरू कसैले देखेका थिएनन्। तर, अर्जुनलाई यो रूप देखाइएको हुनाले स्वर्ग तथा अन्तरिक्षका अन्य लोकहरूका भक्तहरूले पनि यसको दर्शन पाए। यस्तो रूप तिनीहरूले पहिले कहिल्यै देखेका थिएनन् तर अहिले अर्जुनका कारणले देख्न पाए। अर्को शब्दमा भन्नुपर्दा, श्रीकृष्णका कृपाले उहाँका सारा अन्य शिष्य भक्तहरूले पनि अर्जुनलाई देखाइएको विश्वरूप देख्न सके। कसैले कस्तो पनि टीका (भाष्य) गरेका छन् भने, शान्ति सन्धिको प्रस्ताव लिएर श्रीकृष्ण हस्तिनापुर जाँदा उहाँले दुर्योधनलाई पनि यो रूप देखाउनुभएको थियो। दुर्भाग्यवश, दुर्योधनले उक्त शान्ति-प्रस्तावलाई स्वीकार गरेन, यद्यपि त्यस समय पनि भगवान् श्रीकृष्णले आफ्नो विराट रूपको केही अंश देखाउनुभएको थियो। तर त्यति बेला देखाएको रूप अहिले अर्जुनलाई देखाएको भन्दा भिन्दै थियो। अतः स्पष्ट रूपले भनिएको छ— यो रूपलाई यसभन्दा पहिले कसैले पनि देखेको थिएन।

**न वेदयज्ञाध्ययनैर्न दानै**
**र्न च क्रियाभिर्न तपोभिरुग्रैः ।**
**एवंरूपः शक्य अहं नृलोके**
**द्रष्टुं त्वदन्येन कुरुप्रवीर ॥ ४८॥**

**न वेद यज्ञ** — न यज्ञहरूद्वारा; **अध्ययनैः** — वेदको अध्ययनद्वारा; **न दानैः** — न दानद्वारा; **न** — होइन; **च** — पनि; **क्रियाभिः** — पुण्य कर्महरूद्वारा; **न** — होइन; **तपोभिः** — तपस्याद्वारा; **उग्रैः** — कठोर; **एवम् रूपः** — यस रूपमा; **शक्यः** — सकिन्छ; **अहम्** — म; **नृलोके** — यस भौतिक संसारमा; **द्रष्टुम्** — देख्न; **त्वत्** — तिमीबाहेक; **अन्येन** — अरूले; **कुरुप्रवीर** — हे कुरुवंशीय योद्धाहरूमा श्रेष्ठ (अर्जुन)।

**हे कुरुश्रेष्ठ अर्जुन! तिमीभन्दा अघि मेरो यो विराट रूपलाई कहिल्यै कसैले देखेको थिएन, किनभने वेदाध्ययनद्वारा, यज्ञयागादिद्वारा, दानद्वारा, पुण्यकर्महरूद्वारा र कठिन तपस्याद्वारा यो भौतिक जगत्मा कसैले मलाई यस रूपमा देख्न सक्दैन।**

**तात्पर्य :** यस सम्बन्धमा दिव्य दृष्टि के हो, त्यो राम्ररी बुझ्नु पर्दछ दिव्य दृष्टि कोसँग हुन सक्दछ? दिव्यको अर्थ दैवी हो। देवताको जस्तो दिव्य स्थिति प्राप्त नगरून्जेल दिव्य दृष्टि पाउन सकिँदैन। त्यसो भए देवता भनेको के हो? वैदिक साहित्यमा भनिएको छ— जो भगवान् विष्णुका भक्त छन् तिनैलाई देवता भनिन्छ— **विष्णु भक्ताः स्मृता देवाः।** जो नास्तिक छन्, भगवान् विष्णुमा जसको विश्वास छैन वा जो भगवान् श्रीकृष्णको निराकार अंशलाई मात्र परमेश्वरका रूपमा चिन्दछन् तिनीहरूले दिव्य दृष्टि पाउन सक्दैनन्। श्रीकृष्णको निन्दा गरेर दिव्य दृष्टि पाउन सम्भव छैन। स्वयम् दिव्य नभएसम्म कसैले पनि दिव्य दृष्टि पाउन सक्दैन। अर्को शब्दमा भन्नपर्दा, जोसँग दिव्य दृष्टि छ तिनले मात्रै अर्जुनले जस्तै देख्न सक्दछन्।

*भगवद्‌गीतामा* विश्वरूपको वर्णन गरिएको छ। अर्जुनभन्दा पहिले यो विराट रूपका विषयमा कसैलाई पनि जानकारी थिएन तर अहिले यो घटनापछि मानिसमा विश्वरूपसम्बन्धी धारणा बनेको छ। जो वास्तवमा दिव्य छ उसले मात्र यो विश्वरूपको दर्शन गर्न सक्दछ। भगवान् श्रीकृष्णको शुद्ध भक्त नबनेसम्म कोही पनि दिव्य बन्न सक्दैन। तर जो भक्त यथार्थमा दिव्य स्वभावका छन् र जोसँग दिव्य दृष्टि छ तिनीहरू भगवान्‌को विराट रूप हेर्न त्यति उत्सुक हुँदैनन्। पूर्ववर्ती श्लोकमा भनियो, अर्जुनले भगवान् विष्णुका रूपमा भगवान् श्रीकृष्णको चतुर्भुजी रूप हेर्ने चाहना गरे, किनभने उनी यथार्थमा विराट स्वरूपदेखि डराएका थिए।

यस श्लोकमा केही महत्त्वपूर्ण शब्दहरू छन् जस्तै— **वेद यज्ञाध्ययनैः** अर्थात् वैदिक साहित्य र यज्ञसम्बन्धी विषयवस्तुको अध्ययन गर्नु। वेद शब्दले सबै प्रकारका वैदिक साहित्य जस्तै— ऋग्, यजु, साम, अथर्व, अठार पुराणहरू, उपनिषद्‌हरू र वेदान्त सूत्र भन्ने बुझाउँदछ। यी ग्रन्थहरूको अध्ययन मानिसले घरमा बसेर वा अन्यत्र कतै गएर पनि गर्न सक्दछ। त्यसै गरी यज्ञविधिहरूको अध्ययन गर्नका लागि **कल्प सूत्र, मीमांसा सूत्र** आदि विभिन्न सूत्रहरू छन्। यो **दानैः** शब्दले भगवान्‌को दिव्य प्रेमाभक्तिमा संलग्न रहेका ब्राह्मण तथा वैष्णवजस्ता सुपात्रहरूलाई दान दिनु भन्ने बुझाउँदछ। यसै गरी **पवित्र कर्म** भन्ने शब्दले अग्निहोत्र तथा विभिन्न जातका लागि निर्धारित गरिएका कर्तव्यकर्म भन्ने बोध हुन्छ। स्वेच्छाले स्वीकार गरिएको शारीरिक कष्टलाई तपस्या भनिन्छ। मानिसले उपर्युक्त वेदाध्ययन, दान, तपस्या आदि सबै कर्म सम्पन्न गरे पनि अर्जुनजस्तो भक्त नबनेसम्म विश्वरूपको दर्शन पाउनु सम्भव छैन। निराकारवादीहरू पनि भगवान्‌को विश्वरूपको दर्शन गरिरहेका छौं भन्ने कल्पना गर्दछन् तर *भगवद्‌गीताका* अनुसार ती

निराकारवादीहरू भक्त होइनन्। त्यसैले तिनीहरू भगवान्को विराट रूपको दर्शन पाउन असमर्थ हुन्छन्।

अवतारहरूको सिर्जना गर्ने मानिसहरू पनि धेरै छन्। उनीहरू एउटा सामान्य मानिसलाई अवतार भएको भूटो दाबी गर्दछन्। तर यो सबै मूर्खता हो। हामीले *भगवद्गीताको* सिद्धान्तको अनुसरण गर्नु पर्दछ, अन्यथा पूर्ण आध्यात्मिक ज्ञान प्राप्त गर्नु सम्भव छैन। *भगवद्गीतालाई* भगवत् विज्ञानको अध्ययन गर्ने प्रारम्भिक ग्रन्थ मानिन्छ, तैपनि कुन कुरा के हो भन्ने चिनाउन यो पूर्णतया समर्थ छ। नक्कली (भूटो) अवतारका अनुयायीहरू "हामीले पनि भगवान्को दिव्य अवतारको वा विश्वरूपको दर्शन पायौँ" भन्न सक्दछन् तर त्यो अस्वीकार्य छ। किनभने, भगवान् श्रीकृष्णको भक्त नभएसम्म भगवान्को विराट रूप देखिन्न भनि यहाँ स्पष्ट उल्लेख गरिएको छ। त्यसैले, सर्वप्रथम भगवान् श्रीकृष्णको शुद्ध भक्त हुनु आवश्यक छ अनि मात्र उसले आफूले देखेको विश्वरूप अरूलाई पनि देखाउन सक्ने दाबी गर्न सक्दछ। भगवान् श्रीकृष्णका भक्तले त्यस्ता भूटो अवतार तथा तिनका अनुयायीहरूलाई स्वीकार्न सक्दैन।

**मा ते व्यथा मा च विमूढभावो**
**दृष्ट्वा रूपं घोरमीदृङ्ममेदम् ।**
**व्यपेतभीः प्रीतमनाः पुनस्त्वं**
**तदेव मे रूपमिदं प्रपश्य ॥ ४९ ॥**

**मा** — नहोस्; **ते** — तिमीलाई; **व्यथा** — कष्ट; **मा** — नहोस्; **च** — पनि; **विमूढभावः** — मोह; **दृष्ट्वा** — देखेर; **रूपम्** — रूप; **घोरम्** — डरलाग्दो; **ईदृक्** — यस्तो; **मम** — मेरो; **इदम्** — यो; **व्यपेतभीः** — सबै किसिमका डरबाट मुक्त; **प्रीतमनाः** — प्रसन्न चित्तले; **पुनः** — फेरि; **त्वम्** — तिमी; **तत्** — त्यो; **एव** — यस प्रकार; **मे** — मेरो; **रूपम्** — रूपलाई; **इदम्** — यो; **प्रपश्य** — हेर।

**मेरो यो विकराल रूप देखेर तिमी उद्विग्न भयौ, भ्रममा पर्‍यौ, त्यसैले अब तिम्रो उद्वेग समाप्त होस्, हे मेरा भक्त! तिमी फेरि सम्पूर्ण चिन्ताबाट मुक्त भएर र शान्त मनले तिमीले चाहना गरे अनुरूपको मेरो रूपलाई हेर।**

**तात्पर्य :** *भगवद्गीताको* प्रारम्भमा अर्जुन आफ्ना पूजनीय हजुरबुबा भीष्म र गुरु द्रोणलाई मार्ने सम्बन्धमा चिन्तित थिए। तर श्रीकृष्णले आफ्ना हजुरबुबालाई मार्ने विषयमा डराउनु पर्दैन भन्नुभयो। धृतराष्ट्रका छोराहरूले कुरुहरूको

सभामा द्रौपदीलाई नाङ्ग बनाउने प्रयास गर्दा भीष्म र द्रोण चुपचाप बसेका थिए। यसरी आफ्नो कर्तव्यलाई उपेक्षा गरेका हुनाले तिनीहरू मारिनै पर्दथ्यो। यी व्यक्तिहरू आफ्ना अन्यायपूर्ण कार्यले गर्दा पहिल्यै मरिसकेका छन् भन्ने देखाउनका लागि नै श्रीकृष्णले अर्जुनलाई विराट रूप देखाउनुभएको हो।

भक्तहरू सधैँ शान्त हुन्छन् र उनीहरू कहिल्यै पनि यस्ता जघन्य कार्य गर्दैनन् भन्ने बुझाउनका लागि नै श्रीकृष्णले अर्जुनलाई त्यो दृश्य देखाउनुभएको हो। विश्वरूप प्रकट गर्नुपर्ने अभिप्राय स्पष्ट भइसकेको थियो तर अहिले अर्जुनले श्रीकृष्णको चतुर्बाहु रूप देख्ने चाहना गरेका हुनाले श्रीकृष्णले फेरि अर्जुनलाई उक्त चतुर्बाहु रूप देखाउनुभयो। भक्तहरू भगवान्को विराट-रूपप्रति त्यति उत्सुक हुँदैनन्, किनभने यस्तो रूपले भगवान्सँग प्रेमपूर्ण अनुभूतिहरूको आदान-प्रदान गर्ने कार्यमा बाधा उत्पन्न हुन्छ। भक्तले भगवान्प्रति या आफ्नो पूजनीय भाव समर्पण गर्न चाहन्छ या भगवान् (कृष्ण) को चतुर्बाहु रूपकै अवलोकन गर्न चाहन्छ। यसमार्फत उसले भगवान्सँग आफ्नो प्रेमाभक्ति आदान-प्रदान गर्न सक्दछ।

सञ्जय उवाच

**इत्यर्जुनं वासुदेवस्तथोक्त्वा**
**स्वकं रूपं दर्शयामास भूयः ।**
**आश्वासयामास च भीतमेनं**
**भूत्वा पुनः सौम्यवपुर्महात्मा ॥ ५० ॥**

**सञ्जय उवाच** — सञ्जयले भने; **इति** — यस प्रकार; **अर्जुनम्** — अर्जुनलाई; **वासुदेवः** — कृष्णले; **तथा** — त्यस प्रकारले; **उक्त्वा** — भनेर; **स्वकम्** — आफ्नो; **रूपम्** — रूप; **दर्शयामास** — देखाउनुभयो; **भूयः** — फेरि; **आश्वासयामास** — आश्वासन दिनुभयो; **च** — पनि; **भीतम्** — डराएका; **एनम्** — अर्जुनलाई; **भूत्वा** — भएर; **पुनः** — फेरि; **सौम्यवपुः** — सुन्दर स्वरूप; **महात्मा** — महापुरुष।

**सञ्जयले धृतराष्ट्रलाई भने — भगवान् श्रीकृष्णले यस प्रकार अर्जुनलाई भनेपछि आफ्नो वास्तविक चतुर्भुजी रूप देखाउनुभयो र अन्त्यमा दुई भुजाधारी रूप देखाएर डराएका अर्जुनलाई सान्त्वना दिनुभयो।**

**तात्पर्य :** श्रीकृष्ण वसुदेव र देवकीका पुत्रका रूपमा प्रकट हुनुहुँदा, सर्वप्रथम चतुर्भुजी नारायणका रूपमा देखापर्नुभएको थियो। पछि बुबाआमाले अनुरोध गरेपछि उहाँ स्वयम् सामान्य बालकका रूपमा परिवर्तित हुनुभयो। अर्जुनले भगवान्लाई चतुर्भुजी रूपमा प्रकट हुन अनुरोध गरे पनि श्रीकृष्णलाई चतुर्भुजी

रूपमा देख्ने उनको वास्तवमा इच्छा थिएन। यो कुरा बुझेर श्रीकृष्णले पहिले आफ्नो चतुर्भुजी रूप देखाउनुभयो र पछि पुनः दुई भुजाधारी रूपमा प्रकट हुनुभयो। यहाँ **सौम्यवपुः** शब्द अत्यन्त महत्त्वपूर्ण छ। यो सौम्यवपुः शब्दको अर्थ हुन्छ अत्यन्त सुन्दर स्वरूप अर्थात् सबभन्दा सुन्दर रूप। श्रीकृष्ण यहाँ उपस्थित हुँदा उहाँको रूपले हरेक व्यक्ति आकर्षित हुन्थ्यो। भगवान् श्रीकृष्ण ब्रह्माण्डका निर्देशक हुनुभएको हुनाले उहाँले आफ्ना भक्त अर्जुनको डर हटाउनुभयो र उनलाई फेरि आफ्नो सुन्दर कृष्णरूप देखाउनुभयो। ब्रह्मसंहिता (५.३८) मा भनिएको छ—**प्रेमाञ्जनच्छुरित भक्तिविलोचनेन** अर्थात्, भगवत्प्रेमरूपी गाजल लगाइएका आँखा भएको व्यक्तिले मात्र श्रीकृष्णको सुन्दर स्वरूपलाई देख्न सक्दछ।

अर्जुन उवाच

**दृष्ट्वेदं मानुषं रूपं तव सौम्यं जनार्दन ।**
**इदानीमस्मि संवृत्तः सचेताः प्रकृतिं गतः ॥ ५१॥**

**अर्जुन उवाच** — अर्जुनले भने; **दृष्ट्वा** — देखेर; **इदम्** — यो; **मानुषम्** — मानवीय; **रूपम्** — रूप; **तव** — हजुरको; **सौम्यम्** — अति सुन्दर; **जना-र्दन** — हे शत्रुदमनकारी; **इदानीम्** — अहिले; **अस्मि** — म छु; **संवृत्तः** — स्थिर भएँ; **सचेताः** — आफ्नो चेतनामा; **प्रकृतिम्** — मेरो आफ्नै स्वभावमा; **गतः** — फर्किएँ।

**यस प्रकार श्रीकृष्णलाई उहाँको मौलिक रूपमा देखेपछि अर्जुनले भने — हे जनार्दन! हजुरको यो अत्यन्त सुन्दर मानवीय स्वरूप देखेर म अहिले स्थिरचित्त भएको छु र आफ्नो सही स्वरूपमा फर्किएको छु।**

**तात्पर्य :** यहाँ प्रयोग भएको **मानुषं रूपं** शब्दले भगवान् मूलतः दुई भुजाधारी नै हुनुहुन्छ भन्ने तथ्यतर्फ स्पष्ट सङ्केत गरेको छ। भगवान् श्रीकृष्णलाई सामान्य व्यक्ति मानेर उपहास गर्नेलाई यहाँ भगवान्को दिव्य प्रकृतिको ज्ञान नभएको अज्ञानी भनिएको छ। यदि श्रीकृष्ण एउटा सामान्य मानिससरह हुनुभएको भए उहाँले विश्वरूप देखाउन कसरी सम्भव हुन्थ्यो र फेरि चतुर्बाहु नारायण रूपको प्रदर्शन गर्न कसरी सक्नु हुन्थ्यो? त्यसैले *भगवद्गीतामा* स्पष्टसँग भनिएको छ—जसले श्रीकृष्णलाई एउटा सामान्य व्यक्ति ठान्दछ र जसले *भगवद्गीतालाई* श्रीकृष्णभित्र रहेको निराकार ब्रह्म बोलिरहेको भन्ने दाबी गर्दै गीताका पाठकहरूलाई अल्मल्याउँदछ, त्यसले सबैभन्दा ठुलो अन्याय गरिरहेको हुन्छ। श्रीकृष्णले वास्तवमा आफ्नो विराट रूप तथा

चतुर्भुजी विष्णु रूप देखाउनुभएको हो भने उहाँ कसरी सामान्य व्यक्ति हुनुभयो। *भगवद्‌गीताका* यस्ता भ्रामक टीकाहरूद्वारा शुद्ध भक्त कहिल्यै भ्रमित हुँदैन, किनभने यथार्थ कुरा उसले बुझेको हुन्छ। *भगवद्‌गीताका* मूल श्लोकहरू नै सूर्यको प्रकाशजस्तै स्पष्ट छन्। तिनलाई बुझ्न मूर्ख टीकाकारहरूको टुकीको प्रकाशको आवश्यकता पर्दैन।

श्रीभगवानुवाच

**सुदुर्दर्शमिदं रूपं दृष्टवानसि यन्मम ।**
**देवा अप्यस्य रूपस्य नित्यं दर्शनकाङ्क्षिणः ॥ ५२ ॥**

**श्रीभगवानुवाच** — श्रीभगवान्‌ले भन्नुभयो; **सुदुर्दर्शम्** — देख्नलाई निकै कठीन; **इदम्** — यो; **रूपम्** — रूप; **दृष्टवान्‌असि** — तिमीले देख्यौ; **यत्** — जो; **मम** — मेरो; **देवाः** — देवताहरू; **अपि** — पनि; **अस्य** — यो; **रूपस्य** — रूपको; **नित्यम्** — नित्य (सधैँ); **दर्शनकाङ्क्षिणः** — दर्शनाभिलाषी छन्।

**भगवान्‌ले भन्नुभयो — प्रिय अर्जुन! तिमीले देखिरहेको मेरो यो रूप देख्न पाउनु निकै कठिन छ। देवताहरू पनि यो रूपको दर्शन गर्ने अवसर प्राप्त गर्नका लागि सधैँ इच्छुक रहन्छन्, किनभने यो अति नै दुर्लभ छ।**

**तात्पर्य :** यसै अध्यायको ४८ औँ श्लोकमा भगवान् कृष्णले आफ्नो विश्वरूपको निष्कर्ष दिँदै अर्जुनलाई सूचित गर्नुभयो — धेरै-धेरै पुण्यकर्महरू र यज्ञद्वारा पनि यो रूप देख्न सम्भव छैन। यहाँ प्रयोग गरिएको **सुदुर्दर्शम्** शब्दले श्रीकृष्णको दुई भुजाधारी रूप अत्यन्त गोपनीय (महत्त्वपूर्ण) छ भन्ने सङ्केत गरिरहेको छ। तपस्या, वैदिक साहित्यको अध्ययन र दार्शनिक चिन्तनजस्ता क्रियाकलापहरूमा अलिकति भए पनि भक्तिको मात्रा जोडेर मात्र मानिस श्रीकृष्णको यो विश्वरूप हेर्न योग्य बन्न सक्दछ तर अलिकति पनि भक्तिको मात्रा नभएसम्म कसैले यस्तो रूप देख्न सक्दैन। यसको व्याख्या अगाडि नै पनि भइसकेको छ। विश्वरूपभन्दा परको दुई भुजाधारी भगवान् श्रीकृष्ण रूपको दर्शन गर्न शिव र ब्रह्माजस्ता देवताहरूलाई समेत अति कठिन छ। उनीहरू श्रीकृष्णको दर्शन पाउन चाहन्छन्। यसको प्रमाण *श्रीमद्‌भागवत्‌मा* पाउन सकिन्छ। श्रीकृष्ण माता देवकीका गर्भमा रहनु हुँदा, स्वर्गका सबै देवताहरू उहाँको चमत्कार हेर्न आएका थिए। भगवान् त्यतिबेला दृश्यरूपमा प्रकट भइसक्नुभएको थिएन, तैपनि तिनीहरूले सुन्दर स्तुतिहरूद्वारा गर्भस्थ भगवान्‌को **प्रार्थना** गरे। तिनीहरूले उहाँको दर्शन पाउनका लागि प्रतीक्षा गरिरहे। मूर्खहरू उहाँलाई एउटा सामान्य व्यक्ति ठानेर उहाँको उपहास

गर्न सक्दछन् र उहाँको सम्मान नगरेर उहाँभित्र रहेको कुनै निराकार वस्तुलाई आदर गर्न सक्दछन् तर यी सबै मूर्खतापूर्ण व्यवहार हुन्। ब्रह्मा तथा शिवजस्ता देवताहरूले पनि वास्तवमा भगवान् श्रीकृष्णलाई दुई भुजाधारी रूपमा दर्शन गर्न चाहन्छन्।

*भगवद्गीता* (९.११) मा पनि यस कुराको पुष्टि भएको छ— **अवजानन्ति मां मूढा मानुषीं तनुमाश्रितः।** उहाँको उपहास गर्ने मूर्खहरूका आँखामा उहाँ कहिल्यै देखा पर्नु हुन्न। ब्रह्मसंहितामा पुष्टि गरिएअनुसार र *भगवत्गीतामा* स्वयम् उहाँले नै व्यक्त गरेअनुसार भगवान् श्रीकृष्णको शरीर पूर्णतया आध्यात्मिक छ र आनन्दमय तथा शाश्वत छ। उहाँको शरीर कहिल्यै पनि भौतिक शरीरजस्तो हुन सक्दैन। तर *भगवद्गीता* र यस्तै अन्य वैदिक साहित्य पढेर भगवान् श्रीकृष्णलाई बुझ्न चाहनेहरूका निमित्त श्रीकृष्ण एउटा समस्या बनिदिनु हुन्छ। कृष्णलाई बुझ्न भौतिक विधि प्रयोग गर्नेहरूले श्रीकृष्णलाई एउटा महान् ऐतिहासिक व्यक्तित्व मान्दछन् तथा अत्यन्त विद्वान् दार्शनिक ठान्दछन्। उनीहरूका दृष्टिमा श्रीकृष्ण अत्यन्त शक्तिशाली हुनुभए पनि उहाँ एउटा सामान्य मानिस नै हुनुहुन्छ र उहाँले पनि भौतिक शरीर धारण गर्नै परेको थियो। अन्ततोगत्वा, उनीहरूका विचारमा परमसत्य निराकार नै छ र निराकार रूपबाटै परमसत्यले प्रकृतिमा आबद्ध भई साकार रूप धारण गर्नु भएको हो। यो परमेश्वरका सम्बन्धमा गरिएको एउटा भौतिकवादी अनुमान हो। त्यस्तै, अर्को अनुमान पनि काल्पनिक छ। ज्ञानको खोजीमा लाग्नेहरू पनि श्रीकृष्णका विषयमा यस्तै अनुमान गर्दछन् र श्रीकृष्णलाई उहाँको विश्वरूपभन्दा कम महत्त्वपूर्ण मान्दछन्।

यस प्रकार केही मानिसहरू अर्जुनलाई देखाइएको भगवान् श्रीकृष्णको विराट रूपलाई उहाँको निजी रूपभन्दा महत्त्वपूर्ण मान्दछन्। उनीहरूका अनुसार श्रीकृष्णको व्यैयक्तिक रूप काल्पनिक हो। एउटा व्यक्ति परमसत्य हुन सक्दैन भन्ने उनीहरूको विश्वास छ। तर *भगवद्गीताको* चौथो अध्यायमा आधिकारिक आचार्यहरूबाट भगवान् श्रीकृष्णका बारेमा श्रवण गर्ने दिव्य पद्धतिको वर्णन गरिएको छ। यही नै वास्तविक वैदिक प्रक्रिया हो। जो यथार्थमा वैदिक परम्परामा छन् तिनीहरूले कुनै आधिकारिक व्यक्तिबाट श्रीकृष्णका बारेमा सुन्दछन्। यसरी बारम्बार श्रीकृष्णका बारेमा सुनिरहनाले श्रीकृष्ण निकै प्यारो लाग्न थाल्नु हुन्छ। भगवान् श्रीकृष्ण आफ्नी योगमायारूपी शक्तिबाट ढाकिनु हुन्छ भन्ने चर्चा हामीले धेरै पटक गरिसकेका छौं। जोसुकैले वा सबैले श्रीकृष्णलाई देख्न सक्दैनन्। जसका अगाडि उहाँ स्वयम् प्रकट भइदिनु हुन्छ त्यसले मात्र उहाँलाई देख्न सक्दछ। शरणागत आत्माले मात्र

परमसत्यलाई राम्ररी बुझ्न सक्दछ भन्ने कुराको पुष्टि वैदिक साहित्यमा गरिएको छ।

कृष्णभावनाको निरन्तर अभ्यासद्वारा तथा कृष्णप्रतिको भक्तिसेवाद्वारा आध्यात्मवादीहरूको आँखा खुल्दछ, अनि मात्र प्रत्यक्ष रूपमा तिनले श्रीकृष्णलाई देख्न सक्दछन्। भगवान्को यस्तो प्रत्यक्ष दर्शन देवताहरूका लागि पनि सम्भव छैन, त्यसैले श्रीकृष्णलाई बुझ्न देवताहरूलाई पनि कठिन पर्दछ। उच्चपदस्थ देवताहरू पनि दुई भुजाधारी श्रीकृष्णको दर्शन पाउने आशा सधैँ गरिरहन्छन्। निष्कर्ष के हो भने, हरेक व्यक्तिका लागि भगवान् श्रीकृष्णको विराट रूपको दर्शन पाउन अत्यन्त कठिन र प्रायः असम्भव छ। अझ त्योभन्दा कठिन उहाँको निजी श्यामसुन्दर रूपलाई बुझ्न छ।

**नाहं वेदैर्न तपसा न दानेन न चेज्यया ।**
**शक्य एवंविधो द्रष्टुं दृष्टवानसि मां यथा ॥ ५३ ॥**

**न** — न त; **अहम्** — म; **वेदैः** — वेदको अध्ययनद्वारा; **न** — न त; **तपसा** — गम्भीर तपस्याद्वारा; **न** — न त; **दानेन** — दानद्वारा; **न** — न त; **च** — पनि; **इज्यया** — पूजाद्वारा; **शक्यः** — सम्भव छ; **एवंविधः** — यसरी; **द्रष्टुम्** — देख्न; **दृष्टवान्-असि** — तिमीले देख्यौ; **माम्** — मलाई; **यथा** — जसरी।

**आफ्ना दिव्य दृष्टिद्वारा मेरो जुन रूपको दर्शन तिमीले गरिरहेका छौ यसलाई वेदाध्ययनद्वारा, गम्भीर तपस्याद्वारा, दानद्वारा र पूजाद्वारा बुझ्न सकिँदैन। यी साधनहरूद्वारा कसैले पनि मलाई यस रूपमा देख्न सक्दैन।**

**तात्पर्य :** सर्वप्रथम, श्रीकृष्ण आफ्ना आमाबुबा देवकी-वसुदेवका अगाडि चतुर्बाहु रूपमा प्रकट हुनुभयो, त्यसपछि उहाँले आफूलाई दुई भुजाधारी रूपमा रूपान्तरित गर्नुभयो। नास्तिक तथा भक्तिभावविहीन व्यक्तिहरूलाई यो रहस्य बुझ्न अति कठिन छ। कोरा शैक्षिक योग्यता मात्र प्राप्त गरेका र व्याकरणिक दृष्टिले मात्र वैदिक साहित्यको अध्ययन गरेका विद्वान्हरूले भगवान् श्रीकृष्णलाई बुझ्न सक्दैनन्। साथै, औपचारिक रूपमा पूजा गर्न मन्दिर जाने व्यक्तिले पनि उहाँलाई बुझ्न सक्दैन। उनीहरू दर्शन त गर्दछन् तर कृष्णलाई यथार्थ रूपमा बुझ्न सक्दैनन्। भक्तिसेवाको बाटो अपनाएर मात्रै श्रीकृष्णलाई बुझ्न सकिन्छ। आगामी श्लोकमा स्वयम् भगवान् श्रीकृष्णद्वारा यसको व्याख्या गरिने छ।

**भक्त्या त्वनन्यया शक्य अहमेवंविधोऽर्जुन ।**
**ज्ञातुं द्रष्टुं च तत्त्वेन प्रवेष्टुं च परन्तप ॥ ५४ ॥**

**भक्त्या** — भक्तिद्वारा; **तु** — तर; **अनन्यया** — सकाम कर्मको मिश्रण वा काल्पनिक ज्ञानरहित भएर; **शक्यः** — सम्भव; **अहम्** — म; **एवम् विधः** — यसरी; **अर्जुन** — हे अर्जुन; **ज्ञातुम्** — जान्न; **द्रष्टुम्** — देख्न; **च** — तथा; **तत्त्वेन** — वास्तवमा; **प्रवेष्टुम्** — प्रवेश गर्न; **च** — पनि; **परन्तप** — हे वलिष्ठ भुजाधारी।

**हे अर्जुन! जुन रूपमा अहिले म तिम्रा अगाडि उभिएको छु त्यस रूपमा मलाई बुझ्न केवल अनन्य भक्ति चाहिन्छ। भक्तिद्वारा नै मलाई प्रत्यक्ष देख्न सकिन्छ। केवल यही विधिले मात्र तिमी मसँग सम्बन्धित ज्ञानको रहस्यभित्र प्रवेश गर्न सक्दछौ।**

**तात्पर्य :** अनन्य भक्तियोगको विधिद्वारा मात्र भगवान् श्रीकृष्णलाई बुझ्न सकिन्छ। यो श्लोकमा स्पष्ट भनिएको छ—अनधिकृत टीकाकारहरू काल्पनिक विधिद्वारा *भगवद्गीतालाई* बुझ्ने जुन प्रयास गर्दछन् त्यो केवल समयको अपव्यय मात्र हो। श्रीकृष्ण चतुर्बाहु रूपमा कसरी बाबु-आमाबाट उत्पन्न हुनुभयो र कसरी तुरुन्तै रूप परिवर्तन गरेर दुई भुजाधारी बन्नुभयो भन्ने कुरा कसैलाई थाहा छैन। वेदको अध्ययनद्वारा र दार्शनिक चिन्तनद्वारा यो कुरा बुझ्न अत्यन्त कठिन छ। त्यसैले यहाँ स्पष्ट भनिएको छ—न कसैले उहाँलाई देख्न सक्दछ न यी विषयवस्तुको गहिराइसम्म पुगेर कसैले उहाँलाई बुझ्न सक्दछ। वैदिक साहित्यका अत्यन्त अनुभवी विद्यार्थीहरूले मात्र अनेक प्रकारले वैदिक साहित्यका माध्यमले उहाँका बारेमा केही सिक्न वा जान्न सक्दछन्। यसका लागि धेरै विधिविधानहरू छन्। यदि कसैले साँच्चै नै श्रीकृष्णलाई जान्न चाहन्छ, उसले प्रामाणिक ग्रन्थहरूमा उल्लेख गरिएका विधिनियमहरूको पालना गर्नै पर्दछ। त्यही सिद्धान्तअनुसार मानिसले तपस्या पनि गर्न सक्दछ। उदाहरणका लागि—गम्भीर तप गर्न चाहनेले श्रीकृष्णले अवतार लिनुभएको दिन जन्माष्टमी र औँसी तथा पूर्णिमा दुवै पक्षका एकादशीहरूमा उपवास गर्न सक्दछ। जहाँसम्म दानको कुरा छ, संसारभरि कृष्णदर्शन तथा कृष्णभावनाको प्रचार-प्रसार गर्न कम्मर कसेका र अनन्य भक्तिमा लागेका भगवान् श्रीकृष्णका भक्तहरूलाई नै दान दिइनु पर्दछ, यो स्पष्ट छ। कृष्णभावना भनेको मानवताका लागि वरदान हो। रूप गोस्वामीले भगवान् चैतन्य महाप्रभुलाई परमदानवीरका रूपमा प्रशंसा गर्नुभएको छ, किनभने उहाँले "कृष्णप्रेम" जस्तो अत्यन्त दुर्लभ वस्तुलाई पनि उदाररूपले वितरण गर्नुभयो। यदि कसैले कृष्णभावना फैलाउन

कम्मर कसेको व्यक्तिलाई केही रकम दान दिन्छ भने कृष्णभावनाको प्रचारका लागि दिइएको यस्तो दान संसारको सबैभन्दा ठुलो दान हो। यदि कोही मन्दिरमा गएर विधिपूर्वक पूजा गर्दछ (भारतका मन्दिरहरूमा कुनै न कुनै मूर्तिहरू अवश्य हुन्छन्, ती मूर्तिहरू प्रायः भगवान् श्रीकृष्ण वा विष्णुकै हुने गर्दछन्) यसरी भगवान्लाई गरिने पूजा र सम्मान पनि उसका निमित्त आध्यात्मिक क्षेत्रमा उन्नति गर्ने एउटा अवसर बन्दछ। भक्तिमार्गमा भर्खर प्रवेश गरेकाहरूले मन्दिरपूजा (मूर्तिपूजा) गर्नु जरुरी छ। वैदिक साहित्य (श्वेताश्वतर उपनिषद् – ६.२३) मा यसको यसरी पुष्टि गरिएको छ—

*यस्य देवे परा भक्तिर्यथा देवे तथा गुरौ ।*
*तस्यैते कथिता ह्यर्थाः प्रकाशन्ते महात्मनः ॥*

भगवान्प्रति जसको अविचल भक्ति छ र त्यस्तै प्रकारको अविचल श्रद्धा जसले आफ्ना गुरुप्रति पनि राख्दछ तथा जो गुरुद्वारा निर्देशित छ त्यसले प्रकट रूपमा भगवान्को दर्शन पाउन सक्दछ। मानसिक कल्पनाद्वारा भगवान् श्रीकृष्णलाई बुझ्न सकिँदैन। प्रामाणिक गुरुका अधीनमा रहेर साधनाको अभ्यास नगरेका व्यक्तिले त श्रीकृष्णलाई बुझ्ने सुरुवातसम्म पनि गर्न सक्दैन। यहाँ प्रयोग गरिएको **तु** शब्दले विशेष गरी के कुराको सङ्केत गरेको छ भने, श्रीकृष्णलाई बुझ्नका लागि यसबाहेक न अन्य कुनै उपाय प्रयोगमा ल्याउन सकिन्छ, न भन्न सकिन्छ, न त्यस्ता विधिबाट सफल हुन सकिन्छ। श्रीकृष्णका द्विभुजी रूप तथा चतुर्भुजी रूप अर्जुनलाई देखाइएको क्षणिक विश्वरूपभन्दा अत्यन्त भिन्न छ। भगवान् नारायणको चतुर्बाहु रूप र भगवान् श्रीकृष्णको दुई भुजाधारी रूप शाश्वत हुन् र दिव्य हुन् तर अर्जुनलाई देखाइएको उहाँको विश्वरूप अस्थायी हो।

यहाँ प्रयोग भएको **सुदुर्दर्शम्** अर्थात् देख्नै कठिन भन्ने शब्दले यस्तो विश्वरूप यसभन्दा अघि कसैले देखेकै थिएन भन्ने पनि बुझाउँदछ र साथै भक्तहरूलाई यस्तो रूप देखाउनु पर्ने आवश्यकता थिएन भन्ने पनि बुझाउँदछ। त्यो रूप अर्जुनका अनुरोधमा भगवान् श्रीकृष्णले देखाउनुभएको हो। त्यसै गरी, भविष्यमा पनि यदि कसैले आफूलाई भगवान्को अवतार हूँ भन्ने दाबी गऱ्यो भने मानिसहरू ऊसँग पनि विश्वरूप देखाउने अनुरोध गर्न सक्दछन्। योभन्दा पहिलेको श्लोकमा बारम्बार दोहोरिएको **न** शब्दले वैदिक साहित्यमा उच्च शिक्षा पाएको छु भन्ने घमण्ड गर्नु हुँदैन भन्ने सङ्केत गरेको छ। अतः मानिसले सर्वप्रथम भगवान् श्रीकृष्णको भक्ति गर्नु पर्दछ, अनि मात्र उसले *भगवद्गीताको* टीका लेख्ने प्रयास गर्न सक्दछ।

भगवान् श्रीकृष्ण विराट रूपबाट चतुर्भुज नारायणका रूपमा र दुई भुजाधारी स्वाभाविक रूपमा परिवर्तित हुनुभयो। यसले के सङ्केत गर्दछ भने, वैदिक साहित्यमा उल्लेख गरिएका चतुर्बाहु रूप तथा अन्य रूपहरू सबै श्रीकृष्णका दुई भुजाधारी मूल रूपबाट उत्पन्न भएका हुन्। उहाँ सबै अवतारहरूका उद्‌गम हुनुहुन्छ। श्रीकृष्ण यी रूपहरूभन्दा त भिन्न हुनुहुन्छ भने निराकारवादी धारणाको झन् के कुरा? जहाँसम्म श्रीकृष्णको चतुर्बाहु रूपको सम्बन्ध छ, यस बारेमा स्पष्ट भनिएको छ— श्रीकृष्णको सबैभन्दा समान चतुर्बाहु रूप (जो महाविष्णुका नामले प्रख्यात छ, जो कारण समुद्रमा शयन गर्नु हुन्छ र जसका श्वास-प्रश्वाससँगै असङ्ख्य ब्रह्माण्डहरू बाहिर निस्कने र भित्र प्रवेश गर्ने गर्दछन्) पनि भगवान्कै विस्तार हो। ब्रह्मसंहिता (५.४८) मा भनिएको छ—

*यस्यैकनिश्वसितकालमथावलम्ब्य*
*जीवन्ति लोमविलजा जगदण्डनाथाः ।*
*विष्णुर्महान् स इह यस्य कलाविशेषो*
*गोविन्दमादिपुरुषं तमहं भजामि ॥*

जसले श्वास लिँदा अनन्त ब्रह्माण्डहरू भित्र पस्दछन् र श्वास बाहिर फ्याँक्दा असङ्ख्य ब्रह्माण्डहरू बाहिर निस्कन्छन्, त्यस्ता महाविष्णु पनि भगवान् श्रीकृष्णका एउटा अंशविस्तार मात्र हुनुहुन्छ। अतः सम्पूर्ण कारणहरूका पनि कारणस्वरूप तिनै गोविन्द अर्थात् श्रीकृष्णको म आराधना गर्दछु। यसरी मानिसले श्रीकृष्णको साकार स्वरूपलाई नै सच्चिदानन्दमय भगवान् मानेर पूजा गर्नु पर्दछ। उहाँ भगवान् विष्णुका सबै रूपहरूका स्रोत हुनुहुन्छ, उहाँ सम्पूर्ण अवतारहरूका पनि उद्‌गम स्रोत हुनुहुन्छ र उहाँ नै मूलपुरुष हुनुहुन्छ, यसको पुष्टि *भगवद्गीतामा* गरिएको छ। वैदिक साहित्यमा (गोपालतापिनी उपनिषद् १-१ मा) निम्नलिखित वर्णन पाइन्छ—

*सच्चिदानन्द रूपाय कृष्णायाक्लिष्टकारिणे ।*
*नमो वेदान्तवेद्याय गुरवे बुद्धिसाक्षिणे ॥*

म सच्चिदानन्दस्वरूप भगवान् श्रीकृष्णलाई सादर प्रणाम गर्दछु। जसलाई जानेपछि सम्पूर्ण वेदलाई जानिन्छ, त्यस्ता परमगुरु श्रीकृष्णलाई म वन्दना गर्दछु। अनि **कृष्णो वै परमं दैवतम्** (गोपालतापिनी १.३) अर्थात्, श्रीकृष्ण भगवान् हुनुहुन्छ पनि भनिएको छ। **एको वशी सर्वगः कृष्ण ईड्यः**। कृष्ण एकमात्र भगवान् हुनुहुन्छ र उहाँ नै पूजनीय हुनुहुन्छ। **एकोऽपि सन्बहुधा**

**योवभाति —** श्रीकृष्ण एक हुनुहुन्छ तर उहाँ असीमित रूपहरूमा प्रकट हुनुहुन्छ र धेरै अवतारहरूका रूपमा विस्तारित हुनुहुन्छ (गोपालतापिनी – १.२१)। यसै गरी ब्रह्मसंहिता (५.१) मा भनिएको छ—

*ईश्वरः परमः कृष्णः सच्चिदानन्दविग्रहः ।*
*अनादिरादिर्गोविन्दः सर्वकारणकारणम् ॥*

श्रीकृष्ण भगवान् हुनुहुन्छ। उहाँको शरीर सत्-चित-आन्दमय छ। उहाँको कुनै प्रारम्भ छैन तर उहाँ प्रत्येक वस्तुका प्रारम्भ हुनुहुन्छ। उहाँ सबै कारणहरूका मूल कारण हुनुहुन्छ।

अन्यत्र पनि भनिएको छ— **यत्रावतीर्णं कृष्णाख्यं परं ब्रह्म नराकृति —** भगवान् एउटा व्यक्ति हुनुहुन्छ, उहाँको नाम कृष्ण हो र उहाँ कहिलेकाहीँ पृथ्वीमा अवतरित हुनुहुन्छ। यसै गरी *श्रीमद्भागवत्मा* भगवान्का सबै प्रकारका अवतारहरूको वर्णन पाइन्छ, जसमा श्रीकृष्णको नाम पनि देखिन्छ तर पछि भनिएको छ— श्रीकृष्ण ईश्वरको अवतार नभएर स्वयम् आदि भगवान् नै हुनुहुन्छ, **एते चांशकलाः पुंसः कृष्णस्तु भगवान् स्वंयम्।**

यसै गरी *भगवद्गीतामा* भगवान् भन्नु हुन्छ— **मत्तः परतरं नान्यत्** अर्थात्, म (भगवान् कृष्ण) भन्दा ठुलो अरू कोही छैन। *भगवद्गीताको* अर्को श्लोकमा उहाँ भन्नु हुन्छ— **अहं आदिर्हिदेवानाम्** अर्थात्, म सबै देवताहरूको उद्गम स्रोत हूँ। भगवान् श्रीकृष्णबाट *भगवद्गीता* बुझिसकेपछि अर्जुनले पनि यसको पुष्टि गर्दै निम्नलिखित शब्दहरू भने— **परं ब्रह्म परं धाम पवित्रं परमं भवान्** अर्थात्, हजुर नै परमसत्य भगवान् हुनुहुन्छ र सबैका आश्रय हुनुहुन्छ भन्ने कुरा मैले राम्रोसँग बुझेँ। अतः श्रीकृष्णले अर्जुनलाई देखाउनु भएको विश्वरूप उहाँको वास्तविक रूप थिएन। वास्तविक रूप श्रीकृष्ण रूप नै हो। ईश्वरका प्रति प्रेम नभएका व्यक्तिहरूको ध्यान आकर्षण गर्नका लागि मात्रै उहाँले हजारौँ-हजार हात र शिर भएको विश्वरूप प्रकट गर्नुभएको हो। यो नै भगवान्को वास्तविक रूप होइन।

विभिन्न प्रकारका अलौकिक सम्बन्धहरूका माध्यमले भगवान्सँग प्रेम गर्न चाहने शुद्ध भक्तहरूका निमित्त त विश्वरूप कत्ति पनि आकर्षक हुँदैन। आफ्नो वास्तविक कृष्ण रूपमै रहेर भगवान्ले भक्तहरूसँग दिव्य प्रेमको आदान-प्रदान गर्नु हुन्छ। त्यसैले, श्रीकृष्णसँग घनिष्ठ मैत्री सम्बन्ध भएका अर्जुनलाई उहाँको यो विराट रूप-दर्शन त्यति आनन्ददायी भएन बरु डरलाग्दो लाग्यो। श्रीकृष्णका नित्य सखा अर्जुन निश्चय नै दिव्य दृष्टिले सम्पन्न हुनु पर्दछ। उनी साधारण मानिस थिएनन्। त्यसैले उनी उक्त विश्वरूपबाट मोहित

भएनन्। सकाम कर्मद्वारा आफूलाई माथि उठाउन चाहनेहरूका लागि यो रूप आश्चर्यजनक लाग्न सक्दछ तर भक्तिमा लागेका व्यक्तिहरूका लागि त दुई भुजाधारी श्रीकृष्ण रूप नै अति प्रिय छ।

**मत्कर्मकृन्मत्परमो मद्भक्तः संगवर्जितः ।**
**निर्वैरः सर्वभूतेषु यः स मामेति पाण्डव ॥ ५५ ॥**

**मत्कर्मकृत्** — मेरै काम गर्नमा संलग्न; **मत्परमः** — मलाई परमपुरुष मानेर; **मद्भक्तः** — मेरा भक्तिमा लागेको; **संगवर्जितः** — सकाम कर्म र मानसिक कल्पनाका संक्रमणबाट मुक्त; **निर्वैरः** — कसैसँग शत्रुता नभएको; **सर्वभूतेषु** — सबै जीवात्माहरूमा; **यः** — जो; **सः** — त्यो; **माम्** — ममा; **एति** — आउँदछ (प्राप्त हुन्छ); **पाण्डव** — हे पाण्डुपुत्र।

**प्रिय अर्जुन! सकाम कर्महरू र मानसिक कल्पनाका संक्रमणबाट मुक्त भएर जो मेरो विशुद्ध भक्तिसेवामा लागेको छ, जो मेरो लागि काम गर्दछ, जसले मलाई आफ्नो जीवनको परमलक्ष्य बनाउँदछ र जसले प्रत्येक जीवात्मासँग मैत्रीभाव राख्दछ त्यसले निश्चय नै मलाई प्राप्त गर्दछ।**

**तात्पर्य :** आध्यात्मिक आकाशको कृष्णलोकमा पुगेर परमपुरुषलाई प्राप्त गर्न चाहने र साक्षात् भगवान् श्रीकृष्णसँग घनिष्ठ सम्बन्ध स्थापित गर्न चाहने मानिसले स्वयम् भगवान्ले भन्नुभएको यस विधिलाई अपनाउनु पर्दछ। अतः यो श्लोकलाई *भगवद्गीताको* सारभूत श्लोक मानिन्छ। यो *भगवद्गीता* वास्तविक आध्यात्मिक जीवनको ज्ञान नभएका र भौतिक प्रकृतिमाथि प्रभुत्व जमाउने उद्देश्यले सांसारिक कार्यमा संलग्न रहेका बद्ध जीवहरूप्रति लक्षित छ। मानिसले आफ्नो आध्यात्मिक अस्तित्व कसरी बुझ्न सक्दछ, परमपुरुषसँग उसको नित्य सम्बन्ध कस्तो छ र भगवद्धाम वा आफ्नो वास्तविक घर कसरी फर्किन सकिन्छ आदि कुरा सिकाउनु *भगवद्गीताको* उद्देश्य हो। प्रस्तुत श्लोकमा मानिसले आफ्ना आध्यात्मिक क्रियाकलाप वा भक्तियोगमा कसरी सफलता प्राप्त गर्न सक्दछ, त्यो विधिको स्पष्ट व्याख्या भएको छ।

*अनासक्तस्य विषयान् यथार्हमुपयुञ्जतः ।*
*निर्बन्धः कृष्णसम्बन्धे युक्तं वैराग्यमुच्यते ।*

भगवान् श्रीकृष्णसँग असम्बन्धित कुनै पनि कर्म नगर्नुलाई **कृष्णकर्म** भनिन्छ। मानिस विभिन्न प्रकारका कार्यमा संलग्न हुन सक्दछ तर त्यसको फलप्रति आसक्त हुनु हुँदैन। कर्मको फल श्रीकृष्णका लागि समर्पित गरिदिनु पर्दछ। उदाहरणका लागि कसैले व्यापार गर्न सक्दछ तर त्यो व्यापारकार्यलाई

कृष्णभावनामा रूपान्तरित गर्नका लागि व्यापार पनि भगवान् श्रीकृष्णका लागि भनेर गर्नु पर्दछ। यदि श्रीकृष्णलाई नै व्यापारका कर्ता मान्ने हो भने व्यापारबाट हुने फाइदाको भोक्ता पनि भगवान् श्रीकृष्ण नै हुनु पर्दछ। यदि कुनै व्यक्तिसँग हजारौँ-हजार रुपैयाँ छ र उसले उक्त रकम श्रीकृष्णलाई अर्पण गर्न चाहन्छ भने उसले त्यसो गर्न सक्दछ। यो श्रीकृष्णका लागि गरिएको कार्य भयो। इन्द्रियतृप्तिका निमित्त ठुलाठुला घरहरू बनाउनुको सट्टा भगवान् श्रीकृष्णका लागि सुन्दर मन्दिर बनाउन सकिन्छ, त्यहाँ श्रीकृष्णको मूर्ति स्थापना गर्न सकिन्छ र भक्तिसम्बन्धी प्रामाणिक ग्रन्थहरूमा वर्णन भएअनुसार सेवापूजाको व्यवस्था गर्न सकिन्छ। यी सबै कृष्णकर्म हुन्। मानिस आफ्ना कर्मफलप्रति आसक्त हुनु हुँदैन बरु उक्त कर्मफल श्रीकृष्णलाई समर्पित गरिदिनु पर्दछ र श्रीकृष्णलाई अर्पण गरिएको वस्तु प्रसादका रूपमा ग्रहण गर्नु पर्दछ। यदि कसैले श्रीकृष्णका लागि अति भव्य घर बनाउँदछ र श्रीकृष्णका श्रीविग्रहको स्थापना गर्दछ उसलाई त्यहाँ बस्न निषेध छैन तर उसले त्यस घरको अधिपति श्रीकृष्ण हुनुहुन्छ भन्ने बुझ्नु पर्दछ। त्यसैलाई भनिन्छ कृष्णभावना। मानिस यदि कृष्णका लागि मन्दिर बनाउन असमर्थ भए उसले आफूलाई भगवान् श्रीकृष्णका मन्दिरको मार्जन (सरसफाई) गर्ने कार्यमा संलग्न राख्नु पर्दछ। यो पनि कृष्णकर्म नै हो। कसैले बगैंचा लगाएर पनि कृष्णसेवा गर्न सक्दछ। जोसँग जमिन छ, उसले उक्त जमिनमा श्रीकृष्णलाई चढाउने फलफूल उब्जाएर श्रीकृष्णको सेवा गर्न सक्दछ, भारतवर्षमा गरीबभन्दा गरीबको पनि केही न केही जमिन हुन्छ। कसैले तुलसीको बिरुवा लगाउन सक्दछ, किनभने तुलसीपत्र अत्यन्त महत्त्वपूर्ण छ जसको चर्चा भगवान् श्रीकृष्णले *भगवद्गीतामा* गर्नुभएको छ—**पत्रं पुष्पं फलं तोयं।** श्रीकृष्ण चाहनु हुन्छ कसैले पत्र वा फूल वा फल वा अलिकति जल जे हुन्छ अर्पण गरोस्, किनभने यी वस्तु अर्पण गर्नाले पनि उहाँ सन्तुष्ट हुनुहुन्छ। यहाँ यो पत्र भन्ने शब्दले तुलसीको पातलाई सङ्केत गरेको छ। अतः कसैले तुलसी रोप्न सक्दछन् र त्यस बिरुवामा पानी दिन सक्दछन्। यस प्रकार अत्यन्त गरिब व्यक्ति पनि श्रीकृष्णका सेवामा संलग्न हुन सक्दछ। श्रीकृष्णका काममा कसरी संलग्न हुन सकिन्छ भन्ने कुराका यी केही उदाहरणहरू हुन्।

यहाँ यो **मत्परमः** शब्दले त्यस्तो व्यक्तिलाई सङ्केत गरेको छ, जसले आफ्नो जीवनको परमलक्ष्य भगवान् श्रीकृष्णका परमधाममा पुगेर उहाँकै सङ्गत प्राप्त गर्नुलाई मानेको हुन्छ। यस्तो व्यक्तिले चन्द्रलोक वा सूर्यलोक वा स्वर्गलोक वा ब्रह्माण्डको सबैभन्दा उच्चलोक, ब्रह्मलोक जस्ता लोकहरूमा

जाने इच्छा पनि गर्दैन। त्यसतर्फ उसको कुनै आकर्षण हुँदैन। उसको आकर्षण त केवल वैकुण्ठलोकप्रति हुन्छ। आध्यात्मिक जगत्मा पुगेर पनि ब्रह्मज्योतिमा विलीन भएर मात्र ऊ सन्तुष्ट रहन सक्दैन, ऊ त सर्वोच्च आध्यात्मिक लोक, अर्थात् कृष्णलोक वा गोलोक वृन्दावनमा प्रवेश पाउन चाहन्छ। त्यस लोकका बारेमा उसलाई पूरा जानकारी हुने हुनाले त्योबाहेक अन्य कुनै लोकप्रति उसको अभिरुचि हुँदैन। त्यस्तो व्यक्ति पूर्णतः भक्तियोगमा संलग्न रहन्छ भन्ने कुरा **मद्भक्तः** शब्दले सङ्केत गरेको छ। भक्त विशेष गरी भक्तिका श्रवण, कीर्तन, स्मरण, पादसेवन, अर्चना, वन्दना, दास्य, सख्य र आत्मनिवेदन यी नौ विधिहरू सम्पादन गर्ने कार्यमा लागिरहन्छ। मानिसले सके यी नौवटै विधिहरूको पालना गर्न पर्दछ नसके आठवटा वा सातवटा विधिहरू पालन गर्न पर्दछ र त्यति पनि नसके कम्तीमा एउटा विधिलाईसम्म अपनाउनु पर्दछ, यसैले पनि उसलाई सिद्धिका शिखरमा पुऱ्याउँदछ।

यहाँ प्रयोग भएको **सङ्गवर्जितः** शब्द पनि अति महत्त्वपूर्ण छ। हामीले भगवान् श्रीकृष्णका विरोधीहरूको सङ्गत गर्नु हुँदैन। केवल नास्तिक मात्रै श्रीकृष्णका विरोधी हुँदैनन्, सकाम कर्म गर्नेहरू र मानसिक कल्पनाप्रति आकर्षित हुने व्यक्ति पनि श्रीकृष्णका विरोधी हुन्छन्। त्यसैले भक्तिरसामृत सिन्धु (१.१.११) मा यसरी शुद्ध भक्तिका स्वरूपको वर्णन गरिएको छ—

*अन्याभिलाषिताशून्यं ज्ञानकर्माद्यनावृतम् ।*
*आनुकूल्येन कृष्णानुशीलनं भक्तिरुत्तमा ॥*

यस श्लोकमा श्रीरूप गोस्वामी स्पष्ट भन्नु हुन्छ— विशुद्ध भक्ति गर्न चाहनेले सबै प्रकारका भौतिक संक्रमणहरूबाट मुक्त हुनै पर्दछ। त्यस्ता व्यक्ति सकाम कर्ममा बानी परेका र मनोधर्मीहरूका सङ्गतबाट पनि अलग रहनु पर्दछ। यस प्रकारका अवाञ्छित सङ्गत र सांसारिक वासनाका संक्रमणबाट मुक्त भएर नै मानिसले राम्रोसँग-कृष्ण विज्ञानको विकास गर्न सक्दछ। त्यसैलाई भनिन्छ शुद्ध भक्ति। हरिभक्तिविलास (११.६७६) मा भनिएको छ— **आनुकूल्यस्य सङ्कल्पः प्रातिकूल्यस्य वर्जनम्** अर्थात्, अनुकूल भाव लिएर नै मानिसले भगवान् श्रीकृष्णको चिन्तन गर्नु पर्दछ र श्रीकृष्णका लागि कर्म गर्नु पर्दछ, प्रतिकूल सोचाइ राखेर होइन। कंस श्रीकृष्णको शत्रु थियो। श्रीकृष्ण जन्मिएदेखि नै उसले श्रीकृष्णलाई मार्नका लागि धेरै योजनाहरू बनाइरहन्थ्यो। आफ्नो योजनामा ऊ सधैँ असफल हुने हुनाले सधैँ श्रीकृष्णकै चिन्तन गरिरहन्थ्यो। यसरी काम गर्दा, खाँदा र सुत्दा पनि ऊ हरेक कोणबाट श्रीकृष्णकै चिन्तन गरिरहन्थ्यो तर उसको कृष्णचिन्तन अनुकूल थिएन। त्यसैले, सधैँ चौबीसै

घण्टा श्रीकृष्णको चिन्तन गरेर पनि कंस असुर नै ठहरियो र अन्त्यमा उसलाई श्रीकृष्णले वध गर्नुभयो। हुनत भगवान् श्रीकृष्णका हातबाट मर्ने व्यक्तिले तत्काल मुक्ति प्राप्त गर्दछ, तर शुद्ध भक्तको उद्देश्य त्यो होइन। शुद्ध भक्तले त मुक्ति पनि चाहँदैन। ऊ सर्वोच्च लोक गोलोक वृन्दावनमा पनि जान चाहँदैन, उसलाई जहाँ रहेर पनि श्रीकृष्णको सेवा गर्न पाए पुग्दछ।

भगवान् श्रीकृष्णको भक्त सबैसँग मैत्रीभाव राख्दछ, त्यसैले यहाँ भनिएको छ— उसको कोही शत्रु हुँदैन ऊ **निर्वैर** हुन्छ। यस्तो कसरी हुन सक्दछ? कृष्णभावनामा अवस्थित भक्तले केवल कृष्णभक्तिद्वारा नै जीवनका सम्पूर्ण समस्याहरूबाट मुक्ति पाउन सकिन्छ भन्ने बुझेको हुन्छ। उसलाई यस कुराको प्रत्यक्ष्य अनुभव हुन्छ, त्यसैले ऊ मानवसमाजमा यस कल्याणकारी कृष्णभावनामय पद्धतिको परिचय दिन चाहन्छ। भगवान्का भक्तहरूले ईश्वरीय चेतना फैलाउनका लागि आफ्नो जीवनलाई नै सङ्कटमा पारेका धेरै उदाहरणहरू इतिहासमा छन्। यस सम्बन्धमा सबभन्दा उपयुक्त उदाहरण **ईशुख्रीष्ट**को छ। अभक्तहरूले उहाँलाई क्रसमा झुण्डयाए (शूली चढाए) तर उहाँले ईश्वरीय चेतना फैलाउने कार्यमा आफूलाई बलिदान गर्नुभयो। अवश्य नै उहाँ मारिनुभएको घटना एउटा देखावटी मात्र थियो। यसै गरी भारतमा पनि यस्ता धेरै उदाहरणहरू पाइन्छन्, जस्तै— हरिदास ठाकुर, प्रल्हाद महाराज इत्यादि। यस्तो सङ्कट उनीहरूलाई किन पर्दछ? किनभने, उनीहरू कृष्णभावना फैलाउन चाहन्छन् र यो काम निकै कठिन छ। भगवान् श्रीकृष्णसँगको आफ्नो शाश्वत सम्बन्धलाई बिर्सेको हुनाले नै मानिसले दुःख पाइरहेको हो भन्ने कुरा कृष्णभावनाभावित व्यक्तिले बुझेको हुन्छ। आफ्ना छिमेकीहरूलाई सबै भौतिक समस्याहरूबाट मुक्ति दिलाउनु नै मानिसले मानव समाजलाई प्रदान गर्न सक्ने सबैभन्दा ठुलो योगदान हो। त्यसैले शुद्ध भक्त भगवान्का सेवामा लागिरहन्छ अनि मात्र भगवान्का सेवामा लाग्ने र भगवान्का लागि हरेक प्रकारको कष्ट सहन सक्ने व्यक्तिमाथि भगवान् कति कृपालु बन्नु हुन्छ भन्ने बुझ्न सकिन्छ। अतः यस्ता व्यक्तिहरू शरीर छाडेपछि निश्चित रूपले परमधाम जान्छन्।

सारांशमा भन्दा भगवान् श्रीकृष्णले आफ्नो अस्थायी विश्वरूपका साथै सर्वभक्षी कालरूप र चतुर्बाहु विष्णु रूप पनि देखाउनुभयो। यसरी श्रीकृष्ण यी सम्पूर्ण रूपहरूका मूलस्रोत हुनुहुन्छ। श्रीकृष्ण कुनै आदि विश्वरूप वा विष्णु रूपको अभिव्यक्ति हुनु हुन्न। भगवान् श्रीकृष्ण ती सबै रूपहरूका मूल हुनुहुन्छ। भगवान् विष्णु त सयौँ हजारौँ हुनुहुन्छ, तर भक्तका लागि श्रीकृष्णको दुई भुजाधारी मूल श्यामसुन्दर रूपबाहेक अन्य कुनै पनि रूप

त्यति महत्त्वपूर्ण लाग्दैनन्। ब्रह्मसंहितामा भनिएको छ— जो भक्तिपूर्वक वा प्रेमपूर्वक श्रीकृष्णको श्यामसुन्दर रूपप्रति आकर्षित छ त्यसले उहाँलाई सधैँ आफ्नै हृदयमा विराजमान भएको देख्दछ र त्यसबाहेक अरू केही देख्दैन। अतः हामीले के बुझ्नु पर्दछ भने, यही कृष्ण रूप नै भगवान्‌को वास्तविक एवं शाश्वत रूप हो र यही कुराको पुष्टि यो एघारौँ अध्यायको तात्पर्यले गरेको छ।

यस प्रकार *श्रीमद्भगवद्गीता* ग्रन्थअन्तर्गत 'विराट स्वरूप' शीर्षक एघारौँ अध्यायको भक्तिवेदान्त तात्पर्य समाप्त भयो।

# अध्याय-बाह्र

# भक्तियोग

अर्जुन उवाच

**एवं सततयुक्ता ये भक्तास्त्वां पर्युपासते ।**
**ये चाप्यक्षरमव्यक्तं तेषां के योगवित्तमाः ॥१॥**

**अर्जुन उवाच** — अर्जुनले भने; **एवम्** — यस प्रकार; **सतत** — निरन्तर; **युक्ताः** — तत्पर; **ये** — जो; **भक्ताः** — भक्तहरू; **त्वाम्** — हजुरलाई; **पर्युपासते** — राम्रोसँग उपासना गर्दछन्; **ये** — जो; **च** — पनि; **अपि** — फेरि; **अक्षरम्** — इन्द्रियहरूभन्दा पर; **अव्यक्तम्** — अव्यक्त; **तेषाम्** — तिनीहरूमध्ये; **के** — को; **योगवित्तमाः** — योगविद्यामा पारङ्गत।

**केही मानिसहरू हजुरको भक्तिमा निरन्तर निमग्न हुन्छन् र केही अव्यक्त निराकार ब्रह्मको उपासना गर्दछन् भने यी दुईमा कुनचाहिँलाई बढी पूर्ण वा सिद्ध मान्ने हो ?**

**तात्पर्य :** भगवान् श्रीकृष्णले अहिलेसम्म साकार स्वरूपका बारेमा, निराकार स्वरूपका बारेमा र विराट् स्वरूपका बारेमा व्याख्या गरिसक्नुभएको छ र सबै प्रकारका भक्त तथा योगीहरूको वर्णन पनि गरिसक्नुभएको छ। साधारणतया अध्यात्मवादीहरूलाई दुई वर्गमा विभाजित गर्न सकिन्छ। तीमध्ये पहिलो निराकारवादी हो र दोस्रो साकारवादी। साकारवादी भक्तहरू आफ्नो सम्पूर्ण शक्ति लगाएर भगवान्को भक्ति गर्दछन् र निराकारवादीहरू प्रत्यक्ष रूपले श्रीकृष्णका सेवामा नलागे पनि निराकार अव्यक्त ब्रह्मको ध्यान गर्दछन्।

यस अध्यायमा परमसत्यको अनुभूतिका विभिन्न विधिहरूमध्ये भक्तियोग नै सर्वश्रेष्ठ विधि हो भनिएको छ। भगवान्को सङ्गत वा सान्निध्य चाहनेले भक्तियोगको आश्रय लिनु पर्दछ।

भक्तियोगद्वारा प्रत्यक्ष रूपले भगवान्को आराधना गर्ने व्यक्तिलाई साकारवादी भन्दछन् र निराकार ब्रह्मको ध्यानमा संलग्न हुनेलाई निराकारवादी भन्दछन्। अर्जुनले यहाँ यी दुई विधिमा कुन विधि श्रेष्ठ हो भन्ने प्रश्न गरिरहेका छन्। हुनत परमसत्यको अनुभूति गर्ने अनेकौँ विधिहरू छन् तापनि यहाँ यो अध्यायमा भगवान् श्रीकृष्णले भक्तियोग नै सबैभन्दा उत्तम हो भन्ने सङ्केत

गर्नुभएको छ। यो नै भगवान्‌को निकट पुऱ्याउने सबैभन्दा सोझो र सरल मार्ग हो।

*भगवद्गीताको* दोस्रो अध्यायमा भगवान्‌ले जीवात्मा भौतिक शरीर नभएर आध्यात्मिक स्फुलिङ्ग (झिल्को) हो र परमसत्य आध्यात्मिकताको पूर्णता हुनुहुन्छ भन्ने व्याख्या गर्नुभएको छ। सातौँ अध्यायमा जीवात्मा पूर्ण परमात्माको अंश भएको हुनाले उसले आफ्नो सम्पूर्ण ध्यान पूर्ण परमात्मातिरै केन्द्रित गर्नु पर्दछ भनिएको छ। फेरि आठौँ अध्यायमा भनिएको छ— शरीर छोड्ने समयमा यदि कसैले भगवान् श्रीकृष्णको चिन्तन गर्दछ ऊ मृत्युपछि तुरुन्त आध्यात्मिक जगत् कृष्णलोकमा पुग्दछ। छैटौँ अध्यायको अन्त्यमा भगवान्‌ले— हृदयमा सधैँ भगवान् श्रीकृष्णको चिन्तन गर्ने व्यक्ति सबै योगीहरूमा सर्वाधिक परिपूर्ण योगी मानिन्छ भन्नुभएको छ। यसरी प्रत्येक अध्यायको अन्त्यमा मानिसलाई श्रीकृष्णको सगुण साकार स्वरूपप्रति अनुरक्त हुनु पर्दछ भन्ने निष्कर्ष निकालिएको छ। किनभने, यो नै सबैभन्दा उच्च कोटिको आध्यात्मिक अनुभूति हो। यति हुँदाहुँदै पनि कोही भगवान् श्रीकृष्णको सगुण साकार स्वरूपप्रति अनुरक्त हुँदैनन्। यस्तो साकार स्वरूपप्रति उनीहरूको दृढ विकर्षण हुन्छ र उनीहरू *भगवद्गीताको* भाष्य लेख्दा पनि पाठकलाई श्रीकृष्णको सगुण स्वरूपबाट हटाएर उनीहरूको सम्पूर्ण भक्ति निराकार ब्रह्मज्योतितिर केन्द्रित गर्न प्रेरित गर्दछन्। उनीहरू इन्द्रियहरूको सीमाभन्दा परको अव्यक्त परमसत्यको निराकार स्वरूपमा ध्यान लगाउन इच्छुक हुन्छन्।

यस प्रकार वास्तवमा अध्यात्मवादीहरूका दुई वर्ग छन्। त्यसैले यहाँ अर्जुन यी दुई वर्गका दुईथरी विधिमध्ये सजिलो र श्रेष्ठ विधि कुन हो भन्ने सोध्न चाहन्छन्। अर्को शब्दमा भन्ने हो भने, अर्जुन आफू श्रीकृष्णको साकार सगुण स्वरूपप्रति अनुरक्त रहेको कुरा स्पष्ट पार्न चाहन्छन्। निराकार ब्रह्मप्रति अर्जुन आकर्षित छैनन्। उनी आफ्नो स्थिति सुरक्षित छ कि छैन भन्ने बुझ्न चाहन्छन्। यस लोकमा होस् वा परलोक (भगवद्धाम) मा होस् निराकार स्वरूपमा ध्यान गर्न समस्या नै हुन्छ। वास्तवमा भन्ने हो भने, कसैले पनि पूर्णरूपले भगवान्‌का निराकार स्वरूपको चिन्तन गर्न सक्दैन। त्यसैले अर्जुन भन्दछन्— 'यसरी समय नष्ट गरेर के लाभ ?' भगवान् श्रीकृष्णको साकार रूपप्रति अनुरक्त हुनु नै उत्तम हो भन्ने अनुभव अर्जुनलाई एघारौँ अध्यायमा भइसकेको थियो। उनले एकैसाथ भगवान्‌का अन्य रूपहरूका बारेमा पनि बुझ्न सक्दथे र श्रीकृष्णप्रतिको उनको प्रेमप्रति पनि कुनै व्यवधान आउँदैनथ्यो। यसरी अर्जुनले श्रीकृष्णसँग यस प्रकारको महत्त्वपूर्ण प्रश्न सोधिदिएका हुनाले परमब्रह्मसम्बन्धी साकारवादी धारणा तथा निराकारवादी धारणाबीचको भेद स्पष्ट भयो।

श्रीभगवानुवाच

**मय्यावेश्य मनो ये मां नित्ययुक्ता उपासते ।**
**श्रद्धया परयोपेतास्ते मे युक्ततमा मताः ॥ २ ॥**

**श्रीभगवान् उवाच** — भगवान् भन्नु हुन्छ; **मयि** — ममा; **आवेश्य** — स्थिर गरेर; **मनः** — मनलाई; **ये** — जसले; **माम्** — मलाई; **नित्य** — निरन्तर; **युक्ताः** — संलग्न रहेर; **उपासते** — उपासना गर्दछ; **श्रद्धया** — श्रद्धापूर्वक; **परया** — दिव्य; **उपेताः** — दिइएको; **ते** — तिनीहरू; **मे** — मद्वारा; **युक्ततमाः** — योगमा परिपूर्ण; **मताः** — मानिन्छन्।

**भगवान् भन्नु हुन्छ— मेरो सगुण साकार स्वरूपमा मन स्थिर गरेर सधैँभरि अत्यन्त श्रद्धापूर्वक मेरो नै उपासनामा लागिरहने व्यक्तिलाई म परमसिद्ध योगी मान्दछु।**

**तात्पर्य :** अर्जुनका प्रश्नको उत्तर दिँदै भगवान् श्रीकृष्ण स्पष्टसँग भन्नु हुन्छ— मेरो साकार रूपमा मनलाई एकाग्र पारेर श्रद्धा र भक्तिपूर्वक मेरो उपासना गर्ने व्यक्ति योगमा परिपूर्ण भएको मानिन्छ। यस प्रकारले कृष्णभावनामा संलग्न रहनेहरूका निमित्त भौतिक क्रियाकलाप भन्ने कुरै रहँदैन, किनभने उनीहरूका सम्पूर्ण कार्य भगवान् श्रीकृष्णका लागि गरिएका हुन्छन्। शुद्ध भक्त सधैँ क्रियाशील हुन्छ, ऊ कहिले कीर्तन गर्दछ, कहिले कृष्णसम्बन्धी पुस्तकहरू पढ्दछ, सुन्दछ, कहिले श्रीकृष्णका लागि प्रसाद तयार पार्दछ, कहिले श्रीकृष्णका लागि सामाग्री खरिद गर्न बजार जान्छ, कहिले मन्दिर सफा गर्दछ, कहिले भोजन पात्र सफा गर्दछ। यसरी उसले जे गर्दछ, सबै श्रीकृष्णसम्बन्धी काम नै गर्दछ, त्यसबाहेक एक क्षण पनि व्यर्थमा नष्ट गर्दैनन्। यस्तो कार्यलाई पूर्ण समाधि भन्दछन्।

**ये त्वक्षरमनिर्देश्यमव्यक्तं पर्युपासते ।**
**सर्वत्रगमचिन्त्यं च कूटस्थमचलं ध्रुवम् ॥ ३ ॥**
**सन्नियम्येन्द्रियग्रामं सर्वत्र समबुद्धयः ।**
**ते प्राप्नुवन्ति मामेव सर्वभूतहिते रताः ॥ ४ ॥**

**ये** — जो; **तु** — तर; **अक्षरम्** — इन्द्रियका अनुभूतिभन्दा परको; **अनिर्देश्यम्** — अनिश्चित; **अव्यक्तम्** — अव्यक्त; **पर्युपासते** — पूर्णरूपले पूजामा संलग्न; **सर्वत्रगम** — सर्वव्यापी; **अचिन्त्यम्** — कल्पना गर्न नसकिने; **च** — पनि; **कूटस्थम्** — अपरिवर्तित; **अचलम्** — अचल; **ध्रुवम्** — निश्चित; **सन्नियम्य** — नियन्त्रणमा राखेर; **इन्द्रियग्रामम्** — इन्द्रियहरूलाई; **सर्वत्र** —

सबैतिर; **समबुद्धयः** — समान भाव राखेर; **ते** — तिनीहरू; **प्राप्नुवन्ति** — प्राप्त गर्दछन्; **माम्** — मलाई; **एवं** — निश्चय नै; **सर्वभूतहिते** — सम्पूर्ण जीवात्माको कल्याणका लागि; **रताः** — लागेका।

**तर जसले आफ्ना इन्द्रियहरूलाई नियन्त्रण गरेर सबैप्रति समानभाव राख्दै र भगवान् निराकार हुनुहुन्छ भन्ने कल्पना गर्दै इन्द्रियका अनुभूतिभन्दा पर रहनुभएका, सर्वव्यापक, अचिन्त्य, अपरिवर्तनीय, स्थिर तथा अचल अव्यक्त परमात्माको उपासना गर्दछन्, त्यस्ता सबैको कल्याण कार्यमा संलग्न रहने व्यक्तिले अन्त्यमा मलाई प्राप्त गर्दछन्।**

**तात्पर्य :** भगवान् श्रीकृष्णको प्रत्यक्ष आराधनामा नलागी अप्रत्यक्ष विधिले त्यही उद्देश्यमा पुग्न प्रयत्न गर्नेले पनि अन्त्यमा उनै श्रीकृष्णलाई प्राप्त गर्दछन्। धेरै धेरै जन्मपछि बुद्धिमान् व्यक्तिले वासुदेव नै सबै कुरा हुनुहुन्छ भन्ने बुझेर भगवान् श्रीकृष्णको शरणमा आउँदछन्। मानिसलाई धेरै धेरै जन्मजन्मान्तरपछि जब पूर्णज्ञान प्राप्त हुन्छ, अनि ऊ भगवान् श्रीकृष्णका शरणमा पर्दछ। यस श्लोकमा भनिएको विधिअनुसार भगवान्लाई प्राप्त गर्न चाहनेले इन्द्रियहरूलाई नियन्त्रण गर्नु पर्दछ, प्रत्येक प्राणीहरूको सेवा गर्नु पर्दछ तथा सम्पूर्ण जीवात्माको कल्याण हुने कार्यमा लागिरहनु पर्दछ। यसको तात्पर्य के हो भने, मानिसले आखिरमा भगवान् श्रीकृष्णलाई पाउनै पर्दछ अन्यथा पूर्ण आत्मानुभूति हुनै सक्दैन। भगवान्मा पूर्णरूपले समर्पित हुनुभन्दा अगाडि प्रायः धेरै तपस्याहरू गर्नुपर्ने हुन्छ।

आफ्नै आत्माभित्र परमात्माको दर्शन गर्नका लागि मानिसले सुन्नु, हेर्नु, स्वाद लिनु, काम गर्नुजस्ता बाहिरी इन्द्रियजन्य क्रियाकलापहरू बन्द गर्नु पर्दछ। अनि मात्र उसले परमात्मा सर्वत्र उपस्थित हुनुहुन्छ भन्ने कुरा बुझ्दछ। यस्तो अनुभूति प्राप्त हुँदा ऊ कसैप्रति ईर्ष्या वा द्वेष गर्दैन। उसले मानिस र पशुहरूमा कुनै अन्तर देख्दैन, किनभने उसले सर्वत्र आत्माको मात्रै दर्शन गरिरहेको हुन्छ, बाह्य आवरण (शरीर) को होइन। तर सर्वसाधारण व्यक्तिका लागि निराकारको अनुभूति गर्ने यस किसिमको विधि अत्यन्त कठिन हुन्छ।

**क्लेशोऽधिकतरस्तेषामव्यक्तासक्तचेतसाम् ।**
**अव्यक्ता हि गतिर्दुःखं देहवद्भिरवाप्यते ॥ ५ ॥**

**क्लेशः** — कष्ट; **अधिकतरः** — अति धेरै; **तेषाम्** — ती; **अव्यक्त** — अव्यक्तप्रति; **आसक्त** — अनुरक्त; **चेतसाम्** — मन भएकालाई; **अव्यक्ता** — अव्यक्ततिर; **हि** — निश्चय नै; **गतिः** — प्रगति; **दुःखम्** — दुःखसँग; **देहवद्भिः** — शरीरधारीद्वारा; **अवाप्यते** — पाइन्छ।

**परमेश्वरको अव्यक्त तथा निराकार रूपप्रति आसक्त हुनेहरूलाई अध्यात्ममा प्रगति गर्न धेरै कठिन हुन्छ। शरीरधारीहरूका लागि त्यस किसिमको अनुशासनमा रहेर प्रगति गर्न सधैँ कठिन हुन्छ।**

**तात्पर्य :** परमेश्वरको अचिन्त्य, अव्यक्त, निराकार स्वरूपका अनुयायी अध्यात्मवादीहरूको समूहलाई ज्ञानयोगी भन्दछन् र पूर्णतया कृष्णभावनामा रहेर भक्तियोगमा संलग्न रहने व्यक्तिहरूलाई भक्तियोगी भनिन्छ। अहिले यहाँ भक्तियोगी र ज्ञानयोगीमा निश्चित अन्तर हुन्छ भनिएको छ। ज्ञानयोगको मार्ग अपनाएर पनि अत्यन्त कष्टका साथ त्यही लक्ष्यमा पुगिन्छ जुन लक्ष्यमा भगवान्को प्रत्यक्ष सेवाको मार्ग अपनाउने भक्तियोगीहरू सजिलै पुग्दछन्। शरीरधारी जीवात्माका लागि भक्तियोग नै सजिलो र स्वाभाविक मार्ग हो। जीवात्मा अनादि कालदेखि नै शरीरधारी छ। सैद्धान्तिक रूपले मात्र उसलाई "म शरीर होइन" भन्ने बुझ्न अत्यन्त कठिन हुन्छ। त्यसैले भक्तियोगी भगवान् श्रीकृष्णको श्रीविग्रहलाई पूजनीय मान्दछन्, किनभने तिनका मनमा कुनै न कुनै शारीरिक धारणा दृढ भएर रहेको हुन्छ जसलाई यहाँ यस रूपमा प्रयोग गर्न सकिन्छ। अवश्य नै मन्दिरमा गरिने परमेश्वरका स्वरूपको पूजा मूर्तिपूजा होइन। वैदिक साहित्यमा भेटिने प्रमाणअनुसार पूजा सगुण र निर्गुण अर्थात् गुणसहित र गुणरहित गरी दुईथरीका हुन्छन्। मन्दिरमा गरिने मूर्तिपूजा सगुण पूजा हो। यसमा भौतिक गुणहरूद्वारा भगवान्को प्रतिनिधित्व गराइन्छ। ढुङ्गा, काठ वा तैलचित्रजस्ता भौतिक पदार्थद्वारा भगवान्का रूपको प्रतिनिधित्व गराइन्छ तापनि वास्तवमा उक्त स्वरूप भौतिक हुँदैन। परमेश्वरको परमप्रकृति भनेको यही हो। यस सम्बन्धमा यहाँ एउटा ठोस उदाहरण दिन सकिन्छ, जस्तै— सडकमा ठाउँ-ठाउँमा पत्रमञ्जुषा राखिएको हुन्छ। यदि हामीले ती मञ्जुषाहरूमा पत्र खसाल्यौं भने स्वाभाविक रूपले बिना कठिनाइ ती पत्रहरू सम्बन्धित ठाउँमा पुग्दछन्। तर हुलाक कार्यालयले स्वीकृत नगरेका त्यस्तै किसिमका अन्य मञ्जुषा वा पुराना पत्र-मञ्जुषामा चिठी खसाल्यौं भने त्यसबाट सम्बन्धित ठाउँमा पत्र पुऱ्याउने काम हुँदैन। त्यसै गरी श्रीविग्रहका रूपमा ईश्वरको एउटा आधिकारिक प्रतिरूप हुन्छ, जसलाई अर्चाविग्रह भनिन्छ। यो अर्चा-विग्रह भगवान्कै अवतार हो। त्यस अर्चाविग्रहका माध्यमबाट भगवान्ले सेवा स्वीकार गर्नु हुन्छ। भगवान् सर्वशक्तिमान् हुनुहुन्छ, त्यसैले उहाँ अर्चाविग्रहरूपी अवतारका माध्यमले भक्तहरूबाट सेवा ग्रहण गर्नु हुन्छ र बद्ध जीवनमा बाँधिएको मानिसलाई एक किसिमको सुविधा प्रदान गर्नु हुन्छ।

यसरी भक्तलाई सीधै र तुरुन्त भगवान्सँग पुग्न कुनै कठिनाइ हुँदैन तर निराकारवादी मार्ग अपनाउनेलाई आध्यात्मिक अनुभूतिको बाटो साह्रै

कठिन हुन्छ। उनीहरूले उपनिषद्जस्ता वैदिक साहित्यहरूका माध्यमबाट परमात्माको अव्यक्त स्वरूपलाई बुझ्नुपर्ने हुन्छ। त्यो भाषा सिक्नुपर्ने हुन्छ, इन्द्रियातीत अनुभूतिहरूलाई बुझ्नुपर्ने हुन्छ र यी सबै विधिहरूलाई आत्मसात् गर्नुपर्ने हुन्छ। साधारण मानिसका लागि यो त्यति सजिलो छैन। तर कृष्णभावनामा रहेर भक्तियोगमा संलग्न भएको व्यक्तिले सुयोग्य गुरुका मार्गनिर्देशनले मात्रै, भगवान्का अर्चाविग्रहलाई नियमित प्रणाम गर्नाले मात्रै, भगवान्का गुणानुवादहरू सुन्नाले मात्रै र भगवान्लाई अर्पण गरिएको प्रसाद सेवन गर्नाले मात्रै पनि सजिलैसँग भगवान्को साक्षात्कार गर्न सक्दछ। निःसन्देह निराकारवादीहरूले अनावश्यक रूपमा कष्टपूर्ण मार्ग अपनाएका हुन्छन् जसमा जीवनको अन्त्यसम्म पनि परमसत्यको साक्षात्कार हुन्छ नै भन्ने कुराको कुनै निश्चय हुँदैन। तर साकारवादीहरू कुनै खतरा, कष्ट र कठिनाइबिना नै सीधै भगवान्लाई प्राप्त गर्दछन्। यस्तै किसिमको प्रसङ्ग *श्रीमद्भागवत्मा* पनि छ। त्यहाँ भनिएको छ— यदि अन्ततोगत्वा भगवान्का शरणमा पर्नै पर्दछ भने (यो शरणागतिको विधिलाई नै भक्ति भन्दछन्) ब्रह्म भनेको के हो, के होइन इत्यादि कुरा बुझ्न किन जीवनभरि दुःख गरिरहने, किन त्यस्ता कुरामा सारा जीवन खर्च गर्ने? फेरि त्यसको परिणाम पनि त कष्टकारक हुन्छ। त्यसैले त्यहाँ सुझाव दिँदै भनिएको छ— अन्तिम परिणाम अनिश्चित हुने हुनाले आत्मसाक्षात्कारका लागि त्यस किसिमको कष्टपूर्ण मार्ग नअपनाउनु नै उत्तम हुन्छ।

जीवात्मा शाश्वत रूपले व्यक्तिगत सत्ता हो। यदि ऊ आध्यात्मिक पूर्णतामा निमग्न हुन चाहेमा उसले मूल प्रकृतिको शाश्वत र जान्न योग्य पक्षको साक्षात्कार त गर्न सक्दछ तर आनन्दमय अंशको अनुभूति गर्न सक्दैन। ज्ञानयोगका विधिबाट अघि बढेका यस्ता विद्वान् अध्यात्मवादीहरू कुनै भक्तका कृपाले भक्तियोगको मार्गमा आउन सक्दछन्। त्यस समय उनीहरूलाई निराकारवादको लामो साधना पनि कष्टको कारण बन्दछ, किनभने ऊ त्यो विचार छोड्न सक्दैन। अतः शरीरधारी जीवले अव्यक्तको साधना गर्दा सधैँ कठिनाइहरूको सामना गर्नु पर्दछ, त्यो अभ्यासका समयमा होस् वा अनुभूतिका समयमा। प्रत्येक जीवात्मा आंशिक रूपले स्वतन्त्र छ र यो अव्यक्त रूपको अनुभूति उसको आनन्दमय आध्यात्मिक आत्मतत्त्वको स्वभावविरूद्ध छ। यो कुरा जीवले राम्ररी बुझ्नु पर्दछ। मानिसले यस्तो विधिको अनुसरण गर्नु हुँदैन। भक्तिमय सेवामा पूर्णतः तल्लीन रहने कृष्णभावनाको विधि नै हरेकका लागि सबैभन्दा उत्तम उपाय हो। यदि कसैले यस्तो भक्तियोगको उपेक्षा गर्दछ भने त्यो व्यक्ति नास्तिकतातिर अभिमुख हुने जोखिमा रहिरहन्छ। यो श्लोकमा

पहिल्यै भनिसकिएको र इन्द्रियहरूको सीमाभन्दा पर रहेको अव्यक्त स्वरूपमा ध्यान केन्द्रित गर्ने विधि विशेष गरी यो युगका लागि उपयुक्त छैन, त्यसैले यो विधिलाई कहिल्यै प्रोत्साहन दिनु हुँदैन। भगवान् श्रीकृष्णले पनि यस्तो उपदेश दिनुभएको छैन।

**ये तु सर्वाणि कर्माणि मयि संन्यस्य मत्पराः ।**
**अनन्येनैव योगेन मां ध्यायन्त उपासते ॥ ६ ॥**
**तेषामहं समुद्धर्ता मृत्युसंसारसागरात् ।**
**भवामि न चिरात् पार्थ मय्यावेशितचेतसाम् ॥ ७ ॥**

**ये** — जो; **तु** — तर; **सर्वाणि** — सबै; **कर्माणि** — क्रियाकलापहरू; **मयि** — ममा; **संन्यस्य** — त्यागेर; **मत्पराः** — ममा आसक्त भएर; **अनन्येन** — अनन्यभावले; **एव** — निश्चय नै; **योगेन** — भक्तियोगको अभ्यासद्वारा; **माम्** — मलाई; **ध्यायन्तः** — ध्यान गरेर; **उपासते** — पूजा गर्दछन्; **तेषाम्** — तिनीहरूको; **अहम्** — म; **समुद्धर्ता** — उद्धारक; **मृत्यु** — मृत्युको; **संसार** — संसाररूपी; **सागरात्** — समुद्रबाट; **भवामि** — हुन्छु; **नचिरात्** — तुरून्तै; **पार्थ** — हे पृथापुत्र; **मयि** — ममा; **आवेशित** — स्थिर; **चेतसाम्** — मन भएकाहरूका लागि।

**हे पार्थ — आफ्ना जीवनका सम्पूर्ण क्रियाकलाप मैमा समर्पित गरेर अविचल भावले भक्तिसेवामा संलग्न रहेर, चित्तलाई ममा स्थिर गरिरहेर र ममा ध्यान लगाइरहेर सधैँ मेरो उपासना गर्ने व्यक्तिलाई म यो जन्ममृत्युको सागरबाट तुरुन्त उद्धार गरिदिन्छु।**

**तात्पर्य :** यहाँ स्पष्टसँग के भनिएको छ— भक्तहरू धेरै भाग्यशाली हुन्छन्, किनभने भगवान्ले उनीहरूलाई यथाशीघ्र भवसागरबाट उद्धार गरिदिनु हुन्छ। शुद्ध भक्तलाई भगवान् महान् हुनुहुन्छ र जीवात्मा उहाँका अधीनमा छन् भन्ने कुराको अनुभूति भएको हुन्छ। त्यसैले भगवान्को सेवा गर्नु उसको कर्तव्य हुन्छ। यदि ऊ भगवान्को सेवामा नलागे उसले मायाको सेवा गर्नुपर्ने हुन्छ।

पहिले पनि भनिएको छ— भगवान्लाई भक्तिभावबाट मात्र जान्न सकिन्छ, त्यसैले मानिस पूर्णतया भक्त बन्नु पर्दछ। भगवान्लाई प्राप्त गर्नका लागि उसले आफ्नो मनलाई पूर्णतया भगवान् श्रीकृष्णमा स्थिर गर्नु पर्दछ। श्रीकृष्णका लागि काम गर्नु पर्दछ। ऊ जुनसुकै किसिमको काममा लागिरहेको होस्, त्यो काम श्रीकृष्णका लागि भनेर गरिनु पर्दछ। भक्तिको आदर्श यही हो। भक्तले भगवान्लाई प्रसन्न बनाउनबाहेक अरू केही चाहँदैन। भगवान् श्रीकृष्णको प्रसन्नता नै उसको जीवनको उद्देश्य हुन्छ र उसले त्यसरी नै

आफ्ना हरेक वस्तु श्रीकृष्णका सन्तुष्टिका लागि त्याग गर्दछ, जसरी अर्जुनले कुरुक्षेत्रको युद्ध मैदानमा गरेका थिए। यो विधि अति सरल छ। उसले आफ्ना व्यवसायमा संलग्न रहेर पनि—**हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे, हरे राम हरे राम राम राम हरे हरे** यो महामन्त्रको जप गर्दै आफूलाई भक्तियोगमा संलग्न राख्न सक्दछ। यस प्रकारको दिव्य कीर्तनले भक्तलाई भगवान्प्रति आकर्षित गराउँदछ।

यसरी भक्तिमा संलग्न रहेको व्यक्तिलाई कत्ति पनि विलम्ब नगरी भवसागरबाट पार गरिदिने प्रतिज्ञा भगवान्ले यहाँ गर्नुभएको छ। योगाभ्यासमा अघि बढेकाहरूले आफ्नो इच्छानुसारको योग-पद्धतिद्वारा नै आत्मालाई इच्छा गरिएको लोकहरूमा पुऱ्याउन सक्दछन्। यो अवसरलाई अरूहरूले भिन्दै प्रकारले उपयोग गर्दछन् तर जहाँसम्म भक्तको कुरा छ, उसलाई स्वयम् भगवान्ले नै लैजानु हुन्छ, जसको यहाँ स्पष्ट उल्लेख छ। भक्तलाई आध्यात्मिक लोक (वैकुण्ठलोक) मा जानका लागि कुनै प्रकारको ठुलो अनुभवी भइरहनु पर्ने आवश्यकता छैन। वराह पुराणमा यस्तो श्लोकको उल्लेख छ।

*नयामि परमंस्थानमर्चिरादिगतिं बिना ।*
*गरुडस्कन्धमारोप्य यथेच्छमनिवारितः ॥*

अर्थात्, आत्मालाई वैकुण्ठलोकमा पुऱ्याउनका निमित्त भक्तले अष्टाङ्ग योगको अभ्यास गरिरहनु पर्ने आवश्यकता छैन। यसको उत्तरदायित्व स्वयम् भगवान्ले नै लिनु हुन्छ। उहाँले आफू स्वयम् नै उद्धारकर्ता हुने कुरा यहाँ स्पष्ट पार्नुभएको छ। बालकको रेखदेख उसका बाबुआमाले गर्दछन् र यसरी ऊ सुरक्षित हुन्छ। त्यसै गरी भक्तलाई योगाभ्यास गरेर अन्य लोकहरूमा जाने प्रयत्न गर्नु आवश्यक छैन बरु स्वयम् भगवान् नै कृपावश आफ्नो बाहन गरुडमाथि चढेर तुरुन्त आउनु हुन्छ र भवबन्धनबाट आफ्ना भक्तलाई उद्धार गर्नु हुन्छ। समुद्रमा परेको मानिसले जतिसुकै पौडिन निपुण भए पनि र जतिसुकै प्रयास गरे पनि आफूलाई बचाउन सक्दैन। तर यदि कसैले आएर उसलाई त्यो पानीबाट निकालिदियो भने ऊ सजिलैसँग सुरक्षित हुन सक्दछ। त्यसै गरी भगवान्ले आफ्ना भक्तहरूलाई भवसागरबाट उठाउनु हुन्छ। मानिसले केवल कृष्णभावनाको सरल विधिको अभ्यास गर्नु पर्दछ र आफूलाई पूर्णरूपले भक्तिमा संलग्न राख्नु पर्दछ। त्यसैले, बुद्धिमान् मानिसले अरू सबै मार्गहरूभन्दा बढी भक्तियोगरूपी मार्गलाई नै अनुगमन गर्नु पर्दछ। यसको पुष्टि नारायणीय उपनिषद्मा यसरी गरिएको छ—

*या वै साधनसम्पत्तिः पुरुषार्थ चतुष्टये ।*
*तया बिना तदाप्नोति नरो नारायणाश्रयः ॥*

मानिसले सकाम कर्मका विभिन्न विधिहरूमा मात्र व्यस्त रहनु पनि हुँदैन र काल्पनिक विधिले ज्ञानको विकास गर्नु पनि हुँदैन। योगका अन्य विधिहरूबाट, चिन्तन अनुष्ठानबाट तथा दान इत्यादिबाट मानिसले जे-जे उपलब्धि प्राप्त गर्दछ, ती सबै कुरा भगवान्का भक्तिमा संलग्न रहनेले पनि प्राप्त गर्न सक्दछ। यो नै भक्तिको विशिष्ट वरदान हो र उपर्युक्त श्लोकको तात्पर्य पनि यही हो। **हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे, हरे राम हरे राम राम राम हरे हरे** यो महामन्त्रको जप गर्नाले मात्रै पनि भगवान्को भक्तले सजिलैसँग सुखपूर्वक आफ्नो परमलक्ष्य प्राप्त गर्न सक्दछ, तर यही लक्ष्य धर्मका अन्य कुनै विधिद्वारा प्राप्त गर्न सकिँदैन। अठारौँ अध्यायमा *भगवद्गीताको* निष्कर्ष दिँदै भनिएको छ—

*सर्वधर्मान् परित्यज्य मामेकं शरणं व्रज ।*
*अहं त्वां सर्वपापेभ्यो मोक्षयिष्यामि मा शुचः ॥*

आत्मसाक्षात्कारका अन्य सबै विधिहरूलाई त्यागेर कृष्णभावनाभावित भई केवल भक्ति गर्नु पर्दछ। यही भक्तिले मानिसलाई जीवनको परमसिद्धि प्राप्त गर्न सक्षम बनाउँदछ। अनि उसले आफ्ना विगत जीवनका पापकर्महरूका बारेमा पनि चिन्ता लिनु पर्दैन, किनभने उसको सम्पूर्ण उत्तरदायित्व भगवान्ले स्वयम् लिनु हुन्छ। त्यसैले, आध्यात्मिक अनुभूतिद्वारा आफ्नो उद्धार गर्ने अन्य निरर्थक प्रयास मानिसले नगरे पनि हुन्छ। अतः सबैले परमशक्तिमान् भगवान् श्रीकृष्णको शरण ग्रहण गरौँ, यही नै जीवनको सर्वोच्च सिद्धि वा पूर्णता हो।

**मय्येव मन आधत्स्व मयि बुद्धिं निवेशय ।**
**निवसिष्यसि मय्येव अत ऊर्ध्वं न संशयः ॥ ८॥**

**मयि** — ममा; **एव** — निश्चय नै; **मनः** — मन; **आधत्स्व** — स्थिर गराऊ; **मयि** — ममा; **बुद्धिम्** — बुद्धि; **निवेशय** — लगाऊ; **निवसिष्यसि** — निवास गर्नेछौ; **मयि** — ममा; **एव** — निश्चय नै; **अतः ऊर्ध्वम्** — यसभन्दा पछि; **न संशयः** — सन्देह नगर।

**आफ्नो मनलाई म ( कृष्ण )मा स्थिर गर र सम्पूर्ण बुद्धि ममा लगाऊ। यसो गर्नाले तिमी निःसन्देह सधैँ ममा निवास गर्नेछौ।**

**तात्पर्य :** आफूलाई भगवान् श्रीकृष्णको सेवामा संलग्न गराउने व्यक्ति प्रत्यक्ष रूपमा भगवान्सँग सम्बन्धित हुन्छ। त्यस्तो व्यक्ति सुरुदेखि नै दिव्य अवस्थामा

अवस्थित हुन्छ, यसमा कुनै शंका छैन। भक्त कहिल्यै पनि सांसारिक स्तरमा रहँदैन, ऊ त सधैँ भगवान् श्रीकृष्णमा निवास गर्दछ। भगवान्को पावन नाम र स्वयम् भगवान्मा कुनै अन्तर छैन। त्यसैले भक्तले **हरेकृष्ण** महामन्त्रको कीर्तन गर्दा भगवान् आफ्नी अन्तरङ्गा शक्तिसहित उसको जिब्रोमा नृत्य गर्नु हुन्छ। भक्तले चढाएको भोग भगवान् श्रीकृष्णले प्रत्यक्ष ग्रहण गर्नु हुन्छ। यसरी भगवान्को उच्छिष्ट भोजन खाएर भक्त पनि कृष्णमय बन्न पुग्दछ। यस प्रकार सेवामा नलागेको व्यक्तिले यस्तो कसरी हुन्छ भन्ने बुझ्न सक्दैन, यद्यपि यस प्रकारको विधिको चर्चा *भगवद्गीता* र अन्य वैदिक साहित्यमा पनि गरिएको छ।

**अथ चित्तं समाधातुं न शक्नोषि मयि स्थिरम् ।**
**अभ्यासयोगेन ततो मामिच्छाप्तुं धनञ्जय ॥ ९ ॥**

**अथ** — अतः (यदि); **चित्तम्** — मनलाई; **समाधातुम्** — स्थिर गर्न; **न शक्नोषि** — सक्दैनौ; **मयि** — ममा; **स्थिरम्** — दृढतापूर्वक; **अभ्यास योगेन** — भक्तियोगको अभ्यासद्वारा; **ततः** — त्यसपछि; **माम्** — मलाई; **इच्छा** — इच्छा गर; **आप्तुम्** — प्राप्त गर्ने; **धनम्-जय** — हे सम्पत्तिविजेता अर्जुन!

**प्रिय अर्जुन, हे धनञ्जय! यदि तिमी अविचल भावले ममा आफ्नो मन स्थिर गर्न सक्दैनौ भने भक्तियोगका विधि-नियमहरूको पालना गर। यस प्रकार तिमीले मलाई प्राप्त गर्ने इच्छाको विकास गर।**

**तात्पर्य :** यस श्लोकमा भक्तियोगका दुई भिन्दाभिन्दै विधिको सङ्केत गरिएको छ। पहिलो विधि ती व्यक्तिमा लागू हुन्छ, जसले आफ्नो अलौकिक प्रेमद्वारा भगवान् श्रीकृष्णप्रति वास्तविक अनुराग उत्पन्न गरेका छन् र दोस्रो विधि ती व्यक्तिहरूलाई उपयुक्त हुन्छ जसमा भगवान् श्रीकृष्णप्रति यस प्रकारको अनुराग उत्पन्न भएको छैन। यी दोस्रो किसिमका मानिसका लागि विभिन्न प्रकारका विधिनियमहरू प्रस्तावित गरिएका छन्, जसलाई अनुसरण गर्नाले मानिस आखिरमा कृष्णप्रेमको स्थितिमा पुग्न सक्दछ।

भक्तियोग भनेको इन्द्रियहरूको शुद्धि (परिष्कार) हो। इन्द्रिय-तृप्तिका कार्यमा लागिरहेका हुनाले यस समय संसारमा मानिसका इन्द्रियहरू अशुद्ध छन्। तर भक्तियोगको अभ्यासले ती इन्द्रियहरू शुद्ध हुन सक्दछन् र शुद्ध भएपछि ती इन्द्रियहरू प्रत्यक्ष रूपले भगवान्का सम्पर्कमा आउँदछन्। संसारमा रहँदा मैले कुनै न कुनै स्वामीको सेवा त गरौँला तर त्यो स्वामीको वास्तविक प्रेमपूर्ण सेवा गर्न सक्दिनँ। म केही पैसा प्राप्त गर्नका लागि मात्रै

उसको सेवा गर्दछु र त्यो स्वामी पनि मलाई प्रेम गर्दैन। उसले मबाट केही सेवा लिन्छ र केही पैसा मलाई दिन्छ। त्यसैले, त्यहाँ यथार्थ प्रेमको प्रश्न नै उठ्दैन। तर आध्यात्मिक जीवनका लागि मानिस प्रेमको विशुद्ध स्तरमा पुगेको हुनै पर्दछ। प्रेमको त्यो उच्च अवस्था यिनै इन्द्रियहरूद्वारा वर्तमानमा गरिने भक्तिको अभ्यासद्वारा पाउन सकिन्छ।

यो भगवद्प्रेम अहिले हरेक प्राणीका हृदयमा सुषुप्त अवस्थामा छ। त्यहाँ भगवद्प्रेम विभिन्न किसिमले व्यक्त पनि हुन्छ तर सांसारिक सम्पर्कले गर्दा त्यो प्रेम दूषित हुन पुग्दछ, त्यसैले त्यो सांसारिक सम्पर्कबाट पहिले हृदयलाई शुद्ध पार्नु पर्दछ अनि सुषुप्त अवस्थामा रहेको त्यो स्वाभाविक कृष्णप्रेम पुनर्जागृत गर्नु पर्दछ। यही नै परिपूर्ण विधि हो।

भक्तियोगका विधिनियमहरूको अभ्यास गर्नका लागि मानिसले कुनै सुयोग्य गुरुको मार्गनिर्देशनमा रहेर काम गर्नु पर्दछ, केही निश्चित नियमहरू पालना गर्नु पर्दछ, जस्तै— बिहान सबेरै उठ्ने, स्नान गर्ने, मन्दिरमा प्रवेश गर्ने, भगवान्को वन्दना गर्ने अनि **हरे कृष्ण** महामन्त्रको जप गर्ने इत्यादि गर्नु पर्दछ। त्यसपछि, भगवान्को अर्चा-विग्रहमा अर्पण गर्नका लागि फूलहरू टिप्ने, भोग लगाउनका लागि भोजन तयार गर्ने अनि प्रसाद ग्रहण गर्ने आदि। मानिसले पालन गर्नुपर्ने धेरै नियमहरू छन्। शुद्ध भक्तहरूद्वारा नित्य नियमित रूपले *भगवद्गीता* र *श्रीमद्भागवत्*को श्रवण गर्नु पर्दछ। यस्तो अभ्यासले मानिसलाई भगवद्प्रेमको अवस्थासम्म उठाउन सहायता गर्दछ। त्यसपछि, आध्यात्मिक जगत् वा भगवत् धामसम्म पुग्ने उसको प्रगति निश्चित हुन्छ। सुयोग्य गुरुका निर्देशनमा रहेर विधि-नियमहरू पालन गर्दै भक्तियोगको अभ्यास गर्नाले भगवत्प्रेमको अवस्थालाई प्राप्त गर्न सकिन्छ।

**अभ्यासेऽप्यसमर्थोऽसि मत्कर्मपरमो भव ।**
**मदर्थमपि कर्माणि कुर्वन् सिद्धिमवाप्स्यसि ॥ १० ॥**

**अभ्यासे** — अभ्यास गर्न; **अपि** — पनि; **असमर्थः** — असमर्थ; **असि** — छौ भने; **मत्कर्म** — मेरो कर्ममा; **परमः** — परायण; **भव** — होऊ; **मत्अर्थम्** — मेरा लागि; **अपि** — पनि; **कर्माणि** — काम; **कुर्वन्** — गर्दै; **सिद्धिम्** — पूर्णता; **अवाप्स्यसि** — प्राप्त गर्नेछौ।

**भक्तियोगका विधि-नियमहरूको अभ्यास पनि गर्न सक्दैनौ भने मेरा लागि कर्म गर्ने प्रयत्न गर, किनभने मेरा निमित्त कर्म गर्नाले पनि तिमीले पूर्णता प्राप्त गर्नेछौ ( सिद्धि पाउनेछौ )।**

**तात्पर्य :** गुरुका निर्देशनमा रहेर विधिपूर्वक भक्तियोगका नियमहरूको पालना

गर्न नसक्नेले पनि भगवान्का लागि कर्म गरेर जीवनको पूर्णता प्राप्त गर्न सक्दछ। यो कर्म कसरी गर्ने हो भन्ने कुराको व्याख्या एघार अध्यायको ५५ औँ श्लोकमा पहिल्यै गरिसकिएको छ। मानिसमा कृष्णभावनाको प्रचार गर्ने उत्कण्ठा हुनु पर्दछ। धेरै भक्तहरू कृष्णभावनाको प्रचारमा लागेका छन्। तिनलाई सहयोगको आवश्यकता छ। प्रत्यक्ष रूपले भक्तियोगको साधना गर्न नसक्ने वा नभ्याउने व्यक्तिले त्यस्ता कार्यमा लागेका व्यक्तिहरूको सहायता गर्ने प्रयास गर्नु पर्दछ। प्रचार-प्रसारका हरेक प्रयासमा भूमि, पूँजी सङ्गठन र श्रमको आवश्यकता पर्दछ। जसरी कुनै व्यापार सञ्चालन गर्नका लागि रहने ठाउँ, लगानी गर्ने पूँजी र त्यसलाई विस्तार गर्न श्रम र सङ्गठनको आवश्यकता पर्दछ, त्यसै गरी भगवान् श्रीकृष्णको सेवा गर्नका लागि पनि उपर्युक्त कुराहरूको आवश्यकता पर्दछ। यी दुवै कार्यमा भिन्नता के छ भने, सांसारिक कार्यहरू केवल इन्द्रियतृप्तिका लागि गरिन्छन् भने आध्यात्मिक कार्यहरू भगवान् श्रीकृष्णलाई खुशी बनाउनका लागि गरिन्छन्।

श्रीकृष्णका लागि गरिने कार्य अलौकिक कार्य हो। कसैसँग प्रशस्त धन भए उसले कृष्णभावनाको प्रचारका लागि कार्यालयहरू तथा मन्दिरहरू बनाइदिएर र तत्सम्बन्धी ग्रन्थहरू प्रकाशित गर्न आर्थिक सहयोग दिएर सहायता गर्न सक्दछ। आध्यात्मिक कार्यका विविध क्षेत्र छन्, तीमध्ये कुनै न कुनैमा मानिसको रुचि हुनु पर्दछ। आफ्ना सबै कर्मको त्याग गर्न नसक्ने व्यक्तिले पनि आय-आर्जनको केही प्रतिशत त कृष्णभावनाको प्रचारमा लगाउन सक्दछ। यसरी स्वेच्छाले कृष्णभावनाको प्रचार गर्ने कुनै पनि कार्यमा सेवा र सहयोग पुऱ्याएर मानिसले भगवत्प्रेमको उच्चतम् अवस्थालाई प्राप्त गर्न सक्दछ र यसबाट मानिसले जीवनको परिपूर्णता प्राप्त गर्दछ।

**अथैतदप्यशक्तोऽसि कर्तुं मद्योगमाश्रितः ।**
**सर्वकर्मफलत्यागं ततः कुरु यतात्मवान् ॥ ११॥**

**अथ** — यद्यपि; **एतत्** — यो; **अपि** — पनि; **अशक्तः** — असमर्थ; **असि** — छौ; **कर्तुम्** — गर्न; **मत्** — मेरा लागि; **योगम्** — भक्तियोगमा; **आश्रितः** — निर्भर; **सर्वकर्म** — सबै कर्महरूको; **फल** — फल; **त्यागम्** — त्याग; **ततः** — त्यसो भए; **कुरु** — गर; **यत्-आत्मवान्** — आत्मस्थित।

**यदि कृष्णभावनामा रहेर कर्म गर्न सक्दैनौ भने तिमी सम्पूर्ण कर्मफललाई त्यागेर आत्मामा स्थित हुने प्रयत्न गर।**

**तात्पर्य :** सामाजिक, पारिवारिक या धार्मिक कारणहरूले गर्दा वा अन्य कुनै बिघ्न-बाधाले गर्दा मानिस कृष्णभावनाका क्रियाकलापहरूप्रति सहानुभूति

देखाउन पनि असमर्थ हुन्छन्। प्रत्यक्ष रूपले यस्ता क्रियाकलापसँग सम्बद्ध हुँदा पारिवारिक सदस्यहरूले विरोध जनाउन सक्दछन् या यस्तै अरू समस्याहरू आइ पर्दछन्। जसलाई यस प्रकारको समस्याले दुःख दिने गरेको छ त्यसलाई आफ्ना कर्मको सञ्चित फल कुनै शुभ कार्यमा लगाउन सल्लाह दिइन्छ। वेदमा यस किसिमको व्यवस्थाको वर्णन छ। त्यहाँ पूर्वजन्मका कर्म र तिनको फललाई प्रयोगमा ल्याउन सकिने विभिन्न यज्ञानुष्ठानहरू, पुण्यकर्महरू र विशिष्ट कार्यहरूको पनि वर्णन छ। यसबाट मानिस विस्तारै ज्ञानका स्तरसम्म माथि उठ्दछ। कृष्णभावनाका क्रियाकलापमा रुचि नरहे पनि अस्पताल वा यस्तै सामाजिक सङ्घ-संस्थाका लागि अर्थदान गर्ने व्यक्तिले सत्कर्ममा आफ्नो आम्दानीको अंश दान गरिरहेको हुन्छ। यस्ता मानिसहरूको पनि यहाँ प्रशंसा गरिएको छ, किनभने आफ्ना कर्मफलको त्याग गर्ने बानीले मानिसको मनलाई क्रमशः स्वच्छ बनाउँदै लैजान्छ। यसरी मन स्वच्छ भइसकेपछि मानिस विस्तारै कृष्णभावनालाई बुझ्न सक्ने हुन्छ। कृष्णभावनामृत स्वयम् नै मनलाई निर्मल बनाउने प्रमुख तत्त्व भएका हुनाले यो अरू कुनै अनुभवमा आश्रित छैन। यदि कसैलाई कृष्णभावनामा संलग्न हुन कुनै प्रकारको कठिनाइ अनुभव हुन्छ भने उसले आफूले गरेका कर्महरूको प्रतिफल परित्याग गर्ने प्रयत्न गर्नु पर्दछ। यस्तो अवस्थामा गरिने समाजसेवा, समुदायसेवा, राष्ट्रसेवा वा देशका लागि गरिने कुनै पनि उत्सर्ग स्वीकार्य हुन्छन्। यसबाट मानिस कुनै न कुनै दिन भगवान्को शुद्ध भक्ति प्राप्त गर्न सक्षम हुन्छ। *भगवद्गीता* (१८-४६) मा भनिएको छ— **यतः प्रवृत्तिर्भूतानाम्** यदि कसैले आफ्ना कर्मफल परमकारणलाई समर्पित गर्न चाहन्छ भने आरम्भमा त्यो परमकारण श्रीकृष्ण हुनुहुन्छ भन्ने ज्ञान नभए पनि उसले यज्ञविधिद्वारा क्रमशः श्रीकृष्ण नै सबै कुराका परमकारण हुनुहुन्छ भन्ने बुझ्दछ।

**श्रेयो हि ज्ञानमभ्यासाज्ज्ञानाद्ध्यानं विशिष्यते ।**
**ध्यानात्कर्मफलत्यागस्त्यागाच्छान्तिरनन्तरम् ॥ १२ ॥**

**श्रेयः** — उत्तम; **हि** — निश्चय नै; **ज्ञानम्** — ज्ञान; **अभ्यासात्** — अभ्यासभन्दा; **ज्ञानात्** — ज्ञानभन्दा; **ध्यानम्** — ध्यान; **विशिष्यते** — विशिष्ट मानिन्छ; **ध्यानात्** — ध्यानभन्दा; **कर्मफल त्यागः** — सम्पूर्ण कर्मका फलको परित्याग; **त्यागात्** — यस किसिमको त्यागद्वारा; **शान्तिः** — शान्ति; **अनन्तरम्** — त्यसपछि।

**यदि तिमी यो अभ्यास पनि गर्न सक्दैनौ भने ज्ञानको विकासमा लाग,**

**तर ज्ञानभन्दा ध्यान श्रेष्ठ छ र ध्यानभन्दा कर्मफलको त्याग झन् श्रेष्ठ छ, किनभने यस प्रकारको त्यागबाट मानिसले मानसिक शान्ति प्राप्त गर्न सक्दछ।**

**तात्पर्य :** पूर्वका श्लोकहरूमा दुई प्रकारका भक्तिको उल्लेख गरियो जसमा पहिलो हो— विधिनियमहरूको पालन र दोस्रो हो भगवत्प्रेमप्रति पूर्ण आसक्ति। कृष्णभावनाका सिद्धान्तहरूको पालन गर्न नसक्ने व्यक्तिले ज्ञानको विकास गर्नु उत्तम हुन्छ, किनभने ज्ञानबाट मानिसले आफ्नो वास्तविक अवस्थालाई बुझ्न समर्थ हुन्छ। यही ज्ञानले मानिसलाई ध्यानसम्म पुऱ्याउँदछ र ध्यानबाट विस्तारै मानिस भगवान्‌लाई बुझ्न सक्षम हुन्छ। यस्ता पनि विधिहरू छन् जसले मानिसलाई म नै परमब्रह्म हूँ भन्ने अनुभूति गराइदिन्छन्, भक्तिसेवामा संलग्न हुन नसक्नेहरूका लागि यस प्रकारको ध्यान पनि राम्रै मानिन्छ। यस किसिमको ध्यान पनि गर्न नसक्नेहरूका लागि वैदिक साहित्यमा ब्राह्मण, क्षत्रीय, वैश्य र शूद्र यी वर्णअनुसार विभिन्न कर्तव्यकर्मको निर्देशन गरिएको छ। *भगवद्गीताको* अन्तिम अध्यायमा हामी यी कुराहरूको ज्ञान प्राप्त गर्दछौँ। तर हरेक अवस्थामा मानिसले आफ्नो कर्मफलको त्याग गर्नै पर्दछ। यसको तात्पर्य कर्मफललाई कुनै राम्रो कार्यमा लगाउनु हो।

सङ्क्षेपमा भन्दा, सर्वोच्च लक्ष्य भगवान्‌सम्म पुग्नका लागि दुईवटा विधिहरू छन्। तिनमा पहिलो क्रमिक विकासको विधि र दोस्रो प्रत्यक्ष विधि हो। कृष्णभावनामृतमय भक्तियोग प्रत्यक्ष विधि हो भने कर्मफलको परित्याग अर्को विधि हो। कर्मफलको त्यागपछि मानिस ज्ञानको अवस्थामा पुग्दछ अनि ध्यानको अवस्थामा पुग्दछ, त्यसपछि परमात्माबोधको अवस्थामा पुग्दछ र अन्त्यमा भगवान्‌को बोध गर्ने स्थितिमा पुग्दछ। मानिसले एक-एक पाइला गरेर क्रमिक रूपले अगाडि बढ्ने मार्ग पनि अपनाउन सक्दछ र प्रत्यक्ष मार्गलाई पनि अपनाउन सक्दछ। प्रत्यक्ष विधिको मार्ग सबैलाई सम्भव हुँदैन, त्यसैले अप्रत्यक्ष विधि पनि राम्रो हो। तर यहाँ के कुरा बुझ्नु आवश्यक छ भने, अर्जुनलाई अप्रत्यक्ष विधि भएको मार्गको बारेमा भनिएन किनभने, उनी पहिलेदेखि नै भगवान्‌प्रतिको प्रेमाभक्तिका अवस्थामा पुगिसकेका थिए। यो तिनीहरूका लागि हो जो यस अवस्थामा आइपुगेका छैनन्। तिनीहरूले त्याग, ज्ञान, ध्यान, परमात्मा तथा ब्रह्मको अनुभूतिजस्ता विधिहरूको अनुसरण गर्नै पर्दछ। तर जहाँसम्म *भगवद्गीताको* कुरा छ यसले प्रत्यक्ष विधिमा नै अधिक जोड दिएको छ। गीताले हरेक व्यक्तिलाई यही प्रत्यक्ष विधि ग्रहण गर्दै भगवान् श्रीकृष्णको शरणमा जाने सल्लाह दिन्छ।

**अद्वेष्टा सर्वभूतानां मैत्रः करुण एव च ।**
**निर्ममो निरहंकारः समदुःखसुखः क्षमी ॥ १३ ॥**
**संतुष्टः सततं योगी यतात्मा दृढनिश्चयः ।**
**मय्यर्पितमनोबुद्धिर्यो मद्भक्तः स मे प्रियः ॥ १४ ॥**

**अद्वेष्टा** — ईर्ष्यारहित; **सर्वभूतानाम्** — सम्पूर्ण जीवात्माप्रति; **मैत्रः** — मैत्रीभाव; **करुण** — दयाभाव; **एव** — निश्चय नै; **च** — पनि; **निर्ममः** — स्वामित्वभावनारहित; **निरहंकारः** — झूटो अभिमानरहित; **सम** — समता; **दुःख** — दुःखमा; **सुखः** — र सुखमा; **क्षमी** — क्षमाशील; **सन्तुष्टः** — तृप्त; **सततम्** — सधैँ; **योगी** — भक्तिमा संलग्न व्यक्ति; **यतात्मा** — आत्मसंयमित; **दृढनिश्चयः** — सङ्कल्पका साथ; **मयि** — ममा; **अर्पित** — समर्पित; **मनः** — मन; **बुद्धिः** — बुद्धि; **यः** — जो; **मत्भक्तः** — मेरो भक्त; **सः** — त्यो; **मे** — मलाई; **प्रियः** — प्यारो लाग्छ।

**जो कसैसँग द्वेष गर्दैन र सबै जीवात्माको दयालु मित्र छ, जो आफूलाई कुनै कुराको स्वामी मान्दैन र झूटो अहङ्कारबाट मुक्त छ, जो सुख र दुःखमा समान रहन्छ र सहनशील छ, जो सधैँ सन्तुष्ट रहन्छ, आत्मसंयमी छ र सङ्कल्पसहित भगवद्भक्तिमा संलग्न छ, जसको मन र बुद्धि ममा स्थिर छ त्यस्तो व्यक्ति मलाई अत्यन्त प्रिय लाग्छ।**

**तात्पर्य :** फेरि पनि पवित्र भक्तियोगको चर्चा गर्दै भगवान्ले यी दुई श्लोकहरूमा शुद्ध भक्तका विशेषताहरूको वर्णन गर्नुभएको छ। शुद्ध भक्त कुनै पनि परिस्थितिमा कहिल्यै पनि विचलित हुँदैन। उसले कसैप्रति ईर्ष्या पनि गर्दैन। भक्त आफ्ना शत्रुप्रति पनि शत्रुता गर्दैन। ऊ के सोच्न थाल्दछ भने—"यो मानिस मेरो पूर्वजन्मको दुष्कर्मका कारणले गर्दा मेरो शत्रु बन्न बनेको हो, त्यसैले योसँग विरोध गर्नुभन्दा चुपचापसित कष्ट सहनु नै उत्तम छ।" *श्रीमद्भागवत्* (१०-१४-८) मा भनिएको छ—

*तत्तेऽनुकम्पां सुसमीक्षमाणो भुञ्जान एवात्मकृतं विपाकम् ।*

जब भक्तमाथि कुनै विपत्ति आइ पर्दछ वा ऊ कुनै समस्यामा पर्दछ त्ये समय पनि उसले "यो त ममाथि भगवान्को कृपा हो" भन्ने सोच्दछ। उसले विचार गर्दछ "मैले पूर्वजन्ममा ठूलठुला दुष्कर्महरू गरेको थिएँ, त्यसको परिणामस्वरूप मैले धेरै-धेरै दुःखहरू भोग्नु पर्ने थियो तर भगवान्को कृपाले गर्दा मैले गरेका सबै दुष्कर्मको सम्पूर्ण दण्ड नभोगेर एउटा सानो कष्ट मात्र अहिले भोग्दैछु। अतः मेरा भगवान् मप्रति अति कृपालु हुनुहुन्छ।" यस्तो

सोचेर ऊ विभिन्न कष्टपूर्ण परिस्थितिमा पनि सधैँ शान्त, सौम्य र धैर्यपूर्ण बनिरहन्छ। भक्त सधैँ सबैप्रति दयालु हुन्छ, त्यो उसको शत्रु नै किन नहोस्। **निर्मम**को अर्थ हो भक्तले आफ्नो शारीरिक दुःख-कष्टलाई त्यति महत्त्व दिँदैन, किनभने उसले "म यो भौतिक शरीर होइन" भन्ने कुरा राम्रोसँग बुझेको हुन्छ। उसले शरीरलाई नै आफ्नो परिचय मान्दैन, त्यसैले ऊ सम्पूर्ण झूटो अहङ्कार बोधबाट मुक्त हुन्छ र सुख र दुःखमा समान रहन्छ। ऊ सहनशील हुन्छ र भगवान्‌का कृपाले जे प्राप्त हुन्छ त्यसैमा सन्तुष्ट रहन्छ। ऊ ठुलो कष्ट गरेर उपलब्ध हुने वस्तु पाउन प्रयत्न गर्दैन। त्यसैले ऊ सधैँ प्रसन्नचित्त रहन्छ। आफ्ना गुरुबाट प्राप्त निर्देशनमा दृढ रहने हुनाले ऊ पूर्णयोगी हो र उसका इन्द्रियहरू संयमित हुने हुनाले ऊ दृढनिश्चयी पनि हो। शुद्ध भक्त झूटो तर्कहरूद्वारा विचलित हुँदैन, किनभने उसलाई कसैले पनि भक्तिको दृढ सङ्कल्पबाट हटाउन सक्दैन। भगवान् श्रीकृष्ण नै शाश्वत परमेश्वर हुनुहुन्छ भन्ने कुरामा पूर्ण सचेत हुने हुनाले उसलाई कसैले पनि विचलित बनाउन सक्दैन। यी सम्पूर्ण गुणहरूका कारणले गर्दा ऊ आफ्ना मन र बुद्धिलाई पूर्णतया भगवान्‌मा स्थिर राख्न समर्थ हुन्छ। भगवद्भक्तिको यस्तो आदर्श निश्चय नै अति दुर्लभ छ तर भक्तियोगका विधिनियमहरूको परिपालनद्वारा भक्त त्यो स्तरमा अवस्थित हुन पुग्दछ। पूर्णतया कृष्णभावनामा रहेर गरिएका उसका सम्पूर्ण क्रियाकलापबाट भगवान् सधैँ प्रसन्न हुनुहुन्छ, त्यसैले भगवान् भन्नु हुन्छ—"त्यस्तो भक्त मलाई अत्यन्त मन पर्दछ।"

**यस्मान्नोद्विजते लोको लोकान्नोद्विजते च यः ।**
**हर्षामर्षभयोद्वेगैर्मुक्तो यः स च मे प्रियः ॥ १५ ॥**

**यस्मात्** — जसबाट; **न उद्विजते** — सन्तप्त हुँदैनन्; **लोकः** — मानिसहरू; **लोकान्** — मानिसहरूबाट; **नउद्विजते** — सन्तापित हुँदैन; **च** — पनि; **यः** — जो; **हर्ष** — सुखबाट; **अमर्ष** — दुःखबाट; **भयः** — डरबाट; **उद्वेगैः** — चिन्ताबाट; **मुक्तः** — मुक्त; **यः** — जो; **सः** — त्यो; **च** — पनि; **मे** — मेरो; **प्रियः** — प्यारो छ।

**जसबाट अरू कसैलाई कुनै कष्ट पुग्दैन र जो अरू कसैबाट पनि विचलित हुँदैन र जो सुख र दुःख, डर र त्रासमा पनि समान रहन्छ त्यो व्यक्ति मलाई अति प्रिय हुन्छ।**

**तात्पर्य :** यहाँ भक्तका केही अन्य गुणहरूको चर्चा गरिँदैछ। भगवान्‌का भक्तले कसैलाई पनि दुःख पुर्‍याउने, पीर पार्ने, त्रसित पार्ने, असन्तुष्ट पार्नेजस्ता कार्यहरू गर्दैन। भक्त सबैप्रति दयालु हुने हुनाले उसले अरूलाई

पीर वा चिन्ता पर्ने काम कहिल्यै गर्दैन। साथै, यदि कसैले भक्तलाई चिन्ता हुने काम गर्‍यो भने पनि त्यसबाट ऊ कहिल्यै विचलित हुँदैन। भगवान्‌का कृपाले गर्दा ऊ यस्ता कुरामा अभ्यस्त भइसकेको हुन्छ, त्यसैले ऊ कुनै पनि बाहिरी व्यवधानहरूद्वारा विचलित हुँदैन, आत्तिँदैन। सधैँभरि कृष्णभावनामा निमग्न भइरहने र प्रेमाभक्तिमा लागिरहने हुनाले भक्तहरू कुनै पनि सांसारिक परिस्थितिहरूबाट विचलित हुँदैनन्।

साधारणतया, भौतिकवादी मानिस आफ्नो शरीर तथा इन्द्रियहरूलाई तृप्ति दिने कुनै वस्तु प्राप्त गर्दा धेरै खुशी हुन्छ तर जब उसले आफूसँग नभएका भोग्य वस्तुहरू अरूसँग भएको देख्दछ त्यस समय ऊ फेरि दुःखी हुन्छ र ईर्ष्या गर्न थाल्दछ। आफ्ना शत्रुबाट प्रतिशोधको अपेक्षा हुँदा ऊ भयभीत स्थितिमा पुग्दछ अनि आफूले केही गर्न नसके निराश हुन्छ। सांसारिक व्यक्तिको अवस्था यस्तो हुन्छ तर एउटा भक्त यी सम्पूर्ण व्यवधानहरूबाट सधैँ पर रहने हुनाले ऊ भगवान् श्रीकृष्णको अति प्रिय हुन्छ।

**अनपेक्षः शुचिर्दक्ष उदासीनो गतव्यथः ।**
**सर्वारम्भपरित्यागी यो मद्भक्तः स मे प्रियः ॥ १६ ॥**

**अनपेक्षः** — तटस्थ (अपेक्षारहित); **शुचिः** — शुद्ध; **दक्षः** — कुशल; **उदासीनः** — चिन्तामुक्त; **गतव्यथः** — समस्त सन्तापहरूबाट मुक्त; **सर्व-आरम्भ** — सम्पूर्ण प्रयत्नहरू; **परित्यागी** — परित्याग गर्ने; **यः** — जो; **मत्भक्तः** — मेरो भक्त; **सः** — त्यो; **मे** — मलाई; **प्रियः** — अति प्यारो छ।

**सामान्य कार्यकारणप्रति आश्रित नहुने, शुद्ध, कुशल, चिन्तारहित, सबै दुःखबाट मुक्त र कुनै फल पाउनका लागि प्रयत्न नगर्ने मेरो भक्त मलाई अति प्रिय हुन्छ।**

**तात्पर्य :** भक्तलाई धन दिन सकिन्छ तर भक्तले धन कमाउनका लागि सङ्घर्ष गर्नु हुँदैन। यदि आफूसुकै वा भगवद्कृपाले कतै धन प्राप्त हुन आएमा पनि भक्त आन्दोलित हुँदैन। स्वाभाविक रूपमा भक्तले दिनमा दुई पटक स्नान गर्दछ तथा भगवद्सेवाका लागि बिहान सबेरै उठ्दछ। यसरी ऊ स्वतः भित्री तथा बाहिरी दुवै अवस्थामा स्वच्छ हुन्छ। भक्त सधैँ कार्यकुशल हुन्छ, किनभने उसले जीवनका सम्पूर्ण क्रियाकलापको सारतत्त्व पूर्णतया जानेको हुन्छ र प्रामाणिक शास्त्रहरूप्रति उसको दृढ विश्वास हुन्छ। भक्त कहिल्यै पनि कुनै दल वा पार्टीको पक्षमा लाग्दैन, त्यसैले ऊ सधैँ पक्षपातरहित हुन्छ। ऊ कहिल्यै पनि व्यथित हुँदैन, किनभने ऊ सबै उपाधिहरूबाट मुक्त हुन्छ, शरीर पनि एउटा उपाधि हो भन्ने कुरा उसले बुझेको हुन्छ, त्यसैले शारीरिक कष्टहरूबाट पनि

ऊ मुक्त हुन्छ। शुद्ध भक्तले भक्तियोगका नियमविरुद्ध कुनै पनि कार्य गर्दैन। उदाहरणका लागि ठुलो भवन बनाउन ठुलो शक्ति वा परिश्रमको आवश्यकता पर्दछ। त्यसैले यस्ता व्यवसायमा उसले हात हाल्दैन, अर्थात् भक्तिको विकासमा सहयोगी नहुने कुनै कार्य उसले गर्दैन। भक्तले भगवान्का लागि मन्दिर बनाउने कार्य गर्न सक्दछ। यसका लागि सबै प्रकारका कठिनाइहरू स्वीकार्न सक्दछ तर आफ्ना व्यक्तिगत सम्बन्धका लागि वा पारिवारका सदस्यका लागि भनेर ठुला घर बनाउने कार्यमा ऊ अग्रसर हुँदैन।

**यो न हृष्यति न द्वेष्टि न शोचति न काङ्क्षति ।**
**शुभाशुभपरित्यागी भक्तिमान्यः स मे प्रियः ॥ १७ ॥**

**यः** — जो; **न हृष्यति** — न हर्षित हुन्छ; **न द्वेष्टि** — न चिन्ता गर्दछ; **न शोचति** — न सुर्ता गर्दछ; **न काङ्क्षति** — न केही चाहना गर्दछ; **शुभ** — शुभ; **अशुभ** — र अशुभ; **परित्यागी** — परित्याग गर्ने; **भक्तिमान्** — भक्त; **यः** — जो; **सः** — त्यो छ; **मे** — मलाई; **प्रियः** — प्यारो।

**जो न कहिल्यै हर्षित हुन्छ, न शोक गर्दछ, न चिन्ता गर्दछ, न इच्छा गर्दछ तथा जसले शुभ र अशुभ दुवै प्रकारका वस्तुहरूको परित्याग गर्दछ त्यस्तो भक्त मलाई अति प्यारो लाग्छ।**

**तात्पर्य :** शुद्ध भक्त न कुनै भौतिक लाभ प्राप्त गर्दा हर्षित हुन्छ न कुनै हानि हुँदा चिन्तित नै हुन्छ। न ऊ छोरो वा शिष्यप्राप्तिका लागि त्यति उत्सुक हुन्छ न ती कुरा प्राप्त नहुँदा दुःखी हुन्छ। यदि आफूलाई अत्यन्त मन पर्ने वस्तु हरायो पनि ऊ त्यसका लागि चिन्ता गर्दैन। त्यसै गरी आफूले इच्छा गरेको वस्तु नपाउँदा पनि ऊ दुःखी हुँदैन। ऊ सबै प्रकारका शुभ कर्म, अशुभ कर्म तथा पापकर्महरूबाट सधैँ पर रहन्छ तर भगवान्लाई प्रसन्न बनाउनका लागि ऊ सबै प्रकारका विपत्तिहरू सहन तत्पर हुन्छ। भगवान्को सेवा गर्न उसलाई कुनै पनि बिघ्नबाधाले अवरोध गर्न सक्दैन। यस्तो भक्त भगवान् श्रीकृष्णलाई प्यारो लाग्छ।

**समः शत्रौ च मित्रे च तथा मानापमानयोः ।**
**शीतोष्ण सुखदुःखेषु समः संगविवर्जितः ॥ १८ ॥**
**तुल्यनिन्दास्तुतिर्मौनी सन्तुष्टो येन केनचित् ।**
**अनिकेतः स्थिरमतिर्भक्तिमान्मे प्रियो नरः ॥ १९ ॥**

**समः** — समान; **शत्रौ** — शत्रुमा; **च** — तथा; **मित्रे** — मित्रमा; **च** — पनि; **तथा** — यसरी; **मान** — सम्मान; **अपमानयोः** — अपमानमा; **शीत** — जाडामा; **उष्ण** — गर्मीमा; **सुख** — सुखमा र; **दुःखेषु** — दुःखमा; **समः** —

समानभाव; **सङ्गविवर्जितः** — सबै सङ्गतबाट मुक्त; **तुल्य** — बराबर; **निन्दा** — निन्दा हुँदा र; **स्तुतिः** — प्रशंसा हुँदा; **मौनी** — मौन; **सन्तुष्टः** — सन्तुष्ट; **येन केनचित्** — जुन कुनै वस्तुसँग; **अनिकेतः** — घर आवासबिना; **स्थिरः** — दृढ; **मतिः** — सङ्कल्प; **भक्तिमान्** — भक्तिमा लागेको; **मे** — मलाई; **प्रियः** — प्यारो; **नरः** — मानिस।

**जसले मित्र र शत्रुमा भिन्नता गर्दैन, जो मान र अपमानमा, जाडो र गर्मीमा, सुख र दुःखमा, निन्दा र प्रशंसामा समान भाव राख्दछ, खराब सङ्गतबाट जो सधैँ मुक्त रहन्छ, जो सधैँ मौन रहन्छ र जे पायो त्यसैमा सन्तुष्ट रहन्छ, जसलाई घरसँग कुनै प्रकारको सरोकार छैन, जो ज्ञानमा दृढ छ र जो भगवद्भक्तिमा लागेको छ त्यस्तो व्यक्ति मलाई अति प्यारो हुन्छ।**

**तात्पर्य :** भक्त सबै प्रकारका खराब सङ्गतबाट सधैँ मुक्त रहन्छ। कहिले कसैको निन्दा गर्नु र कहिले कसैको प्रशंसा गर्नु मानवसमाजको स्वभाव हो तर भक्त त्यस्ता अनित्य स्तुति वा निन्दा र सुख वा दुःखबाट सधैँ पर रहन्छ। ऊ अत्यन्त धीर हुन्छ। ऊ श्रीकृष्णबाहेकका अरू कुनै पनि विषयसँग सम्बन्धित वार्तालाप गर्दैन, त्यसैले उसलाई मौनी भनिन्छ। मौनको अर्थ बोल्दै नबोल्नु होइन, मौनको तात्पर्य अनावश्यक कुरा नबोल्नु हो। मानिसले सारभूत कुरा मात्र बोल्नु पर्दछ। त्यसमा पनि भक्तले भगवान्का लागि मात्र अत्यन्त सारभूत कुरा बोल्नु पर्दछ। भक्त सबै अवस्थामा प्रसन्न रहन्छ। कहिलेकाहीँ उसले अत्यन्त स्वादिष्ट भोजन पाउन सक्दछ र कहिले पाउँदै नपाउन सक्दछ तर दुवै अवस्थामा ऊ सन्तुष्ट रहन्छ। उसले कुनै प्रकारको आवासीय सुविधाको पनि वास्ता गर्दैन। ऊ कहिले रूखमुनि बसिदिन्छ कहिले अत्यन्त वैभवपूर्ण भवनमा पनि बस्न सक्दछ तर यी दुवैप्रति उसको कुनै अनुराग हुँदैन। उसलाई स्थिर भनिन्छ, किनभने ऊ आफ्नो सङ्कल्प र ज्ञानमा दृढ हुन्छ।

हुन सक्दछ, यहाँ भक्तका गुणवर्णनको पुनरावृत्ति हुन गयो होला तर यहाँ भक्तहरूले यी सबै गुणहरू आर्जित गर्नु पर्दछ भन्ने कुरालाई जोड दिनका निमित्त यी कुराहरू भनिएका हुन्। असल गुण नभई कोही पनि शुद्ध भक्त बन्न सक्दैन। **हरावभक्तस्य कुतोमहद् गुणाः** अर्थात्, अभक्त मानिसमा महान् गुणहरू कसरी आउन सक्दछन् र? जो व्यक्ति भक्तका रूपमा परिचित हुन चाहन्छ, उसमा यी सद्गुणहरूको विकास भएको हुनै पर्दछ। हुनत यस्ता भक्तहरूलाई यी गुणहरू आर्जन गर्न बाहिरबाट कुनै अरू प्रयास गर्नु पर्दैनः कृष्णभावनामृतमा रहनाले वा भगवद्भक्तिमा संलग्न रहनाले नै भक्तमा उपर्युक्त असल गुणहरूको स्वतः विकास हुन्छ।

**ये तु धर्मामृतमिदं यथोक्तं पर्युपासते ।**
**श्रद्दधाना मत्परमा भक्तास्तेऽतीव मे प्रियाः ॥ २० ॥**

**ये** — जो; **तु** — तर; **धर्म** — धर्मको; **अमृतम्** — अमृत; **इदम्** — यो; **यथा** — जसरी; **उक्तम्** — भनियो; **पर्युपासते** — पूर्णतया संलग्न रहन्छन्; **श्रद्दधानाः** — श्रद्धासाथ; **मत्परमाः** — म परमात्मालाई नै सर्वस्व मानेर; **भक्ताः** — भक्तहरू; **ते** — तिनीहरू; **अतीव** — अत्यन्त; **मे** — मलाई; **प्रियाः** — प्रिय छन्।

**मलाई नै परमलक्ष्य बनाएर श्रद्धापूर्वक भक्तिका अविनाशी मार्गमा आफूलाई पूर्णतया संलग्न राख्ने मानिसहरू मेरा लागि अत्यन्त प्रिय हुन्छन्।**

**तात्पर्य :** यस अध्यायमा दोस्रो श्लोकदेखि अन्तिम श्लोकसम्म अर्थात् **मय्यावेश्य मनो ये माम्** (ममा मन स्थिर गरेर) देखि **ये तु धर्म्यामृतमिदम्** (शाश्वत कर्मरूपी यो धर्मको) सम्म भगवान्‌ले आफूसम्म पुग्ने दिव्य विधिहरूको व्याख्या गर्नुभएको छ। यस्ता प्रक्रियाहरू भगवान्‌लाई प्रिय हुन्छन् र यी प्रक्रियामा संलग्न व्यक्तिलाई उहाँ स्वीकार्नु हुन्छ। निराकार ब्रह्मप्राप्तिको मार्गमा लाग्ने व्यक्ति श्रेष्ठ हो कि साकार भगवान्‌को भक्तिसेवामा संलग्न रहने व्यक्ति श्रेष्ठ हो भन्ने प्रश्न अर्जुनले उठाएका थिए र त्यसको उत्तर उनलाई भगवान्‌ले यति स्पष्टसँग दिनुभएको छ जसबाट आध्यात्मिक अनुभूति गर्ने सम्पूर्ण विधिहरूमध्ये सगुण साकार भगवान्‌को सेवा नै सर्वोत्तम हो भन्ने कुरा स्पष्ट हुन्छ। अर्को शब्दमा भन्दा, यस अध्यायमा सत्सङ्गद्वारा नै शुद्ध भक्तिप्रति मानिसको अनुराग बढ्दछ, अनि त्यसबाट उसले सुयोग्य प्रामाणिक गुरु स्वीकार गर्दछ, त्यसपछि श्रद्धाभक्ति र अनुरागका साथ भक्तिका विधिनियमहरूको पालना गर्दै गुरुबाट श्रवण कीर्तन आदि प्रक्रिया प्रारम्भ हुन्छ।

यसरी भगवान्‌का दिव्य सेवामा संलग्न भइन्छ। यस अध्यायमा यही मार्ग (भक्तिमार्ग) को अनुमोदन गरिएको छ। अतः भक्ति नै आत्मसाक्षात्कारको तथा भगवत्प्राप्तिको एकमात्र मार्ग हो भन्ने कुरामा कुनै शंका छैन। यस अध्यायमा निराकार ब्रह्मसम्बन्धी अवधारणाको पनि वर्णन गरियो तर यो निराकार ब्रह्मको धारणा तबसम्मका लागि हो जबसम्म मानिसले आत्मसाक्षात्कारका लागि स्वयम्‌लाई समर्पित गर्दैन। अर्को शब्दमा भन्नुपर्दा, जबसम्म मानिसलाई शुद्ध भक्तको सङ्गत गर्ने अवसर प्राप्त हुँदैन तबसम्म मात्र निराकार ब्रह्मसम्बन्धी धारणा लाभदायक हुन सक्दछ। परमसत्यको निराकार स्वरूपको अवधारणामा मानिस कर्मफलको अपेक्षा नराखी कर्म गर्दछ, ध्यान गर्दछ र आत्मा र

पदार्थलाई बुझ्नका लागि ज्ञानको विकास गर्दछ। शुद्ध भक्तको सङ्गत नपाउञ्जेल मानिसलाई यस्तो गर्नु आवश्यक छ। सौभाग्यले यदि कसैले कृष्णभावनामा संलग्न रहने वा शुद्ध भक्तिसेवामा लाग्ने प्रत्यक्ष विचारको विकास गऱ्यो भने त्यस्ता व्यक्तिलाई आत्मसाक्षात्कारका निमित्त यति धेरै सिँढीहरू पार गरिरहनुपर्ने आवश्यकता नै पर्दैन। *भगवद्गीताको* मध्यवर्ती छ अध्यायमा जुन भक्तियोगको वर्णन गरिएको छ त्यो अत्यन्त उपयुक्त छ। शरीर तथा आत्माको रक्षाका लागि कसैलाई पनि भौतिक वस्तुको चिन्ता गरिरहनु पर्दैन, किनभने भगवान्कै कृपाले सम्पूर्ण वस्तुहरू स्वतः सुलभ हुन्छन्।

यस प्रकार *श्रीमद्भगवद्गीता* ग्रन्थअन्तर्गत 'भक्तियोग' शीर्षक बाह्रौँ अध्यायको भक्तिवेदान्त तात्पर्य समाप्त भयो।

## अध्याय-तेह्र

# प्रकृति, पुरुष र चेतना

अर्जुन उवाच

**प्रकृतिं पुरुषं चैव क्षेत्रं क्षेत्रज्ञमेव च ।**
**एतद्वेदितुमिच्छामि ज्ञानं ज्ञेयं च केशव ॥१॥**

श्रीभगवानुवाच

**इदं शरीरं कौन्तेय क्षेत्रमित्यभिधीयते ।**
**एतद्यो वेत्ति तं प्राहुः क्षेत्रज्ञ इति तद्विदः ॥ २ ॥**

**अर्जुन उवाच** — अर्जुनले भने; **प्रकृतिम्** — प्रकृति; **पुरुषम्** — भोक्ता; **च** — पनि; **एव** — निश्चय नै; **क्षेत्रम्** — क्षेत्र (खेत); **क्षेत्रज्ञम्** — क्षेत्रको ज्ञाता; **एव** — निश्चय नै; **च** — पनि; **एतत्** — यो सबै; **वेदितुम्** — जान्नका लागि; **इच्छामि** — इच्छुक छु; **ज्ञानम्** — ज्ञान; **ज्ञेयम्** — ज्ञानको लक्ष्य (जानिने वस्तु); **च** — पनि; **केशव** — हे केशव (कृष्ण); **श्रीभगवानुवाच** — भगवान्ले भन्नुभयो; **इदम्** — यो; **शरीरम्** — शरीर; **कौन्तेय** — हे कुन्तीपुत्र; **क्षेत्रम्** — खेत; **इति** — यसरी; **अभिधीयते** — भनिन्छ; **एतत्** — यो; **यः** — जो; **वेत्ति** — जान्दछ; **तम्** — त्यसलाई; **प्राहुः** — भनिन्छ; **क्षेत्रज्ञ** — खेतलाई जान्ने; **इति** — यसरी; **तत् विदः** — यज्ञका ज्ञाताद्वारा।

**अर्जुनले भने, "हे कृष्ण! म प्रकृति र पुरुष, क्षेत्र र क्षेत्रज्ञ तथा ज्ञान र ज्ञेयका बारेमा जान्न चाहन्छु।" भगवान्ले भन्नुभयो, "हे कुन्तीपुत्र! यो शरीरलाई क्षेत्र भनिन्छ र यो क्षेत्र जान्नेलाई क्षेत्रज्ञ भनिन्छ।"**

**तात्पर्य :** अर्जुनले प्रकृति, पुरुष, क्षेत्र, क्षेत्रज्ञ, ज्ञान र ज्ञेयका विषयमा जान्न चाहन्थे। त्यसैले उनले यी सबै विषयका बारेमा प्रश्न गरे। उनको प्रश्नको उत्तर दिँदै भगवान्ले भन्नुभयो — यो शरीरलाई नै क्षेत्र भनिन्छ र जसले यो शरीरका बारेमा जान्दछ, त्यसलाई क्षेत्रज्ञ भनिन्छ। यो शरीर बद्ध जीवका लागि कर्मक्षेत्र हो। बद्ध जीव सांसारिक प्रपञ्चमा बाँधिएको छ तापनि ऊ भौतिक प्रकृतिमाथि आफ्नो स्वामित्व जमाउने प्रयत्न गरिरहन्छ। यसरी प्रकृतिमाथि स्वामित्व कायम गर्ने क्षमताअनुसारको कर्मक्षेत्र उसले प्राप्त गर्दछ। त्यो कर्मक्षेत्र भन्नु नै शरीर हो। यो शरीर के हो त ? वास्तवमा यो शरीर इन्द्रियहरूद्वारा बनेको छ।

बद्ध जीवले इन्द्रियतृप्तिको चाहना राख्दछ र इन्द्रियहरूलाई सन्तुष्ट पार्नका निमित्त उसले भोग गर्नसक्ने क्षमताअनुसार नै उसले कर्मक्षेत्र वा शरीर प्राप्त गर्दछ। त्यसैले यो शरीर बद्ध जीवका लागि शरीरक्षेत्र वा कर्मक्षेत्र हो। जसले स्वयम् आफूलाई शरीर मान्दछ वा जो शरीरका माध्यमले चिनिन्छ त्यसलाई क्षेत्रज्ञ भनिन्छ। क्षेत्र र क्षेत्रज्ञ अर्थात् शरीर र शरीरको ज्ञाताबीचको अन्तर बुझ्नु त्यति कठिन छैन। बाल्यावस्थादेखि बृद्धावस्थासम्म पुग्दा शरीरमा विभिन्न परिवर्तनहरू हुन्छन् तैपनि व्यक्ति उही नै रहन्छ। यस किसिमको विचार जोसुकैले पनि गर्न सक्दछ। यसरी हेर्दा कर्मक्षेत्र र वास्तविक कर्मक्षेत्रको ज्ञाताका बीचमा भिन्नता देखिन्छ। बद्ध जीवलाई पनि म शरीरभन्दा भिन्न तत्त्व हूँ भन्ने ज्ञान हुन्छ। गीताको प्रारम्भम। भनिएको छ— **देहिनोऽस्मिन्** अर्थात् जीवात्मा शरीरभित्र छ र शरीर बालकबाट कुमार हुँदा, कुमारबाट तरुण हुँदा र तरुणबाट वृद्ध हुँदा परिवर्तन भइरहन्छ। शरीरधारीले पनि शरीर परिवर्तित भइरहेछ भन्ने कुरा बुझेको हुन्छ। अतः शरीरको स्वामी नै यथार्थमा क्षेत्रज्ञ हो। कहिलेकाहीँ हामी सोच्ने गर्दछौँ— म सुखी छु, म पुरुष हूँ, म महिला हूँ, म कुकुर हूँ, म बिरालो हूँ इत्यादि। यी सबै ज्ञाताका शारीरिक उपाधि मात्र हुन् तर स्वयम् ज्ञाता शरीरभन्दा भिन्न हुन्छ। हामीले विभिन्न प्रकारका वस्तुहरू प्रयोगमा ल्याउँदछौँ, जस्तै— लुगा कपडा इत्यादि। तैपनि हामी यी वस्तुहरूभन्दा भिन्न हौँ भन्ने कुरा हामीले बुझेका हुन्छौँ। यसै गरी, अलिकति गहिरिएर विचार गर्नासाथ हामीलाई हामी हाम्रो शरीरभन्दा भिन्न तत्त्व हौँ भन्ने जानकारी भइहाल्दछ। म वा तपाईं वा अरू कोही, जसले शरीर धारण गरेको छ, त्यसलाई क्षेत्रज्ञ भनिन्छ, अर्थात् ऊ शरीररूपी कर्मक्षेत्रको ज्ञाता हो र यो शरीर साक्षात् कर्मक्षेत्र हो।

*भगवद्गीताका* प्रारम्भिक छःवटा अध्यायहरूमा शरीरको ज्ञाता-जीवका बारेमा र जुन अवस्थामा रहेर जीवले भगवान्लाई जान्न सक्दछ, त्यस विषयको वर्णन गरिएको छ। मध्यवर्ती छःवटा अध्यायहरूमा भगवान्का विषयमा र भगवान्सँग जीवात्माको सम्बन्धका विषयमा अनि भगवद्भक्तिका विषयमा वर्णन गरिएको छ। यी अध्यायहरूमा भगवान् सर्वश्रेष्ठ हुनुहुन्छ र जीव भगवान्का अधीनमा छ भन्ने कुरालाई निश्चित रूपले परिभाषित गरिएको छ। जीवात्मा सधैँ भगवान्का अधीनमा छ र भगवान्सँगको सम्बन्ध बिर्सनाले उसले दुःख पाइरहेको छ। यी जीव जब पुण्यकर्ममा लाग्दछन्, त्यस समय यिनीहरूलाई प्रकाश प्राप्त हुन्छ र त्यसैका सहाराले यिनीहरू कोही आर्त बनेर, कोही जिज्ञासु बनेर, कोही अर्थार्थी बनेर र कोही ज्ञानी बनेर भगवान्समक्ष पुग्दछन्। यस कुराको वर्णन पनि यहाँ भएको छ। अब यो १३

अध्यायदेखि जीवात्मा कसरी प्रकृतिका सम्पर्कमा आउँदछ र कसरी कर्म, ज्ञान तथा भक्तिका विभिन्न साधनहरूका सहायताले भगवान्‌ले उसको उद्धार गर्नु हुन्छ भन्ने कुराको व्याख्या गरिएको छ। जीवात्मा भौतिक शरीरभन्दा पूर्णतया भिन्न छ तर पनि शरीरसँग उसको सम्बन्ध कसरी जोडिएको छ भन्ने विषयको चर्चा पनि यी अध्यायहरूमा भएको छ।

**क्षेत्रज्ञं चापि मां विद्धि सर्वक्षेत्रेषु भारत ।**
**क्षेत्रक्षेत्रज्ञयोर्ज्ञानं यत्तज्ज्ञानं मतं मम ॥ ३ ॥**

**क्षेत्रज्ञम्** — क्षेत्रको ज्ञाता; **च** — पनि; **अपि** — निश्चय नै; **माम्** — मलाई; **विद्धि** — जान; **सर्व** — सबै; **क्षेत्रेषु** — शरीररूपी क्षेत्रमा; **भारत** — हे भरतका वंशज; **क्षेत्र** — कर्मक्षेत्र (शरीर); **क्षेत्रज्ञयोः** — र क्षेत्रका ज्ञाताको; **ज्ञानम्** — ज्ञान; **यत्** — जो; **तत्** — त्यो; **ज्ञानम्** — ज्ञान; **मतम्** — मत वा विचार; **मम** — मेरो।

**हे भरतवंशी अर्जुन! म सम्पूर्ण शरीरहरूको ज्ञाता हूँ, यो बुझ। मेरा विचारमा यो शरीर र यसको ज्ञातालाई जान्नु वा चिन्नु नै ज्ञान भन्ने मेरो विचार छ।**

**तात्पर्य :** शरीर, शरीरको ज्ञाता, आत्मा अनि परमात्माको व्याख्या गर्ने क्रममा भगवान्, जीवात्मा र पदार्थ यी तीन कुराहरू पाउँदछौं। प्रत्येक कर्मक्षेत्रमा अर्थात् प्रत्येक शरीरमा दुईवटा आत्मा हुन्छन्— जीवात्मा र परमात्मा। शरीरमा रहने परमात्मा श्रीकृष्णकै स्वांश विस्तार हो, त्यसैले भगवान् श्रीकृष्ण भन्नु हुन्छ—"म ज्ञाता पनि हूँ तर शरीरको व्यष्टि ज्ञाता होइन। म त परमज्ञाता हूँ। म हरेक शरीरमा परमात्माका रूपमा विद्यमान रहन्छु"। जसले *भगवद्गीताका* माध्यमबाट यो क्षेत्र तथा क्षेत्रज्ञका विषयमा सूक्ष्म तरीकाले अध्ययन गर्दछ त्यसलाई यो ज्ञान प्राप्त हुन सक्दछ।

भगवान् भन्नु हुन्छ—"म प्रत्येक शरीररूपी कर्मक्षेत्रको ज्ञाता हूँ।" व्यक्ति आफ्नो शरीरको ज्ञाता त हुन सक्दछ तर अन्य सबै शरीरको ज्ञाता हुन सक्दैन। सम्पूर्ण शरीरहरूमा परमात्माका रूपमा विराजमान हुनुहुने भगवान्‌ले सम्पूर्ण शरीरका बारेमा जान्नु हुन्छ। भगवान् विभिन्न योनिका जीवहरूका सबै शरीरका ज्ञाता हुनुहुन्छ। एउटा नागरिकलाई आफ्नो सानो घर-जग्गाका बारेमा मात्र जानकारी हुन्छ तर राजालाई आफ्नो महल र भूखण्डको मात्र नभएर सबै नागरिकहरूका भूसम्पत्तिको जानकारी हुन्छ। यसरी हेर्दा हरेक प्राणी आ-आफ्ना शरीरका स्वामी देखिन्छन् तर परमेश्वर सम्पूर्ण शरीरहरूका अधिपति हुनुहुन्छ। राजा आफ्नो राज्यको सर्वश्रेष्ठ तथा मूल अधिपति हुन्छ

भने त्यस राज्यका नागरिक त्यसका गौण तथा आंशिक अधिपति हुन्छन्। यसै गरी परमेश्वर सम्पूर्ण प्राणीका शरीरका परमअधिपति हुनुहुन्छ।

यो शरीर इन्द्रियहरूद्वारा निर्मित छ तथा परमेश्वर इन्द्रियहरूका नियन्त्रक, अर्थात् हृषीकेश हुनुहुन्छ। जसरी राज्यसत्ताको मूल नियन्त्रक राजा हुन्छ र अन्य नागरिकहरू त्यसका गौण नियन्त्रक हुन्छन् त्यसै गरी भगवान् सम्पूर्ण इन्द्रियहरूका मूल नियन्त्रक हुनुहुन्छ। भगवान् भन्नु हुन्छ— "म ज्ञाता पनि हूँ" यसको तात्पर्य हो उहाँ परमज्ञाता हुनुहुन्छ, जीवात्माले त केवल आफ्नो विशेष शरीरका विषयमा मात्र जान्दछ। वैदिक ग्रन्थहरूमा यस प्रकारको वर्णन पाइन्छ।

*क्षेत्राणि हि शरीराणि बीजं चापि शुभाशुभे ।*
*तानि वेत्ति स योगात्मा ततः क्षेत्रज्ञ उच्यते ॥*

यो शरीरलाई क्षेत्र भनिन्छ र यसभित्र यस शरीरको स्वामी आत्मा र साथमा परमात्माको पनि निवास रहेको हुन्छ। परमात्मा शरीर र शरीरको स्वामी आत्मा दुवैका ज्ञाता हुनुहुन्छ। त्यसैले, परमेश्वरलाई सम्पूर्ण क्षेत्रका ज्ञाता भनिन्छ। कर्मक्षेत्र के हो, कर्मको ज्ञाता को हो र सम्पूर्ण कर्मका परमज्ञाता को हो अनि यिनका बीचमा के अन्तर छ? यी कुराहरूको वर्णन अब गरिन्छ। वैदिक ग्रन्थहरूमा शरीर, आत्मा र परमात्माका विधिविधानको जानकारीलाई नै ज्ञान भनिएको छ। भगवान् श्रीकृष्णको मान्यता पनि यही हो। आत्मा र परमात्मालाई एउटै मान्दा-मान्दै पनि यी दुईलाई छुट्टा-छुट्टै हुन् भन्ने जान्नु नै ज्ञान हो। कर्मक्षेत्र तथा कर्मका ज्ञाताका सम्बन्धमा राम्रोसँग नबुझेको व्यक्तिले पूर्णज्ञान प्राप्त गर्न सक्दैन। मानिसमा प्रकृति, पुरुष (प्रकृतिको भोक्ता) तथा ईश्वर (प्रकृति र विशिष्ट आत्माको ज्ञाता तथा नियन्त्रक) को स्थितिसम्बन्धी जानकारी हुनु आवश्यक छ। उसलाई यी तीन तत्त्वका विभिन्न रूपहरूका विषयमा कुनै पनि प्रकारको भ्रम हुनु हुँदैन। चित्रकार, चित्र र चित्र बनाउने कुचीका (ब्रस) विषयलाई लिएर मानिसमा भ्रम हुनु हुँदैन। कर्मक्षेत्रका रूपमा विद्यमान यो भौतिक जगत्-प्रकृतिलाई भनिन्छ र यो प्रकृतिको भोक्ता जीवात्मा हो। अनि यी दुवैभन्दा माथि परमनियन्त्रक भगवान् हुनुहुन्छ। वैदिक भाषा (श्वेताश्वर उपनिषद् १-१२) मा यसलाई यसरी व्यक्त गरिएको छ— **भोक्ता भोग्यं प्रेरितारं च मत्वा, सर्वं प्रोक्तं त्रिविधं ब्रह्ममेतत्।** अर्थात्, ब्रह्मका तीन स्वरूप छन्। कर्मक्षेत्रका रूपमा रहेको यो प्रकृति पनि ब्रह्म हो, भौतिक प्रकृतिलाई आफ्नो अधीनमा राख्न चाहने जीवात्मा पनि ब्रह्म हो र यी दुवैलाई नियन्त्रण गर्ने तत्त्व पनि ब्रह्म हुनुहुन्छ। अझ भन्ने हो भने त्यही ब्रह्म नै वास्तविक नियन्त्रक हुनुहुन्छ।

यस अध्यायमा दुईवटा ज्ञाताका बारेमा व्याख्या गरिएको छ—तीमध्ये पहिलो च्युत र अर्को अच्युत हो। अच्युत श्रेष्ठ र स्वतन्त्र हुनुहुन्छ र च्युत अधीनस्थ छ। क्षेत्र वा शरीरका यी दुवै ज्ञाताहरूलाई एउटै मान्नु वा समान ठान्नु भगवान्‌का भनाइको खण्डन गर्नु हो। भगवान्‌ले यहाँ स्पष्टसँग भन्नुभएको छ—"म कर्मका क्षेत्रको ज्ञाता पनि हूँ।" डोरीलाई भ्रमवश सर्प ठान्ने मानिसलाई ज्ञाता भनिँदैन। शरीरहरू विभिन्न प्रकारका छन् र शरीरका स्वामी पनि विविध छन्। भौतिक प्रकृतिमाथि आधिपत्य जमाउने सामर्थ्य पनि प्रत्येक जीवात्मामा भिन्दाभिन्दै हुन्छ, किनभने ती प्रत्येकको शरीर अलग अलग छ, तर ती सबैमा परमनियन्त्रक बनेर भगवान् बस्नुभएको छ। यहाँ प्रयोग भएको **च** शब्द महत्त्वपूर्ण छ किनभने यसले सम्पूर्ण शरीरसङ्ख्याको सङ्केत गर्दछ। यो श्रील बलदेव विद्याभूषणको विचार हो। प्रत्येक शरीरमा एक एक आत्माबाहेक परमात्माका रूपमा भगवान् श्रीकृष्ण उपस्थित हुनु हुन्छ। यहाँ स्पष्ट रूपमा भगवान् श्रीकृष्ण भन्नु हुन्छ—परमात्मा कर्मक्षेत्र र विशिष्ट भोक्ता दुवैका नियन्त्रक बनेर बस्नु हुन्छ।

**तत्क्षेत्रं यच्च यादृक्च यद्विकारि यतश्च यत् ।**
**स च यो यत्प्रभावश्च तत्समासेन मे श्रृणु ॥ ४ ॥**

**तत्**— त्यो; **क्षेत्रम्**— कर्मक्षेत्र; **यत्**— जो; **च**— पनि; **यादृक्**— जस्तो छ; **च**— पनि; **यत्**— जुन; **विकारी**— परिवर्तनशील; **यतः**— जसबाट; **च**— पनि; **यत्**— जो; **सः**— त्यो; **च**— पनि; **यः**— जो; **यत्**— जुन; **प्रभावः**— प्रभाव; **च**— पनि; **तत्**— त्यो; **समासेन**— सारांशमा; **मे**— मबाट; **श्रृणु**— सुन वा बुझ।

**यो कर्मक्षेत्र भनेको के हो, यो कसरी बनेको हुन्छ, यसमा के परिवर्तन हुन्छ, यो कहाँबाट उत्पन्न भएको हो, यो कर्मक्षेत्रको ज्ञाता को हो र यसको प्रभाव के छ? इत्यादिका विषयमा अब मबाट सङ्क्षेपमा सुन।**

**तात्पर्य :** भगवान् कर्मक्षेत्र र कर्मक्षेत्रका ज्ञाताको वास्तविक स्थितिको वर्णन गर्दै हुनुहुन्छ। यो शरीर कसरी बनेको छ, कुन कुन पदार्थबाट बनेको छ, कसका अधीनमा रहेर शरीरले काम गरिरहेको छ, कसरी यसमा परिवर्तन भइरहेछ, यी परिवर्तनहरू कहाँबाट आइरहेका छन्, यसका कारण के के हुन्, व्यष्टि आत्माको परमलक्ष्य के हो र आत्माको वास्तविक स्वरूप के हो? यी सबै कुरा मानिसले जान्नु पर्दछ। आत्मा र परमात्माबीच के अन्तर छ, तिनका प्रभावमा के भिन्नता छ र तिनका शक्तिहरू के के हुन्? आदि कुराको पनि ज्ञान मानिसलाई हुनु पर्दछ। भगवान्‌द्वारा दिइएको वर्णनका

आधारमा *भगवद्गीताका* बारेमा बुझ्ने व्यक्तिलाई यी सबै कुरा स्पष्ट हुन्छन्। तर, प्रत्येक शरीरमा विराजमान हुनुभएका भगवान्लाई नै जीवात्मा वा आत्मा मान्ने भूल मानिसले गर्नु हुँदैन। यो शक्तिमान् पुरुष र शक्तिहीन पुरुषलाई एक समान मान्नुजस्तो हो।

**ऋषिभिर्बहुधा गीतं छन्दोभिर्विविधैः पृथक् ।**
**ब्रह्मसूत्रपदैश्चैव हेतुमद्भिर्विनिश्चितैः ॥ ५ ॥**

**ऋषिभिः** — बुद्धिमान् ऋषिहरूद्वारा; **बहुधा** — विभिन्न प्रकारले; **गीतम्** — वर्णन गरिएको; **छन्दोभिः** — वेदका मन्त्रहरूद्वारा; **विविधैः** — विभिन्न प्रकारका; **पृथक्** — भिन्नभिन्न; **ब्रह्मसूत्र** — वेदान्तको; **पदैः** — नीतिवचनद्वारा; **च** — पनि; **एव** — निश्चय नै; **हेतुमद्भिः** — कार्यकारणसहित; **विनिश्चितैः** — निश्चय गरिएको।

**विभिन्न ऋषिहरूले विभिन्न वैदिक ग्रन्थहरूमा कर्मक्षेत्रको ज्ञान र कर्मका ज्ञाताको ज्ञानका विषयमा चर्चा गरेका छन्। विशेष गरी वेदान्त सूत्रमा कार्य र कारणको सम्पूर्ण कारण प्रस्तुत गरिएको छ।**

**तात्पर्य :** ज्ञानको यो व्याख्यामा सर्वोच्च प्रमाण भगवान् श्रीकृष्ण हुनुहुन्छ। तैपनि यस विषयमा पढेका विद्वान् तथा प्रामाणिक आचार्यहरूले सधैँ पूर्व-आचार्यहरूको साक्ष्य (प्रमाण) दिने गर्नुहुन्छ। भगवान् श्रीकृष्णले प्रामाणिक शास्त्रका रूपमा वेदान्तको उल्लेख गर्दै आत्मा र परमात्माको द्वैतता र अद्वैततासम्बन्धी अत्यन्त विवादास्पद विषयको व्याख्या गरिरहनुभएको छ। सर्वप्रथम उहाँ भन्नु हुन्छ, "यो विभिन्न ऋषिहरूका विचारअनुसार वर्णित छ।" जहाँसम्म ऋषिहरूको कुरा छ, स्वयम् भगवान्बाहेक वेदान्त सूत्रका रचयिता व्यासदेव पनि एउटा महान् ऋषि र उनको वेदान्त सूत्रमा द्वैतवादको राम्रोसँग व्याख्या गरिएको छ। व्यासदेवका पिता पराशर पनि ठुला ऋषि थिए र उनले आफ्नो धर्मसम्बन्धी पुस्तकमा लेखेका छन्— **अहं त्वं च तथान्ये** अर्थात्, भौतिक शरीरमा रहेका भए पनि हामी, तपाईं, म र अन्य जीवात्माहरू सबै दिव्य छौँ। अहिले हामी आ-आफ्ना विभिन्न पूर्वकर्मअनुसार भौतिक प्रकृतिका तीन गुणहरूको वशीभूत भएर संसारमा फ्याँकिएका छौँ। तिनमा कोही उच्चस्तरको प्रकृतिमा अवस्थित छन् कोही निम्नस्तरमा छन्। यो उच्चस्तरीय र निम्नस्तरीय प्रकृति भन्ने कुरा अज्ञानबाट उत्पन्न भएको हो र अनगिन्ती जीवात्माहरूमा यी प्रकृतिहरू प्रकट भइरहेका हुन्छन्। तर परमात्मा अच्युत हुनुहुन्छ, त्यसैले उहाँ प्रकृतिका तीन गुणहरूद्वारा दूषित हुनु हुन्न, उहाँ सधैँ दिव्य हुनुहुन्छ। यसै गरी मूल वेदहरूमा र विशेष गरी कठोपनिषद्मा

आत्मा, परमात्मा र शरीरका बीचको अन्तर देखाइएको छ। यसबाहेक अरू पनि धेरै महर्षिहरू छन्, जसले यसबारे व्याख्या गरेका छन् र तीमध्ये प्रमुख पराशर ऋषि हुन्।

यस श्लोकमा प्रयोग भएको **छन्दोभिः** शब्दले विभिन्न वैदिक साहित्यलाई सङ्केत गर्दछ। उदाहरणका लागि यजुर्वेदको शाखा मानिने तैत्तिरीय उपनिषद्ले प्रकृति, जीवात्मा र भगवान्सम्बन्धी विषयको वर्णन गरेको छ।

अगाडि नै वर्णन गरिएअनुसार क्षेत्र शब्दले कर्मक्षेत्र भन्ने बुझाउँदछ र त्यस क्षेत्रका क्षेत्रज्ञ दुई प्रकारका छन्— जीवात्मा र परमात्मा। तैत्तिरीय उपनिषद् (२.९) मा भनिएको छ **ब्रह्मपुच्छं प्रतिष्ठा**। परमेश्वरकी शक्तिको अभिव्यक्ति **अन्नमय** स्तरका रूपमा हुन्छ र यसको अस्तित्व भोजनमाथि निर्भर हुन्छ। यो ब्रह्मको भौतिकवादी अनुभूति हो। यसपछि **प्राणमय** अवस्था आउँदछ। अर्थात्, अन्न वा भोजनमा परमसत्यको अनुभूति गरिसकेपछि मानिसले प्राणका लक्षणहरू वा जीवित स्वरूपहरूमा परमसत्यको अनुभूति गर्दछ। **ज्ञानमय** शक्तिको स्तरमा पुग्दा मानिसको अनुभूति विस्तारित भएर ऊ जीवित लक्षणहरूभन्दा परको विचार, अनुभव र इच्छाको स्तरमा पुग्दछ। त्यसपछि **विज्ञानमय** ब्रह्मको साक्षात्कार हुन्छ, जहाँ जीवको मन र प्राणका लक्षणहरू नै स्वयम् जीवात्माभन्दा भिन्न देखिन थाल्दछन्। यसपछिको अन्तिम अवस्था **आनन्दमय** अवस्था हो। यसमा पूर्णतया आनन्दमय स्वभावको अनुभूति हुन्छ। यस प्रकार ब्रह्मानुभूतिका पाँच अवस्था छन् जसलाई **ब्रह्मपुच्छम्** भनिन्छ। यी पाँचमध्ये प्रथम तीन स्तर अन्नमय, प्राणमय र ज्ञानमय स्तर जीवात्माका कर्मक्षेत्रसँग सम्बन्धित छन्। परमेश्वर कर्मका यी सम्पूर्ण क्षेत्रहरूभन्दा पर हुनुहुन्छ, जसलाई आनन्दमय भनिन्छ। वेदान्त सूत्रले पनि परमेश्वरलाई **आनन्दमयोऽभ्यासात्** भनेर परिचित गराएको छ। अर्थात्, भगवान् स्वभावले परमआनन्दमय हुनुहुन्छ। उहाँ आफ्नो दिव्य आनन्दको भोग गर्ने चाहनाले आफूलाई विज्ञानमय, प्राणमय, ज्ञानमय तथा अन्नमय स्तरहरूमा विस्तार गर्नु हुन्छ। कर्मका क्षेत्रमा भिन्दै जीवात्मालाई भोक्ता मानिन्छ तर "आनन्दमय" अवस्था योभन्दा भिन्दै हुन्छ। यसको अर्थ के हो भने, जीवले आनन्दमय स्थितिमा रहेर आनन्दको भोग गर्ने सङ्कल्प गरेमा ऊ पूर्ण बन्दछ। क्षेत्रका परमज्ञाताका रूपमा रहनुभएका परमेश्वरको, अधिनस्थ ज्ञाताका रूपमा रहेका जीवात्माको र कर्मक्षेत्रका रूपमा रहेकी प्रकृतिको वास्तविक चित्र यही नै हो। वेदान्तसूत्र वा ब्रह्मसूत्रमा मानिसले यस तथ्यको अनुसन्धान गर्नु पर्दछ।

यहाँ कार्य र कारणअनुसार ब्रह्मसूत्रका उक्तिहरू साह्रै राम्रोसँग मिलाएर राखिएको कुराको उल्लेख छ। त्यसका केही सूत्र यस प्रकारका छन्— **न**

**वियदश्रुतेः** (२.३.२.) **नात्मा श्रुतेः** (२.३-१८) र **परात्तु तच्छ्रुतेः** (२.३.४०) इत्यादि। पहिलो सूत्रले कर्मक्षेत्रलाई सूचित गरेको छ। दोस्रोले जीवात्मालाई र तेस्रोले परमेश्वरलाई सङ्केत गरेको छ। परमेश्वर नै विभिन्न जीवात्माका सबै अभिव्यक्तिका मूल आश्रय हुनुहुन्छ।

**महाभूतान्यहंकारो बुद्धिरव्यक्तमेव च ।**
**इन्द्रियाणि दशैकं च पञ्च चेन्द्रियगोचराः ॥ ६ ॥**
**इच्छा द्वेषः सुखं दुःखं संघातश्चेतना धृतिः ।**
**एतत् क्षेत्रं समासेन सविकारमुदाहृतम् ॥ ७ ॥**

**महाभूतानि** — महान् तत्त्वहरू; **अहंकारः** — झूटो अभिमान; **बुद्धिः** — बुद्धि; **अव्यक्तम्** — प्रकट नभएको; **एव** — निश्चय नै; **च** — पनि; **इन्द्रियाणि** — इन्द्रियहरू; **दशएकम्** — एघार; **च** — पनि; **पञ्च** — पाँच; **च** — पनि; **इन्द्रिय-गो-चराः** — इन्द्रियका विषय; **इच्छा** — इच्छा; **द्वेषः** — घृणा; **सुखम्** — सुख; **दुःखम्** — दुःख; **संघातः** — समष्टि; **चेतना** — जीवनलक्षण; **धृतिः** — धैर्य; **एतत्** — यो सबै; **क्षेत्रम्** — कर्मक्षेत्र; **समासेन** — संक्षेपमा; **सविकारम्** — पारस्परिक क्रियासहित; **उदाहृतम्** — उदाहरण दिइयो।

**पञ्च महाभूत, अहङ्कार, बुद्धि, अव्यक्त प्रकृति, दश इन्द्रिय, मन, पाँचवटा इन्द्रियका विषयहरू, इच्छा, द्वेष, सुख, दुःख, समष्टि (संघात), प्राणशक्ति (जीवनको लक्षण) र धैर्यः यी सबैलाई सारांशमा कर्मक्षेत्र तथा यसका अन्तक्रियाहरू मानिन्छन्।**

**तात्पर्य :** सम्पूर्ण महर्षिहरू, वैदिक ऋचाहरू र वेदान्तसूत्रका आधिकारिक भनाईहरूबाट यस जगत्का अवयवहरूलाई निम्नलिखित किसिमले बुझ्न सकिन्छ— सर्वप्रथम पृथ्वी, जल, अग्नि, वायु र आकाश यी पाँच महाभूतहरू छन्। त्यसपछि अहङ्कार, बुद्धि, प्रकृतिका तीन गुणहरूको अव्यक्त अवस्थाहरू छन् अनि पाँच ज्ञानेन्द्रियहरू— आँखा, कान, नाक, जिब्रो र छाला छन्। त्यसपछि पाँच कर्मेन्द्रियहरू— वाणी, हात, गोडा, जननेन्द्रिय र गुदा छन्। यी सबैभन्दा माथि मन विद्यमान छ। भित्र रहने हुनाले मनलाई अन्तःइन्द्रिय पनि भन्न सकिन्छ। यसरी मनलसहित सबै इन्द्रियहरूको सङ्ख्या एघार छ। त्यसपछि इन्द्रियहरूका पाँच विषयहरू (पञ्च तन्मात्रा) गन्ध, रस, रूप, स्पर्श र शब्द हुन्। यसरी यी चौबीस तत्त्वको समष्टिलाई कर्मक्षेत्र भनिन्छ। यी चौबीस तत्त्वहरूको विश्लेषणात्मक अध्ययन गरेमा कर्मक्षेत्रलाई राम्रोसँग बुझ्न सकिन्छ। यसबाहेक मानिसमा इच्छा, द्वेष, सुख र दुःखको अन्तर्क्रिया पनि

भइरहन्छ। यिनले स्थूल शरीरका पञ्च महाभूतहरूको प्रतिनिधित्व गरिरहेका हुन्छन्। चेतना र धैर्यद्वारा प्रतिनिधित्व गरिएको जीवनशक्ति (जीवनलक्षण) सूक्ष्म शरीर अर्थात् मन, बुद्धि र अहङ्कारको अभिव्यक्ति हो। यी सूक्ष्म तत्त्वहरू पनि कर्मक्षेत्रमा समावेश हुन्छन्।

पञ्च महाभूत अहङ्कारका स्थूल अभिव्यक्ति हुन्, यिनले अहङ्कारको प्राथमिक अवस्थाको प्रतिनिधित्व गर्दछन्, त्यसैले अहङ्कारलाई प्राविधिक रूपमा तामस बुद्धि वा भौतिकवादी अवधारणा भन्दछन् र यो प्रकृतिका तीन गुणहरूका अव्यक्त अवस्थाको सूचक पनि हो। प्रकृतिका अव्यक्त गुणहरूलाई प्रधान भनिन्छ।

उपर्युक्त चौबीस तत्त्वहरूलाई तिनका अन्तरक्रियासहित राम्ररी बुझ्न चाहने व्यक्तिले दर्शनशास्त्रको विस्तृत अध्ययन गर्नु पर्दछ। *भगवद्गीतामा* त्यसको सारांश मात्र दिइएको छ।

शरीर यी सम्पूर्ण तत्त्वहरूको अभिव्यक्ति हो। शरीर परिवर्तनशील हुन्छ। शरीरमा हुने यस्ता परिवर्तनहरू ६ प्रकारका छन्, शरीर जन्मिन्छ, बढ्दछ, केही समय रहन्छ, केही सहउत्पादन गर्दछ, अनि विस्तारै क्षीण हुँदै जान्छ र अन्त्यमा समाप्त हुन्छ। त्यसैले क्षेत्र अस्थायी भौतिक वस्तु हो तर क्षेत्रज्ञ अर्थात् क्षेत्रको ज्ञाता यसको सञ्चालक हुनुहुन्छ। त्यसैले क्षेत्र र क्षेत्रज्ञमा भिन्नता छ।

**अमानित्वमदम्भित्वमहिंसा क्षान्तिरार्जवम् ।**
**आचार्योपासनं शौचं स्थैर्यमात्मविनिग्रहः ॥ ८ ॥**
**इन्द्रियार्थेषु वैराग्यमनहंकार एव च ।**
**जन्ममृत्युजराव्याधिदुःखदोषानुदर्शनम् ॥ ९ ॥**
**असक्तिरनभिष्वङ्गः पुत्रदारगृहादिषु ।**
**नित्यं च समचित्तत्वमिष्टानिष्टोपपत्तिषु ॥ १० ॥**
**मयि चानन्ययोगेन भक्तिरव्यभिचारिणी ।**
**विविक्तदेशसेवित्वमरतिर्जनसंसदि ॥ ११ ॥**
**अध्यात्मज्ञाननित्यत्वं तत्त्वज्ञानार्थ दर्शनम् ।**
**एतज्ज्ञानमिति प्रोक्तमज्ञानं यदतोऽन्यथा ॥ १२ ॥**

**अमानित्वम्** — विनम्रता; **अदम्भित्वम्** — अभिमानरहित; **अहिंसा** — अहिंसा; **क्षान्तिः** — सहनशीलता; **आर्जवम्** — सरलता; **आचार्य उपासनम्** — सुयोग्य गुरुका समीपमा जानु; **शौचम्** — पवित्रता; **स्थैर्यम्** — दृढता; **आत्म-विनिग्रहः** — आत्मसंयम; **इन्द्रियार्थेषु** — इन्द्रियहरूका विषयमा; **वैराग्यम्** — वैराग्य; **अनहंकारः** — झूटो अभिमानरहित; **एव** — निश्चय नै; **च** —

पनि; **जन्म** — जन्म; **मृत्यु** — मरण; **जरा** — वृद्धावस्था; **व्याधि** — रोग; **दुःख** — दुःखको; **दोष** — दोष; **अनुदर्शनम्** — हेर्दै; **असक्तिः** — आसक्त नभई; **अनभिष्वङ्गः** — सङ्गतमा नरही; **पुत्र** — छोरा; **दार** — पत्नी; **गृहादिषु** — घर आदिमा; **नित्यम्** — निरन्तर; **च** — पनि; **समचित्तत्वम्** — समान भाव; **इष्ट** — चाहेको; **अनिष्ट** — नचाहेको; **उपपत्तिषु** — प्राप्त गरेर; **मयि** — ममा; **च** — पनि; **अनन्ययोगेन** — शुद्ध भक्तिद्वारा; **भक्तिः** — भक्ति; **अव्यभिचारिणी** — बिनाकुनै अवरोध; **विविक्त** — एकान्त; **देशा** — ठाउँहरू; **सेवित्वम्** — चाहना गर्दै; **अरतिः** — अनासक्त भएर; **जनसंसदि** — सर्वसाधारण मानिसहरूलाई; **अध्यात्म** — आत्मासम्बन्धी; **ज्ञान** — ज्ञानमा; **नित्यत्वम्** — निरन्तरता; **तत्त्व ज्ञान** — सत्यका ज्ञानको; **अर्थ** — विषयका लागि; **दर्शनम्** — दर्शनशास्त्र; **एतत्** — यो सबै; **ज्ञानम्** — ज्ञान; **इति** — यस प्रकार; **प्रोक्तम्** — भनियो; **अज्ञानम्** — अज्ञान; **यत्** — जो; **अतः** — यसबाट; **अन्यथा** — अरू।

**विनम्रता, अभिमान शून्यता, अहिंसा, सहनशीलता, सरलता, सुयोग्य गुरुको शरण, पवित्रता, स्थिरता, आत्मसंयम, इन्द्रियतृप्तिका विषयहरूको परित्याग, अहङ्कारको अभाव, जन्म मृत्यु, वृद्धावस्था र रोगजन्य दोषहरूको ज्ञान ( अनुभूति ), अनासक्ति, सन्तान, पत्नी, घर आदि कुराहरूको जञ्जालबाट मुक्ति, राम्रा र नराम्रा घटनाहरूप्रति समानभाव, मप्रतिको निरन्तर तथा शुद्ध भक्ति, एकान्तवासको चाहना, भौतिकवादी जनसमूहबाट पर रहने इच्छा, आत्मसाक्षात्कारको महत्त्वलाई स्वीकार गर्नु र दार्शनिक रूपले परमसत्यको खोजी गर्नुजस्ता सम्पूर्ण कार्यलाई म ज्ञान मान्दछु र यसबाहेक अन्य सबै अज्ञान हुन् भनेर म घोषणा गर्दछु।**

**तात्पर्य :** कहिलेकाहीँ अल्पबुद्धिका मानिसहरू ज्ञानको यस प्रक्रियालाई कर्मक्षेत्रको अन्तरक्रिया ठान्ने गल्ती गर्दछन्। तर वास्तवमा यही नै ज्ञानको सही प्रक्रिया हो। यदि कसैले ज्ञानको यो प्रक्रियालाई अपनाउँदछ भने ऊ परमसत्य समक्ष पुग्न सक्ने सम्भावना हुन्छ। यो प्रक्रिया पहिले वर्णन गरिएका चौबीस तत्त्वहरूको अन्तरक्रिया होइन। यो प्रक्रिया ती तत्त्वहरूका जञ्जालबाट मुक्त गराउने वास्तविक साधन हो। शरीर धारण भएको आत्मा चौबीस तत्त्वहरूद्वारा बनेको शरीरभित्र थुनिएर रहेको छ र यहाँ वर्णन गरिएको ज्ञानविधि यसबाट छुटकारा दिने उपयुक्त साधन हो। यहाँ वर्णन गरिएका सबै ज्ञानविधिहरूमध्ये सबैभन्दा महत्त्वपूर्ण विधिको चर्चा एघारौँ श्लोकको प्रथम पङ्क्तिमा गरिएको छ— **मयि चानन्ययोगेन भक्तिरव्यभिचारिणी** अर्थात्, भगवान्‌को शुद्ध भक्ति गर्ने स्तरमा पुगेपछि सबै ज्ञानविधिहरूको अवसान हुन्छ। त्यसै कारण

यदि कसैले भगवान्‌को दिव्य सेवा गर्ने स्तर प्राप्त गरेन वा गर्न न सके त्यसका अरू उन्नाइसवटा विधिको कुनै विशेष अर्थ हुँदैन। तर पूर्णतया कृष्णभावनामा रहेर भगवान्‌को सेवा गर्ने अवसर प्राप्त गरेका व्यक्तिमा ती अन्य उन्नाइस गुणहरू स्वतः विकसित हुन्छन्। *श्रीमद्‌भागवत्* (५-१८-१२) मा भनिएको छ—**यस्यास्ति भक्तिर्भगवत्यकिञ्चना सर्वैर्गुणैस्तत्र समासते सुराः।** जसले भक्तिको अवस्था प्राप्त गरेको छ त्यसमा सम्पूर्ण असल गुणहरूको विकास हुन्छ। आठौं श्लोकमा उल्लेख भएअनुसार गुरु ग्रहण गर्ने नियम अनिवार्य छ। भक्तियोग अपनाउने व्यक्तिका लागि पनि यो अत्यन्त महत्त्वपूर्ण छ। आधिकारिक गुरु ग्रहण गरेपछि दिव्य जीवन सुरु हुन्छ। यहाँ भगवान् श्रीकृष्ण स्पष्ट भन्नु हुन्छ—ज्ञानको यो प्रक्रिया नै वास्तविक मार्ग हो र यसभन्दा पर कल्पना गरिएका जे-जति कुरा छन्, ती सबै निरर्थक हुन्।

यहाँ प्रस्तुत गरिएको ज्ञानको रूपरेखाको विश्लेषण निम्नलिखित तरिकाले गर्न सकिन्छ। विनम्रताको अर्थ अरूद्वारा सम्मानित भएर सन्तुष्टि लिने चाहना नहुनु। भौतिकवादी जीवनको दृष्टिले हामीलाई अरूबाट सम्मान प्राप्त गर्न अति उत्सुक बनाएको हो तर "म शरीर होइन" भन्ने पूर्णज्ञान प्राप्त गरेका मानिसका दृष्टिमा शरीरसँग सम्बन्धित मान-अपमानजस्ता कुरा व्यर्थ प्रमाणित हुन्छन्। मानिस भएपछि यी सांसारिक छलकपटप्रति मात्र इच्छुक हुनु हुँदैन। धेरै मानिसहरू आफ्नो धर्ममा प्रसिद्धि प्राप्त गर्न अत्यन्त उत्सुक हुन्छन्। परिणामस्वरूप त्यस्ता मानिसहरू कहिलेकाहीँ धर्मको सिद्धान्त नबुझेर नै यस्ता धार्मिक समूहमा प्रवेश गर्दछन् जसले स्वयम् पनि वास्तविक धर्मका नियमहरूको पालना गर्दैनन् तर धार्मिक गुरु वा सल्लाहकारका रूपमा आफ्नो प्रचार गर्न चाहन्छन्। जहाँसम्म अध्यात्मविज्ञानमा वास्तविक प्रगतिको कुरा छ, त्यसका लागि मानिसले स्वयम् आफूलाई म कत्तिको प्रगति गर्दैछु भनेर परीक्षण गर्नु पर्दछ। यी विधिहरूद्वारा उसले आफ्नो परीक्षा स्वयम् गर्न सक्दछ।

सामान्यतया, कसैलाई नमार्नु वा कसैको शरीर नष्ट नगरिदिनुलाई अहिंसा भन्ने गरिन्छ, तर अहिंसाको वास्तविक अर्थ अरूलाई कष्ट नदिनु हो वा दुःखी नबनाउनु हो। साधारण मानिसहरू जीवनको भौतिकवादी धारणारूपी अज्ञानको बन्धनमा परेका हुन्छन् र निरन्तर सांसारिक कष्ट भोगिरहेका हुन्छन्। जनसमुदायलाई आध्यात्मिक ज्ञानतिर अभिमुख नगराउञ्जेल मानिसले हिंसाको अभ्यास गरिरहेको मानिन्छ। मानिसले सकेसम्म समाजमा वास्तविक ज्ञान वितरण गर्ने प्रयत्न गर्नु पर्दछ, जसद्वारा ती मानिसहरू प्रबुद्ध हुन सकून् र यो भौतिक जञ्जाललाई त्याग्न सकून्। यही नै अहिंसा हो।

सहनशीलताको तात्पर्य अरूद्वारा गरिएका अपमान र तिरस्कारलाई सहन

सक्नु हो। आध्यात्मिक ज्ञानको विकासमा लागेका व्यक्तिले अरूबाट हुने विभिन्न अपमान र तिरस्कारको सामना गर्नु पर्दछ। यो अपेक्षित वा स्वाभाविक हो, किनभने भौतिक प्रकृतिको बनोट नै त्यस्तै प्रकारको छ। प्रह्लाद केवल पाँच वर्षका थिए, तैपनि आध्यात्मिक ज्ञानको विकासमा लागेका हुनाले उनी विपत्तिमा परे, किनभने उनका पिता भगवद्भक्तिका विरोधी थिए। प्रह्लादलाई उनका पिताले विभिन्न उपायले मार्न खोजे तर प्रह्लादले त्यो सबै सहन गरे। अतः आध्यात्मिक ज्ञानको विकास गर्ने कार्यमा विभिन्न विघ्नबाधा आइपर्न सक्दछन् तर हामी सहनशील भएर सङ्कल्पका साथ निरन्तर प्रगतिपथमा अघि बढिरहनु पर्दछ।

कुनै पनि कूटनीति नअपनाई आफ्ना शत्रुलाई समेत वास्तविक सत्य उद्घाटित गरिदिन सक्ने गरी सरल हुनु नै सरलता हो। जहाँसम्म गुरु बनाउनुपर्ने प्रश्न, त्यो अनिवार्य छ, किनभने प्रामाणिक गुरुको निर्देशनबिना आध्यात्मिक ज्ञानका क्षेत्रमा प्रगति गर्नु सम्भव छैन। त्यसैले अत्यन्त विनम्रतापूर्वक गुरुका समीपमा जानु पर्दछ र आफ्ना सम्पूर्ण सेवा गुरुलाई समर्पण गर्नु पर्दछ। यसबाट गुरु प्रसन्न बन्नुहुन्छ र शिष्यलाई आशीर्वाद प्रदान गर्न हुन्छ। प्रामाणिक गुरु भगवान् श्रीकृष्णका प्रतिनिधि हुने हुनाले उहाँले आफ्ना शिष्यलाई आशीर्वाद दिनासाथ विधिविधानहरूको पालना नगरेको शिष्यले पनि तुरुन्त आध्यात्मिक प्रगति गर्न थाल्दछ। अथवा, कुनै कुरा बाँकी नराखी आफ्ना गुरुको सेवा गर्ने शिष्यका निमित्त सम्पूर्ण विधिविधानहरू सजिला हुन्छन्।

आध्यात्मिक जीवनमा प्रगति गर्नका लागि पवित्रता अनिवार्य छ। पवित्रता वा शुद्धि दुई प्रकारका छन्— आन्तरिक र बाह्य। बाह्य पवित्रता भनेको स्नान हो र आन्तरिक पवित्रताका लागि मानिसले निरन्तर कृष्णचिन्तन गर्नु पर्दछ र **हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे, हरे राम हरे राम राम राम हरे हरे** यो महामन्त्र जप्नु पर्दछ। यो विधि अपनाउनाले मनमा सञ्चित भएर बसेका पूर्वजन्म देखेका कर्मका धूलोमैलोहरू सफा हुन्छन्।

आध्यात्मिक जीवनमा प्रगति गर्नका लागि ठुलो सङ्कल्प चाहिन्छ, त्यसैको नाम दृढता हो। यस किसिमको सङ्कल्पबिना मानिसले ठोस प्रगति गर्न सक्दैन र त्यसपछि चाहिन्छ आत्मसंयम। यसको अर्थ आध्यात्मिक प्रगतिका पथमा आइपर्ने कुनै पनि विघ्नबाधालाई सामना गर्नु हो। मानिस यसप्रति अभ्यस्त हुनु पर्दछ र आध्यात्मिक प्रगतिपथ-विरोधी जुनसुक वस्तुलाई पनि त्यागिदिनु पर्दछ। यही नै वास्तविक वैराग्य हो। इन्द्रियहरू अत्यन्त शक्तिशाली छन्। तिनीहरू सधैँ आफ्नो तृप्तिका निमित्त उत्सुक हुन्छन्। तिनका अनावश्यक मागहरूलाई पूर्ति गरिदिनु हुँदैन। शरीरलाई स्वस्थ राख्न पुग्ने

गरी मात्र इन्द्रियतृप्ति गर्नु पर्दछ जसद्वारा आध्यात्मिक प्रगतिका लागि गर्नुपर्ने कर्तव्य पूरा गर्न सकियोस्। सबैभन्दा महत्त्वपूर्ण र नियन्त्रण गर्न नसकिने इन्द्रिय जिब्रो हो। यदि जिब्रोलाई वशमा राख्न सके अन्य सबै इन्द्रियलाई वशमा राख्न सकिने सम्भावना हुन्छ। स्वाद लिनु र ध्वनि उच्चारण गर्नु जिब्रोका दुई कार्य छन्। अतः व्यवस्थित रूपले जिब्रोलाई भगवान् श्रीकृष्णको उच्छिष्ट प्रसादको स्वाद लिनमा र **हरे कृष्ण** महामन्त्रको कीर्तन गर्ने कार्यमा लगाउनु पर्दछ। जहाँसम्म आँखाको कुरा छ, तिनलाई भगवान् श्रीकृष्णको सुन्दर श्रीविग्रहबाहेक अरू कुनै पनि वस्तु हेर्न दिनुहुन्न। यसरी आँखालाई नियन्त्रण गर्न सकिन्छ। त्यसै गरी कानलाई कृष्णकथा सुन्ने कार्यमा लगाउनु पर्दछ र नाकलाई भगवान् श्रीकृष्णलाई अर्पण गरेका फूलहरूको सुगन्ध लिन लगाउनु पर्दछ। भगवद्भक्तिको विधि यही हो र यहाँ के पनि बुझ्नु पर्दछ भने, *भगवद्गीताले* केवल भक्तिविज्ञानको मात्र प्रतिपादन गरिरहेको छ। भगवद्भक्ति नै यसको प्रमुख तथा एकमात्र लक्ष्य हो। *भगवद्गीताका* बुद्धिहीन भाष्यकारहरू पाठकको मनलाई अरू विषयतिर मोड्ने प्रयास गर्दछन् तर *भगवद्गीतामा* भक्तिबाहेक अरू कुनै विषय नै छैन।

झूटो अहङ्कारको अर्थ शरीरलाई आत्मा मान्नु हो। जब मानिसले "म आत्मा हूँ, शरीर होइन" भन्ने कुरा बुझ्दछ अनि मात्र ऊ वास्तविक अहम्मा आइ पुग्दछ। मानिसमा अहङ्कार हुन्छ नै तर झूटो अहङ्कारको मात्र यहाँ निन्दा गरिएको छ, वास्तविक अहङ्कारको होइन। वैदिक साहित्य अर्थात् वृहदारण्यक उपनिषद् (१-४.१०) मा भनिएको छ— **अहं ब्रह्मास्मि** अर्थात् "म ब्रह्म हूँ, म आत्मा हूँ। यो "म हूँ" भन्ने आत्मभाव या अहंभाव आत्मसाक्षात्कारको मुक्त अवस्थामा पनि विद्यमान हुन्छन्। हुन त यो "म हूँ" भन्ने भाव अहङ्कार हो तर यो "म हूँ" को भाव जब शरीरका लागि लागू गरिन्छ, तब त्यो झूटो-अहङ्कार हुन बन्दछ। तर यदि यो आत्मभाव वास्तविक तत्त्वका लागि प्रयोग गरिन्छ त्यो वास्तविक अहङ्कार बन्दछ। केही दार्शनिकहरू भन्ने गर्दछन्—हामीले आफ्नो अहङ्कार त्याग्नु पर्दछ तर वास्तवमा हामी हाम्रो अहङ्कार त्याग्न सक्दैनौं। किनभने अहङ्कारको अर्थ स्वरूप वा आत्मपरिचय हो। हो, हामीले शरीरसँग जोडिएको आत्मभावलाई अवश्य त्याग्नु पर्दछ।

मानिसले जन्म, मृत्यु, बुद्धावस्था र रोगव्याधिलाई स्वीकार गर्दा हुने कष्टलाई बुझ्ने प्रयास गर्नु पर्दछ। विभिन्न वैदिक ग्रन्थहरूमा जन्मसम्बन्धी वर्णनहरू पाइन्छन्। *श्रीमद्भागवत्मा* जन्मनुभन्दा पूर्वको स्थिति, माताका गर्भमा हुने बच्चाको स्थिति, उसका कष्टहरू इत्यादि सबै कुराको अत्यन्त

स्पष्ट वर्णन गरिएको छ। जन्म अत्यन्त कष्टपूर्ण हुन्छ भन्ने कुरा राम्रोसँग बुझ्नु पर्दछ। आमाका गर्भमा रहँदा कति कष्ट हुन्छ भन्ने कुरा हामीले बिर्सेका छौँ। हामीले बारम्बार दोहोरिने जन्म र मृत्युको कुनै समाधान पाएका छैनौँ। त्यसै गरी मृत्युका समयमा पनि सबै प्रकारका कष्टहरू सहनु पर्दछ। यी सबै कुराको उल्लेख हाम्रा प्रामाणिक शास्त्रहरूमा गरिएको छ। यी कुराहरूको विवेचना हुनु पर्दछ। जहाँसम्म रोग र वृद्धावस्थाको सम्बन्ध छ, सबैलाई यसको व्यवहारिक अनुभव छ। रोगी हुन र बुढो हुन कोही चाहँदैन र यसबाट बच्ने कुनै उपाय पनि छैन। जबसम्म हामी जन्म, मृत्यु, बृद्धावस्था र रोगजस्ता कुरालाई दुःखका विषय ठान्दै यो भौतिक जीवनप्रति निराशावादी दृष्टिकोण बनाउँदैनौँ तबसम्म आध्यात्मिक जीवनमा प्रगति गर्ने उत्साह पाउन सक्दैनौँ।

जहाँसम्म छोराछोरी, पत्नी तथा घरबाट विरक्त हुने कुरा छ, यसको अर्थ यी कुराहरूका लागि कुनै भावना नै उठाउनु हुँदैन भन्ने होइन। यी वस्तुहरू स्नेहका प्राकृतिक वस्तु हुन्। तर जब घर-परिवार आध्यात्मिक प्रगतिका लागि अनुकूल बन्दैन, त्यस समय ती कुराबाट विरक्त हुनु पर्दछ। घरलाई सुखमय बनाउने सर्वश्रेष्ठ उपाय नै कृष्णभावना हो। यदि कुनै व्यक्ति पूर्णतः कृष्णभावनाभावित भए उसले आफ्नो घरलाई अत्यन्त सुखमय बनाउन सक्दछ, किनभने यो विधि धेरै सजिलो छ। मानिसले केवल **हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे, हरे राम हरे राम राम राम हरे हरे** यो मन्त्र जप्ने, भगवान् श्रीकृष्णलाई अर्पण गरेको उच्छिष्ट प्रसाद ग्रहण गर्ने, *भगवद्गीता* तथा *श्रीमद्भागवत्* जस्ता ग्रन्थहरूको चर्चा गर्ने र आफूलाई भगवान्का श्रीविग्रहको पूजामा लगाइराख्ने गरे मात्र पनि पुग्दछ। यी चार कुराले मानिसलाई सुखी बनाउँदछ। त्यसैले आफ्ना परिवारका सदस्यहरूलाई पनि यिनै कुराको तालिम दिनु पर्दछ।

बिहान र बेलुका परिवारका सबै सदस्यहरू सँगै बसेर **हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे, हरे राम हरे राम राम राम हरे हरे** यो महामन्त्र जप्नु पर्दछ। यदि कसैले कृष्णभावनाको विकास गर्न चार नियमहरूको पालना गर्दै आफ्ना परिवारलाई पनि उपर्युक्त किसिमले यसतर्फ मोड्न सके त्यसलाई गृहस्थ जीवन छोडेर संन्यास ग्रहण गर्ने आवश्यकता छैन। आध्यात्मिक उन्नति गर्नका लागि यदि घर-परिवार अनुकूल र उपयुक्त नभए मात्र गृहस्थ जीवन त्यागीदिनु पर्दछ। मानिसले अर्जुनले जस्तै भगवान् श्रीकृष्णको सेवा वा श्रीकृष्णको अनुभूति गर्नका लागि हरेक कुराको बलिदान गर्नु पर्दछ। अर्जुन आफ्ना पारिवारिक सदस्यहरूलाई मार्न चाहँदैनथे तर जब उनले आफ्ना पारिवारिक सदस्यहरू नै भगवान् श्रीकृष्णको साक्षात्कार गर्ने कुरामा अवरोध

भइरहेको बुझे, उनले श्रीकृष्णको निर्देशन मान्दै लडाइँ गरे र तिनीहरूको वध पनि गरे। यी सबै विषयमा मानिस पारिवारिक जीवनका सुख-दुःखबाट विरक्त हुनु पर्दछ, किनभने यस संसारमा न कोही पूर्ण सुखी हुन सक्दछ न पूर्ण दुःखी नै।

सुख र दुःख भौतिक जीवनका एकैसाथ हिँड्ने तत्त्व हुन्। *भगवद्गीतामा* भनिएजस्तै मानिसले सहनशील हुन सिक्नु पर्दछ। सुख र दुःखको आउने र जाने क्रममा कसैले कहिल्यै पनि प्रतिबन्ध लगाउन सक्दैन। त्यसैले मानिसले भौतिकवादी जीवनशैलीबाट आफूलाई अलग्ग राख्नु पर्दछ र सुख-दुःख दुवै अवस्थामा स्वाभाविक रूपले समभाव राख्नु पर्दछ। सामान्यतया हामी आफूले चाहेको कुनै वस्तु प्राप्त गर्दा साह्रै खुशी हुन्छौँ र आफूले नचाहेको केही कुरा हुँदा दुःखी हुन्छौँ। तर यदि हामी वास्तविक आध्यात्मिक स्थितिमा रहने भए यी कुराले हामीलाई विचलित बनाउन सक्दैनन्। त्यस अवस्थामा पुग्नका लागि हामीले अखण्ड भक्तिको अभ्यास गर्नु पर्दछ। विचलित नभई कृष्णभक्तिमा लाग्नुको अर्थ— आफूलाई कीर्तन, श्रवण, स्मरण, पाद-सेवन आदि नवधा भक्तिमा लगाउनु हो। यसको चर्चा नवौँ अध्यायको अन्तिम श्लोकमा भएको छ। यो विधि अपनाउनै पर्दछ।

आध्यात्मिक जीवनमार्ग अपनाएको व्यक्ति स्वभावले भौतिकवादी मानिसहरूसँग सङ्गत गर्न चाहँदैन। त्यसो गरेमा यो उसको स्वभावविरुद्ध हुन्छ। अवाञ्छित सङ्गतबाट बचेर एकान्तस्थलमा बस्न उसको झुकाव कहाँसम्म छ भन्ने कुराको आत्मपरीक्षा उसले आफैँलाई हेरेर गर्न सक्दछ। अनावश्यक खेल खेल्नमा, सिनेमा हेर्नमा र सामाजिक उत्सवहरूमा सहभागी हुनमा स्वभावले भक्तहरूको रुचि हुँदैन, किनभने यो सबै समय नष्ट गर्नु मात्र हो भन्ने उनीहरूले बुझेका हुन्छन्। यौन जीवन वा अन्य विषयको अध्ययन गर्ने धेरै अनुसन्धानकर्ता विद्वान्हरू र दार्शनिकहरू छन् तर *भगवद्गीताका* अनुसार यस्ता अनुसन्धान कार्य र दार्शनिक चिन्तनको कुनै मूल्य छैन। प्रायः यी सबै मूर्खतापूर्ण कार्य हुन्। *भगवद्गीता*अनुसार मानिसले दार्शनिक बुद्धि-विवेकद्वारा आत्माको प्रकृतिजस्ता विषयमा अनुसन्धान गर्नु पर्दछ। आत्मालाई बुझ्नका निमित्त अनुसन्धान गर्नु पर्दछ। यहाँ यही कुराको निर्देशन दिइएको छ।

जहाँसम्म आत्मसाक्षात्कारको विषय छ, त्यस सम्बन्धमा यहाँ भक्तियोग नै विशेष रूपले व्यावहारिक हुने कुराको स्पष्ट वर्णन छ। भक्तिको प्रश्न उठ्नासाथ मानिसले आत्मा र परमात्माबीचको सम्बन्धबारे विचार गर्नु पर्दछ। व्यष्टि आत्मा र परमात्मा एउटै हुन सक्दैनन्, त्यसमा पनि भक्तियोग वा जीवनको भक्तिमय अवधारणामा त यस्तो हुनै सक्दैन। परमात्माप्रति व्यष्टि आत्माको यो

सेवा शाश्वत हो, नित्य हो भन्ने कुरा यहाँ स्पष्ट बताइएको छ। अतः भक्ति शाश्वत वस्तु हो। मानिस यही दृढ दार्शनिक धारणामा स्थिर रहनु पर्दछ।

*श्रीमद्भागवत्* (१.२.११) मा सविस्तार भनिएको छ— **वदन्ति तत्तत्वविदस्तत्त्वं यज्ज्ञानमद्वयम्** अर्थात्, परमसत्यका वास्तविक ज्ञाताहरू जान्दछन्— ब्रह्म, परमात्मा र भगवान् यी तीन रूपमा परमसत्यको अनुभूति गर्न सकिन्छ। परमसत्यको साक्षात्कारमा भगवान्को अनुभूति सर्वश्रेष्ठ र अन्तिम अनुभूति हो। त्यसैले मानिस भगवान्लाई बुझ्न सक्ने अवस्थासम्म पुग्नु पर्दछ र अनि भगवान्को भक्तिमा लागिरहनु पर्दछ। यही नै ज्ञानको पूर्णता हो।

विनम्रताको अभ्यासदेखि परमसत्य वा परमपुरुष भगवान्को साक्षात्कारसम्म पुग्ने यो विधि— भूइँतलाबाट सुरु भएर सबैभन्दा माथिल्लो तलासम्म पुग्ने सिँढीजस्तै हो। अहिले यो सिँढीमा धेरै मानिसहरू छन्, कोही पहिलो खुट्किलामा पुगेका छन्, कोही दोस्रो खुट्किलामा पुगेका छन् र कोही तेस्रोमा छन्, तर जबसम्म कुनै मानिस भगवान् श्रीकृष्णको ज्ञानरूपी सबैभन्दा माथिल्लो खुट्किलामा पुग्दैन तबसम्म उसलाई ज्ञानको तल्लो तहमा रहेको मान्नु पर्दछ। यदि कसैले भगवान्सँग प्रतिस्पर्धा गर्न चाहन्छ र साथै आध्यात्मिक ज्ञानको विकास पनि गर्न चाहन्छ ऊ निराश हुनेछ। स्पष्ट भनिएको छ— विनम्रताबिना ज्ञान आर्जन गर्नु वास्तवमा सम्भव छैन। आफूलाई ईश्वर ठान्नु सबैभन्दा ठुलो अभिमान हो। जीवात्माहरू सधैँ प्रकृतिका कठोर नियमद्वारा लात हानिएका छन् तैपनि अहङ्कारले गर्दा तिनीहरू आफूलाई "म ईश्वर हूँ" भन्ने ठान्दछन्। त्यसैले ज्ञानको प्रारम्भ भनेको **अमानित्व** अर्थात् विनम्रता हो। मानिसले विनम्र हुनु पर्दछ र आफूलाई भगवान्को अधीनस्थ छु भन्ने ठान्नु पर्दछ। परमेश्वरका विरुद्ध विद्रोह गरेको कारणले मानिस प्रकृतिका अधीनमा पुग्ने गर्दछ। अतः मानिसले यो सत्यको बोध गर्नु पर्दछ र यसप्रति विश्वस्त पनि हुनु पर्दछ।

**ज्ञेयं यत्तत्प्रवक्ष्यामि यज्ज्ञात्वामृतमश्नुते ।**
**अनादिमत्परं ब्रह्म न सत्तन्नासदुच्यते ॥ १३ ॥**

**ज्ञेयम्** — जान्नयोग्य; **यत्** — जो; **तत्** — त्यो; **प्रवक्ष्यामि** — अब म वर्णन गर्दछु; **यत्** — जो; **ज्ञात्वा** — जानेर; **अमृतम्** — अमृत; **अश्नुते** — आस्वादन गर्दछ; **अनादि** — अनादि; **मत्परम्** — मेरा अधीनमा; **ब्रह्म** — आत्मा; **न** — नत; **सत्** — कारण; **तत्** — त्यो; **न** — नत; **असत्** — प्रभाव; **उच्यते** — भनिन्छ।

**अब म तिमीलाई जान्नुपर्ने विषयका बारेमा भन्दछु, जुन कुरा जानेपछि**

**तिमीले नित्य अमृत तत्त्वको आस्वादन गर्नेछौ। मेरा अधीनमा रहेको अनादि ब्रह्म वा आत्मा यो भौतिक संसारको प्रभाव र कारणभन्दा पर छ।**

**तात्पर्य :** भगवान्‌ले यहाँ कर्म-क्षेत्र र क्षेत्रज्ञको व्याख्या गर्नुभएको छ। उहाँले क्षेत्रज्ञका क्रियाकलापलाई जान्ने विधिको पनि वर्णन गर्नुभएको छ। अब उहाँ **"ज्ञेय"** अर्थात् जान्नयोग्य विषयको व्याख्या प्रारम्भ गर्नु हुन्छ, ती विषय हुन्— आत्मा र परमात्मा। आत्मा र परमात्माः यी दुवैको ज्ञाताको ज्ञान पाएर मानिसले जीवनको अमृत चाख्न सक्दछ। दोस्रो अध्यायमा भनिएको छ— जीवात्मा नित्य छ, यही कुराको पुष्टि यहाँ पनि भएको छ। जीवात्मा कहिले जन्मियो त्यसको निश्चित तिथि छैन। न त कसैले परमात्माबाट जीवात्मा प्रकट भएको इतिहास नै भन्न सक्दछ। त्यसैले यो अनादि हो। वैदिक साहित्य अर्थात् कठोपनिषद् (१.२.१८) मा **नजायते मृयते वा विपश्चित्** भनेर यसको पुष्टि गरिएको छ। शरीरको ज्ञाता कहिल्यै जन्मिँदैन र कहिल्यै मर्दैन पनि, ऊ सधै ज्ञानले परिपूर्ण हुन्छ।

वैदिक साहित्य (श्वेताश्वतर उपनिषद् ६.१६) मा परमेश्वरलाई परमात्माका रूपमा **प्रधान क्षेत्रज्ञपतिर्गुणेशः** अर्थात् शरीरका प्रमुख ज्ञाता र भौतिक प्रकृतिका तीन गुणहरूका स्वामी भनिएको छ। स्मृतिमा पनि **दासभूतो हरेरेव नान्यस्यैव कदाचन** भनिएको छ। जीवात्माहरू सनातन रूपले परमेश्वरका सेवामा संलग्न छन्। यस कुराको पुष्टि भगवान् श्री चैतन्य महाप्रभुले आफ्नो उपदेशमा पनि गर्नुभएको छ। अतः यहाँ यो श्लोकमा उल्लेख भएको ब्रह्मको वर्णन व्यष्टि आत्माको सम्बन्धमा गरिएको हो। जब जीवात्माका लागि ब्रह्म शब्द प्रयोग गरिन्छ, त्यहाँ **ब्रह्म** शब्दको अर्थ आनन्दब्रह्म नभएर विज्ञानब्रह्म हो भन्ने बुझ्नु पर्दछ। आनन्दब्रह्म त स्वयम् भगवान् हुनुहुन्छ।

**सर्वतः पाणिपादं तत्सर्वतोऽक्षिशिरोमुखम् ।**
**सर्वतः श्रुतिमल्लोके सर्वमावृत्य तिष्ठति ॥ १४ ॥**

**सर्वतः** — सबैतिर; **पाणि** — हातहरू; **पादम्** — पाउहरू; **तत्** — त्यो; **सर्वतः** — सबैतिर; **अक्षि** — आँखाहरू; **शिरः** — शिरहरू; **मुखम्** — मुखहरू; **सर्वतः** — सबैतिर; **श्रुतिमत्** — कानहरूले युक्त; **लोके** — संसारमा; **सर्वम्** — सबै वस्तु; **आवृत्य** — ढाकेर; **तिष्ठति** — अवस्थित छ।

**उहाँका हात, पाउ, आँखा, शिर, अनुहार र कान सर्वत्र फैलिएका छन्। यसरी परमात्मा हरेक वस्तुमा व्याप्त भएर रहनुभएको छ।**

**तात्पर्य :** जसरी सूर्य आफ्ना अनन्त किरणहरू सर्वत्र फिँजाएर अवस्थित हुन्छन् त्यसै गरी परमात्मा वा भगवान् पनि सर्वत्र विद्यमान हुनुहुन्छ। उहाँ आफ्नो सर्वव्यापक स्वरूपमा विद्यमान हुनुहुन्छ र उहाँमा महान् आदिगुरु ब्रह्माजीदेखि लिएर साना कमिलासम्मका सबै व्यष्टि जीवात्माहरू विद्यमान छन्। उहाँका असङ्ख्य शिर छन्, असङ्ख्य हात, पाउ र आँखाहरू छन् अनि उहाँसँग असङ्ख्य जीवात्माहरू छन्। ती सबै परमात्मामा अवस्थित छन्। त्यसैले परमात्मा सर्वव्यापक हुनुहुन्छ। कुनै पनि व्यष्टि आत्माले मेरा हात, पाउ, आँखा सर्वत्र फैलिएका छन् भन्न सक्दैन। त्यो सम्भव छैन। यदि अज्ञानवश अचेत भएर कसैले मेरा हात पाउ सबैतिर फैलिएका छन् भन्ने सोचे पनि ठीक-ठीक ज्ञान भएपछि ऊ आफ्नो स्थितिमा आइ पुग्दछ र आफ्नो सोचाइ गलत वा विपरीत भएको थाहा पाउँदछ। यसको अर्थ हो जीवात्मा प्रकृतिद्वारा बाँधिएको हुनाले ऊ ईश्वर होइन। ईश्वर जीवात्माभन्दा भिन्न हुनुहुन्छ। परमेश्वरले आफ्ना हात-पाउ असीमित ढङ्गले विस्तार गर्न सक्नु हुन्छ, तर जीवात्माले सक्दैन। *भगवद्गीतामा* भगवान् भन्नु हुन्छ— मलाई यदि कसैले एउटा फूल वा फल वा अलिकति जल अर्पण गर्दछ म त्यसलाई सहर्ष स्वीकार्दछु। यदि भगवान् धेरै टाढा रहनुभएको भए कसरी अर्पण गरिएका वस्तुहरू स्वीकार गर्न सक्नुहुन्थ्यो ? यही नै भगवान्‌को सर्वशक्तिमत्ता। उहाँ पृथ्वीभन्दा धेरै-धेरै टाढा अवस्थित आफ्नो धाममा बस्नु हुन्छ, तैपनि आफ्ना हातहरू फैलाएर जोसुकैले अर्पण गरेको वस्तु पनि ग्रहण गर्न सक्नु हुन्छ। यो उहाँको शक्ति हो। ब्रह्मसंहिता (५.३७) मा भनिएको छ— **गोलोक एव निवसत्यखिलात्म-भूतः** अर्थात्, उहाँ आफ्नो दिव्य लोकमा बसेर सधैँ लीला गरिरहनु हुन्छ तैपनि उहाँ सर्वव्यापक हुनुहुन्छ। व्यष्टि जीवात्माले "म सर्वव्यापक छु" भन्ने दाबी गर्न सक्दैन। त्यसैले, यो श्लोकले व्यष्टि जीवात्माको होइन परमात्मा भगवान्‌को वर्णन गरेको छ।

**सर्वेन्द्रियगुणाभासं सर्वेन्द्रियविवर्जितम् ।**
**असक्तं सर्वभृच्चैव निर्गुणं गुणभोक्तृ च ॥ १५ ॥**

**सर्व** — सबै; **इन्द्रिय** — इन्द्रियहरू; **गुण** — गुणहरूको; **आभासम्** — मूलस्रोत; **सर्व** — सबै; **इन्द्रिय** — इन्द्रियहरू; **विवर्जितम्** — विहीन; **असक्तम्** — अनासक्त; **सर्वभृत** — सबैका पालनकर्ता; **च** — पनि; **एव** — निश्चय नै; **निर्गुणम्** — भौतिक गुणविहीन; **गुणभोक्तृ** — गुणहरूका स्वामी; **च** — पनि।

**परमात्मा सम्पूर्ण इन्द्रियहरूका मूल स्रोत भएर पनि इन्द्रियविहीन**

**हुनुहुन्छ। सम्पूर्ण जीवात्माका पालनकर्ता भएर पनि अनासक्त हुनुहुन्छ र प्रकृतिका गुणहरूभन्दा पर रहेर पनि सम्पूर्ण गुणहरूका स्वामी हुनुहुन्छ।**

**तात्पर्य :** परमेश्वर जीवात्माका सबै इन्द्रियहरूका मूल स्रोत हुनुहुन्छ तर उहाँसँग जीवात्माका जस्ता भौतिक इन्द्रियहरू छैनन्। वास्तवमा व्यष्टि जीवात्मासँग पनि आध्यात्मिक इन्द्रियहरू छन् तर तिनको जीवन बद्ध अवस्थामा भएकाले तिनका इन्द्रियहरू पनि भौतिक तत्त्वहरूद्वारा ढाकिएका हुन्छन्, त्यसैले ती इन्द्रियका क्रियाकलापहरू पदार्थका माध्यमबाट देखा पर्दछन्। परमेश्वरका इन्द्रियहरू यस्ता भौतिक तत्त्वहरूद्वारा ढाकिएका हुँदैनन्। परमेश्वरका इन्द्रियहरू दिव्य हुन्छन्, त्यसैले उहाँलाई निर्गुण भनिन्छ। गुणहरूको अर्थ हो भौतिक गुण, तर उहाँका इन्द्रियहरू त्यस्ता भौतिक आवरणले ढाकिएका हुँदैनन्। यहाँ के कुरा बुझ्नु पर्दछ भने, उहाँका इन्द्रियहरू हाम्राजस्ता हुँदैनन्। परमेश्वर सम्पूर्ण इन्द्रियबाट उत्पन्न क्रियाकलापका स्रोत हुनुहुन्छ तैपनि उहाँका इन्द्रियहरू दिव्य छन्, त्यसैले ती प्रदूषणरहित हुन्छन्। श्वेताश्वतर उपनिषद् (३.१९) को **अपाणि पादो जबनो ग्रहीता** भन्ने श्लोकमा यसको निकै राम्रो व्याख्या भएको छ। भगवान्का हातहरू भौतिक संक्रमणबाट दूषित हुँदैनन्। उहाँका आफ्ना हातहरू छन् र तिनका माध्यमले उहाँ आफूलाई अर्पण गरिएका वस्तुहरू ग्रहण गर्नु हुन्छ। बद्ध जीवात्मा र परमात्मामा यही भिन्नता छ। परमात्मासँग भौतिक आँखा छैनन् तैपनि उहाँका आँखाहरू छन् अन्यथा उहाँले कसरी देख्न सक्नुहुन्थ्यो ? उहाँ भूत, भविष्य र वर्तमानका हरेक कुरा देख्न सक्नु हुन्छ। उहाँ हरेक जीवात्माका हृदयमा निवास गर्नु हुन्छ— त्यसैले उहाँ हामीले भूतकालमा के गरेका थियौँ, वर्तमानमा के गरिरहेछौँ र भविष्यमा के गर्नेछौँ, सबै कुरा जान्नुहुन्छ। यो कुराको पुष्टि पनि *भगवद्गीतामा* गरिएको छ। उहाँ हरेक वस्तुलाई जान्नुहुन्छ तर उहाँलाई कसैले जान्दैनन्। भनिन्छ, परमेश्वरको हाम्राजस्ता पाउ छैनन् तर उहाँ अन्तरिक्षमा विचरण गर्न सक्नु हुन्छ किनभने उहाँसँग दिव्य (आध्यात्मिक) पाउहरू छन्। अर्को शब्दमा भन्नुपर्दा भगवान् निराकार हुनु हुन्न। उहाँसँग आफ्नो आँखा, पाउ, हात तथा यस्तै प्रत्येक अङ्ग छन्। हामी पनि भगवान्का अंश भएकाले हामीसँग पनि यी अङ्गहरू छन् तर भगवान्का हात, पाउ, आँखा तथा अन्य इन्द्रियहरू भौतिक प्रकृतिद्वारा प्रदूषित छैनन्।

*भगवद्गीताले* पनि के पुष्टि गर्दछ भने, भगवान् प्रकट हुनुहुँदा आफ्नो अन्तरङ्गा शक्तिद्वारा जस्ताको तस्तै प्रकट हुनुहुन्छ। उहाँ भौतिक प्रकृतिद्वारा प्रदूषित हुनु हुन्न, किनभने उहाँ भौतिक शक्तिका स्वामी हुनुहुन्छ। उहाँको सम्पूर्ण शरीर नै आध्यात्मिक छ भन्ने कुरा हामी वैदिक साहित्यमा पाउँदछौँ।

उहाँको आफ्नो शाश्वत शरीर छ जसलाई सत्-चित्-आनन्दमय विग्रह भनिन्छ। उहाँ सम्पूर्ण ऐश्वर्यले परिपूर्ण हुनुहुन्छ। उहाँ सम्पूर्ण सम्पत्तिका स्वामी हुनुहुन्छ र सबै शक्तिका अधिपति हुनुहुन्छ। उहाँ सबैभन्दा बुद्धिमान् हुनुहुन्छ र सम्पूर्ण ज्ञानले परिपूर्ण हुनुहुन्छ। यी भगवान्का केही लक्षणहरू हुन्। उहाँ सम्पूर्ण जीवात्माका पालनकर्ता हुनुहुन्छ र सबै क्रियाकलापका साक्षी हुनुहुन्छ। वैदिक साहित्यबाट हामी के थाहा पाउँदछौँ भने, परमेश्वर सधैँ दिव्य हुनुहुन्छ। भगवान्का शिर, मुख, हात, पाउ आदि सबै अङ्ग छन् तैपनि तिनलाई हामी देख्न सक्दैनौँ। जब हामी पनि दिव्य स्थितिमा पुग्नेछौँ त्यस समय मात्रै हामी उहाँको रूप देख्न सक्दछौँ। हाम्रा इन्द्रियहरू भौतिक रूपले प्रदूषित भएका कारणले नै हामीले भगवान्को रूपलाई देख्न सक्दैनौँ। त्यसै कारणले गर्दा निराकारवादीहरू भगवान्लाई बुझ्न सक्दैनन्, किनभने तिनीहरू पनि भौतिकताबाट प्रभावित हुन्छन्।

**बहिरन्तश्च भूतानामचरं चरमेव च ।**
**सूक्ष्मत्वात्तदविज्ञेयं दूरस्थं चान्तिके च तत् ॥ १६ ॥**

**बहिः** — बाहिर; **अन्तः** — भित्र; **च** — पनि; **भूतानाम्** — सबै प्राणीहरूको; **अचरम्** — हिँड्न नसक्ने; **जड; चरम्** — हिँडडुल गर्नसक्ने; **एव** — पनि; **च** — र; **सूक्ष्मत्वात्** — अति सानो भएका कारणले; **अविज्ञेयम्** — नजानिने; **दूरस्थम्** — टाढा रहेको; **च** — पनि; **अन्तिके** — नजिक; **च** — र; **तत्** — त्यो।

**परमसत्य सम्पूर्ण चराचर प्राणीहरूका भित्र तथा बाहिर पनि अवस्थित हुनुहुन्छ। अत्यन्त सूक्ष्म हुनुभएको हुनाले उहाँलाई भौतिक इन्द्रियहरूद्वारा देख्न वा जान्न सकिँदैन। उहाँ धेरै धेरै टाढा हुनुहुन्छ तैपनि सबैका लागि अत्यन्त नजिक पनि हुनुहुन्छ।**

**तात्पर्य** : वैदिक साहित्यबाट हामी के बुझ्दछौँ भने, भगवान् नारायण प्रत्येक जीवात्माका भित्र र बाहिर दुवैतिर निवास गर्नु हुन्छ। उहाँ भौतिक र आध्यात्मिक दुवै जगत्मा उपस्थित रहनु हुन्छ। उहाँ धेरै-धेरै टाढा भएर पनि हाम्रा नजिकै हुनुहुन्छ। यो वैदिक साहित्यको भनाइ हो। **आसीनो दूरं व्रजति शयानो याति सर्वतः** (कठोपनिषद् १-२-२१) उहाँ सधैँ दिव्य आनन्दमा रमाइरहनुहुने हुनाले आफ्नो पूर्ण ऐश्वर्यको उपभोग कसरी गर्नु हुन्छ भन्ने कुरा हामी बुझ्न सक्दैनौँ। यी भौतिक इन्द्रियहरूले हामी ती कुराहरू देख्न र बुझ्न सक्दैनौँ। त्यसैले वैदिक भाषामा भनिएको छ—हाम्रा भौतिक मन र इन्द्रियहरूले उहाँलाई बुझ्न सक्दैनन्। तर, जसले भक्तिमय सेवामा रहेर

कृष्णभावनाको अभ्यासद्वारा आफ्नो मन र इन्द्रियहरूलाई शुद्ध बनाएको छ त्यसले निरन्तर उहाँको दर्शन पाइरहन सक्दछ। ब्रह्मसंहितामा के भनिएको छ—जसले परमेश्वरप्रति प्रेमको विकास गरिसकेको छ त्यस्तो व्यक्तिले उहाँलाई नित्य-निरन्तर देख्न सक्दछ। *भगवद्गीतामा* पनि यसको पुष्टि गर्दै भनिएको छ—केवल भक्तिद्वारा मात्र उहाँलाई देख्न सकिन्छ—**भक्त्या त्वनन्यया शक्यः।**

**अविभक्तं च भूतेषु विभक्तमिव च स्थितम् ।**
**भूतभर्तृ च तज्ज्ञेयं ग्रसिष्णु प्रभविष्णु च ॥ १७॥**

**अविभक्तम्**— बिनाविभाजन; **च**— पनि; **भूतेषु**— सम्पूर्ण जीवात्मामा; **विभक्तम्**— विभाजित; **इव**— जस्तै; **च**— पनि; **स्थितम्**— स्थित; **भूत-भर्तृ**— सम्पूर्ण जीवात्माका पालनकर्ता; **च**— पनि; **तत्**— त्यो; **ज्ञेयम्**— जान्नयोग्य; **ग्रसिष्णु**— निल्दै (समाप्त पार्दै); **प्रभविष्णु**— फैलाउँदै; **च**— पनि।

**परमात्मा सम्पूर्ण जीवात्माहरूबीच विभाजित हुनुभएजस्तो देखिए पनि उहाँ कहिल्यै विभाजित हुनु हुन्न। उहाँ एउटै स्वरूपमा अवस्थित हुनुहुन्छ। उहाँ प्रत्येक जीवात्माका पालनकर्ता भए पनि उहाँले सबैको विनाश पनि गर्नु हुन्छ र विकास पनि गर्नु हुन्छ भन्ने कुरा बुझ्नु पर्दछ।**

**तात्पर्य :** भगवान् प्रत्येकका हृदयमा परमात्माका रूपमा निवास गर्नु हुन्छ। के यसको अर्थ उहाँ विभाजित हुनुहुन्छ भन्ने हो? होइन, वास्तवमा उहाँ एउटै हुनुहुन्छ। यस सम्बन्धमा सूर्यको उदाहरण दिन सकिन्छ। मध्यान्हमा सूर्य आफ्नै स्थानमा अवस्थित हुन्छन् तर मानिस चारैतिर पाँच-पाँच हजार माइल टाढा गएर सूर्य कहाँ छ भनेर सोधे पनि हरेकले सूर्य मेरो शिरमाथि चम्किइरहेछन् भन्ने उत्तर दिन्छन्। भगवान् अविभाजित हुनुहुन्छ तैपनि विभाजित भएर रहेजस्ता देखिनु हुन्छ भन्ने देखाउन वैदिक साहित्यमा यो उदाहरण दिइएको छ। वैदिक साहित्यमा अर्को के पनि भनिएको छ भने, जसरी धेरै ठाउँमा रहेका धेरै मानिसहरूमा एउटै सूर्य देखा पर्दछ त्यसै गरी एक भगवान् विष्णु पनि आफ्नो सर्वशक्तिमत्ताद्वारा सर्वत्र उपस्थित हुनुहुन्छ। परमेश्वर प्रत्येक जीवात्माका पालनकर्ता भए पनि प्रलयका समयमा उहाँले सबैलाई निलिदिनु हुन्छ। यसको पुष्टि एघारौँ अध्यायमा भइसकेको छ। त्यहाँ भगवान् भन्नु हुन्छ—"म कुरुक्षेत्रमा जम्मा भएका सम्पूर्ण योद्धाहरूलाई निल्न आएको हूँ।" उहाँले "म कालको रूपमा सबैलाई निलिदिन्छु" भन्नुभएको उल्लेख पनि त्यहाँ छ। उहाँ प्रलयकारी र सबैका संहारकर्ता पनि हुनुहुन्छ।

सृष्टिको समयमा उहाँ सबै प्राणीलाई तिनीहरूका आफ्ना-आफ्नै मौलिक रूपमा विकास गर्नु हुन्छ र प्रलयका समयमा सबैको संहार गर्नु हुन्छ। वैदिक ऋचाहरूले भगवान् नै सम्पूर्ण जीवात्माका मूल स्रोत हुनुहुन्छ र सबैका अन्तिम आश्रय पनि उहाँ नै हुनुहुन्छ भन्ने सत्यको पुष्टि गर्दछन्। सृष्टिपछि हरेक वस्तु उहाँको सर्वशक्तिमत्तामा अडिन्छन् र प्रलयपछि हरेक वस्तु फेरि उहाँको आश्रयमा फर्किन्छन्। निम्नलिखित वैदिक स्तोत्रहरूले यही कुराको पुष्टि गर्दछन्।

*यतो वा इमानि भूतानि जायन्ते येन जातानि*
*जीवन्ति यत्प्रयन्त्यभिसंविशन्ति तद्ब्रह्मतद्विजिज्ञासस्व*

*(तैत्तरीय उपनिषद् ३.१)*।

**ज्योतिषामपि तज्ज्योतिस्तमसः परमुच्यते ।**
**ज्ञानं ज्ञेयं ज्ञानगम्यं हृदि सर्वस्य विष्ठितम् ॥ १८ ॥**

**ज्योतिषाम्** — सबै प्रकाशमान वस्तुहरूमा; **अपि** — पनि; **तत्** — त्यो; **ज्योतिः** — प्रकाशको स्रोत; **तमसः** — अन्धकार; **परमु** — परको; **उच्यते** — भनिन्छ; **ज्ञानम्** — ज्ञान; **ज्ञेयम्** — जान्नुपर्ने विषय; **ज्ञानगम्यम्** — ज्ञानले पाउन सकिने; **हृदि** — हृदयमा; **सर्वस्य** — हरेकको; **विष्ठितम्** — अवस्थित।

**भगवान् सबै प्रकाशमान वस्तुका प्रकाशका स्रोत हुनुहुन्छ। उहाँ भौतिक अन्धकारभन्दा पर हुनुहुन्छ र अप्रकट हुनुहुन्छ। उहाँ नै ज्ञान हुनुहुन्छ। उहाँ नै ज्ञानका विषय हुनुहुन्छ र उहाँ नै ज्ञानको लक्ष्य पनि हुनुहुन्छ। उहाँ प्रत्येकका हृदयमा विराजमान हुनुहुन्छ।**

**तात्पर्य :** परमात्मा अर्थात् भगवान् सूर्य, चन्द्रमा र ताराहरूजस्ता प्रकाशमान् वस्तुहरूमा हुने प्रकाशका स्रोत हुनुहुन्छ। वैदिक साहित्यमा हामी के पाउँदछौँ भने, आध्यात्मिकलोक अर्थात् वैकुण्ठमा भगवान्को आफ्नो तेजको प्रकाश हुने हुनाले त्यहाँ सूर्य वा चन्द्रमाको आवश्यकता नै पर्दैन। यो भौतिक जगत्मा त्यो ब्रह्मज्योति अर्थात् भगवान्को आध्यात्मिक तेज महत्तत्त्व अर्थात् भौतिक तत्त्वहरूले ढाकिएको हुनाले यहाँ हामीलाई प्रकाशका निमित्त सूर्यको, चन्द्रमाको र बिजुली इत्यादिको सहायता चाहिन्छ। तर आध्यात्मिक जगत्मा यस्ता वस्तुहरूको आवश्यकता पर्दैन। वैदिक साहित्यमा स्पष्ट भनिएको छ— भगवान्को प्रकाशमान् ज्योतिका कारणले त्यहाँ हरेक वस्तु प्रकाशित हुन्छन्। अतः स्पष्ट छ— भगवान्को अवस्थिति यस भौतिक संसारमा छैन।

उहाँ यहाँबाट धेरै-धेरै टाढा आध्यात्मिक आकाशको वैकुण्ठलोकमा विराजमान हुनुहुन्छ। यसको पुष्टि पनि वैदिक साहित्यमा भएको छ— **आदित्यवर्णं तमसः परस्तात्** (श्वेताश्वर उपनिषद् ३.८)। उहाँ नित्य प्रकाशमान् सूर्यजस्तै हुनुहुन्छ तर यो भौतिक जगत्को अन्धकारभन्दा धेरै-धेरै टाढा हुनुहुन्छ।

उहाँको ज्ञान दिव्य छ। वैदिक साहित्य भन्दछ— ब्रह्म त घनीभूत दिव्य ज्ञान हो। जो वैकुण्ठलोकमा जान उत्सुक छ त्यसलाई हरेकका हृदयमा निवास गर्ने परमेश्वरद्वारा नै ज्ञान प्रदान गरिएको हुन्छ। एउटा वैदिक मन्त्र (*श्वेताश्वतर उपनिषद्* ६.१८) भन्दछ— **तं ह देवम् आत्मबुद्धिप्रकाशं मुमुक्षुर्वै शरणमहं प्रपद्ये** अर्थात्, मुक्तिको चाहना गर्ने मानिसले भगवान्को शरणमा नै जानु पर्दछ। जहाँसम्म परमज्ञानको लक्ष्यको सम्बन्ध छ, यसको चर्चा पनि वैदिक साहित्यमा पाइन्छ। भनिएको छ— **तमेव विदित्वाति मृत्युमेति** अर्थात्, उहाँलाई जान्नाले मात्र पनि जन्म र मृत्युको परिधिलाई पार गर्न सकिन्छ। (*श्वेताश्वतर उपनिषद्* ३.८)

भगवान् परमनियन्त्रकका रूपमा हरेकका हृदयमा विराजमान हुनुहुन्छ। उहाँका हात-पाउ सर्वत्र फैलिएका छन् तर जीवात्माका सम्बन्धमा यस्तो भन्न सकिँदैन। त्यसैले, कर्मक्षेत्रका ज्ञाताहरू दुईवटा छन्— **जीवात्मा** र **परमात्मा**। यस कुरालाई स्वीकार गर्नु पर्दछ। जीवात्माका हात-पाउ एक ठाउँमा सीमित हुन्छन् तर भगवान् श्रीकृष्णका हात पाउहरू जताततै फैलिएका छन्। *श्वेताश्वतर उपनिषद्* (३.१७) मा यसको पुष्टि यसरी गरिएको छ— **सर्वस्य प्रभुमीशानं सर्वस्य शरणं बृहत्**। अर्थात्, भगवान् वा परमात्मा सम्पूर्ण प्राणीहरूको स्वामी हुनुहुन्छ, त्यसैले उहाँ सबै जीवात्माका परमआश्रय पनि हुनुहुन्छ। अतः परमपरमात्मा र व्यष्टि जीवात्मा अत्यन्त भिन्न हुन् भन्ने सत्यलाई अस्वीकार गर्न सकिँदैन।

**इति क्षेत्रं तथा ज्ञानं ज्ञेयं चोक्तं समासतः ।**
**मद्भक्त एतद्विज्ञाय मद्भावायोपपद्यते ॥ १९ ॥**

**इति** — यसरी; **क्षेत्रम्** — कर्मक्षेत्र वा शरीर; **तथा** — पनि; **ज्ञानम्** — ज्ञान; **ज्ञेयम्** — जान्नयोग्य विषय; **च** — पनि; **उक्तम्** — भनियो; **समासतः** — संक्षेपमा; **मत्भक्त** — मेरो भक्त; **एतत्** — यी सबै; **विज्ञाय** — जानेर; **मत् भावाय** — मेरा स्वभावलाई; **उपपद्यते** — प्राप्त गर्दछ।

**यस प्रकार मैले कर्मक्षेत्र (शरीर) ज्ञान र ज्ञेयका विषयमा संक्षेपले वर्णन गरेँ। केवल मेरा भक्तहरूले मात्र यसलाई राम्रोसँग बुझ्न सक्दछन् र बुझेर मेरो स्वभावलाई प्राप्त गर्दछन्।**

**तात्पर्य :** भगवान्ले शरीर, ज्ञान र ज्ञेयलाई यहाँ संक्षेपमा वर्णन गर्नुभयो। यो ज्ञान तीनवटा पक्षको हुन्छ— ज्ञाताको, ज्ञेयको र जान्ने प्रक्रियाको। यी तीनबटा कुराको समष्टिलाई विज्ञान भनिन्छ। पूर्णज्ञान भगवान्का शुद्ध भक्तहरूबाट प्रत्यक्ष रूपले प्राप्त गर्न सकिन्छ। अरूले यसलाई बुझ्न सक्दैनन्। अद्वैतवादीहरू भन्छन्— अन्तिम अवस्थामा पुग्दा यी तीनवटा वस्तु एक हुन्छन् पुग्दछन् तर भक्तहरूले यो कुरा स्वीकार गर्दैनन् । ज्ञान तथा ज्ञानको विकासको तात्पर्य कृष्णभावनामा रहेर आफैँलाई बुझ्नु हो। हामी भौतिक चेतनाद्वारा सञ्चालित छौँ तर जब हामीले आफ्ना सम्पूर्ण चेतनालाई कृष्णकर्ममा स्थानान्तरित गरेर भगवान् श्रीकृष्ण नै सबै कुरा हुनुहुन्छ भन्ने अनुभव गर्दछौँ अनि मात्र वास्तविक ज्ञान पाउँदछौँ। अर्को शब्दमा भन्दा ज्ञान भन्ने कुरा भक्तितत्त्वलाई पूर्णरूपले बुझ्ने प्रारम्भिक अवस्थाबाहेक अरू केही होइन। पन्ध्रौँ अध्यायमा यसको विस्तारपूर्वक व्याख्या गरिने छ।

अब सारांशमा के बुझ्न सकिन्छ भने— छैटौँ श्लोकको **महाभूतानिदेखि** लिएर सातौँ श्लोकको **चेतनाधृति**सम्म भौतिक तत्त्वहरू र जीवनका लक्षणहरूका विशेष अभिव्यक्तिको व्याख्या भएको छ। यी सबै मिलेर शरीर वा कर्मक्षेत्रको रूप बन्दछ र आठौँ श्लोकको **अमानित्वम्देखि** बाह्रौँ श्लोकको **तत्त्वज्ञानार्थदर्शनम्सम्म** कर्मक्षेत्रका दुई ज्ञाता— आत्मा र परमात्माको ज्ञान प्राप्त गर्ने विधिको वर्णन गरिएको छ। त्यसपछि, तेह्रौँ श्लोकको **अनादि मत्परम्देखि** अठारौँ श्लोकको **हृदि सर्वस्य विष्ठितम्सम्म** लगातार जीवात्मा र परमात्माको वर्णन गरिएको छ।

यसरी कर्मक्षेत्र (शरीर), त्यसलाई जान्ने विधि र आत्मा तथा परमात्मा गरी तीन कुराको वर्णन यहाँ गरिएको छ। यहाँ विशेष गरी के पनि भनिएको छ भने, केवल भगवान्का शुद्ध भक्तहरूले मात्रै यी तीन कुरालाई स्पष्टसँग बुझ्न सक्दछन्, त्यसैले यस्ता शुद्ध भक्तहरूका लागि यो *भगवद्गीता* पूर्ण उपयोगी छ, किनभने तिनीहरूले नै परमलक्ष्य अर्थात् भगवान् श्रीकृष्णको स्वभावलाई प्राप्त गर्न सक्दछन्। अर्को शब्दमा भन्दा, केवल भक्तहरूले मात्र *भगवद्गीतालाई* बुझेर वाञ्छित फल प्राप्त गर्न सक्दछन्, अरूले सक्दैनन्।

**प्रकृतिं पुरुषं चैव विद्ध्यनादी उभावपि ।**
**विकारांश्च गुणांश्चैव विद्धि प्रकृतिसम्भवान् ॥ २०॥**

**प्रकृतिम्** — प्रकृति; **पुरुषम्** — जीवात्मा; **च** — पनि; **एव** — निश्चय नै; **विद्धि** — जान; **अनादि** — प्रारम्भरहित; **उभौ** — दुवै; **अपि** — पनि; **विकारान्** — विकार; **च** — पनि; **गुणान्** — प्रकृतिका तीन गुणहरू;

**च** — पनि; **एव** — निश्चय नै; **विद्धि** — जान; **प्रकृति** — भौतिक प्रकृति; **सम्भवान्** — उत्पन्न भएको।

**भौतिक प्रकृति र जीवात्मालाई अनादि ठान्नु पर्दछ। तिनका विकारहरू र पदार्थका गुणहरू प्रकृतिको नै उत्पादन हुन्।**

**तात्पर्य :** यस अध्यायमा दिइएको ज्ञानद्वारा मानिसले शरीर (कर्मक्षेत्र) र शरीरको ज्ञाता (आत्मा परमात्मा दुवै) लाई जान्न सक्दछ। भौतिक प्रकृतिद्वारा बनेको यो शरीर कर्मक्षेत्र हो। शरीरमा रहेर शरीरका क्रियाकलापको भोग गर्ने आत्मा नै पुरुष वा जीवात्मा हो। एउटा ज्ञाता यही जीवात्मा हो र अर्को ज्ञाता परमात्मा हुनुहुन्छ। अवश्य बुझ्नुपर्ने कुरा के छ भने, परमात्मा र जीवात्मा यी दुई वस्तु एउटै भगवान्का भिन्नभिन्न अभिव्यक्ति हुन्। जीवात्मा भगवान्का शक्तिको श्रेणीमा पर्दछ र परमात्मा उहाँको आफ्नै विस्तार हो।

भौतिक प्रकृति र जीवात्मा दुवै शाश्वत वस्तु हुन्। यसको अर्थ सृष्टि हुनुभन्दा पहिले पनि यिनको अस्तित्व थियो। यो भौतिक सृष्टि परमेश्वरको शक्तिबाट उत्पन्न भएको हो र जीवात्माहरू पनि त्यसरी नै उत्पन्न भएका हुन्। तर जीवात्माहरू श्रेष्ठ शक्ति हुन्। यो विश्व-ब्रह्माण्ड प्रकट हुनुभन्दा अगाडि पनि जीवात्मा र भौतिक प्रकृतिको अस्तित्व थियो। भौतिक प्रकृति भगवान् महाविष्णुमा विलीन भएको थियो। जब यसको आवश्यकता पऱ्यो महत्‌तत्त्वका माध्यमबाट यो फेरि प्रकट भयो। त्यसै गरी जीवात्मा पनि उहाँभित्र थिए र तिनीहरू बद्ध अवस्थामा रहेकाले भगवान्को सेवा गर्नबाट वञ्चित थिए। त्यसैले तिनीहरूलाई सीधै आध्यात्मिक आकाशमा प्रवेश गर्ने अनुमति थिएन। तर, भौतिक प्रकृतिको प्रकटीकरणसँगै यी जीवात्मालाई फेरि आध्यात्मिक लोक (वैकुण्ठ) मा प्रवेश गर्ने तयारीका लागि भौतिक जगत्‌मा रहेर कर्म गर्ने अवसर दिइयो। भौतिक सृष्टिको रहस्य यही हो। वास्तवमा जीवात्मा मौलिक रूपले भगवानको दिव्य अंश हो तर उसको विद्रोही स्वभावका कारणले ऊ भौतिक प्रकृतिभित्र बद्ध भएर रहन्छ। भगवान्का यी जीवात्मा वा श्रेष्ठ जीवात्मा कसरी प्रकृतिका सम्पर्कमा आए, यो वास्तवमा त्यति महत्त्वको विषय होइन। यथार्थमा यो किन र कसरी भयो भन्ने कुरा भगवान्‌ले नै जान्नु हुन्छ, शास्त्रहरूमा भगवान् भन्नु हुन्छ— प्रकृतिद्वारा आकर्षित भएका ती जीवात्माहरू आफ्नो अस्तित्वका लागि कठोर सङ्घर्ष गरिरहेका छन्। यी केही श्लोकहरूमा गरिएको वर्णनबाट हामीले निश्चयपूर्वक के बुझ्नु पर्दछ भने प्रकृतिका तीन गुणहरूद्वारा हुने सम्पूर्ण विकार र प्रभाव पनि प्रकृतिका उपज हुन्। शरीरका कारणले गर्दा नै जीवात्माका विभिन्न प्रकार र विकारहरू

देखिने हुन् तर जहाँसम्म आत्माको सम्बन्ध छ, सम्पूर्ण जीवात्माहरू एक समान हुन्।

**कार्यकारणकर्तृत्वे हेतुः प्रकृतिरुच्यते ।**
**पुरुषः सुखदुःखानां भोक्तृत्वे हेतुरुच्यते ॥ २१॥**

**कार्य** — कार्यको; **कारण** — र कारणको; **कर्तृत्वे** — सृष्टि गर्ने विषयमा; **हेतुः** — कारण; **प्रकृतिः** — प्रकृति; **उच्यते** — भनिन्छ; **पुरुषः** — जीवात्मा; **सुख** — सुख र; **दुःखानाम्** — दुःखको; **भोक्तृत्वे** — भोग्ने काममा; **हेतुः** — कारण; **उच्यते** — भनिन्छ।

**प्रकृतिलाई सम्पूर्ण भौतिक कार्य र कारणको पनि कारण मानिन्छ र जीवात्मालाई संसारका विभिन्न सुख र दुःख भोग्ने कारण मानिन्छ।**

**तात्पर्य :** भौतिक प्रकृतिको कारणले गर्दा जीवात्माका शरीर र इन्द्रियहरूका बीच विभिन्नता देखिएको हो। भौतिक प्रकृतिमा ८४,००,००० जीवयोनिहरू छन्। यी सबै प्रकृतिका सिर्जना हुन्। जीवात्माका विभिन्न इन्द्रियसुखका कारणबाट ती योनिहरूको उदय हुन्छ अनि यस प्रकार जीव कहिले यो शरीर, कहिले त्यो शरीरमा रहने इच्छा गर्दछ। जुन जीवलाई जस्तो शरीरमा स्थापित गरिन्छ त्यही शरीरअनुरूप उसले विभिन्न किसिमका सुख वा दुःखको भोग गर्दछ। उसका भौतिक सुख-दुःखहरू स्वयम् उसका कारणले होइन उसको शरीरका कारणले आउने गर्दछन्। आफ्नो मूल स्वरूपमा रहँदा जीवलाई भोगको कुनै वास्ता हुँदैन, त्यसैले त्यही नै उसको वास्तविक स्थिति हो। यस प्रकृतिमाथि स्वामित्व जमाउने चाहनाले गर्दा ऊ संसारमा आउँदछ। आध्यात्मिक जगत्मा यस्ता कुनै वस्तु हुँदैनन्। आध्यात्मिक जगत् विशुद्ध छ तर भौतिक जगत्मा प्रत्येक व्यक्तिले विभिन्न किसिमका शारीरिक सुख पाउनका लागि कठिन सङ्घर्ष गरिरहन्छन्। यो शरीर इन्द्रियहरूको परिणाम हो भन्दा कुरा अझ स्पष्ट हुन सक्दछ। इन्द्रियहरू आफ्ना चाहनाहरूलाई तृप्त गर्ने उपकरण हुन्। समग्रमा, शरीर र उपकरणरूपी इन्द्रियहरू भौतिक प्रकृतिका देन हुन्। आगामी श्लोकमा यो अझ स्पष्ट हुनेछ। जीवात्माले उसका पूर्वजन्मका इच्छा-आकाङ्क्षा र कर्मअनुसार परिस्थिति अनुकूलको वरदान वा अभिशाप पाउँदछ। जीवको इच्छा तथा कर्मअनुसार उसलाई प्रकृतिले विभिन्न किसिमका शरीररूपी आवासगृहमा स्थापित गर्दछिन्। त्यस प्रकारको शरीररूपी आवासगृह प्राप्त गर्नु र तदनुसारका सुख-दुःख भोग्नु पर्ने कारण स्वयम् जीवात्मा नै हो। कुनै जीवलाई कुनै विशेष किसिमको शरीरमा स्थापित गर्नासाथ ऊ प्रकृतिको अधीनमा आउँदछ, किनभने शरीर प्राकृतिक

पदार्थ भएकाले प्रकृतिकै नियमअनुसार यसले काम गर्दछ। त्यस समय त्यो नियमलाई परिवर्तन गर्ने शक्ति जीवसँग हुँदैन। उदाहरणका लागि, मानौँ एउटा जीवले कुकुरको शरीर पायो। अब ऊ जबसम्म त्यो कुकुरको शरीरमा बस्दछ तबसम्म उसले कुकुरको जस्तै आचरण गर्नै पर्दछ। अन्य आचरण गर्न ऊ सक्दैन। यदि कुनै जीवलाई सुँगुरको शरीरमा लगेर राखियो उसले बाध्य भएर विष्ठा खानै पर्दछ र सुँगुरको जस्तो आचरण गर्नु पर्दछ। त्यसै गरी कुनै जीवलाई देवताको शरीरमा स्थापित गरिएको उसले आफूले पाएको शरीरअनुसारको आचरण गर्नु पर्दछ। यही प्रकृतिको नियम हो। तर हरेक परिस्थितिमा परमात्मा जीवात्माका साथमा रहनु हुन्छ। यो कुराको उल्लेख वेद (मुण्डकोपनिषद् -३.१.१) मा यसरी गरिएको छ— **द्वा सुपर्णा सयुजा सखाया:** अर्थात्, परमेश्वर जीवात्माप्रति साह्रै दयालु हुनुहुन्छ, त्यसैले उहाँ सधैँ जीवात्माका साथमा रहनु हुन्छ र हरेक परिस्थितिमा उहाँ परमात्माका रूपमा उपस्थित हुनुहुन्छ।

**पुरुषः प्रकृतिस्थो हि भुङ्क्ते प्रकृतिजान्गुणान् ।**
**कारणं गुणसङ्गोऽस्य सदसद्योनिजन्मसु ॥ २२ ॥**

**पुरुषः** — जीवात्मा; **प्रकृतिस्थः** — भौतिक शक्तिमा अवस्थित भएर; **हि** — निश्चय नै; **भुङ्क्ते** — भोग्दछ; **प्रकृतिजान्** — प्रकृतिबाट उत्पन्न; **गुणान्** — प्रकृतिका गुणहरू; **कारणम्** — कारण; **गुणसङ्गः** — प्रकृतिका गुणको सङ्गतमा; **अस्य** — जीवात्माको; **सत-असत्** — असल र खराब; **योनि** — जीवन; **जन्मसु** — जन्ममा।

**यस प्रकार जीवात्माले प्रकृतिमा रहेर प्रकृतिका तीन गुणहरूको उपभोग गर्दै आफ्नो जीवन बिताउँदछ, प्रकृतिसँगको सङ्गतले गर्दा उसको यो स्थिति भएको हो र यसै गरी उसलाई राम्रा र नराम्रा योनिहरू प्राप्त भइरहन्छन्।**

**तात्पर्य :** जीवात्माले एउटा शरीरबाट अर्को शरीरमा कसरी देहान्तरण गर्दछ भन्ने बुझ्नका लागि यो श्लोक अत्यन्त महत्त्वपूर्ण छ। दोस्रो अध्यायमा भनिएको छ— मानिसले कपडा परिवर्तन गरे जस्तै जीवात्माले पनि एउटा शरीर छोडेर अर्को शरीरमा देहान्तरण गर्दछ। भौतिक संसारप्रतिको आसक्तिले गर्दा शरीर परिवर्तन गरिन्छ। जबसम्म जीवात्मा यो झूटो संसारप्रति मुग्ध भइरहन्छ तबसम्म उसले निरन्तर एउटा शरीरबाट अर्को शरीर परिवर्तन गर्न बाध्य भइरहनु पर्दछ। भौतिक प्रकृतिमाथि प्रभुत्व जमाउने इच्छाले गर्दा नै

उसलाई यस किसिमको अवाञ्छित परिस्थितिमा रहनुपरेको हो। भौतिक इच्छाको प्रभावमा परेर जीवात्माले कहिले देवताका रूपमा, कहिले पशुका रूपमा, कहिले पक्षीका रूपमा, कहिले कीराका रूपमा, कहिले मानिसका रूपमा, कहिले जलजन्तुका रूपमा, कहिले सन्तपुरुषका रूपमा र कहिले उडुसका रूपमा जन्म लिनु पर्दछ। यो क्रम चलिरहन्छ र हरेक अवस्थामा जीवले आफूलाई परिस्थितिको स्वामी मान्दछ यद्यपि ऊ स्वयम् भौतिक प्रकृतिका प्रभावको वशीभूत भएर रहेको हुन्छ।

यहाँ जीवात्माले कसरी विभिन्न शरीर प्राप्त गर्दछ भन्ने कुराको व्याख्या गरिएको छ। प्रकृतिका विभिन्न गुणहरूको सङ्गतले गर्दा यस्तो हुन्छ। त्यसैले मानिस प्रकृतिका तीन गुणहरूभन्दा माथि उठेर दिव्य स्थितिमा अवस्थित हुनु पर्दछ। त्यो दिव्य स्थितिलाई कृष्णभावना भन्दछन्। कृष्णभावनामा अवस्थित नभएसम्म जीवलाई उसको भौतिक चेतनाले बारम्बार एउटा शरीरबाट अर्को शरीरमा देहान्तरण गर्न बाध्य बनाइरहन्छ, किनभने ऊसँग अनन्त कालदेखिका भौतिक वासनाहरू हुन्छन्। तर उसले त्यो अवधारणालाई परिवर्तन गर्नु पर्दछ। प्रामाणिक स्रोतबाट सुनेर मात्र यसमा प्रभावकारी परिवर्तन आउन सक्दछ। त्यसको सर्वश्रेष्ठ उदाहरण यहाँ अर्जुन छन्। उनले भगवान् श्रीकृष्णबाट भगवद्विज्ञानको श्रवण गरिरहेका छन्। जीवात्माले पनि यो श्रवणविधि अपनाएमा लामो समयदेखि रहँदै आएको प्रकृतिमाथि प्रभुत्व कायम गर्ने अभिलाषा हराउँदै जानेछ र विस्तारै समानुपातिक रूपले प्रभुत्व जमाउने लामो इच्छा घट्दै जाँदा उसलाई आध्यात्मिक सुखको अनुभूति हुँदै जानेछ। एउटा वैदिक मन्त्रमा भनिएको छ—भगवान्को सङ्गत पाएर मानिस जति-जति विद्वान् हुँदै जान्छ त्यही अनुपातमा उसले शाश्वत आनन्दमय जीवनको आस्वादन गर्दै जान्छ।

**उपद्रष्टानुमन्ता च भर्ता भोक्ता महेश्वरः ।**
**परमात्मेति चाप्युक्तो देहेऽस्मिन्पुरुषः परः ॥ २३ ॥**

**उपद्रष्टा** — नजिकै बसेर हेर्ने; **अनुमन्ता** — अनुमति दिने; **च** — पनि; **भर्ता** — स्वामी; **भोक्ता** — परमभोक्ता; **महेश्वरः** — परमेश्वर; **इति** — पनि; **च** — तथा; **अपि** — निश्चय नै; **उक्तः** — भनिएको छ; **देहे** — शरीरमा; **अस्मिन्** — यो; **पुरुषः** — भोक्ता; **परः** — दिव्य।

**यो शरीरमा एउटा अर्को पनि दिव्य भोक्ता हुनुहुन्छ, उहाँ साक्षी र अनुमति दिने परमस्वामी तथा ईश्वर हुनुहुन्छ र उहाँ परमात्मा भनेर चिनिनु हुन्छ।**

**तात्पर्य :** यहाँ भनिएको छ— निरन्तर जीवात्माका साथमा रहने परमात्मा परमेश्वरको प्रतिनिधि हुनुहुन्छ। उहाँ सामान्य जीवात्मा हुनु हुन्न। अद्वैतवादी दार्शनिकहरू शरीरको ज्ञाता एउटा छ भन्दछन्। उनीहरूका विचारमा परमात्मा र जीवात्मामा कुनै भिन्नता छैन। यसको स्पष्टीकरणका लागि भगवान् भन्नु हुन्छ—"म प्रत्येक शरीरमा परमात्माका रूपमा निवास गर्दछु।" उहाँ जीवात्माभन्दा भिन्न हुनुहुन्छ, दिव्य हुनुहुन्छ। जीवात्माले कुनै एउटा विशेष क्षेत्रका कर्मको मात्र भोग गर्दछ, तर परमात्मा कुनै सीमित भोक्ताका रूपमा र शारीरिक क्रियाकलापमा भाग लिनेका रूपमा मात्र नरहेर साक्षीका रूपमा, द्रष्टाका रूपमा, अनुमतिदाताका रूपमा र परमभोक्ताका रूपमा उपस्थित रहनु हुन्छ। उहाँको नाम परमात्मा हो, आत्मा होइन र उहाँ दिव्य हुनुहुन्छ। आत्मा र परमात्मा भिन्दाभिन्दै हो भन्ने कुरा यहाँ अत्यन्त स्पष्ट छ। परमात्माका हात, पाउहरू सर्वत्र फैलिएका छन् तर जीवात्माको त्यस्तो छैन। परमात्मा परमेश्वर हुनुभएकाले उहाँ जीवात्माभित्र उसले चाहेका भौतिक भोगहरू भोग्ने अनुमति दिनका लागि उपस्थित हुनुहुन्छ। परमात्माको स्वीकृतिबिना जीवात्माले केही गर्न सक्दैन। जीव भुक्त हो र परमेश्वर भोक्ता वा पालनकर्ता हुनुहुन्छ। जीवात्माहरू असङ्ख्य छन् र ती सबैमा परमेश्वर मित्रका रूपमा निवास गर्नु हुन्छ।

वास्तविकता भनेको, जीवात्मा परमेश्वरको शाश्वत अंश हो र यी दुवै मित्रजस्तै अत्यन्त घनिष्ठ सम्बन्धी हुन्। तर जीवात्मामा परमेश्वरको आदेशलाई अस्वीकार गर्ने तथा प्रकृतिमाथि स्वामित्व जमाउने उद्देश्यले स्वतन्त्रतापूर्वक काम गर्न खोज्ने प्रवृत्ति हुन्छ। जीवमा यस्तो प्रवृत्ति हुने हुनाले उसलाई परमेश्वरको तटस्था शक्ति भनिन्छ। जीवात्मा भौतिक शक्तिमा पनि रहन सक्दछ र आध्यात्मिक शक्तिमा अवस्थित हुन पनि सक्दछ। जहिलेसम्म जीव भौतिक शक्तिद्वारा बद्ध हुन्छ, तबसम्म परमेश्वर उसलाई आध्यात्मिक शक्तितर्फ फर्काउनका लागि मित्र वा परमात्माका रूपमा उसको साथमा निवास गर्नु हुन्छ। भगवान् उसलाई पुनः आध्यात्मिक शक्तिमा फिर्ता लैजान सधैँ उत्सुक हुनुहुन्छ, तर आफ्नो थोरै स्वतन्त्रताका कारणले जीवात्माले आध्यात्मिक प्रकाशको सङ्गतलाई निरन्तर अस्वीकार गरिरहन्छ। स्वतन्त्रताको यो दुरुपयोग नै बद्ध प्रकृतिमा उसको भौतिक सङ्घर्षको कारण हो। त्यसैले भगवान्ले भित्र र बाहिर दुवैतिरबाट सधैँ उपदेश दिइरहनु हुन्छ। भगवान्ले बाहिरबाट *भगवद्गीतामा* बताइएजस्तो उपदेश दिनु हुन्छ, र भित्रबाट उहाँले जीवलाई "भौतिक क्षेत्रमा गरिएका तिम्रा क्रियाकलाप तिमीलाई वास्तविक सुख दिने काममा सहयोगी हुँदैनन्" भनेर सम्झाउनु हुन्छ र भन्नु

हुन्छ—"यस्तो काम छोडिदेऊ र तिम्रो विश्वास मतिर फर्काऊ अनि मात्र तिमी सुखी हुनेछौ।" यसरी बुद्धिमान् व्यक्ति, जसले आफ्नो श्रद्धा भगवान् वा परमात्मामा लगाउँदछ, त्यसले सत् चित् र आनन्दमय जीवनतिर प्रगति गर्न थाल्दछ।

**य एवं वेत्ति पुरुषं प्रकृतिं च गुणैःसह ।**
**सर्वथा वर्तमानोऽपि न स भूयोऽभिजायते ॥ २४ ॥**

**यः** — जो; **एवम्** — यसरी; **वेत्ति** — जान्दछ; **पुरुषम्** — जीवात्मालाई; **प्रकृतिम्** — भौतिक प्रकृति; **च** — तथा; **गुणैः** — प्रकृतिका गुणहरू; **सह** — सँग; **सर्वथा** — सबै प्रकारले; **वर्तमानः** — स्थित भएर; **अपि** — यसबाहेक; **न** — होइन; **सः** — त्यो; **भूयः** — फेरि; **अभिजायते** — जन्म लिन्छ।

**जसले प्रकृति, जीवात्मा र प्रकृतिका गुणहरूको अन्तरक्रियासँग सम्बन्धित दर्शन बुझ्दछ त्यसले अवश्य मोक्ष पाउँदछ। वर्तमान स्थिति जस्तो भए पनि त्यसले पुनर्जन्म लिनु पर्दैन।**

**तात्पर्य :** प्रकृति, परमात्मा, जीवात्मा र यिनका बीचको अन्तरसम्बन्धको स्पष्ट जानकारीले मानिसलाई मुक्त हुनयोग्य बनाउँदछ र भौतिक प्रकृतितिर फर्किन बाध्य नभई आध्यात्मिक वातावरणतर्फ नै फर्कनयोग्य बनाउँदछ। ज्ञानको प्रतिफल यही हो। जीवात्मा संयोगवश यस भौतिक जगत्मा फ्याँकिनु परेको कुरालाई स्पष्टसँग बुझ्नु नै ज्ञानको लक्ष्य हो। प्रामाणिक आचार्यहरू, सन्तपुरुषहरू र गुरुका सङ्गतमा रहेर मानिसले आफ्नो निजी प्रयासद्वारा आफ्नो स्थितिलाई बुझ्नु पर्दछ अनि भगवान्ले जुन रूपमा *भगवद्गीताको* उपदेश दिनुभएको छ त्यसलाई त्यसै रूपमा बुझेर आफूलाई आध्यात्मिक चेतना वा कृष्णभावनामा फर्काउनु पर्दछ। यति गरेपछि उसले फेरि कहिल्यै पनि यो भौतिक संसारमा जन्म लिनु पर्दैन र ऊ सच्चिदानन्दमय जीवन बिताउनका लागि वैकुण्ठलोकमा स्थानान्तरित हुन्छ।

**ध्यानेनात्मनि पश्यन्ति केचिदात्मानमात्मना ।**
**अन्ये सांख्येन योगेन कर्मयोगेन चापरे ॥ २५ ॥**

**ध्यानेन** — ध्यानद्वारा; **आत्मनि** — आत्मामा; **पश्यन्ति** — देख्दछन्; **केचित्** — कसैले; **आत्मानम्** — परमात्मालाई; **आत्मना** — मनले; **अन्ये** — अरूहरू; **सांख्येन** — दार्शनिक छलफलद्वारा; **योगेन** — योग पद्धतिद्वारा; **कर्मयोगेन** — निष्काम कर्मद्वारा; **च** — पनि; **अपरे** — अरूहरू।

**कसैले ध्यानद्वारा परमात्मालाई आफैंभित्र देख्दछन्, कोही ज्ञानको विकासद्वारा र अरू कसैले निष्काम कर्मद्वारा पनि परमात्माको दर्शन पाउँदछन्।**

**तात्पर्य :** अर्जुनलाई सूचित गर्दै भगवान् भन्नु हुन्छ—जहाँसम्म आत्मसाक्षात्कारका लागि मानिसको खोज अनुसन्धानको प्रसङ्ग छ, त्यस्ता बद्ध जीवहरूलाई दुई वर्गमा विभाजन गर्न सकिन्छ। जो नास्तिक, जडवादी र संशयवादी छन्, तिनीहरू आध्यात्मिक अवधारणाभन्दा पर छन् तर अरूहरू जो आफ्नो आध्यात्मिक जीवनसम्बन्धी ज्ञानप्रति श्रद्धावान् छन् ती आत्मदर्शी भक्तहरू नै यथार्थमा दार्शनिक र कर्मयोगी हुन्। जो सधैँ अद्वैतवादी सिद्धान्तको स्थापना गर्न चाहन्छन् तिनीहरू पनि नास्तिक जडवादीमा गनिन्छन्। अर्को शब्दमा, केवल भगवान्का भक्तहरू नै आध्यात्मिक ज्ञानमा राम्रोसँग अवस्थित हुन्छन्, किनभने तिनीहरूले यो भौतिक जगत्भन्दा पर वैकुण्ठलोक छ र त्यहाँ भगवान् हुनुहुन्छ अनि उनै सर्वव्यापी भगवान् हरेकका हृदयमा परमात्माका रूपमा विस्तारित भएर निवास गर्नु हुन्छ भन्ने बुझेका हुन्छन्। निश्चय नै केही व्यक्तिहरू यस्ता छन् जो ज्ञानको विकासद्वारा भगवान्लाई जान्ने प्रयास गर्दछन्। तिनीहरूलाई पनि श्रद्धावान्हरूको पङ्क्तिमा गन्न सकिन्छ। साङ्ख्य दार्शनिकहरू यो भौतिक जगत्लाई २४ तत्त्वका रूपमा विश्लेषण गर्दछन् र आत्मालाई पच्चीसौँ तत्त्व मान्दछन्। जब तिनीहरू व्यष्टि आत्माको प्रकृतिलाई भौतिक तत्त्वहरूभन्दा परको वस्तु हो भन्ने बुझ्न सक्षम हुन्छन् त्यस समय जीवात्माभन्दा माथि भगवान् हुनुहुन्छ भन्ने कुरा बुझ्न पनि तिनीहरू समर्थ हुनेछन्। यसरी हेर्दा भगवान् २६ औँ तत्त्वमा पर्नुहुन्छ। यसरी विस्तारै तिनीहरू पनि कृष्णभावनाको भक्तिको स्तरसम्म आइ पुग्दछन्। फलको आशा नराखी कर्म गर्नेहरू पनि आफ्नो आचरणमा पूर्ण हुन्छन्। उनीहरूलाई कृष्णभावनाको भक्तिको स्तरसम्म उन्नति गर्ने अवसर दिइन्छ। यहाँ भनिएको छ—केही मानिसहरू शुद्ध चेतना भएका हुन्छन् र तिनीहरू ध्यानद्वारा परमात्मालाई प्राप्त गर्ने प्रयत्न गर्दछन्। जब तिनीहरूले आफैंभित्र परमात्मालाई प्राप्त गर्दछन् त्यस समय तिनीहरू दिव्य स्थितिमा आइ पुग्दछन्। यसै गरी ज्ञानको विकाशद्वारा परमात्मालाई जान्न खोज्ने व्यक्तिहरू पनि छन् र हठयोग पद्धतिको अनुसरण गर्दै बच्चाले खेलेजस्तै गरेर भगवान्लाई सन्तुष्ट पार्ने प्रयास गर्नेहरू पनि छन्।

**अन्ये त्वेवमजानन्तः श्रुत्वान्येभ्य उपासते ।**
**तेऽपि चातितरन्त्येव मृत्युं श्रुतिपरायणाः ॥ २६ ॥**

**अन्ये** — अरूहरू; **तु** — तर; **एवम्** — यस प्रकार; **अजानन्तः** — आध्यात्मिक

ज्ञान नभएका; **श्रुत्वा** — सुनेर; **अन्येभ्यः** — अरूहरूबाट; **उपासते** — पूजा गर्न थाल्दछन्; **ते** — तिनीहरू; **अपि** — पनि; **च** — तथा; **अतितरन्ति** — पार हुन्छन्; **एव** — निश्चय नै; **मृत्युम्** — मृत्युको बाटो; **श्रुतिपरायणाः** — श्रवण विधिप्रति झुकाव हुनेहरू।

**आध्यात्मिक ज्ञानबाट अपरिचित व्यक्तिहरूले अरूबाट सुनेर भगवान्‌को पूजा गर्न थाल्दछन्। प्रामाणिक व्यक्तिहरूबाट सुन्ने मनोवृत्ति भएका ती व्यक्तिहरूले पनि जन्म र मृत्युको पथलाई पार गर्दछन्।**

**तात्पर्य :** यो श्लोक व्यवहारिक रूपले आधुनिक समाजमा लागू हुन्छ, किनभने वर्तमान आधुनिक समाजमा आध्यात्मिक विषयको व्यवहारिक शिक्षा दिइँदैन। केही मानिसहरू नास्तिक देखिन्छन्, केही संशयवादी देखिन्छन् वा कतिपय दार्शनिक पनि देखिन्छन् तर तिनलाई दर्शनको वास्तविक ज्ञान हुँदैन। जहाँसम्म सामान्य मानिसहरूका सन्दर्भ छ, यदि तिनीहरू पुण्यात्मा भएमा श्रवणद्वारा प्रगति गर्ने अवसर तिनलाई प्राप्त हुन्छ। यो श्रवणविधि अति महत्त्वपूर्ण छ। आधुनिक जगत्‌मा कृष्णभावनाको प्रचार गर्ने भगवान् श्रीचैतन्य महाप्रभुले श्रवणविधिलाई विशेष जोड दिनुभएको छ, किनभने साधारण मानिसले पनि आधिकारिक स्रोतबाट केवल श्रवण मात्र गरेपनि उसले प्रगति गर्न सक्दछ। विशेष गरी, भगवान् चैतन्य महाप्रभुका अनुसार यदि कसैले **"हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे, हरे राम हरे राम राम राम हरे हरे।"** यो महामन्त्रको दिव्य ध्वनि श्रवण गरेमा त्यसको प्रगति हुन्छ। त्यसैले पनि भनिएको छ— सबैले महान् तथा सिद्ध आत्माबाट श्रवण गरेर लाभ लिनु पर्दछ र बिस्तारै सबै कुरा बुझ्न सक्ने हुनु पर्दछ। अनि मात्र निःसन्देह भगवान्‌को पूजा-उपासना हुनेछ।

भगवान् चैतन्य महाप्रभुले भन्नुभएको छ— यस युगमा कसैले पनि आफ्नो स्थितिलाई परिवर्तन गर्नुपर्ने आवश्यकता छैन तर काल्पनिक तर्कहरूद्वारा परमसत्यलाई बुझ्ने प्रयत्नलाई त्यागिदिनु पर्दछ। मानिसले परमसत्यको ज्ञान प्राप्त गरेका महापुरुषहरूको सेवक बन्न सिक्नु पर्दछ। यदि कसैले शुद्ध भक्तको आश्रय लिएर तिनबाट आत्मसाक्षात्कारका सम्बन्धमा सुन्ने पर्याप्त सौभाग्यसमेत पाएको छ र उनकै चरणचिन्हको अनुसरण गरेको छ भने त्यो व्यक्ति विस्तारै शुद्ध भक्तको स्तरमा पुग्दछ। यस श्लोकमा श्रवणविधिलाई नै बलपूर्वक सिफारिस गरिएको छ र यो अत्यन्त उपयुक्त पनि छ। सामान्य मानिसहरू प्रायः तथाकथित दार्शनिकहरूजस्ता समर्थ हुँदैनन्। श्रद्धापूर्वक प्रामाणिक आचार्यबाट गरिएको श्रवणले नै तिनलाई यस भौतिक जगत्‌बाट पार भई भगवद्धाममा फर्कन सहायता पुऱ्याउँदछ।

**यावत्सञ्जायते किञ्चित्सत्त्वं स्थावरजङ्गमम् ।**
**क्षेत्रक्षेत्रज्ञसंयोगात्तद्विद्धि भरतर्षभ ॥ २७ ॥**

**यावत्** — जो जो; **सञ्जायते** — उत्पन्न हुन्छ; **किञ्चित्** — कुनै वस्तु; **सत्त्वम्** — अस्तित्व; **स्थावर** — अचर; **जङ्गमम्** — चर (हिँडडुल गर्ने); **क्षेत्र** — शरीरको, **क्षेत्रज्ञ** — शरीरको ज्ञाता; **संयोगात्** — परस्पर जोडिनाले; **तत् विद्धि** — तिमीले जान्नपर्छ; **भरतर्षभ** — हे भरतवंशीहरूमा श्रेष्ठ।

**हे भरतर्षभ! यो अस्तित्वमा चर र अचर प्राणीहरू जे-जति तिमीले देखिरहेका छौ त्यो सबै केवल कर्मक्षेत्र र कर्मक्षेत्रका ज्ञाताको संयोग मात्र हो।**

**तात्पर्य :** यस श्लोकमा ब्रह्माण्डको सृष्टि हुनुभन्दा अगाडि नै पनि अस्तित्वमा रहेका भौतिक प्रकृति र जीवात्मा दुवैको व्याख्या गरिएको छ। जुन-जुन वस्तु सृजित छन् ती सबै जीवात्मा र भौतिक प्रकृतिका संयोजन मात्र हुन्। रूख, पहाड, डाँडा आदि धेरै अचर सृष्टि छन् जो गतिशील छैनन्, त्यसै गरी धेरै विचरणशील प्राणीहरूको पनि अस्तित्व छ। यी सबै भौतिक प्रकृति र पराप्रकृति वा जीवात्माको संयोगबाट उत्पन्न भएका हुन्। पराप्रकृतिको स्पर्शबिना जीवात्मासहित कुनै पनि वस्तु उत्पन्न हुन सक्दैन। भौतिक प्रकृति र आध्यात्मिक प्रकृतिबीचको सम्बन्ध शाश्वत चलिरहन्छ र यो संयोग परमात्माद्वारा प्रभावित हुन्छ। त्यसैले भगवान् पराप्रकृति र अपराप्रकृति दुवैका नियन्त्रक हुनुहुन्छ। भौतिक प्रकृति उहाँद्वारा नै निर्मित छ र पराप्रकृतिलाई यही भौतिक प्रकृतिभित्र राखिएको छ। यसरी यी सम्पूर्ण क्रियाकलापहरू र अभिव्यक्तिहरू सम्पन्न हुन्छन्।

**समं सर्वेषु भूतेषु तिष्ठन्तं परमेश्वरम् ।**
**विनश्यत्स्वविनश्यन्तं यः पश्यति स पश्यति ॥ २८ ॥**

**समम्** — समान रूपले; **सर्वेषु** — सबै; **भूतेषु** — जीवात्माहरूमा; **तिष्ठन्तम्** — निवास गर्ने; **परम-ईश्वरम्** — परमात्मालाई; **विनश्यत्सु** — नाशवान् वस्तुमा; **अविनश्यन्तम्** — अविनाशी; **यः** — जसले; **पश्यति** — देख्दछ; **सः** — त्यसले; **पश्यति** — वास्तवमा देख्दछ।

**जसले सम्पूर्ण शरीरमा विद्यमान जीवात्मालाई परमात्माका साथमा देख्दछ र विनाशशील शरीरमा रहने आत्मा र परमात्मा दुवैलाई अविनाशी देख्दछ, त्यसैले वास्तविकता देखेको हुन्छ।**

**तात्पर्य :** जसले सत्सङ्गद्वारा शरीर, शरीरको स्वामी आत्मा र आत्माको मित्र परमात्मा यी तीन वस्तुलाई एकैसाथ संयुक्त रूपमा देख्दछ त्यो नै वास्तवमा ज्ञानी

हो। आध्यात्मिक विषयका वास्तविक ज्ञाताको सङ्गत नपाएसम्म मानिसले यी तीन वस्तुलाई देख्न सक्दैन। यस प्रकारको सङ्गत नपाउने मानिसहरू अज्ञानमा हुन्छन्। तिनीहरू केवल शरीरलाई मात्र देख्दछन् र यो शरीर नष्ट भएपछि सबै वस्तु समाप्त हुन्छ भन्ने सोच्दछन् तर वास्तवमा त्यसो होइन। शरीर नष्ट भएपछि पनि आत्मा र परमात्मा यी दुई तत्त्व विद्यमान रहन्छन् र तिनीहरू विभिन्न प्रकारका चर तथा अचर प्राणीका शरीरमा विचरण गरिरहन्छन्। कहिलेकाहीँ संस्कृतको **परमेश्वर** शब्द जीवात्माका लागि पनि प्रयोग गरिन्छ, किनभने आत्मा शरीरको स्वामी हो र शरीरको विनाश भएपछि आत्मा अर्को शरीरमा प्रवेश गर्दछ। यसरी आत्मा शरीरको स्वामी हो। तर कसैले परमेश्वर शब्दको अर्थ परमात्मा पनि हो भन्ने गर्दछन्। दुवै अवस्थामा आत्मा र परमात्मा दुवैको अस्तित्व निरन्तर रहिरहन्छ, तिनीहरू नष्ट हुँदैनन्। जसले यस किसिमले हेर्न सक्दछ त्यसले मात्र वास्तवमा के भइरहेछ भन्ने देख्न सक्दछ।

**समं पश्यन्हि सर्वत्र समवस्थितमीश्वरम् ।**
**न हिनस्त्यात्मनात्मानं ततो याति परां गतिम् ॥ २९ ॥**

**समम्** — समान रूपले; **पश्यन्** — देख्दै; **हि** — निश्चय नै; **सर्वत्र** — सबैतिर; **समवस्थितम्** — समान रूपले अवस्थित; **ईश्वरम्** — परमात्मालाई; **न हिनस्ति** — भ्रष्ट गराउँदैन; **आत्मना** — मनद्वारा; **आत्मानम्** — आत्मालाई; **ततः** — त्यसपछि; **याति** — पुग्दछ; **पराम्** — दिव्य; **गतिम्** — लक्ष्यमा।

**जसले परमात्मालाई समान रूपले सबैतिर सबै जीवात्मामाभएको देख्दछ त्यसले आफ्नो मनद्वारा आफूलाई अधोपतन वा पतित गराउँदैन। यसरी ऊ परमलक्ष्यमा पुग्दछ।**

**तात्पर्य :** भौतिक अस्तित्वलाई स्वीकार गर्नाले नै जीवात्मा आफ्नो आध्यात्मिक अस्तित्वभन्दा भिन्न अवस्थामा स्थित भएको हो। तर यदि उसले परमेश्वर आफ्नो परमात्मा स्वरूपमा सर्वत्र विद्यमान हुनुहुन्छ भन्ने बुझेमा वा प्रत्येक जीवात्मामा भगवान्‌को उपस्थिति भएको देख्न सकेमा विनाशकारी मानसिकताद्वारा आफूलाई पथभ्रष्ट बनाउँदैन र विस्तारै ऊ आध्यात्मिक जगत्‌तर्फ अघि बढ्दछ। मन सामान्यतया इन्द्रियतृप्तिका प्रक्रियामा लागिरहन खोज्छ तर त्यही मनलाई परमात्मातिर फर्काए भने मानिस आध्यात्मिक ज्ञानमा उन्नत हुन्छ।

**प्रकृत्यैव च कर्माणि क्रियमाणानि सर्वशः ।**
**यः पश्यति तथात्मानमकर्तारं स पश्यति ॥ ३० ॥**

**प्रकृत्या** — प्रकृतिद्वारा; **एव** — निश्चय नै; **च** — पनि; **कर्माणि** — कामहरू;

**क्रियमाणानि** — सम्पन्न गरिएका; **सर्वशः** — सबै प्रकारले; **यः** — जो; **पश्यति** — देख्दछ; **तथा** — पनि; **आत्मानम्** — आफैँलाई; **अकर्तारम्** — अकर्ता; **सः** — त्यो; **पश्यति** — पूर्णरूपले देख्दछ।

**जसले प्रकृतिबाट उत्पन्न भएको शरीरद्वारा नै सम्पूर्ण कार्यहरू भएको देख्दछ र आत्माले केही नगरेको देख्दछ, त्यही नै वास्तविक द्रष्टा हो।**

**तात्पर्य :** यो शरीर परमात्माको निर्देशनमा प्रकृतिद्वारा बनाइएको हो र शरीरका जे-जति कामहरू हुन्छन् ती उसले गरेको होइन। मानिस सुखका लागि वा दुःखका लागि जेजस्ता काम गर्दछ शारीरिक संरचनाका कारणले गर्दा ऊ त्यो काम गर्न बाध्य हुन्छ। तर आत्मा यी सम्पूर्ण शारीरिक क्रियाकलापबाट अलग रहन्छ। पूर्वजन्मका चाहनाअनुसार नै मानिसले शरीर प्राप्त गर्दछ। ती चाहना पूर्ण गर्नका लागि उसलाई शरीर दिइएको हुन्छ र त्यही शरीरका साथमा रहेर उसले त्यसै अनुरूपको काम गर्दछ। व्यवहारिक रूपमा भन्दा यो शरीर इच्छाहरू परिपूर्ति गर्नका लागि भगवान्‌ले बनाउनुभएको एउटा यन्त्र हो। चाहनाहरूका कारणले सुख वा दुःख पाउनका लागि मानिस कठिन परिस्थितिमा पर्दछ। जब जीवमा यस्तो दिव्य दृष्टिकोणको विकास हुन्छ उसले शारीरिक क्रियाकलापभन्दा भिन्न स्वरूपको निर्माण गर्दछ। जोसँग यस्तो दृष्टि छ त्यो नै वास्तविक द्रष्टा हो।

**यदा भूतपृथग्भावमेकस्थमनुपश्यति ।**
**तत एव च विस्तारं ब्रह्म सम्पद्यते तदा ॥ ३१॥**

**यदा** — जब; **भूत** — जीवात्माको; **पृथग्भावम्** — अलग परिचय; **एकस्थम्** — एउटैमा स्थित; **अनुपश्यति** — कुनै अधिकारीका मार्फत् देख्ने प्रयास गर्दछ; **तत एव** — त्यसपछि; **च** — पनि; **विस्तारम्** — विस्तार; **ब्रह्म** — परमब्रह्म; **सम्पद्यते** — प्राप्त गर्दछ; **तदा** — त्यस समय।

**जब कुनै विवेकी मानिसले विभिन्न भौतिक शरीरका कारणले बनेका विभिन्न स्वरूपलाई विभिन्न नदेखेर एउटै देख्दछ र सर्वत्र जीवात्माको विस्तार भएको देख्दछ त्यसले ब्रह्मभाव प्राप्त गर्दछ।**

**तात्पर्य :** आफ्नै विविध चाहनाहरूका कारणले जीवात्माले विभिन्न शरीर प्राप्त गरेका हुन् र यथार्थमा आत्मासँग शरीरको कुनै मौलिक स्वामीत्व छैन भन्ने देख्नसक्ने व्यक्ति नै वास्तविक द्रष्टा हो। शारीरिक अवधारणाको बुद्धिका कारणले गर्दा नै हामीले कसैलाई देवता, कसैलाई मानिस, कसैलाई कुकुर, कसैलाई बिरालो इत्यादि देख्दछौँ। यो भौतिक दृष्टि हो वास्तविक दृष्टि होइन।

जीवनसम्बन्धी भौतिक धारणाले गर्दा यो भेदभाव भएको हो। यो भौतिक शरीरको नाश भएपछि रहने आत्मा एउटै हो। भौतिक प्रकृतिको सम्पर्कले गर्दा आत्माले विभिन्न शरीर धारण गर्दछ। जसले यो कुरालाई देख्न सक्दछ त्यसले आध्यात्मिक दृष्टि प्राप्त गर्दछ। यसरी जो व्यक्ति यो मानिस हो, यो पशु हो, यो ठुलो वा सानो हो भन्ने भेदभावबाट मुक्त हुन्छ, उसको चेतना शुद्ध हुन्छ र ऊ आफ्नो आध्यात्मिक पहिचानका साथ कृष्णभावनाको विकास गर्न सक्षम हुन्छ। त्यसपछि वस्तुहरूलाई उसले कसरी देख्दछ भन्ने कुराको व्याख्या आगामी श्लोकमा गरिने छ।

**अनादित्वान्निर्गुणत्वात्परमात्मायमव्ययः ।**
**शरीरस्थोऽपि कौन्तेय न करोति न लिप्यते ॥ ३२ ॥**

**अनादित्वात्** — अनादि भएका कारणले; **निर्गुणत्वात्** — दिव्य भएकाले; **परम** — भौतिक प्रकृतिभन्दा पर; **आत्मा** — आत्मा; **अयम्** — यो; **अव्ययः** — अविनाशी; **शरीरस्थः** — शरीरमा निवास गर्ने; **अपि** — यद्यपि; **कौन्तेय** — हे कुन्तीपुत्र; **न करोति** — कहिल्यै केही गर्दैन; **नलिप्यते** — लिप्त हुँदैन।

**शाश्वत दृष्टि भएका मानिसले यो अविनाशी आत्मा दिव्य छ, नित्य छ र भौतिक गुणहरूभन्दा पर छ भन्ने देख्न सक्दछन्। हे अर्जुन! भौतिक शरीरको सम्पर्कमा रहेको भएपनि यो आत्माले न केही गर्दछ न कुनै वस्तुमा लिप्त हुन्छ।**

**तात्पर्य :** भौतिक शरीरको जन्म हुने हुनाले आत्मा पनि त्योसँगै जन्मिएजस्तो देखिन्छ तर वास्तवमा आत्मा जन्मिँदैन, यो शाश्वत छ र भौतिक शरीरमा रहेर पनि यो दिव्य छ, नित्य छ। त्यसैले यसलाई नष्ट गर्न सकिँदैन। स्वभावले यो आनन्दमय छ। ऊ स्वयम् आफू कुनै भौतिक क्रियाकलापमा संलग्न हुँदैन, त्यसैले भौतिक शरीरका सम्पर्कमा रहेर सम्पन्न गरिएका कर्मले पनि उसलाई अल्झाउँदैन।

**यथा सर्वगतं सौक्ष्म्यादाकाशं नोपलिप्यते ।**
**सर्वत्रावस्थितो देहे तथात्मा नोपलिप्यते ॥ ३३ ॥**

**यथा** — जसरी; **सर्वगतम्** — सर्वव्यापी; **सौक्ष्म्यात्** — सूक्ष्म हुनाले; **आकाशं** — आकाश; **न उपलिप्यते** — लिप्त हुँदैन; **सर्वत्र** — सबै ठाउँमा; **अवस्थित** — रहेको; **देहे** — शरीरमा; **तथा** — त्यसै गरी; **आत्मा** — आत्मा; **न उपलिप्यते** — लिप्त हुँदैन।

**आकाश सर्वव्यापी छ तैपनि अत्यन्त सूक्ष्म हुनाले कुनै वस्तुमा लिप्त**

**हुँदैन, त्यसै गरी ब्रह्मदृष्टिमा स्थित भएको आत्मा शरीरभित्र रहेर पनि शरीरमा लिप्त हुँदैन।**

**तात्पर्य :** पानी, हिलो, विष्ठा र जुनसुकै वस्तुमा पनि हावा प्रवेश गर्दछ तर त्यो हावा कुनै वस्तुसँग लिप्त हुँदैन। त्यसै गरी विभिन्न प्रकारका शरीरमा अवस्थित भएर पनि जीव आफ्नो सूक्ष्म प्रकृतिका कारणले ती सबै वस्तुहरूबाट अलग्ग नै रहन्छ। त्यसैले जीव कसरी यो भौतिक शरीरको सम्पर्कमा आउँदछ र शरीरको विनाश भएपछि कसरी यसबाट पृथक् हुन्छ भन्ने कुरा यी भौतिक आँखाले देख्न सम्भव छैन। यो यस्तै छ भनेर कुनै पनि वैज्ञानिकले निश्चय गर्न सक्दैन।

**यथा प्रकाशयत्येकः कृत्स्नं लोकमिमं रविः ।**
**क्षेत्रं क्षेत्री तथा कृत्स्नं प्रकाशयति भारत ॥ ३४ ॥**

**यथा** — जसरी; **प्रकाशयति** — प्रकाशित गर्दछ; **एकः** — एउटा; **कृत्स्नम्** — सम्पूर्ण; **लोकम्** — लोकलाई; **इमम्** — यो; **रवि** — सूर्यले; **क्षेत्रम्** — यो शरीरलाई; **क्षेत्री** — आत्माले; **तथा** — त्यसै गरी; **कृत्स्नम्** — सम्पूर्ण रूपले; **प्रकाशयति** — प्रकाशित गर्दछ; **भारत** — हे भरतपुत्र।

**हे भरतपुत्र! जसरी एउटा सूर्यले यो सम्पूर्ण ब्रह्माण्डलाई प्रकाशित गर्दछ त्यसै गरी शरीरमा रहेको यो आत्माले पनि चेतनाद्वारा सम्पूर्ण शरीरलाई प्रकाशित गर्दछ।**

**तात्पर्य :** चेतनाका सम्बन्धमा धेरै सिद्धान्तहरू छन्। यहाँ यो *भगवद्गीतामा* सूर्य र सूर्य प्रकाशको उदाहरण दिइएको छ। जसरी सूर्य एक ठाउँमा स्थित रहेर सम्पूर्ण ब्रह्माण्डलाई प्रकाशित गर्दछ, त्यसै गरी शरीरको भित्री हृदयमा रहेको आत्माको सानो कणले पनि चेतनाद्वारा सारा शरीरलाई प्रकाशित गरिरहेको हुन्छ। यस प्रकार चेतना नै आत्माको उपस्थितिको प्रमाण हो। शरीरभित्र आत्मा रहँदासम्म सम्पूर्ण शरीरभरि चेतना रहन्छ र शरीरबाट आत्मा निस्किएर जानासाथ त्यहाँ चेतना हुँदैन। बुद्धिमान् मानिसले यसलाई सजिलै बुझ्न सक्दछन्। अतः चेतना पदार्थको संयोगबाट उत्पन्न भएको वस्तु होइन। यो जीवनको लक्षण हो। जीवात्माको चेतना गुणात्मक रूपले परमचेतनासँग अभिन्न भए पनि यो परमचेतना होइन, किनभने एउटा विशेष शरीरको चेतना अर्को शरीरको चेतनाको अंश हुन सक्दैन तर जीवात्माको मित्र बनेर सम्पूर्ण शरीरहरूमा रहेको परमात्मा सम्पूर्ण शरीरहरूप्रति सचेत हुनुहुन्छ। परमात्मा र जीवात्मामा यही भिन्नता छ।

**क्षेत्रक्षेत्रज्ञयोरेवमन्तरं ज्ञानचक्षुषा ।**
**भूतप्रकृतिमोक्षं च ये विदुर्यान्ति ते परम् ॥ ३५ ॥**

**क्षेत्र** — शरीर; **क्षेत्रज्ञयोः** — शरीरका स्वामीको; **एवम्** — यसरी; **अन्तरम्** — अन्तर; **ज्ञानचक्षुषा** — ज्ञान दृष्टिद्वारा; **भूत** — जीवात्माको; **प्रकृति** — भौतिक प्रकृतिबाट; **मोक्षम्** — मुक्ति; **च** — पनि; **ये** — जो; **विदुः** — जान्दछन्; **यान्ति** — पुग्दछन्; **ते** — तिनीहरू; **परम** — परब्रह्ममा।

**ज्ञानका आँखाले शरीर र शरीरको ज्ञाताबीच रहेको भिन्नतालाई देख्न सक्ने र सांसारिक बन्धनबाट मुक्त हुने विधि जान्ने व्यक्तिले परमलक्ष्य प्राप्त गर्न सक्दछ।**

**तात्पर्य :** यो तेह्रौँ अध्यायको तात्पर्य मानिसले शरीर, शरीरको ज्ञाता र परमात्माका बीचमा रहेको भिन्नता बुझ्नु पर्दछ भन्ने हो। मानिसले आठौँ श्लोकदेखि बाह्रौँ श्लोकसम्म वर्णन गरिएको मुक्तिको विधि पनि जान्नु पर्दछ। अनि मात्र ऊ परमलक्ष्यसम्म पुग्न सक्दछ। श्रद्धालु मानिसले सर्वप्रथम भगवान्का बारेमा सुन्नका लागि सत्सङ्ग गर्नु पर्दछ र यसरी ऊ विस्तारै प्रबुद्ध हुन्छ। सुयोग्य गुरु स्वीकार गरेर मानिसले उक्त गुरुबाट पदार्थ र आत्माका बीचमा रहेको भिन्नतालाई बुझ्न सक्दछ र त्यही नै पछि गएर उसका लागि आध्यात्मिक अनुभूतिको आधारशिला बन्दछ। गुरुले विभिन्न प्रकारका उपदेशहरूद्वारा आफ्नो शिष्यलाई जीवनको भौतिकवादी धारणाबाट मुक्त हुन सिकाउँनु हुन्छ। उदाहरणका लागि *भगवद्गीतामा* भगवान् श्रीकृष्णले अर्जुनलाई भौतिकवादी विचारबाट मुक्त हुने उपदेश दिइरहनुभएको छ।

मानिसले बुझ्न सक्दछ— यो शरीर पदार्थ हो र यसलाई २४ तत्त्वहरूमा विश्लेषित गर्न सकिन्छ। शरीर स्थूल अभिव्यक्ति हो र मन तथा मनोवैज्ञानिक प्रभाव सूक्ष्म अभिव्यक्ति हुन्। जीवनका लक्षणहरू यिनै तत्त्वहरूका अन्तरक्रिया हुन्। योभन्दा माथि वा पर आत्मा हुन्छ र त्यहाँ परमात्मा पनि हुनुहुन्छ। आत्मा र परमात्मा दुईवटा भिन्न तत्त्व हुन्। आत्मा र चौबीसवटा भौतिक तत्त्वहरूको संयोगले यो जगत् क्रियाशील भइरहेको छ। जसले भौतिक जगत्को यो संरचनालाई आत्मा र तिनै चौबीस तत्त्वका संयोगबाट बनेको देख्दछ र त्यहाँ परमात्माको अवस्थिति पनि देख्दछ, त्यो व्यक्ति आध्यात्मिक लोकमा फर्कनयोग्य हुन्छ। यी प्रसङ्गहरू चिन्तन र अनुभूति गर्नका लागि हुन्, त्यसैले हामीले गुरुका सहायताबाट यस अध्यायलाई राम्रोसँग बुझ्नु पर्दछ।

यसरी *श्रीमद्भगवद्गीता* ग्रन्थअन्तर्गत 'प्रकृति पुरुष र चेतना' शीर्षक तेह्रौँ अध्यायको भक्तिवेदान्त तात्पर्य समाप्त भयो।

## अध्याय-चौध

# प्रकृतिका तीन गुण

श्रीभगवानुवाच

**परं भूयः प्रवक्ष्यामि ज्ञानानां ज्ञानमुत्तमम् ।**
**यज्ज्ञात्वा मुनयः सर्वे परां सिद्धिमितो गताः ॥ १ ॥**

**श्रीभगवानुवाच** — भगवान्‌ले भन्नुभयो; **परम्** — दिव्य; **भूयः** — फेरि; **प्रवक्ष्यामि** — भन्नेछु; **ज्ञानानाम्** — सम्पूर्ण ज्ञानहरूमा; **ज्ञानम्** — ज्ञान; **उत्तमम्** — उत्तम; **( परम ) यत्** — जसलाई; **ज्ञात्वा** — जानेर; **मुनयः** — मुनिहरू; **सर्वे** — सबै; **पराम्** — दिव्य; **सिद्धिम्** — सिद्धि; **इतः** — यस संसारबाट; **गताः** — प्राप्त गरे।

**भगवान्‌ले भन्नुभयो — अब फेरि म तिमीलाई ज्ञानहरूमा श्रेष्ठ परमज्ञान भन्दछु, जसलाई जानेर सम्पूर्ण मुनिहरूले परमपूर्णता प्राप्त गरे।**

**तात्पर्य :** सातौँ अध्यायदेखि बाह्रौँ अध्यायसम्म श्रीकृष्णले परमसत्य भगवान्‌का विषयमा विस्तारपूर्वक भन्नुभएको छ। यहाँ स्वयम् भगवान् श्रीकृष्ण अर्जुनलाई फेरि पनि ज्ञान दिँदै हुनुहुन्छ। कसैले दार्शनिक चिन्तनद्वारा राम्रोसँग यो अध्याय बुझ्नमा उसले भक्तिमय सेवाको ज्ञानलाई बुझ्दछ। विनयपूर्वक ज्ञानको विकास गर्दै जाँदा भवबन्धनबाट मानिसले छुट्कारा पाउँदछ भन्ने कुरा तेह्रौँ अध्यायमा स्पष्टताका साथ बताइएको छ। साथै प्रकृतिका गुणहरूको सम्पर्कले गर्दा नै मानिस भौतिक जगत्‌का बन्धनहरूमा बाँधिन पुग्दछ भन्ने पनि त्यहाँ भनिएको छ। अब यस अध्यायमा स्वयम् भगवान् प्रकृतिका गुणहरू कुन कुन हुन्, ती गुणहरूले कसरी काम गर्दछन्, जीवलाई तिनले कसरी बन्धनमा पार्दछन् र कसरी मोक्ष प्रदान गर्दछन् भन्ने कुरा भन्नु हुन्छ। यस अध्यायमा जुन ज्ञानको चर्चा गरिएको छ त्यसलाई यसभन्दा पूर्वका अध्यायहरूमा दिइएका ज्ञानभन्दा श्रेष्ठ भनिएको छ। यो ज्ञान पाएर धेरै मुनिहरूले सिद्धि प्राप्त गरेर वैकुण्ठलोकका निवासी बने। त्यही ज्ञानलाई भगवान्‌ले यहाँ अझ राम्रोसँग भन्न लाग्नुभएको छ। यो ज्ञान अहिलेसम्म दिइएका सम्पूर्ण ज्ञानहरूमा श्रेष्ठ छ र यसलाई बुझेका धेरै व्यक्तिहरूले पूर्णता प्राप्त गरे। त्यसैले यहाँ के आशा गरिन्छ भने, जसले यो अध्यायलाई राम्रोसँग बुझ्दछ उसले सिद्धि प्राप्त गर्दछ।

**इदं ज्ञानमुपाश्रित्य मम साधर्म्यमागताः ।**
**सर्गेऽपि नोपजायन्ते प्रलये न व्यथन्ति च ॥ २ ॥**

**इदम्** — यो; **ज्ञानम्** — ज्ञानलाई; **उपाश्रित्य** — आश्रय बनाएर; **मम** — मेरो; **साधर्म्यम्** — समान प्रकृतिलाई; **आगताः** — प्राप्त गरेर; **सर्गेअपि** — सृष्टिमा पनि; **न उपजायन्ते** — उत्पन्न हुँदैनन्; **प्रलये** — प्रलय कालमा; **न व्यथन्ति** — विचलित हुँदैनन्; **च** — पनि।

**यो ज्ञानमा स्थिर भएर मानिसले मेरो दिव्य स्वभाव ( प्रकृति ) लाई प्राप्त गर्न सक्दछ। यसरी ज्ञानमा स्थिर भएको मानिस न सृष्टि हुँदा उत्पन्न हुन्छ न त प्रलय हुँदा विचलित हुन्छ।**

**तात्पर्य :** पूर्ण दिव्य ज्ञान प्राप्त गरेपछि मानिसले भगवान्‌को जस्तै स्वभाव प्राप्त गर्दछ र जन्म-मृत्युका चक्रबाट मुक्त हुन्छ तर जीवात्माका रूपमा उसको आफ्नो स्वरूप नष्ट हुँदैन। वैदिक साहित्यबाट के बुझिन्छ भने, वैकुण्ठ जगत्‌मा पुगेका मुक्तात्माहरू निरन्तर भगवान्‌का चरणकमलको दर्शन गर्दै भगवान्‌को दिव्य प्रेमाभक्तिमा लागिरहन्छन्। यसरी मुक्ति प्राप्त गरेपछि पनि भक्तहरूले आफ्नो निजी स्वरूपको त्याग गर्दैनन्। साधारणतया हामीले जुन ज्ञान यो संसारमा पाउँदछौँ त्यो ज्ञान प्रकृतिका तीन गुणहरूबाट दूषित भएका हुन्छ। यी तीन गुणहरूबाट दूषित नहुने ज्ञानलाई नै दिव्य ज्ञान भनिन्छ। त्यस्तो दिव्य ज्ञानमा स्थित हुने व्यक्ति भगवान्‌को समकक्ष स्थितिमा पुग्दछ। चिन्मय आकाशका बारेमा जानकारी नहुने व्यक्तिहरू भौतिक स्वरूपका क्रियाकलापहरूबाट मुक्त हुनासाथ यो आध्यात्मिक स्वरूप विविधताविहीन भएर निराकार बन्न पुग्दछ भन्ने मान्दछन्। तर यस जगत्‌मा जस्तै आध्यात्मिक जगत्‌मा पनि धेरै विविधताहरू छन्। यो कुरा नबुझ्नेहरू आध्यात्मिक जगत् भनेको त विविधतामय यो भौतिक जगत्‌भन्दा भिन्दै हो भन्ने ठान्दछन्, तर वास्तवमा आध्यात्मिक जगत् अर्थात् चिन्मय आकाशमा पुगेपछि मानिसले पनि आध्यात्मिक स्वरूप नै प्राप्त गर्दछ। चिन्मय आकाशमा हुने सम्पूर्ण क्रियाकलापहरू आध्यात्मिक हुन्छन्। त्यो आध्यात्मिक स्थितिलाई भक्तिमय जीवन भनिन्छ। त्यहाँको वातावरण सधैँ प्रदूषणरहित हुन्छ। त्यहाँ पुगेपछि मानिसहरू पनि गुणका दृष्टिले परमेश्वरका समकक्ष हुन पुग्दछन्। यस प्रकारको ज्ञान पाउनका लागि मानिसले आफूमा यस्तै आध्यात्मिक गुणहरूको विकास गर्नु पर्दछ। जसले यस किसिमका आध्यात्मिक गुणको विकास गर्दछ त्यो व्यक्ति भौतिक जगत्‌को सृष्टि वा त्यसको विनाशबाट प्रभावित हुँदैन।

**मम योनिर्महद्ब्रह्म तस्मिन्गर्भं दधाम्यहम् ।**
**सम्भवः सर्वभूतानां ततो भवति भारत ॥ ३॥**

**मम** — मेरो; **योनिः** — जन्मस्रोत; **महद्** — सम्पूर्ण भौतिक जगत्; **ब्रह्म** — परमब्रह्म; **तस्मिन्** — त्यसमा; **गर्भम्** — गर्भ; **दधामि** — उत्पन्न गर्दछु; **अहम्** — म; **सम्भवः** — सम्भव; **सर्वभूतानाम्** — सम्पूर्ण जीवात्माको; **ततः** — त्यसपछि; **भवति** — हुन्छ; **भारत** — हे भरतपुत्र।

**हे भारत! ब्रह्म नामक सम्पूर्ण भौतिक वस्तु नै जन्मको स्रोत हो र मैले त्यही ब्रह्मलाई गर्भमा स्थापित गरिदिन्छु। यसरी सम्पूर्ण जीवात्माको जन्म सम्भव हुन्छ।**

**तात्पर्य :** यो संसारको व्याख्या हो। क्षेत्र र क्षेत्रज्ञ अर्थात् शरीर र आत्माको संयोगबाट यहाँ हरेक कुरा भएको हुन्छ। स्वयम् भगवान्‌ले नै भौतिक प्रकृति र जीवात्माको संयोगलाई सम्भव बनाउनु हुन्छ। महत्‌तत्त्व नै सम्पूर्ण सृष्टिको कारण हो। कहिलेकाहीँ प्रकृतिका तीन गुणहरूको निवास तथा भौतिक कारणको सार वस्तुलाई ब्रह्म भनिन्छ। ती सम्पूर्ण सार वस्तुलाई भगवान्‌ले गर्भमा स्थापित गर्नु हुन्छ र यसरी असङ्ख्य ब्रह्माण्डहरूको उत्पत्ति सम्भव हुन्छ। वैदिक साहित्य (मुण्डकोपानिषद् १.१.९) मा यो सम्पूर्ण भौतिक तत्त्व अर्थात् महत्‌तत्त्वको व्याख्या ब्रह्मका रूपमा गरिएको छ— **तस्मादेतत् ब्रह्म नामरूपमन्नं च जायते**। जीवात्माको बीजसहित त्यो ब्रह्मलाई परमपुरुषले गर्भमा स्थापित गर्नु हुन्छ। पृथ्वी, जल, अग्नि, वायुसहितका चौबीस तत्त्वहरू सबै भौतिक शक्ति हुन् र यिनीहरूबाटै **महत्‌ब्रह्म** भनिने भौतिक प्रकृतिको रचना हुन्छ। सातौँ अध्यायमा भनिएअनुसार योभन्दा पर अर्को पराप्रकृति— जीवात्मा छ। भगवान्‌का इच्छाले अपराप्रकृति वा भौतिक प्रकृतिमा त्यो पराप्रकृतिको मिश्रण हुन्छ अनि त्यसबाट यस भौतिक जगत्‌का सम्पूर्ण जीवात्माहरूको जन्म हुन्छ।

बिच्छीले धानको थुप्रोमा फुल पार्दछ, त्यसैले कहिलेकाहीँ भनिन्छ,— धानबाट बिच्छी उत्पन्न हुन्छ। तर धान बिच्छीलाई जन्माउने कारक तत्त्व होइन। वास्तवमा धानमा पोथी बिच्छीले नै फुल पारेर छोडेकी हुन्छे। त्यसै गरी यो भौतिक प्रकृति पनि जीवात्माको उत्पत्ति वा जन्मको कारण होइन। त्यहाँ भगवान्‌द्वारा नै बीज प्रदान गरिएको हुन्छ। ती जीवात्माहरू भौतिक प्रकृतिबाट उत्पन्न भएजस्ता देखिने मात्र हुन्। यस प्रकार प्रत्येक जीवात्मा आफ्नो पूर्वजन्मका कर्मअनुसार विभिन्न शरीर धारण गर्दछन्। तिनले धारण गर्ने शरीर मात्र प्रकृतिद्वारा सृजित हुन्छ, जसद्वारा जीवात्मा आफ्नो

पूर्वकर्मअनुसार सुख वा दुःख भोग्न समर्थ हुन्छ। अतः भौतिक जगत्मा समग्र जीवात्माको सृष्टिका मूल कारण भगवान् नै हुनुहुन्छ।

**सर्वयोनिषु कौन्तेय मूर्तयः सम्भवन्ति याः ।**
**तासां ब्रह्म महद्योनिरहं बीजप्रदः पिता ॥ ४ ॥**

**सर्वयोनिषु** — सबै जीवयोनिहरूमा; **कौन्तेय** — हे कुन्तीपुत्र!; **मूर्तयः** — स्वरूपहरू; **सम्भवन्ति** — प्रकट हुन्छन्; **याः** — जो; **तासाम्** — ती सबैका; **ब्रह्म** — परमपिता; **महद्योनिः** — भौतिक अस्तित्वमा जन्मको स्रोत; **अहम्** — म; **बीजप्रदः** — बीजदाता; **पिता** — पिता हूँ।

**हे कुन्तीपुत्र! यो भौतिक जगत्मा जे जति पनि जीवयोनिहरू जन्म लिन सम्भव देखिएका छन् ती सबैको बीजदाता पिता म नै हूँ, यो तिमीले बुझ्नु पर्दछ।**

**तात्पर्य :** भगवान् श्रीकृष्ण नै सम्पूर्ण जीवात्माका मूल पिता हुनुहुन्छ भन्ने कुरा यो श्लोकमा स्पष्टसँग व्याख्या गरिएको छ। जीवात्माहरू भनेका भौतिक प्रकृति र आध्यात्मिक प्रकृतिका संयोग हुन्। यस्ता जीवात्माहरू यस लोकमा मात्र नभएर प्रत्येक लोकमा छन्। ब्रह्माको निवासस्थल सर्वोच्च ब्रह्मलोकमा पनि जीवात्माहरू छन्। जीवात्मा जहाँतहीँ छन्। पृथ्वीमा जीवात्माहरू छन्, पानीमा जीवात्मा छन् र आगोमा पनि जीवात्माहरू छन्। यी सम्पूर्ण जीवात्माहरू भौतिक प्रकृतिरूपी माता र भगवान् श्रीकृष्णको बीजप्रदान विधिका कारणले देखा परेका हुन्। यसको तात्पर्य के हो भने, भौतिक जगत्ले सम्पूर्ण जीवात्मालाई आफ्नो गर्भमा लिएको छ, जो आफ्ना आफ्ना पूर्वकर्मअनुसार सृष्टिको समयमा विभिन्न स्वरूपमा प्रकट हुन्छन्।

**सत्त्वं रजस्तम इति गुणाः प्रकृतिसम्भवाः ।**
**निबध्नन्ति महाबाहो देहे देहिनमव्ययम् ॥ ५ ॥**

**सत्त्वम्** — सतोगुण; **रजः** — रजोगुण; **तमः** — तमोगुण; **इति** — यस प्रकार; **गुणाः** — गुणहरू; **प्रकृति** — भौतिक प्रकृति; **सम्भवाः** — उत्पन्न भएको; **निबध्नन्ति** — बाँध्दछन्; **महाबाहो** — हे महाबाहु!, **देहे** — यो शरीरमा; **देहिनम्** — जीवात्माहरू; **अव्ययम्** — अविनाशी।

**हे महाबाहु अर्जुन! भौतिक प्रकृति सत्त्व, रज र तम यी तीन गुणले युक्त छ। जब सनातन जीवात्माहरू यस प्रकृतिका सम्पर्कमा आउँदछन् ती गुणहरूले तिनलाई बद्ध बनाइदिन्छन्।**

**तात्पर्य :** जीवात्मा दिव्य हुनाले भौतिक प्रकृतिसँग उसको कुनै सरोकार छैन। तैपनि प्रकृतिद्वारा बद्ध भएकाले प्रकृतिका गुणहरूको अधीनमा रहेर उसले कर्म गरिरहन्छ। जीवात्माले विभिन्न प्रकारका शरीर प्राप्त गरेको हुनाले प्रकृतिका विविध अवस्थामा तिनीहरू स्वभावअनुसार विभिन्न प्रकारका काम गर्न प्रेरित हुन्छन्। यही नै विभिन्न प्रकारका सुख र दुःखको कारण हो।

**तत्र सत्त्वं निर्मलत्वात्प्रकाशकमनामयम् ।**
**सुखसङ्गेन बध्नाति ज्ञानसङ्गेन चानघ ॥ ६ ॥**

तत्र — त्यहाँ; **सत्त्वम्** — सतोगुण; **निर्मलत्वात्** — संसारमा सबैभन्दा पवित्र हुनाले; **प्रकाशकम्** — प्रकाशित गर्दै; **अनामयम्** — कुनै पापपूर्ण प्रतिक्रियाबिना; **सुख** — सुखको; **सङ्गेन** — सङ्गतले; **बध्नाति** — बाँध्दछ; ज्ञान — ज्ञानको, **सङ्गेन** — सङ्गतले; **च** — पनि; **अनघ** — हे निष्पाप।

**हे निष्पाप अर्जुन! सतोगुण अन्य गुणहरूभन्दा पवित्रतम हुने हुनाले यो प्रकाशमय छ र यसले सबै पापकर्महरूबाट मानिसलाई मुक्त गराउँदछ। अनि यस गुणमा अवस्थित व्यक्ति सुख र ज्ञानभावद्वारा बद्ध हुन्छ।**

**तात्पर्य :** प्रकृतिबद्ध जीवात्माहरू धेरै प्रकारका छन्। कोही सुखी छन्, कोही अत्यन्त क्रियाशील छन् र कोही असहाय छन्। प्रकृतिमा जीवको बद्ध अवस्थाका कारणले यी सम्पूर्ण प्रकारका मनोवृत्तिहरू देखा पर्दछन्। जीवात्माहरू कसरी विभिन्न प्रकारले बद्ध हुन्छन् भन्ने व्याख्या *भगवद्गीताको* यस अध्यायमा गरिएको छ। सर्वप्रथम सतोगुणका सम्बन्धमा विचार गरिएको छ। भौतिक जगत्मा सतोगुणको विकासको के प्रभाव हुन्छ भने, सतोगुणी व्यक्ति अरू बद्ध जीवहरूका तुलनामा अधिक बुद्धिमान् मानिन्छ। सतोगुणी व्यक्ति सांसारिक शोकसन्तापबाट त्यति प्रभावित हुँदैन। उसमा भौतिक ज्ञानको विकास गर्ने चेतना हुन्छ। ब्राह्मणवर्ग यसका प्रतिनिधि हुन्। यिनलाई सतोगुणमा अवस्थित मानिन्छ। सतोगुणमा स्थित व्यक्ति पापपूर्ण कर्मबाट धेरै थोरै मुक्त नै हुन्छ भन्ने बुझाइबाट यी सुखको भाव आउँदछन्। वास्तवमा वैदिक साहित्यमा भनिएको छ— सतोगुणको अर्थ धेरै ज्ञान र बढी सुखको अनुभूति हो।

तर समस्या के छ भने, सतोगुणमा अवस्थित हुँदा पनि जीवात्मा बद्ध नै हुन्छ, किनभने उसलाई ज्ञानको क्षेत्रमा अरूभन्दा म बढी विकसित छु भन्ने अनुभव हुन थाल्दछ। यसरी ऊ बद्ध हुन पुग्दछ। यसका श्रेष्ठ उदाहरण हुन्— वैज्ञानिकहरू र दार्शनिकहरू। यिनीहरू प्रत्येकमा आफ्नो ज्ञानको ठुलो अभिमान हुन्छ। यिनीहरूले सामान्यतया आफ्नो जीविकाको स्तरलाई विकसित बनाएका हुन्छन्, त्यसैले तिनीहरूले केही भौतिक सुखको अनुभूति

गर्दछन्। बद्ध जीवनमा अधिक सुखानुभूतिको भावले गर्दा तिनीहरू प्रकृतिको सतोगुणद्वारा बाँधिन्छन्। सतोगुणमा रहँदा उनीहरूमा कर्मप्रतिको आकर्षण भइरहन्छ। जबसम्म यसरी कर्मप्रति आकर्षण भइरहन्छ तबसम्म तिनीहरूले प्रकृतिका गुणमा रहेर कुनै न कुनै प्रकारको शरीर धारण गर्नुपर्ने हुन्छ। यस प्रकार तिनीहरू मुक्त भएर वैकुण्ठलोकमा जाने सम्भावना हुँदैन। अनि बारम्बार दार्शनिक, वैज्ञानिक वा कवि भएर जन्म लिने र बारम्बार जन्म र मृत्युका उनै दोषहरूमा आबद्ध हुने गर्दछन्। तैपनि भौतिक शक्तिको मायामोहका कारणले गर्दा तिनीहरू त्यस्ता किसिमको जीवनलाई आनन्दमय ठान्दछन्।

**रजो रागात्मकं विद्धि तृष्णासङ्गसमुद्भवम् ।**
**तन्निबध्नाति कौन्तेय कर्मसङ्गेन देहिनम् ॥ ७ ॥**

**रजः** — रजोगुण; **राग आत्मकम्** — इच्छा वा कामबाट उत्पन्न; **विद्धि** — जान; **तृष्णा** — लोभको; **सङ्ग** — सङ्गतले; **समुद्भवम्** — उत्पन्न भएको; **तत्** — त्यो; **निबध्नाति** — बाँध्दछ; **कौन्तेय** — हे कुन्तीपुत्र; **कर्मसङ्गेन** — सकामकर्मका सङ्गतले; **देहिनम्** — शरीरधारीलाई।

**हे कौन्तेय! असीमित आकाङ्क्षा तथा तृष्णाद्वारा रजोगुणको जन्म हुन्छ। यसको कारणले शरीरधारी जीवात्मा सांसारिक कर्मका बन्धनमा बाँधिन्छ।**

**तात्पर्य :** पुरुष र नारीबीचको पारस्परिक आकर्षणबाट रजोगुण उत्पन्न हुन्छ। नारीको पुरुषप्रति र पुरुषको नारीप्रति आकर्षण हुन्छ। त्यसलाई रजोगुण भनिन्छ। जब रजोगुणको वृद्धि हुन्छ, मानिसमा भौतिक भोगप्रतिको इच्छा बढ्न सुरु हुन्छ। ऊ इन्द्रियतृप्तिका लागि भोग चाहन्छ। रजोगुणी मानिस इन्द्रियतृप्तिका लागि समाज वा राष्ट्रमा आफ्नो सम्मान चाहन्छ र सुन्दर सन्तान, असल पत्नी र राम्रो घरसहितको एउटा सुखी परिवार पनि चाहन्छ। यी सबै रजोगुणका उत्पादन हुन्। जबसम्म मानिस यी वस्तुहरूप्रति इच्छुक हुन्छ तबसम्म उसले कठिन परिश्रम गर्नुपर्ने हुन्छ। त्यसैले यहाँ स्पष्टसँग के भनिएको छ भने, मानिस कर्मका फलको सङ्गतमा पर्दछ र यस्तै कर्महरूबाट बाँधिन पुग्दछ। आफ्नी पत्नी, सन्तान र समाजलाई प्रसन्न पार्नका लागि र आफ्नो इज्जत राख्नका लागि मानिसले काम गर्नु पर्दछ। त्यसैले सम्पूर्ण भौतिक जगत् धेरै थोरै रजोगुणी नै छ। रजोगुणको मापदण्डमा आधुनिक सभ्यतालाई विकसित मानिन्छ। पहिले पहिले सतोगुणमा अवस्थित हुनुलाई विकसित अवस्था मानिन्थ्यो। सतोगुणमा हुनेलाई मुक्ति प्राप्त हुँदैन त्यसले रजोगुणको जञ्जालमा फँसेकाहरूका विषयमा भन् के भन्नुपर्‍यो।

**तमस्त्वज्ञानजं विद्धि मोहनं सर्वदेहिनाम् ।**
**प्रमादालस्यनिद्राभिस्तन्निबध्नाति भारत ॥ ८ ॥**

**तमः** — तमोगुण; **तु** — तर; **अज्ञानजम्** — अज्ञानबाट उत्पन्न; **विद्धि** — जान; **मोहनम्** — मोह; **सर्वदेहिनाम्** — सम्पूर्ण शरीरधारी जीवहरूको; **प्रमाद** — पागलपन; **आलस्य** — आलस्य; **निद्राभिः** — निद्राद्वारा; **तत्** — त्यो; **निबध्नाति** — बाँधिन्छ; **भारत** — हे भरतपुत्र।

**हे भारतपुत्र! अज्ञानबाट उत्पन्न तमोगुण नै जीवात्माको मोह हो। पागलपन, आलस्य र निद्रा यसका प्रतिफल हुन्, यिनले जीवात्मालाई बाँध्दछन्।**

**तात्पर्य :** यस श्लोकमा **तु** शब्दको विशिष्ट प्रयोग उल्लेखनीय छ। यसको अर्थ तमोगुण शरीरधारी जीवात्माको एउटा विचित्र गुण हो। यो तमोगुण सतोगुणभन्दा ठीक विपरीत छ। सतोगुणमा ज्ञानको विकास गरेर मानिसले कुन वस्तु के हो भन्ने बुझ्न सक्दछ तर तमोगुण यसको ठीक विपरीत छ। तमोगुणका अधीनमा रहने हरेक व्यक्तिमा पागलपन हुन्छ र त्यस्तो व्यक्तिले कुन वस्तु के हो भन्ने बुझ्न सक्दैन। यसबाट प्रगतिको सट्टा अधोगति हुन्छ। तमोगुणको परिभाषा वैदिक साहित्यमा यसरी गरिएको छ। **वस्तुयाथात्म्यज्ञानावरकं विपर्ययज्ञानजनकं तमः** अर्थात्, अज्ञानका अधीनमा हुँदा मानिसले वस्तुलाई जस्ताको त्यस्तै बुझ्न सक्दैन, उदाहरणका लागि—हरेक मानिसलाई थाहा छ—"मेरा हजुरबुबा मरे, म पनि मर्दछु, मानिस मरणशील छ, मैले जन्माएका छोराछोरी पनि मर्नेछन्, मृत्यु अवश्यम्भावी छ।" तैपनि मानिस शाश्वत आत्माका बारेमा केही विचार नगरी पागलजस्तो बनेर दिन-रात कठिन श्रम गरिरहेको छ, पैसा जम्मा गरिरहेको छ। यो पागलपन हो। यही पागलपनले गर्दा तिनीहरू आध्यात्मिक ज्ञानमा अगाडि बढ्ने विषयमा अत्यन्त अनिच्छुक हुन्छन्। यस्ता मानिसहरू धेरै अल्छी पनि हुन्छन्। उनीहरूलाई आध्यात्मिक सत्सङ्गका लागि निमन्त्रण गर्दा पनि यसप्रति त्यति रुचि राख्दैनन्। तिनीहरू रजोगुणी व्यक्तिहरू जत्तिको सक्रिय पनि हुँदैनन्। तमोगुणमा लिप्त भएका व्यक्तिको अर्को लक्षण धेरै सुत्नु हो, यस्ता मानिसहरू आवश्यकताभन्दा बढी सुत्दछन्। मानिसलाई ६ घण्टा सुत्नु पर्याप्त छ तैपनि तमोगुणी मानिसहरू दिनमा कम्तीमा १०/१२ घण्टा सुत्दछन्। यस्ता मानिसहरू सधैँ उदास देखिन्छन् र नशा तथा निद्राका व्यसनी हुन्छन्, यी सबै तमोगुणले ग्रस्त भएका मानिसका लक्षण हुन्।

**सत्त्वं सुखे सञ्जयति रजः कर्मणि भारत ।**
**ज्ञानमावृत्य तु तमः प्रमादे सञ्जयत्युत ॥ ९ ॥**

**सत्त्वम्** — सतोगुण; **सुखे** — सुखमा; **सञ्जयति** — बाँध्दछ; **रजः** — रजोगुण; **कर्माणी** — सकाम कर्महरूमा; **भारत** — हे भरतपुत्र; **ज्ञानम्** — ज्ञानलाई; **आवृत्य** — ढाकेर; **तु** — तर; **तमः** — तमोगुण; **प्रमादे** — प्रमादमा (पागलपनमा); **सञ्जयति** — बाँध्दछ; **उत** — भनिन्छ।

**हे भरतपुत्र! सतोगुणले मानिसलाई सुखमा आबद्ध गरिदिन्छ, रजोगुणले सकाम कर्ममा बद्ध गराउँदछ र तमोगुणले ज्ञानलाई ढाकेर मानिसलाई पागलपनप्रति आबद्ध गराउँदछ।**

**तात्पर्य :** एउटा सतोगुणी व्यक्ति आफ्ना कर्म र बौद्धिक कार्यद्वारा त्यसरी नै सन्तुष्ट रहन्छ, जसरी एउटा दार्शनिक, वैज्ञानिक, शिक्षक आफ्ना आफ्ना ज्ञानका विशिष्ट क्षेत्रमा संलग्न रहेर सन्तुष्ट हुन्छन्। रजोगुणी व्यक्ति सकाम कर्ममा संलग्न रहन्छ र यथाशक्य धन कमाएर असल कार्यमा खर्च गर्दछ। यस्ता मानिसले कहिले अस्पताल खोल्ने, कहिले धार्मिक सङ्घ-संस्थालाई दान दिने इत्यादि गर्दछन्। यी रजोगुणी व्यक्तिका लक्षण हुन्। तमोगुणले ज्ञानलाई ढाकिदिन्छ। तमोगुणमा रहेर मानिसले जे काम गर्दछ त्यसबाट न उसको कल्याण हुन्छ न अरूको हित नै हुन्छ।

**रजस्तमश्चाभिभूय सत्त्वं भवति भारत ।**
**रजः सत्त्वं तमश्चैव तमः सत्त्वं रजस्तथा ॥ १० ॥**

**रजः** — रजोगुण; **तमः** — तमोगुण; **च** — पनि; **अभिभूय** — पार गरेर; **सत्त्वम्** — सत्त्व गुण; **भवति** — प्रमुख हुन्छ; **भारत** — हे भरतवंशी अर्जुन; **रजः** — रजोगुण; **सत्त्वम्** — सतोगुण; **तमः** — तमोगुण; **च** — पनि; **एव** — जस्तै; **तमः** — तमोगुण; **सत्त्वम्** — सतोगुण; **रजः** — रजोगुण; **तथा** — यस प्रकार।

**हे भारत! कहिले रजोगुण र तमोगुणलाई जितेर सतोगुण प्रमुख हुन्छ, कहिले रजोगुणले सतोगुणलाई र तमोगुणलाई पराजित गर्दछ र कहिले सतोगुण र रजोगुणलाई तमोगुणले पराजित गर्दछ। यसरी सधैँ प्रमुख बन्नका लागि गुणहरूमा प्रतिस्पर्धा भइरहन्छ।**

**तात्पर्य :** जब रजोगुणको प्रभुत्व हुन्छ, सतोगुण र तमोगुण पराजित हुन्छन्। सतोगुणको प्रभुत्व हुँदा रजोगुण र तमोगुण पराजित हुन्छन् र तमोगुणको प्रभुत्व हुँदा सतोगुण र रजोगुण पराजित हुन्छन्। यो प्रतिस्पर्धा सधैँ चलिरहन्छ। त्यसैले कृष्णभावनाको विकास गर्न चाहने व्यक्तिले यी तीनै गुणहरूलाई पार गर्नु पर्दछ। प्रकृतिका कुनै विशेष गुणको प्रधानता मानिसका व्यवहार, क्रियाकलाप र खानपान इत्यादिबाट प्रकट हुन्छ। यी सबैको व्याख्या आगामी

अध्यायहरूमा गरिनेछ। यदि कसैले इच्छा गरेमा अभ्यासद्वारा सतोगुणको विकास गर्न सक्दछ र यसरी रजोगुण र तमोगुणलाई पराजित गर्न सक्दछ। यसै गरी मानिसले रजोगुणको विकास गरेर सतोगुण र तमोगुणलाई पराजित गर्न सक्दछ वा तमोगुणको विकास गरेर सतोगुण र रजोगुणलाई पराजित गर्न पनि सक्दछ। प्रकृतिमा यी तीन गुणहरू छन् तैपनि यदि कोही सङ्कल्पवान् भए उसले सतोगुणको आशीर्वादद्वारा सतोगुणलाई पार गर्दै शुद्ध सत्त्व अवस्थामा अवस्थित हुन सक्दछ, जसलाई वासुदेव अवस्था भनिन्छ। यो अवस्थामा रहेर मानिसले ईश्वरको विज्ञान बुझ्न सक्दछ। व्यक्तिका निजी क्रियाकलापहरूद्वारा ऊ कुन गुणमा अवस्थित छ भन्ने बुझ्न सकिन्छ।

**सर्वद्वारेषु देहेऽस्मिन्प्रकाश उपजायते ।**
**ज्ञानं यदा तदा विद्याद्विवृद्धं सत्त्वमित्युत ॥ ११॥**

**सर्वद्वारेषु** — सबै द्वारहरूमा; **देहे अस्मिन्** — यस शरीरमा; **प्रकाशः** — प्रकाशित; **उपजायते** — उत्पन्न हुन्छ; **ज्ञानम्** — ज्ञान; **यदा** — जब; **तदा** — त्यस समय; **विद्यात्** — जान; **विवृद्धम्** — बढेको; **सत्त्वम्** — सतोगुण; **इति उत** — यस्तो भनिएको छ।

**जब शरीरका सबै द्वारहरू ज्ञानका प्रकाशले प्रकाशित हुन्छन् त्यस समय सतोगुण व्यक्त भएको अनुभव गर्न सकिन्छ।**

**तात्पर्य :** शरीरमा नौओटा द्वारहरू छन्, ती हुन् — दुई आँखा, दुई कान, नाकका दुई प्वाल, मुख, जनेन्द्रिय र गुदद्वार। जब यी प्रत्येक द्वार सत्त्वगुणका लक्षणले प्रकाशित हुन्छन् त्यस समय सतोगुणको विकास भएको बुझ्नु पर्दछ। सतोगुणमा मानिसले वस्तुलाई त्यसको ठीक अवस्थामा देख्न सक्दछ, वस्तुलाई ठीक ढङ्गले सुन्न सक्दछ र ठीक अवस्थामा वस्तुको स्वाद लिन सक्दछ। सतोगुणमा अवस्थित हुँदा मानिस बाह्य तथा आन्तरिक रूपले शुद्ध हुन्छ। प्रत्येक द्वारमा सुखका लक्षणहरू विकसित हुन्छन्। यही नै सतोगुणको स्थिति हो।

**लोभः प्रवृत्तिरारम्भः कर्मणामशमः स्पृहा ।**
**रजस्येतानि जायन्ते विवृद्धे भरतर्षभ ॥ १२॥**

**लोभः** — लोभ; **प्रवृत्तिः** — क्रियाकलाप; **आरम्भः** — प्रयत्न; **कर्मणाम्** — कर्महरूमा; **अशमः** — अनियन्त्रित; **स्पृहा** — चाहना; **रजसि** — रजोगुणको; **एतानि** — यी सबै; **जायन्ते** — विकसित हुन्छन्; **विवृद्धे** — अधिकता भएमा; **भरतऋषभ** — हे भरतवंशीहरूमा श्रेष्ठ।

**हे भरतवंशीमा श्रेष्ठ! रजोगुणको वृद्धि हुँदा अत्यन्त आसक्ति, सकाम कर्म, तीव्र प्रयत्न, अनियन्त्रित चाहना र आकाङ्क्षावृद्धिका लक्षणहरू देखा पर्दछन्।**

**तात्पर्य :** रजोगुणी व्यक्ति आफूले पहिल्यैदेखि प्राप्त गरेको अवस्थाबाट कहिल्यै सन्तुष्ट हुँदैन। ऊ आफ्नो अवस्थालाई अझ उन्नत बनाउन इच्छुक भइरहन्छ। यदि उसले घर बनाउन लागेमा मानौँ त्यो घरमा ऊ नित्य बसिरहन पाउँदछ भनेजस्तै गरी त्यसलाई सकेसम्म महलजस्तो बनाउने प्रयत्न गर्दछ। उसले इन्द्रियतृप्तिका लागि ठूलठुला इच्छा-आकाङ्क्षा बढाइरहन्छ। इन्द्रियतृप्तिको कुनै अन्त्य छैन। ऊ सधैँ आफ्नो परिवारसँग आफ्ना घरमा निवास गर्न चाहन्छ र इन्द्रियतृप्तिका प्रक्रियाहरूलाई निरन्तरता दिइरहन चाहन्छ। यसको कुनै अन्त्य छैन। यी सम्पूर्ण लक्षणहरूलाई रजोगुणका विशेषताका रूपमा बुझ्नु पर्दछ।

**अप्रकाशोऽप्रवृत्तिश्च प्रमादो मोह एव च ।**
**तमस्येतानि जायन्ते विवृद्धे कुरुनन्दन ॥ १३ ॥**

**अप्रकाशः** — अन्धकार; **अप्रवृत्तिः** — निष्क्रियता; **च** — तथा; **प्रमादः** — उन्मत्तता; **मोहः** — मोह (गलत विचार); **एव** — निश्चय नै; **च** — पनि; **तमसि** — तमोगुणमा; **एतानि** — यी; **जायन्ते** — प्रकट हुन्छन्; **विवृद्धे** — वृद्धि भएपछि; **कुरुनन्दन** — हे कुरुपुत्र।

**हे कुरुनन्दन! तमोगुणको वृद्धि हुँदा अन्धकार, निष्क्रियता, उन्मत्तता र मोह ( भ्रम ) जस्ता कुराहरू प्रकट हुन्छन्।**

**तात्पर्य :** जहाँ प्रकाश हुँदैन त्यहाँ ज्ञानको उपस्थिति हुँदैन। तमोगुणी मानिस कुनै विधिनियम अनुरूप काम गर्दैन। ऊ बिना उद्देश्य मनोमानी किसिमले काम गर्न चाहन्छ। आफूमा काम गर्ने क्षमता हुँदाहुँदै पनि ऊ कुनै प्रत्यत्न नै गर्दैन। यसलाई मोह भनिन्छ। चेतना हुँदाहुँदै पनि यस्ता मानिसको जीवन निष्क्रिय हुन्छ। यी सबै तमोगुणी मानिसका लक्षण हुन्।

**यदा सत्त्वे प्रवृद्धे तु प्रलयं याति देहभृत् ।**
**तदोत्तमविदां लोकानमलान्प्रतिपद्यते ॥ १४ ॥**

**यदा** — जब; **सत्त्वे** — सतोगुणमा; **प्रवृद्धे** — बृद्धि भएमा; **तु** — तर; **प्रलयम्** — संहार (महाविनाश); **याति** — हुनजान्छ; **देहभृत्** — शरीरधारी; **तदा** — त्यस समय; **उत्तमविदाम्** — महर्षिहरूको; **लोकान्** — लोकहरू; **अमलान्** — शुद्ध; **प्रतिपद्यते** — प्राप्त गर्दछ।

**सतोगुणी मानिसले मृत्युपश्चात् महर्षिहरूको पवित्र तथा उच्च लोक प्राप्त गर्दछ।**

**तात्पर्य :** सतोगुणी व्यक्तिले मृत्युपश्चात् ब्रह्मलोक वा जनलोकजस्ता उच्चस्तरीय लोक प्राप्त गर्दछ र त्यहाँ उसले दैवी सुखको उपभोग गर्दछ। यहाँ प्रयोग भएको **अमलान्** शब्द महत्त्वपूर्ण छ। यसको अर्थ रजोगुण र तमोगुणबाट मुक्त भन्ने हो। भौतिक जगत्मा अपवित्रता हुन्छ तर सतोगुण यस संसारको सबैभन्दा शुद्धतम् अस्तित्वको रूप हो। विभिन्न प्रकारका जीवात्माहरूका निमित्त विभिन्न प्रकारका लोकहरू छन्। सतोगुणमा रहँदा जसको मृत्यु हुन्छ, त्यसले महर्षिहरू तथा महान् भक्तहरूले निवास गर्ने उच्च लोक प्राप्त गर्दछ।

**रजसि प्रलयं गत्वा कर्मसङ्गिषु जायते ।**
**तथा प्रलीनस्तमसि मूढयोनिषु जायते ॥ १५ ॥**

रजसि — रजोगुणमा; **प्रलयम्** — प्रलय (महाविनाश); **गत्वा** — प्राप्त गरेर; **कर्मसङ्गिषु** — सकाम कर्ममा लागेका व्यक्तिहरूको सङ्गतमा; जायते — जन्म लिन्छ; **तथा** — त्यसै गरी; **प्रलीनः** — विलीन भएर; तमसि — तमोगुणमा; **मूढयोनिषु** — पशु योनिमा; **जायते** — जन्म लिन्छ।

**रजोगुणमा स्थित मानिसले शरीर त्याग गरेपछि सकाम कर्मीहरूका बीचमा जन्म लिन्छ र तमोगुणमा शरीर त्याग गर्नेले पशुजगत्मा जन्म पाउँदछ।**

**तात्पर्य :** केही मानिसहरूमा कस्तो प्रभाव परेको छ भने, आत्मा एक पटक मानव जीवनको स्तरमा पुगिसकेपछि त्यो फेरि कहिल्यै तल्लो योनिमा झर्दैन। यो कुरा सत्य होइन। यस श्लोकका अनुसार यदि कसैमा तमोगुणको विकास भएको छ भने उसको मृत्युपछि ऊ पशु योनिमा झर्दछ। त्यहाँबाट पुनः मानव जीवनमा आउनका लागि उसले फेरि क्रमिक रूपले विकास गर्दै आफूलाई माथि उठाउनु पर्दछ। त्यसैले मनुष्य जीवनका बारेमा गम्भीर चिन्तन गर्नेहरूले सतोगुणलाई अपनाउनु पर्दछ र सत्सङ्गतमा रहेर प्रकृतिका गुणहरूलाई पार गर्दै कृष्णभावनामा स्थित हुनु पर्दछ। यो नै मनुष्य जीवनको उद्देश्य हो अन्यथा मानिसले फेरि पनि मनुष्य योनिमा नै जन्म पाउँदछ भन्ने कुराको कुनै निश्चितता छैन।

**कर्मणः सुकृतस्याहुः सात्त्विकं निर्मलं फलम् ।**
**रजसस्तु फलं दुःखमज्ञानं तमसः फलम् ॥ १६ ॥**

**कर्मणः** — कर्मको; **सुकृतस्य** — पुण्य; **आहुः** — भनिन्छ; **सात्त्विकम्** — सतोगुणमा; **निर्मलम्** — विशुद्ध; **फलम्** — प्रतिफल; **रजसः** — रजोगुणको; **तु** — तर; **फलम्** — परिणाम; **दुःखम्** — दुःख; **अज्ञानम्** — व्यर्थ; **मूर्खता**; **तमसः** — तमोगुणको; **फलम्** — फल।

**पुण्यकर्मको फल शुद्ध हुन्छ र त्यसलाई सतोगुणी भनिन्छ। रजोगुणमा गरिएका कर्मको फल दुःखदमयी हुन्छ र तमोगुणमा रहेर सम्पन्न गरिएका कर्मको फल मूर्खतापूर्ण हुन्छ।**

**तात्पर्य** : सतोगुणमा गरिएका पुण्यकर्मको फल शुद्ध हुन्छ, त्यसैले सम्पूर्ण मोहबाट मुक्त भएका ऋषिहरू सुखपूर्ण अवस्थामा रहन्छन्। तर रजोगुणमा गरिएका क्रियाकलापहरू दुःखदायी हुन्छन्। भौतिक सुख प्राप्तिका लागि गरिएका कर्महरू व्यर्थ हुन्छन्। उदाहरणका लागि — मानौँ कसैले एउटा गगनचुम्बी घर बनाउन चाह्यो त्यसले त्यति ठुलो घर बनाउनका लागि ठुलो कष्ट उठाउनु पर्दछ। लगानीकर्ताले त्यसका लागि त्यति धेरै पैसा आर्जन गर्न प्रशस्त दुःख गर्नु पर्दछ र घर बनाउन नियुक्त गरिएका मजदूरहरूले पनि त्यति नै ठुलो शारीरिक श्रम गर्नु पर्दछ। यसरी त्यहाँ दुःखैदुःख छ। त्यसैले *भगवद्गीतामा* भनिएको छ — रजोगुणमा रहेर सम्पन्न गरिने कुनै पनि काममा निश्चय नै ठुलो कष्ट उठाउनु पर्दछ। त्यसबाट थोरै मात्र तथाकथित मानसिक सुख प्राप्त हुन सक्दछ — "मसँग यो घर छ, यति सम्पत्ति छ" इत्यादि। तर यो वास्तविक सुख होइन।

जहाँसम्म तमोगुणको सम्बन्ध छ, यसमा कर्म गर्ने कर्ता ज्ञानविहीन हुन्छ त्यसैले उसका सबै क्रियाकलापले अन्त्यमा दुःखलाई नै उपस्थित गराउँदछन् र पछि ऊ पशु जीवनतिर धकेलिन्छ। मायाशक्तिका अधीनमा रहने हुनाले पशुहरूले त्यो बुझ्दैनन् तापनि पशु जीवन सधैँ दुःखमय नै हुन्छ। निरीह पशुहरूको वध गर्ने काम पनि तमोगुणका कारणले हुने गर्दछ। मारिने पशुले भविष्यमा उपयुक्त शरीर प्राप्त गर्दछ र हामीलाई नै मार्दछ भन्ने कुरा ती पशु वध गर्नेहरूले बुझेका हुँदैनन्। यो प्रकृतिको कानून हो। मानवसमाजमा यदि कसैले मानिसको हत्या गरेमा त्यसले प्राणदण्ड पाउँदछ। यो राज्यको कानून हो। अज्ञानले गर्दा मानिसहरू परमेश्वरद्वारा नियन्त्रित वा शासित एउटा परिपूर्ण राज्य छ भन्ने देख्दैनन्। प्रत्येक प्राणी परमेश्वरको सन्तति हो र उहाँले (परमेश्वरले) एउटा कमिलाको हत्या भएको पनि सहनुहुन्न। यसका लागि मानिसले उपयुक्त सजाय भोग्नै पर्दछ। त्यसैले जिब्रोको स्वादका लागि पशुको हत्या गर्न रुचाउनेहरू घोर अज्ञानी हुन्। मानिसलाई पशुको हत्या गर्नुपर्ने कुनै आवश्यकता छैन, किनभने उसलाई ईश्वरले प्रशस्त राम्रा राम्रा खाद्य वस्तुहरू उपलब्ध गराउनु भएको छ। कुनै पनि कारणले यदि कोही मांसाहारमा प्रवृत्त भएको भए, उसले अज्ञानवश यसो गरिरहेछ र आफ्नो भविष्यलाई

घोर अन्धकारमय बनाइरहेछ भन्ने ठान्नु पर्दछ। सबै प्रकारका पशु वधमध्ये गो वधलाई अत्यन्त निन्दनीय वा अधर्म मानिन्छ, किनभने गाईले हामीलाई दूधको आपूर्ति गरिदिएर सबै प्रकारको सुख दिएकी छिन्। गो वध सबैभन्दा निन्दनीय अज्ञानजनित कर्म हो। वैदिक साहित्य (ऋगवेद-९.४.६४) मा **गोभिः प्रीणित मत्सरम्** भन्ने वाक्य छ। यसले के सङ्केत गरेको छ भने, जो व्यक्ति दूधबाट पूर्ण सन्तुष्ट भएर पनि गाईलाई मार्ने इच्छा गर्दछ त्यो अत्यन्त घोर अज्ञानतामा छ भन्ने बुझ्नु पर्दछ। वैदिक साहित्यमा एउटा प्रार्थना छ, जसमा भनिएको छ—

*नमो ब्रह्मण्यदेवाय गोब्राह्मणहिताय च ।*
*जगद्धिताय कृष्णाय गोविन्दाय नमोनमः ॥*

(*विष्णुपुराण* १.१९.६५)

अर्थात्—"हे मेरा भगवान्! हजुर गाईहरू र ब्राह्मणहरूका हितैषी हुनुहुन्छ तथा सम्पूर्ण मानव समाज र विश्वका पनि हितैषी हुनुहुन्छ।" तात्पर्य के हो भने, यस प्रार्थनामा गाई र ब्राह्मणहरूको रक्षाको विशेष उल्लेख गरिएको छ। ब्राह्मणहरू आध्यात्मिक शिक्षाका प्रतीक हुन् र गाईहरू अत्यन्त मूल्यवान् भोजनका प्रतीक हुन्, त्यसैले ब्राह्मण र गाई यी प्राणीलाई सम्पूर्ण सुरक्षा प्रदान गर्नु पर्दछ। यही नै सभ्यताको वास्तविक प्रगति हो। आधुनिक मानव समाजमा आध्यात्मिक ज्ञान उपेक्षित छ र गो वध प्रोत्साहित छ। त्यसैले अब के बुझ्नु पर्दछ भने, मानव समाज गलत दिशातिर अग्रसर छ र आफ्नो दण्डनीय अपराधको बाटो सफा गर्दैछ। जुन सभ्यताले नागरिकहरूलाई आगामी जन्ममा पशु बनाउने बाटोतिर हिँडाइरहेछ त्यो निश्चय नै मानव सभ्यता होइन। अवश्य नै रजोगुण र तमोगुणले वर्तमान मानव सभ्यतालाई गलत बाटोतर्फ डोऱ्याइरहेछ। यो अत्यन्त खतरापूर्ण युग हो, त्यसैले सम्पूर्ण राष्ट्रहरूले मानवतालाई महानतम खतराबाट बचाउनका लागि कृष्णभावनाको सरलतम विधि सबैलाई उपलब्ध गराउन विशेष ध्यान दिनु पर्दछ।

**सत्त्वात्सञ्जायते ज्ञानं रजसो लोभ एव च ।**
**प्रमादमोहौ तमसो भवतोऽज्ञानमेव च ॥ १७ ॥**

**सत्त्वात्** — सतोगुणबाट; **सञ्जायते** — उत्पन्न हुन्छ; **ज्ञानम्** — ज्ञान; **रजसः** — रजोगुणबाट; **लोभः** — लोभ; **एव** — निश्चय नै; **च** — पनि; **प्रमाद** — प्रमत्तता (पागलपन); **मोहौ** — र मोह; **तमसः** — तमोगुणबाट; **भवतः** — विकास हुन्छ; **अज्ञानम्** — अज्ञान (मूर्खता); **एव** — निश्चय नै; **च** — पनि।

**सतोगुणबाट वास्तविक ज्ञानको विकास हुन्छ, रजोगुणबाट लोभको विकास हुन्छ र तमोगुणबाट मूर्खता, पागलपन र मोह वा भ्रमको विकास हुन्छ।**

**तात्पर्य :** वर्तमान सभ्यता जीवका लागि त्यति अनुकूल नभएको हुनाले यो कृष्णभावनाको सिफारिस गरिएको छ। कृष्णभावनाका माध्यमबाट समाजले सतोगुणको विकास गर्नेछ। सतोगुणको विकास भएपछि मानिसहरू वस्तुलाई जस्ताको तस्तै देख्नेछन्। तमोगुणमा परेर मानिसहरू पशुजस्तै भएका छन् र वस्तुलाई स्पष्ट रूपले देख्न सकेका छैनन्। उदाहरणका लागि तमोगुणमा रहनाले मानिसहरू के बुझिरहेका छैनन् भने, जुन पशुलाई अहिले हामी मार्दैछौँ त्यही पशुले आगामी जन्ममा हामीलाई मार्ने अवसर पाउने छ। मानिसमा वास्तविक ज्ञानको शिक्षा नहुनाले तिनीहरू अनुत्तरदायी भएका छन्। यो अनुत्तरदायीपनलाई रोक्नका लागि सर्वसाधारण जनतामा सतोगुण उत्पन्न गराउने शिक्षा हुनु पर्दछ। यथार्थ रूपले सतोगुणी शिक्षा प्राप्त गरेपछि मानिसहरू गम्भीर बन्नेछन् र वस्तुको ज्ञान सही रूपमा प्राप्त गर्नेछन्। अनि मात्र मानिसहरू सुखी र समृद्ध बन्नेछन्।

अधिकांश मानिसहरू सुखी र समृद्ध छैनन् तापनि यदि उक्त जनसङ्ख्याको एउटा निश्चित प्रतिशतमा कृष्णभावनाको विकास भए र तिनीहरू सतोगुणी भइदिए संसारभरि नै शान्ति र समृद्धिको सम्भावना छ। अन्यथा यदि संसारका मानिसहरू रजोगुण र तमोगुणमा समर्पित भए शान्ति एवं समृद्धि आउन नै सक्दैन। रजोगुणी मानिसहरू लोभी हुन्छन् र इन्द्रियभोगका लागि हुने तिनीहरूको इच्छाको कुनै सीमा हुँदैन। हामी देख्न सक्दछौँ इन्द्रियतृप्तिका लागि प्रशस्त पैसा र पर्याप्त सामग्रीहरूको व्यवस्था भएका मानिसहरू पनि छन् तर तिनीहरू न कहिल्यै सुखी देखिन्छन् न त तिनका मनमा शान्ति छ। रजोगुणमा अवस्थित भएको मानिसलाई यो सम्भव छैन। सुखको चाहना गर्नेलाई उसको पैसाले सहायता गर्दैन, उसले कृष्णभावनाको अभ्यास गरेर आफूलाई सतोगुणमा अवस्थित गराउनु पर्दछ। रजोगुणमा संलग्न रहुञ्जेल मानिस मानसिक रूपले मात्र अप्रसन्न रहने होइन, उसको पेशा र व्यवसाय पनि अत्यन्त कष्टकारक हुन्छ। उसले आफ्नो प्रतिष्ठा बचाइराख्नका लागि पर्याप्त पैसा कमाउने विभिन्न उपाय र योजना बनाउनु पर्दछ। यो सबै कष्टपूर्ण छ। तमोगुणी मानिसहरू प्रमत्त हुन्छन्, उन्मत्त हुन्छन्। आफ्ना परिस्थितिहरूद्वारा पीडित भएर तिनीहरू मद्यपानको शरण लिन पुग्दछन् र यसरी तिनीहरू अझ बढी अज्ञानमा डुब्दछन्। तिनीहरूको आगामी जीवन अत्यन्त अन्धकारमय हुन्छ।

**ऊर्ध्वं गच्छन्ति सत्त्वस्था मध्ये तिष्ठन्ति राजसाः ।**
**जघन्यगुणवृत्तिस्था अधो गच्छन्ति तामसाः ॥ १८ ॥**

ऊर्ध्वम् — माथितिर; **गच्छन्ति** — जान्छन्; **सत्त्वस्थाः** — सतोगुणमा अवस्थित; **मध्ये** — माझमा; **तिष्ठन्ति** — बस्दछन्; **राजसाः** — रजोगुणीहरू; **जघन्य** — निन्दनीय; **गुण** — गुणहरू; **वृत्तिस्थाः** — जसको व्यवसाय; **अधः** — तल; **गच्छन्ति** — जान्छन्; **तामसाः** — तमोगुणीहरू।

**सतोगुणी व्यक्तिहरू क्रमशः माथिल्ला उच्च लोकहरूमा जान्छन्, रजोगुणीहरू यसै पृथ्वीलोकमा बस्दछन् र तमोगुणीहरू तलतिरका नारकीय लोकहरूमा जान्छन्।**

तात्पर्य : यो श्लोकमा प्रकृतिका तीन गुणका कर्मफलको अझ स्पष्ट रूपले व्याख्या गरिएको छ। स्वर्ग आदि माथिल्ला लोकमा प्रत्येक व्यक्ति उच्च अवस्थामा प्रतिष्ठित हुन्छन्। सतोगुणको विकासको मात्राअनुसार नै जीवहरू माथिका विभिन्न लोकहरूमा जान्छन्। सबैभन्दा माथिल्लो लोक सत्यलोक वा ब्रह्मलोक हो, जहाँ यस ब्रह्माण्डका प्रधानपुरुष ब्रह्माजी निवास गर्नु हुन्छ। हामीले पहिल्यै देखिसकेका छौँ—ब्रह्मलोकमा हुने जीवनको आश्चर्यजनक स्थितिको हिसाब कठिनताले गर्न सकिन्छ तर सतोगुणी अवस्था नामक जीवनको सर्वोच्च अवस्थाले हामीलाई त्यहाँ पुऱ्याउन सक्दछ। रजोगुण मिश्रित हुन्छ। यो सतोगुण र तमोगुणको बीचमा हुन्छ। मानिस सधैँ शुद्ध हुँदैन तर यदि ऊ विशुद्ध रजोगुणी भएको ऊ यो पृथ्वीमा केवल राजा या धनी मानिस बनेर रहन्छ। तर गुणहरूको मिश्रण भइरहने हुनाले ऊ तलतिर पनि जान सक्दछ। यस पृथ्वीका रजोगुणी वा तमोगुणी मानिसहरू कुनै यान वा यन्त्रद्वारा बलपूर्वक माथिल्ला लोकहरूमा पुग्न सक्दैनन्। रजोगुणमा रहने मानिस आगामी जीवनमा प्रमत्त हुन सक्ने सम्भावना पनि हुन्छ। तमोगुण सबैभन्दा निम्नकोटिको गुण हो, त्यसैले तमोगुणलाई निन्दनीय मानिएको छ। अज्ञान वा तमोगुणको विकासको परिणाम अत्यन्त जोखिमपूर्ण हुन्छ। भौतिक प्रकृतिमा यो सबैभन्दा निम्न प्रकारको गुण हो। मनुष्य योनिभन्दा तल ८० लाख जीवयोनिहरू छन्—पक्षी, पशु, घस्रेर हिँड्ने, रूखबिरुवा इत्यादि। अनि तमोगुणको विकासअनुसार मानिसलाई यी निन्दनीय अवस्थाका योनिहरूमा जानु पर्दछ। यहाँ प्रयोग भएको **तामसा** यो शब्द अत्यन्त अर्थपूर्ण छ। यो **तामसा** शब्दले त्यस्ता व्यक्तिलाई सङ्केत गर्दछ जो उच्च गुणहरूतिर अग्रसर नभई निरन्तर तमोगुणमा रहिरहन्छन्। तिनीहरूको भविष्य अत्यन्त अन्धकारपूर्ण हुन्छ।

तमोगुणी र रजोगुणी मानिसलाई सतोगुणमा उठाउने एउटा अवसर तथा

विधि छ, त्यसलाई कृष्णभावना भन्दछन् तर जसले यो अवसरबाट लाभ लिदैन त्यो निश्चय नै निरन्तर निम्न गुणहरूमा नै रहिरहन्छ।

**नान्यं गुणेभ्यः कर्तारं यदा द्रष्टानुपश्यति ।**
**गुणेभ्यश्च परं वेत्ति मद्भावं सोऽधिगच्छति ॥ १९ ॥**

**न** — होइन; **अन्यम्** — अर्को; **गुणेभ्यः** — गुणहरूभन्दा; **कर्तारम्** — कर्ता; **यदा** — जब; **द्रष्टा** — देख्ने व्यक्ति; **अनुपश्यति** — ठीकसँग देख्दछ; **गुणेभ्यः** — गुणहरूभन्दा; **च** — तथा; **परम** — दिव्य; **वेत्ति** — जान्दछ; **मद्भावम्** — मेरो आध्यात्मिक शक्तिलाई; **सः** — त्यो; **अधिगच्छति** — पुग्दछ (प्राप्त गर्दछ)।

**सम्पूर्ण काम गर्ने कर्ता जसले प्रकृतिका तीन गुणहरूबाहेक अरू कोही होइन भन्ने कुरा राम्रोसँग देख्दछ, त्यसले यी सम्पूर्ण गुणहरूभन्दा पर रहेको परमेश्वरलाई जान्दछ र अन्त्यमा मेरो दिव्य स्वभावलाई प्राप्त गर्दछ।**

**तात्पर्य :** महात्माहरूबाट सिकेर र तिनलाई राम्रोसँग बुझेर मात्र मानिस प्रकृतिका गुणहरूको सबै क्रियाकलापबाट पार हुन सक्दछ। वास्तविक गुरु त भगवान् श्रीकृष्ण हुनुहुन्छ। उहाँ अर्जुनलाई आध्यात्मिक ज्ञान दिइरहनुभएको छ। यसै गरी पूर्णतः कृष्णभावनाभावित व्यक्तिबाट प्राकृतिक गुणहरूका क्रियाकलापको विज्ञान सिक्नु पर्दछ। अन्यथा मानिसको जीवन लक्ष्यहीन हुनेछ। प्रामाणिक गुरुका उपदेशद्वारा जीवले आफ्नो आध्यात्मिक स्थिति, आफ्नो भौतिक शरीर र इन्द्रियहरूका बारेमा बुझ्न सक्दछ साथै कसरी ऊ बन्धनमा बाँधियो र कसरी प्रकृतिका गुणहरूको अधीनमा आयो भन्ने जानकारी पनि उसले पाउन सक्दछ। प्रकृतिका यी गुणहरूका बन्धनमा परेर जीव असहाय हुन पुग्दछ तर आफ्नो वास्तविक अवस्थाको बोध हुनासाथ आध्यात्मिक जीवनको अवसर पाएर उसले फेरि उही आफ्नो दिव्य स्थिति प्राप्त गर्न सक्दछ। वास्तवमा जीवात्मा स्वयम् नै विभिन्न कर्मको कर्ता होइन। केही विशेष भौतिक गुणहरूद्वारा सञ्चालित विशेष किसिमको शरीरमा अवस्थित भएका कारणले नै जीव त्यस्ता कर्म गर्न बाध्य हुन्छ। कुनै आधिकारिक आध्यात्मिक व्यक्तिको सहायता नपाई मानिसले आफ्नो वास्तविक स्थिति बुझ्न सक्दैन। प्रामाणिक गुरुका सत्सङ्गमा रहेर नै उसले आफ्नो असली अवस्थालाई देख्न सक्दछ र त्यस प्रकारको बोध भइसकेपछि ऊ पूर्ण कृष्णभावनामा दृढ हुन सक्दछ। कृष्णभावनाभावित व्यक्ति प्रकृतिका गुणहरूद्वारा नियन्त्रित हुँदैन। यसको चर्चा सातौँ अध्यायमा भइसकेको छ। भगवान् श्रीकृष्णका शरणमा समर्पित भएको व्यक्ति प्रकृतिका क्रियाकलापबाट

मुक्त हुन्छ। वस्तुलाई यथार्थ रूपमा देख्न समर्थ व्यक्तिमाथि प्रकृतिको प्रभाव विस्तारै समाप्त हुँदै जान्छ।

**गुणानेतानतीत्य त्रीन्देही देहसमुद्भवान् ।**
**जन्ममृत्युजरादुःखैर्विमुक्तोऽमृतमश्नुते ॥ २० ॥**

गुणान् — गुणहरूलाई; **एतान्** — यी सबै; **अतीत्य** — पार गरेर; **त्रीन्** — तीन; **देही** — शरीरधारी; **देह** — शरीर; **समुद्भवान्** — उत्पन्न भएको; **जन्म** — जन्म; **मृत्यु** — मृत्यु; **जरा** — बुढ्यौलीलाई; **दुःखैः** — दुःखबाट; **विमुक्तः** — मुक्त भएर; **अमृतम्** — अमृत; **अश्नुते** — भोग्दछ।

**भौतिक शरीरसँग सम्बन्धित प्रकृतिका यी तीन गुणहरूलाई पार गर्न सक्ने मानिस जन्म, मृत्यु, बुढ्यौली र त्यसबाट हुने कष्टबाट पनि मुक्त हुन सक्दछ र यसै जीवनमा अमृतत्त्व प्राप्त गर्न सफल हुन्छ।**

**तात्पर्य :** कृष्णभावनाले पूर्ण भएपछि यही शरीरमा रहेर पनि कसरी दिव्य स्थितिमा पुग्न सकिन्छ भन्ने कुराको व्याख्या यस श्लोकमा गरिएको छ। संस्कृतको **देही** शब्दले शरीरधारी भन्ने बुझाउँदछ। यही भौतिक शरीरमा रहेर पनि आध्यात्मिक ज्ञानको विकासद्वारा मानिस प्रकृतिका गुणहरूको प्रभावबाट मुक्त हुन सक्दछ। मानिसले यसै शरीरले पनि आध्यात्मिक जीवनको सुख भोग्न सक्दछ। कृष्णभावनाभावित व्यक्ति यो शरीर छोड्नासाथ आध्यात्मिक लोकमा जाने कुरा निश्चित छ। त्यस्तो मानिसले यही शरीरमा रहेर पनि आध्यात्मिक सुखको अनुभूति गर्न सक्दछ। अर्को शब्दमा भन्दा कृष्णभावनाभावित भएर भक्तिमा लाग्नु भनेको भौतिक बन्धनबाट मुक्त हुनु हो, यस विषयको व्याख्या अठारौँ अध्यायमा गरिनेछ। मानिस प्रकृतिका गुणहरूको प्रभावबाट मुक्त भएर मात्र भक्तिमय सेवामा प्रवेश गर्दछ।

अर्जुन उवाच

**कैर्लिङ्गैस्त्रीन्गुणानेतानतीतो भवति प्रभो ।**
**किमाचारः कथं चैतांस्त्रीन्गुणानतिवर्तते ॥ २१ ॥**

**अर्जुन उवाच** — अर्जुनले भने; **कैः** — कुन; **लिङ्गैः** — लक्षणहरूले; **त्रीन्** — तीन; **गुणान्** — गुणहरूलाई; **एतान्** — यी सबै; **अतीतः** — पार भएर; **भवति** — छ; **प्रभो** — हे प्रभु; **किम्** — के; **आचारः** — आचरण; **कथम्** — कसरी; **च** — पनि; **एतान्** — यी; **त्रीन्** — तीनै; **गुणान्** — गुणहरूलाई; **अतिवर्तते** — पार गर्दछ।

**अर्जुनले सोधे — हे भगवान्! कुन लक्षण देखेर हामी "यो मानिस तीन गुणहरूभन्दा पर छ" भनेर जान्न सक्दछौँ? त्यस्तो व्यक्तिको व्यवहार कस्तो हुन्छ? र प्रकृतिका गुणहरूलाई उसले कसरी पार गर्दछ?**

**तात्पर्य :** यस श्लोकमा अर्जुनले धेरै उपयुक्त प्रश्न गरेका छन्। यहाँ उनले प्रकृतिका गुणदेखि पार भएका व्यक्तिको लक्षण जान्न चाहेका छन्। सर्वप्रथम उनले यस्तो अलौकिक पुरुषको लक्षणबारे प्रश्न गरेका छन्। कुनै पनि व्यक्तिले भौतिक प्रकृतिका गुणहरूको प्रभावलाई पार गरिसकेको छ भन्ने कसरी जान्न सकिन्छ? अर्को प्रश्न हो — त्यस्तो व्यक्ति कसरी बस्दछ र उसका क्रियाकलाप कस्ता हुन्छन्? तिनीहरू नियमित हुन्छन् कि अनियमित? त्यसपछि, अर्जुनले त्यो दिव्य स्वभाव प्राप्त गर्ने साधनका बारेमा प्रश्न गरे। यो अत्यन्त महत्त्वपूर्ण छ। सधैँभरि दिव्य अवस्थामा रहने प्रत्यक्ष साधनहरूका बारेमा जानकारी नहुँदासम्म त्यसका लक्षणहरू देखाउने सम्भावना नै हुँदैन। अतः अर्जुनद्वारा सोधिएका यी सारा प्रश्नहरू अत्यन्त महत्त्वपूर्ण छन् र भगवान्ले तिनको उत्तर यस प्रकार दिँदै हुनुहुन्छ।

श्रीभगवानुवाच

**प्रकाशं च प्रवृत्तिं च मोहमेव च पाण्डव ।**
**न द्वेष्टि सम्प्रवृत्तानि न निवृत्तानि काङ्क्षति ॥ २२ ॥**
**उदासीनवदासीनो गुणैर्यो न विचाल्यते ।**
**गुणा वर्तन्त इत्येवं योऽवतिष्ठति नेङ्गते ॥ २३ ॥**
**समदुःखसुखः स्वस्थः समलोष्टाश्मकाञ्चनः ।**
**तुल्यप्रियाप्रियो धीरस्तुल्यनिन्दात्मसंस्तुतिः ॥ २४ ॥**
**मानापमानयोस्तुल्यस्तुल्यो मित्रारिपक्षयोः ।**
**सर्वारम्भपरित्यागी गुणातीतः स उच्यते ॥ २५ ॥**

**श्रीभगवान्-उवाच** — भगवान्ले भन्नुभयो; **प्रकाशम्** — प्रकाश; **च** — तथा; **प्रवृत्तिम्** — आसक्ति; **च** — तथा; **मोहम्** — मोह; **एव च** — पनि; **पाण्डव** — हे पाण्डुपुत्र; **न द्वेष्टि** — घृणा गर्दैन; **सम्प्रवृत्तानि** — विकसित भएमा; **न निवृत्तानि** — विकास नरोक्नु; **काङ्क्षति** — चाहन्छ; **उदासीनवत्** — तटस्थ भएजस्तै; **आसीनः** — अवस्थित; **गुणैः** — गुणहरूद्वारा; **यः** — जो; **न विचाल्यते** — विचलित हुँदैन; **गुणाः** — गुणहरू; **वर्तन्ते** — क्रियाशील हुन्छन्; **इतिएवम्** — यस्तो जानेर; **यः** — जो; **अवतिष्ठति** — रहन्छ; **न इङ्गते** — हलचल गर्दैन; **सम** — समान; **दुःखः** — दुःखमा; **सुखः** — र सुखमा; **स्वस्थः** — आफैँमा स्थित भएर; **सम** — समान रूपले; **लोष्ट** —

माटाको डल्लो; **अश्म** — ढुङ्गो; **काञ्चनः** — सुन; **तुल्य** — समान रूपले इच्छुक; **प्रिय** — प्रिय वस्तुप्रति; **अप्रियः** — र अप्रिय वस्तुप्रति; **धीरः** — धीर; **तुल्य** — समान; **निन्दा** — निन्दा हुँदा; **आत्मसंस्तुतिः** — र आफ्नो प्रशंसा हुँदा; **मान** — सम्मान र; **अपमानयोः** — अपमानमा; **तुल्यः** — समान; **तुल्यः** — बराबर; **मित्र** — साथी र; **अरि** — शत्रुका; **पक्षयोः** — पक्षप्रति; **सर्व** — सबैको; **आरम्भ** — प्रयत्न; **परित्यागी** — त्यागकर्ता; **गुण अतितः** — प्रकृतिका गुणभन्दा पर; **सः** — त्यो; **उच्यते** — भनिन्छ।

**भगवान्ले भन्नुभयो — जसले प्रकाश, आसक्ति र मोहजस्ता कुरा उपस्थित हुँदा तिनीहरूप्रति द्वेष वा घृणा पनि गर्दैन र फेरि यी वस्तुहरू लुप्त हुँदा यिनको चाहना पनि गर्दैन, भौतिक गुणहरूका यी सम्पूर्ण प्रतिक्रियाबाट जो अविचलित तथा निश्चल रहन्छ, केवल गुणहरू मात्रै क्रियाशील हुन्छन् भन्ने जानेर जो दिव्य र तटस्थ रहन्छ, सुख र दुःखलाई समान ठानेर जो आफैँमा स्थित छ, जसले माटोको डल्लो, ढुङ्गो र सुनलाई समान दृष्टिले हेर्दछ, इच्छित र अनिच्छित अवस्था उपस्थित हुँदा जो समभावमा रहन्छ, जो धीर छ, जो निन्दा र प्रशंसा, मान र अपमानमा पनि समान रहन्छ, जसले शत्रु र मित्र दुवै पक्षप्रति समान व्यवहार गर्दछ, जसले सम्पूर्ण भौतिक क्रियाकलापको परित्याग गरेको छ, त्यस्तो व्यक्तिलाई प्रकृतिका गुणहरूदेखि पर रहेको भनिन्छ।**

**तात्पर्य :** अर्जुनले भगवान् श्रीकृष्णसँग तीनवटा प्रश्न सोधे। भगवान्ले पनि एक एक गरेर तिनको उत्तर दिनुभयो। यी श्लोकहरूमा सर्वप्रथम भगवान् श्रीकृष्णले के सङ्केत गर्नुभयो भने — दिव्य अवस्थामा अवस्थित भएको व्यक्ति कसैप्रति द्वेषभाव पनि राख्दैन र कुनै वस्तुका लागि इच्छुक पनि हुँदैन। भौतिक शरीर धारण गरेर यो संसारमा आएको जीव प्रकृतिका तीन गुणहरूमध्ये कुनै न कुनै एउटा गुणका अधीनमा अवश्य हुन्छ भन्ने बुझ्नु पर्दछ। शरीरबाट बाहिर निस्किएपछि मात्र ऊ प्रकृतिका भौतिक गुणहरूको बन्धनबाट मुक्त हुन्छ। भौतिक शरीरबाट बाहिर ननिस्कँदासम्म ऊ तटस्थ भएर बस्नु पर्दछ, त्यसैले उसले आफूलाई भगवान्को भक्तिमा लगाउनु पर्दछ। त्यसो गरेमा भौतिक शरीरसँगको उसको आत्मीयता स्वतः विस्मृत हुँदै जान्छ वा हराउँदछ। भौतिक शरीरप्रति सचेत हुने मानिसले केवल इन्द्रियतृप्तिका लागि मात्र काम गर्दछ। तर जब उसले त्यो चेतना श्रीकृष्णतिर स्थानान्तरित गर्दछ, इन्द्रियतृप्तिको भाव स्वतः रोकिन्छ। त्यस अवस्थामा उसलाई यो भौतिक शरीरको आवश्यकता पनि हुँदैन र उसलाई यस भौतिक शरीरका आदेशहरू मान्नुपर्ने आवश्यकता पनि हुँदैन। भौतिक गुणहरूले मात्र शरीरमा

काम गर्नेछन् र आत्मा स्वयम् यस्ता क्रियाकलापहरूबाट अलग्ग रहनेछ। आत्मा शरीरबाट कसरी अलग्ग हुन्छ? यस अवस्थामा आत्माले न शरीरको भोग गर्न चाहन्छ न शरीरबाट बाहिर निस्कन नै चाहन्छ। यसरी दिव्य स्थितिमा पुगेको भक्त स्वतः मुक्त हुन्छ। उसलाई प्रकृतिका गुणहरूको प्रभावबाट मुक्त हुनका लागि कुनै प्रयत्न गर्नुपर्ने आवश्यकता हुँदैन।

अर्को प्रश्न दिव्य स्थितिमा रहेका व्यक्तिको व्यवहार वा आचरण कस्तो हुन्छ भन्ने विषयसँग सम्बन्धित छ। भौतिक स्थितिमा रहेको व्यक्ति उसको शरीरलाई गरिने तथाकथित सम्मान र अपमानबाट प्रभावित हुन्छ तर दिव्य स्थितिमा रहेको व्यक्ति त्यस्ता झूटो सम्मान र अपमानबाट प्रभावित हुँदैन। ऊ कृष्णभावनामा रहेर आफ्नो कर्तव्य गरिरहन्छ र कसैले सम्मान गरोस् वा अपमान गरोस् त्यसमा कुनै ध्यान नै दिदैन।

कृष्णभावनामय कर्ममा अनुकूल हुने कुरालाई उसले स्वीकार गर्दछ अन्यथा ढुङ्गा होस् वा सुन कुनै भौतिक वस्तुको आवश्यकता उसलाई हुँदैन। कृष्णभावनामय कार्यको सम्पादनमा सहयोग पुऱ्याउने प्रत्येक व्यक्तिलाई उसले आफ्ना प्रिय मित्रका रूपमा लिन्छ र आफ्ना तथाकथित शत्रुलाई पनि कहिल्यै घृणा गर्दैन। उसको सबैप्रति समानभाव हुन्छ र हरेक वस्तुलाई उसले समान स्तरमा देख्दछ, किनभने यो भौतिक संसारसँग आफ्नो कुनै सरोकार नभएको कुरा उसले राम्ररी बुझेको हुन्छ। सामाजिक एवं राजनीतिक विषयले पनि उसलाई कुनै प्रभाव पार्दैन, किनभने यी अस्थायी उतारचढाव र विचलनका स्थिति हुन् भन्ने उसले बुझेको हुन्छ। उसले आफ्नै लागि भनेर कुनै काम गर्दैन। भगवान् श्रीकृष्णका लागि ऊ जे गर्न पनि तयार हुन्छ तर आफ्नो निजी स्वार्थका लागि केही गर्दैन। यस्तै व्यवहारले मानिस वास्तविक दिव्य स्थितिमा अवस्थित हुन सक्दछ।

**मां च योऽव्यभिचारेण भक्तियोगेन सेवते ।**
**स गुणान्समतीत्यैतान्ब्रह्मभूयाय कल्पते ॥ २६ ॥**

**माम्** — मलाई; **च** — पनि; **यः** — जसले; **अव्यभिचारेण** — विचलित नभईकन; **भक्तियोगेन** — भक्तियोगद्वारा; **सेवते** — सेवा गर्दछ; **सः** — त्यो; **गुणान्** — प्राकृतिक गुणहरूलाई; **समतीत्य** — पार गरेर; **एतान्** — यी सबै; **ब्रह्मभूयाय** — ब्रह्मको स्तरसम्म पुगेको; **कल्पते** — हुन्छ।

**जुनसुकै परिस्थितिमा पनि अविचलित भावले पूर्णतया भगवद्भक्तिमा संलग्न हुने व्यक्ति भौतिक प्रकृतिका गुणहरूलाई तत्काल पार गरेर ब्रह्मको स्तरमा पुग्दछ।**

**तात्पर्य :** यो श्लोक अर्जुनको तेस्रो प्रश्नको उत्तरमा आएको छ। दिव्य स्थिति प्राप्त गर्ने साधन के हो भन्ने प्रश्न अर्जुनको थियो। यो भौतिक जगत् प्रकृतिका गुणहरूको अधीनमा रहेर क्रियाशील छ भन्ने कुराको व्याख्या पहिल्यै गरिसकियो। मानिस प्राकृतिक गुणहरूका क्रियाकलापबाट विचलित हुनु हुँदैन। उसले आफ्नो चेतनालाई यस्ता क्रियाकलापमा नलगाएर भगवान् श्रीकृष्णका लागि गरिने काममा लगाउनु पर्दछ। श्रीकृष्णका लागि गरिने काम भक्तियोगका नामले चिनिन्छ। यसमा सधैँ भगवान् श्रीकृष्णका लागि कार्य गरिन्छ। श्रीकृष्ण भन्नाले यहाँ केवल भगवान् श्रीकृष्ण मात्र नभएर राम, नारायणजस्ता श्रीकृष्णका विभिन्न अंश विस्तारहरू पनि पर्नुहुन्छ। उहाँका असङ्ख्य अंश विस्तारहरू छन्। जो भगवान् श्रीकृष्णका कुनै पनि रूप वा अंश विस्तारप्रतिको भक्तिमा संलग्न हुन्छ, त्यसलाई दिव्य स्थितिमा अवस्थित भएको छ भन्ने विचार गर्नु पर्दछ। मानिसले के कुराको विचार गर्नु पर्दछ भने, भगवान् श्रीकृष्णका सम्पूर्ण रूपहरू पूर्ण अलौकिक छन्, सच्चिदानन्दमय छन्। यस्ता ईश्वरीय व्यक्तित्वधारीहरू सर्वशक्तिमान् तथा सर्वज्ञ हुन्छन् र तिनीहरूसँग सम्पूर्ण दिव्य गुणहरू हुन्छन्। यदि कसैले आफूलाई अचूक सङ्कल्पका साथ भगवान् श्रीकृष्ण वा श्रीकृष्णका अंश विस्तारको सेवामा संलग्न गराउँदछ त्यस्तो व्यक्तिले प्रकृतिका जित्न नसकिने गुणहरूलाई पनि सजिलैसँग जित्न सक्दछ। यसको व्याख्या पहिल्यै सातौँ अध्यायमा गरिसकिएको छ। जसले आफूलाई भगवान् श्रीकृष्णका शरणमा समर्पित गरेको छ, त्यसले प्रकृतिका गुणको प्रभावलाई सजिलै पार गर्दछ। कृष्णभावनामा हुनु वा कृष्णभक्तिमा हुनुको अर्थ श्रीकृष्णसँगको समानता आर्जन गर्नु हो।

भगवान्का भनाइअनुसार उहाँको प्रकृति सच्चिदानन्दमय छ र सुनका कणहरू सुनखानीका अंश भएजस्तै जीवात्माहरू पनि उनै परमपुरुषका अंश हुन्। यस प्रकार जीवात्मा आफ्ना आध्यात्मिक स्वरूपमा सुनजस्तै वा भगवान् श्रीकृष्णजस्तै गुणले युक्त छन्। तापनि जीवको व्यष्टिगत भिन्नता यथावत् रहिरहन्छ, अन्यथा भक्तियोगको प्रश्न नै उठ्ने थिएन। भक्तियोग भन्नु नै भगवान् पनि हुनुहुन्छ र भक्तहरू पनि हुन्छन्, अनि भक्त र भगवान्का बीच प्रेमको आदान-प्रदान चलिरहन्छ भन्ने कुरालाई जान्नु हो। त्यसैले भगवान् र व्यष्टि जीवात्मा वा व्यक्तिका बीचमा दुईवटा पृथक् व्यक्तित्व उपस्थित हुन्छ अन्यथा भक्तियोगको कुनै अर्थ नै रहने थिएन। यदि व्यक्ति भगवान्को जस्तै दिव्य स्थितिमा नहुनेभए उसले भगवान्को सेवा नै गर्नसक्ने थिएन। राजाको निजी सहायक हुनका लागि व्यक्तिले त्यो योग्यता आर्जन गरेको हुनु

पर्दछ। सांसारिक संक्रमणबाट मुक्त हुनका लागि अथवा ब्रह्म प्राप्त गर्नका लागि पनि त्यस्तै प्रकारको योग्यता चाहिन्छ। वैदिक साहित्यमा भनिएको छ—**ब्रह्मैव सन्ब्रह्माप्येति**। यसको अर्थ—मानिस पनि गुणात्मक रूपले ब्रह्मसँग एकाकार हुनु पर्दछ भन्नेहुन्छ। ब्रह्मत्व प्राप्त गरेपछि मानिसले व्यष्टि आत्माका रूपमा आफ्नो शाश्वत ब्रह्मभावको पहिचानलाई गुमाउँदैन।

**ब्रह्मणो हि प्रतिष्ठाहममृतस्याव्ययस्य च ।**
**शाश्वतस्य च धर्मस्य सुखस्यैकान्तिकस्य च ॥ २७॥**

**ब्रह्मणः**— निराकार ब्रह्मज्योति; **हि**— निश्चय नै; **प्रतिष्ठा**— आश्रय; **अहम्**— म; **अमृतस्य**— अमरताको; **अव्ययस्य**— अविनाशिताको; **च**— पनि; **शाश्वतस्य**— शाश्वतको; **च**— तथा; **धर्मस्य**— वास्तविक स्वरूपको (वैधानिक स्थितिको); **सुखस्य**— सुखको; **ऐकान्तिकस्य**— परमको (आत्यन्तिकको); **च**— पनि।

**अमर, अविनाशी, शाश्वत र परमसुखको स्वाभाविक अवस्थास्वरूप निराकार ब्रह्मको आधार पनि म नै हूँ।**

**तात्पर्य :** अमरता, अविनाशिता, शाश्वतता र सुखमयता ब्रह्मका स्वरूप हुन्। ब्रह्म दिव्य साक्षात्कार (अनुभूति) को प्रारम्भ हो। परमात्मा यस दिव्य अनुभूतिको मध्य वा द्वितीय स्तर हो र भगवान् त्यो परमसत्यको अन्तिम अनुभूति वा परमसाक्षात्कार हुनुहुन्छ। त्यसैले परमात्मा र निराकार ब्रह्म दुवै परमपुरुषभित्र हुनुहुन्छ। सातौँ अध्यायमा भनिएको छ—यो भौतिक प्रकृति परमेश्वरकी अपराशक्तिको अभिव्यक्ति हो। भगवान्ले अंशसहित पराप्रकृतिलाई अपराप्रकृतिका गर्भमा स्थापित गरिदिनु हुन्छ, त्यही नै भौतिक जगत्मा उहाँको आध्यात्मिक स्पर्श हो। भौतिक प्रकृतिद्वारा बद्ध बनाइएको जीवात्माले जब आध्यात्मिक ज्ञानको विकास गर्न थाल्दछ, उसले आफूलाई सांसारिक अस्तित्वको अवस्थाबाट माथि उठाउँदछ र क्रमशः परमेश्वरको ब्रह्मभावसम्म पुऱ्याउँदछ। जीवनमा यस प्रकारको ब्रह्मबोधको प्राप्ति आत्मसाक्षात्कारको पहिलो अवस्था हो। यस अवस्थामा ब्रह्मभूत व्यक्तिले भौतिक अवस्थालाई पार गर्दछ तर ब्रह्मसाक्षात्कारमा पूर्णता पाइसकेको हुँदैन। उसले इच्छा गरेमा ऊ यही ब्रह्मभूत अवस्थामा रहिरहन पनि सक्दछ र त्यसपछि विस्तारै परमात्माको साक्षात्कारसम्म उठ्दछ र अन्त्यमा भगवद्साक्षात्कार वा भगवान्को अनुमतिसम्म पुग्दछ। वैदिक साहित्यमा यसका धेरै उदारहणहरू छन्।

चार कुमारहरू पहिले सत्यको निराकार ब्रह्मभावमा अवस्थित हुनुहुन्थ्यो अनि त्यसपछि तिनीहरू विस्तारै भक्तिभावको स्तरमा पुग्नुभयो। निराकार

ब्रह्मभावभन्दा माथि उठ्न नसक्ने व्यक्तिको तल्लो स्तरमा पतन हुने डर हुन्छ। *श्रीमद्भागवत्मा* भनिएको छ— निराकार ब्रह्मको अवस्थासम्म पुगे पनि त्योभन्दा अझ माथि उठ्न नसकेसम्म वा परमपुरुषका बारेमा जानकारी नपाएसम्म उसको बुद्धि पूर्णतया निर्मल हुँदैन। त्यसैले ब्रह्मभावसम्म पुगिसकेर पनि यदि भगवान्का भक्तिमा संलग्न नभए तल झर्ने सम्भावना रहिरहन्छ। वैदिक भाषामा यो पनि भनिएको छ— **रसो वै स रसं ह्येवायं लब्ध्वानन्दी भवति।** रसका सागर भगवान् श्रीकृष्णलाई जानेपछि मात्र मानिस वास्तविक रूपमा दिव्य आनन्दमय हुन पुग्दछ (तैत्तरीय उपनिषद्-२.७.१) परमेश्वर छ:वटा ऐश्वर्यले पूर्ण हुनुहुन्छ। जब भक्त उहाँको निकटमा पुग्दछ त्यहाँ भक्त र भगवान्बीच उक्त षड्ऐश्वर्यको आदान-प्रदान हुन्छ। राजाको सेवकले पनि लगभग राजाको जस्तो अवस्थाको उपभोग गर्दछ। यसरी शाश्वत सुख, अविनाशी सुख र शाश्वत जीवन— यी तीन कुराहरू भक्तिका साथमा हुन्छन्। त्यसैले ब्रह्म वा शाश्वतता वा अविनाशिताको अनुभूति भक्तिमा समाहित हुन्छ। भक्तिसेवामा संलग्न व्यक्तिले यी कुराहरू प्राप्त गरिसकेको हुन्छ।

जीवात्मा स्वभावले ब्रह्म भए पनि भौतिक जगत्माथि प्रभुत्व जमाउने इच्छाले गर्दा ऊ आफ्नो स्वरूपबाट तल झर्दछ। आफ्नो स्वाभाविक स्थितिमा जीवात्मा प्रकृतिका तीन गुणहरूभन्दा माथि हुन्छ तर भौतिक प्रकृतिसँगको सङ्गतले गर्दा उसलाई सत्त्व, रज, तम आदि विभिन्न प्राकृतिक गुणहरूले बद्ध बनाउँदछन्। यिनै तीन गुणहरूको संसर्गका कारणले उसमा भौतिक जगत्माथि प्रभुत्व जमाउने चाहना उत्पन्न हुन्छ। पूर्णतया कृष्णभावनामा रहेर भक्तिमा संलग्न भएमा ऊ तत्काल दिव्य स्थितिमा अवस्थित हुन पुग्दछ र भौतिक प्रकृतिलाई नियन्त्रण गर्ने उसको अवैध चाहना समाप्त हुन्छ र भगवान्का दिव्य सेवामा दृढतापूर्वक अवस्थित हुन्छ। त्यसैले भक्तहरूका सङ्गतमा रहेर भक्तिको साक्षात्कार गर्नका लागि भनिएका श्रवण, कीर्तन, स्मरण आदि भक्तिका विधिहरूको अभ्यास मानिसले गर्नु पर्दछ। अनि विस्तारै यस्तै सत्सङ्गले र गुरु कृपाका प्रभावले मानिसको प्रभुत्व जमाउने भौतिक चाहना समाप्त हुन्छ। यो अध्यायको बाइसौँ श्लोकदेखि लिएर यो अन्तिम श्लोकसम्म यही विधिको सिफारिस गरिएको छ। भगवान्को भक्ति अत्यन्त सरल छ, त्यसैले सधैँ भगवान्को सेवामा संलग्न हुनु पर्दछ।

भगवान्का श्रीविग्रहमा भोग लगाइएको उच्छिष्ट भोजन ग्रहण गर्नु पर्दछ। भगवान्का चरणकमलमा चढाइएको फूलको सुगन्ध लिनु पर्दछ, भगवान्ले दिव्य लीलाहरू गर्नुभएका स्थानहरूको दर्शन गर्नु पर्दछ, भगवान्का विविध क्रियाकलापका बारेमा र भक्तहरूसँग उहाँले गर्नुभएका प्रेम-विनिमयका

बारेमा पढ्नु पर्दछ, नित्य **हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे, हरे राम हरे राम राम राम हरे हरे** यो दिव्य ध्वनि उच्चारण गर्नु पर्दछ र उपवास गरेर भगवान् एवं उहाँका भक्तहरूको आविर्भाव र तिरोभावको स्मृति दिवस तथा उत्सव मनाउनु पर्दछ। यी विधिहरूको पालना गर्नाले मानिस सम्पूर्ण भौतिक क्रियाकलापबाट पूर्णतया विरक्त हुन पुग्दछ। यसरी मानिसले आफूलाई विभिन्न प्रकारका ब्रह्मभाव वा ब्रह्मज्योतिमा स्थित गराउन सक्दछ, जो गुणका दृष्टिले भगवान्कै समान छन्।

यसरी *श्रीमद्भगवद्गीता* ग्रन्थअन्तर्गत 'प्रकृतिका तीन गुण' शीर्षक चौधौँ अध्यायको भक्तिवेदान्त तात्पर्य समाप्त भयो।

## अध्याय-पन्ध्र

# पुरुषोत्तम योग

श्रीभगवानुवाच

**ऊर्ध्वमूलमधःशाखमश्वत्थं प्राहुरव्ययम् ।**
**छन्दांसि यस्य पर्णानि यस्तं वेद स वेदवित् ॥ १ ॥**

**श्रीभगवान् उवाच** — भगवान्ले भन्नुभयो; **ऊर्ध्वमूलम्** — माथितिर फेद (जरा) भएको; **अधः** — तलतिर; **शाखम्** — हाँगाहरू भएको; **अश्वत्थम्** — पीपलको रूखलाई; **प्राहुः** — भनिएको छ; **अव्ययम्** — शाश्वत; **छन्दांसि** — वैदिक ऋचाहरू; **यस्य** — जसका; **पर्णानि** — पातहरू; **यः** — जसले; **तम्** — त्यसलाई; **वेद** — जान्दछ; **सः** — त्यो; **वेदवित्** — वेदको ज्ञाता हो।

**भगवान्ले भन्नुभयो- माथितिर फेद वा जरा भएको, तलतिर हाँगाहरू फैलिएको र वेदका ऋचारूपी पातहरू भएको एउटा अविनाशी पीपलको वृक्ष छ, यस्तो वृक्षलाई जसले राम्रोसँग जान्दछ त्यसलाई वेदको ज्ञाता भनिन्छ।**

**तात्पर्य :** यसरी भक्तियोगका महत्त्वको विवेचना गरिसकेपछि कसैले प्रश्न गर्न सक्दछ—त्यसो भए वेदको प्रयोजन के हो? यसको प्रत्युत्तरमा यसै अध्यायमा भनिएको छ—"वेदाध्ययनको प्रयोजन भगवान् श्रीकृष्णलाई बुझ्नु हो"। तसर्थ कृष्णभावनाभावित भएका र भगवद्भक्तिमा लागेका मानिसहरूले वेदलाई पहिले नै जानिसकेका हुन्छन्। यहाँ यस भौतिक जगत्मा हुने सांसारिक जटिलताहरूको तुलना पीपलका रूखसँग गरिएको छ। सकाम कर्ममा लागेको व्यक्तिका लागि यस्तो पीपलको रूखको कुनै अन्त्य छैन। ऊ एउटा हाँगाबाट अर्को हाँगामा र त्यसबाट पुनः अर्को हाँगामा घुमिरहन्छ। यो संसाररूपी वृक्षको कुनै अन्त्य छैन र यस्तो वृक्षमा आसक्त हुनेहरूले मुक्ति पाउने कुनै सम्भावना छैन। आत्माको उन्नतिका निमित्त रचित वैदिक मन्त्रहरू पनि यसै वृक्षका पातहरूजस्ता हुन्। यो वृक्षको फेद माथिबाट पलाएको छ, किनभने यसको प्रारम्भ ब्रह्माजी बस्ने ब्रह्माण्डको सर्वोच्च लोकबाट भएको छ। यो मोहरूपी अविनाशी वृक्षलाई बुझ्नेले मात्र यसबाट पार पाउन सक्दछ।

यस मोहरूपी वृक्षबाट बाहिर निस्कने विधि पनि जानिराख्नु आवश्यक छ। भवबन्धनबाट बाहिर निस्कने कतिपय विधिहरूको वर्णन पहिलेका

अध्यायहरूमा गरिसकिएको पनि छ र यो पन्ध्र अध्यायसम्म आइपुग्दा पाठकलाई भगवद्भक्ति नै सबैभन्दा राम्रो बाटो हो भन्ने ज्ञान भइसकेको छ। भक्तिको मूल सिद्धान्त भनेको भौतिक कार्यबाट विरक्त हुनु र भगवान्‌को दिव्य सेवाप्रति संलग्न हुनु हो। यस अध्यायको प्रारम्भमा सांसारिक आसक्तिबाट मुक्त हुने विधिको वर्णन गरिएको छ। यो संसाररूपी वृक्षको फेद माथितिर फर्केको छ। यसको अर्थ ब्रह्माण्डको सर्वोच्च लोकमा अवस्थित पूर्ण भौतिक पदार्थबाट यसको प्रारम्भ हुन्छ। त्यहीँबाट सम्पूर्ण ब्रह्माण्डको विस्तार हुन्छ र त्यसका शाखाहरू विभिन्न लोकहरूका रूपमा विस्तारित छन्। यसको फल भन्नु नै धर्म, अर्थ, काम र मोक्षजस्ता जीवका कर्महरूको प्रतिफल हो।

संसारमा माथितिर फेद र तलतिर हाँगा भएको यस किसिमको रूख अहिलेसम्म कसैले देखेको छैन तर वास्तवमा कुरा त्यस्तै छ। रूखहरूले घेरिएको कुनै तलाउ वा पोखरीका छेउछाउमा पुगेर पोखरीका पानीमा हेरेमा त्यहाँ हामीले ती रूखहरूलाई देख्न सक्दछौँ। पोखरीका नजिक उभिने यस्ता रूखको छायाँ पोखरीमा पर्दा फेद माथि र हाँगाहरू तलतिर झुण्डिएको देखिन्छ। अर्को शब्दमा भन्नुपर्दा, यो भौतिक जगत्‌रूपी वृक्ष भनेको आध्यात्मिक जगत्‌रूपी वास्तविक वृक्षको प्रतिविम्ब वा छायाँ मात्र हो। आध्यात्मिक जगत्‌को यो प्रतिविम्ब त्यसै गरी हाम्रो इच्छामा अडिएको छ, जसरी वृक्षको प्रतिविम्ब जलमा परेको देखिन्छ। यो प्रतिविम्बित भौतिक प्रकाशमा अवस्थित वस्तुहरूको मूल कारण इच्छा हो। अतः यस भौतिक जगत्‌बाट मुक्त हुन चाहनेले विश्लेषणात्मक अध्ययनद्वारा यो वृक्षको राम्रो ज्ञान प्राप्त गर्नु पर्दछ। अनि मात्र उसले यस संसाररूपी वृक्षबाट आफ्नो सम्बन्ध विच्छेद गर्न सक्दछ।

यो वृक्ष वास्तविक वृक्षको प्रतिविम्ब हुनाले ठीक त्यसको प्रतिरूपजस्तो देखिन्छ। आध्यात्मिक जगत्‌मा सबै कुरा छन्। निराकारवादीहरू ब्रह्मलाई यो भौतिक वृक्षको मूल जरा मान्दछन्। अनि साङ्ख्यदर्शनअनुसार यही मूल जराबाट प्रकृति र पुरुष प्रकट हुन्छन् अनि तीन गुणहरू उत्पन्न हुन्छन्। त्यसपछि पाँच स्थूल तत्त्व पञ्चमहाभूतहरू उत्पन्न हुन्छन् अनि दश इन्द्रिय र मनको उत्पत्ति हुन्छ। यसरी सबै संसार चौबीस तत्त्वहरूमा विभाजित छ। यदि ब्रह्म सम्पूर्ण भौतिक अभिव्यक्तिको केन्द्र भएमा यस केन्द्रबाट १८० डिग्रीको गोलार्धमा भौतिक जगत् छ र अर्को १८० डिग्रीको गोलार्धमा आध्यात्मिक जगत् रहेको छ। यो भौतिक जगत् आध्यात्मिक जगत्‌को उल्टो प्रतिविम्ब हो। यसको सुल्टो रूप भनेको वास्तविक आध्यात्मिक जगत् हो। आध्यात्मिक जगत् पनि यो भौतिक जगत्‌जस्तै विविधतापूर्ण छ। प्रकृति भन्नु परमेश्वरको बहिरङ्गा शक्ति हुन् र पुरुष स्वयम् परमेश्वर हुनुहुन्छ। यसको

व्याख्या यसै *भगवद्गीतामा* पहिल्यै भइसकेको छ। यो सृष्टि भौतिक हुनाले क्षणिक छ। प्रतिविम्ब अस्थायी हुन्छ, त्यसैले यो कहिले देखिन्छ र कहिले देखिँदैन। तर यो प्रतिविम्बको मूल स्वरूप शाश्वत छ। वास्तविक वृक्षको भौतिक प्रतिविम्बलाई काटिदिनु पर्दछ। यदि कसैलाई वेदको ज्ञाता भनेर चिनाएमा त्यसले यो जगत्सँगको आसक्तिलाई विच्छेद गर्न जानिसकेको छ भन्ने बुझिन्छ। जसले यो विधि जानेको छ त्यसैले वास्तवमा वेदलाई जानेको छ। वेदका कर्मकाण्डप्रति आकर्षित हुने व्यक्तिलाई यस वृक्षका सुन्दर हरिया पातहरूतिर आकर्षित भएको मानिन्छ। त्यस्ता मानिसलाई वेदको वास्तविक उद्देश्य थाहा हुँदैन। स्वयम् भगवान्ले भन्नुभएअनुसार वेदको विशेस उद्देश्य प्रतिविम्बित भएको छायाँवृक्षलाई काटेर आध्यात्मिक जगत्को वास्तविक वृक्षलाई प्राप्त गर्नु हो।

**अधश्चोर्ध्वं प्रसृतास्तस्य शाखा**
**गुणप्रवृद्धा विषयप्रवालाः ।**
**अधश्च मूलान्यनुसन्ततानि,**
**कर्मानुबन्धीनि मनुष्यलोके ॥ २ ॥**

**अधः** — तलतिर; **च** — तथा; **ऊर्ध्वम्** — माथितिर; **प्रसृताः** — फैलिएका; **तस्य** — त्यसका; **शाखाः** — हाँगाहरू; **गुण** — प्रकृतिका गुणद्वारा; **प्रवृद्धाः** — विकसित; **विषय** — इन्द्रियका विषयहरू; **प्रवालाः** — हाँगा-बिँगाहरू; **अधः** — तलतिर; **च** — तथा; **मूलानि** — फेद वा जराहरू; **अनुसन्ततानि** — विस्तारित; **कर्म** — कार्य गर्नका लागि; **अनुबन्धीनि** — बाँधिएको; **मनुष्यलोके** — मानव जगत्मा।

**यस वृक्षका हाँगाहरू माथि र तलतिर फैलिएका छन्। प्रकृतिका तीनवटा गुणहरूद्वारा यो वृक्षको पालन-पोषण भएको छ। इन्द्रियका विषयहरू यसका हाँगा हुन्। यो वृक्षका जराहरू पनि तलतिर फैलिएका छन् र ती मानव समाजका सकाम कर्मद्वारा बाँधिएका छन्।**

**तात्पर्य :** यो पीपलका रूखको व्याख्यालाई यहाँ अझै विस्तृत वर्णन गरिएको छ। यसका शाखाहरू चारैतिर फैलिएका छन्। तल्लो भागमा मानिस, पशु, घोडा, गाई, कुकुर, बिरालो आदि जीवका विभिन्न योनिहरू छन्। यिनीहरू उक्त रूखका हाँगाको तल्लो भागमा अवस्थित छन् र ती हाँगाहरूका माथिल्ला भागमा देवता, गन्धर्व तथा अन्य उच्चस्तरीय जीवयोनिहरू रहेका छन्। सामान्य वृक्षको पोषण जलबाट हुन्छ र यस वृक्षको पोषण प्रकृतिका तीन गुणहरूबाट भइरहेको छ। कहिलेकाहीँ पर्याप्त पानी नपर्नाले कुनै जमिन

सुख्खा वा बाँझो हुन्छ र कुनै जमिन पानीको पर्याप्त सुविधाले हरियालीयुक्त हुन्छ। ठीक यसै गरी जहाँ प्रकृतिको कुनै विशेष गुणको मात्रा बढी हुन्छ त्यस ठाउँमा तदनुरूपका विभिन्न जीवयोनिहरू प्रकट हुन्छन्।

रूखका ससाना हाँगाहरू भनेका इन्द्रियका विषय हुन् भन्ने मानिन्छ। प्रकृतिका विभिन्न गुणको विकासद्वारा हामी विभिन्न प्रकारका इन्द्रियहरूको विकास गर्दछौँ र ती इन्द्रियहरूद्वारा हामी विभिन्न प्रकारका इन्द्रिय विषयहरूको भोग पनि गर्दछौँ। हाँगाका टुप्पाहरू भनेका कान, नाक, आँखा आदि इन्द्रियहरू हुन् र यिनीहरू विभिन्न इन्द्रिय विषयका भोगमा आसक्त छन्। शब्द, स्पर्श, रूप, रस आदि इन्द्रियका विषय हुन् र यिनीहरू नै यस वृक्षका ससाना हाँगा हुन्। आसक्ति र विरक्ति यसका सहायक जरा हुन्, जो विभिन्न प्रकारका कष्ट र इन्द्रियभोगका सह-उत्पादन हुन्। चारै दिशामा फैलिएका यी साना सहायक जराहरूबाट धर्म र अधर्मका प्रवृत्तिहरूको विकास भएको मानिन्छ। वास्तविक मूल जरा ब्रह्मलोकबाट सुरु हुन्छ र अरू जराहरू मर्त्यलोकमा हुन्छन्। उच्च लोकमा गएर पुण्यकर्मको फल भोग गरिसकेपछि मानिस पुनः पृथ्वीमा झर्दछ र उन्नतिका लागि आफ्ना सकाम कर्मलाई नवीकरण गर्दछ। यस मनुष्यलोकलाई कर्मक्षेत्र मानिएको छ।

**न रूपमस्येह तथोपलभ्यते**
**नान्तो न चादिर्न च सम्प्रतिष्ठा।**
**अश्वत्थमेनं सुविरूढमूल-**
**मसङ्गशस्त्रेण दृढेन छित्त्वा ॥ ३ ॥**
**ततः पदं तत्परिमार्गितव्यं**
**यस्मिन्गता न निवर्तन्ति भूयः।**
**तमेव चाद्यं पुरुषं प्रपद्ये**
**यतः प्रवृत्तिः प्रसृता पुराणी ॥ ४ ॥**

**न** — छैन; **रूपम्** — रूप; **अस्य** — यो वृक्षको; **इह** — यो संसारमा; **तथा** — पनि; **उपलभ्यते** — प्राप्त गर्न सकिन्छ; **न** — न कहिले; **अन्तः** — अन्त्य; **न** — न कहिल्यै; **च** — पनि; **आदिः** — आरम्भ; **न** — न कहिल्यै; **च** — पनि; **सम्प्रतिष्ठा** — आधारशिला (जग); **अश्वत्थम्** — पीपलको रूखलाई; **एवम्** — यो; **सुविरूढ** — बलियो किसिमले; **मूलम्** — जरो गाडिएको; **असङ्गशस्त्रेण** — विरक्तिको शस्त्रद्वारा; **दृढेन** — बलियोसँग; **छित्वा** — काटेर; **ततः** — त्यसपछि; **पदम्** — स्थितिमा; **तत्** — त्यो; **परिमार्गितव्यम्** — खोजी गर्नु पर्दछ; **यस्मिन्** — जहाँ; **गताः** — गएर; **ननिवर्तन्ति** — कहिल्यै फर्किन्नन्; **भूयः** — फेरि; **तम्** — त्यसलाई;

**एव** — निश्चय नै; **च** — पनि; **आद्यम्** — आदि; **पुरुषम्** — भगवान्लाई; **प्रपद्ये** — समर्पण; **यतः** — जसबाट; **प्रवृत्तिः** — प्रारम्भ; **प्रसृता** — फैलिएको; **पुराणी** — धेरै पुरानो।

**यस रूखको वास्तविक स्वरूपको अनुभव यो जगत्मा गर्न सकिँदैन। यसको आदि कहाँ हो, अन्त कहाँ छ र आधारशिला कता छ भन्ने कुरा कसैलाई थाहा छैन। तैपनि मानिसले सङ्कल्पका साथ विरक्तिरूपी हतियारद्वारा बलियोसँग जरा गाडेको यो रूखलाई काट्न पर्दछ र त्यसपछि उसले यस्तो ठाउँको खोजी गर्नु पर्दछ जहाँ पुगेपछि फर्कनु पर्दैन। त्यस्ता ठाउँमा पुगेर मानिस भगवान्का शरणमा पर्दछ, जहाँबाट अनादिकालदेखि प्रत्येक वस्तुको प्रारम्भ र विस्तार पनि हुँदै आएको छ।**

**तात्पर्य :** स्पष्ट रूपमा यहाँ के भनिएको छ भने, यो पीपलको रूखको वास्तविक स्वरूप यस भौतिक जगत्मा रहेर चिन्न सकिँदैन। यसका जराहरू माथि फर्केका छन् तर वास्तविक वृक्षको विस्तार यसको ठीक विपरीत दिशामा हुने गर्दछ। यो वृक्षको भौतिक विस्तारमा अल्झिएका मानिसलाई यसको आदि कहाँ छ, अन्त्य कहाँ छ र कति टाढासम्म यो फैलिएको छ भन्ने कुराको जानकारी नै हुँदैन। तैपनि मानिसले यसको कारणको खोजी त गर्नै पर्दछ। "म मेरा पिताको छोरो हूँ, मेरा पिताजी कसैको छोरा हुनुहुन्छ र उहाँका पिताजी कसैको हुनुहुन्छ" भन्दै पिताको पिता खोज्दै जाने भए मानिस आफ्ना आदिपिता ब्रह्माजीसम्म पुग्दछ। ब्रह्माजी पनि गर्भोदकशायी विष्णुबाट उत्पन्न हुनुभएको हो। यसरी खोजी गर्दै जब मानिस अन्त्यमा भगवान्समक्ष पुग्दछ अनि उसको अनुसन्धानकार्य सकिन्छ। मानिसले भगवान्का विषयमा जानकारी भएका व्यक्तिहरूको सङ्गत गरेर यो वृक्षको मूल जरो भगवान्को खोजी गर्नु पर्दछ। यस प्रकारको ज्ञान पाएर मानिस विस्तारै विस्तारै वास्तविकताको यो भूटो प्रतिविम्बबाट विरक्त हुन्छ। ज्ञानद्वारा यस वृक्षसँगको सम्बन्ध विच्छेद गरेपछि मानिस वास्तविक मूल वृक्षमा अवस्थित हुन पुग्दछ।

यस प्रसङ्गमा **असंग** शब्द अत्यन्त महत्त्वपूर्ण छ। किनभने मानिसमा विषयभोगको आसक्ति र भौतिक प्रकृतिमाथि प्रभुत्व जमाउने चाहना अत्यन्त प्रबल हुन्छ। तसर्थ प्रामाणिक शास्त्रमा आधारित आत्मज्ञानको विवेचनाद्वारा मानिसले वैराग्यको शिक्षा लिनु पर्दछ र वास्तविक ज्ञानी व्यक्तिबाट भगवान्सम्बन्धी विषयको श्रवण पनि गर्नु पर्दछ। भक्तको सङ्गतमा रहेर यस्तै चर्चा-परिचर्चा गर्दा-गर्दै मानिसले भगवान्लाई प्राप्त गर्दछ। यसका लागि सर्वप्रथम भगवान्का शरणमा समर्पित हुनु पर्दछ। यहाँ त्यस परमपदको

वर्णन गरिएको छ जहाँ पुगेपछि मानिसलाई यो झूटो छायाँरूपी संसार वृक्षमा कहिल्यै फर्केर आउनु पर्दैन। भगवान् श्रीकृष्ण नै जगत्को मूल जरा हुनुहुन्छ र उहाँबाट नै यहाँका यी प्रत्येक वस्तु उत्पन्न हुने गर्दछन्। उहाँको अनुग्रह प्राप्त गर्नका लागि केवल उहाँको शरणमा पर्नु पर्दछ र श्रवण कीर्तन आदिद्वारा भक्ति जागृत भएपछि यस किसिमको प्रतिफल प्राप्त हुन्छ। यो भौतिक जगत्को विस्तारका कारण पनि उहाँ नै हुनुहुन्छ। यसको व्याख्या स्वयम् भगवान्ले गरिसक्नुभएको छ। **अहं सर्वस्य प्रभवः** अर्थात् 'म प्रत्येक वस्तुको मूल हूँ।' अतः यो भौतिक जीवनरूपी प्रबल पीपल वृक्षको बन्धनबाट छुट्कारा पाउन भगवान् श्रीकृष्णको शरणमा जानु पर्दछ। भगवान् श्रीकृष्णको शरणमा पर्नासाथ मानिस यो भौतिक प्रपञ्चबाट स्वतः विरक्त हुन्छ, मुक्त हुन्छ।

**निर्मानमोहा जितसङ्गदोषा**
**अध्यात्मनित्या विनिवृत्तकामाः।**
**द्वन्द्वैर्विमुक्ताः सुखदुःखसंज्ञै-**
**र्गच्छन्त्यमूढाः पदमव्ययं तत् ॥ ५ ॥**

**निः** — रहित; **मान** — झूटो प्रतिष्ठा; **मोहाः** — तथा मोह; **जित** — विजय गरेको; **सङ्ग** — सङ्गतिको; **दोषाः** — त्रुटिहरू; **अध्यात्म** — आध्यात्मिक ज्ञानमा; **नित्याः** — सनातनमा; **विनिवृत्त** — अलग; (**असंग**); **कामाः** — वासनाबाट; **द्वन्द्वैः** — द्वैतभावबाट; **विमुक्ताः** — मुक्त भएका; **सुख-दुःख** — सुख र दुःख; **संज्ञैः** — नामका; **गच्छन्ति** — पुग्दछन्; (**पाउँदछन्**); **अमूढाः** — मोहरहित; **पदम्** — अवस्था वा ठाउँ; **अव्ययम्** — शाश्वत; **तत्** — त्यो।

**जो झूटो प्रतिष्ठा, मोह एवं कुसङ्गतबाट मुक्त छन्, जसले भौतिक वासनालाई नाश पारेका छन्, जो सुख र दुःखको द्वन्द्वबाट मुक्त छन् र जो मोहरहित भएर परमपुरुषका शरणमा पर्न जानेका छन्, तिनीहरूले नै शाश्वत पद प्राप्त गर्न सक्दछन्।**

**तात्पर्य** : यहाँ शरणागतिको अत्यन्त सुन्दर तरिकाले वर्णन गरिएको छ। यसका लागि पहिलो योग्यता भनेको अहङ्कारबाट मोहित नहुनु हो। किनभने बद्ध जीव आफूलाई प्रकृतिको स्वामी ठानेर घमण्ड गरिरहेको हुन्छ, त्यसैले गर्दा उसलाई भगवान्का शरणमा जान अत्यन्त कठिन हुन्छ। उसले वास्तविक ज्ञानको विकासद्वारा म प्रकृतिको स्वामी होइन भन्ने बुझ्नु पर्दछ र परमेश्वर नै प्रकृतिका मूल स्वामी हुनुहुन्छ भन्ने जान्नु पर्दछ। अहङ्कारद्वारा उत्पन्न मोहबाट मुक्त भएपछि नै शरणागतिको प्रक्रिया सुरु हुन्छ। यस संसारमा सधैँ

सम्मानको आशा राख्ने व्यक्तिलाई पनि भगवान्को शरणमा जान सम्भव हुँदैन। मोहले गर्दा अहङ्कार उत्पन्न हुन्छ। मानिस पृथ्वीमा आउँदछ, केही समय रहन्छ अनि विदा हुन्छ तर मूर्खतावश उसले आफूलाई नै यो संसारको स्वामी हूँ भन्ने ठान्दछ। यसरी उसले सबै कुरामा जटिलता सिर्जना गर्दछ र सधैँ कष्ट उठाइरहन्छ। सारा संसार यही प्रभावमा चलिरहेको छ। मानिसहरूले यो भूमि वा यो पृथ्वीलाई मानव समाजको सम्पत्ति ठानेका छन् र "हामी नै यसका स्वामी हौँ" भन्ने गलत धारणामा परेर उनीहरूले यसको विभाजन गरेका छन्।

मानव समाज नै यो विश्वको स्वामी हो भन्ने गलत धारणाबाट मानिसले मुक्ति पाउनु पर्दछ। जब मानिस यो भ्रान्त धारणाबाट मुक्त हुन्छ अनि मात्र ऊ पारिवारिक, सामाजिक तथा राष्ट्रिय स्नेहबाट उत्पन्न हुने कुसङ्गतबाट पनि मुक्त हुन सक्दछ। यी त्रुटिपूर्ण सङ्गतहरूले नै मानिसलाई यस संसारमा बाँधेर राखेका छन्। यो अवस्थापछि मानिसले आध्यात्मिक ज्ञानको विकास गर्नु पर्दछ। उसले यस्तो ज्ञानको विकास गर्नु पर्दछ, जसबाट उसलाई यथार्थमा कुन वस्तु आफ्नो हो र कुन वस्तु वास्तवमा आफ्नो होइन भन्ने जानकारी प्राप्त होओस्। वस्तुहरूको सही सही ज्ञान भएपछि मात्र मानिस सुख-दुःख, हर्ष-विषाद जस्ता सम्पूर्ण द्वन्द्वभावबाट मुक्त हुन सक्दछ। ज्ञानले परिपूर्ण भएपछि मानिसलाई भगवान्का शरणमा पर्न सम्भव हुन्छ तथा सजिलो हुन्छ।

**न तद्भासयते सूर्यो न शशाङ्को न पावकः ।**
**यद्गत्वा न निवर्तन्ते तद्धाम परमं मम ॥ ६ ॥**

**न** — हुँदैन; **तद्** — त्यो; **भासयते** — प्रकाशित हुन्छ; **सूर्यः** — सूर्यबाट; **न** — न त; **शशाङ्कः** — चन्द्रमाबाट; **न** — न त; **पावकः** — अग्नि वा विद्युतबाट; **यत्** — जहाँ; **गत्वा** — गएर; **न निवर्तन्ते** — फर्किनु पर्दैन; **तत्धाम**— त्यो धाम; **परमम्** — परम; **मम** — मेरो।

**त्यो मेरो परमधाम न सूर्यद्वारा न चन्द्रमाद्वारा न अग्नि वा विद्युतद्वारा नै प्रकाशित हुन्छ। जो त्यहाँ पुग्दछन् तिनीहरू फेरि कहिल्यै यस पृथ्वीमा फर्केर आउँदैनन्।**

**तात्पर्य :** यहाँ आध्यात्मिक जगत् वा भगवान् श्रीकृष्णको धामको वर्णन गरिएको छ, जसलाई कृष्णलोक तथा गोलोक वृन्दावन पनि भनिन्छ। चिन्मय आध्यात्मिक आकाशमा न त सूर्यको प्रकाशको आवश्यकता पर्दछ न चन्द्रमाको प्रकाश। आगो र विद्युतको आवश्यकता पनि त्यहाँ हुँदैन, किनभने त्यहाँका सम्पूर्ण लोकहरू स्वयम् प्रकाशित छन्। यस ब्रह्माण्डमा एउटा मात्र सूर्यलोक त्यस्तो छ जो स्वयम् प्रकाशित छ तर आध्यात्मिक

आकाशमा सबै लोकहरू स्वयम् प्रकाशित छन्। वैकुण्ठ नामले चिनिने ती सबै लोकहरूको जाज्वल्यमान तेजले प्रकाशवान् आकाशको निर्माण भएको छ, जो ब्रह्मज्योतिका नामले चिनिन्छ। वास्तवमा यो तेज कृष्णलोक वा गोलोक वृन्दावनबाट उत्पन्न भइरहेको हुन्छ। यो तेजको एक भाग महत्‌तत्त्व अर्थात् भौतिक जगत्‌बाट ढाकिएको छ। यसका अतिरिक्त ज्योतिर्मय आकाशको अधिकांश भाग आध्यात्मिक लोकहरूले भरिएको छ, जसलाई वैकुण्ठ भनिन्छ र तिनमा पनि गोलोक वृन्दावन सबैभन्दा मुख्य हो।

यो अन्धकारमय भौतिक जगत्‌मा रहँदासम्म जीवात्मा बद्ध अवस्थामा हुन्छ। तर यो भौतिक जगत्‌रूपी प्रतिविम्बित भूटो वृक्षलाई काटेर चिन्मय आकाशमा पुग्नेबित्तिकै ऊ मुक्त हुन्छ। त्यसपछि उसलाई यहाँ फर्कनु पर्दैन। यो बद्ध जीवनमा रहँदासम्म उसले आफूलाई भौतिक जगत्‌को स्वामी ठानेको हुन्छ तर मुक्त अवस्थामा पुग्नासाथ ऊ आध्यात्मिक जगत्‌मा प्रवेश गर्दछ र परमेश्वरको पार्षद बनेर बस्दछ। त्यहाँ उसले सच्चिदानन्दमय जीवनको उपभोग गर्दछ।

यस सूचनाबाट मानिस आकर्षित हुनु पर्दछ। उसले त्यही शाश्वत जगत्‌मा आफूलाई पुऱ्याउने अभिलाषा राख्नु पर्दछ र सत्यताको यो भूटो प्रतिविम्बबाट आफूलाई अलग राख्नु पर्दछ। यस भौतिक संसारप्रति अत्यन्त आसक्त हुनेहरूका लागि यो आसक्तिलाई काट्‌न अत्यन्त कठिन हुन्छ तर यदि कुनै मानिस कृष्णभावनाभावित भएमा विस्तारै यसबाट अनासक्त हुने अवसर उसले पाउँदछ। मानिसले आफूलाई कृष्णभावनाभावित भक्तहरूको सङ्गतमा राख्नु पर्दछ। उसले कृष्णभावनाप्रति समर्पित भएको समाज खोज्नुपर्छ, जहाँ भक्तिको विधान सिक्न पाइयोस्। यसरी उसले यस संसारप्रतिको आसक्तिलाई काट्‌न सक्दछ। गेरुवा वस्त्र धारण गरेर मात्र भौतिक जगत्‌को आकर्षणबाट विरक्त हुन सकिँदैन यसका लागि भगवद्‌भक्तिप्रति आसक्ति हुनु पर्दछ। अतः मानिसले गीताको बाह्रौँ अध्यायमा वर्णन गरिएको भक्तियोगलाई गम्भीरतापूर्वक ग्रहण गर्नु पर्दछ। यही नै कल्याणको एकमात्र उपाय हो र यसैका सहायताले सही वृक्षको छायाँस्वरूप यो संसाररूपी वृक्षबाट मुक्त हुन सकिन्छ। अन्य सबै प्रकारका विधिहरू भौतिक प्रकृतिद्वारा दूषित भएको कुरा यहाँ वर्णन गरिएको छ र भनिएको छ— केवल भक्तिमात्र पूर्णतया शुद्ध र दिव्य छ।

यहाँ प्रयोग भएको **परमं मम** यी दुई शब्द अत्यन्त महत्त्वपूर्ण छन्। वास्तवमा संसारको प्रत्येक कुनाकाप्चा भगवान्‌को सम्पत्ति भएतापनि आध्यात्मिक जगत् परमश्रेष्ठ छ र षड्‌ऐश्वर्यले पूर्ण छ। कठोपनिषद् (२.२.१५) मा पनि यसैको पुष्टि गर्दै भनिएको छ— चिन्मय जगत्‌मा सूर्यको प्रकाश, चन्द्रमाको प्रकाश या तारागणको प्रकाशको आवश्यकता पर्दैन, किनभने त्यहाँको सम्पूर्ण चिन्मय

आकाश भगवान्को आन्तरिक शक्तिद्वारा प्रकाशित छ, **न तत्र सूर्यो भाति न चन्द्रतारकाम्**। त्यस परमधाममा केवल शरणागतिबाट मात्र पुग्न सकिन्छ। अरू कुनै साधनद्वारा त्यहाँ पुग्न सकिँदैन।

**ममैवांशो जीवलोके जीवभूतः सनातनः ।**
**मनः षष्ठानीन्द्रियाणि प्रकृतिस्थानि कर्षति ॥ ७ ॥**

**मम** — मेरो; **एव** — निश्चय नै; **अंशः** — सूक्ष्म कण; **जीवलोके** — बद्ध जीवको संसारमा; **जीवभूतः** — बद्ध जीव; **सनातनः** — शाश्वत; **मनः** — मनसहित; **षष्ठानि** — छःवटा; **इन्द्रियाणि** — इन्द्रियहरू; **प्रकृति** — प्रकृतिमा; **स्थानि** — अवस्थित; **कर्षति** — कठोर सङ्घर्ष गरिरहेको छ।

**यस बद्ध जगत्का सबै जीवहरू मेरै शाश्वत अंश हुन्। बद्ध जीवन पाएका कारणले तिनीहरू मन सहित छःवटा इन्द्रियहरूसँग कठोर सङ्घर्ष गरिरहेका छन्।**

**तात्पर्य :** यस श्लोकमा जीवको स्वरूप प्रष्ट्याइएको छ। जीवहरू शाश्वत रूपमा परमेश्वरका सूक्ष्म अंश हुन्। जीव बद्ध अवस्थामा अलग्गै व्यष्टिको रूप धारण गर्दछ र मुक्त अवस्थामा परमेश्वरसँग एकाकार हुन्छ भन्ने कुरा सत्य होइन। जीव सनातन रूपमा परमेश्वरको अंश हो। जीवलाई यहाँ प्रष्ट रूपले सनातन भनिएको छ। वेदवचनअनुसार परमेश्वर आफूले आफैँलाई असङ्ख्य रूपमा प्रकट गर्नु हुन्छ र विस्तार गर्नु हुन्छ, जसमध्ये प्रारम्भिक विस्तारलाई विष्णु-तत्त्व र दोस्रो चरणको विस्तारलाई जीवात्मा भनिन्छ। अर्को शब्दमा भगवान् विष्णुलाई निजी विस्तार वा स्वांश रूप तथा जीवात्मालाई भिन्न विस्तार वा विभिन्नांश पनि भनिन्छ। आफ्नै निजी अंशद्वारा उहाँ भगवान् राम, नृसिंहदेव, विष्णुमूर्ति तथा वैकुण्ठलोकका प्रधान देवताका रूपमा प्रकट हुनुहुन्छ। पृथक् अंश विस्तार जीव उहाँका नित्यदास हुन्। भगवान्का निजी अंशविस्तार सधैँ विद्यमान छन्। यसै गरी पृथक् अंश जीवको पनि आफ्नै स्वरूप वा पहिचान छ। परमेश्वरको पृथक्-अंश भएका कारणले जीवमा पनि उहाँको आंशिक गुणहरू हुन्छन्। तीमध्ये स्वतन्त्रता एउटा हो। एउटा आत्माका रूपमा प्रत्येक जीवको आफ्नो निजी व्यक्तित्व हुन्छ र उसमा अलिकति स्वतन्त्रता पनि हुन्छ। यही स्वतन्त्रताको दुरुपयोग गर्दा जीव बद्ध हुन पुग्दछ र यसको सही उपयोग गरेमा जीव सधैँ मुक्त हुन सक्दछ। दुवै अवस्थामा गुणात्मक रूपले जीव भगवान् जत्तिकै सनातन हुन्छ। मुक्त स्थितिमा ऊ यो भौतिक अवस्थाबाट मुक्त रहन्छ र भगवान्को दिव्य सेवामा संलग्न रहन्छ तर बद्ध जीवनमा रहँदा प्रकृतिका गुणद्वारा अभिभूत

भएर उसले भगवान्‌को दिव्य प्रेमाभक्तिलाई भुलिदिन्छ। फलस्वरूप संसारमा आफ्नो अस्तित्व जोगाइराख्न पनि उसले कठोर सङ्घर्ष गर्नु पर्दछ। मानिस मात्र नभएर कुकुर, बिरालोलगायतका सम्पूर्ण जीवात्माहरू र ब्रह्मा, शिव तथा विष्णुजस्ता संसारका महान्‌तम नियन्त्रकहरू पनि भगवान्, परमेश्वरका अंश हुन्। यी सबै सनातन अभिव्यक्ति हुन्, क्षणिक होइनन्। कठोर सङ्घर्ष गर्ने अर्थमा प्रयोग भएको कर्षति शब्द यहाँ महत्त्वपूर्ण छ, किनभने बद्ध जीव फलामको साङ्लाले बाँधिए जस्तो अवस्थामा छ। ऊ अहङ्कारमा बाँधिएको छ, उसलाई यो भवसागरमा ल्याउने प्रमुख कारण उसको मन हो। उसको मन जब सत्त्वगुणी हुन्छ, उसका कर्महरू पनि असल हुन्छन्। जब रजोगुणमा उसको मन अल्भिन्छ, उसका कर्महरू पनि कष्टकारक हुन्छन् र तमोगुणमा उसको मन भर्नासाथ उसले तुच्छ जीवयोनिमा भ्रमण गर्नुपर्ने हुन्छ। यस श्लोकमा स्पष्ट रूपले भनिएको छ— यो बद्ध जीव आफ्नो मन तथा इन्द्रियसहित भौतिक शरीररूपी आवरणमा अवतरित हुन्छ र मुक्त भएपछि उसको यो भौतिक आवरण पनि नष्ट हुन्छ तर उसको आध्यात्मिक शरीर भने आफ्नै सामर्थ्यले व्यष्टि रूपमा स्वयम् प्रकट हुन्छ। 'माध्यान्दिनायन श्रुति' मा भनिएको छ— **स वा एष ब्रह्मनिष्ठ इदं शरीरं मर्त्यमतिसृज्य ब्रह्माभि सम्पद्य ब्रह्मणा पश्यति ब्रह्मणा श्रृणोति ब्रह्मणैवेदं सर्वमनुभवति।** अर्थात्, जीवले आफ्नो भौतिक शरीर त्याग गरेर आध्यात्मिक जगत्‌मा प्रवेश गरेपछि उसलाई पुनः आध्यात्मिक शरीर प्राप्त हुन्छ र त्यस शरीरमा रहेर उसले भगवान्‌लाई प्रत्यक्ष देख्न सक्दछ। ऊ उहाँसँग कुराकानी गर्न सक्दछ, उहाँको वचन सुन्न सक्दछ र उहाँ जस्तो हुनुहुन्छ त्यही रूपमा चिन्न पनि सक्दछ। स्मृतिमा पनि यस्तै लेखिएको छ। **वसन्ति यत्र पुरुषाः सर्वे वैकुण्ठमूर्तयः** अर्थात्, वैकुण्ठमा रहने जीवहरू सबै भगवान्‌को जस्तो शरीरमा रहन्छन्। जहाँसम्म शारीरिक बनावटको सम्बन्ध छ त्यसमा भगवद्-अंशरूप जीवात्मा र विष्णुमूर्तिको विस्तारमा कुनै भिन्नता छैन। अर्को शब्दमा भगवान्‌का कृपाले मुक्तिका अवस्थामा जीवले आध्यात्मिक शरीर प्राप्त गर्दछ।

**ममैवांश** अर्थात् मेरो अंश भन्ने शब्द पनि यहाँ अत्यन्त सार्थक छ। भगवान्‌को अंश भनेको कुनै भौतिक वस्तुको फुटेको टुक्राजस्तो होइन। आत्मालाई टुक्र्याउन सकिँदैन भन्ने कुरा दोस्रो अध्यायमा पढिसकेका छौँ। यो अंश भौतिक रूपले अभिव्यक्त हुँदैन। आत्मा भौतिक वस्तुजस्तै टुक्र्याउन र जोड्न सकिने हुँदैन। यस्तो अवधारणा यहाँ लागू हुँदैन, किनभने संस्कृतको **सनातन** शब्दले खण्ड भन्ने जनाउँदैन। भगवान्‌को पृथक् अंश सनातन हो। प्रत्येक जीवमा भगवान्‌को सूक्ष्म अंश विद्यमान छ। दोस्रो अध्यायको प्रारम्भमा

**देहिनोऽस्मिन्यथा देहे** भनिएको छ। त्यस अंशले शारीरिक बन्धनबाट मुक्त भएपछि चिन्मय आकाशको वैकुण्ठलोकमा आफ्नो पुरानो आध्यात्मिक शरीर प्राप्त गर्दछ र भगवान्‌को सान्निध्य प्राप्त गर्दछ। सुनको सानो अंश पनि सुन नै भएजस्तै भगवान्‌को अंश भएकाले जीव पनि गुणात्मक दृष्टिले भगवान समान हो भन्ने अभिमत राख्ने गरिन्छ।

**शरीरं यदवाप्नोति यच्चाप्युत्क्रामतीश्वरः ।**
**गृहीत्वैतानिसंयाति वायुर्गन्धानिवाशयात् ॥ ८ ॥**

**शरीरम्** — शरीरलाई; **यत्** — जुन; **अवाप्नोति** — प्राप्त गर्दछ; **यत्** — जुन; **च** — तथा; **अपि** — पनि; **उत्क्रामति** — त्याग गर्दछ; **ईश्वरः** — शरीरको स्वामी; **गृहीत्वा** — ग्रहण गरेर; **एतानि** — यी सबैलाई; **संयाति** — जान्छ; **वायुः** — हावा; **गन्धान्** — सुगन्धलाई; **इव** — जस्तै; **आशयात्** — स्रोतबाट।

**हावाले सुगन्धलाई एक ठाउँबाट अर्को ठाउँमा पुर्‍याएजस्तै यस संसारमा जीवात्माले पनि आफ्नो शारीरिकबुद्धिको अवधारणालाई एक शरीरबाट अर्को शरीरमा पुर्‍याउँदछ। यसरी जीवले एउटा शरीर धारण गर्दछ अनि त्यसलाई त्यागेर फेरि अर्को शरीर ग्रहण गर्दछ।**

**तात्पर्य :** यहाँ जीवलाई आफ्ना शरीरको नियन्त्रक ईश्वरका रूपमा वर्णन गरिएको छ। उसले चाहेमा आफ्नो वर्तमान शरीरलाई त्यागेर त्योभन्दा उच्चतर योनिमा पनि पुग्न सक्दछ र उसको चाहनाअनुरूप निम्नतर योनिमा पनि जान सक्दछ। यस विषयमा उसलाई केही मात्रामा स्वतन्त्रता प्राप्त छ। उसको शरीरमा जुन परिवर्तन हुन्छ त्यो पनि ऊ स्वयम्‌मा निर्भर गर्दछ। मृत्यु कालमा जस्तो भावना उसका मनमा उत्पन्न हुन्छ, त्यही भावना अनुरूपको शरीर वा अवस्था उसले अर्को जन्ममा पाउँदछ। यदि मृत्यु कालमा उसले आफ्नो भावना वा चेतनालाई कुकुर-बिरालाको चेतनाजस्तो बनाएमा उसले आगामी जन्ममा कुकुर-बिरालाको शरीर प्राप्त गर्दछ। यदि उसले आफ्नो चेतना दैवी गुणमा स्थिर गरेमा उसलाई देवताको स्वरूप प्राप्त हुन्छ। त्यस समय यदि ऊ कृष्णभावनाभावित बन्न बनेमा उसले आध्यात्मिक जगत्‌मा स्थित कृष्णलोकमा पुगेर भगवान् श्रीकृष्णको सान्निध्य प्राप्त गर्दछ। यो भौतिक शरीर नाश भएपछि सबै कुरा नाश हुन्छ भन्ने दाबी झूटो हो।

व्यष्टि आत्मा एउटा शरीरबाट अर्को शरीरमा देहान्तरण गर्दछ र वर्तमान शरीर तथा यसका कार्यकलापहरू नै आगामी शरीरका लागि आधारभूमि बन्दछन्। कर्मअनुसार मानिसले भिन्नभिन्न शरीर प्राप्त गर्दछ र समय पुगेपछि उसले त्यो शरीर त्याग गर्नु पर्दछ। यहाँ भनिएको छ— आगामी शरीरको बीज

वहन गरिरहेको सूक्ष्म शरीरले अर्को जन्ममा त्यसै अनुसारको शरीर विकसित गर्दछ। एउटा शरीरबाट अर्को शरीरमा देहान्तर गर्ने प्रकृया र यही शरीरमा रहेर गर्नुपर्ने जीवन-सङ्घर्षलाई **कर्षति** भनिन्छ।

**श्रोत्रं चक्षुः स्पर्शनं च रसनं घ्राणमेव च ।**
**अधिष्ठाय मनश्चायं विषयानुपसेवते ॥ ९ ॥**

**श्रोत्रम्** — कान; **चक्षुः** — आँखा; **स्पर्शनम्** — स्पर्श; **च** — पनि; **रसनम्** — जिब्रो; **घ्राणम्** — सुङ्ने शक्ति; **एव** — पनि; **च** — र; **अधिष्ठाय** — अवस्थित रहेर; **मनः** — मन; **च** — पनि; **अयम्** — यसले; **विषयान्** — इन्द्रिय विषयलाई; **उपसेवते** — भोग गर्दछ।

**यसरी दोस्रो स्थूल शरीर धारण गरेर जीवले मनका वरिपरि रहेका विशेष प्रकारका कान, आँखा, जिब्रो, नाक तथा स्पर्श इन्द्रियहरू प्राप्त गर्दछ। यस प्रकार उसले विशेष किसिमका इन्द्रियविषयहरूलाई भोग गर्दछ।**

**तात्पर्य :** अर्को शब्दमा भन्दा, यदि जीवले आफ्नो चेतनालाई कुकुर र बिरालाको स्वभावजस्तो बनाए अर्को जन्ममा उसले कुकुर-बिरालाको शरीर पाउँदछ र त्यसैको भोग गर्दछ। चेतना मौलिक रूपमा पानीजस्तै सङ्लो वा शुद्ध हुन्छ तर पानीमा विशेष रङ्ग मिसाएपछि त्यसको रूप पनि त्यसै अनुरूप परिवर्तन हुन्छ। आत्मा शुद्ध भएकाले चेतना पनि शुद्ध छ तर भौतिक गुणहरूको सङ्गतले गर्दा चेतनामा परिवर्तन हुन्छ। वास्तविक चेतना भनेको कृष्णभावनामृत हो। तसर्थ जब कोही कृष्णभावनामा स्थिर हुन्छ उसको जीवन पवित्र हुन्छ तर यदि उसको चेतना कुनै भौतिक प्रवृत्तिसँग गाँसिएको भए अर्को जीवनमा उसले त्यस्तै किसिमको शरीर प्राप्त गर्दछ। उसले फेरि पनि मानिसको शरीर पाउँदछ भन्ने केही निश्चित छैन। उसले कुकुर, बिरालो, सुँगुर, देवता वा चौरासी लाख योनिमध्ये कुनै एउटा योनि पाउन सक्दछ।

**उत्क्रामन्तं स्थितं वापि भुञ्जानं वा गुणान्वितम् ।**
**विमूढा नानुपश्यन्ति पश्यन्ति ज्ञानचक्षुषः ॥ १० ॥**

**उत्क्रामन्तम्** — शरीर त्याग गर्दा; **स्थितम्** — शरीरमा रहेको; **वा अपि** — अथवा; **भुञ्जानम्** — भोग गर्दा; **वा** — अथवा; **गुणान्वितम्** — प्रकृतिको गुणका अधीन; **विमूढाः** — मूर्ख मानिसहरू; **न अनुपश्यन्ति** — देख्न सक्दैनन्; **पश्यन्ति** — देख्न सक्दछन्; **ज्ञान चक्षुषः** — ज्ञानरूपी आँखा भएका मानिसहरू।

**मूर्खहरू जीवले कसरी आफ्नो शरीर त्याग्दछ भन्ने कुरा बुझ्दैनन् न तिनीहरू प्रकृतिको गुणका अधीनमा रहेर कस्तो प्रकारको शरीर जीवले उपभोग गर्दैछ भन्ने नै बुझ्दछन् तर ज्ञानको प्रशिक्षण पाएका आँखाले यी सम्पूर्ण कुराहरू देख्न सक्दछन्।**

**तात्पर्य : ज्ञानचक्षुषः** भन्ने शब्द अत्यन्त महत्त्वपूर्ण छ। ज्ञानबिना कसैले पनि जीवले वर्तमान शरीर कसरी त्याग गर्दछ, अर्को जन्ममा उसले कस्तो शरीर प्राप्त गर्दछ र अहिले ऊ यस्तो शरीरमा किन बसिरहेको छ भन्ने कुरा जान्न सक्दैन। यसका लागि प्रशस्त मात्रामा ज्ञानको आवश्यकता पर्दछ र त्यस्तो ज्ञान प्रामाणिक गुरु तथा श्रीमद्भगवत्गीता जस्ता साहित्यहरूबाट मात्र प्राप्त गर्न सकिन्छ। यस्ता कुराहरूको अनुभव गर्ने कार्यमा अभ्यासरत व्यक्ति भाग्यशाली हो।

प्रत्येक जीवले विशेष परिस्थितिको अधीनमा रहेर शरीर त्याग गर्दछ, उसले विशेष परिस्थितिको अधीनमा रहेर जीवन निर्वाह गर्दछ र प्रकृतिका गुणको अधीनमा रही विशेष परिस्थितिको भोग गर्दछ। फलस्वरूप ऊ इन्द्रियभोगको भ्रममा परेर विभिन्न प्रकारका सुख र दुःखबाट पीडित भइरहन्छ। यस्ता व्यक्तिहरू आफ्नै इच्छा र कामवासनाद्वारा सधैँ मूर्ख बनिरहन्छन् र शरीर परिवर्तन तथा विशेष शरीरमा रहेको आफ्नो अवस्थितिलाई बुझ्ने सम्पूर्ण शक्ति नष्ट गर्दछन्। तसर्थ तिनीहरूले यसलाई बुझ्न सक्दैनन्। आध्यात्मिक ज्ञानको विकास गरेका व्यक्तिले मात्र आत्मा शरीरभन्दा भिन्न छ र आत्माले शरीर परिवर्तन गरिरहन्छ अनि विभिन्न किसिमले कर्मफल भोगिरहन्छ भन्ने देख्न सक्दछ। यस्तो ज्ञान हुने व्यक्तिले बद्ध जीवहरू यस भौतिक संसारमा कसरी कष्ट भोगिरहेका छन् भन्ने अनुभव पनि गर्न सक्दछन्। त्यसैले कृष्णभावनामा अघि बढिसकेका भक्तहरू यो ज्ञानलाई सर्वसाधारण जनमानसमा पुऱ्याउन प्रयत्नशील रहन्छन्, किनभने सर्वसाधारण मानिसहरूको बद्ध जीवन अत्यन्त कष्टमय हुन्छ। ती मानिसहरूले पनि त्यस्तो कष्टमय जीवनबाट बाहिर निस्केर कृष्णभावनाभावित हुन पर्दछ र आध्यात्मिक लोकमा पुग्नका लागि स्वयम् आफूलाई मुक्त बनाउनु पर्दछ।

**यतन्तो योगिनश्चैनं पश्यन्त्यात्मन्यवस्थितम् ।**
**यतन्तोऽप्यकृतात्मानो नैनं पश्यन्त्यचेतसः ॥ ११ ॥**

**यतन्तः** — प्रयास गर्दै; **योगिनः** — अध्यात्मवादी योगीहरू; **च** — पनि; **एनम्** — यसलाई; **पश्यन्ति** — देख्न सक्दछन्; **आत्मनि** — आफैँमा; **अवस्थितम्** — रहेको; **यतन्तः** — प्रयास गर्दै; **अपि** — यद्यपि; **अकृत-**

**आत्मानः** — आत्मसाक्षात्कारविहीन; **न** — हुन्न; **एनम्** — यसलाई; **पश्यन्ति** देख्दछन्; **अचेतसः** — अविकसित मन भएका, अज्ञानी।

**आत्मसाक्षात्कार गरेका प्रयत्नशील योगीहरूले यी सबै कुरा स्पष्ट रूपमा देख्न सक्दछन्। तर जसको मन विकसित भएको छैन र जसलाई आत्मसाक्षात्कार पनि भएको छैन, तिनीहरूले प्रयत्न गरे पनि कहाँ के भइरहेको छ भन्ने देख्न सक्दैनन्।**

**तात्पर्य :** आत्मसाक्षात्कारको मार्गमा लागेका योगीहरू धेरै हुन सक्दछन् तर जसलाई आत्मसाक्षात्कार भएको छैन तिनले जीवको शरीरमा कस्ता कस्ता परिवर्तन भइरहेका छन् भन्ने देख्न सक्दैनन्। यस प्रसङ्‌गमा **योगिनः** शब्द महत्त्वपूर्ण छ। आजकाल विभिन्न किसिमका तथाकथित योगीहरू छन् र तिनीहरूका धेरै योग सङ्‌गठनहरू पनि छन् तर वास्तविक आत्मसाक्षात्कारका विषयमा तिनीहरू अन्धा नै छन्। तिनीहरू केही सीमित आसन वा व्यायाममा नै व्यस्त हुन्छन् र केही शारीरिक सुगठन तथा स्वास्थ्य लाभ गरेर सन्तुष्ट हुन्छन्। यसबाहेक तिनीहरूलाई थप केही जानकारी हुँदैन। त्यस्ता मानिसहरूलाई नै भनिन्छ **यतन्तोऽप्य कृतात्मानः**। त्यस्तो तथाकथित योग पद्धतिको अभ्यास गरेर तिनीहरू कहिल्यै स्वरूपसिद्ध हुन सक्दैनन्। त्यस्ता मानिसहरूले आत्माको देहान्तरण प्रक्रियालाई बुझ्न सक्दैनन्। वास्तविक योगको अभ्यास गरेका व्यक्तिले मात्र आत्मा, जगत् र परमेश्वरको अनुभूति गर्न सक्दछन्। अर्को शब्दमा भन्दा, कृष्णभावनामा रहेर शुद्ध भक्तिमा लागेका भक्तियोगीले मात्र कुन कुरा कसरी भइरहेछ भन्ने कुरा बुझ्न सक्दछ।

**यदादित्यगतं तेजो जद्भासयतेऽखिलम् ।**
**यच्चन्द्रमसि यच्चाग्नौ तत्तेजो विद्धि मामकम् ॥ १२ ॥**

**यत्** — जुन; **आदित्यगतम्** — सूर्यका प्रकाशमा स्थित; **तेजः** — तेजले; **जगत्** — सारा संसार; **भासयते** — प्रकाशित हुन्छ; **अखिलम्** — सम्पूर्ण; **यत्** — जुन; **चन्द्रमसि** — चन्द्रमामा; **यत्** — जुन; **च** — पनि; **अग्नौ** — आगोमा; **तत्** — त्यो; **तेजः** — तेज; **विद्धि** — जान; **मामकम्** — मबाट।

**सम्पूर्ण विश्वको अन्धकार नाश गर्ने सूर्य मबाट नै प्रकाशित हुन्छ र त्यसै गरी अग्नि र चन्द्रमामा हुने तेज पनि मबाट नै उत्पन्न हुन्छन्।**

**तात्पर्य :** अज्ञानी मानिसले यो सबै काम कसरी भइरहेको छ भन्ने कुरा बुझ्न सक्दैन। तथापि भगवान्ले यहाँ जे भन्नुभएको छ त्यसैलाई बुझे पनि मानिसमा ज्ञानको उदय हुन थाल्दछ। सूर्य, चन्द्र, अग्नि तथा बिजुली सबैले देखेका

छन् तर त्यो सूर्यको तेज, त्यो चन्द्रमाको तेज अनि अग्नि र बिजुलीको तेज सबै भगवान्बाट उत्पन्न भएका हुन् भन्ने कुरा मात्र बुझ्ने प्रयास गर्नु पर्दछ। यस्तो अवस्थामा कृष्णभावनामृतको प्रारम्भले यस भौतिक जगत्का बद्ध जीवहरूको प्रगतिका लागि ठुलो अवसर प्रदान गर्दै आएको छ। जीवात्मा मूलतः परमेश्वरका अंश भएको हुनाले भगवान्ले यहाँ तिनीहरू कसरी आफ्नो घर भगवद्धाममा फर्किन सक्दछन् भन्ने सङ्केत गर्नुभएको छ।

यस श्लोकबाट हामी सूर्यले सम्पूर्ण सौर्यमण्डललाई प्रकाशित गरिरहेको छ भन्ने कुरा बुझ्न सक्दछौँ। ब्रह्माण्डहरू धेरै छन् र सौर्यमण्डल पनि धेरै छन् तर प्रत्येक ब्रह्माण्डमा केवल एउटा मात्र सूर्य हुन्छ। *भगवद्गीता* (१०-२१) मा चन्द्रमालाई पनि एउटा नक्षत्र मानिएको छ **नक्षत्राणामहं शशी**। परमेश्वरको चिन्मय आकाशको आध्यात्मिक तेज नै सूर्यको प्रकाश हो। सूर्योदय सँगसँगै मानिसका कामकाजहरू आरम्भ हुन्छन्। भोजन तयार पार्नका लागि तिनीहरू आगो बाल्दछन्, कारखाना सञ्चालन गर्न र यस्ता विभिन्न काम गर्न मानिसहरू आगो बाल्दछन्। आगोको सहायताले धेरै कामहरू गरिन्छन्, तसर्थ सूर्योदय अग्नि प्रज्ज्वलन तथा चन्द्रमाको प्रकाश जीवका लागि आनन्ददायी हुन्छन्। यिनीहरूको सहयोगबिना जीव बाँच्नै सक्दैन। तसर्थ मानिसलाई यी सूर्य, चन्द्र तथा अग्निको प्रकाश र तेज स्वयम् भगवान् कृष्णबाट उत्पन्न भइरहेको छ भन्ने ज्ञान हुनासाथ उनीहरूमा कृष्णभावनाको उदय हुन्छ। चन्द्रमाको प्रकाशले सबै प्रकारका वनस्पतिहरू पोषित हुन्छन्। चन्द्रमाको आनन्ददायक प्रकाश पाउँदा मानिसले सजिलैसँग भगवान् श्रीकृष्णको कृपा पाएको जीवन्त अनुभूति गर्दछन् र त्यसबाट आनन्दित हुन्छन्। उहाँको कृपाबिना सूर्य, चन्द्र र अग्निको अस्तित्व रहँदैन र यी सूर्य, चन्द्र र अग्नि नभए हामी जीवित रहन सक्दैनौँ। यी पनि बद्ध जीवमा कृष्णभावना जगाउने केही विचारहरू हुन्।

**गामाविश्य च भूतानि धारयाम्यहमोजसा ।**
**पुष्णामि चौषधीः सर्वाः सोमो भूत्वा रसात्मकः ॥ १३ ॥**

**गाम्** — लोकहरूमा; **आविश्य** — प्रवेश गरेर; **च** — पनि; **भूतानि** — जीवहरू; **धारयामि** — धारण गर्दछु; **अहम्** — म; **ओजसा** — आफ्नो शक्तिले; **पुष्णामि** — पोषण गर्दछु; **च** — तथा; **औषधीः** — वनस्पतिहरू; **सर्वाः** — समस्त; **सोमः** — चन्द्रमा; **भूत्वा** — भएर; **रस आत्मकः** — रस प्रदान गर्ने।

**म प्रत्येक लोकमा प्रवेश गर्दछु र मेरो शक्तिले सबै लोकहरू आ-आफ्नो कक्षमा स्थित छन्। म चन्द्रमा भएर सम्पूर्ण वनस्पतिलाई जीवनरस प्रदान गर्दछु।**

**तात्पर्य :** यहाँ के कुरा बुझ्न सकिन्छ भने, यी सबै लोकहरू भगवान्‌को शक्तिले गर्दा हावामा स्थिर भइरहेका छन्। भगवान् प्रत्येक अणु, प्रत्येक लोक तथा प्रत्येक जीवमा प्रवेश हुनुहुन्छ। ब्रह्मसंहितामा पनि यसको विवेचना गरिएको छ। त्यहाँ भनिएको छ— परमात्मा भगवान्‌का अंश हुनुहुन्छ र उहाँ प्रत्येक लोक, प्रत्येक ब्रह्माण्ड, प्रत्येक जीव र अणु अणुमा प्रवेश हुनुहुन्छ। उहाँको उपस्थितिले गर्दा प्रत्येक वस्तु ठीक ठीक तरिकाले प्रकट भएका हुन्। आत्माको उपस्थिति भएकाले नै जीवित मनुष्य पानीमा पौडिन सक्दछ तर जब त्यो जीवित स्फुलिङ्ग शरीरबाट बाहिर निस्कन्छ तब शरीर मुर्दा बन्दछ अनि त्यो शरीर पानीमा डुब्दछ। गलेपछि यो शरीर पनि तृण वा अन्य वस्तुजस्तै माथि उत्रिन्छ तर मर्नेबित्तिकै मृत शरीर पानीमा डुब्छ। यसै गरी यी सबै लोकहरू शून्यमा अडिएका छन्। भगवान्‌को परमशक्तिको प्रवेशका कारणले यस्तो भएको हो। जसरी हातभरिको धूलोलाई मुट्ठीले अड्याइरहेको हुन्छ त्यसरी नै प्रत्येक लोकलाई उहाँको शक्तिले अड्याइरहेको छ। मुट्ठीमा बन्द रहुन्जेल धूलो खस्न सक्दैन तर त्यही धूलोलाई हावामा फाल्नेबित्तिकै त्यो तल झर्दछ।

यसै गरी वायुमा पौडिरहेका यी सबै लोकहरू वास्तवमा विराट स्वरूप भगवान्‌का मुट्ठीमा बाँधिएका छन्। उहाँको बल र शक्तिले गर्दा नै समग्र चर तथा अचर वस्तुहरू आ-आफ्ना स्थानमा अडिएर रहन सकेका छन्। वैदिक मन्त्रमा पनि भनिएको छ— भगवान्‌को शक्तिले गर्दा सूर्य चम्किरहेका छन् तथा सारा लोकहरू लगातार घुमिरहेछन्। उहाँको कारणले यदि यस्तो नहुनेभए यी सारा लोकहरू वायुमा धूलोका कण उडेजस्तै उड्ने थिए र नष्ट हुने थिए। यसै गरी भगवान्‌को शक्तिले गर्दा चन्द्रमाबाट सबै बनस्पतिहरूको पोषण भइरहेको छ। चन्द्रमाको प्रभावले गर्दा साग-सब्जीहरू स्वादिष्ट हुने गर्दछन्। चन्द्रमाको प्रकाशबिना वनस्पति वा सागसब्जीहरू न बढ्न सक्दछन् न स्वादिष्ट नै हुन्छन्। मानव समाजले भगवान्‌को कृपाद्वारा काम गरिरहेका छन्, सुखपूर्वक बाँचिरहेछन् र भोजनको स्वाद लिइरहेका छन्, अन्यथा मानव जाति जीवित रहन पनि सक्ने थिएन। यहाँ **रसात्मक** शब्द अत्यन्त महत्त्वपूर्ण छ। प्रत्येक वस्तु परमेश्वरको शक्तिद्वारा चन्द्रमाको प्रभावले स्वादिष्ट बनेका हुन्।

**अहं वैश्वानरो भूत्वा प्राणिनां देहमाश्रितः ।**
**प्राणापानसमायुक्तः पचाम्यन्नं चतुर्विधम् ॥ १४ ॥**

**अहम्** — म; **वैश्वानरः** — पाचन अग्निका रूपमा मेरो पूर्ण अंश; **भूत्वा** —

भएर; **प्राणिनाम्** — सबै जीवहरूका; **देहम्** — शरीरहरूमा; **आश्रितः** — रहेको; **प्राण** — निश्वास (प्राण वायु); **अपान** — अधो वायु (अपान वायु); **समायुक्तः** — सन्तुलित राखेर; **पचामि** — पचाउँदछु; **अन्नम्** — अन्न (खाद्य); **चतुःविधम्** — चार प्रकारका।

**म सबै जीवका शरीरमा रहने वैश्वानर वा पाचन-अग्नि हूँ र मैले नै स्वास-प्रश्वासयुक्त प्राणवायुमा मिलेर चार प्रकारका खाद्यहरूलाई पचाउने काम गर्दछु।**

**तात्पर्य :** आयुर्वेद शास्त्रअनुसार आमाशय (पेट) मा पनि एक प्रकारको अग्नि हुन्छ र त्यसले खाइएको सम्पूर्ण भोजन पचाउने काम गर्दछ। त्यो अग्नि प्रज्ज्वलित भएको समय हामीलाई भोक लाग्दछ र त्यही अग्नि मन्द भएको समय भोक लाग्दैन। यसरी कहिलेकाहीँ अग्नि कम भएमा औषधिउपचारको पनि आवश्यकता पर्दछ। जे होस्, यो अग्निले भगवान्‌को प्रतिनिधित्व गर्दछ। वैदिक साहित्य बृहदारण्यक उपनिषद् (५.९.१) मा पनि **अयमग्निर्वैश्वानरो योऽयमन्तः पुरुषे येनेदमन्नं पच्यते** यस मन्त्रद्वारा परमेश्वर या ब्रह्म नै अग्निका रूपमा आमाशयभित्र रहेर सबै प्रकारका अन्न पचाउने गर्नुहुन्छ भन्ने कुराको पुष्टि गरिएको छ। यसरी सबै प्रकारका अन्नलाई पचाउने कार्यमा भगवान्‌को भूमिका रहने हुँदा जीव खानेकुरामा स्वतन्त्र छैन। पाचन कार्यमा भगवान्‌ले सहायता नगरुञ्जेल केही खान सकिँदैन। भगवान्‌ले नै खाद्य अन्नको उत्पादन गर्नु हुन्छ र उहाँले नै उक्त खाद्यलाई पचाउने काम पनि गर्नु हुन्छ। उहाँका कृपाले हामी जीवनको आनन्द लिइरहेका छौँ। वेदान्त सूत्र (१.२.२७) मा यसको पुष्टि गर्दै भनिएको छ—**शब्दादिभ्योऽन्तः प्रतिष्ठानाच्च** अर्थात्, भगवान् ध्वनि वा शब्दभित्र, शरीरभित्र, वायुभित्र तथा आमाशयमा पनि पाचन शक्तिका रूपमा उपस्थित हुनुहुन्छ। खाद्य चार प्रकारका हुन्छन्—कुनै निल्ने, कुनै चबाउने, कुनै चाट्ने र कुनै चुस्ने। भगवान् सबै प्रकारका खाद्यलाई पचाउने पाचन शक्ति हुनुहुन्छ।

**सर्वस्य चाहं हृदि सन्निविष्टो**
**मत्तः स्मृतिर्ज्ञानमपोहनं च।**
**वेदैश्च सर्वैरहमेव वेद्यो**
**वेदान्तकृद्वेदविदेव चाहम् ॥ १५ ॥**

**सर्वस्य** — सबै प्राणीहरूका; **च** — तथा; **अहम्** — म; **हृदि** — हृदयमा; **सन्निविष्टः** — रहेको; **मत्तः** — मबाट; **स्मृतिः** — स्मरणशक्ति; **ज्ञानम्** — ज्ञान; **अपोहनम्** — विस्मृति; **च** — तथा; **वेदैः** — वेदहरूद्वारा; **च** — पनि;

**सर्वैः** — सबै; **अहम्** — म हूँ; **एव** — निश्चय नै; **वेद्यः** — जान्नयोग्य (ज्ञेय); **वेदान्त-कृत्** — वेदान्तका सङ्कलनकर्ता; **वेदवित्** — वेदका ज्ञाता; **एव** — निश्चय नै; **च** — तथा; **अहम्** — म।

**म प्रत्येक जीवका हृदयमा अवस्थित छु। मबाट नै स्मृति, ज्ञान र विस्मृतिहरू हुन्छन्। म नै वेदहरूद्वारा जान्न योग्य छु। निश्चय नै म वेदान्तको सङ्कलनकर्ता हूँ र म नै सबै वेदको ज्ञाता पनि हूँ।**

**तात्पर्य :** परमेश्वर, परमात्माका रूपमा प्रत्येक जीवका हृदयमा निवास गर्नु हुन्छ र उहाँबाट सबै कर्महरू प्रारम्भ हुन्छन्। जीव आफ्ना पूर्वजन्मका सबै कुराहरू भुल्ने गर्दछ तैपनि उसले प्रत्येक कार्यहरू परमेश्वरको निर्देशानुसार गर्नुपर्ने हुन्छ। परमेश्वर उसका सबै कार्यका साक्षी हुनुहुन्छ। जीव यस जन्ममा पनि आफ्ना विगतका कर्मअनुसारका कार्य गर्न थाल्दछ। यसका लागि आवश्यक पर्ने ज्ञान र स्मृति उसलाई दिइएको हुन्छ तर आफ्ना पूर्व जीवनका कुराहरू उसले बिर्सिंदै जान्छ। भगवान् सर्वव्यापी मात्र हुनु हुन्न, उहाँ प्रत्येकका हृदयमा निवास गर्नुहुने अन्तर्यामी पनि हुनुहुन्छ। उहाँले नै विभिन्न कर्मको फल प्रदान गर्नु हुन्छ। उहाँ निराकार ब्रह्म, भगवान् र अन्तर्यामी परमात्माका रूपमा मात्र होइन, वेदका अवतारका रूपमा पनि पूजनीय हुनुहुन्छ। वेदले मानिसहरू उचित ढङ्गले आफ्नो जीवन बिताउन सकून र अन्त्यमा भगवान्को धाममा फर्किन सकून भनेर सही किसिमको बाटो देखाउने गर्दछन्। वेदहरूले भगवान् श्रीकृष्णका बारेमा ज्ञान प्रदान गर्दछन् श्रीकृष्ण आफैँ वेदव्यासको अवतार लिएर वेदान्तका सूत्रहरूको सङ्कलन पनि गर्नु हुन्छ। वेदान्त सूत्रकै भाष्यका रूपमा लेखिएको *श्रीमद्भागवत्मा* व्यासदेवले वेदान्त सूत्रको यथार्थ ज्ञान प्रस्तुत गर्नुभएको छ। भगवान् स्वयम् पूर्ण हुनुहुन्छ, त्यसैले उहाँ बद्ध जीवहरूको उद्धारका लागि अन्न प्रदान गर्नु हुन्छ, त्यसलाई पचाउनु हुन्छ, तिनीहरूका क्रियाकलापहरूको साक्षी बनिदिनु हुन्छ र वेदका रूपमा तिनीहरूलाई ज्ञान पनि दिने गर्नु हुन्छ। साथै भगवान् श्रीकृष्णका रूपमा *भगवद्गीताका* शिक्षक पनि हुनुहुन्छ। यस प्रकार उहाँ सर्वकल्याणकारी तथा सर्वदयामय ईश्वर हुनुहुन्छ। त्यसैले उहाँ बद्ध जीवहरूका लागि सधैँ पूजनीय हुनुहुन्छ।

**अन्तः प्रविष्टः शास्ता जनानाम्** जीवले आफ्नो शरीर छोड्नासाथ उक्त शरीरलाई विर्सन्छ तापनि परमेश्वरद्वारा प्रेरित भएर पुनः पूर्ववत् काम गर्न थाल्दछ। जीवले बिर्सिए पनि भगवान्ले उसलाई त्यस्तो बुद्धि दिनु हुन्छ, जसद्वारा ऊ आफ्नो पूर्वजन्मको अधूरो कामलाई फेरि नवीकरण गर्न सुरु गर्दछ। यस प्रकार जीवले आफ्ना हृदयमा विराजमान रहने परमेश्वरका आदेशानुसार यस जगत्का सुख र दुःखको भोग गर्दछ, अझ त्यति मात्र नभएर उहाँबाट वेदको

अध्ययन गर्ने र त्यसलाई बुझ्ने अवसर पनि प्राप्त गर्दछ। यदि कसैले साँच्चै नै वेदको ज्ञान प्राप्त गर्न चाहेमा भने त्यस कार्यका लागि आवश्यक हुने बुद्धि भगवान् श्रीकृष्णले उसलाई प्रदान गर्नु हुन्छ। उहाँले वैदिक ज्ञान किन प्रदान गर्नु हुन्छ? किनभने जीवले भगवान् श्रीकृष्णलाई बुझ्नु अति आवश्यक छ। वैदिक साहित्यले यसको पुष्टि गरेको छ। **योऽसौ सर्वैर्वेदैर्गीयते** अर्थात् चारै वेददेखि लिएर वेदान्त सूत्र तथा उपनिषद् र पुराणहरूसमेतका समग्र वैदिक साहित्यमा परमेश्वरका महिमाको गान गरिएको छ। वैदिक अनुष्ठानद्वारा, वैदिक दर्शनको परिचर्चाद्वारा र उहाँका भक्तिमय सेवापूजाद्वारा उहाँलाई प्राप्त गर्न सकिन्छ। अतः वेदको उद्देश्य भगवान् श्रीकृष्णलाई बुझ्नु हो। वेदको निर्देशनअनुसार हामी श्रीकृष्णलाई चिन्न सक्दछौँ र श्रीकृष्णको अनुभूति गर्न सक्दछौँ। भगवान् नै परमलक्ष्य हुनुहुन्छ। वेदान्त सूत्र (१.१.४) ले पनि यसको पुष्टि गरेको छ, जस्तै— **तत्तु समन्वयात्** अर्थात् मानिसले तीन अवस्थामा रहेर सिद्धि प्राप्त गर्दछ। वैदिक साहित्यको ज्ञानद्वारा मानिसले भगवान्सँगको आफ्नो सम्बन्ध बुझ्दछ, विभिन्न विधि-विधानहरू सम्पन्न गरेर ऊ उहाँ समक्ष पुग्न सक्दछ र अन्त्यमा भगवान्लाई नै परमलक्ष्यका रूपमा प्राप्त गर्दछ। यस श्लोकमा वेदको प्रयोजन, वेदको ज्ञान र वेदको लक्ष्यलाई स्पष्ट रूपले परिभाषित गरिएको छ।

**द्वाविमौ पुरुषौ लोके क्षरश्चाक्षर एव च ।**
**क्षरः सर्वाणि भूतानि कूटस्थोऽक्षर उच्यते ॥ १६ ॥**

**द्वौ** — दुईवटा; **इमौ** — यी; **पुरुषौ** — जीवात्माहरू; **लोके** — संसारमा; **क्षरः** — च्युत; **च** — तथा; **अक्षर** — अच्युत; **एव** — निश्चय नै; **च** — तथा; **क्षरः** — च्युत; **सर्वाणि** — सम्पूर्ण; **भूतानि** — जीवहरू; **कूटस्थः** — एकत्वमा; **अक्षरः** — अच्युत; **उच्यते** — भनिन्छ।

**जीव दुई प्रकारका छन्। एक च्युत र अर्को अच्युत। भौतिक जगत्मा प्रत्येक जीव च्युत (क्षर) हुन्छ र आध्यात्मिक जगत्मा प्रत्येक जीव अच्युत (अक्षर) भनिन्छ।**

**तात्पर्य :** स्वयम् भगवान्ले व्यासदेवको अवतार लिएर वेदान्त सूत्रको प्रतिपादन गर्नुभएको कुरा पहिले नै भनियो। अब यहाँ भगवान्ले संक्षेपमा वेदान्त सूत्रको विषयवस्तु प्रस्तुत गर्दै हुनुहुन्छ। उहाँका अनुसार अनन्त सङ्ख्यामा रहेका जीवहरूलाई **च्युत** (क्षर) र **अच्युत** (अक्षर) गरी दुई वर्गमा विभाजन गरिएको छ। जीव भनेका भगवान्का सनातन पृथकीकृत अंश हुन्। जब तिनीहरू भौतिक प्रकृतिका सम्पर्कमा आउँदछन्, **जीवभूत** भनिन्छ।

संस्कृत शब्द **क्षर सर्वाणि भूतानि**को अर्थ जीवात्मा च्युत (क्षर) हुन् भन्नु हो। भगवान्सँग एक हुने जीवलाई अच्युत भनिएको छ। एक हुनुको अर्थ आ-आफ्नो निजी सत्ता नै नरहनु होइन, बरु दुवैका बीचमा भिन्नता नहुनु मात्र हो। तिनीहरू सबै सृष्टिको प्रयोजनप्रति सहमत छन्। निश्चय नै आध्यात्मिक जगत्मा सृजना भन्ने कुरा केही छैन तापनि वेदान्तसूत्रले भगवान्लाई सबै उद्भवको स्रोत मानेको हुँदा यहाँ त्यही विचारधाराको व्याख्या गरिएको छ।

भगवान् श्रीकृष्णको भनाइ अनुसार जीवका दुई श्रेणी छन्। यस कुरालाई वेदले पनि प्रमाणित गरेको छ, त्यसैले यसका बारेमा शंका गर्ने कुनै ठाउँ छैन। मन र पाँच इन्द्रियहरूलाई लिएर यस संसारमा सङ्घर्ष गरिरहेका जीवहरू शरीरधारी छन् तर शरीर परिवर्तनशील छ। जबसम्म जीवात्मा बद्ध अवस्थामा रहन्छ तबसम्म उसको शरीर पनि पदार्थका संसर्गबाट परिवर्तन भइरहन्छ। पदार्थ सधैँ परिवर्तनशील हुन्छ। त्यसैले जीव पनि परिवर्तनशील देखिन्छ तर आध्यात्मिक जगत्मा शरीरको निर्माण पदार्थबाट हुँदैन, त्यसैले उसमा परिवर्तन पनि हुँदैन। भौतिक जगत्का जीवात्माहरू छः प्रकारका परिवर्तनहरूबाट पार हुने गर्दछन्, ती हुन्— जन्म, वृद्धि, स्थिति, प्रजनन्, क्षय र विनाश। यी सबै भौतिक शरीरका परिवर्तन हुन्। तर, आध्यात्मिक जगत्मा शरीर परिवर्तन हुँदैन, त्यहाँ जन्म छैन, मृत्यु छैन र बुढ्यौली पनि छैन। त्यहाँ सबै एउटै अवस्थामा रहन्छन्। **क्षरः सर्वाणि भूतानि** सृष्टिका प्रथम जीवात्मा ब्रह्मादेखि लिएर सानो कमिलासम्मका सबै जीवहरू भौतिक प्रकृतिका संसर्गमा आउँदछन् र यहाँ आएर तिनीहरूले आफ्नो शरीर परिवर्तन गर्दछन्, तसर्थ यी सबै क्षर अर्थात् च्युत हुन्, तर आध्यात्मिक जगत्मा ती सधैँ एकत्व भावमा मुक्त रहन्छन्।

**उत्तमः पुरुषस्त्वन्यः परमात्मेत्युदाहृतः ।**
**यो लोकत्रयमाविश्य बिभर्त्यव्यय ईश्वरः ॥ १७॥**

**उत्तमः** — सर्वश्रेष्ठ; **पुरुषः** — व्यक्ति; **तु** — तर; **अन्यः** — अरू; **परम** — परम; **आत्मा** — आत्मा; **इति** — यसरी; **उदाहृतः** — भनिन्छ; **यः** — जुन; **लोक** — ब्रह्माण्डको; **त्रयम्** — तीन विभाग; **आविश्य** — प्रवेश गरेर; **बिभर्ति** — पालन गर्नु हुन्छ; **अव्ययः** — अविनाशी; **ईश्वरः** — भगवान्।

**यी दुवैका अतिरिक्त एउटा सर्वश्रेष्ठ अविनाशी परमपुरुष परमात्मा हुनुहुन्छ, जो तीनै लोकमा प्रवेश गरी ती सबैलाई पालन गरिरहनु हुन्छ।**

**तात्पर्य :** यो श्लोकको भावार्थ कठोपनिषद् (२.२.१३) तथा श्वेताश्वतर उपनिषद् (६.१३) मा अत्यन्त सुन्दर तरिकाले प्रष्ट्याइएको छ। त्यसअनुसार सृष्टिमा केही बद्ध र केही मुक्त अवस्थाका गरी असङ्ख्य जीवहरू छन् र

ती सबैमा एउटै परमपुरुष परमात्मा हुनुहुन्छ। उपनिषद्को यस्तो श्लोकांश छ—**नित्यो नित्यानां चेतनश्चेतनानाम्** तात्पर्य के हो भने, बद्ध तथा मुक्त दुवै प्रकारका सबै जीवहरूमा एउटा परमपुरुष भगवान् हुनुहुन्छ र उहाँले नै ती सबैको पालन गर्नु हुन्छ र तिनलाई तिनीहरूको विविध कर्मअनुसार भोग गर्ने सुविधा पनि प्रदान गर्नु हुन्छ। उनै भगवान् परमात्माका रूपमा सबैका हृदयमा निवास गर्नु हुन्छ। उहाँलाई राम्रोसँग बुझेको बुद्धिमान् व्यक्तिले मात्र जीवनमा पूर्ण शान्ति प्राप्त गर्दछ, अरूले पाउँदैन।

**यस्मात्क्षरमतीतोऽहमक्षरादपि चोत्तमः ।**
**अतोऽस्मि लोके वेदे च प्रथितः पुरुषोत्तमः ॥ १८ ॥**

**यस्मात्** — किनभने; **क्षरम्** — च्युत; **अतीतः** — दिव्य; **अहम्** — म छु; **अक्षरात्** — अक्षर वा अच्युतभन्दा पर; **अपि** — पनि; **च** — तथा; **उत्तमः** — सर्वश्रेष्ठ; **अतः** — अतएव; **अस्मि** — म छु; **लोके** — संसारमा; **वेदे** — वैदिक साहित्यमा; **च** — तथा; **प्रथितः** — विख्यात; **पुरुष-उत्तमः** — परमपुरुषका रूपमा।

**म सर्वश्रेष्ठ तथा दिव्य भएको हुनाले च्युत र अच्युत ( क्षर र अक्षर ) दुवैभन्दा पर छु तथा यस संसारमा र वेदमा पनि परमपुरुषका रूपमा विख्यात छु।**

**तात्पर्य :** बद्ध जीव होस् वा मुक्तात्मा होस्— भगवान्भन्दा ठुलो कोही हुन नै सक्दैन। त्यसैले उहाँ पुरुषोत्तम हुनुहुन्छ। यहाँ जीव तथा भगवान् पृथक् व्यष्टि हुन् भन्ने स्पष्ट छ तर तिनमा अन्तर के छ भने, जीवात्मा बद्ध अवस्थामा रहेको होस् वा मुक्त अवस्थामा, उसले मात्रामा भगवान्को अचिन्त्य शक्तिलाई पार गर्न सक्दैन। जीवात्मा र परमेश्वर समान स्तरका वा बराबरीका हुन् भन्ने सोच्नु सबै पक्षबाट गलत हो। जीवात्मा र परमेश्वरको व्यक्तित्वका बीचमा जहिले पनि श्रेष्ठता र निम्नता रहिरहन्छ। भगवान्भन्दा ठुलो कोही पनि हुन सक्दैन, त्यसैले यो **उत्तम** शब्द यहाँ अत्यन्त सार्थक छ।

यहाँ यो **लोके** शब्द **पौरूष आगम** (स्मृति शास्त्र) का लागि प्रयोग भएको छ। निरूक्ति कोशमा यसको पुष्टि गर्दै भनिएको छ— **लोक्यते वेदार्थोऽनेन**— वेदको प्रयोजनको व्याख्या स्मृति शास्त्रहरूद्वारा गरिएको छ। वेदहरूमा भगवान्को अन्तर्यामी परमात्मा स्वरूपको पनि वर्णन गरिएको छ। वैदिक शास्त्र छान्दोग्य उपनिषद् (८.१२.३) मा लेखिएको छ— "**तावदेष सम्प्रसादोऽस्माच्छरीरात्समुत्थाय परं ज्योतिरूपं सम्पद्य स्वेन रूपेणाभिनिष्पद्यते स उत्तमः पुरुषः।** अर्थात्— शरीरबाट बाहिर त्यस परमआत्माले

निराकार ब्रह्मज्योतिमा प्रवेश गर्नु हुन्छ। अनि उहाँ आफ्नो आध्यात्मिक पहिचानका साथ आफ्नो त्यही रूपमा रहनु हुन्छ। उहाँ परमआत्मालाई नै परमपुरुष भनिन्छ। यसको अर्थ—परमपुरुषले आफ्नो आध्यात्मिक तेजको प्रदर्शन गर्नु हुन्छ र प्रसारित गर्नु हुन्छ हुनुहुन्छ। यही नै परमप्रकाश हो। परमपुरुषको पनि एउटा स्वरूप छ त्यो—अन्तर्यामी परमात्मा स्वरूप हो। सत्यवती र पराशरका पुत्रका रूपमा अवतार लिएर व्यासदेवका रूपमा उहाँले नै वैदिक ज्ञानको व्याख्या गर्नु हुन्छ।

**यो मामेवमसम्मूढो जानाति पुरुषोत्तमम् ।**
**स सर्वविद्भजति मां सर्वभावेन भारत ॥१९॥**

**यः** — जसले; **माम्** — मलाई; **एवम्** — यसरी; **असम्मूढः** — शंकारहित भएर; **जानाति** — जान्दछ; **पुरुष उत्तमम्** — भगवान; **सः** — त्यो; **सर्ववित्** — सर्वज्ञाता; **भजति** — भक्ति गर्दछ; **माम्** — मलाई; **सर्वभावेन** — सबै प्रकारले; **भारत** — हे भरतपुत्र।

**जसले शंकारहित भएर मलाई नै पुरुषोत्तम भगवान्को रूपमा जान्दछ त्यसले सबै कुरा जानेको मानिन्छ। हे भारत! त्यस्तो व्यक्तिले आफूलाई सधैँ मेरै पूर्ण भक्तिमा संलग्न गराइराख्दछ।**

**तात्पर्य :** जीव तथा परमसत्य भगवान्को स्वाभाविक स्थितिका विषयमा मानिसहरू विभिन्न दार्शनिक बहस गर्दछन्। तर यस श्लोकमा भगवान् स्पष्ट व्याख्या गर्दै भन्नु हुन्छ—"जसले भगवान् श्रीकृष्णलाई परमपुरुषका रूपमा जान्दछ त्यही व्यक्ति नै वास्तवमा सबै कुराको ज्ञाता हो।" अपूर्ण ज्ञाताले परमसत्यका विषयमा केवल चिन्तन मात्रै गर्दछ र पूर्ण ज्ञाता आफ्नो अमूल्य समयको अपव्यय नगरी सोभै कृष्णभावनामा संलग्न हुन्छ र भगवान्को भक्ति गर्न प्रारम्भ गर्दछ। *भगवद्गीताका* सम्पूर्ण श्लोकमा यही सत्यलाई जोड दिइएको छ। तैपनि जीव र परमेश्वरलाई एउटै वा समान ठान्ने *भगवद्गीताका* धेरै कट्टर भाष्यकारहरू पनि छन्। मौखिक रूपमा सुनेर जानिने हुनाले वैदिक ज्ञानलाई श्रुति भनिन्छ। वास्तवमा वैदिक उपदेश भगवान् श्रीकृष्ण तथा उहाँका प्रतिनिधिस्वरूप आधिकारिक भक्तबाट मात्र ग्रहण गर्नु पर्दछ। यहाँ भगवान् श्रीकृष्णले प्रत्येक वस्तुको अन्तरलाई सुन्दर तरिकाले व्याख्या गर्नुभएको छ। त्यसैले मानिसले त्यही स्रोतबाट श्रवण गर्नु पर्दछ। सुँगुरले सुनेजस्तै गरी सुनेर केही लाभ हुँदैन; मानिसले आधिकारिक व्यक्तिबाट सुनेर बुझ्नु पर्दछ। बौद्धिक चिन्तन गरेर मात्र पनि हुँदैन। मानिसले सम्पूर्ण जीवहरू सधैँ भगवान्का अधीनमा छन् भन्ने कुरा विनम्र भावले *भगवद्गीताबाट* नै सुन्नु

पर्दछ। जसले यो कुरा बुझ्दछ त्यसले नै भगवान् श्रीकृष्णले भन्नुभएअनुसार वेदको प्रयोजनलाई जानेको मानिन्छ। यीबाहेक अरू कसैले पनि वेदको आशय बुझ्दैनन्।

**भजति** शब्द पनि यहाँ अत्यन्त सार्थक छ। कतिपय ठाउँमा **भजति** शब्दको सम्बन्ध भगवान्को सेवा गर्ने अर्थमा व्यक्त भएको छ। यदि कुनै व्यक्ति पूर्ण कृष्णभावनामृतमा संलग्न छ वा भगवान्को भक्तिमा तल्लीन छ उसले सारा वैदिक ज्ञानलाई बुझिसकेको छ भन्ने जान्नु पर्दछ। वैष्णव परम्परामा के भन्ने गरिन्छ— कृष्णभक्तिमा लागेको भक्तले परमसत्यलाई बुझ्न अरू आध्यात्मिक विधिविधानको पालन गरिरहनुपर्ने कुनै आवश्यकता पर्दैन। भगवान्को भक्तिसेवामा संलग्न भएको हुनाले ऊ पहिले नै आफ्नो लक्ष्यसम्म पुगिसकेको हुन्छ। ज्ञानका सबै प्रारम्भिक विधिहरूलाई उसले पार गरिसकेको हुन्छ तर कसैले सयौँ हजारौँ जन्मसम्म चिन्तन गरिरहे पनि श्रीकृष्ण नै भगवान् हुनुहुन्छ र उहाँको शरणमा पर्नु पर्दछ भन्ने लक्ष्य निर्धारण गर्न सक्दैन। फलस्वरूप उसका वर्षौंदेखिका वा धेरै जन्मका सम्पूर्ण चिन्तनहरू व्यर्थ प्रमाणित हुन्छन्।

**इति गुह्यतमं शास्त्रमिदमुक्तं मयानघ ।**
**एतद्बुद्ध्वा बुद्धिमान्स्यात्कृतकृत्यश्च भारत ॥ २० ॥**

**इति** — यस्तो; **गुह्यतमम्** — अत्यन्त गोपनीय; **शास्त्रम्** — शास्त्र; **इदम** — यो; **उक्तम्** — भनियो; **मया** — मद्वारा; **अनघ** — हे निष्पाप; **एतत्** — यो; **बुद्ध्वा** — बुझेर; **बुद्धिमान्** — बुद्धिमान्; **स्यात्** — हुन जान्छ; **कृत-कृत्यः** — आफ्नो प्रयत्नमा परिपूर्ण; **च** — तथा; **भारत** — हे भरतपुत्र!

**हे अनघ! यो ज्ञान वैदिक शास्त्रको सबैभन्दा गोपनीय अंश हो जसलाई अहिले मैले प्रकट गरेँ। हे भरतपुत्र! जसले यसलाई राम्ररी बुझ्दछ त्यो बुद्धिमान् मानिन्छ र उसका सबै प्रयासहरू पूर्ण भएको मानिन्छ।**

**तात्पर्य :** यहाँ भगवान्ले सम्पूर्ण शास्त्रको सार यही हो भन्ने कुरा स्पष्ट पार्नुभयो। तसर्थ भगवान्ले जुन रूपमा भन्नुभयो हामीले त्यही रूपमा यसलाई ग्रहण गर्नु पर्दछ। यसो भएमा नै मानिस बुद्धिमान् हुन्छ र दिव्य ज्ञानले पूर्ण हुन्छ। अर्को शब्दमा भन्दा भगवान्को यो दिव्य दर्शनलाई बुझ्ने र उहाँको दिव्य सेवामा लागिरहने व्यक्ति नै प्रकृतिको गुणका सबै संक्रमणबाट मुक्त हुन सक्दछ। भक्ति भनेको नै आध्यात्मिक ज्ञानको एउटा विधि हो। जहाँ भक्ति हुन्छ, भौतिक संक्रमणहरू त्यहाँ हुदैनन्। भगवद्भक्ति र स्वयम् भगवान् एउटै हुनुहुन्छ, समान हुनुहुन्छ, किनभने यी दुवै आध्यात्मिक हुन्। भक्ति

परमेश्वरको अन्तरङ्गा शक्तिमा रहन्छिन्। भगवान् सूर्यसमान हुनुहुन्छ र अज्ञानलाई अन्धकारसमान मानिन्छ। त्यसैले जहाँ सूर्यको उपस्थिति हुन्छ त्यहाँ अन्धकार हुने प्रश्न नै उठ्दैन। अतः जहाँ सुयोग्य गुरुका निर्देशनमा रहेर भक्तिको उपासना गरिन्छ त्यहाँ अज्ञान हुँदैन।

प्रत्येक व्यक्तिले कृष्णभावनामृतलाई ग्रहण गर्न पर्दछ र शुद्ध एवं बुद्धिमान् हुनका लागि भगवान्को भक्ति गर्न पर्दछ। जबसम्म कसैले यही पद्धतिले भगवान् श्रीकृष्णलाई जान्दैन र उहाँका भक्तिमा लाग्दैन तबसम्म सामान्य मनुष्यका दृष्टिमा त्यो व्यक्ति जतिसुकै बुद्धिमान् मानिए पनि यथार्थमा त्यसलाई परिपूर्ण बुद्धिमान् मानिँदैन। यहाँ जुन **अनघ** शब्दले अर्जुनलाई सम्बोधन गरिएको छ, त्यो पनि अत्यन्त सार्थक छ। **हे अनघ** अर्थात् **हे निष्पाप** भन्नुको अर्थ सबै पापकर्मबाट मुक्त नभएसम्म भगवान् श्रीकृष्णलाई बुझ्न अति कठिन हुन्छ भन्ने हो। प्रथमतः मानिस सबै संक्रमणहरूबाट तथा सबै पापकर्महरूबाट मुक्त हुनु पर्दछ। अनि मात्र उसले भगवान्लाई बुझ्न सक्दछ। यो भक्तियोग अत्यन्त शुद्ध र शक्तिशाली हुनेहुँदा एक पटक भक्तिमा लीन भएपछि मानिस स्वतः निष्पाप हुन सक्दछ।

कृष्णभावनामा लागेका शुद्ध भक्तहरूको सङ्गतमा रहेर भक्ति गर्दा कतिपय विशेष कुराहरूलाई छोडिदिनुपर्ने हुन्छ। सबैभन्दा महत्त्वपूर्ण कुरा हृदयको दुर्बलतामाथि विजय प्राप्त गर्नु हो। प्रकृतिमाथि प्रभुत्व जमाउने इच्छाका कारणले गर्दा मानिसको पतन हुन्छ र यसरी मानिसले भगवान्को दिव्य प्रेमाभक्तिलाई त्याग्न पुग्दछ। हृदयको अर्को दुर्बलता आधिकारिक रूपले भौतिक प्रकृतिमाथि प्रभुत्व जमाउने इच्छा राखी भौतिक पदार्थको स्वामित्वप्रति आसक्त हुनु हो। हृदयको यस्तै दुर्बलताका कारणले गर्दा नै मानिस सांसारिक समस्याबाट ग्रस्त भएको हो। यस अध्यायका प्रारम्भिक पाँच श्लोकहरूमा हृदयका यिनै दुर्बलताबाट मुक्त हुने विधिको वर्णन गरिएको छ र छैटौँ श्लोकदेखि अध्यायको अन्त्यसम्म पुरुषोत्तमयोगको विवेचना गरिएको छ।

यस प्रकार *श्रीमद्भगवद्गीता* ग्रन्थअन्तर्गत 'पुरुषोत्तम योग' शीर्षक पन्ध्रौँ अध्यायको भक्तिवेदान्त तात्पर्य समाप्त भयो।

# अध्याय-सोह्र

# दैवी तथा आसुरी स्वभाव

श्रीभगवानुवाच

**अभयं सत्त्वसंशुद्धिर्ज्ञानयोगव्यवस्थितिः ।**
**दानं दमश्च यज्ञश्च स्वाध्यायस्तप आर्जवम् ॥ १॥**
**अहिंसा सत्यमक्रोधस्त्यागः शान्तिरपैशुनम् ।**
**दया भूतेष्वलोलुप्त्वं मार्दवं ह्रीरचापलम् ॥ २॥**
**तेजः क्षमा धृतिः शौचमद्रोहो नातिमानिता ।**
**भवन्ति सम्पदं दैवीमभिजातस्य भारत ॥ ३॥**

**श्रीभगवान् उवाच** — भगवान्‌ले भन्नुभयो; **अभयम्** — निर्भयता; **सत्त्व-संशुद्धिः** — आफ्नो अस्तित्वको शुद्धि; **ज्ञान** — ज्ञानमा; **योग** — संयुक्त हुन; **व्यवस्थितिः** — स्थिति; **दानम्** — दान; **दमः** — मनको निग्रह; **च** — तथा; **यज्ञः** — यज्ञ सम्पादन; **च** — तथा; **स्वाध्यायः** — वैदिक साहित्यको अध्ययन; **तपः** — तपस्या; **आर्जवम्** — सरलता; **अहिंसा** — अहिंसा; **सत्यम्** — सत्यता; **अक्रोधः** — क्रोधबाट मुक्ति; **त्यागः** — त्याग; **शान्तिः** — शान्ति; **अपैशु-नम्** — अर्काको दोष देख्न नचाहने; **दया** — दया; **भुतेषु** — सम्पूर्ण प्राणीहरूमा; **अलोलुप्त्वम्** — लोभबाट मुक्ति; **मार्दवम्** — भद्रता; **ह्रीः** — लज्जा; **अचापलम्** — सङ्कल्प; **तेजः** — तेज (बल); **क्षमा** — क्षमा; **धृतिः** — धैर्य; **शौचम्** — पवित्रता; **अद्रोहः** — ईर्ष्याबाट मुक्ति; **न** — होइन; **अति-मानिता** — मानको आशा; **भवन्ति** — हुन्छन्; **सम्पदम्** — गुणहरू; **दैवीम्** — दिव्य स्वभाव; **अभिजातस्य** — उत्पन्न भएका; **भारत** — हे भारत।

**भगवान्‌ले भन्नुभयो हे भरतपुत्र! निर्भयता, आत्मशुद्धि, आध्यात्मिक ज्ञानको विकास, दान, आत्मसंयम, यज्ञपरायणता, वेदाध्ययन, तपस्या, सरलता, अहिंसा, सत्यता, क्रोधविहीनता, त्याग, शान्ति, अर्काको दोष देख्न नचाहने, सबै जीवमा करुणा, लोभविहीनता, भद्रता, लज्जा, दृढसङ्कल्प, तेज, क्षमा, धैर्य, पवित्रता, ईर्ष्या तथा मनका अभिलाषाबाट मुक्ति आदि सबै दिव्य गुणहरू केवल दैवी प्रकृतिले सम्पन्न देवतासमान पुरुषमा पाइन्छन्।**

**तात्पर्य :** पन्ध्रौँ अध्यायको आरम्भमा नै यो भौतिक जगत्‌रूपी पीपलको रूखको वर्णन गरिएको छ। त्यसबाट निस्कने अतिरिक्त जराहरूको तुलना

जीवका शुभ तथा अशुभ कार्यहरूसँग गरिएको छ। नवौँ अध्यायमा पनि देव वा दैवी तथा असुर वा आसुरी भावको वर्णन गरिएको छ। वैदिक कार्यअनुसार सत्त्वगुणमा गरिएका सबै कार्यहरू मुक्तिका बाटोमा अग्रसर हुनका लागि मङ्गलमय मानिन्छन् र यस्ता कार्यलाई दैवी प्रकृति वा दिव्य स्वभाव भनिन्छ। यही दैवी प्रकृतिमा अडिएका मानिसहरू नै मुक्तिको बाटोमा अग्रसर हुने गर्दछन्। अर्कातिर रजोगुण र तमोगुणमा रहेर कर्म गर्नेहरूका लागि मुक्तिको सम्भावना छैन। तिनीहरू वा यही मनुष्य योनिमा रहन्छन् वा पशुजीवन तथा त्योभन्दा पनि नीच योनिमा झर्दछन्। यो सोह्रौँ अध्यायमा भगवान्‌ले दैवी प्रकृति तथा त्यसका गुणहरू र आसुरी प्रकृति तथा त्यसका गुणहरूको समान रूपमा वर्णन गर्नुभएको छ। ती गुणका लाभ र हानिको व्याख्या पनि उहाँले गर्नुभएको छ।

दिव्य गुण सम्पन्न तथा दैवी प्रवृत्ति भएका व्यक्तिलाई यहाँ **अभिजातस्य** भनिएको छ, जो अत्यन्त सारगर्भित छ। दैवी प्रवृत्तियुक्त परिवेशमा सन्तान प्राप्त गर्ने विधिलाई वैदिक शास्त्रमा गर्भाधान संस्कार भनिएको छ। दिव्य गुण सम्पन्न सन्तान प्राप्त गर्न चाहने बाबुआमाले मानिसको सामाजिक जीवनका लागि तोकिएका दशवटा नियमहरूको पालना गर्नु पर्दछ। *भगवद्गीतामा* हामीले असल सन्तान उत्पन्न गर्ने सहवासकार्यसँग साक्षात् भगवान् श्रीकृष्णको सम्बन्ध हुन्छ भन्ने प्रसङ्ग पढिसकेका छौँ। किनभने कृष्णभावनामृतका लागि गरिने यौन क्रीडालाई निन्दनीय मानिँदैन। कृष्णभावनामृतमा रहने मानिसले कुकुर-बिरालोले जस्तै सन्तान उत्पन्न गर्न खोज्नु हुँदैन, तिनीहरूले जन्मनासाथ कृष्णभावनामय हुने सन्तान उत्पन्न गर्नु पर्दछ। कृष्णभावनामृतमा तल्लीन भएका बाबु-आमाका सन्तानले यो सुअवसर पाउनै पर्दछ।

**वर्णाश्रम धर्म** नामक सामाजिक संस्थाले सामाजिक जीवनमा चार श्रेणी वा चार प्रकारका व्यावसायिक वर्ग वा चार वर्णको व्यवस्था गरेको छ। यसको अर्थ जन्मगत आधारमा मानव समाजलाई विभाजन गर्नु होइन। शैक्षिक योग्यताका आधारमा यस्तो विभाजन हुन सक्दछ। समाजमा शान्ति र सम्पन्नता कायम राख्न यस्तो विभाजन गरिएको हो। अतः यहाँ उल्लेख गरिएका गुणहरू दैवी गुण हुन् र यी गुणहरू आध्यात्मिक ज्ञानमा प्रगति गर्ने व्यक्तिका लागि हुन्। यी गुणका सहायताले मानिसले भौतिक संसारबाट मुक्ति पाउन सक्दछ।

वर्णाश्रम व्यवस्थामा संन्यासीलाई नै सबै सामाजिक वर्ण तथा आश्रमका प्रधान गुरु मानिएको छ। ब्राह्मणलाई समाजका अन्य तीन वर्ग क्षत्रीय, वैश्य तथा शूद्रका गुरु मानिन्छ तर संन्यासी यी सबै वर्णभन्दा माथि हुन्छ, त्यसैले संन्यासहरू ब्राह्मणहरूका पनि गुरु मानिन्छन्। संन्यासीको पहिलो योग्यता

नै निर्भय हुनु हो। किनभने संन्यासी कुनै पनि सहायता वा समर्थनबिनाको एक्लो हुन्छ। ऊ त केवल भगवान्‌का कृपामा निर्भर हुन्छ। "सबै प्रकारका नाता सम्बन्ध छोडे भने कसले मेरो रक्षा गर्ला" भन्ने विचार गर्ने मानिसले संन्यास आश्रम ग्रहण गर्नु हुँदैन। अन्तर्यामी भगवान् श्रीकृष्ण परमात्माका रूपमा मभित्र रहनु हुन्छ भन्ने विश्वास मानिसमा हुनु पर्दछ। कहाँ कसले के गर्न चाहन्छ भन्ने कुरा सबै उहाँलाई जानकारी हुन्छ र उहाँले प्रत्येक वस्तुलाई देखिरहनुभएको छ। परमात्मा स्वरूप भगवान् श्रीकृष्ण आफ्ना शरणागत व्यक्तिको रक्षा स्वयम् गर्नु हुन्छ भन्ने दृढविश्वास मानिसमा हुनु पर्दछ। उसले सोच्नु पर्दछ—"म कहिल्यै एक्लो छैन, म घना जङ्गलमा भए पनि भगवान् श्रीकृष्णको साथमा हुन्छु र उहाँले नै हरेक प्रकारले मेरो रक्षा गर्नु हुन्छ"। यही विश्वासलाई नै **अभयम्** अर्थात् निर्भीकता भनिन्छ। संन्यास आश्रममा रहेका व्यक्तिले यस्तो मनस्थिति बनाइराख्नु आवश्यक हुन्छ।

त्यसपछि उसले आफ्नो अस्तित्वलाई शुद्ध पार्नु पर्दछ। यसैलाई भनिन्छ—**सत्त्वसंशुद्धि**। संन्यास आश्रममा पालन गर्नुपर्ने विभिन्न विधिविधानहरू छन्। तीमध्ये सबैभन्दा महत्त्वपूर्ण विषय संन्यासीले स्त्री जातिसँग कुनै पनि घनिष्ठ सम्बन्ध राख्नु हुँदैन। उसले एकान्तमा स्त्रीसँग वार्तालाप गर्नु पनि हुँदैन। भगवान् चैतन्य महाप्रभु आदर्श संन्यासी हुनुहुन्थ्यो। उहाँ पुरीमा रहनु हुँदा उहाँका आफ्नै भक्तिनीहरू पनि उहाँका नजीक गएर नमस्कार गर्न पाउँदैनथे। उनीहरूले टाढैबाट भुइँमा भुकेर प्रणाम गर्नु पर्दथ्यो। यो स्त्री जातिप्रति राखिएको घृणाभाव नभई संन्यासीले स्त्रीसँग घनिष्ठ सम्बन्ध नराखून् भन्ने उद्देश्यले उनीहरूमाथि लगाइएको प्रतिबन्धात्मक व्यवस्था हो। मानिसले आफ्नो जीवनलाई शुद्ध बनाउनका लागि जीवनका विशेष परिस्थितिमा विविध आचार तथा विधिविधानको पालन गर्नु पर्दछ। संन्यासीका लागि स्त्रीसँग घनिष्ठ सम्बन्ध राख्नु र इन्द्रियतृप्तिका लागि धन सङ्ग्रह गर्नु अत्यन्त अशोभनीय कुरा हुन्। यस अर्थमा स्वयम् भगवान् चैतन्यमहाप्रभु एक आदर्श संन्यासी हुनुहुन्थ्यो। उहाँ स्त्री सम्बन्धप्रति अत्यन्त कठोर हुनुहुन्थ्यो र हामीले उहाँका जीवनबाट यो शिक्षा वा प्रेरणा लिन सक्दछौँ। उहाँ अधमभन्दा पनि अधम बद्ध जीवको कल्याणमा संलग्न रहने भगवान्‌का अत्यन्त उदार अवतार मानिनुहुन्छ, तर पनि स्त्रीसङ्गतका विषयमा उहाँ संन्यास आश्रमका विधिविधानलाई कठोरतापूर्वक पालन गर्न तत्पर रहनुहुन्थ्यो। 'छोटा हरिदास' नाम भएका उहाँका एकजना निजी पार्षद थिए र उनी अन्य विश्वसनीय पार्षदहरूका साथ निरन्तर भगवान् चैतन्य महाप्रभुका सङ्गतमा रहन्थे तर संयोगवश ती छोटा हरिदासले एक दिन एउटी स्त्रीलाई कामुक दृष्टिले

हेरेछन्, यो थाहा पाउनासाथ चैतन्य महाप्रभुले कठोरतापूर्वक तिनलाई आफ्नो पार्षद मण्डलीबाट नै निकालिदिनुभयो। भगवान् चैतन्य महाप्रभुले भन्नुभयो—"संन्यासी होस् या अन्य कुनै व्यक्ति, यदि ऊ भौतिक प्रकृतिका प्रपञ्चबाट बाहिर निस्कन चाहन्छ, आफूलाई आध्यात्मिक स्तरमा उठाउन चाहन्छ अनि अन्त्यमा भगवद्धाममा पुगेर भगवान्सँग बस्न चाहन्छ तथा भौतिक सम्पत्ति र स्त्रीलाई भोग दृष्टिले हेर्दैन र इन्द्रियतृप्तिका विषयको चिन्तन गर्दैन उसले आत्मशुद्धिको विधि पालन गरेको मानिन्छ। अन्यथा भोग नगरे पनि भोग र इन्द्रियतृप्तिका दृष्टिले स्त्रीलाई हेर्नु मात्र पनि अत्यन्त निन्दनीय कुरा हो। यस्तो अवैध कुरा सोच्नुभन्दा पहिले आत्महत्या गर्नु उचित हुन्छ। यी सबै शुद्धीकरणका विधि हुन्।

अर्को गुण भनेको **ज्ञान योग व्यवस्थिति** अर्थात् ज्ञानको विकासमा संलग्न रहनु हो। संन्यासीको जीवन भनेको आध्यात्मिक उन्नतिको बाटो भुलेका गृहस्थीहरू तथा अन्य व्यक्तिका लागि ज्ञानको मार्ग देखाउनु हो। संन्यासीले ढोका ढोकामा गएर भिक्षा मागेर जीवन निर्वाह गर्नु पर्दछ तर यसको अर्थ ऊ भिखारी होइन। दिव्य आध्यात्मिक स्तरमा रहेका व्यक्तित्वको अर्को योग्यता हो विनयशीलता र यही विनयशीलतावश संन्यासी घर घरमा भिक्षा माग्न जान्छन्, केवल भिक्षामाग्न उद्देश्यले होइन। संन्यासी गृहस्थीलाई दर्शन दिन र तिनमा कृष्णभावना जागृत गराउनका लागि तिनका घरमा भिक्षामाग्न जान्छन्। संन्यासीको कर्तव्य नै यही हो। यदि मानिस वास्तवमा ज्ञानमा अग्रसर भए गुरुको आज्ञा लिएर उसले ज्ञान र तर्कद्वारा कृष्णभावनामृतको उपदेश गर्नु पर्दछ। यदि ऊ ज्ञानमा त्यति परिपक्व भइसकेको नभए उसले संन्यास लिनु हुँदैन। पर्याप्त ज्ञानबिना नै यदि कसैले संन्यास आश्रम ग्रहण गरेमा ज्ञानप्राप्तिका लागि उसले प्रामाणिक गुरुसँग गई श्रवण गर्ने कार्यमा आफूलाई पूर्ण संलग्न गराउनु पर्दछ। अन्ततः **सत्त्वसंशुद्धि** तथा ज्ञानयोगमा अवस्थित भएको संन्यासी निर्भय हुनु पर्दछ।

अर्को गुण **दान** हो। दान गृहस्थीहरूका लागि हो। गृहस्थले इमान्दारितापूर्वक आजीविका आर्जन गर्नु पर्दछ र त्यसरी आर्जन गरेको कमाइको पचास प्रतिशत भाग विश्वभरि कृष्णभावनामृतको प्रचार-प्रसारका लागि खर्च गर्नु पर्दछ। यस प्रकार गृहस्थीहरूले कृष्णभावना फैलाउन संलग्न रहेका संस्थान तथा समितिहरूलाई दान दिनु पर्दछ। दान भनेको योग्य पात्रलाई दिइने कुरा हो र दान पनि सत्त्वगुणी, रजोगुणी र तमोगुणी गरी विविध प्रकृतिका हुन्छन्। शास्त्रमा सत्त्वगुणी दानको प्रशंसा गरिएको छ तर रजोगुणी र तमोगुणी दानको प्रशंसा गरिएको छैन। यस किसिमको रजोगुणी र तमोगुणी दान धनको

अपव्यय मात्र हो। दान संसारभरि कृष्णभावनामृतको प्रचारका लागि मात्र दिनु पर्दछ, त्यस्तो दान सत्त्वगुणी हुन्छ।

जहाँसम्म **दम** वा आत्मसंयमको कुरा छ, यो धार्मिक समाजका अन्य आश्रमका लागि मात्र नभई विशेषगरी गृहस्थका निमित्त पनि उत्तिकै महत्त्वपूर्ण छ। यद्यपि गृहस्थहरूसँग तिनका पत्नीहरू हुन्छन् तर भोगका लागि अनावश्यक तरिकाले इन्द्रियको उपभोग गर्नुहुन्न। गृहस्थका लागि पनि अनियन्त्रित मैथुन प्रतिबन्धित छ। केवल सन्तान उत्पत्तिका लागि मात्र उनीहरूले यसको उपभोग गर्नु पर्दछ। सन्तानको चाहना नभएमा आफ्नी पत्नीसँग पनि विषय भोगमा लिप्त हुनु हुँदैन। आधुनिक समाज मैथुनजीवनको भोग गर्नका लागि परिवार नियोजनका साधन तथा यस्तै अन्य घृणित विधिको उपयोग गर्दछ, जसले गर्दा उसले सन्तानको उत्तरदायित्व वहन गर्नु नपरोस्। यो दिव्य गुण होइन, यो त आसुरी गुण हो। आध्यात्मिक जीवनमा प्रगति गर्न चाहने गृहस्थ वा अन्यले पनि मैथुनजीवनमा संयम राख्नै पर्दछ र भगवान् श्रीकृष्णका सेवामा काम नलाग्ने सन्तान उत्पन्न गर्नु हुँदैन। यदि कोही कृष्णभावनाभावित सन्तान उत्पन्न गर्न समर्थ छ भने त्यसले सयवटा सन्तान जन्माए पनि फरक पर्दैन तर यस्तो क्षमता नहुने व्यक्तिले केवल इन्द्रियसुखका लागि मात्र कामभोगमा लिप्त हुनु हुँदैन।

गृहस्थले गर्नुपर्ने अर्को कार्य **यज्ञ** सम्पादन हो। यज्ञ सम्पादनका लागि पर्याप्त मात्रामा धन चाहिन्छ। ब्रह्मचर्य, वानप्रस्थ र संन्यास आश्रममा रहने व्यक्तिहरूसँग धन हुँदैन। तिनीहरू त भिक्षामागेर जीविका चलाउँदछन्। तसर्थ विभिन्न प्रकारका यज्ञ गर्ने जिम्मा पनि गृहस्थीको काँधमा रहेको छ। तिनीहरूले वैदिक साहित्यद्वारा निर्देशित अग्निहोत्र यज्ञ गर्नु पर्दछ, तर आजभोलि यस्ता यज्ञहरू सम्पन्न गर्नु अति नै खर्चिलो हुन्छ र कठिन पनि हुन्छ। तसर्थ कुनै पनि गृहस्थले यस्ता यज्ञहरू सम्पन्न गर्न सक्दैनन्। यस युगका लागि सर्वश्रेष्ठ यज्ञ सङ्कीर्तन यज्ञ हो **हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे, हरे राम हरे राम राम राम हरे हरे।** यस महामन्त्रको जप गर्नु नै सङ्कीर्तन यज्ञ हो। यो जपयज्ञ सर्वोत्तम छ, सबैभन्दा कम खर्चिलो पनि छ र प्रत्येक व्यक्तिले सजिलैसँग यो यज्ञ सम्पन्न गर्न सक्दछ र यसबाट लाभ पनि उठाउन सक्दछ। अतएव दान, इन्द्रियसंयम तथा यज्ञ सम्पादन यी तीनवटा कार्य गृहस्थीका लागि हुन्।

अनि आउँदछ **'स्वाध्याय'**। यो स्वाध्याय अर्थात् वेदाध्ययन ब्रह्मचारी वा विद्यार्थीका लागि हो। ब्रह्मचारीले पनि स्त्रीहरूसँग सम्बन्ध राख्नु हुँदैन ब्रह्मचारीले ब्रह्मचर्यव्रतको राम्ररी पालन गर्नु पर्दछ र आध्यात्मिक ज्ञानको

विकासका लागि वेद अध्ययनमा आफ्नो मन लगाउनु पर्दछ। यसैलाई स्वाध्याय भनिन्छ।

**तपस्** अर्थात् तपस्या विशेष गरी वानप्रस्थीका लागि हो। मानिस सम्पूर्ण जीवनभर गृहस्थीमा मात्र रहनु हुँदैन। जीवनका चार विभाग हुन्छन् भन्ने कुरा उसले थाहा पाउनु पर्दछ। ती हुन्— ब्रह्मचर्य, गृहस्थ, वानप्रस्थ र संन्यास। तसर्थ गृहस्थ जीवनपछि मानिस विरक्त हुनु पर्दछ। यदि एक सय वर्षको आयु भएमा उसले २५ वर्ष ब्रह्मचर्य, २५ वर्ष गृहस्थ, २५ वर्ष वानप्रस्थ र २५ वर्ष संन्यास आश्रममा रही जीवनयापन गर्नु पर्दछ। यी वेदमा वर्णित धार्मिक अनुशासनका नियमहरू हुन्। गृहस्थ जीवनबाट विरक्त भएपछि मानिसले शरीर, मन तथा जिब्रोलाई संयम राख्नु पर्दछ। त्यही नै तपस्या हो। वर्णाश्रम धर्मअन्तर्गतको सम्पूर्ण समाज नै तपस्याका निमित्त हो। तपस्याबिना कसैलाई पनि मुक्ति प्राप्त हुँदैन। "जीवनमा तपस्याको आवश्यकता छैन, केवल कल्पनात्मक चिन्तनद्वारा सबै कुरा ठीक हुन्छ" भन्नु गलत हो। यस्तो कुराको समर्थन न वैदिक साहित्यले गरेको छ न *भगवद्गीताले।* यस्ता सिद्धान्तहरू ती नक्कली आध्यात्मवादीहरूद्वारा बनाइन्छन्, जो बढीभन्दा बढी शिष्य, शिष्याहरू बनाउन चाहन्छन्। जहाँ विधि-निषेधहरू छन्, जहाँ नियमहरू पालन गर्नु पर्दछ त्यहाँ मानिसहरू आकर्षित हुँदैनन्। तसर्थ जो धर्मका नाममा अनुयायीहरू वा शिष्य, शिष्याहरू जम्मा गर्न चाहन्छन् तिनीहरू नै यस्तो देखावटी काम गर्दछन्। तिनीहरूले न आफ्ना विद्यार्थीहरूका जीवनमा कुनै प्रतिबन्ध लगाउँदछन् न आफ्नो जीवनलाई संयममा राख्दछन्। वेदले यस्तो पद्धतिलाई स्वीकृति दिएको छैन।

जहाँसम्म **आर्जवम्** अर्थात् सरलता आदि ब्राह्मणमा हुनुपर्ने गुणको सम्बन्ध छ, यसको पालन केवल एउटा आश्रमका मानिसले मात्र गर्नुपर्ने नभई ब्रह्मचर्य आश्रम, गृहस्थ आश्रम, वानप्रस्थ आश्रम र संन्यास आश्रम गरी चार आश्रमका सदस्यले यो नियमको पालन गर्नु पर्दछ। मानिस अत्यन्त सरल तथा सीधा हुनु पर्दछ।

**अहिंसा**को अर्थ कुनै पनि जीवको प्रगतिशील जीवनचक्रलाई अवरुद्ध नगर्नु हो। शरीरलाई मारे पनि शरीरमा रहने आत्मारूपी भिल्को कहिल्यै नमर्ने हुनाले, इन्द्रियको तृप्तिका लागि पशुपक्षीको वध गर्नुमा कुनै हानि छैन भन्ने सोच्नु हुँदैन। यहाँ प्रशस्त अन्न, फलफूल तथा दूधको आपूर्ति हुँदाहुँदै पनि आजभोलिका मानिसमा पशुको मासु खाने लत बढिरहेको छ। पशुहरूलाई मार्नु आवश्यक छैन। यो शिक्षा सबैका लागि हो। खानका लागि जब कुनै विकल्प रहँदैन त्यस समय पशुवध गर्न सकिन्छ तर त्यो पनि यज्ञमा अर्पण गरिएको हुनु

पर्दछ। जे होस्, मानिसका लागि प्रशस्त खाद्यसामग्री हुँदाहुँदै पशुहत्या गर्नु राम्रो होइन। त्यसमा पनि जो आध्यात्मिक प्रगति गर्न चाहन्छन्, आत्मसाक्षात्कार गर्न चाहन्छन् तिनीहरूले कहिल्यै पनि पशुहत्या र मांसभक्षण गर्नु हुँदैन। अहिंसाको विशेष अर्थ नै अरूको प्रगतिशील जीवनलाई हानि नपुर्‍याउनु हो। पशुहरू पनि आफ्नो विकासक्रममा एक प्रकारको पशु योनिबाट अर्को प्रकारको पशु योनिमा देहान्तर गर्दागर्दै प्रगति पथमा अग्रसर हुने गर्दछन्। यदि कुनै विशेष पशुको हत्या गरेमा उसको प्रगति रोकिन्छ। यदि कुनै पशु धेरै समयदेखि कुनै विशेष शरीरमा रहँदै आएको छ र असमयमा त्यसको हत्या भए उसले फेरि त्यही शरीर लिएर बाँकी रहेको आयु पूरा गर्नु पर्दछ। अनि मात्र त्यसले अर्को शरीर लिन पाउँदछ। अतएव आफ्नो स्वादको सतुष्टिका लागि कसैको प्रगतिलाई रोक्नु हुँदैन। यसैलाई अहिंसा भनिन्छ।

**सत्यम्**को अर्थ आफ्नो कुनै स्वार्थका लागि सत्यलाई बङ्गाउनु हो। वैदिक साहित्यका केही अंश अत्यन्त कठिन छन्, तसर्थ कुनै प्रामाणिक गुरुद्वारा नै त्यस्ता अंशको अर्थ वा आशय बुझ्नु पर्दछ। वेदलाई बुझ्ने विधि पनि यही हो। श्रुतिको अर्थ हो कुनै आधिकारिक व्यक्तिबाट श्रवण गर्नु। आफ्ना स्वार्थपूर्तिका लागि मानिसले कुनै मनोमानी अर्थ प्रयोग गर्नु हुँदैन। *भगवद्गीताका* धेरै टीकाहरू छन् जसमा मूल पाठको गलत व्याख्या गरिएको छ। शास्त्रका शब्दको वास्तविक भावार्थ प्रस्तुत गरिनु पर्दछ र यसलाई प्रामाणिक गुरुबाट नै सिक्नु पर्दछ।

**अक्रोध**को अर्थ नरिसाउनु वा रीसलाई रोक्नु हो। कसैले रिस उठाउने गराए पनि सहीष्णु हुनु पर्दछ। किनभने एक पटक क्रोध गर्नेबित्तिकै उसको सम्पूर्ण शरीर दूषित हुन पुग्दछ। क्रोध भनेको रजोगुण तथा कामबाट उत्पन्न हुने कुरा हो। अतः योगीहरूले आफूलाई क्रोधबाट रोक्नु पर्दछ। **अपैशुनम्**को अर्थ अर्काको दोष देख्ने काम नगर्नु वा अनावश्यक तरिकाले अर्काको संशोधन नगर्नु हो। चोरलाई चोर भन्नु निःसन्देह पनि दोष देख्नु होइन तर निष्कपट व्यक्तिलाई चोर भन्नु परम अपराध हो। आध्यात्मिक जीवनमा प्रगति चाहने व्यक्तिले यस्तो कार्य गर्नु हुँदैन। **ह्री** को अर्थ लज्जा हो र मानिस लज्जाशील हुनु पर्दछ। कुनै पनि निन्दनीय कार्य मानिसले गर्नु हुँदैन। **अचापलम्** या सङ्कल्पको अर्थ हो कुनै कुराबाट उदास वा उत्तेजित नहुनु। कुनै प्रयासमा असफल भए भनेर त्यसप्रति खिन्न हुनु हुँदैन बरु अझ धैर्य तथा सङ्कल्पका साथ प्रगति पथमा अघि बढ्नु पर्दछ।

यहाँ प्रयोग भएको **तेजस्** शब्द क्षत्रीयका निमित्त प्रयोग भएको हो। क्षत्रीय सधैँ अत्यन्त बलशाली हुनु पर्दछ र निर्बलहरूको रक्षा गर्न समर्थ हुनु

पर्दछ। तिनीहरूले आफूलाई अहिंसक देखाउनु हुँदैन। हिंसाको आवश्यकता पर्ने ठाउँमा हिंसा पनि देखाउनु पर्दछ। आफ्नो शत्रुलाई दमन गर्नसक्ने वीरले पनि विशेष परिस्थितिमा क्षमाको प्रदर्शन गर्न सक्नु पर्दछ। सानातिना अपराधका लागि उसले क्षमा पनि दिन सक्दछ।

**शौचम्**को अर्थ शरीर र मनमा मात्र होइन आचरणमा समेत पवित्रता कायम राख्नु हो। यो विशेषगरी व्यापारी वर्गका मानिसहरूका लागि हो। व्यापारीहरूले कालो बजारी गर्नु हुँदैन। **नातिमानिता**को अर्थ हो— सम्मानको आशा नराख्नु। यो शूद्र अर्थात् श्रमिक वर्गका मानिसका लागि भनिएको हो। वैदिक आदेशअनुसार यिनीहरूलाई चार वर्णमा सबैभन्दा निम्न मानिएको छ। तिनीहरू अनावश्यक सम्मान या प्रतिष्ठाको अभिमानमा नलागी आफ्नो मर्यादाभित्र स्थिर भएर बस्नु पर्दछ। शूद्रको कर्तव्य नै सामाजिक व्यवस्थालाई अघि बढाउनका लागि आफूभन्दा उच्च वर्णहरूको सम्मान गर्नु हो।

यहाँ उल्लेख गरिएका उपर्युक्त छब्बीस प्रकारका योग्यताहरू दिव्य गुण हुन्। वर्णाश्रम धर्म वा व्यवसायिक प्रवृत्तिअनुसार यी गुणहरूको विकास गरिनु पर्दछ। तात्पर्य भनेको, भौतिक अवस्था कष्टकारक भए पनि यदि सबै वर्णका मानिसहरूले यी गुणहरू आर्जन गर्ने वा बढाउने अभ्यास गरेमा तिनीहरू क्रमशः आध्यात्मिक अनुभूतिको सर्वोच्च पदसम्म उठ्न सक्दछन्।

**दम्भो दर्पोऽभिमानश्च क्रोधः पारुष्यमेव च ।**
**अज्ञानं चाभिजातस्य पार्थ सम्पदमासुरीम् ॥ ४ ॥**

**दम्भः** — अहङ्कार; **दर्पः** — घमण्ड; **अभिमानः** — अभिमान (गर्व); **च** — तथा; **क्रोधः** — रिस; **पारुष्यम्** — निष्ठुरता; **एव** — निश्चय नै; **च** — तथा; **अज्ञानम्** — अज्ञान; **च** — तथा; **अभिजातस्य** — उत्पन्न भएका; **पार्थ** — हे पृथापुत्र; **सम्पदम्** — गुणहरू; **आसुरीम्** — आसुरी प्रकृतिका।

**हे पृथापुत्र! अहङ्कार, घमण्ड, अभिमान, क्रोध, कठोर वचन तथा अज्ञान यी सबै गुण आसुरी स्वभाव भएका व्यक्तिसँग हुन्छन्।**

**तात्पर्य :** यस श्लोकमा नर्क जाने राजमार्गको वर्णन गरिएको छ। आसुरी स्वभाव हुनेहरू धर्म तथा अध्यात्मविज्ञानमा आफ्नो प्रगति भएको देखाउन चाहन्छन् तर स्वयम् आफूले ती धार्मिक सिद्धान्तको पालना गर्दैनन्। तिनीहरू सधैँ कुनै न कुनै किसिमको शैक्षिक योग्यता र प्रचुर सम्पत्तिको स्वामी भएको घमण्ड गर्दछन्। आफू सम्मानयोग्य नभए पनि अरूले सम्मान गरुन् र पूजा गरून् भन्ने चाहन्छन्। तिनीहरू सानातिना कुरामा रिसाउँदछन् र चाहिने नचाहिने प्रलाप गर्दछन् तर नम्रतापूर्वक बोल्न जान्दैनन्। तिनीहरू के गर्नु

पर्ने हो र के नगर्नु पर्ने हो भन्ने जान्दैनन्। तिनीहरू आफ्नो इच्छानुसार मनको कल्पनाले जुनसुकै काम पनि गर्दछन् तर कुनै प्रमाणलाई ध्यान दिँदैनन्। यस्ता मानिसले शरीरको प्रारम्भदेखि वा आमाको गर्भदेखि नै यी आसुरी गुणहरू लिएर आएका हुन्छन् अनि जति जति ठुलो हुँदै गयो उति उति ती अशुभ गुणहरू पनि तिनमा प्रकट हुँदै जान्छन्।

**दैवी सम्पद्विमोक्षाय निबन्धायासुरी मता ।**
**मा शुचः सम्पदं दैवीमभिजातोऽसि पाण्डव ॥ ५ ॥**

**दैवी** — दिव्य; **सम्पत्** — सम्पत्ति; **विमोक्षाय** — मोक्षका लागि; **निबन्धाय** — बन्धनका लागि; **आसुरी** — आसुरी गुण; **मता** — मानिन्छन्; **मा शुचः** — चिन्ता नगर; **सम्पदम्** — सम्पत्ति; **दैवीम्** — दिव्य; **अभिजातः** — उत्पन्न; **असि** — छौ; **पाण्डव** — हे पाण्डुपुत्र।

**दिव्य गुणहरू मोक्षका लागि आवश्यक मानिन्छन् र आसुरी गुणले बन्धनमा पार्दछन् तर हे पाण्डुपुत्र! तिमी चिन्ता नगर, किनभने तिमी दैवी गुणले युक्त भएर जन्मेका छौ।**

**तात्पर्य :** भगवान् श्रीकृष्णले आसुरी गुणले रहित भएर जन्मिएको भनेर अर्जुनलाई प्रोत्साहित गर्नुभयो। उनी युद्धमा सम्मिलित हुनु आसुरीपन होइन। किनभने अर्जुन आफ्ना गुण र दोषमाथि विचार गर्दै थिए। उनी भीष्म तथा द्रोणजस्ता प्रतिष्ठित महापुरुषहरूको हत्या गरौँ कि नगरौँ भनेर विचार गर्दै थिए। उनी क्रोधको अधीनमा रहेर वा अहङ्कार वा निष्ठुरताको वशीभूत भएर काम गरिरहेका थिएनन्। तसर्थ अर्जुन आसुरी स्वभावका थिएनन्। क्षत्रीयका लागि वा सैनिकका लागि शत्रुमाथि वाण प्रहार गर्नु नै दिव्य कर्म मानिन्छ र यस्तो कर्तव्यबाट विमुख हुनु बरु आसुरीपन हो। यसरी हेर्दा अर्जुनका लागि शोक गर्नुपर्ने कुनै कारण थिएन। जीवनका विभिन्न आश्रममा रहेर सोहीअनुसारको विधिविधानहरूको पालन गरेर नै मानिसले आध्यात्मिक जीवनको दिव्य अवस्थालाई प्राप्त गर्न सक्दछ।

**द्वौ भूतसर्गौ लोकेऽस्मिन्दैव आसुर एव च ।**
**दैवो विस्तरशः प्रोक्त आसुरं पार्थ मे शृणु ॥ ६ ॥**

**द्वौ** — दुई; **भूतसर्गौ** — जीवहरूको सृष्टि; **लोके** — संसारमा; **अस्मिन्** — यो; **दैवः** — दैवी; **आसुरः** — आसुरी; **एव** — निश्चय नै; **च** — तथा; **दैवः** — दैवी; **विस्तरशः** — विस्तारपूर्वक; **प्रोक्तः** — भनियो; **आसुरम्** — आसुरी; **पार्थ** — हे पृथापुत्र; **मे** — मबाट; **शृणु** — सुन।

**हे पृथापुत्र! यस संसारमा सृष्टि भएका प्राणीहरू दुई प्रकारका छन् — दैवी तथा आसुरी। दैवी गुणबारे मैले पहिला नै विस्तारपूर्वक भनिसकेको छु। अब तिमी मबाट आसुरी गुणका बारेमा सुन।**

**तात्पर्य :** भगवान्ले अर्जुनलाई उनी दैवी गुण लिएर जन्मेको कुरामा आश्वस्त पार्नुभयो र उनीसँग अब आसुरी गुणको वर्णन गर्न प्रारम्भ गर्नुभयो। यस संसारका बद्ध जीवहरू दुई श्रेणीमा बाँडिएका छन्। जो दिव्य गुण सम्पन्न छन् ती नियमित जीवनयापन गर्दछन् र शास्त्र तथा विद्वान्हरूले भने अनुसारको आज्ञा पालन गर्दछन्। मानिसले प्रामाणिक शास्त्रअनुसार नै कर्तव्य पालन गर्नु पर्दछ। यस्तो मानसिकतालाई दैवी स्वभाव भन्दछन्। जसले शास्त्रविहित विधि-विधानलाई मान्दैन र आफ्नै मनपरी तरिकाले काम गर्दछ त्यसलाई आसुरी स्वभाव भनिन्छ। शास्त्रका विधिविधानप्रतिको आज्ञाभाव नै दैवी स्वभावको एक मात्र आधार वा कसी हो, अरू होइन। वैदिक साहित्यमा उल्लेख भएअनुसार देवता तथा असुर दुवै प्रजापतिबाट उत्पन्न भएका हुन्। तिनमा अन्तर के छ भने, एउटाले वैदिक आदेश मान्दछन् र अर्कले त्यो मान्दैनन्।

**प्रवृत्तिं च निवृत्तिं च जना न विदुरासुराः ।**
**न शौचं नापि चाचारो न सत्यं तेषु विद्यते ॥ ७॥**

**प्रवृत्तिम्** — ठीकसँग कर्म गर्नु; **च** — पनि; **निवृत्तिम्** — नराम्रो तरिकाले कर्म गर्नु; **च** — तथा; **जनाः** — मानिसहरू; **न विदुः** — जान्दैनन्; **आसुराः** — आसुरी गुणभएका; **न** — होइन; **शौचम्** — पवित्रता; **न** — न त; **अपि** — पनि; **च** — तथा; **आचार** — आचरण; **न** — होइन; **सत्यम्** — सत्य; **तेषु** — तिनीहरूमा; **विद्यते** — रहन्छ।

**आसुरी गुण हुनेहरूले के गर्नु पर्दछ र के गर्नु हुँदैन भन्ने जान्दैनन्। तिनमा न पवित्रता हुन्छ, न उचित आचरण हुन्छ, न सत्यता नै पाइन्छ।**

**तात्पर्य :** प्रत्येक सभ्य मानव समाजको आफ्नै एउटा शास्त्रीय आचारसंहिता हुन्छ र समाजका सबैले आरम्भदेखि नै त्यसको पालन गर्नु पर्दछ। विशेष गरी संसारमा अत्यन्त सभ्य मानिने वैदिक सभ्यताका अनुयायी आर्यगणले यस्ता शास्त्रीय आचारको पालन गर्दछन्। जो यस्ता शास्त्रीय आदेशको अनुसरण गर्दैनन् तिनीहरूलाई आसुरी स्वभावका मानिन्छ। त्यसैले यहाँ भनिएको छ— असुरहरू शास्त्रीय नियमहरू पनि जान्दैनन् र ती नियमहरू पालन गर्ने प्रवृत्ति पनि तिनमा हुँदैन। तिनीहरूमध्ये धेरैले यस्ता नियमहरू नै जान्दैनन् र जसले जानेका छन् तिनले पनि त्यसको पालन गर्ने इच्छा गर्दैनन्। वैदिक

आदर्शप्रति तिनीहरूको श्रद्धा पनि हुँदैन र त्यसअनुसार आचरण गर्ने इच्छा पनि तिनीहरूमा हुँदैन। असुरगण आन्तरिक रूपले पनि र बाह्य रूपले पनि स्वच्छ वा पवित्र हुँदैनन्। मानिसले नित्य स्नान गरेर, दन्तमञ्जन गरेर, रौँहरू काटेर, सफा लुगा फेरेर, आफ्नो शरीरलाई सफा राख्ने कुरामा सधैँ सावधान हुनु पर्दछ। जहाँसम्म आन्तरिक स्वच्छताको कुरा छ त्यसका लागि मानिसले सधैँ ईश्वरको पवित्र नाम स्मरण गर्नु पर्दछ र **हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे। हरे राम हरे राम राम राम हरे हरे** यो महामन्त्रको कीर्तन गर्नु पर्दछ। असुरहरू बाहिरी तथा आन्तरिक स्वच्छताका यी नियमहरू मन पराउँदैनन् र पालन पनि गर्दैनन्।

जहाँसम्म आचरण वा व्यवहारको कुरा छ, यसका सम्बन्धमा भन्नुपर्दा मानवलाई आचरणको निर्देशन गर्ने धेरै विधिविधानहरू छन्। मनुसंहिता मानव जातिका लागि त्यस्तै विधिनियम हो। आजसम्म पनि सम्पूर्ण हिन्दूहरू मनुस्मृतिको अनुसरण गर्दैछन्। यसै स्मृतिग्रन्थअनुसार उत्तराधिकारको नियम तथा अन्य विधिहरू ग्रहण गर्ने गरिन्छ। मनुस्मृतिमा स्पष्ट रूपले स्त्रीलाई स्वतन्त्रता प्रदान गर्नु हुँदैन भनिएको छ। यसको अर्थ स्त्रीलाई दासी बनाएर राख्नु पर्दछ भनेको पनि होइन। नारीहरू भनेका बालकजस्तै हुन्। बालकहरूलाई स्वतन्त्रता दिइँदैन। स्वतन्त्रता नदिनुको अर्थ तिनलाई दास बनाएर राखिन्छ भन्ने होइन। तर असुरहरूले अहिले यस्ता आदेशहरूको अवहेलना गरेर स्त्रीलाई पनि पुरुषसरह स्वतन्त्रता दिनु पर्दछ भन्ने आग्रह गर्न सुरु गरेका छन्। यसबाट संसारको सामाजिक स्थितिमा कहिल्यै सुधार हुन सक्दैन, वास्तवमा जीवनका प्रत्येक अवस्थामा स्त्रीलाई सधैँ सुरक्षा प्रदान गरिरहनु पर्दछ।

बाल्यकालमा पिताद्वारा, यौवन अवस्थामा पतिद्वारा तथा बृद्ध अवस्थामा छोराद्वारा स्त्री जातिलाई संरक्षण प्रदान गर्नु पर्दछ। मनुस्मृतिअनुसार उचित सामाजिक आचरण यही हो। तर आधुनिक शिक्षाले नारी जीवनमा एउटा कृत्रिम अहङ्कारबोधलाई जागृत गराएको छ। त्यसले गर्दा विवाह भन्ने कुरा अब मानवसमाजमा एउटा कल्पना मात्र प्रमाणित हुँदै गएको छ। नारीहरूको नैतिक अवस्था पनि अहिले त्यति राम्रो छैन। समाजलाई हित हुने कुनै पनि उपदेश असुरहरूलाई मन पर्दैन। तिनीहरू महर्षिहरूका अनुभव र तिनबाट प्रतिपादित नीति तथा विधिविधानको आचरण गर्दैनन्। त्यसैले आसुरी व्यक्तिहरूको सामाजिक अवस्था अत्यन्त कष्टमय हुन्छ।

**असत्यमप्रतिष्ठं ते जगदाहुरनीश्वरम् ।**
**अपरस्परसम्भूतं किमन्यत्कामहैतुकम् ॥ ८ ॥**

**असत्यम्** — झूटो; **अप्रतिष्ठम्** — आधाररहित; **ते** — तिनीहरू; **जगत्** — दृश्य जगत्; **आहुः** — भन्दछन्; **अनीश्वरम्** — ईश्वरबिनाको; **अपरस्पर** — बिनाकारण; **सम्भूतम्** — उत्पन्न; **किम्-अन्यत्** — अरू कुनै कारण छैन; **कामहैतुकम्** — केवल कामवासनाका कारणले।

**तिनीहरू जगत् झूटो हो यसको कुनै आधार छैन र यसलाई नियन्त्रण गर्ने कुनै ईश्वर पनि छैन भन्दछन्। तिनीहरूको भनाइमा यो सबै केवल कामवासनाका इच्छाद्वारा उत्पन्न भएको हो र कामवासनाबाहेक यसको अरू कुनै कारण छैन।**

**तात्पर्य :** आसुरी स्वभावका मानिसहरूले यो जगत् मायाजाल हो भन्ने निष्कर्ष निकाल्दछन्। तिनका मतमा यसको न कुनै कारण छ न कार्य, न यसको कुनै नियन्त्रक छ न प्रयोजन नै छ। यहाँका सबै कुराहरू झूटो हुन् भन्ने धारणा तिनीहरू राख्दछन्। तिनीहरूका अनुसार यो दृश्य जगत् आकस्मिक भौतिक क्रिया-प्रतिक्रियाको प्रतिफल मात्र हो। ईश्वरले कुनै विशेष उद्देश्यका लागि यो जगत्को सृष्टि गर्नुभएको हो भन्ने कुरा तिनीहरू सोच्दैनन्। तिनीहरूको सिद्धान्तअनुसार यो सृष्टि आफैँ उत्पन्न भएको हो, त्यहाँ ईश्वर हुनुहुन्छ भन्ने कुरामा विश्वास गर्नु पर्दैन। तिनीहरूका दृष्टिमा पदार्थ र आत्माका बीचमा भिन्नता छैन र परमात्मालाई तिनीहरू मान्दैनन्। तिनीहरूका लागि जगत्का हरेक वस्तुहरू पदार्थ मात्रै हुन् र यो सम्पूर्ण जगत् अज्ञानको पिण्ड हो। तिनीहरूका अनुसार प्रत्येक वस्तु शून्य छ र यो दृश्य जगत् भनेको केवल दृष्टिभ्रम मात्र हो। विविधतापूर्ण यो सम्पूर्ण सृष्टि अज्ञानको प्रदर्शन हो भन्ने कुरालाई तिनीहरू साँचो मान्दछन्। हामी सपनामा यस्ता धेरै वस्तुहरूको सृष्टि गर्दछौँ, जसको वास्तविक जगत्मा कुनै अस्तित्व हुँदैन तर निद्राबाट उठेर हेर्दा ती सबै सपना रहेछन् भन्ने थाहा पाउँदछौँ। असुरहरू यो जीवनलाई सपना भन्दछन् तर यही सपनालाई अत्यन्त राम्रोसँग भोग पनि गर्दछन्। तसर्थ तिनीहरू ज्ञान आर्जन गर्नुभन्दा आफ्ना स्वप्नलोकमा नै अधिकभन्दा अधिक भुलिरहन्छन्। तिनीहरूका अनुसार एउटा बालक स्त्री-पुरुषको सम्भोगको प्रतिफल हो र यो संसार कुनै आत्माबिना नै उत्पन्न भएको छ। तिनका विचारमा पदार्थको सम्मिश्रणबाट मात्र जीवात्माहरू उत्पन्न हुन्छन् र त्यहाँ आत्माको अस्तित्वको कुनै प्रश्न नै छैन। जसरी बिनाकारण पसीना तथा मृत शरीरबाट विभिन्न जीवित प्राणी उत्पन्न हुन्छन् त्यसरी नै यो सम्पूर्ण जीवित संसार पनि ब्रह्माण्डका भौतिक पदार्थहरूको संयोगबाट प्रकट हुने गर्दछ। तसर्थ भौतिक प्रकृति नै यो संसारको कारण हो, यसबाहेक अर्को कारण छैन। गीतामा भनिएको छ— **मयाध्यक्षेण प्रकृतिः सूयते सचराचरम्**

अर्थात्, सारा भौतिक जगत् मेरो निर्देशानुसार गतिशील हुन्छ तर गीतामा व्यक्त गरिएका भगवान् श्रीकृष्णका यी वचनहरूमाथि तिनीहरू विश्वास गर्दैनन्। अर्को शब्दमा भन्दा असुरहरूलाई संसारको सृष्टिका विषयमा सम्पूर्ण ज्ञान नै छैन। तीमध्ये प्रत्येकले आ-आफ्नो किसिमका कुनै न कुनै सिद्धान्त बनाएका हुन्छन्। तिनीहरूका अनुसार शास्त्रको कुनै एउटा व्याख्या अर्को व्याख्याजस्तै असल छ, किनभने शास्त्रीय उपदेशहरूको मानक ज्ञानमा तिनीहरूले विश्वास नै गर्दैनन्।

**एतां दृष्टिमवष्टभ्य नष्टात्मानोऽल्पबुद्धयः ।**
**प्रभवन्त्युग्रकर्माणः क्षयाय जगतोऽहिताः ॥ ९ ॥**

एताम् — यो; **दृष्टिम्** — दृष्टिलाई; **अवष्टभ्य** — स्वीकार गरेर; **नष्ट** — हराएर; **आत्मानः** — आफैँलाई; **अल्पबुद्धयः** — अल्पज्ञानीहरू; **प्रभवन्ति** — विकसित हुन्छन्; **उग्रकर्माणः** — कष्टकारक कर्ममा संलग्न; **क्षयाय** — विनाशका लागि; **जगतः** — संसारको; **अहिताः** — अहितकारी।

**यस्तै किसिमका निष्कर्षको अनुगमन गर्दै आफैँमा हराएका बुद्धिहीन आसुरी मानिसहरू संसारको विनाश गर्ने अनुपयोगी र भयावह कार्यमा संलग्न हुन्छन्।**

**तात्पर्य :** आसुरी स्वभावका व्यक्तिहरू त्यस्ता कार्यमा व्यस्त रहन्छन्जुन कार्यले संसारलाई विनाशतिर लैजान्छ। भगवान्ले यिनीहरूलाई बुद्धिहीन भन्नुभएको छ। ईश्वरको कुनै बोध नभएका भौतिकवादीहरू स्वयम् आफूलाई प्रगति गरिरहेको ठान्दछन्। *भगवद्गीताअनुसार* त्यस्ता व्यक्तिहरू बुद्धिहीन हुन् र तिनीहरू सबै शुभ विचारबाट शून्य हुन्छन्। तिनीहरू यो भौतिक जगत्को अधिकभन्दा अधिक भोग गर्ने प्रयत्न गर्दछन् र त्यसका लागि आफ्नो इन्द्रियतृप्ति गर्ने कुनै न कुनै साधनको आविष्कार गर्ने कार्यमा लागिरहन्छन्। यस्तो भौतिक आविष्कारलाई मानव सभ्यताको विकास मानिन्छ। तर यसको दुष्परिणाम के हुन्छ भने, यसबाट अधिकाधिक मानिस हिंस्रक तथा क्रूर हुन जान्छन्। तिनीहरू पशु तथा मानवप्रति पनि अत्यन्त निर्दयी हुन्छन्। एकले अर्कालाई कस्तो व्यवहार गर्नु पर्दछ भन्ने कुरा तिनीहरूलाई थाहा हुँदैन। आसुरी व्यक्तिहरूमा पशुहत्या गर्ने इच्छा अत्यन्त प्रबल हुन्छ। यस्ता मानिसहरू संसारका शत्रु मानिन्छन्, किनभने अन्त्यमा तिनीहरूले यस्तो स्थिति निम्त्याउँछन् वा कुनै यस्तो वस्तुको सृष्टि गर्दछन् जसले गर्दा सम्पूर्ण सृष्टि नै ध्वस्त हुन पुग्दछ। अप्रत्यक्ष रूपमा यो श्लोकले नाभिकीय अस्त्रको आविष्कारलाई सङ्केत गरेको छ जुन कुराको गौरव आज सारा

विश्वले गरिरहेको छ। कुनै पनि क्षणमा युद्ध हुन सक्दछ र यी पारमाणविक हतियारहरूले पृथ्वीमा विनाशगर्न सक्दछन्। यस्ता वस्तुहरू संसारको विनाश गर्ने उद्देश्यले नै निर्माण गरिएका हुन्छन् र यो श्लोकले पनि यही कुराको सङ्केत गरेको छ। ईश्वरप्रतिको अविश्वासले गर्दा नै मानव समाजमा यस्ता हात-हतियारको आविष्कार भएको हो। हतियारहरूको आविष्कार संसारको शान्ति तथा सम्पन्नताका लागि गरिएको होइन।

**काममाश्रित्य दुष्पूरं दम्भमानमदान्विताः ।**
**मोहाद्गृहीत्वासद्ग्राहान्प्रवर्तन्तेऽशुचिव्रताः ॥ १० ॥**

**कामम्** — काम; **( विषय भोगको ) आश्रित्य** — शरण लिएर; **दुष्पूरम्** — अपूरणीय; **( अतृप्त )**; **दम्भ** — गर्व; **मान** — झूटो प्रतिष्ठा; **मद अन्विताः** — मदमा डुबेको; **मोहात्** — मोहबाट; **गृहीत्वा** — ग्रहण गरेर; **असत्** — क्षणभङ्गुर (अस्थायी); **ग्राहान्** — वस्तुहरू; **प्रवर्तन्ते** — विकसित हुन्छन्; **अशुचि** — अपवित्र; **व्रताः** — व्रत लिनेहरू।

**कहिल्यै सन्तुष्ट नहुने कामवासनाको आश्रय लिएर गर्व, मद र झूटो प्रतिष्ठामा डुबेका आसुरी व्यक्तिहरूले मोहग्रस्त भएर क्षणभङ्गुर वस्तुप्रति आकर्षित हुँदै, अपवित्र कर्म गर्ने सङ्कल्प लिन्छन्।**

**तात्पर्य :** यहाँ आसुरी मनोवृत्तिको वर्णन गरिएको छ। असुरहरूको कामवासना कहिल्यै तृप्त हुँदैन। भौतिक भोगका लागि तिनीहरू आफ्नो अतृप्त इच्छालाई सधैँ बढाइरहन्छन्। क्षणभङ्गुर वस्तुका पछाडि दौडँदा सधैँ चिन्तामग्न रहनु पर्दछ तैपनि मोहवश तिनीहरूले यस्ता कार्य नै निरन्तर गरिरहन्छन्। कुनै ज्ञान नभएका कारणले आफूहरू गलत दिशातिर गइरहेको कुरा पनि तिनीहरूलाई थाहा हुँदैन। अनित्य वस्तुलाई अँगाल्दै यी आसुरी वृत्तिका मानिसहरू आफ्नो ईश्वर आफैँ निर्माण गर्दछन्। आफ्नै निजी मन्त्र तयार गर्दछन् र त्यही अनुरूपको कीर्तन गर्दछन्। फलस्वरूप तिनीहरू कामभोग र सम्पत्ति-सञ्चय गर्ने काममा झन् झन् आकर्षित हुँदै जान्छन्।

यस प्रसङ्गमा **अशुचि-व्रताः** भन्ने शब्द अत्यन्त महत्त्वपूर्ण छ। यसको अर्थ अपवित्र व्रत हो। यस्ता आसुरी व्यक्तिहरू रक्सी, वेश्या, जूवातास र मांसाहारमै बढी आकर्षित हुन्छन्। यसरी तिनीहरूको बानी अशुचि अर्थात् अपवित्र हुन्छ। तिनीहरू अहङ्कार र झूटो प्रतिष्ठाबाट प्रेरित भएर वेदले अनुमोदन नगरेका धार्मिक सिद्धान्त तयार गर्दछन्। यस्ता आसुरी व्यक्तिहरू संसारमा अत्यन्त निन्दाका पात्र हुन् तैपनि कृत्रिम साधनद्वारा मानिसहरू

तिनीहरूको झूटो सम्मान गर्ने गर्दछन्। यद्यपि तिनीहरू नरकतिरै अघि बढिरहेका हुन्छन् तापनि तिनले आफूलाई अत्यन्तै उन्नत छु भन्ने ठान्दछन्।

**चिन्तामपरिमेयां च प्रलयान्तामुपाश्रिताः ।**
**कामोपभोगपरमा एतावदिति निश्चिताः ॥ ११ ॥**
**आशापाशशतैर्बद्धाः कामक्रोधपरायणाः ।**
**ईहन्ते कामभोगार्थमन्यायेनार्थसञ्चयान् ॥ १२ ॥**

**चिन्ताम्** — डर र चिन्ताहरूलाई; **अपरिमेयाम्** — अपार; **च** — तथा; **प्रलय अन्ताम्** — मर्ने समयसम्म; **उपाश्रिताः** — आश्रय लिएको; **काम-उपभोग** — इन्द्रियतृप्ति; **परमाः** — जीवनको परमलक्ष्य; **एतावत्** — यसरी; **इति** — यस किसिमले; **निश्चिताः** — निश्चय गरेर; **आशापाश** — आशाको जालरूपी बन्धन; **शतैः** — सयौँ; **बद्धाः** — बाँधिएको; **काम** — कामवासनाको; **क्रोध** — तथा क्रोधमा; **परायणाः** — सधैँ त्यस्तै मानसिकतामा रहेका; **इहन्ते** — इच्छा गर्दछन्; **काम** — काम; **भोग** — इन्द्रियभोग; **अर्थम्** — का निमित्त; **अन्यायेन** — अन्यायपूर्वक; **अर्थ** — धनको; **सञ्चयान्** — सङ्ग्रह।

**इन्द्रियहरूको तृप्ति नै मानव सभ्यताको प्रमुख आवश्यकता हो भन्ने विश्वास तिनीहरूको हुन्छ। यसै कारण मृत्यु कालसम्म पनि तिनीहरूलाई अपार इच्छा भइरहेको हुन्छ। लाखौँ चिन्ताको जालमा बाँधिएर तिनीहरू काम तथा क्रोधमा लीन हुँदै इन्द्रियतृप्तिका लागि अवैध ढङ्गले धन सङ्ग्रह गर्दछन्।**

**तात्पर्य :** आसुरी व्यक्तिहरू इन्द्रियभोग नै जीवनको परमलक्ष्य हो भन्ने ठान्दछन्। मर्ने समयसम्म पनि तिनीहरू यही धारणा राखिरहन्छन्। मृत्युपछिको जीवनप्रति उनीहरू विश्वास गर्दैनन् र आफ्नै कर्मअनुसार विविध प्रकारका शरीरहरूमा जन्म लिनु पर्दछ भन्ने कुरामा पनि तिनीहरू विश्वास गर्दैनन्। तिनका जीवनका योजनाहरू कहिल्यै समाप्त हुँदैनन् र तिनीहरू एकपछि अर्को योजना बनाउँदै जान्छन्, जसको अन्त्य कहिल्यै हुँदैन। हामीलाई एउटा यस्तो व्यक्तिको आसुरी मनोवृत्तिको निजी अनुभव छ जसले मर्ने समयसम्म पनि डाक्टरसँग आफ्नो जीवनको आयु चार वर्ष अझै बढाउने आग्रह गरिरहन्थ्यो, किनभने उसका योजनाहरू अझै पूरा भएका थिएनन्। यस्ता मूर्खहरूलाई डाक्टरले एक क्षण पनि मृत्युलाई टार्न सक्दैन भन्ने कुराको ज्ञान हुँदैन। मृत्युको सूचना आएपछि मानिसको इच्छाप्रति कुनै विचार गरिँदैन। प्रकृतिको नियमले कसैलाई पनि निश्चित अवधिभन्दा एक क्षण पनि बढी भोग्ने वा बाँच्ने अनुमति दिँदैन।

आसुरी मानिसले आफ्ना अन्तर्हृदयमा विराजमान ईश्वर वा परमात्मामा पनि विश्वास राख्दैन। ऊ केवल इन्द्रियतृप्तिका लागि सबै प्रकारका पाप कर्महरू गरिरहन्छ। आफ्नै हृदयभित्र परमात्मारूपी एकजना साक्षी रहनुभएको पनि उसले थाहा नै पाउँदैन। परमात्माले प्रत्येक जीवका कर्महरू देखिरहनु हुन्छ। उपनिषद्मा भनिएको छ— एउटा रूखमा दुईवटा चराहरू बसेका छन्, एउटाले कर्म गर्दै रहन्छ र रूखमा फलेका सुख-दुःखरूपी फलको स्वाद पनि लिइरहन्छ भने अर्को पक्षी केवल साक्षी बनेर हेरिरहन्छ। तर असुरहरूलाई न वैदिक शास्त्रको ज्ञान हुन्छ न तिनमा विश्वास नै हुन्छ। त्यसैले इन्द्रियतृप्तिका लागि जे गर्न पनि आफू स्वतन्त्र भएको तिनले ठान्दछन् र त्यसबाट आउने परिणामप्रति कुनै ध्यान नै दिँदैनन्।

**इदमद्य मया लब्धमिमं प्राप्स्ये मनोरथम् ।**
**इदमस्तीदमपि मे भविष्यति पुनर्धनम् ॥ १३ ॥**
**असौ मया हतः शत्रुर्हनिष्ये चापरानपि ।**
**ईश्वरोऽहमहं भोगी सिद्धोऽहं बलवान्सुखी ॥ १४ ॥**
**आढ्योऽभिजनवानस्मि कोन्योऽस्ति सदृशो मया ।**
**यक्ष्ये दास्यामि मोदिष्य इत्यज्ञानविमोहिताः ॥ १५ ॥**

**इदम्** — यो; **अद्य** — आज; **मया** — मैले; **लब्धम्** — पाएँ; **इमम्** — यसलाई; **प्राप्स्ये** — प्राप्त गर्ने छु; **मनःरथम्** — मनले इच्छाएको; **इदम्** — यो; **अस्ति** — छ; **इदम्** — यो; **अपि** — पनि; **मे** — मेरो; **भविष्यति** — भविष्यमा बढ्ने छ; **पुनः** — फेरि; **धनम्** — धन; **असौ** — त्यो; **मया** — मद्वारा; **हतः** — मारिएको; **शत्रुः** — शत्रु; **हनिष्ये** — मार्नेछु; **च** — पनि; **अपरान्** — अरूलाई; **अपि** — निश्चय नै; **ईश्वरः** — ईश्वर; **अहम्** — म हूँ; **अहम्** — म हूँ; **भोगी** — भोक्ता; **सिद्धः** — सिद्ध; **अहम्** — म हूँ; **बलवान्** — शक्तिशाली; **सुखी** — प्रसन्न; **आढ्यः** — धनी; **अभिजनवान्** — कुलीन सम्बन्धीहरूले घेरिएको; **अस्मि** — म हूँ; **कः** — को; **अन्य** — अर्को; **अस्ति** — छ; **सदृशः** — समान; **मया** — मद्वारा; **यक्ष्ये** — यज्ञ गर्नेछु; **दास्यामि** — दान दिनेछु; **मोदिष्ये** — आमोद प्रमोद गर्ने छु; **इति** — यस प्रकारको; **अज्ञान** — अज्ञानतावश; **विमोहिताः** — मोहग्रस्त।

**आसुरी स्वभावका मानिसहरू सोच्ने गर्दछन्— "आज मसँग यति धन छ, आफ्ना योजनाबाट यति धन बढी कमाउनेछु। यस समय मसँग यति छ, भविष्यमा बढेर झन् झन् धेरै हुनेछ। त्यो मेरो शत्रु हो र मैले त्यसलाई मारिदिएँ, मेरा अरू शत्रु पनि मारिनेछन्। म सबै वस्तुको स्वामी हूँ। म भोक्ता हूँ, म सिद्ध शक्तिमान् र सुखी छु। म सबैभन्दा**

**धनी छु। मेरा वरिपरि मेरा कुलीन नातागोताहरू छन्। म जत्तिको शक्तिशाली र सुखी कोही पनि छैन। म यज्ञ गर्नेछु, दान दिनेछु र आनन्द मनाउनेछु।" यसरी यस्ता अज्ञानी व्यक्तिहरू मोहग्रस्त हुन्छन्।**

**अनेकचित्तविभ्रान्ता मोहजालसमावृताः।**
**प्रसक्ताः कामभोगेषु पतन्ति नरकेऽशुचौ ॥ १६ ॥**

**अनेक** — धेरै; **चित्त** — चिन्ताहरूले; **विभ्रान्ताः** — उद्विग्न; **मोह** — मोहको; **जाल** — जालबाट; **समावृताः** — घेरिएका; **प्रसक्ताः** — आसक्त; **काम-भोगेषु** — इन्द्रियतृप्तिमा; **पतन्ति** — खस्दछन्; **नरके** — नरकमा; **अशुचौ** — अपवित्र।

**यसरी विभिन्न चिन्ताहरूबाट उद्विग्न भएर मोहजालमा अल्भिँदै इन्द्रियभोगमा अति आसक्त हुनेहरू नरकमा खस्दछन्।**

**तात्पर्य :** आसुरी व्यक्तिलाई धन आर्जन गर्ने इच्छाको सीमा थाहा हुँदैन। उसमा यो इच्छा असीमित हुन्छ। उसको सोचाइ हरसमय आफूसँग कति सम्पत्ति छ र यसलाई अझै बढाउन के के गर्नु पर्दछ भन्ने योजनामा लागिरहेको हुन्छ। यसका लागि कुनै पनि पापपूर्ण बाटो अपनाउन ऊ हिच्किचाउँदैन र अवैध तरिकाले इन्द्रियतृप्तिका लागि ऊ कालोबजारी गर्दछ। ऊ आफूसँग भएको भूमि, परिवार, घर तथा बैंकबचतमा नै रमाइरहन्छ र त्यसको बृद्धिका लागि नयाँ नयाँ योजना बनाइरहन्छ। ऊ आफैँ आफ्नो शक्तिमा गर्व गर्दछ र यो सबै उसको पूर्वजन्मको पुण्यकर्मको कमाइ हो भन्ने कुरा उसलाई थाहा नै हुँदैन। पूर्वजन्मको कर्मका कारणले नै उसलाई यस्ता वस्तुहरू सञ्चय गर्ने अवसर प्राप्त भएको हो भन्ने कुरा बुझ्ने प्रयास पनि ऊ गर्दैन। ऊ के सोच्दछ—"मेरो यो सबै सम्पत्ति मेरै निजी प्रयासबाट प्राप्त भइरहेको छ।" आसुरी व्यक्ति आफ्नो बाहुबलमा विश्वास गर्दछ, कर्मको नियममा होइन। कर्मको नियमानुसार पूर्वजन्ममा उत्तम कर्म गर्ने मानिसले उच्च कुलमा जन्म लिन पुग्दछ र धनवान् बन्न सक्दछ, सुशिक्षित हुन सक्दछ, अत्यन्तै सुन्दर शरीर प्राप्त गर्न सक्दछ तर आसुरी व्यक्ति यी सबै वस्तुहरू आकस्मिक हुन् र आफ्नै निजी बाहुबलद्वारा अर्जित हुन् भन्ने सोच्दछ। तिनलाई विभिन्न व्यक्तिको सुन्दरता तथा शिक्षाका पछाडि कुनै दैवी योजना छ भन्ने अनुभव हुँदैन। यस्ता असुर व्यक्तिको प्रतिस्पर्धामा जो अगाडि आउँदछ त्यो उसको शत्रु बन्दछ। यस्ता धेरै आसुरी प्रकृतिका व्यक्तिहरू छन् जो एक अर्काका शत्रु छन्। यो शत्रुता पहिले मानिस-मानिसका बीचमा अनि परिवार-परिवारका बीचमा हुन्छ अनि समाजका बीचमा र अन्ततः राष्ट्र-राष्ट्रकै बीचमा बढ्दै जान्छ। तसर्थ विश्वभरि निरन्तर सङ्घर्ष, युद्ध र शत्रुता व्याप्त भइरहेको छ।

प्रत्येक आसुरी व्यक्ति अरू सबैको बलि चढाएर आफू बाँच्न चाहन्छ। सामान्यतया यस्ता व्यक्तिहरू आफैँलाई परम ईश्वर ठान्दछन्। आफ्ना अनुयायीहरूलाई यी आसुरी उपदेशकहरू के भन्छन्—"तिमीहरू ईश्वरलाई बाहिर-बाहिर किन खोजिरहेका छौ ? तिमी स्वयम् आफ्ना ईश्वर हौ। तिमी जे चाहन्छौ त्यो गर्न सक्दछौ। ईश्वरमाथि विश्वास नगर, ईश्वरलाई हटाऊ, ईश्वर मरिसकेको छ।" आसुरी व्यक्तिहरूका उपदेश यस्ता हुन्छन्।

आसुरी स्वभावको व्यक्तिले अरूलाई आफैँजस्तो वा आफूभन्दा धनी र प्रभावशाली देख्दछ, तैपनि "मभन्दा धनी पनि कोही छैन र मभन्दा प्रभावशाली पनि कोही छैन" भन्ने सोच्दछ। जहाँसम्म उच्च लोकमा जाने कुरा छ, यज्ञ गरेर उच्च लोकमा पुग्ने कुरामा तिनीहरू विश्वास गर्दैनन्। ती असुरहरूले सोच्ने गर्दछन्—"हामी हाम्रो आफ्नै यज्ञविधि निर्माण गर्दछौँ र केही यन्त्रहरू पनि बनाउँदछौँ जसबाट हामी कुनै पनि उच्च लोकमा पुग्न समर्थ हुन्छौँ।" यस्ता असुर व्यक्तिहरूको सर्वश्रेष्ठ उदाहरण थियो, रावण। उसले वेदमा वर्णित कुनै पनि यज्ञहरूको सम्पादन नगरी स्वर्ग जाने सिँढी बनाएर सबै मानिसलाई त्यहाँ पुऱ्याउन सकिने योजना बनाउन लागेको थियो। त्यसै गरी आजभोलिका असुरहरू पनि त्यस्तै यान्त्रिक विधिको व्यवस्थाद्वारा उच्चतर लोकमा पुग्ने प्रयास गरिरहेका छन्। यी सबै मोहग्रस्तताका उदाहरण हुन्। यसको परिणाम के हुन्छ भने, तिनीहरू थाहा नपाई-नपाई नरकतिर बढिरहेका हुन्छन्। यहाँ प्रयोग भएको **मोहजाल** शब्द अत्यन्त महत्त्वपूर्ण छ। मानिस माछोजस्तै बनेर मोहरूपी जालमा फँस्दछ र त्यहाँबाट बाहिर निस्कन सक्दैन।

**आत्मसम्भाविताः स्तब्धा धनमानमदान्विताः ।**
**यजन्ते नामयज्ञैस्ते दम्भेनाविधिपूर्वकम् ॥ १७॥**

**आत्मसम्भाविताः** — आफूलाई श्रेष्ठ ठान्ने; **स्तब्धाः** — घमण्डी; **धनमान** — धन तथा भूटो प्रतिष्ठा; **मद** — मोहमा; **अन्विताः** — लीन भएका; **यजन्ते** — यज्ञ गर्दछन्; **नाम** — नामका लागि मात्रै; **यज्ञैः** — यज्ञद्वारा; **ते** — तिनीहरू; **दम्भेन** — घमण्डले; **अविधि-पूर्वकम्** — विधिविधानको पालन नगरी।

**आफैँलाई श्रेष्ठ मान्नेहरू र सधैँ घमण्ड गर्नेहरू सम्पत्ति र भूटो प्रतिष्ठामा मोहित भएर कहिलेकाहीँ विधिविधानको पालन नगरी केवल नामका लागि मात्र अत्यन्त घमण्डपूर्वक यज्ञ गर्ने गर्दछन्।**

**तात्पर्य :** आफूलाई नै सर्वेसर्वा ठान्ने र कुनै प्रमाण वा शास्त्रलाई वास्ता नगर्ने असुरहरूले पनि कहिलेकाहीँ तथाकथित धार्मिक या याज्ञिक अनुष्ठान

गर्दछन्। कुनै पनि प्रमाणमा विश्वास नगर्ने हुँदा तिनीहरू अत्यन्त घमण्डी हुन्छन्। केही धन-सम्पत्ति र केही भूटो प्रतिष्ठाले गर्दा उनीहरूमा यस्तो मोह उत्पन्न भएको हो। कहिलेकाहीँ यस्ता असुरहरूले पनि धार्मिक उपदेशकको भूमिका निर्वाह गर्ने गर्दछन् र मानिसलाई भ्रमित पार्दछन् अनि धार्मिक सुधारक बनेर आफूलाई ईश्वरको अवतारका रूपमा प्रस्तुत गर्दछन्। तिनीहरू यज्ञ गर्ने आडम्बर गर्दछन्, देवताको पूजा गर्दछन् र निजी ईश्वरको सृष्टि गर्दछन्। सामान्य मानिसहरू यिनीहरूलाई ईश्वरकै रूपमा प्रचार गर्दछन् र पूजा गर्दछन्। मूर्खहरू यिनलाई धर्म र आध्यात्मिक ज्ञानका सिद्धान्तमा निकै उच्चस्थान पुगेका व्यक्ति भन्ने ठान्दछन्। तिनीहरू संन्यासीको भेष धारण गर्दछन् र त्यही भेषमा सबै प्रकारका अधर्महरू गर्दै हिँड्दछन्। वास्तवमा यो संसारबाट विरक्त हुने संन्यासीका लागि विभिन्न विधि-निषेधहरू निर्धारित गरिएका छन्। तर यी असुरहरू यस्ता प्रतिबन्धको कुनै वास्ता गर्दैनन्। तिनीहरूको सोचाइमा मानिसले जस्तो बाटो बनाउन सक्दछ त्यही नै त्यसको आफ्नो बाटो हो। अनुसरण गर्न सकिने त्योभन्दा अर्को कुनै आदर्श बाटो छैन। त्यसमा शास्त्रीय विधिविधानहरूको पालन नगरिने हुनाले यहाँ **अविधिपूर्वकम्** भन्ने शब्दमा विशेष जोड दिइएको छ। यी सबै कुराहरू सधैँ अज्ञान र मोहका कारणले हुने गर्दछन्।

**अहंकारं बलं दर्पं कामं क्रोधं च संश्रिताः ।**
**मामात्मपरदेहेषु प्रद्विषन्तोऽभ्यसूयकाः ॥ १८ ॥**

**अहंकारम्** — भूटो अभिमान; **बलम्** — बल; **दर्पम्** — घमण्ड; **कामम्** — काम (विषयभोग); **क्रोधम्** — क्रोध; **च** — पनि; **संश्रिता** — शरणागत भएको वा आश्रय लिएको; **माम्** — मलाई; **आत्म** — आफ्नो; **पर** — अरूको; **देहेषु** — शरीरहरूमा; **प्रद्विषन्तः** — निन्दा गर्दै; **अभ्यसूयकाः** — ईर्ष्यालु।

**अहङ्कार, बल, घमण्ड, काम, तथा क्रोधले मोहित भएको आसुरी व्यक्ति आफ्ना र अरूका शरीरमा रहेका भगवान्सँग पनि ईर्ष्या गर्दछ र सही धर्मको निन्दा गर्न थाल्दछ।**

**तात्पर्य :** आसुरी स्वभावको मानिस, भगवान्को श्रेष्ठताको विरोध गर्ने हुँदा उसले शास्त्रमा पनि विश्वास गर्न चाहँदैन। ऊ भगवान्को अस्तित्व र शास्त्र दुवैको ईर्ष्या गर्दछ। तथाकथित प्रतिष्ठा, धन र शक्तिको सङ्ग्रहबाट उसमा यस्तो ईर्ष्या उत्पन्न हुने गर्दछ। उसलाई यो वर्तमान जीवन नै आगामी जीवनको तयारी हो भन्ने कुरा थाहा हुँदैन। यस्तो कुरा थाहा नभएरै ऊ स्वयम् आफू र अरूसँग द्वेष गर्न थाल्दछ। ऊ अरू जीवको हिंसामा र आफ्नै हिंसामा पनि लाग्न सक्दछ। अज्ञानताको कारण

उसले भगवान्को परम-नियन्त्रणको पनि वास्ता गर्दैन। शास्त्र तथा भगवान्सँग ईर्ष्या राख्ने हुँदा उसले ईश्वरको अस्तित्वको विरुद्धमा भ्रूटो तर्कहरू प्रस्तुत गर्दछ र शास्त्रीय प्रमाणलाई मान्दैन। ऊ प्रत्येक कर्ममा आफूलाई स्वतन्त्र र शक्तिमान् भएको ठान्दछ। उसले के सोच्न थाल्दछ भने, "मेरो जति शक्ति, बल या सम्पत्ति अरू कसैसँग छैन, त्यसैले मैले जे जस्तो कर्म गरे पनि मलाई कसैले रोक्न सक्दैन।" आफ्ना इन्द्रियसुखका बाटोमा अगाडि बढ्न अवरोध पुऱ्याउने शत्रुलाई ऊ आफ्नो सम्पूर्ण शक्ति लगाएर धराशायी पार्ने योजना बनाउन थाल्दछ।

**तानहं द्विषतः क्रूरान् संसारेषु नराधमान् ।**
**क्षिपाम्यजस्रमशुभानासुरीष्वेव योनिषु ॥ १९ ॥**

**तान्** — तिनीहरूलाई; **अहम्** — म; **द्विषतः** — ईर्ष्यालु; **क्रूरान्** — क्रूर व्यक्तिहरू; **संसारेषु** — भवसागरमा; **नरअधमान्** — अधम मानिसहरूलाई; **क्षिपामि** — राखिदिन्छु; **अजस्रम्** — सधैँ; **अशुभान्** — अशुभ; **आसुरीषु** — आसुरी; **एव** — निश्चय नै; **योनिषु** — गर्भमा।

**म ईर्ष्यालु तथा क्रूर स्वभाव भएका नराधमहरूलाई निरन्तर भवसागरका विभिन्न आसुरी योनिहरूमा पठाइदिने गर्दछु।**

**तात्पर्य :** यस श्लोकमा कुनै विशेष जीवलाई कुनै विशेष शरीरमा राख्न सक्ने विशेषाधिकार भगवान्लाई प्राप्त छ भन्ने कुराको स्पष्ट सङ्केत छ। असुरहरू यस जन्ममा भगवान्को प्रभुत्वलाई स्वीकार नगर्न सक्दछन् र मनपरी तरिकाले इच्छाअनुसार कर्म गर्न सक्दछन् तर तिनीहरूको अर्को जन्म भगवान्कै निर्णयमा निर्भर हुन्छ। त्यसमा तिनीहरूको केही पनि लाग्दैन। *श्रीमद्भागवत्*को तृतीय स्कन्धमा भनिएको छ—मृत्युपछि जीवलाई आमाको गर्भमा राखिन्छ र परमशक्तिको निरीक्षणमा त्यहाँ उसलाई विशेष प्रकारको शरीर प्राप्त हुन्छ। यसरी संसारमा मनुष्य, पशु, कीरा आदि थुप्रै प्रकारका योनिहरूको अस्तित्व रहेको हामी पाउँदछौँ। यी सबै पराशक्तिबाट नै व्यवस्थित हुन्छन्, अकस्मात होइन। असुरहरूका बारेमा यहाँ स्पष्ट भनिएको छ—तिनीहरूलाई निरन्तर असुरकै गर्भमा राखिन्छ र यसरी यिनीहरू निरन्तर ईर्ष्यालु र नराधम हुन पुग्दछन्। यस्ता असुर योनिका मानिसहरू सधैँ कामुक हुन्छन्, सधैँ उग्र हिंसक हुन्छन्, घृणास्पद हुन्छन् तथा अपवित्र हुन्छन्। जङ्गलका विभिन्न शिकारी मानिसहरू आसुरी योनिसँग सम्बन्धित मानिन्छन्।

**आसुरीं योनिमापन्ना मूढा जन्मनि जन्मनि ।**
**मामप्राप्यैव कौन्तेय ततो यान्त्यधमां गतिम् ॥ २० ॥**

**आसुरीम्** — आसुरी; **योनिम्** — योनिमा; **आपन्नाः** — पुगेका; **मूढाः** — मूर्खहरू; **जन्मनि जन्मनि** — जन्मजन्मान्तरमा; **माम्** — मलाई; **अप्राप्य** — नपाएर; **एव** — निश्चय नै; **कौन्तेय** — हे कुन्तीपुत्र; **ततः** — त्यसपछि; **यान्ति** — जान्छन्; **अधमाम्** — अधम; **( निन्दित )**; **गतिम्** — गन्तव्यमा।

**हे कुन्तीपुत्र! बारम्बार आसुरी योनिमा जन्म ग्रहण गर्ने व्यक्तिहरूले मलाई कहिल्यै पनि प्राप्त गर्न सक्दैनन्। तिनीहरू क्रमशः झन्-झन् निन्दनीय गति वा अधम योनिमा पुग्दछन्।**

तात्पर्य : एकातिर भगवान् अत्यन्त दयालु हुनुहुन्छ भन्ने कुरा प्रसिद्ध छ तर यहाँ हामी असुरहरूप्रति भगवान् कहिल्यै दयालु नहुनुभएको देख्दछौँ। आसुरी प्रवृत्तिका मानिसहरूलाई जन्म जन्मान्तरसम्म त्यस्तै किसिमका आसुरी योनिमा राखिन्छ र भगवान्को कृपा नपाएर तिनीहरूको झन् झन् अधोगति भइरहन्छ, फलस्वरूप अन्त्यमा तिनले कुकुर, बिरालो र सुँगुरको शरीर प्राप्त गर्न पुग्दछन्। स्पष्ट भनिएको छ— यस्ता असुरहरूले कहिल्यै पनि ईश्वरको कृपा प्राप्त गर्ने अवसर पाउँदैनन्। वेदमा पनि भनिएको छ— यस्ता व्यक्तिहरू क्रमशः पतित हुँदै गएर कुकुर, सुँगुर इत्यादि हुन पुग्दछन्। यस सम्बन्धमा के तर्क गर्न सकिन्छ भने, यदि ईश्वरले असुरहरूलाई कृपा गर्नुहुन्न भने उहाँलाई किन सर्वकृपालु भनिएको हो त? यस प्रश्नको उत्तरमा भन्न सकिन्छ— वेदान्तसूत्रअनुसार परमेश्वर कसैलाई पनि घृणा गर्नुहुन्न। असुरलाई अधम योनिमा राख्नु भनेको तिनीहरूप्रति गरिएको उहाँको कृपाको अर्को रूप मात्र हो। कहिलेकाहीँ परमेश्वरले असुरहरूको संहार पनि गर्नु हुन्छ तर यो संहार तिनीहरूकै कल्याणका लागि गरिएको हुन्छ। वैदिक साहित्यअनुसार पनि भगवान्ले जसको संहार गर्नु हुन्छ त्यसको मुक्ति हुन्छ। इतिहासका पानामा यस्ता धेरै उदाहरणहरू छन्, जस्तै— रावण, कंस, हिरण्यकशिपु आदि। यिनीहरूलाई भगवान्ले नै विविध अवतार लिएर मार्नुभएको थियो। अतः असुरहरू पनि पर्याप्त भाग्यशाली भए मात्रै भगवान्का हातबाट मारिन्छन्। भगवान्बाट मारिनु भनेको असुरहरूप्रति भगवान्को कृपाको प्रदर्शन हो।

**त्रिविधं नरकस्येदं द्वारं नाशनमात्मनः ।**
**कामः क्रोधस्तथा लोभस्तस्मादेतत्त्रयं त्यजेत् ॥ २१ ॥**

**त्रिविधम्** — तीन प्रकारका; **नरकस्य** — नरकका; **इदम्** — यो; **द्वारम्** — द्वार; **नाशनम्** — विनाशकारी; **आत्मनः** — आत्माको; **कामः** — काम; **क्रोधः** — क्रोध; **तथा** — अनि; **लोभः** — लोभ; **तस्मात्** — तसर्थ; **एतत्** — यी; **त्रयम्** — तीनैवटालाई; **त्यजेत्** — त्याग गरोस्।

**काम, क्रोध र लोभ यी नरकका तीनवटा द्वारहरू हुन्। प्रत्येक बुद्धिमान् व्यक्तिले यिनलाई त्याग्नु पर्दछ, किनभने यिनबाट आत्माको पतन मात्र हुन्छ।**

**तात्पर्य :** आसुरी जीवनको प्रारम्भ कस्तो हुन्छ भन्ने वर्णन यहाँ गरिएको छ। प्रथमतः मानिसले आफ्नो काम तृप्ति गर्न चाहन्छ। यदि त्यो पूरा नभए उसमा क्रोध र लोभ उत्पन्न हुन्छन्, त्यसैले जो बुद्धिमान् छ, जो आसुरी योनिमा झर्न चाहँदैन उसले यी तीनवटै शत्रुहरूलाई परित्याग गर्नु पर्दछ। अन्यथा यिनीहरूले आत्मालाई पतनको चरम सीमामा पुऱ्याउँदछन्, जसले गर्दा भवबन्धनबाट मुक्ति पाउने कुनै सम्भावना नै हुँदैन।

**एतैर्विमुक्तः कौन्तेय तमोद्वारैस्त्रिभिर्नरः ।**
**आचरत्यात्मनः श्रेयस्ततो याति परां गतिम् ॥ २२ ॥**

**एतैः** — यी सबैबाट; **विमुक्तः** — मुक्त भएर; **कौन्तेय** — हे कुन्तीपुत्र; **तमः द्वारैः** — अज्ञानको द्वारबाट; **त्रिभिः** — तीन प्रकारका; **नरः** — व्यक्ति; **आचरति** — गर्दछ; **आत्मनः** — आफ्ना लागि; **श्रेयः** — मङ्गल; (**कल्याण**); **ततः** — त्यसपछि; **याति** — जान्छ; **पराम्** — परम; **गतिम्** — गन्तव्यमा।

**हे कुन्तीपुत्र! नरकका यी तीनवटा द्वारबाट जो मुक्त हुन सक्दछ, त्यही व्यक्तिले आत्मसाक्षात्कारका लागि कल्याणकारी कार्य गर्न सक्दछ र क्रमशः परमगति प्राप्त गर्दछ।**

**तात्पर्य :** प्रत्येक मानिस आफ्ना जीवनका काम, क्रोध तथा लोभ यी तीन परमशत्रुबाट अत्यन्त सावधान रहनु पर्दछ यी काम, क्रोध र लोभरूपी शत्रुबाट जति मुक्त हुनसक्यो, त्यति जीवन शुद्ध हुन्छ। अनि उसले वैदिक साहित्यमा निर्धारित विधि-निषेधको पालन गर्न सक्दछ। मानव जीवनका विधि-निषेधहरू पालन गर्दै मानिसले क्रमशः आफूलाई आत्मसाक्षात्कारका स्तरमा प्रतिष्ठित गर्न सक्दछ। यस्तो अभ्यासद्वारा भाग्यशाली व्यक्तिले आफूलाई कृष्णभावनामृतको स्तरसम्म उठाउन सक्दछ अनि उसको सफलता सुनिश्चित हुन्छ।

वैदिक साहित्यमा मानिसलाई पवित्रताको स्तरसम्म आईपुग्न सक्षम बनाउने कर्म तथा कर्मफलका विधिहरू बताइएको छ। यी सम्पूर्ण विधिहरू काम, क्रोध तथा लोभको परित्यागमा आधारित छन्। यिनै विधिहरूको ज्ञानद्वारा मानिस आत्मसाक्षात्कारको माथिल्लो स्तरसम्म पुग्न सक्दछ र अन्त्यमा भक्तिमा पुगेपछि यस्तो आत्मसाक्षात्कारको पूर्णता प्राप्त हुन्छ। भक्तिमा नै बद्ध जीवको मुक्ति सुनिश्चित हुन्छ। त्यसैले वैदिक पद्धतिमा चार आश्रम तथा

चार वर्णको व्यवस्था गरिएको छ, जसलाई वर्णव्यवस्था तथा आध्यात्मिक व्यवस्था भनिन्छ। त्यहाँ समाजका विभिन्न जाति र वर्णका लागि विभिन्न विधिविधानको व्यवस्था छ। मानिसले राम्रोसँग यी विधिविधानको पालन गर्न सकेमा ऊ स्वतः आत्मसाक्षात्कारको सर्वोच्च पद प्राप्त गर्न समर्थ हुन्छ।

**यः शास्त्रविधिमुत्सृज्य वर्तते कामकारतः ।**
**न स सिद्धिमवाप्नोति न सुखं न परां गतिम् ॥ २३ ॥**

**यः** — जो; **शास्त्रविधिम्** — शास्त्रका विधिहरूलाई; **उत्सृज्य** — त्याग गरेर; **वर्तते** — रहन्छ; **कामकारतः** — कामको वशीभूत भएर मनमानी तरिकाले काम गर्दै; **न** — न त; **सः** — त्यो; **सिद्धिम्** — सिद्धि; **आवाप्नोति** — प्राप्त गर्दछ; **न** — न त; **सुखम्** — सुख; **न** — न त; **पराम्** — परम; **गतिम्** — सिद्ध अवस्था।

**जसले शास्त्रको आदेशलाई अवहेलना गरेर मनोमानी तरिकाले कार्य गर्दछ उसलाई न सिद्धि प्राप्त हुन्छ न सुख प्राप्त हुन्छ, न त परमगति नै प्राप्त हुन सक्दछ।**

**तात्पर्य :** मानव समाजका विभिन्न आश्रम तथा वर्णका लागि विभिन्न प्रकारका शास्त्रविधि वा शास्त्रीय निर्देशनहरू निर्धारित गरिएका छन्। प्रत्येक व्यक्तिबाट यी विधिविधानहरूको पालन हुनुपर्ने आशा गरिन्छ। यदि कसैले यी विधिविधानहरूको पालन नगरी काम, क्रोध र लोभका वशमा परेर मनपरी कार्य गर्दछ त्यसले जीवनमा कहिल्यै सिद्धि प्राप्त गर्न सक्दैन। अर्को शब्दमा जुन मानिसले सैद्धान्तिक रूपमा यी सबै कुरालाई जानेर पनि तिनलाई आफ्नो जीवनमा लागु गर्न सक्दैन, त्यसलाई मानिसहरूमा अधम वा नराधम भन्नु पर्दछ। मानव जीवनसँग आशा राखिने कुरा के हो भने, ऊ बुद्धिमान् बनोस् र जीवनलाई सर्वोच्च स्तरसम्म पुऱ्याउनका लागि व्यवस्था गरिएका विधि-नियमहरूको पालन गरोस्। तर यदि उसले यी विधि-विधानहरूको पालन नगरे उसको अधोपतन हुनजान्छ। यसरी शास्त्रीय विधिविधान तथा नैतिक सिद्धान्तको पालन गरेर पनि अन्त्यमा परमेश्वरलाई बुझ्न नसके त्यसका सबै ज्ञानहरू व्यर्थ हुन्छन्। त्यसै गरी ईश्वरको अस्तित्वलाई स्वीकार गरेर पनि यदि मानिसले आफूलाई ईश्वरको सेवामा लगाउँदैन भने उसका सबै प्रयासहरू निष्फल हुनजान्छन्। तसर्थ मानिसले क्रमशः आफूलाई कृष्णभावनाको स्तरसम्म तथा भक्तिको स्तरसम्म माथि उठाउनु पर्दछ। अनि मात्र उसले परमसिद्ध अवस्था प्राप्त गर्न सक्दछ, अन्यथा ऊ पूर्ण हुन सक्दैन।

**कामकारत** शब्द यहाँ अत्यन्त सार्थक छ। जानीजानी नियमको

उल्लङ्घन गर्ने व्यक्तिले कामको वशमा परेर कर्म गर्दछ। यस्तो गर्नु हुँदैन भन्ने थाहा भएर पनि उसले त्यस्तै कर्म गर्दछ। यसैलाई भनिन्छ स्वेच्छाचारी कर्म। यस प्रकारको कर्म गर्नु पर्दछ भन्ने जानेर पनि तदनुसार कर्म नगर्नेलाई स्वेच्छाचारी भनिन्छ। यस्ता व्यक्तिहरू अवश्य पनि भगवान्‌बाट दण्डित हुन्छन्। यस्ता व्यक्तिहरूले सिद्धि प्राप्त गर्न सक्दैनन्, जो मानव जीवनका लागि आवश्यक छ। मानव जीवन विशेष गरी आफैँलाई शुद्ध बनाउनका लागि हो तर जसले शास्त्रीय विधिविधानको पालन गर्दैन त्यसले न आफूलाई शुद्ध पार्न सक्दछ न जीवनमा वास्तविक सुख नै प्राप्त गर्न सक्दछ।

**तस्माच्छास्त्रं प्रमाणं ते कार्याकार्यव्यवस्थितौ ।**
**ज्ञात्वा शास्त्रविधानोक्तं कर्म कर्तुमिहार्हसि ॥ २४ ॥**

**तस्मात्** — तसर्थ; **शास्त्रम्** — शास्त्र; **प्रमाणम्** — प्रमाण; **ते** — तिम्रो; **कार्य** — कर्तव्य; **अकार्य** — निषिद्ध कर्म; **व्यवस्थितौ** — निश्चित गर्न; **ज्ञात्वा** — जानेर; **शास्त्र** — शास्त्रको; **विधान** — विधान; **उक्तम्** — भनिएको; **कर्म** — काम; **कर्तुम्** — गर्नु; **इह** — यो संसारमा; **अर्हसि** — तिमीले गर्नु पर्दछ।

**अतः मानिसले शास्त्र विधिअनुसार के कर्तव्य हो र के अकर्तव्य हो भन्ने बुझ्नु पर्दछ। शास्त्रीय विधिविधानलाई जानेर त्यसै अनुरूप कर्म गर्नु पर्दछ, जसले गर्दा ऊ क्रमशः माथि उठ्न सकोस्।**

**तात्पर्य :** पन्ध्रौँ अध्यायमा भनिएको छ— वेदका सारा विधिविधानहरू भगवान् श्रीकृष्णलाई बुझ्नका लागि हुन्। *भगवद्गीता* पढेर यदि कसैले भगवान् श्रीकृष्णलाई बुझ्दछ र कृष्णभावनामा अवस्थित भई आफूलाई भक्तिसेवामा समर्पित गर्दछ त्यसले वैदिक साहित्यमा दिइएका ज्ञानको पूर्णतालाई प्राप्त गर्दछ। भगवान् चैतन्य महाप्रभुले यस विधिलाई अत्यन्त सरल बनाउनुभएको छ। उहाँले मानिसहरूलाई केवल **हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे। हरे राम हरे राम राम राम हरे हरे** यो महामन्त्रको जप गर्ने, भगवान्‌को भक्ति गर्ने तथा भगवान्‌लाई भोग लगाएको उच्छिष्ट प्रसाद ग्रहण गर्ने उपदेश दिनुभयो। सम्पूर्ण रूपले भक्तिसेवामा प्रत्यक्ष संलग्न हुने व्यक्तिले समग्र वैदिक साहित्य बुझ्यो र त्यसको सम्पूर्ण सारतत्त्व पनि प्राप्त गर्‍यो भन्ने ठानिन्छ। कृष्णभावनामा वा भक्तिमा नलागेका साधारण मानिसहरूले अवश्य नै वेदकै निर्देशनअनुसार आफ्नो कर्तव्य र अकर्तव्यको निर्णय गर्नु पर्दछ। कुनै तर्क नगरी त्यही अनुरूप आफ्नो कर्तव्य पालन गर्नु पर्दछ। यसैलाई शास्त्रको नियम पालन गर्ने भनिन्छ। बद्ध जीवमा अपूर्ण इन्द्रिय, ठग्ने प्रवृत्ति, त्रुटि गर्ने प्रवृत्ति

र मोहग्रस्त हुने स्वभावजस्ता चार दोषहरू हुन्छन् तर शास्त्रमा यी दोषहरू हुँदैनन्। यिनै चार दोषले गर्दा बद्ध जीवले शास्त्रीय विधिविधानहरूको निर्माण गर्न सक्दैन। तसर्थ शास्त्रमा उल्लिखित विधिविधानहरू यी दोषहरूबाट मुक्त हुनु स्वाभाविक हो। त्यसैले ठुलाठुला महात्माहरू, आचार्य तथा महापुरुषहरू पनि कुनै परिवर्तन नगरी यी शास्त्रविधिलाई स्वीकार गर्दछन्।

भारतमा आध्यात्मिक विद्याका धेरै सम्प्रदायहरू छन्। ती सबैलाई प्राय: दुई श्रेणीमा राखिएको छ— निराकारवादी र साकारवादी। यी दुवै सम्प्रदायले वेदको नियमअनुसार आफ्नो जीवन बिताउने गर्दछन्। शास्त्रका नियमहरूको पालन नगरी कसैले पनि सिद्धि प्राप्त गर्न सक्दैन। अत: जसले शास्त्रको वास्तविक तात्पर्य बुझेको छ त्यो भाग्यशाली मानिन्छ।

मानव समाजको पतन हुने मुख्य कारण भन्नु नै भगवत्‌विद्याका नियमप्रति द्वेष राख्नु हो। यो मानव जीवनको सबैभन्दा ठुलो अपराध हो। त्यसैले भगवान्‌को भौतिक शक्ति अर्थात् मायाले तीनवटा तापका रूपमा हामीलाई सधैँ कष्ट भोगाइरहेका छन्। यो भौतिक शक्ति पनि प्रकृतिका तीनवटा गुणले बनेको छ। भगवान्‌लाई जान्ने ज्ञानको बाटो नखुल्दासम्म मानिसले सकेसम्म सत्त्वगुणमा रहने प्रयास गर्नु पर्दछ। सत्त्वगुणका स्तरसम्म उठ्न नसक्ने हो भने मानिसले आसुरी जीवनका कारणस्वरूप रजोगुण र तमोगुणको बन्धनमा रहनुपर्ने हुन्छ। यस्ता रजोगुणी र तमोगुणी व्यक्तिहरूले शास्त्रहरूको उपहास गर्दछन्। पवित्र व्यक्तिको निन्दा गर्दछन् तथा भगवद्‌ज्ञानलाई हाँसोमा उडाउने गर्दछन्। तिनीहरू गुरुको आदेशको उल्लङ्घन गर्दछन् र शास्त्रविधिसँग कुनै सरोकार राख्दैनन्। भक्तिको महिमा श्रवण गरेर पनि तिनीहरू भक्तितर्फ आकर्षित हुन सक्दैनन्। यसरी तिनीहरू आफ्नो तथाकथित उन्नतिका लागि आफ्नै किसिमको बाटो बनाउँदछन्। यी नै मानव जीवनका कतिपय दोषहरू हुन्, जसले जीवनलाई आसुरी प्रवृत्तितिर डोऱ्याउँदछ। यदि केही गरी मानिसले आफूलाई आध्यात्मिक उच्चताको मार्गमा अग्रसर गराउन सक्ने तथा उच्च स्तरसम्म पुऱ्याउन सक्ने उपयुक्त र प्रामाणिक सद्‌गुरुको मार्गनिर्देशन पाउन सक्यो भने उसको जीवन सफल हुन्छ।

यस प्रकार *श्रीमद्‌भगवद्‌गीता* ग्रन्थअन्तर्गत 'दैवी तथा आसुरी स्वभाव' शीर्षक सोह्रौँ अध्यायको भक्तिवेदान्त तात्पर्य समाप्त भयो।

## अध्याय-सत्र

# श्रद्धाका प्रकार

अर्जुन उवाच

**ये शास्त्रविधिमुत्सृज्य यजन्ते श्रद्धयान्विताः ।**
**तेषां निष्ठा तु का कृष्ण सत्त्वमाहो रजस्तमः ॥ १ ॥**

**अर्जुन उवाच** — अर्जुनले भने; **ये** — जो; **शास्त्रविधिम्** — शास्त्रको विधानलाई; **उत्सृज्य** — त्याग गरेर; **यजन्ते** — पूजा गर्दछन्; **श्रद्धया** — पूर्ण श्रद्धाले; **अन्विताः** — युक्त भएर; **तेषाम्** — उनीहरूको; **निष्ठा** — श्रद्धा; **तु** — तर; **का** — के; **कृष्ण** — हे कृष्ण; **सत्त्वम्** — सतोगुणी; **आहो** — अथवा अरू; **रजः** — रजोगुणी; **तमः** — तमोगुणी।

**अर्जुनले भने — हे कृष्ण! शास्त्रका नियमहरूको पालन नगरी आफ्नै कल्पनाअनुसार पूजा गर्नेहरूको स्थिति सत्त्वगुणी, रजोगुणी वा तमोगुणी कस्तो हुन्छ?**

**तात्पर्य :** चौधो अध्यायको उनन्चालीसौँ श्लोकमा भनिएको छ — कुनै विशेष प्रकारको पूजा गर्ने व्यक्ति क्रमशः ज्ञानको अवस्थामा पुग्दछ र अन्त्यमा उसले शान्ति तथा सम्पन्नताको सर्वोच्च सिद्धावस्था प्राप्त गर्दछ। सोह्रौँ अध्यायको निष्कर्षअनुसार जसले निष्ठापूर्वक शास्त्रका नियमको पालन गर्दछ त्यो **देव** हो र जसले शास्त्रका निर्देशनको पालन गर्दैन त्यो **असुर** हो, तर यदि कुनै निष्ठावान् व्यक्ति शास्त्रका उपदेशमा उल्लेख नभएका नियमहरूको पालन गर्दछ त्यसको स्थिति कस्तो हुन्छ? अर्जुनको यस्तो सन्देहमूलक प्रश्नको उत्तर भगवान् श्रीकृष्णले यहाँ दिनुभएको छ। कुनै मानिसलाई भगवान् मानेर श्रद्धा गर्ने र उसैको पूजा गर्ने व्यक्तिहरू सत्त्वगुणी, रजोगुणी वा तमोगुणी के हुन्? के यस्ता मानिसले जीवनमा सिद्धि प्राप्त गर्न सक्दछन्? तिनीहरूलाई वास्तविक ज्ञानमा अवस्थित हुन सम्भव छ? के तिनीहरूले उच्चतम सिद्ध अवस्था प्राप्त गर्दछन्? शास्त्रको विधिविधानलाई पालन नगर्ने तर कसैप्रति श्रद्धा गर्ने र देवी-देवता, ईश्वर तथा मानिसको पूजा गर्ने व्यक्तिले सफलता प्राप्त गर्न सक्दछन्? यस्तै प्रश्नहरू अर्जुनले भगवान् श्रीकृष्णका सामु राखे।

श्रीभगवानुवाच

**त्रिविधा भवति श्रद्धा देहिनां सा स्वभावजा ।**
**सात्त्विकी राजसी चैव तामसी चेति तां शृणु ॥ २ ॥**

**श्रीभगवानुवाच** — भगवान्ले भन्नुभयो; **त्रिविधा** — तीन प्रकारको; **भवति** — हुन्छ; **श्रद्धा** — श्रद्धा; **देहिनाम्** — देहधारीहरूको; **सा** — त्यो; **स्वभावजा** — प्रकृतिकै गुणअनुसार; **सात्त्विकी** — सत्त्वगुणी; **राजसी** — रजोगुणी; **च** — पनि; **एव** — निश्चय नै; **तामसी** — तमोगुणी; **च** — तथा; **इति** — यसरी; **ताम्** — त्यो; **शृणु** — मबाट सुन।

**भगवान्ले भन्नुभयो — शरीरधारी जीवले आर्जन गरेको गुणअनुसार उसको श्रद्धा पनि सत्त्वगुणी, रजोगुणी र तमोगुणी गरी तीन प्रकारको हुन्छ। अब यसबारेमा मबाट सुन।**

**तात्पर्य :** जसले शास्त्रका विधिनियमहरू जानेर पनि आलस्य र कार्यविमुखताले गर्दा ती विधिनियमको पालन गर्दैनन् तिनीहरू प्रकृतिका गुणद्वारा शासित हुन्छन्। तिनीहरूले आफ्ना पूर्वजन्मका सतोगुणी, रजोगुणी र तमोगुणी कर्मअनुसार एउटा विशेष प्रकारको स्वभाव प्राप्त गर्दछन्। जीव प्रकृतिका यी विभिन्न गुणहरूको संसर्गमा रहँदैआएको छ र यो क्रम चलि नै रहेको छ। प्रकृतिका संसर्गमा रहने हुनाले जीवले पनि प्रकृतिकै गुणअनुसार विभिन्न प्रकारका मनोवृत्ति आर्जन गर्दछ तर प्रामाणिक गुरुका सङ्गतमा रहेर शास्त्रका विधिविधानहरू पालन गर्दै गएमा यी मनोवृत्तिहरूमा परिवर्तन हुन सक्दछन्। फलतः मानिसले आफूलाई क्रमैसँग तमोगुणबाट रजोगुणमा, रजोगुणबाट सतोगुणमा परिवर्तन गर्न सक्दछ। भन्नुको तात्पर्य के हो भने, प्रकृतिको कुनै गुणमा गरिने अन्धविश्वासले मानिसलाई सिद्ध अवस्थासम्म पुऱ्याउन सहायता गर्दैन। मानिसले प्रामाणिक गुरुका सङ्गतमा रहेर बुद्धिपूर्वक बडो सावधान भएर चिन्तन-मनन गर्नु पर्दछ। यस प्रकार उसले आफूलाई प्रकृतिका उच्चतर गुणको स्थितिमा पुऱ्याउन सक्दछ।

**सत्त्वानुरूपा सर्वस्य श्रद्धा भवति भारत ।**
**श्रद्धामयोऽयं पुरुषो यो यच्छ्रद्धः स एव सः ॥ ३ ॥**

**सत्त्व अनुरूपा** — अस्तित्व अनुरूप; **सर्वस्य** — सबैको; **श्रद्धा** — निष्ठा (श्रद्धा); **भवति** — हुन्छ; **भारत** — हे भरतपुत्र; **श्रद्धा** — श्रद्धाले; **मयः** — युक्त; **अयम्** — यो; **पुरुष** — जीवात्मा; **यः** — जो; **यत्** — जुन; **श्रद्धः** — श्रद्धा; **स** — यस प्रकार; **एव** — निश्चय नै; **सः** — त्यो।

**हे भरतपुत्र! विभिन्न गुणअन्तर्गत आफ्नो-आफ्नो अस्तित्वअनुसार मानिसले एउटा विशेष प्रकारको श्रद्धा वृद्धि गरेको हुन्छ। त्यो विशेष श्रद्धा पनि उसले आर्जन गरेका गुणअनुसारकै हुन्छ।**

**तात्पर्य :** मानिस जस्तोसुकै होस् तर प्रत्येकमा एउटा विशेष किसिमको श्रद्धा रहेकै हुन्छ। तर उसले आर्जन गरेको स्वभावअनुसार उसको श्रद्धा सात्त्विक, राजसी र तामसी कुनै पनि प्रकारको हुन सक्दछ। आफ्नो श्रद्धा जस्तो छ त्यस्तै प्रकारको व्यक्तिसँग उसले सङ्गत गर्दछ। पन्ध्रौँ अध्यायमा वर्णन गरिएअनुसार वास्तविक तथ्य के हो भने, प्रत्येक जीव मूलतः परमेश्वरको अंश हो। त्यसैले ऊ मौलिक रूपमा प्रकृतिका सबै गुणहरूभन्दा पर छ, तर भगवान्सँग रहेको आफ्नो सुसम्बन्धलाई बिर्सेर जब ऊ बद्ध जीवन धारण गरेर प्रकृतिका सम्पर्कमा आउँदछ त्यस समय उसले भौतिक प्रकृतिका विभिन्न रूपहरूको संसर्गमा आफ्नो छुट्टै अवस्था निर्माण गर्दछ। यसरी प्राप्त गरेको कृत्रिम श्रद्धा र त्यसको अस्तित्व पनि भौतिक किसिमकै हुन्छ। मानिस जुनसुकै अवधारणा वा देहात्मबोधद्वारा प्रेरित भएको भए पनि ऊ मूल रूपमा निर्गुण छ र दिव्य छ। तसर्थ भगवान्सँग रहेको आफ्नो सुसम्बन्ध फेरि कायम गर्नका लागि मानिसले आफूलाई भौतिक संक्रमणहरूबाट शुद्ध गराउनु पर्दछ। निर्भय भएर कृष्णभावनामृतमा फर्कन सकिने यही मात्र एउटा मार्ग हो। कृष्णभावनामा अवस्थित भएका व्यक्तिका लागि सिद्धिका स्तरसम्म पुग्ने बाटो निश्चित भइसकेको हुन्छ। आत्मसाक्षात्कारको यो मार्गलाई नअपनाएमा मानिस निश्चय नै प्रकृतिको गुणका प्रभावद्वारा सञ्चालित हुन पुग्दछ।

यस श्लोकमा **श्रद्धा** शब्द अत्यन्त महत्त्वपूर्ण छ। श्रद्धा मूल रूपमा सत्त्व गुणबाट उत्पन्न हुन्छ। मानिसको श्रद्धा कुनै देवतामा हुन सक्दछ, कुनै कृत्रिम ईश्वरप्रति पनि हुन सक्दछ या कुनै मनोधर्ममा पनि हुन सक्दछ। तर बलियो श्रद्धा केवल सात्त्विक कर्मबाटै उत्पन्न हुन सक्दछ। भौतिक बद्ध जीवनमा कुनै पनि कार्य पूर्णतया शुद्ध हुन सक्दैनन्, सबै कर्महरू मिश्रित हुन्छन्। ती कर्महरू शुद्ध सात्त्विक हुँदैनन्। शुद्ध सत्त्व भने दिव्य हुन्छ। शुद्ध सत्त्वमा रहेर नै मानिसले भगवान्को वास्तविक स्वभावलाई बुझ्न सक्दछ। प्रकृतिका कुनै गुणबाट दूषित रहेसम्म मानिसको श्रद्धा पूर्ण सात्त्विक हुँदैन। प्रकृतिका दूषित गुणहरू मानिसका हृदयसम्म फैलिन पुग्दछन्। अतः कुनै विशेष गुणको सम्पर्कमा आएपछि हृदयमा पनि त्यसअनुसारकै श्रद्धा उत्पन्न हुन्छ। बुझ्नुपर्ने कुरा के हो भने, जसको हृदय सत्त्वगुणमा रहेको छ उसको श्रद्धा पनि सत्त्वगुणी हुन्छ। हृदय रजोगुणमा छ भने श्रद्धा पनि रजोगुणी हुन्छ र तमोगुणी हृदय हुनेहरूको श्रद्धा पनि तमोगुणी हुन्छ, कलुषित हुन्छ।

यस प्रकार हामी संसारमा विभिन्न प्रकारका श्रद्धाहरू देख्दछौँ र ती विविध किसिमका श्रद्धाअनुसार भिन्दा भिन्दै प्रकारका धर्महरू पनि छन्। धार्मिक श्रद्धाको वास्तविक सिद्धान्त शुद्ध सत्त्व गुणमा अडिएको हुन्छ तर हृदय दूषित भएकाले भिन्न प्रकारका धार्मिक सिद्धान्त देखिएका हुन्। विभिन्न प्रकारका श्रद्धाअनुसार पूजा पनि विभिन्न प्रकारका छन्।

**यजन्ते सात्त्विका देवान्यक्षरक्षांसि राजसाः ।**
**प्रेतान्भूतगणांश्चान्ये यजन्ते तामसा जनाः ॥ ४ ॥**

**यजन्ते** — पूजा गर्दछन्; **सात्विकाः** — सत्त्व गुणमा रहेका; **देवान्** — देवताहरूलाई; **यक्षरक्षांसि** — असुरगण; **राजसाः** — रजोगुणी व्यक्ति; **प्रेतान्** — मृतकहरूका आत्मा; **भूतगणान्** — भूतहरू; **च** — तथा; **अन्ये** — अरूहरू; **यजन्ते** — पूजा गर्दछन्; **तामसाः** — तमोगुणमा रहेका; **जनाः** — मानिसहरू।

**सत्त्वगुणी व्यक्तिहरू देवताको पूजा गर्दछन्, रजोगुणीहरू राक्षस र यक्षको पूजा गर्दछन अनि तमोगुणीहरू भूतप्रेतहरूको पूजा गर्दछन्।**

**तात्पर्य :** यस श्लोकमा भगवान्‌ले बहिर्मुखी क्रियाकलापअनुसार पूजा गर्नेहरूको विभिन्न प्रकारमा विभाजन गर्नुभएको छ। शास्त्रको आदेशअनुसार एक मात्र भगवान्‌को पूजा गर्नु पर्दछ। तर शास्त्रको उपदेश थाहा नपाउनेहरू वा त्यसमा श्रद्धा नराख्नेहरू आफ्नै विशिष्ट गुणको अवस्थाअनुसार विभिन्न वस्तुहरूको पूजा गर्दछन्। जो सत्त्वगुणी छन् तिनीहरूले देवताको पूजा गर्दछन्। ब्रह्मा, शिवलगायतका इन्द्र, चन्द्र तथा सूर्य आदि अन्य देवताहरू हुन्। देवताहरू धेरै छन्। सत्त्वगुणीहरू कुनै विशेष उद्देश्य पूर्तिका लागि कुनै विशेष देवताहरूको पूजा गर्दछन्। यसै गरी रजोगुणीहरू यक्ष तथा राक्षसको पूजा गर्दछन्। हामीलाई सम्झना छ, दोस्रो विश्वयुद्धको समयमा कलकत्ताका एकजना मानिसले हिटलरको पूजा गर्ने गर्दथ्यो। किनभने उसले त्यस युद्धकालमा कालोधन्दा गरेर प्रचुर धन-सम्पत्ति जम्मागरेको थियो, त्यसैले ऊ त्यो युद्धलाई धन्यवाद दिन्थ्यो। यसै गरी रजोगुणी र तमोगुणीहरू प्रायः कुनै शक्तिशाली व्यक्तिलाई ईश्वर मान्दछन्। उनीहरू के सोच्दछन् भने, कुनै पनि व्यक्तिलाई ईश्वर मानेर पूजा गर्न सकिन्छ र त्यसबाट पनि उस्तै फल पाइन्छ।

यहाँ स्पष्ट रूपमा के कुराको वर्णन गरिएको छ भने, रजोगुणीहरू आफैँ यस्ता देवताहरू सृष्टि गर्दछन् र तिनको पूजा गर्दछन्। तर जो तमोगुणी छन् वा अन्धकारमा छन् तिनीहरू भूतप्रेतको पूजा गर्दछन्। कहिलेकाहीँ मानिसहरू केही मृत व्यक्तिका चिहानमा पनि पूजा गर्दछन्। मैथुन कार्यलाई पनि तमोगुणी

कार्य मानिन्छ। यसै गरी भारतका सुदूर गाउँहरूमा भूतहरूको पूजा गर्ने प्रचलन छ। भारतका तल्ला जातका मानिसहरू जङ्गलमा गएर जुन रूखमा भूत छ भन्ने सुनेका हुन्छन् त्यही रूखको पूजा गर्ने र बलि चढाउने गरेको हामीले देखेका छौँ। यस प्रकारका कुनै पनि पूजाहरू वास्तवमा ईश्वरपूजा होइनन्। ईश्वरको पूजा शुद्ध सात्विक स्थितिमा रहेका व्यक्तिले गर्दछन्। *श्रीमद्भागवत्* (४.३.२३)मा **सत्त्वं विशुद्धं वसुदेव शब्दितम्** भनिएको छ। अर्थात् शुद्ध सत्त्वगुणी व्यक्ति वासुदेवको पूजा गर्दछ। तात्पर्य के हो भने, प्रकृतिका भौतिक गुणहरूबाट पूर्णतया शुद्ध भइसकेको र दिव्य पदमा पुगेको व्यक्तिले मात्र भगवान्को पूजा गर्न सक्दछ।

निराकारवादीहरू सत्त्वगुणमा अवस्थित मानिन्छन् र तिनीहरू पाँच प्रकारका देवताहरूको पूजा गर्दछन्। भौतिक जगत्मा तिनीहरू दर्शनमूलक विष्णुका रूपमा चिनिने निराकार विष्णुको पूजा गर्दछन्। विष्णु, भगवान्को विस्तारित रूप हुनुहुन्छ तर निराकारवादीहरू भगवान्मा विश्वास नगर्ने हुँदा विष्णुलाई निराकार ब्रह्मकै अर्को अंशका रूपमा देख्दछन्। यसै गरी तिनीहरू ब्रह्माजीलाई रजोगुणको निराकार स्वरूप मान्दछन्। कहिलेकाहीँ तिनीहरू पाँच प्रकारका पूजनीय देवताहरूको पनि वर्णन गर्दछन् तर निराकार ब्रह्मलाई नै वास्तविक सत्य मान्नेहुँदा अन्त्यमा गएर तिनीहरूले सम्पूर्ण पूजनीय वस्तुहरूलाई नै त्यागिदिन्छन्। निष्कर्षमा के भन्न सकिन्छ भने, दिव्य स्वभाव भएका व्यक्तिको सङ्गतमा रहनाले प्रकृतिका विविध गुणका प्रभावलाई पनि शुद्ध पार्न सकिन्छ।

**अशास्त्रविहितं घोरं तप्यन्ते ये तपो जनाः ।**
**दम्भाहंकारसंयुक्ताः कामरागबलान्विताः ॥ ५ ॥**
**कर्षयन्तः शरीरस्थं भूतग्राममचेतसः ।**
**मां चैवान्तः शरीरस्थं तान्विद्ध्यासुरनिश्चयान् ॥ ६ ॥**

**अशास्त्र** — शास्त्रमा नभएको; **विहितम्** — निर्देशित; **घोरम्** — अरूलाई क्षति पुग्ने; **तप्यन्ते** — तप गर्दछन्; **ये** — जो; **तपः** — तपस्या; **जनाः** — मानिसहरू; **दम्भ** — घमण्डले; **अहंकार** — तथा अहङ्कारले; **संयुक्ताः** — लागेका; **काम** — काम (वासना); **राग** — आसक्ति; **बल** — बलपूर्वक; **अन्विताः** — प्रेरित; **कर्शयन्तः** — कष्ट दिँदै; **शरीरस्थम्** — शरीरमा रहेका; **भूतग्रामम्** — भौतिक तत्त्वको संयोग; **अचेतसः** — भ्रमित मनोवृत्ति भएका; **माम्** — मलाई; **च** — पनि; **एव** — निश्चय नै; **अन्तः** — भित्र; **शरीरस्थम्** — शरीरमा रहने; **तान्** — तिनीहरूलाई; **विद्धि** — जान; **आसुर निश्चयान्** — निश्चय नै असुर हुन् भन्ने।

**जो दम्भ र अहङ्कारले अभिभूत भएर शास्त्रविरुद्ध कठोर व्रत एवं तपस्या गर्दछन्, जुन काम र आसक्तिद्वारा प्रेरित छन् र जुन भौतिक शरीर तथा शरीरभित्र रहने परमात्मालाई कष्ट दिन्छन्, त्यस्ता मूर्खहरू असुर भनिन्छन्।**

**तात्पर्य :** केही मानिसहरू शास्त्रमै नभएका व्रत र तपस्याहरूको वर्णन गर्दछन्। उदाहरणका लागि कुनै स्वार्थ पूरा गर्नु तथा शुद्ध राजनैतिक कारणले उपवास गर्ने कुराको उल्लेख शास्त्रमा छैन। शास्त्रमा आध्यात्मिक उन्नतिका लागि उपवास गर्ने विधिको उल्लेख छ, कुनै राजनैतिक तथा सामाजिक उद्देश्यका लागि होइन। *भगवद्गीताअनुसार* जो यस्तो तपस्या गर्दछ त्यो निश्चय नै असुर हो। तिनीहरूका त्यस्ता कार्य शास्त्रविरुद्ध छन् र सामान्य जनताका हितमा छैनन्। वास्तवमा घमण्डले, अहङ्कारले, काम तथा भौतिक भोगप्रति आसक्ति भएका कारणले मानिसहरू यस्तो गर्दछन्। यस्ता कार्यले शरीरका भौतिक तत्त्व तथा अङ्गहरूलाई मात्र होइन शरीरमा रहने परमात्मालाई पनि कष्ट पुग्दछ। कुनै राजनैतिक उद्देश्य राखेर गरिएको अनाधिकृत उपवास र तपस्याले अरू मानिसहरूको समेत शान्ति भङ्ग हुने कुरा निश्चित छ। वैदिक साहित्यमा पनि यस्ता कुराको उल्लेख छैन।

आसुरी प्रवृतिको मानिसले मात्र यस्तो कार्य गरेपछि आफ्नो शत्रु वा विपक्षीलाई आफ्नो इच्छा पूरा गराउन बाध्य गर्न सकिन्छ भन्ने सोचाइ राख्दछ। कहिलेकाहीँ यस्तो उपवासबाट मानिस मर्न पनि सक्दछ। अतः यस्ता कामहरू भगवान्बाट स्वीकृत हुँदैनन्। भगवान् भन्नु हुन्छ, यस्ता काममा संलग्न हुनेहरू असुर हुन्। वैदिक शास्त्रका आदेशको उल्लङ्घन गर्ने यस्ता कर्मको प्रदर्शनले भगवान्को अपमान मात्र हुन्छ। यस सम्बन्धमा यो **अचेतसः** शब्द निकै सार्थक देखिन्छ। सामान्य मानसिक स्थिति हुने मानिसले शास्त्रको आदेश मान्नु पर्दछ। जो यस्तो अवस्थामा छैनन् तिनीहरूले शास्त्रको उपेक्षा र अवज्ञा गर्दछन् र आफ्नै किसिमका तपस्याका विधिहरू बनाउँदछन्। आसुरी व्यक्तिहरूको अन्तिम परिणति कस्तो हुन्छ भन्ने कुरा मानिसले सधैँ सम्झिनु पर्दछ। यसको वर्णन पहिलेका अध्यायमा पनि गरिएको छ। यस्ता व्यक्तिहरूलाई भगवान्ले आसुरी व्यक्तिकै गर्भमा जन्म लिन बाध्य गराउनु हुन्छ। फलस्वरूप तिनीहरूले जन्म-जन्मान्तरसम्म भगवान्सँग रहेको सम्बन्धबाट अनभिज्ञ रहेर आसुरी जीवन बिताउनु पर्दछ। तर कुनै गुरुले तिनीहरूलाई मार्गदर्शन गर्दै वैदिक ज्ञानको बाटोमा हिँडाए भने त्यस्ता भाग्यमानी व्यक्तिहरू भवबन्धनबाट मुक्त भएर अन्त्यमा परमलक्ष्य प्राप्त गर्न सक्षम हुन्छन्।

**आहारस्त्वपि सर्वस्य त्रिविधो भवति प्रियः ।
यज्ञस्तपस्तथा दानं तेषां भेदमिमं शृणु ॥ ७॥**

आहारः — आहार; **तु** — निश्चय नै; **अपि** — पनि; **सर्वस्य** — सबैको; **त्रिविधः** — तीन प्रकारको; **भवति** — हुन्छ; **प्रियः** — प्यारो; **यज्ञः** — यज्ञ; तपः — तपस्या; **तथा** — पनि; **दानम्** — दान; **तेषाम्** — तिनीहरूको; **भेदम्** — भेद; **इमम्** — यो; **शृणु** — सुन।

**प्रत्येक व्यक्तिलाई चाहिने भोजन पनि प्रकृतिको गुणअनुसार तीन प्रकारका हुन्छन्। यही कुरा यज्ञ, तपस्या र दानमा पनि लागू हुन्छ। अब तिनका बीचमा हुने भिन्नताका विषयमा सुन।**

**तात्पर्य :** प्रकृतिका भिन्न भिन्न गुणका अवस्थाअनुसार भोजन, यज्ञ, तपस्या र दानमा पनि भेद हुन्छन्। ती सबै एउटै स्तरका हुँदैनन्। विश्लेषणात्मक रूपमा जसले कुन गुणमा के गर्नु पर्दछ भन्ने जानेको छ तिनीहरू नै वास्तवमा बुद्धिमान् हुन्। तर जसले सबै प्रकारका यज्ञ, भोजन, दानलाई समान ठान्दछन् र तिनमा कुनै अन्तर देख्दैनन्, ती अज्ञानी हुन्। मानिसले आफूले चाहना गरेको काम गर्न सक्दछ र त्यसैबाट सिद्धि प्राप्त गर्न सक्दछ भनी बहस गर्ने धर्मप्रचारकहरू पनि छन्। तर शास्त्रको आदेशअनुसार कर्म नगर्ने यस्ता मार्गदर्शकहरू मूर्ख हुन्। यिनीहरूले मनपरी नियम बनाएर साधारण मानिसलाई भ्रमित पार्ने काम गर्दछन्।

**आयुः सत्त्वबलारोग्यसुखप्रीतिविवर्धनाः ।
रस्याः स्निग्धाः स्थिरा हृद्या आहाराः सात्त्विकप्रियाः ॥ ८॥**

**आयुः** — जीवन अवधि; **सत्त्व** — अस्तित्व; **बल** — बल; **आरोग्य** — स्वास्थ्य; **सुख** — सुख; **प्रीति** — सन्तुष्टि; **विवर्धनाः** — बढाउने; **रस्याः** — रसिला; **स्निग्धाः** — चिल्लो; **स्थिराः** — स्थायी; **हृद्याः** — हृदयलाई आनन्द दिने; **आहाराः** — भोजन; **सात्त्विक** — सत्त्वगुणी; **प्रियाः** — स्वादिष्ट।

**जुन भोजनले आयु बढाउँदछ, जीवनलाई शुद्ध पार्दछ, बल, स्वास्थ्य, सुख तथा तृप्ति प्रदान गर्दछ त्यस्तो भोजन सतोगुणी व्यक्तिहरूलाई मन पर्दछ। यस प्रकारको भोजन रसमय हुन्छ, स्निग्ध हुन्छ, हितकारी र स्वास्थ्यप्रद हुन्छ र हृदयलाई आनन्द दिने किसिमको हुन्छ।**

**कट्वम्ललवणात्युष्णतीक्ष्णरूक्षविदाहिनः ।
आहारा राजसस्येष्टा दुःखशोकामयप्रदाः ॥ ९॥**

**कटु** — तीतो; **अम्ल** — अमिलो; **लवण** — नुनिलो; **अति उष्ण** — अत्यन्त

तातो; **तीक्ष्ण** — पीरो; **रूक्ष** — सुख्खा; **विदाहिनः** — पोल्ने खालको; **आहाराः** — भोजन; **राजसस्य** — रजोगुणीलाई; **इष्टा** — स्वादिष्ट; **दुःख** — दुःख; **शोक** — शोक; **आमय** — रोग; **प्रदाः** — उत्पन्न गर्ने।

**अत्यधिक तीतो, अमिलो, नुनिलो, तातो, पीरो, सुख्खा तथा तातोपन उत्पन्न गराउने भोजन रजोगुणी व्यक्तिलाई मन पर्दछ। यस्तो भोजनले दुःख, शोक तथा रोग उत्पन्न गराउँदछ।**

**यातयामं गतरसं पूति पर्युषितं च यत् ।**
**उच्छिष्टमपि चामेध्यं भोजनं तामसप्रियम् ॥ १० ॥**

**यातयामम्** — खानुभन्दा तीन घण्टा पहिले पकाएको; **गतरसम्** — स्वादरहित; **पूति** — दुर्गन्धयुक्त; **पर्युषितम्** — बिग्रिएको; **च** — पनि; **यत्** — जो; **उच्छिष्टम्** — अरूले खाएर छोडेको जूठो; **अपि** — पनि; **च** — तथा; **अमेध्यम्** — अस्पृश्य वा अपवित्र; **भोजनम्** — भोजन; **तामस** — तमोगुणीलाई; **प्रियम्** — प्यारो लाग्दछ।

**ग्रहण गर्नुभन्दा तीन घण्टा पहिले पकाइएको, स्वादरहित, बिग्रिएको, सडेको र जूठो तथा अस्पृश्य वा अपवित्र खानेकुरा तमोगुणी मानिसलाई प्रिय लाग्दछ।**

**तात्पर्य :** आहारको उद्देश्य आयु बढाउनु, मस्तिष्कलाई शुद्ध पार्नु तथा शरीरलाई शक्ति पुऱ्याउनु हो। यही यसको उद्देश्य हो। प्राचीन कालका महापुरुषहरू दूधका परिकार, चिनी, चामल, गहूँ, फलफूल तरकारी आदि आयुवर्द्धक तथा बलवर्द्धक आहार चयन गर्दथे। यस्ता आहार सतोगुणी व्यक्तिलाई मन पर्दछन्। यस्तै भुटेको मकै र गुँड आदि केही पदार्थहरू स्वयम् रुचिकर नभए पनि दूध या अन्य पदार्थसँग मिलाएर खाने हो भने स्वादिष्ट हुन्छन्। यी भोजनहरू स्वभावैले शुद्ध छन्। यी खाद्यहरू मासु र मदिराजस्ता अस्पृश्य वा अपवित्र वस्तुभन्दा सर्वथा भिन्न छन्। आठौँ श्लोकमा भनिएका चिल्लो पदार्थसँग पशुको वध गरेर निकालिने बोसोको कुनै सम्बन्ध छैन। पशुमा हुने बोसो नै दूधका रूपमा उपलब्ध हुन्छ, जसलाई सम्पूर्ण भोजनमा सबैभन्दा बढी चमत्कारी भोजन मानिन्छ। दूध, नौनी, चीज र यस्तै परिकारहरूबाट पनि बोसोमा हुने तत्त्व प्राप्त गर्न सकिन्छ। अतः निर्दोष पशुलाई मार्नुपर्ने कुनै आवश्यकता छैन। पशुलाई मार्ने काम त पाशविक मनोवृत्ति भएका मानिसहरू मात्र गर्दछन्। आवश्यक पर्ने बोसो दूधबाट प्राप्त गर्न सकिन्छ र यो नै बोसोतत्त्व प्राप्त गर्ने सभ्य तरिका हो। पशुवध अत्यन्त अमानवीय कार्य हो। जहाँसम्म प्रोटिनको कुरा छ, मटर, दाल, दलिया आदि पदार्थबाट प्रशस्त प्रोटिन पाइन्छ।

तीतो, पीरो, चर्को, धेरै तातो, रातो खुर्सानी मिसाएको भोजन राजसी हो र राजसिक भोजनले आमाशयको श्लेष्मा घटाएर रोग उत्पन्न गर्दछ र कष्ट दिन्छ। बासी भोजन स्वतः तामसिक हुन्छ। खानुभन्दा तीन घण्टा पहिल्यै पकाएको भोजन स्वतः तामसिक हुन्छ। तर भगवान्लाई चढाएको प्रसाद तामसिक हुँदैन। सडेगलेका खानेकुराबाट आउने दुर्गन्धले केवल तामसिक मानिसलाई मात्र आकर्षित गर्दछ तर सात्त्विक पुरुषहरूलाई यसले विरक्त पार्दछ।

भगवान्लाई अर्पण गरेको प्रसाद वा साधुसन्तहरू र विशेष गरी गुरुद्वारा ग्रहण गरिएको जूठो भोजन मात्र खानयोग्य हुन्छ। यसबाहेक अरू सबै जूठो खानेकुरालाई तामसिक मानिन्छ र यस्तो भोजनले सङ्क्रामक रोग बढाउँदछ। यस्तो भोजन तमोगुणी मानिसलाई स्वादिष्ट लागे पनि सत्त्वगुणी मानिसहरू यसलाई खाँदैनन् र खान पनि चाहँदैनन्। सर्वोत्तम भोजन भगवान्लाई अर्पण गरिएको भोजनको उच्छिष्ट नै हो। *भगवद्गीतामा* भगवान्ले भन्नुभएको छ— भक्तिपूर्वक अर्पण गरिएको रोटी तरकारी तथा दूधका व्यञ्जनहरू उहाँले स्वीकार गर्नु हुन्छ।

**पत्रं, पुष्पं, फलं, तोयं** जे भए पनि प्रेम र भक्तिपूर्वक अर्पण गरिएको वस्तु भगवान्ले स्वीकार गर्नु हुन्छ। अतः भक्ति र प्रेम नै प्रमुख कुरा हो। अनि प्रसाद पनि विशेष प्रकारले तयार गर्नुपर्ने कुराको उल्लेख गरिएको छ। शास्त्रीय निर्देशनअनुसार नै भोजन तयार गरिन्छ र उक्त भोजन भगवान्लाई अर्पण गरिन्छ भने जति घण्टा पहिले बनाइएको भए पनि त्यो ग्रहणयोग्य हुन्छ, किनभने त्यस्तो भोजन दिव्य हुन्छ। तसर्थ भोजनलाई नसड्ने, खानयोग्य र सबैलाई रुचिकर बनाउनु छ भने सर्वप्रथम भगवान्लाई अर्पण गर्नु पर्दछ।

**अफलाकाङ्क्षिभिर्यज्ञो विधिदिष्टो य इज्यते ।**
**यष्टव्यमेवेति मनः समाधाय स सात्त्विकः ॥ ११॥**

**अफल आकांक्षिभिः** — फलको इच्छा नहुनेहरू; **यज्ञः** — यज्ञ; **विधिदिष्टः** — शास्त्रानुसार; **यः** — जो; **इज्यते** — सम्पन्न गरिन्छन्; **यष्टव्यम्** — सम्पन्न गरिनु पर्दछ; **एव** — निश्चय नै; **इति** — यसरी; **मनः** — मनमा; **समाधाय** — स्थिर गरेर; **सः** — त्यो; **सात्त्विकः** — सत्त्वगुणी।

**फलको इच्छा नराखी केवल कर्तव्य सम्झेर शास्त्रका निर्देशनअनुसार गरिने यज्ञ नै सात्त्विक यज्ञ हो।**

**तात्पर्य :**सामान्यतया मनको कुनै उद्देश्य पूरा गर्ने अभिप्रायले नै यज्ञ गरिन्छ। तर यहाँ भनेअनुसार यज्ञ भन्ने कुरा यस्ता कुनै पनि इच्छा नराखी सम्पन्न गर्नु पर्दछ। अर्थात् केवल कर्तव्य सम्झेर यज्ञ गरिनु पर्दछ। उदाहरणका

लागि मन्दिर, गिर्जाघर आदि ठाउँमा पनि यज्ञानुष्ठानहरू गरिन्छन् र यस्ता यज्ञहरू सामान्यतया भौतिक लाभको चाहना राखेर गरिन्छन्। अतः सकाम भावले गरिने यी यज्ञहरू सतोगुणी होइनन्। मानिसले कर्तव्य सम्झेर मन्दिर या गिर्जाघरमा जानु पर्दछ र भगवान्लाई नमस्कार गरेर फूल, प्रसादहरू अर्पण गर्नु पर्दछ। कतिपय मानिसहरू केवल ईश्वरको पूजा गर्नका लागि मात्र मन्दिर जानु व्यर्थ छ भन्ने सोच्दछन् तर शास्त्रमा आर्थिक लाभका निमित्त पूजा गर्ने आदेश दिइएको छैन। केवल श्रीविग्रहको दर्शन गर्नका लागि मन्दिरमा जानु पर्दछ। यसले मानिसलाई सतोगुणमा पुऱ्याउँदछ। शास्त्रको आज्ञा पालन गर्नु र भगवान्लाई आदर-सम्मान गर्नु प्रत्येक सभ्य मानिसको कर्तव्य हो।

**अभिसन्धाय तु फलं दम्भार्थमपि चैव यत् ।**
**इज्यते भरतश्रेष्ठ तं यज्ञं विद्धि राजसम् ॥ १२ ॥**

**अभिसन्धाय** — इच्छा राखेर; **तु** — तर; **फलम्** — फलको; **दम्भ** — घमण्ड; **अर्थम्** — का लागि; **अपि** — पनि; **च** — तथा; **एव** — निश्चय नै; **यत्** — जे; **इज्यते** — गरिन्छ; **भरतश्रेष्ठ** — हे भरत वंशमा श्रेष्ठ; **तम्** — त्यस; **यज्ञम्** — यज्ञलाई; **विद्धि** — जान; **राजसम्** — रजोगुणी।

**हे भरतश्रेष्ठ! अहङ्कारतृप्तिका लागि कुनै भौतिक लाभको इच्छा राखेर गरिने यज्ञ राजसी हो भन्ने जान।**

**तात्पर्य :** स्वर्गलोक प्राप्त गर्ने इच्छाले वा केही भौतिक लाभ प्राप्त गर्ने इच्छाले पनि कहिलेकाहीँ यज्ञानुष्ठानहरू गरिन्छन् तर यस किसिमको भावना राखेर गरिने यज्ञ-अनुष्ठानहरू राजसी मानिन्छन्।

**विधिहीनमसृष्टान्नं मन्त्रहीनमदक्षिणम् ।**
**श्रद्धाविरहितं यज्ञं तामसं परिचक्षते ॥ १३ ॥**

**विधिहीनम्** — शास्त्रको निर्देशनबिना; **असृष्ट अन्नम्** — प्रसाद वितरण नगरी; **मन्त्रहीनम्** — वैदिक मन्त्रको उच्चारण नगरी; **अदक्षिणम्** — पुरोहितलाई दक्षिणा नदिई; **श्रद्धा** — श्रद्धा; **विरहितम्** — विहीन; **यज्ञम्** — यज्ञलाई; **तामसम्** — तमोगुणी; **परिचक्षते** — मानिन्छ।

**शास्त्रीय निर्देशनको पालन नगरी, प्रसाद वितरण नगरी, वैदिक मन्त्रहरूको उच्चारण नगरी र पुरोहितलाई दक्षिणा नदिई श्रद्धारहित तरिकाले गरिने यज्ञलाई तामसी यज्ञ भनिन्छ।**

**तात्पर्य :** तमोगुणमा श्रद्धा राख्नु नै वास्तवमा अश्रद्धा हो। कहिलेकाहीँ

मानिसहरू धन आर्जन गर्नका लागि देवताको पूजा गर्दछन् र शास्त्रको अवहेलना गरेर त्यो धन मनोरञ्जनमा खर्च गर्दछन्। यस्ता धार्मिक अनुष्ठानलाई सात्त्विक मान्न सकिँदैन। त्यस्ता यज्ञहरू सबै तामसी हुन्छन्। तिनबाट तामसी मनोवृत्ति विकसित हुन्छ र त्यस्तो तामसी मनोवृत्तिबाट मानव समाजलाई कुनै लाभ हुँदैन।

**देवद्विजगुरुप्राज्ञपूजनं शौचमार्जवम् ।**
**ब्रह्मचर्यमहिंसा च शारीरं तप उच्यते ॥ १४ ॥**

देव — परमेश्वरको; **द्विज** — ब्राह्मणहरू; **गुरु** — गुरु; **प्राज्ञ** — पूजनीय व्यक्तित्वहरू; **पूजनम्** — पूजा; **शौचम्** — पवित्रता; **आर्जवम्** — सरलता; **ब्रह्मचर्यम्** — ब्रह्मचर्य; **अहिंसा** — अहिंसा; **च** — पनि; **शारीरम्** — शरीरसम्बन्धी; **तपः** — तपस्या; **उच्यते** — भनिन्छ।

**परमेश्वर, ब्राह्मण, गुरु, मातापिता आदि गुरुजनको पूजा गर्नु र पवित्रता, सरलता, ब्रह्मचर्य र अहिंसाको पालन गर्नु शारीरिक तपस्या हो।**

**तात्पर्य :** भगवान्‌ले यहाँ विविध प्रकारका तपस्याको व्याख्या गर्ने क्रममा सर्वप्रथम शारीरिक तपस्याको वर्णन गर्नुभएको छ। मानिसले प्रथमतः ईश्वर या देवतालाई, सुयोग्य ब्राह्मणहरूलाई, गुरुलाई अनि बुबाआमा आदि मान्यजनलाई र वैदिक ज्ञानमा पारङ्गत व्यक्तिहरूलाई आदर-सत्कार गर्न सिक्नु पर्दछ। मानिसले आन्तरिक तथा बाह्यरूपमा आफूलाई शुद्ध पार्ने अभ्यास गर्नु पर्दछ र व्यवहारमा सरल हुनु पर्दछ। शास्त्रहरूले अनुमोदन नगरेका कुनै पनि कार्य गर्नु हुँदैन। वैवाहिक जीवनबाहेकको अतिरिक्त यौनसम्बन्धलाई त्याग्नु पर्दछ। किनभने शास्त्रले विवाहित दम्पतीबीचको यौन सम्बन्धबाहेक अन्य यौन सम्बन्धलाई अनुमोदन गर्दैन। नियन्त्रित वैवाहिक यौनसम्बन्धलाई ब्रह्मचर्य मान्न सकिन्छ। यी सबै शारीरिक तपस्या हुन्।

**अनुद्वेगकरं वाक्यं सत्यं प्रियहितं च यत् ।**
**स्वाध्यायाभ्यसनं चैव वाङ्मयं तप उच्यते ॥ १५ ॥**

**अनुद्वेगकरम्** — क्षुब्ध वा उत्तेजित नपार्ने; **वाक्यम्** — शब्दहरू; **सत्यम्** — सत्य; **प्रिय** — प्यारो; **हितम्** — लाभप्रद; **च** — पनि; **यत्** — जुन; **स्वाध्याय** — वैदिक अध्ययन; **अभ्यसनम्** — अभ्यास; **च** — पनि; **एव** — निश्चय नै; **वाङ्मयम्** — वाणीको; **तपः** — तपस्या; **उच्यते** — भनिन्छ।

**साँचो, प्रीतिकर, हितकारी तथा अरूलाई क्षुब्ध नपार्ने वचन बोल्नु र वैदिक साहित्यको नियमित स्वाध्याय गर्नु वाणीको तपस्या हो।**

**तात्पर्य :** मानिसले अर्काको मनलाई क्षुब्ध बनाउने वा उत्तेजित पार्ने वचन बोल्नु हुँदैन। शिक्षकले आफ्ना विद्यार्थीहरूलाई उपदेश दिँदा साँचो साँचो बोल्न सक्दछ तर आफ्ना विद्यार्थीबाहेक अरूसँग बोल्नुपर्दा तिनीहरूको मनलाई क्षुब्ध पार्ने कटुसत्य नबोल्नु नै राम्रो हुन्छ। यही हो वचनको तपस्या। कहिल्यै पनि व्यर्थ प्रलाप (व्यर्थका कुराहरू) बोल्नु हुँदैन। जे बोलिन्छ त्यो शास्त्रसम्मत हुनु पर्दछ। यही नै आध्यात्मिक क्षेत्रमा बोल्ने विधि हो। शास्त्रीय प्रमाणहरूको उद्धरण गरेर तत्काल आफ्नो भनाइको पुष्टि गर्नु पर्दछ। साथ-साथै बोलेको कुरा मीठो लाग्ने कर्णप्रिय पनि हुनु पर्दछ। यस्तो बोलीवचन र व्यवहारबाट मात्र मानिसले आफ्नो सर्वोच्च उपलब्धि प्राप्त गर्न सक्दछ र यसबाट मानव समाजको उत्थान हुन सक्दछ। वैदिक साहित्यको भण्डार विशाल छ र यसको अध्ययन गर्नु अनिवार्य छ। यसैलाई वचनको तपस्या भनिन्छ।

**मनःप्रसादः सौम्यत्वं मौनमात्मविनिग्रहः ।**
**भावसंशुद्धिरित्येतत्तपो मानसमुच्यते ॥ १६ ॥**

**मनःप्रसादः** — मनको प्रसन्नता; **सौम्यत्वम्** — अरूप्रति द्वैतभाव वा भेदभाव नभएको; **मौनम्** — मौनता; **आत्म** — आफ्नो; **विनिग्रहः** — नियन्त्रण; **संयम**; **भाव** — आफ्नो स्वभाव; **संशुद्धिः** — शुद्धता; **इति** — यसरी; **एतत्** — यो; **तपः** — तपस्या; **मानसम्** — मनको; **उच्यते** — भनिन्छ।

**सन्तोष, सरलता, गाम्भीर्यता, आत्मसंयम र जीवनको शुद्धता, यी सबै मनका तपस्या हुन्।**

**तात्पर्य :** मनलाई संयमित बनाउनुको अर्थ यसलाई इन्द्रियतृप्तिबाट अलग राख्नु हो। मनलाई सधै परोपकारकै विषयमा सोच्ने प्रशिक्षण दिनु पर्दछ। विचारको गम्भीरता नै मनका लागि सर्वोत्तम प्रशिक्षण हो। मानिस कृष्णभावनामृतबाट विचलित हुनु हुँदैन र इन्द्रियभोगबाट सधैँ टाढा रहनु पर्दछ। आफ्नो स्वभावलाई शुद्ध बनाउनु नै कृष्णभावनाभावित हुनु हो। मनलाई इन्द्रियभोगको विचारबाट अलग राखेपछि मात्र मानसिक प्रसन्नता प्राप्त गर्न सकिन्छ। इन्द्रियभोगका बारेमा जति सोच्यो उति यो मन अतृप्त भइरहन्छ। यस वर्तमान युगमा अनावश्यक रूपले मनलाई विभिन्न प्रकारका इन्द्रियतृप्ति गर्ने साधनमा लगाइरहनु व्यर्थ छ, किनभने यसबाट मानसिक सन्तुष्टि प्राप्त

गर्नु सम्भव छैन। त्यसकारण मनलाई रमाइला रमाइला कथाहरूले भरिएका महाभारत, पुराण आदि वैदिक साहित्यतिर लगाउनु नै सन्तुष्टिको सर्वश्रेष्ठ विधि हो। यी साहित्यमा अन्तर्निहित ज्ञानबाट कसैले पनि लाभ लिन सक्दछ र आफूलाई शुद्ध पार्न सक्दछ। मानिसको मन द्वैतभावरहित हुनु पर्दछ र सबैको कल्याण सोच्ने हुनु पर्दछ। निरन्तर आत्मसाक्षात्कारका विषयमा सोच्नु नै मौन रहनु हो। यस अर्थमा कृष्णभावनाभावित व्यक्ति पूर्णतया मौनसाधनामा रहन्छ। मानसिक संयमको अर्थ पनि मनलाई इन्द्रियभोगबाट अलग राख्नु हो। मानिसले निष्कपट वा सरल व्यवहार गर्नु पर्दछ र यसरी नै उसले आफ्नो अस्तित्वलाई शुद्ध बनाउन सक्दछ। यी सबै गुणहरू मनको तपस्या अन्तर्गत पर्दछन्।

**श्रद्धया परया तप्तं तपस्तत्त्रिविधं नरैः ।**
**अफलाकाङ्क्षिभिर्युक्तैः सात्त्विकं परिचक्षते ॥१७॥**

**श्रद्धया** — श्रद्धासहित; **परया** — दिव्य; **तप्तम्** — सम्पन्न गरिएको; **तपः** — तपस्या; **तत्** — त्यो; **त्रिविधम्** — तीन प्रकारका; **नरैः** — मानिसहरूद्वारा; **अफल आकाङ्क्षिभिः** — फलको इच्छा नराख्नेहरू; **युक्तैः** — संलग्न रहेका; **सात्त्विकम्** — सत्त्वगुणमा; **परिचक्षते** — भनिन्छ।

**भौतिक लाभको चाहना नभएका र सधैँ परमेश्वरको चिन्तनमा संलग्न रहेका मानिसहरूद्वारा दिव्य श्रद्धासहित सम्पन्न गरिने यी तीन प्रकारका तपस्यालाई सात्त्विक तपस्या भनिन्छ।**

**सत्कारमानपूजार्थं तपो दम्भेन चैव यत् ।**
**क्रियते तदिह प्रोक्तं राजसं चलमध्रुवम् ॥१८॥**

**सत्कार** — आदर; **मान** — सम्मान; **पूजा** — र पूजा; **अर्थम्** — का लागि; **तपः** — तपस्या; **दम्भेन** — घमण्डले; **च** — पनि; **एव** — निश्चय नै; **यत्** — जुन; **क्रियते** — गरिन्छ; **तत्** — त्यो; **इह** — यो संसारमा; **प्रोक्तम्** — भनिन्छ; **राजसम्** — रजोगुणी; **चलम्** — क्षणिक; **अध्रुवम्** — क्षणिक।

**आदर-सम्मान र पूजा प्राप्त गर्नका लागि अहङ्कारपूर्वक सम्पन्न गरिएको तपस्यालाई राजसी तपस्या भनिन्छ। यस्तो तपस्या क्षणिक र अस्थिर हुन्छ।**

**तात्पर्य :** कहिलेकाहीँ मानिसहरूलाई आफूतिर आकर्षित गर्ने र अरूबाट आदर-सम्मान तथा पूजा पाउने उद्देश्य राखेर पनि तपस्या गरिन्छ। रजोगुणी व्यक्तिहरू आफ्नो अधीनमा रहने मानिसहरूबाट आफ्नो पूजा गराउने, चरण धुन लगाउने र धन दक्षिणा चढाउन लगाउने व्यवस्था मिलाउँदछन्। तपस्या गर्ने निहुँमा यस्ता नक्कली काम गर्नुलाई रजोगुणी क्रिया भनिन्छ। यसको फल

पनि क्षणिक हुन्छ। केही समयसम्म तिनीहरू पूजित रहन्छन् तर पछि ती आफैँ हराएर जान्छन्।

**मूढग्राहेणात्मनो यत्पीडया क्रियते तपः ।**
**परस्योत्सादनार्थं वा तत्तामसमुदाहृतम् ॥ १९ ॥**

**मूढ** — मूर्ख; **ग्राहेण** — प्रयत्नले; **आत्मनः** — आफैँ; **यत्** — जुन; **पीडया** — उत्पीडनद्वारा; **क्रियते** — गरिन्छ; **तपः** — तपस्या; **परस्य** — अरूलाई; **उत्सादन अर्थम्** — विनाश गर्नका लागि; **वा** — अथवा; **तत्** — त्यो; **तामसम्** — तमोगुणी; **उदाहृतम्** — भनिन्छ।

**मूर्खतावश आफैँलाई पीडा दिएर अरूलाई हानि पुऱ्याउन वा अरूको विनाश गर्नका लागि जुन तपस्या गरिन्छ त्यसलाई तामसी तपस्या भनिन्छ।**

**तात्पर्य :** मूर्खतापूर्ण तपस्याका धेरै उदाहरणहरू देख्न सकिन्छ। हिरण्यकशिपु नामक असुरले पनि आफू अमर हुने र देवताहरूको हत्या गर्ने उद्देश्यले कठिन तपस्या गरेको थियो। ब्रह्मासँग उसले यस्तै वरदान मागेको थियो तर अन्त्यमा भगवान्‌द्वारा ऊ मारियो। कुनै असम्भव वस्तुका लागि गरिने तपस्या निश्चित रूपमा तामसी तपस्या हो।

**दातव्यमिति यद्दानं दीयतेऽनुपकारिणे ।**
**देशे काले च पात्रे च तद्दानं सात्त्विकं स्मृतम् ॥ २० ॥**

**दातव्यम्** — दिनयोग्य; **इति** — यसरी; **यत्** — जुन; **दानम्** — दान; **दीयते** — दिइन्छ; **अनुपकारिणे** — प्रत्युपकारको भावनाबिना; **देशे** — उचित स्थानमा; **काले** — उचित समयमा; **च** — पनि; **पात्रे** — उपयुक्त व्यक्तिलाई; **च** — तथा; **तत्** — त्यो; **दानम्** — दान; **सात्त्विकम्** — सत्त्वगुणी; **स्मृतम्** — मानिन्छ।

**जुन दान, कुनै प्रत्युपकारको आशा नराखी केवल कर्तव्य सम्झेर ठीक ठाउँमा, ठीक समयमा र उपयुक्त पात्रलाई प्रदान गरिन्छ त्यो दानलाई सात्त्विक दान मानिन्छ।**

**तात्पर्य :** आध्यात्मिक कार्यमा संलग्न रहेका व्यक्तिलाई मात्र दान दिनुपर्ने कुरा वैदिक साहित्यमा उल्लेख गरिएको छ। विचार नै नगरी दिइने दानको प्रशंसा गरिएको छैन। दान दिँदा सधैँ आध्यात्मिक सिद्धिलाई ध्यानमा राखिएको हुन्छ। तसर्थ कुनै तीर्थस्थलमा तथा, सूर्य वा चन्द्रग्रहणका समयमा वा महिनाको अन्त्यमा वा सुयोग्य ब्राह्मणलाई वा कुनै वैष्णव भक्तलाई वा मन्दिरमा दान

दिनुलाई अत्यन्त उत्तम मानिएको छ। सट्टामा केही पाउँदछु कि भन्ने सोचेर दान दिनु हुँदैन। कहिलेकाहीँ करुणावश निर्धन वा गरीबलाई पनि दान दिने गरिन्छ तर यदि त्यो निर्धन व्यक्ति दान दिनयोग्य पात्र रहेनछ भने त्यसबाट कुनै आध्यात्मिक प्रगति हुन सक्दैन। अर्को शब्दमा भन्दा वैदिक साहित्यमा अविवेकपूर्ण तरिकाले दिइने दानको प्रशंसा गरिएको छैन।

**यत्तु प्रत्युपकारार्थं फलमुद्दिश्य वा पुनः ।**
**दीयते च परिक्लिष्टं तद्दानं राजसं स्मृतम् ॥ २१॥**

यत् — जुन; तु — तर; **प्रति उपकार अर्थम्** — त्यसको सट्टामा केही पाउने उद्देश्यले; **फलम्** — फल; **उद्दिश्य** — इच्छा राखेर; **वा** — अथवा; पुनः — फेरि; **दीयते** — दिइन्छ; **च** — पनि; **परिक्लिष्टम्** — पश्चात्तापपूर्वक; तत् — त्यो; **दानम्** — दानलाई; **राजस** — रजोगुणी; **स्मृतम्** — सम्झिइन्छ (मानिन्छ)।

**त्यसको सट्टामा केही पाउने आशा राखेर वा कर्मफलको इच्छा राखेर मन नलागी-नलागी दिइने दानलाई राजसी दान भनिन्छ।**

**तात्पर्य :** कहिलेकाहीँ स्वर्गप्राप्तिका इच्छाले दान गरिन्छ, कहिले धेरै कष्टसँग दान दिइन्छ, अनि कहिले "यत्रो खर्च मैले किन गरेँ हूँला" भन्ने पश्चात्तापपूर्वक पनि दान गरिन्छ र कहिले मान्यजनको आदेशमा बाध्यतावश पनि दान गरिन्छ। यस प्रकारका सबै दानलाई रजोगुणी दान भनिन्छ। यस्ता धेरै दाता संस्थाहरू पनि छन् जसले इन्द्रियतृप्तिका कार्यहरू भइरहने संस्थाहरूलाई दान दिने गर्दछन्। वैदिक शास्त्रमा यस्ता दानको प्रशंसा गरिएको छैन, त्यहाँ केवल सात्त्विक दानको मात्र प्रशंसा गरिएको छ।

**अदेशकाले यद्दानमपात्रेभ्यश्च दीयते ।**
**असत्कृतमवज्ञातं तत्तामसमुदाहृतम् ॥ २२॥**

**अदेश** — अशुद्ध स्थानमा; **काले** — तथा असुद्ध समयमा; **यत्** — जो; **दानम्** — दान; **अपात्रेभ्यः** — अयोग्य व्यक्तिलाई; **च** — पनि; **दीयते** — दिइन्छ; **असत्कृतम्** — सम्मानरहित; **अवज्ञातम्** — समुचित विचार नपुऱ्याई; **तत्** — त्यो; **तामसम्** — तमोगुणी; **उदाहृतम्** — भनिन्छ।

**अपवित्र स्थानमा, अनुचित समयमा, कुनै अयोग्य व्यक्तिलाई राम्रोसँग ध्यान नदिई र आदर नगरी दिइएको दानलाई तामसी दान भन्दछन्।**

**तात्पर्य :** यहाँ मद्यपान गर्ने, जूवा खेल्ने व्यसनीलाई दान दिनु राम्रो नहुने कुरा

उल्लेख गरिएको छ। यस्ता व्यक्तिलाई दिइएको दान तामसी हुन्छ। यस्ता तामसी दानले दान दिने दाताको हित हुँदैन। यसको विपरीत यस्तो दानले पापी मानिसलाई नै प्रोत्साहन पुग्दछ। त्यसै गरी उपयुक्त व्यक्तिलाई दिइएको दान पनि यदि ध्यान नदिई र सम्मान नगरी दिइएको छ भने त्यो तामसी हुन्छ।

**ॐ तत्सदिति निर्देशो ब्रम्हणस्त्रिविधः स्मृतः ।**
**ब्राम्हणास्तेन वेदाश्च यज्ञाश्च विहिताः पुरा ॥ २३ ॥**

**ॐ** — परमको सूचक; **तत्** — त्यो; **सत्** — शाश्वत; **इति** — यस्तो; **निर्देशः** — सङ्केत; **ब्रम्हणः** — ब्रह्मको; **त्रि-विधः** — तीन प्रकारका; **स्मृतः** — मानिन्छ; **ब्राम्हणाः** — ब्राम्हणहरू; **तेन** — त्यसबाट; **वेदाः** — वैदिक साहित्य; **च** — पनि; **यज्ञाः** — यज्ञ; **च** — पनि; **विहिताः** — गरिएको; **पुरा** — पहिले।

**सृष्टिको आदि कालदेखि नै 'ॐ-तत्-सत्' यी तीन शब्द परमब्रह्मका सूचक बन्दैआएका छन्। ब्रह्मलाई सन्तुष्ट पार्नका लागि यज्ञ गर्दा ब्राम्हणहरूले वैदिक मन्त्रहरूको पाठसँगै यी तीनवटा साङ्केतिक शब्दहरूको उच्चारण गर्दछन्।**

**तात्पर्य :** तपस्या, यज्ञ, दान र आहार यी कुराहरू तीन तीन वर्गमा विभाजित छन्, ती हुन्—सत्त्व, रज र तम। यिनको चर्चा भइसकेको छ। यिनीहरू उत्तम, मध्यम र निम्न जुनसुकै श्रेणीका हुन्, सबै भौतिक प्रकृतिका गुणबाट बाँधिएका छन् र कलुषित छन्। तर यिनीहरू ब्रह्म वा **ॐ तत् सत्** वा भगवान्‌लाई लक्ष्य गरेर अघि बढेमा आध्यात्मिक उन्नतिका साधन बन्दछन्। शास्त्रीय आदेशहरूमा यस्तै विषयको सङ्केत गरिएको छ । किनभने **ॐ तत् सत्** यी तीन शब्दहरू विशेष रूपमा परमसत्य भगवान्‌कै सूचक हुन्। वैदिक मन्त्रमा **ॐ** शब्दको सधैँ प्रयोग भएको पाइन्छ।

शास्त्रको विधिविधानअनुसार कर्म नगर्ने व्यक्तिले परब्रह्म प्राप्त गर्न सक्दैन। उसले केही अस्थायी फल प्राप्त गर्न सक्ला तर जीवनको अन्त्यमा परमगति पाउन सक्दैन। तात्पर्य के हो भने, दान, यज्ञ तथा तपहरू सत्त्वगुणमा रहेर गर्ने कुरा हुन्। रजोगुण र तमोगुणमा रहेर गरिएका दान, यज्ञ तथा तप निम्न श्रेणीका हुन्छन्। **ॐ तत् सत्** यी तीन शब्द परमेश्वरको पवित्र नामसँग उच्चारण गरिन्छ। जस्तै **ॐ तद्विष्णोः**। वैदिक मन्त्र र परमेश्वरको नाम उच्चारण गर्दा त्यसमा **ॐ** थपेर उच्चारण गरिन्छ। यो वैदिक साहित्यको सूचक हो। यी तीन शब्द वैदिक मन्त्रबाटै लिइएका हुन्।

ऋग्वेदको **ॐ इत्येतद्ब्रह्मणो नेदिष्ठं नाम** भन्ने यो मन्त्रले पहिलो

लक्ष्यलाई सूचित गर्दछ। अनि छान्दोग्य उपनिषद् ६.८.७ को **तत् त्वम् असि** ले दोस्रो लक्ष्यलाई सूचित गर्दछ र छान्दोग्य उपनिषद् ६.२१ को **सद् एव सौम्य** तेस्रो लक्ष्यको सूचक हो। यी तीनवटा मिलेर **ॐ तत्सत्** हुन्छ। प्राचीन कालमा सृष्टिका प्रथम जीवात्मा ब्रह्माले यज्ञ गर्दा यिनै तीन शब्दबाट भगवान्लाई लक्षित गर्नभएको थियो। अतः त्यसै समयदेखि नै शिष्यपरम्पराद्वारा त्यही सिद्धान्तको पालन गर्दै आइएको छ। त्यसैले यो मन्त्रको महत्त्व अत्यधिक बढी छ। *भगवद्गीता*अनुसार कुनै पनि कार्य **ॐ तत् सत्** तथा भगवान्का लागि गरिनु पर्दछ। जसले यी तीन शब्दका साथ आफ्नो तप, दान र यज्ञ सम्पन्न गर्दछ, त्यसले कृष्णभावनामृतकै कार्य गरेको ठहरिन्छ। दिव्य कार्यको वैज्ञानिक कार्यान्वयन नै कृष्णभावनामृत हो। यसैद्वारा मानिस भगवद्धाममा फर्कन सक्षम हुन्छ। यस्तो दिव्य तरिकाले कर्म गर्दा शक्तिको क्षय हुँदैन।

**तस्माद् ॐइत्युदाहृत्य यज्ञदानतपः क्रियाः ।**
**प्रवर्तन्ते विधानोक्ताः सततं ब्रह्मवादिनाम् ॥ २४ ॥**

**तस्मात्** — अतएव; **ॐ** — ओमबाट प्रारम्भ गरेर; **इति** — यसरी; **उदाहृत्य** — सङ्केत गर्दै; **यज्ञ** — यज्ञ; **दान** — दान; **तपः** — तपस्याका; **क्रियाः** — क्रियाहरू; **प्रवर्तन्ते** — प्रारम्भ हुन्छ; **विधान उक्ताः** — शास्त्रीय विधानअनुसार; **सततम्** — सधैँ; **ब्रह्म वादिनाम्** — अध्यात्मवादीहरूको।

**योगीहरूले ब्रह्मप्राप्तिका लागि शास्त्रीय विधिअनुसार यज्ञ, दान र तपका सम्पूर्ण क्रियाहरूको शुभारम्भ सधैँ ॐ शब्दबाट गर्दछन्।**

**तात्पर्य : ॐ तद् विष्णो परमं पदम्** (ऋग्वेद १.२२.२०) भगवान् विष्णुका चरणकमल नै भक्तिका परमआश्रय हुन्। भगवान्का लागि सम्पन्न गरिने प्रत्येक क्रियाले सम्पूर्ण कर्मको पूर्णता निश्चित गर्दछ।

**तदित्यनभिसंधाय फलं यज्ञतपःक्रियाः ।**
**दानक्रियाश्च विविधाः क्रियन्ते मोक्षकाङ्क्षिभिः ॥ २५ ॥**

**तत्** — त्यो; **इति** — यस प्रकार; **अनभिसंधाय** — इच्छा नगरी; **फलम्** — फल; **यज्ञ** — यज्ञको; **तपः** — तथा तपको; **क्रियाः** — क्रियाहरू; **दान** — दानको; **क्रियाः** — क्रियाहरू; **च** — पनि; **विविधाः** — विभिन्न; **क्रियन्ते** — गरिन्छन्; **मोक्षकाङ्क्षिभिः** — मोक्ष चाहनेहरूबाट।

**मानिसले कर्मफलको इच्छा नराखी विभिन्न प्रकारका यज्ञ, तप तथा**

**दानहरू "तत्" शब्दको उच्चारणसँगै सम्पन्न गर्नु पर्दछ। यस्ता दिव्य कर्महरूको उद्देश्य नै भवबन्धनबाट मुक्त हुनु हो।**

**तात्पर्य :** आध्यात्मिक स्तरसम्म उठ्नका लागि मानिसले कुनै पनि भौतिक लाभका निमित्त कर्म गर्नु हुँदैन। सबै कार्यहरू भगवान्‌कै परमधामतिर फर्कने उद्देश्यले गरिनु पर्दछ, यही नै मानिसको परमउपलब्धि हो।

**सद्भावे साधुभावे च सदित्येतत्प्रयुज्यते ।**
**प्रशस्ते कर्मणि तथा सच्छब्दः पार्थ युज्यते ॥ २६ ॥**
**यज्ञे तपसि दाने च स्थितिः सदिति चोच्यते ।**
**कर्म चैव तदर्थीयं सदित्येवाभिधीयते ॥ २७ ॥**

**सद्भावे** — ब्रह्मको स्वभावका अर्थमा; **साधुभावे** — भक्तको स्वभावका अर्थमा; **च** — पनि; **सद्** — सत् शब्द; **इति** — यसरी; **एतत्** — यो; **प्रयुज्यते** — प्रयोग गरिन्छ; **प्रशस्ते** — प्रामाणिक; **कर्मणि** — कर्ममा; **तथा** — पनि; **सत्शब्दः** — यो सत् शब्द; **पार्थ** — हे पार्थ; **युज्यते** — प्रयुक्त गरिन्छ; **यज्ञे** — यज्ञमा; **तपसि** — तपस्यामा; **दाने** — दानमा; **च** — पनि; **स्थितिः** — स्थिति; **सत्** — ब्रह्म; **इति** — यसरी; **च** — तथा; **उच्यते** — उच्चारण गरिन्छ; **कर्म** — कार्य; **च** — पनि; **एव** — निश्चय नै; **तत्** — त्यस; **अर्थीयम्** — का लागि; **सत्** — ब्रह्म; **इति** — यस्तो; **एव** — निश्चय नै; **अभिधीयते** — भनिन्छ।

**भक्तिमय यज्ञको लक्ष्य नै परमसत्य हो। यसैलाई "सत्" शब्दद्वारा सङ्केत गरिन्छ र हे पृथापुत्र! यस्तो यज्ञ सम्पादन गर्ने कर्तालाई पनि "सत्" भनिन्छ। यस प्रकार परमपुरुषलाई प्रसन्न राख्न गरिने यज्ञ, तप, दान आदि सबै कर्महरू "सत्" भनिन्छन्।**

**तात्पर्य : प्रशस्ते कर्मणि** अर्थात् **नियत कर्तव्य** भनेको वैदिक साहित्यद्वारा निर्धारित गरिएका गर्भावस्थादेखि मृत्युसम्मका संस्कारहरू हुन्। जीवको परममुक्तिका लागि यस्ता संस्कारहरू गर्नु पर्दछ। यस्ता क्रियाहरू सम्पन्न गर्दै **ॐ तत्सत्** को उच्चारण गर्नु पर्दछ। सद्भाव तथा साधुभावहरू दिव्य, वा आध्यात्मिक अवस्थाका सूचक हुन्। कृष्णभावनामय कर्म गर्नु सद्भाव हो र कृष्णभावनामय कार्यप्रति पूर्ण सचेष्ट रहनु साधुभाव हो। *श्रीमद्भागवत्* (३.२५.२५) मा भनिएअनुसार भक्तको सङ्गत गर्नाले आध्यात्मिक विषयवस्तु स्पष्ट हुन्छन्। बिनासत्सङ्ग दिव्य ज्ञान प्राप्त हुँदैन। यसैले **सतां प्रसङ्गात्** शब्द प्रयोग गरिएको हो। यो **ॐ तत्सत्** शब्द ब्रतबन्ध गर्दा र दीक्षा दिँदा पनि उच्चारण गरिन्छ। यसै गरी सबै प्रकारका यज्ञहरू सम्पन्न गर्दा ब्रह्मलाई

नै लक्ष्य गरी **ॐ तत्सत्** शब्दको उच्चारण गरिन्छ। **तद्अर्थीयम्** शब्दले भगवान्को मन्दिरमा भोजन बनाउन सहयोग गर्नु, भगवान्को महिमाको गान गर्नु तथा ब्रह्मको प्रतिनिधित्व गर्ने कुनै पनि सेवामूलक कार्य गर्नु भन्ने अर्थ बुझाउँदछ। अतः विभिन्न किसिमले सम्पूर्ण कार्यसिद्धिका लागि र हरेक वस्तुको पूर्णताका लागि **ॐ तत् सत्** यी परमशब्दहरूको उच्चारण गर्ने गरिन्छ।

**अश्रद्धया हुतं दत्तं तपस्तप्तं कृतं च यत् ।**
**असदित्युच्यते पार्थ न च तत्प्रेत्य नो इह ॥ २८॥**

**अश्रद्धया** — बिनाश्रद्धा; **हुतम्** — यज्ञमा अर्पण गरिएको आहुति; **दत्तम्** — दिइएको; **तपः** — तपस्या; **तप्तम्** — सम्पन्न; **कृतम्** — गरिएको; **च** — पनि; **यत्** — जुन; **असत्** — झूटो; **इति** — यस्तो; **उच्यते** — भनिन्छ; **पार्थ** — हे पृथापुत्र; **न** — न; **च** — पनि; **तत्** — त्यो; **प्रेत्य** — मरेपछि; **नो** — न त; **इह** — यो जीवनमा।

**हे पार्थ! परमेश्वरप्रतिको श्रद्धाबिना यज्ञ, दान, तप जे गरे पनि त्यो अस्थायी हुन्छ। त्यसलाई असत् भनिन्छ र त्यो यस जन्म र परजन्म दुवैका लागि व्यर्थ हुन्छ।**

**तात्पर्य :** यज्ञ होस् वा दान होस् वा तप, यदि त्यसको लक्ष्य आध्यात्मिक छैन भने त्यो व्यर्थ हुन्छ। अतः यस श्लोकमा यस्तो कार्यलाई अनावश्यक कार्य भनी घोषणा गरिएको छ। प्रत्येक कार्य कृष्णभावनामा रहेर ब्रह्मकै लागि गर्नु पर्दछ। समुचित मार्गनिर्देशनबिना र श्रद्धाबिना गरिएको काम कहिल्यै सफल हुँदैन। सम्पूर्ण वैदिक साहित्यमा भगवान्प्रति श्रद्धा राख्ने सल्लाह दिइएको छ। सम्पूर्ण वैदिक साहित्यको अन्वेषणको एक मात्र परमलक्ष्य भगवान् श्रीकृष्णलाई बुझ्नु हो। अतः यस सिद्धान्तको अनुसरण नगरी कसैले पनि सफलता प्राप्त गर्न सक्दैन। यसै कारण प्रारम्भदेखि नै प्रामाणिक गुरुको मार्गदर्शनमा रहेर कृष्णभावना प्राप्त गर्नु मानिसको सर्वश्रेष्ठ मार्ग हो। हरेकलाई सफल बनाउने बाटो यही हो। बद्ध अवस्थामा मानिसहरू केवल देवता, भूत वा कुबेरजस्ता यक्षहरूको पूजा गर्न मन पराउँदछन्। तमोगुण र रजोगुणभन्दा सत्त्वगुण सर्वश्रेष्ठ हो। तथापि जसले प्रत्यक्ष रूपमा कृष्णभावनालाई ग्रहण गर्दछ त्यो मानिस प्रकृतिका यी तीनवटा गुणहरूभन्दा माथि पुग्दछ। क्रमैसँग उन्नति गर्दै जाने विधि पनि आफ्नो ठाउँमा छँदैछ तैपनि यदि कसैले शुद्ध भक्तको सङ्गत गरेर सिधै कृष्णभावनालाई ग्रहण गर्न सक्दछ त्यो सबैभन्दा श्रेष्ठ मार्ग हो। यस अध्यायमा पनि यसै विषयको सिफारिस गरिएको छ। यसरी

सफलता पाउनका लागि सर्वप्रथम उपयुक्त गुरु पाउनु पर्दछ र उनकै निर्देशन र प्रशिक्षणमा रहनु पर्दछ। अनि मात्र ईश्वर वा ब्रह्ममा श्रद्धा हुन सक्दछ। समय पुगेपछि जब यो श्रद्धा परिपक्व हुन्छ त्यसैलाई ईश्वरप्रेम भनिन्छ। यही प्रेम नै जीवात्माको परमलक्ष्य हो। तसर्थ मानिसले सोभै कृष्णभावनामृतलाई ग्रहण गर्नु पर्दछ। यो सत्रौँ अध्यायको सन्देश पनि यही हो।

यस प्रकार *श्रीमद्‌भगवद्‌गीता* ग्रन्थअन्तर्गत 'श्रद्धाका प्रकार' शीर्षक सत्रौँ अध्यायको भक्तिवेदान्त तात्पर्य समाप्त भयो।

अध्याय-अठार

# उपसंहार : संन्यासको पूर्णता

अर्जुन उवाच

**संन्यासस्य महाबाहो तत्त्वमिच्छामि वेदितुम् ।**
**त्यागस्य च हृषीकेष पृथक्केशिनिषूदन ॥ १॥**

अर्जुन उवाच — अर्जुनले भने; **संन्यासस्य** — संन्यास (त्याग) को; **महाबाहो** — हे महाबाहु (बलिष्ठ भुजा भएका); **तत्त्वम्** — सत्यलाई; **इच्छामि** — चाहन्छु; **वेदितुम्** — जान्न; **त्यागस्य** — त्यागको; **च** — पनि; **हृषीकेश** — हे इन्द्रियका स्वामी; **पृथक** — भिन्न; **केशिनिषूदन** — केशी असुरलाई संहार गर्ने।

**अर्जुनले भने — हे महाबाहु! म संन्यासको तत्त्व जान्न चाहन्छु। हे हृषीकेश! हे केशिनिषूदन! म त्यागमय जीवन (संन्यास आश्रम) को उद्देश्यका बारेमा पनि जान्न चाहन्छु।**

**तात्पर्य :** वास्तवमा भन्ने हो भने *भगवद्गीता* सत्रौँ अध्यायमा नै समाप्त भइसकेको छ। अठारौँ अध्याय पहिला नै विवेचना भइसकेका विषयवस्तुको पूरक सारसंक्षेप मात्र हो। *भगवद्गीताका* प्रत्येक अध्यायमा भगवान् श्रीकृष्ण विशेष जोड दिएर भन्नु हुन्छ— भगवान्प्रति गरिने भक्तिमय सेवा नै जीवनको परमलक्ष्य हो। यो अठारौँ अध्यायमा पनि ज्ञानको परमगोपनीय मार्ग भनेर यसै विषयलाई संक्षिप्त रूपमा बताइएको छ। प्रारम्भिक छः अध्यायहरूमा भक्तियोगमा विशेष जोड दिइएको छ र भनिएको छ— योगिनामपि सर्वेषाम् अर्थात् सम्पूर्ण योगीहरूमा त्यही योगी श्रेष्ठ हो जो आफ्नो हृदयभित्र सधैँ मेरो चिन्तन गर्दछ। त्यसपछिका छः अध्यायहरूमा शुद्धभक्ति र यसको स्वभाव तथा क्रियाकलापको चर्चा गरिएको छ। बाँकी छः अध्यायहरूमा ज्ञानको, वैराग्यको, परा प्रकृति र अपरा प्रकृतिको कार्यहरूको र भक्तिको वर्णन गरिएको छ। निष्कर्षमा सम्पूर्ण कर्महरू परमेश्वरसँग सम्बन्धित हुनु पर्दछ भन्ने आशय राखिएको छ। **ॐतत्सदिति** वाक्यांशले यही कुराको बोध गराउँदछ र साथै यो परमपुरुष भगवान् विष्णुको सङ्केत पनि हो। *भगवद्गीताको* तेस्रो खण्डले जीवनको परमलक्ष्य भक्ति हो, त्यसबाहेक अरू केही होइन भन्ने देखाएको छ। ब्रह्मसूत्र वा वेदान्तसूत्र र पूर्व आचार्यहरूका उद्धारणहरूद्वारा पनि यसै

कुरालाई स्थापित गरिएको छ। केही विशेष निराकारवादीहरूले वेदान्तसूत्रको ज्ञानमा आफूहरूको मात्र एकाधिकार भएको जस्तो मान्दछन् तर वास्तवमा वेदान्तसूत्र भगवद्भक्ति बुझ्नका लागि हो। भगवान् स्वयम् नै वेदान्तसूत्रका रचयिता हुनुभएको हुनाले उहाँ नै यसका वास्तविक ज्ञाता पनि हुनुहुन्छ। यसको चर्चा *भगवद्गीताको* पन्ध्रौँ अध्यायमा गरिएको छ। प्रत्येक शास्त्र तथा प्रत्येक वेदको ध्येय भक्ति हो। *भगवद्गीतामा* त्यसैको व्याख्या गरिएको छ।

जसरी दोस्रो अध्यायमा सम्पूर्ण विषयवस्तुको प्रस्तावना दिइएको थियो त्यसै गरी यस अठारौँ अध्यायमा गीताका सम्पूर्ण उपदेशहरूको सारसंक्षेप दिइएको छ। यसमा वैराग्य र भौतिक प्रकृतिका तीन गुणहरूभन्दा परको दिव्य स्थिति प्राप्त गर्नु नै जीवनको उद्देश्य हो भन्ने कुराको सङ्केत गरिएको छ। अर्जुन *भगवद्गीताका* दुईवटा विषयवस्तु त्याग र संन्यास (वैराग्य) बीचको स्पष्ट अन्तर बुझ्न चाहन्छन्। त्यसैले यहाँ उनी यी दुई शब्दको अर्थ बुझ्न जिज्ञासा गरिरहेका छन्।

यस श्लोकमा भगवान्लाई सम्बोधन गर्न प्रयोग गरिएका हृषीकेश र केशिनिषूदन यी दुई शब्द अत्यन्त महत्त्वपूर्ण छन्। हृषिकेश सम्पूर्ण इन्द्रियहरूका स्वामी श्रीकृष्ण हुनुहुन्छ, जसले हामीलाई मानसिक शान्ति प्राप्त गर्ने कार्यमा सधैँ सहायता पुऱ्याउनु हुन्छ। अर्जुन भगवान् श्रीकृष्णसँग प्रत्येक विषयवस्तुलाई सङ्क्षिप्त रूपमा बुझाइदिन अनुरोध गर्दछन्, जसले गर्दा उनी समभावमा रहन सकून्। तैपनि उनका मनमा केही शंकाहरू छन्। शंकाहरूलाई सधैँ असुरहरूसँग तुलना गरिन्छ, त्यसैले उनले भगवान् श्रीकृष्णलाई केशिनिषूदन भनेर सम्बोधन गरेका हुन्। केशी अत्यन्त दुर्जेय असुर थियो तर त्यसलाई भगवान् श्रीकृष्णले मार्नुभएको थियो। अहिले आफूभित्र उठेको सन्देहरूपी असुरलाई पनि श्रीकृष्णले त्यसै गरी मारिदिए हुन्थ्यो भन्ने आशा अर्जुनले गरिरहेका छन्।

श्रीभगवानुवाच

**काम्यानां कर्मणां न्यासं संन्यासं कवयो विदुः ।**
**सर्वकर्मफलत्यागं प्राहुस्त्यागं विचक्षणाः ॥ २ ॥**

**श्रीभगवानुवाच** — भगवान्ले भन्नुभयो; **काम्यानाम्** — सकाम; **कर्मणाम्** — कर्महरूको; **न्यासम्** — त्याग; **संन्यासम्** — संन्यास; **कवयः** — विद्वान्जन; **विदुः** — जान्दछन्; **सर्व** — सबै; **कर्म** — कर्महरूका; **फल** — प्रतिफलको; **त्यागम्** — त्यागलाई; **प्राहुः** — भनिन्छ; **त्यागम्** — त्याग; **विचक्षणाः** — अनुभवीहरू।

**भगवान्‌ले भन्नुभयो — विद्वान्‌हरू सांसारिक इच्छामा आधारित क्रियाकलापको परित्यागलाई संन्यास भन्दछन् र बुद्धिमान् मानिसहरू सम्पूर्ण कर्मका फलको त्यागलाई त्याग भन्दछन्।**

तात्पर्य : प्रतिफलको आकाङ्क्षा राखेर गरिने कर्म त्यागिदिनु पर्दछ। *भगवद्‌गीताको* उपदेश यही हो। तर जुन कर्मले मानिसलाई उच्च आध्यात्मिक ज्ञानतिर लैजान्छ, त्यस्तो कर्मलाई त्याग्नु हुँदैन। यो कुरा आगामी श्लोकहरूमा अझ स्पष्ट हुनेछ। कुनै विशेष उद्देश्य प्राप्तिका लागि यज्ञ गर्ने प्रचलन र तिनका विधिविधानहरूको उल्लेख वैदिक साहित्यमा छ। असल सन्तान उत्पन्न गर्नका लागि वा स्वर्ग लोकको प्राप्तिका लागि पनि केही विशेष यज्ञहरू गरिन्छन्। सांसारिक इच्छापूर्ति गर्ने उद्देश्य लिएर गरिने यज्ञहरू बन्द गर्नु पर्दछ, तर हृदय शुद्धिका लागि र अध्यात्मविज्ञानमा उन्नति गर्नका लागि गरिने यज्ञहरूलाई त्याग्नु राम्रो हुँदैन।

**त्याज्यं दोषवदित्येके कर्म प्राहुर्मनीषिणः ।**
**यज्ञदानतपः कर्म न त्याज्यमिति चापरे ॥ ३ ॥**

**त्याज्यम्** — त्याग्न उचित छ; **दोषवत्** — दोषलाई जस्तै; **इति** — यस प्रकार; **एके** — एउटा समूह; **कर्म** — काम; **प्राहुः** — भन्दछन्; **मनीषिणः** — महान् विचारकहरू; **यज्ञ** — यज्ञ; **दान** — दान; **तपः** — तपस्या; **कर्म** — कार्य; **न त्याज्यम्** — त्याग्न हुँदैन; **इति** — यस प्रकार; **च** — तथा; **अपरे** — अरूहरू।

**केही विद्वान्‌हरू सबै प्रकारका सकाम कर्मलाई दोषजस्तै ठानेर त्याग्नु पर्दछ भनेर घोषणा गर्दछन् तर केही सन्तहरू यज्ञ, दान तथा तपस्याजस्ता कर्मलाई कहिल्यै पनि त्याग गर्न हुँदैन भन्छन्।**

तात्पर्य : वैदिक साहित्यमा यस्ता धेरै कार्यहरूको चर्चा छ जो विवादका विषय बनेका छन्। उदाहरणका लागि कतै यज्ञमा पशुहरूको हत्या गर्न सकिन्छ भनिएको छ, कहीँ पशुवधलाई पूर्णतया निषिद्ध छ भनिएको छ। वैदिक साहित्यमा यज्ञमा पशुवध गर्ने कुरा अनुमोदन गरिएको छ तैपनि त्यसो गर्दा ती पशुलाई मारिएको मानिँदैन। ती यज्ञमा पशुहरूलाई नयाँ जीवन प्रदान गर्नका लागि तिनको बलिदान गर्ने गरिन्छ। कहिलेकाहीँ यसरी यज्ञमा बलि चढाइएका केही पशुहरूलाई अर्को नयाँ पशु जीवन प्राप्त हुन्छ र कतिपय पशुहरूले तत्काल मनुष्य जीवन पनि प्राप्त गर्दछन्। तर यस सम्बन्धमा ऋषिहरूका विभिन्न मत छन्। कोही भन्छन् — यज्ञमा पशुवध सधैँ प्रतिबन्धित हुनु पर्दछ, अनि कोही भन्छन् — विशेष किसिमका यज्ञमा गरिने पशुबलि शुभ हो। यज्ञीय

क्रियाकलापका सम्बन्धमा पाइने यी विविध प्रकारका विचारको स्पष्टीकरण यहाँ स्वयम् भगवान्ले दिँदै हुनुहुन्छ।

**निश्चयं श्रृणु मे तत्र त्यागे भरतसत्तम ।**
**त्यागो हि पुरुषव्याघ्र त्रिविधः सम्प्रकीर्तितः ॥ ४ ॥**

**निश्चयम्** — निश्चय; **श्रृणु** — सुन; **मे** — मेरो; **तत्र** — त्यहाँ, **त्यागे** — त्यागका विषयमा; **भरतसत्तम** — हे भरतश्रेष्ठ; **अर्जुन**; **त्यागः** — त्याग; **हि** — निश्चिय नै; **पुरुषव्याघ्र** — हे पुरुषहरूमा बाघ; **त्रिविधः** — तीन प्रकारका; **सम्प्रकीर्तितः** — भनिएको छ (घोषित छ)।

**हे अर्जुन (भरत श्रेष्ठ)! अब त्यागका विषयमा मेरो निर्णय सुन। हे पुरुषहरूमा बाघ! शास्त्रमा पनि तीन प्रकारका त्यागको वर्णन छ।**

**तात्पर्य :** त्यागका विषयमा विभिन्न मतमतान्तरहरू छन् तैपनि भगवान् श्रीकृष्णले यसबारेमा यहाँ आफ्नो निर्णय दिँदै हुनुहुन्छ, जसलाई अन्तिम निर्णय मान्नु पर्दछ। निःसन्देह वेदहरू भगवान्द्वारा प्रदान गरिएको विविध नियमहरू हुन् तर यहाँ भगवान् स्वयम् नै उपस्थित हुनुभएकाले उहाँका शब्दलाई अन्तिम निर्णयका रूपमा लिनु पर्दछ। भगवान् भन्नु हुन्छ— प्रकृतिका तीन गुणहरूमध्ये जुन गुणमा रहेर त्याग गरिएको हो त्यही गुणअनुसार नै त्यागका पनि विभिन्न प्रकारहरू हुन्छन् भन्ने कुरा बुझ्नु पर्दछ।

**यज्ञदानतपःकर्म न त्याज्यं कार्यमेव तत् ।**
**यज्ञो दानं तपश्चैव पावनानि मनीषिणाम् ॥ ५ ॥**

**यज्ञ** — यज्ञ; **दान** — दान; **तपः** — तपस्या; **कर्म** — कर्महरू; **न** — छैन; **त्याज्यम्** — त्यागनयोग्य; **कार्यम्** — गर्नै पर्दछ; **एव** — निश्चय नै; **तत्** — त्यो; **यज्ञः** — यज्ञ; **दानम्** — दान; **तपः** — तपस्या; **च** — पनि; **एव** — निश्चय नै; **पावनानि** — पवित्र गराउने तत्त्व हुन्; **मनीषिणाम्** — महात्माहरूका लागि पनि।

**यज्ञ, दान, तपस्या जस्ता कर्महरू त्याग गर्न हुँदैन, यी गर्नैपर्ने कार्य हुन्। यज्ञ, दान र तपस्याले महात्माहरूलाई पनि शुद्ध बनाउँदछन्।**

**तात्पर्य :** योगीजनले मानव समाजको उत्थानका लागि कर्म गर्नु पर्दछ। मानिसलाई आध्यात्मिक जीवनका स्तरसम्म विकसित गराउनका लागि गर्नुपर्ने अनेक संस्कारविधिहरू छन्। उदाहरणका लागि विवाह पनि संस्कारमूलक यज्ञहरूमध्येको एउटा उत्सव हो। यसलाई विवाह यज्ञ पनि भनिन्छ। आफ्ना सबै पारिवारिक सम्बन्धहरू त्यागेर त्यागमय जीवन अपनाएको संन्यासीले पनि विवाह उत्सवलाई प्रोत्साहन दिन हुन्छ र? भगवान् भन्नु हुन्छ— मानवीय

हित र कल्याणका लागि गरिने कुनै पनि यज्ञको परित्याग गर्नु हुँदैन। विवाहको उद्देश्य मानिसको मनलाई संयमित र शान्त बनाएर आध्यात्मिक उन्नतितिर लगाउनु हो। त्यसैले संन्यासीहरूले पनि अधिकांश मानिसहरूलाई यो विवाहयज्ञप्रति उत्साहित बनाउनु पर्दछ। संन्यासीले स्त्रीसम्पर्क गर्नु हुँदैन तर यसको अर्थ जीवनका तल्ला तहमा रहेका युवा मानिसहरूले पनि विवाह गरेर पत्नीको सङ्ग्रह नगरून् भन्ने होइन। सम्पूर्ण यज्ञहरू भगवान्‌लाई प्राप्त गर्ने उद्देश्यले गरिन्छन्। अतः जीवनको तल्लो तहमा भएका व्यक्तिले यज्ञको परित्याग गर्नु हुँदैन। यसै गरी दान पनि हृदयशुद्धिका लागि गर्ने गरिन्छ। यदि सुपात्रमा दान दिइन्छ भने त्यसले पनि मानिसलाई आध्यात्मिक उन्नतितर्फ लैजान्छ, जसको चर्चा पहिल्यै पनि गरिएको छ।

**एतान्यपि तु कर्माणि सङ्गं त्यक्त्वा फलानि च ।**
**कर्तव्यानीति मे पार्थ निश्चितं मतमुत्तमम् ॥ ६ ॥**

**एतानि** — यी सबै; **अपि** — निश्चय नै; **तु** — तर; **कर्माणि** — कर्महरू; **सङ्गम्** — सङ्गति; **त्यक्त्वा** — त्यागेर; **फलानि** — फललाई; **च** — पनि; **कर्तव्यानि** — कर्तव्यका रूपमा गरिनुपर्छ; **इति** — यस प्रकार; **मे** — मेरो; **पार्थ** — हे पृथापुत्र; **निश्चितम्** — निश्चित; **मतम्** — मत; **उत्तमम्** — श्रेष्ठ

**फलको कुनै आशा नराखीकन आसक्तिरहित भएर यी सबै कर्महरू गर्नु पर्दछ। हे पृथापुत्र अर्जुन! यी कर्महरूलाई कर्तव्यकै विषय ठानेर सम्पन्न गर्नु पर्दछ। यही नै मेरो अन्तिम विचार हो।**

**तात्पर्य :** सबै यज्ञहरू शुद्धिकारक छन् तैपनि मानिसले यस्ता यज्ञहरूको सम्पादनबाट कुनै पनि प्रकारको फलको आशा गर्नु हुँदैन। अर्को शब्दमा भन्दा जीवनमा भौतिक प्रगतिका लागि गरिने सम्पूर्ण यज्ञहरूको परित्याग गर्नु पर्दछ, तर जुन यज्ञले मानिसको अस्तित्वलाई शुद्ध बनाउँदछ र मानिसलाई आध्यात्मिक स्तरसम्म उठाउने काम गर्दछ, त्यस्तो यज्ञ कहिल्यै बन्द गर्नु हुँदैन। कृष्णभावनासम्म पुऱ्याउन सहायता गर्ने जुनसुकै कुरालाई पनि उत्साहित गर्नु पर्दछ। *श्रीमद्भागवत्‌मा* पनि भनिएको छ— भगवान्‌को भक्तिमा अग्रसर गराउने कुनै पनि कार्य स्वीकार्य हुन्छन्। यही नै धर्मको सर्वोच्च कसी हो। भगवान्‌को भक्ति र सेवामा सहयोग पुऱ्याउने कुनै पनि प्रकारको कर्म, यज्ञ वा दानलाई भक्तले स्वीकार गर्नु पर्दछ।

**नियतस्य तु संन्यास कर्मणो नोपपद्यते ।**
**मोहात्तस्य परित्यागस्तामसः परिकीर्तितः ॥ ७ ॥**

**नियतस्य** — निर्धारित; **तु** — तर; **संन्यास** — संन्यास; **कर्मणः** — कर्मलाई; **न** — हुँदैन; **उपपद्यते** — योग्य; **मोहात्** — मोहवश; **तस्य** — त्यसको; **परित्यागः** — त्याग; **तामसः** — तमोगुणी; **परिकीर्तितः** — भनिएको छ।

**निर्धारित गरिएका कर्तव्यकर्मको त्याग कहिल्यै पनि गर्नु हुँदैन। यदि कसैले मोहमा परेर आफ्नो कर्मको त्याग गर्दछ त्यस्तो त्यागलाई तामसी त्याग भनिन्छ।**

**तात्पर्य :** भौतिक सन्तुष्टिका लागि गरिने कर्म अवश्य नै त्याग्नयोग्य छन् तर मानिसलाई आध्यात्मिक उन्नति गराउने कार्यहरू, जस्तै — भगवान्का लागि भोजन बनाउने, भगवान्लाई भोग लगाउने, प्रसाद ग्रहण गर्ने इत्यादिलाई त्याग्न हुँदैन। यी स्वीकृत कर्म हुन्। भनिन्छ, संन्यास ग्रहण गरेका व्यक्तिले आफ्ना लागि भनेर भोजन पकाउनु हुँदैन। आफ्ना लागि मात्र पकाउनु निषिद्ध छ तर भगवान्का लागि भोजन तयार गर्नु निषिद्ध छैन। त्यसै गरी एउटा संन्यासीले आफ्ना भक्त वा शिष्यहरूलाई कृष्णभावनाको विकासमा सहयोग पुऱ्याउने उद्देश्यले विवाह गराइदिन हुन्छ। यदि कसैले यस्तो कार्यको त्याग गर्दछ त्यस प्रकारको त्यागकर्मलाई तमोगुणी मान्नु पर्दछ।

**दुःखमित्येव यत्कर्म कायक्लेशभयात्त्यजेत् ।**
**स कृत्वा राजसं त्यागं नैव त्यागफलं लभेत् ॥ ८ ॥**

**दुःखम्** — दुःखमय; **इति** — यस्तो; **एव** — निश्चय नै; **यत्** — जो; **कर्म** — काम; **काय** — शरीरका लागि; **क्लेश** — कष्टदायक; **भयात्** — डरले; **त्यजेत्** — त्याग्दछ; **सः** — त्यो; **कृत्वा** — गरेर; **राजसम्** — रजोगुणमा; **त्यागम्** — त्याग; **न** — होइन; **एव** — निश्चय नै; **त्यागफलम्** — त्यागको फल; **लभेत्** — प्राप्त गर्दछ।

**जसले शारीरिक कष्टका डरले आफ्नो निर्धारित कर्मलाई दुःखमय ठानेर त्याग गर्दछ, त्यस्तो त्यागलाई रजोगुणी त्याग भनिन्छ। त्यस्तो कर्मले मानिसलाई कहिल्यै त्यागको उचाइमा पुऱ्याउँदैन।**

**तात्पर्य :** कृष्णभावनामा लागेका व्यक्तिले सकाम कर्म गरिरहेछु भन्ने डरले अर्थोपार्जन गर्ने कार्य बन्द गर्नु हुँदैन। मानिसले काम गरेर कमाएको पैसा कृष्णभावनामा लगाउन सक्दछ वा बिहान सबेरै उठेर आफूलाई दिव्य कृष्णभावनाको विकासमा अग्रसर गराउन सक्दछ। यस्ता कार्यहरूलाई कष्टपूर्ण ठानेर त्याग्नु हुँदैन। त्यस्तो त्याग रजोगुणी त्याग हो। रजोगुणी कर्मको फल सधैँ दुःखदायी हुन्छ। यदि यस्तो भाव राखेर कसैले कर्म त्याग्दछ त्यसले कहिल्यै पनि त्यागको फल पाउँदैन।

**कार्यमित्येव यत् कर्म नियतं क्रियतेऽर्जुन ।**
**सङ्गं त्यक्त्वा फलं चैव स त्यागः सात्त्विको मतः ॥ ९ ॥**

**कार्यम्** — गर्नै पर्दछ; **इति** — यस प्रकार; **एव** — अवश्य; **यत्** — जो; **कर्म** — काम; **नियतम्** — तोकिएको; **क्रियते** — गरिन्छ; **अर्जुन** — हे अर्जुन; **सङ्ग** — सङ्गति; **त्यक्त्वा** — त्यागेर; **फलम्** — फल; **च** — पनि; **एव** — निश्चय नै; **सः** — त्यो; **त्यागः** — त्यागलाई; **सात्त्विकः** — सतोगुणी; **मतः** — मेरा विचारमा।

**हे अर्जुन! जसले गर्नुपर्ने कर्तव्य मात्र ठानेर आफ्ना निर्धारित कर्महरू गर्दछ र सबै प्रकारका फलको आसक्ति तथा सांसारिक सङ्गतलाई त्यागिदिन्छ, त्यस्तो त्यागलाई सात्त्विक त्याग भनिन्छ।**

**तात्पर्य :** यस्तै किसिमको मनोभाव राखेर निर्धारित कर्महरू गर्दै जानु पर्दछ। मानिसले फलप्रति अनासक्त भएर कर्म गर्नु पर्दछ र कर्मका गुणबाट पनि अलग्ग रहनु पर्दछ। कृष्णभावनामा रहेर काम गर्ने व्यक्तिले कारखानामा काम गरे पनि आफूलाई त्यस कारखानाको काम र कारखानाका मजदुरहरूको सङ्गतबाट अलग्ग राख्दछ। उसले केवल भगवान् श्रीकृष्णका लागि काम गरिरहेको हुन्छ। जब उसले आफ्ना कर्मको फल भगवान् श्रीकृष्णलाई अर्पण गर्दछ त्यस समय ऊ दिव्य स्तरमा रहेर काम गरिरहेको हुन्छ।

**न द्वेष्ट्यकुशलं कर्म कुशले नानुषज्जते ।**
**त्यागी सत्त्वसमाविष्टो मेधावी छिन्नसंशयः ॥ १० ॥**

**न द्वेष्टि** — द्वेष गर्दैन; **अकुशलम्** — नराम्रा; **कर्म** — कामप्रति; **कुशले** — शुभ कार्यप्रति; **न अनुषज्जते** — आसक्त हुँदैन; **त्यागी** — त्यागी; **सत्त्व** — सतोगुणमा; **समाविष्टः** — समावेश भएको; **मेधावी** — बुद्धिमान्; **छिन्न** — काटेर; **संशयः** — सम्पूर्ण शंकालाई।

**सतोगुणमा अवस्थित बुद्धिमान् त्यागी व्यक्ति न अशुभ कर्मलाई घृणा गर्दछ न शुभ कर्मप्रति आसक्त हुन्छ। त्यस्तो व्यक्ति कर्मका विषयमा शंकारहित हुन्छ।**

**तात्पर्य :** कृष्णभावनाभावित वा सतोगुणमा अवस्थित व्यक्ति आफ्नो शरीरलाई कष्ट दिने कुनै व्यक्ति वा कुनै वस्तुप्रति पनि घृणा गर्दैन। उसले कर्तव्यकर्म गर्दा पर्नसक्ने कष्टपूर्ण प्रभावसँग कत्ति नडराई ठीक ठाउँमा ठीक समयमा आफ्नो काम सम्पन्न गर्दछ। दिव्य अवस्थामा अवस्थित र आफ्ना कर्ममा शङ्का नभएको व्यक्ति अत्यन्त बुद्धिमान् ठान्नु पर्दछ।

**न हि देहभृता शक्यं त्यक्तुं कर्माण्यशेषतः ।**
**यस्तु कर्मफलत्यागी स त्यागीत्यभिधीयते ॥ ११ ॥**

**न** — छैन; **हि** — निश्चय नै; **देहभृता** — शरीरधारीहरूद्वारा; **शक्यम्** — सकिने (सम्भव); **त्यक्तुम** — त्याग्न; **कर्माणि** — कर्महरू; **अशेषतः** — सबै; **यः** — जो; **तु** — तर; **कर्म** — कर्मको; **फल** — फललाई; **त्यागी** — त्याग गर्ने; **सः** — त्यो; **त्यागी** — त्यागी; **इति** — यस प्रकार; **अभिधीयते** — भनिन्छ।

**अवश्य नै एउटा शरीरधारी व्यक्तिका लागि सम्पूर्ण कर्महरूको परित्याग गर्नु सम्भव छैन। अतः जसले कर्मका फलको परित्याग गर्दछ त्यही नै वास्तविक त्यागी हो।**

**तात्पर्य :** *भगवद्गीतामा* भनिएको छ, मानिसले कहिल्यै पनि कर्मको त्याग गर्न सक्दैन। अतः जसले भगवान् श्रीकृष्णका लागि कार्य गर्दछ र कर्मको फल आफूले नभोगेर सबै कुरा श्रीकृष्णलाई नै समर्पित गर्दछ त्यो नै वास्तविक त्यागी हो। यस अन्तर्राष्ट्रिय कृष्णभावनामृत सङ्घमा धेरै यस्ता सदस्यहरू छन् जो आफ्ना कार्यालयमा, कारखानामा वा अन्यत्र पनि अत्यन्त परिश्रमपूर्वक काम गर्दछन् र त्यसबाट जे-जति रकम प्राप्त गर्दछन्, त्यो संस्थालाई दिन्छन्। यस्ता उच्च स्तरमा पुगेका महात्माहरू नै वास्तविक त्यागी हुन्। कर्मको फल कसरी त्याग्ने र केका लागि त्याग्ने भन्ने कुराको स्पष्ट सङ्केत यहाँ गरिएको छ।

**अनिष्टमिष्टं मिश्रं च त्रिविधं कर्मणः फलम् ।**
**भवत्यत्यागिनां प्रेत्य न तु संन्यासिनां क्वचित् ॥ १२ ॥**

**अनिष्टम्** — नरकतर्फ लैजाने; **इष्टम्** — स्वर्गतिर लैजाने; **मिश्रम्** — मिश्रित; **च** — तथा; **त्रिविधम्** — तीन प्रकारका; **कर्मणः** — कर्मको; **फलम्** — फल; **भवति** — हुन्छ; **अत्यागिनाम्** — त्याग नगर्नेहरूलाई; **प्रेत्य** — मृत्युपछि; **न** — पर्दैन; **तु** — तर; **संन्यासिनाम्** — संन्यासी (त्यागी) हरूलाई; **क्वचित्** — कहिल्यै पनि।

**त्याग नगर्नेहरूले मृत्युपछि इच्छित, अनिच्छित र मिश्रित गरी तीन प्रकारका कर्मफल भोग्नु पर्दछ तर संन्यासी वा त्यागीलाई भने सुख र दुःखका यस्ता प्रतिफलहरू भोग्नु पर्दैन।**

**तात्पर्य :** भगवान् श्रीकृष्णसँग आफ्नो के सम्बन्ध छ भन्ने ज्ञान भएका कृष्णभावनाभावित व्यक्तिहरू सधैँ मुक्त रहन्छन्, त्यसैले तिनीहरूले मृत्युपछि सुख-दुःखरूपी कर्मफल भोग्नु पर्दैन।

**पञ्चैतानि महाबाहो कारणानि निबोध मे ।**
**सांख्ये कृतान्ते प्रोक्तानि सिद्धये सर्वकर्मणाम् ॥ १३ ॥**

**पञ्च** — पाँच; **एतानि** — यी; **महाबाहो** — हे महाबाहु !; **कारणानि** — कारणहरू; **निबोध** — जानिराख; **मे** — मबाट; **सांख्ये** — वेदान्तमा; **कृतान्ते** — निष्कर्षमा; **प्रोक्तानि** — भनिएका; **सिद्धये** — पूर्णताका लागि; **सर्व** — सबै; **कर्मणाम्** — कर्महरूको।

**हे महाबाहु अर्जुन! वेदान्तअनुसार सम्पूर्ण कर्महरू सम्पन्न हुनका लागि पाँचवटा कारणहरू छन्। अब मबाट तिनीहरूका बारेमा सिक।**

**तात्पर्य :** यहाँ प्रश्न उठ्न सक्दछ, जुनसुकै कर्मको पनि केही न केही प्रतिफल भइ नै हाल्दछ भने कृष्णभावनाभावित व्यक्तिहरूलाई कर्मका सुख-दुःखमय फल किन भोग्नु पर्दैन? यो कसरी सम्भव छ? यो कसरी सम्भव छ भन्ने कुरा देखाउनका लागि भगवान्ले वेदान्त दर्शनको उच्चारण गर्नुभएको हो। भगवान् भन्नु हुन्छ—हरेक कर्मका पाँचवटा कारण हुन्छन्, त्यसैले कुनै कर्ममा सफलता प्राप्त गर्नका लागि हामीले यी पाँच कारणका बारेमा विचार गर्नु पर्दछ। साङ्ख्यको अर्थ ज्ञानको मूल हाँगो हो र वेदान्तको अर्थ ज्ञानको अन्तिम शाखा हो। यस कुरालाई सबै अग्रणी आचार्यहरूले स्वीकार गरेका छन्। आचार्य शङ्करले पनि वेदान्त सूत्रलाई यही रूपमा स्वीकार्नुभएको छ। अतः यस प्रकारका शास्त्र-प्रमाणहरूको पनि राय लिनु पर्दछ।

सबै कुराका वास्तविक नियन्त्रक परमात्मा हुनुहुन्छ। *भगवद्गीतामा* पनि भनिएको छ—**सर्वस्यचाहं हृदि सन्निविष्टः** अर्थात्, भगवान्ले हरेक प्राणीलाई तिनका पूर्वकर्मको स्मरण गराएर तदनुसारका विशेष विशेष कार्यमा लगाइरहनुभएको छ। अन्तर्यामी भगवान्का निर्देशन अनुसार कृष्णभावनाभावित भएर गरिने कर्मको फल न यो जन्ममा भोग्नु पर्दछ न मृत्युपछि नै भोग्न पर्दछ।

**अधिष्ठानं तथा कर्ता करणं च पृथग्विधम् ।**
**विविधाश्च पृथक्चेष्टा दैवं चैवात्र पञ्चमम् ॥ १४ ॥**

**अधिष्ठानम्** — स्थान; **तथा** — पनि; **कर्ता** — कर्ता; **करणम्** — उपकरणहरू; **च** — तथा; **पृथक्विधम्** — विभिन्न प्रकारका; **विविधाः** — विभिन्न प्रकारका; **च** — पनि; **पृथक** — भिन्नभिन्न; **चेष्टाः** — प्रयास; **दैवम्** — परमात्मा; **च** — पनि; **एव** — निश्चय नै; **अत्र** — यहाँ; **पञ्चमम्** — पाँचौं।

**कर्मस्थान शरीर, कर्ता, विभिन्न इन्द्रियहरू, धेरै प्रकारका प्रयासहरू र अन्त्यमा परमात्मा, यिनीहरू नै कर्मका पाँचवटा कारकतत्त्व हुन्।**

**तात्पर्य :** यहाँ प्रयोग भएका अधिष्ठान शब्दले शरीरलाई जनाउँदछ। शरीरभित्र रहेको आत्माले कर्मको फल भोग्नुपर्ने सम्बन्धी कार्य गरिरहेको हुन्छ, त्यसैले आत्मालाई कर्ता भनिन्छ। श्रुतिमा आत्मालाई ज्ञाता र कर्ता भनिएको छ। **एष हि द्रष्टा स्रष्टा ( प्रश्न उपनिषद् ४.९ )**। वेदान्तसूत्र (२.३.१८) को **ज्ञोऽतएव** भन्ने र ( २.३.३३ ) को **कर्ता शास्त्रार्थवत्त्वात्** भन्ने श्लोकहरूबाट पनि यही कुराको पुष्टि हुन्छ।

इन्द्रियहरू कर्मका साधन वा उपकरण हुन्। यिनै इन्द्रियहरूका सहायताले आत्माले विभिन्न प्रकारका कर्म गर्दछ। प्रत्येक कर्मका लागि भिन्दाभिन्दै प्रयत्न हुन्छन् तर मानिसका हरेक क्रियाकलाप परमात्माको इच्छामा निर्भर हुन्छ। परमात्मा हरेकका हृदयमा मित्रजस्तो बनेर रहनु हुन्छ। परमेश्वर नै परमकारण हुनुहुन्छ। जो यी परिस्थितिहरूमा कृष्णभावनाभावित भएर हृदयबासी परमेश्वरका निर्देशनअनुसार कार्य गर्दछ त्यो स्वभावले कुनै पनि कर्मका बन्धनमा बाधिँदैन। पूर्णतः कृष्णभावनाभावित व्यक्ति अन्ततोगत्वा आफ्ना कर्महरूप्रति उत्तरदायी हुँदैन। उसका हरेक कुरा परमपरमात्मा श्रीभगवान्का इच्छामा निर्भर गर्दछ।

**शरीरवाङ्मनोभिर्यत्कर्म प्रारभते नरः ।**
**न्याय्यं वा विपरीतं वा पञ्चैते तस्य हेतवः ॥ १५ ॥**

**शरीर** — शरीरद्वारा; **वाक्** — वाणीद्वारा; **मनोभिः** — मनद्वारा; **यत्** — जो; **कर्म** — काम; **प्रारभते** — प्रारम्भ हुन्छ; **नरः** — मानिस; **न्याय्यम्** — उचित; **वा** — अथवा; **विपरीतम्** — विपरीत (अनुचित); **वा** — अथवा; **पञ्च** — पाँच; **एते** — यी सबै; **तस्य** — त्यसको; **हेतवः** — कारणहरू।

**मानिसले आफ्नो शरीर, मन र वचनले जे-जति राम्रा-नराम्रा कामहरू गर्दछ, ती सबै यी पाँच तत्त्वहरूका कारणले नै सम्पन्न हुन्छन्।**

**तात्पर्य :** यस श्लोकमा आएका उचित र अनुचित शब्द अत्यन्त महत्त्वपूर्ण छन्। शास्त्रले भनेको निर्देशनअनुसार गरिने कार्यलाई उचित कर्म भनिन्छ र शास्त्रका निर्देशक सिद्धान्तभन्दा विपरीत किसिमले गरिएका कामलाई अनुचित वा विपरीत कर्म भनिन्छ। यीमध्ये जुनसुकै काम गर्दा पनि तिनको पूर्णताका लागि उपयुक्त पाँच कारक तत्त्वहरूको आवश्यकता पर्दछ।

**तत्रैवं सति कर्तारमात्मानं केवलं तु यः ।**
**पश्यत्यकृतबुद्धित्वान्न स पश्यति दुर्मतिः ॥ १६ ॥**

**तत्र** — त्यहाँ; **एवम्** — यसरी; **सति** — भएर; **कर्तारम्** — कर्ता; **आत्मानम्** — स्वयम्लाई; **केवलम्** — केवल; **तु** — तर; **यः** — जसले; **पश्यति** — देख्दछ; **अकृतबुद्धित्वात्** — बुद्धिहीनताका कारणले; **न** — होइन; **सः** — त्यो; पश्यति — देख्दछ; **दुर्मतिः** — मूर्ख।

**यी पाँच कारणहरूलाई नमानेर जसले आफैँलाई कर्ता ठान्दछ त्यो व्यक्ति निश्चय नै बुद्धिमान् होइन। त्यस्ता व्यक्तिले वस्तुलाई यथार्थ रूपमा देख्न सक्दैनन्।**

**तात्पर्य :** मूर्ख मानिस आफ्नै हृदयभित्र मित्रजस्तो बनेर विराजमान भई सम्पूर्ण कर्महरू सञ्चालन गरिरहनुभएका परमात्मालाई बुझ्दैन। स्थान, कर्ता, प्रयास र इन्द्रियहरू यी भौतिक कारण मात्र हुन्। यी सबैको मुख्य वा अन्तिम कारण स्वयम् भगवान् हुनुहुन्छ। त्यसैले मानिसले चारवटा भौतिक कारणहरूलाई मात्र देखेर हुँदैन, यिनका साथै यीभन्दा माथिको परमसक्षम कारणलाई पनि देख्नु पर्दछ। जसले परमात्मालाई देख्दैन उसले आफैँलाई कर्ता ठान्दछ।

**यस्य नाहंकृतो भावो बुद्धिर्यस्य न लिप्यते ।**
**हत्वापि स इमाँल्लोकान्न हन्ति न निबध्यते ॥ १७ ॥**

**यस्य** — जसको; **न** — छैन; **अहंकृतः** — अहङ्कारको; **भावः** — भाव(स्वभाव); **बुद्धिः** — बुद्धि; **यस्य** — जसको; **न लिप्यते** — आसक्त हुँदैन; **हत्वा** — मारेर; **अपि** — पनि; **सः** — त्यो; **इमान्** — यो; **लोकान्** — संसारलाई; **न हन्ति** — मार्दैन; **न निबध्यते** — बाँधिदैन।

**जो झूटो अहङ्कारबाट प्रेरित हुँदैन, जसको बुद्धि आसक्त छैन त्यसले यो संसारमा मानिसलाई मारेर पनि नमारेको जस्तो हुन्छ र ऊ आफ्नो कर्मद्वारा पनि बाँधिदैन।**

**तात्पर्य :** यस श्लोकमा भगवान् अर्जुनलाई भन्नु हुन्छ— लडाइँ नगर्ने अर्जुनको इच्छा अहङ्कारबाट उत्पन्न भएको हो। अर्जुनले आफैँलाई कर्मका कर्ता मानेका छन्। उनले आफू भित्र र बाहिर जे भइरहेछ त्यो परमात्माको निर्देशन अनुरूप भइरहेछ भन्ने सोचेका छैनन्। कर्म गराउने कुनै परमनिर्देशक हुनुहुन्छ भन्ने कुराको ज्ञान नभए के का लागि काम गर्ने ? तर जसले कर्मका उपकरणहरूलाई कर्ताका रूपमा स्वयम् आफूलाई र परमनिर्देशकका रूपमा परमेश्वरलाई जान्दछ त्यो व्यक्ति नै हरेक कार्यमा पारङ्गत ठानिन्छ। यस्तो व्यक्ति कहिल्यै पनि मोहग्रस्त हुँदैन।

अहङ्कारका कारणले र ईश्वरविहीनता वा कृष्णभावना विहीन हुनाले

जीवमा वैयक्तिक क्रियाकलाप तथा त्यस्ता क्रियाकलापप्रति उत्तरदायित्वको उदय हुन थाल्दछ। जसले परमात्मा वा भगवान्‌को निर्देशनअनुसार कृष्णभावनाभावित भएर कार्य गर्दछ त्यसले कसैलाई मारे पनि मारेको मानिदैन। न ऊ कहिल्यै यस किसिमको हत्याको प्रतिफलद्वारा प्रभावित हुन्छ। आफूभन्दा माथिका अधिकृतको आज्ञानुसार कसैको वध गर्ने सैनिकलाई कुनै दण्ड दिइँदैंन तर त्यही सैनिकले यदि आफूखुसी कहीं कसैको हत्या गर्दछ भने निश्चय नै त्यसको निर्णय वा छानबिन कानूनी अदालतले गर्दछ।

**ज्ञानं ज्ञेयं परिज्ञाता त्रिविधा कर्मचोदना ।**
**कारणं कर्म कर्तेति त्रिविधः कर्मसंग्रहः ॥ १८ ॥**

**ज्ञानम्** — ज्ञान; **ज्ञेयम्** — ज्ञानको विषय; **परिज्ञाता** — जान्ने व्यक्ति; **त्रिविधा** — तीन प्रकारका; **कर्म** — काम; **चोदना** — प्रेरणा; **कारणम्** — इन्द्रियहरू; **कर्म** — कर्म; **कर्ता** — कर्ता; **इति** — यसरी; **त्रिविधः** — तीन प्रकारका; **कर्म** — कर्महरूको; **संग्रहः** — सञ्चय।

**ज्ञान, ज्ञानको विषय र ज्ञाता यी तीन तत्त्वहरू कर्म गर्न प्रेरित गर्ने कारण हुन् र इन्द्रियहरू (करण), कर्म र कर्ता यी तीन तत्त्व कर्मका अङ्ग हुन्।**

**तात्पर्य :** दैनिक कार्यका लागि तीन प्रकारका प्रेरणा ज्ञान, ज्ञेय र ज्ञाताको आवश्यकता हुन्छ। कर्मको उपकरण वा करण, स्वयम् कर्म र कर्तालाई कर्मको अङ्ग भनिन्छ। कुनै पनि व्यक्तिले गरेका कुनै पनि कर्ममा यी तीन तत्त्वहरू रहने गर्दछन्। कर्म गर्नुभन्दा पूर्व केही न केही उत्तेजना वा तत्परता हुन्छ जसलाई प्रेरणा भन्दछन्। कर्मभन्दा पहिले आउने कुनै समाधान नै त्यस कर्मको वास्तविक सूक्ष्म रूप हो। त्यसपछि कर्मले क्रियाको रूप लिन्छ। सर्वप्रथम मानिसमा सोच्ने, अनुभव गर्ने, र इच्छा गर्ने जस्ता मनोवैज्ञानिक प्रक्रियाहरू देखा पर्दछन्, जसलाई प्रेरणा भनिन्छ। यदि त्यो शास्त्रहरूबाट वा गुरुका उपदेशबाट प्राप्त भएको छ भने यस्तो प्रेरणा एकै किसिमको हुन्छ। यदि प्रेरणा पनि हुन्छ र कर्ता पनि छ भने सम्पूर्ण इन्द्रियहरूको केन्द्र मानिने मनका सहायताले वास्तविक कर्महरू सम्पन्न हुने गर्दछन्। कुनै कर्मको सम्पूर्ण अङ्गहरूको समष्टि रूपलाई कर्मसंग्रह भनिन्छ।

**ज्ञानं कर्म च कर्ता च त्रिधैव गुणभेदतः ।**
**प्रोच्यते गुणसंख्याने यथावच्छृणु तान्यपि ॥ १९ ॥**

**ज्ञानम्** — ज्ञान; **कर्म** — कर्म; **च** — पनि; **कर्ता** — कर्ता; **च** — पनि;

**त्रिधा** — तीन प्रकारका; **एव** — निश्चय नै; **गुणभेदतः** — प्रकृतिका विभिन्न गुणअनुरूप; **प्रोच्यते** — भनिन्छ; **गुणसंख्याने** — विभिन्न गुणहरूका रूपमा; **यथावत्** — जस्ताको तस्तै रूपमा; **शृणु** — सुन; **तानि** — ती सबै; **अपि** — पनि।

**प्रकृतिका भिन्दाभिन्दै तीन गुणअनुरूप नै ज्ञान, कर्म र कर्ताका तीन तीन भिन्नता भएका हुन्, अब मबाट तिमी तिनका विषयमा सुन।**

**तात्पर्य :** चौधौँ अध्यायमा प्रकृतिका तीन गुणहरूको सविस्तार वर्णन भइसकेको छ। त्यस अध्यायमा भनिएको छ—सतोगुण प्रकाशक हुन्छ, रजोगुण भौतिकवादी हुन्छ र तमोगुणले आलस्य र अकर्मण्यतालाई प्रेरित गर्दछ। प्रकृतिका सबै गुणहरू बन्धनकारी हुन्छन्। ती गुणहरू मुक्तिका कारण हुन सक्दैनन्। सतोगुणमा पनि मानिस बाँधिएकै हुन्छ। सत्रौँ अध्यायमा विभिन्न प्रकारका मानिसहरूद्वारा प्रकृतिका विभिन्न गुणहरूमा रहेर गरिने विभिन्न प्रकारका पूजाको वर्णन गरिएको छ। यस श्लोकमा भगवान् प्रकृतिका तीन गुणअनुसार स्वतः देखा पर्ने विभिन्न प्रकारका ज्ञान, कर्ता र कर्मका बारेमा जानकारी दिन चाहनु हुन्छ।

**सर्वभूतेषु येनैकं भावमव्ययमीक्षते ।**
**अविभक्तं विभक्तेषु तज्ज्ञानं विद्धि सात्त्विकम् ॥ २० ॥**

**सर्वभूतेषु** — सम्पूर्ण प्राणीहरूमा; **येन** — जसबाट; **एकम्** — एउटा; **भावम्** — अवस्था; **अव्ययम्** — अविनाशी; **ईक्षते** — देख्दछ (देखिन्छ); **अविभक्तम्** — अविभाजित; **विभक्तेषु** — असङ्ख्य विभाजनमा; **तत्** — त्यो; **ज्ञानम्** — ज्ञानलाई; **विद्धि** — जान; **सात्त्विकम्** — सतोगुणी।

**जुन ज्ञानद्वारा असङ्ख्य रूपमा विभाजित सम्पूर्ण जीवात्मामा एउटै अविभाजित आध्यात्मिक स्वभाव देखिन्छ त्यो ज्ञान सात्त्विक ज्ञान हो भनेर बुझ। सम्झ।**

**तात्पर्य :** जसले प्रत्येक प्राणीमा, त्यो देवता होस्, मानिस होस्, पशु होस्, पक्षी होस् वा जलजन्तु होस्, एउटै आत्मा देख्दछ त्यसले सात्त्विक ज्ञान प्राप्त गरेको हुन्छ। पूर्वजन्मका कर्मअनुसार शरीर भिन्न-भिन्न भए पनि सम्पूर्ण प्राणीहरूभित्र एउटै आत्मा हुन्छ। सातौँ अध्यायमा वर्णन गरिएअनुसार परमेश्वरकी पराप्रकृतिका कारणले नै प्रत्येक प्राणीका शरीरमा जीवनशक्तिको अभिव्यक्ति हुन्छ। यस प्रकार त्यही एउटै पराशक्ति वा जीवनशक्तिलाई सबैमा देख्नसक्नु नै सतोगुणी दृष्टि हो। शरीरहरू नाशवान् भए पनि त्यो जीवनशक्ति

वा प्राणशक्ति अविनाशी छ। जो भिन्नता देखिन्छ त्यो शरीरका कारणले देखिएको हो। बद्ध जीवनमा धेरै-धेरै भौतिक शरीर वा रूपहरूको अस्तित्व देखिन्छ। त्यसैले त्यो जीवनशक्ति पनि विभाजित जस्तै प्रतीत हुन्छ। यस किसिमको निराकार ज्ञान पनि आत्मसाक्षात्कारको एउटा पक्ष हो।

**पृथक्त्वेन तु यज्ज्ञानं नानाभावान्पृथग्विधान् ।**
**वेत्ति सर्वेषु भूतेषु तज्ज्ञानं विद्धि राजसम् ॥ २१॥**

**पृथक्त्वेन** — विभाजनका कारणले; **तु** — तर; **यत्** — जो; **ज्ञानम्** — ज्ञान; **नानाभावान्** — अनेक प्रकारका अवस्थाहरू; **पृथक्विधान्** — विभिन्न; **वेत्ति** — जान्दछ; **सर्वेषु** — सबैमा; **भूतेषु** — प्राणीहरूमा; **तत्** — त्यो; **ज्ञानम्** — ज्ञान; **विद्धि** — जान्नु पर्दछ; **राजसम्** — रजोगुणी।

**जुन ज्ञानद्वारा मानिसले हरेक भिन्न शरीरमा भिन्दाभिन्दै किसिमको जीवात्मा देख्दछ त्यस्तो ज्ञानलाई तिमी राजसी ज्ञान भनेर जान।**

**तात्पर्य :** भौतिक शरीर नै जीवात्मा हो भन्ने धारणा र शरीरको विनाश भएपछि चेतना पनि नष्ट हुन्छ भन्ने ज्ञान दुवै राजसी हुन्। यो ज्ञानअनुसार एउटा शरीर अर्को शरीरभन्दा भिन्न छ, किनभने तिनमा चेतनाको विकास भिन्दाभिन्दै प्रकारले हुन्छ, नत्र चेतनाको अभिव्यक्ति दिने आत्माको अस्तित्व नै पृथक् हुने थिएन। शरीर स्वयम् नै आत्मा हो र शरीरभन्दा पर आत्माको छुट्टै अस्तित्व छैन। यस प्रकारको ज्ञानअनुसार चेतना अस्थायी हो। अथवा आत्माको कुनै छुट्टै व्यक्तिगत अस्तित्व छैन, आत्मा सर्वव्यापक छ, यो एउटै छ, ज्ञानले परिपूर्ण छ, तर यो शरीर अस्थायी र यो अज्ञानको अभिव्यक्ति हो। अथवा यो शरीरभन्दा पर कुनै विशेष व्यष्टि आत्मा पनि छैन र परमात्मा पनि छैन भन्ने यस्ता सम्पूर्ण अवधारणाहरू रजोगुणका उत्पादन मानिन्छन्।

**यत्तु कृत्स्नवदेकस्मिन्कार्ये सक्तमहैतुकम् ।**
**अतत्त्वार्थवदल्पं च तत्तामसमुदाहृतम् ॥ २२॥**

**यत्** — जो; **तु** — तर; **कृत्स्नवत्** — पूर्णरूपले; **एकस्मिन्** — एउटै; **कार्ये** — काममा; **सक्तम्** — आसक्त; **अहैतुकम्** — बिनाकारण; **अतत्त्व-अर्थवत्** — यथार्थ ज्ञानबिना; **अल्पम्** — अति तुच्छ; **च** — पनि; **तत्** — त्यो; **तामसम्** — तमोगुणी; **उदाहृतम्** — भनिन्छ।

**यदि मानिस सत्यको जानकारी बिना एकै प्रकारको अति तुच्छ कार्यलाई नै सबै कुरा मानेर त्यसैमा आसक्त हुन्छ भने त्यस्तो ज्ञान तामसी हो।**

**तात्पर्य :** सामान्य मानिसको ज्ञान सधैँ तामसी वा तमोगुणी हुन्छ किनभने

बद्ध जीवनमा रहने प्रत्येक जीवात्माको जन्म तमोगुणमा नै हुने गर्दछ। जसले आचार्यहरू वा शास्त्रका उपदेशबाट आफ्नो ज्ञानको विकास गर्दैन त्यसको ज्ञान शरीरमा मात्र सीमित रहन्छ। उसमा शास्त्रहरूका निर्देशनअनुरूप कार्य गर्ने मानसिकता हुँदैन। त्यस्ता व्यक्तिका लागि भगवान् नै पैसा हो र ज्ञानको अर्थ शारीरिक आवश्यकता सन्तुष्टि हो। यस्तो ज्ञानको परमसत्यसँग कुनै सरोकार हुँदैन। यो ज्ञान साधारण पशुको ज्ञान जस्तो वा आहार निद्रा, भय र मैथुनको ज्ञान जस्तो हुन्छ। यहाँ यस किसिमको ज्ञानलाई तमोगुणबाट उत्पन्न हुने ज्ञान भनिएको छ। अर्को शब्दमाभन्दा यो शरीरभन्दा परको आत्मासम्बन्धी ज्ञानलाई सात्त्विक भनिन्छ। भौतिक विषयसम्बन्धी तर्कवितर्क र मनोधर्मी चिन्तनद्वारा धेरै धेरै वाद-सिद्धान्तहरू जन्माउने ज्ञान राजसी ज्ञान हो र शारीरिक सुखसुविधामा मात्र रमाउने ज्ञान तामसी ज्ञान हो।

**नियतं सङ्गरहितमरागद्वेषतः कृतम् ।**
**अफलप्रेप्सुना कर्म यत्तत्सात्त्विकमुच्यते ॥ २३ ॥**

**नियतम्** — नियमित; **सङ्गरहितम्** — आसक्तिरहित; **अरागद्वेषतः** — राग र द्वेषरहित; **कृतम्** — गरिएको; **अफलप्रेप्सुना** — कर्मफलको इच्छा नभएका व्यक्तिद्वारा; **कर्म** — कर्म; **यत्** — जो; **तत्** — त्यो; **सात्त्विकम्** — सतोगुणी; **उच्यते** — भनिन्छ।

**फलको इच्छा नराखी राग, द्वेष र आसक्तिरहित भएर नियमित रूपले गरिने कर्मलाई सात्त्विक कर्म भनिन्छ।**

**तात्पर्य :** समाजका विभिन्न वर्णाश्रममा शास्त्रले निर्धारण गरेका आफ्ना-आफ्ना व्यवसायगत कर्तव्यहरू हुन्छन्। ती कर्महरूलाई आसक्तिरहित भएर स्वामित्वको भाव नराखी राग र द्वेषविहीन बनेर सम्पन्न गर्नु पर्दछ। यसरी कर्तव्य कर्मको पालन गर्दा आफू र आफ्नो सन्तुष्टिका लागि होइन कृष्णभावनामय बनेर भगवान् श्रीकृष्णको सन्तुष्टिका लागि गर्नु पर्दछ अनि यस्तो कर्मलाई सात्त्विक वा सतोगुणी कर्म भन्दछन्।

**यत्तु कामेप्सुना कर्म साहंकारेण वा पुनः ।**
**क्रियते बहुलायासं तद् राजसमुदाहृतम् ॥ २४ ॥**

**यत्** — जो; **तु** — तर; **कामइप्सुना** — फलको इच्छा राख्ने व्यक्तिद्वारा; **कर्म** — काम; **स-अहंकारेण** — अहङ्कारले युक्त भएर; **वा** — अथवा; **पुनः** — फेरि; **क्रियते** — गरिन्छ; **बहुल-आयासम्** — परिश्रमपूर्वक; **तत्** — त्यो; **राजसम्** — रजोगुणी; **उदाहृतम्** — भनिन्छ।

**तर आफ्नै इच्छापूर्तिका लागि अहङ्कारको भाव राखेर कठिन परिश्रमपूर्वक गरिएको कर्मलाई रजोगुणी वा राजसी कर्म भन्दछन्।**

**अनुबन्धं क्षयं हिंसामनपेक्ष्य च पौरुषम् ।**
**मोहादारभ्यते कर्म यत्तत्तामसमुच्यते ॥ २५ ॥**

**अनुबन्धम्** — भावी बन्धनको; **क्षयम्** — विनाश; **हिंसाम्** — अरूलाई कष्ट; **अनपेक्ष्य** — परिणामको विचार नगरीकन; **च** — पनि; **पौरुषम्** — आफ्नो पुरुषार्थ; **मोहाद्** — मोहद्वारा; **आरभ्यते** — सुरु गरिएको; **कर्म** — कर्म; **यत** — जो; **तत्** — त्यो; **तामसम्** — तमोगुणी; **उच्यते** — भनिन्छ।

**शास्त्रका आदेशहरूसँग असम्बन्धित भई भावी बन्धनको वास्ता नगरी हिंसा वा अर्कालाई दुःख दिनका लागि मोहवश गरिने कर्म तामसी हो।**

**तात्पर्य :** मानिसले आफूले गरेका कर्मको हिसाब या राज्यलाई या यमदूत भनिने परमेश्वरका दूतहरूलाई बुझाउनु पर्दछ। उत्तरदायित्वविहीन कर्म विनाशकारी हुन्छ। किनभने यस्ता कर्मबाट शास्त्रीय विधिविधानको नाश हुन्छ। यस किसिमका कर्म प्रायः हिंसामा आधारित हुन्छन् र अन्य प्राणीहरूलाई कष्ट दिने हुन्छन्। उत्तरदायित्वविहीन यस्ता कर्महरू, विशेष गरी आफ्ना निजी अनुभवका आधारमा गरिन्छन्। यसैलाई मोह भनिन्छ। यस्ता सबै मोहग्रस्त कर्महरू तमोगुणबाट उत्पन्न हुन्छन्।

**मुक्तसङ्गोऽनहंवादी धृत्युत्साहसमन्वितः ।**
**सिद्ध्यसिद्ध्योर्निर्विकारः कर्ता सात्त्विक उच्यते ॥ २६ ॥**

**मुक्तसङ्गः** — सम्पूर्ण सांसारिक संसर्गबाट मुक्त; **अनहंवादी** — अहङ्कार-रहित; **धृति** — सङ्कल्पका साथ; **उत्साह** — उत्साहका साथ; **समन्वितः** — सुयोग्य; **सिद्धि** — पूर्णता प्राप्त गर्दा; **असिद्ध्योः** — असफल हुँदा; **निर्विकारः** — परिवर्तन नहुने; **कर्ता** — कर्तालाई; **सात्त्विकः** — सतोगुणी; **उच्यते** — भनिन्छ।

**जो व्यक्ति प्रकृतिका गुणहरूको सम्पर्कबाट मुक्त भएर, निरहङ्कारी बनेर तथा धैर्यशील र अत्यन्त उत्साही बनेर सफलता र असफलतामा विचलित नभई कर्म गर्दछ त्यसलाई सतोगुणी कर्ता भनिन्छ।**

**तात्पर्य :** कृष्णभावनामा लागेको मानिस सधैँभरि प्रकृतिका गुणहरूभन्दा माथि उठेको हुन्छ। उसले आफूलाई रुचि भएका कर्मफलको पनि आशा राख्दैन, किनभने ऊ झूटो अहङ्कार र घमण्डभन्दा माथि उठेको हुन्छ। तैपनि ऊ यस्ता कार्यहरू पूर्ण नभइन्जेल उत्साहपूर्वक त्यसमा लागेको हुन्छ। यसमा उसले

कष्ट पाए पनि उसले चिन्ता गर्दैन। ऊ सधैँ उत्साहपूर्ण रहन्छ। सफलता र असफलताको वास्ता पनि उसले गर्दैन। ऊ सुख र दुःखमा समान रहन्छ। यस्तो किसिमको कर्तालाई सतोगुणमा अवस्थित कर्ता भनिन्छ।

**रागी कर्मफलप्रेप्सुर्लुब्धो हिंसात्मकोऽशुचिः ।**
**हर्षशोकान्वितः कर्ता राजसः परिकीर्तितः ॥ २७॥**

रागी — अत्यन्त आसक्त; **कर्मफल** — कर्मको फल; **प्रेप्सुः** — इच्छा गर्दै; लुब्धः — लोभी; **हिंसात्मकः** — सधैँ ईर्ष्यालु; **अशुचिः** — अपवित्र; **हर्ष-शोक अन्वितः** — हर्ष र शोकले युक्त; **कर्ता** — यस्तो कर्ता; **राजसः** — रजोगुणी; **परिकीर्तितः** — भनिन्छ।

**कर्म र कर्मफलप्रति आसक्त हुँदै फल भोग्न चाहने लोभी, सधैँ ईर्ष्यालु, अपवित्र र सुख र दुःखमा विचलित हुने कर्तालाई राजसी भनिन्छ।**

**तात्पर्य :** आफ्नो घर-परिवार, पत्नी, सन्तान, भान्सा घरजस्ता भौतिक वस्तुहरूप्रति मानिसको अत्यन्त अनुराग हुने हुनाले ऊ आफूले गरेको कुनै काम र त्यसको फलप्रति पनि उत्तिकै आसक्त हुन पुग्दछ। यस्तो व्यक्तिमा जीवनलाई उच्च स्तरसम्म उठाउने कुनै चाहना हुँदैन। उनीहरू केवल यही जगत्लाई मात्र भौतिक रूपले बढी सम्पन्न र आरामदायी बनाउन चाहन्छन्। त्यस्ता मानिस अति लोभी हुन्छन् र आफूले जे प्राप्त गरेका छन् त्यसलाई चिरस्थायी तथा कहिल्यै नहराउने ठान्दछन्। तिनीहरू अरूको ईर्ष्या गर्दछन् र इन्द्रियहरूको सन्तुष्टिका लागि जस्तोसुकै गलत काम पनि गर्न तयार हुन्छन्। त्यसैले यस्ता मानिसहरू अपवित्र हुन्छन् र तिनले आफ्नो आर्जन पवित्र छ वा अपवित्र छ, त्यसको पनि वास्ता गर्दैनन्। आफ्नो कार्य सफल हुँदा अत्यन्त खुशी हुन्छन् र असफल हुँदा अत्यन्त दुःखी वा चिन्तित हुन्छन्। यस प्रकारका कर्ता राजसी वा रजोगुणी कर्ता हुन्।

**अयुक्तः प्राकृतः स्तब्धः शठो नैष्कृतिकोऽलसः ।**
**विषादी दीर्घसूत्री च कर्ता तामस उच्यते ॥ २८॥**

**अयुक्तः** — शास्त्रवचन नमान्ने; **प्राकृतः** — भौतिकवादी; **स्तब्धः** — हठी; **शठः** — कपटी; **नैष्कृतिकः** — अर्काको अपमान गर्न निपुण; **अलसः** — अल्छी; **विषादी** — चिन्तित; **दीर्घसूत्री** — काम बाँकी राख्ने सुस्ती; **च** — पनि; **कर्ता** — कर्ता; **तामसः** — तमोगुणी; **उच्यते** — भनिन्छ।

**सधैँ शास्त्रनियम विरूद्ध काम गर्न तत्पर, भौतिकतावादी, एकोहोरे जिद्दी, ठग र अर्काको अपमान गर्न निपुण, सधैँ खिन्न भइरहने, ढीलो काम गर्ने तथा अल्छी कर्तालाई तमोगुणी भनिन्छ।**

**तात्पर्य :** मानिसले कुन-कुन कर्म गर्न हुन्छ र कुन-कुन कर्म गर्न हुँदैन भन्ने जानकारी हामीले शास्त्रीय आदेशहरूबाट पाउँदछौँ। शास्त्रका ती वचनहरूलाई बेवास्ता गरेर गर्न नहुने काममा संलग्न रहने व्यक्तिहरू प्रायः भौतिकवादी हुन्छन्। तिनीहरू प्रकृतिका गुणअनुसार काम गर्दछन् तर शास्त्रका निर्देशनअनुसारका काम गर्दैनन्। यस किसिमका कर्ताहरू भद्र हुँदैनन् र सामान्यतया तिनीहरू सधैँ धूर्त र अर्काको अपमान गर्ने कार्यमा निपुण हुन्छन्। तिनीहरू अति अल्छी हुन्छन्। गर्नुपर्ने कर्तव्यहरू हुँदाहुँदै पनि आफ्नो काम ठीकसँग गर्दैनन् र पछि गरौँला भनेर राख्दछन्। त्यसैले गर्दा तिनीहरू खिन्न देखिन्छन्। तिनीहरू हरेक काम ढीलो गर्ने गर्दछन्। एक घण्टामा गर्न सकिने कामलाई वर्षौंसम्म धकेलिरहन्छन्। यस्ता कर्ताहरू तमोगुणी मानिन्छन्।

**बुद्धेर्भेदं धृतेश्चैव गुणतस्त्रिविधं श्रृणु ।**
**प्रोच्यमानमशेषेण पृथक्त्वेन धनंजय ॥ २९ ॥**

**बुद्धेः** — बुद्धिको; **भेदम्** — अन्तर; **धृतेः** — धैर्यको; **च** — पनि; **एव** — निश्चय नै; **गुणतः** — प्रकृतिका गुणहरूद्वारा; **त्रिविधम्** — तीन प्रकारका; **श्रृणु** — सुन; **प्रोच्यमानम्** — मद्वारा भनिएको; **अशेषेण** — विस्तारपूर्वक; **पृथक्त्वेन** — भिन्नभिन्न प्रकारले; **धनंजय** — हे धनका विजेता।

**हे धनञ्जय! भौतिक प्रकृतिका तीन गुणअनुसार हुने विभिन्न प्रकारका ज्ञान र धृतिका विषयमा अब म तिमीलाई विस्तारपूर्वक भन्दछु, सुन।**

**तात्पर्य :** ज्ञान, ज्ञानको विषय र ज्ञातालाई भौतिक प्रकृतिका गुणअनुसार तीन तीन भागमा वर्गीकरण गरेर व्याख्या गरेपछि कर्ताको बुद्धि र सङ्कल्पलाई पनि भगवान्‌ले त्यसै गरी व्याख्या गर्दै हुनुहुन्छ।

**प्रवृत्तिं च निवृत्तिं च कार्याकार्ये भयाभये ।**
**बन्धं मोक्षं च या वेत्ति बुद्धिः सा पार्थ सात्त्विकी ॥ ३० ॥**

**प्रवृत्तिम्** — कर्मलाई; **च** — पनि; **निवृत्तिम्** — अकर्मलाई; **च** — तथा; **कार्य** — के गर्नु पर्दछ र; **अकार्य** — के गर्नु हुँदैन; **भय** — डर; **अभये** — निर्भयता; **बन्धम्** — बन्धन; **मोक्षम्** — मुक्ति; **च** — तथा; **या** — जुन; **वेत्ति** — जान्दछ; **बुद्धिः** — बुद्धि; **सा** — त्यो; **पार्थ** — हे पृथापुत्र; **सात्त्विकी** — सतोगुणी।

**हे पार्थ! जुन बुद्धिद्वारा मानिसले के गर्नु पर्दछ र के गर्नु हुँदैन, केसँग डराउनु पर्दछ केसँग डराउनु हुँदैन, के कुराले बन्धनमा पार्दछ र कुन कुराले मुक्ति दिन्छ भन्ने जान्दछ, त्यसलाई सात्त्विक बुद्धि भन्दछन्।**

**तात्पर्य :** शास्त्रहरूका निर्देशनअनुसार कर्म गर्नुलाई र गर्नयोग्य कर्म सम्पन्न गर्नुलाई प्रवृत्ति भन्दछन्। निर्देशित नभएका कर्महरू गर्नहुन्न। शास्त्रका निर्देशनहरूको ज्ञान नभएको मानिस कर्म र कर्मफलद्वारा बन्धनमा पर्दछ। राम्रो, नराम्रो वा ठीक बेठीक छुट्याउने बुद्धि सतोगुणी हो।

**यया धर्ममधर्मं च कार्यं चाकार्यमेव च ।**
**अयथावत्प्रजानाति बुद्धिः सा पार्थ राजसी ॥ ३१ ॥**

**यया** — जसद्वारा; **धर्मम्** — धर्मका सिद्धान्तहरू; **अधर्मम्** — अधर्मलाई; **च** — तथा; **कार्यम्** — गर्नुपर्ने काम; **च** — पनि; **अकार्यम्** — गर्न नहुने कार्य; **एव** — निश्चय नै; **च** — पनि; **अयथावत्** — अपूर्ण किसिमले; **प्रजानाति** — जान्दछ; **बुद्धिः** — बुद्धि; **सा** — त्यो; **पार्थ** — हे पृथापुत्र; **राजसी** — रजोगुणी।

**हे पार्थ! धर्म र अधर्म छुट्याउन नसक्ने तथा गर्नुपर्ने कार्य र गर्न नहुने कार्य छुट्याउन नसक्ने बुद्धि राजसी हो।**

**अधर्मं धर्ममिति या मन्यते तमसावृता ।**
**सर्वार्थान् विपरीतांश्च बुद्धिः सा पार्थ तामसी ॥ ३२ ॥**

**अधर्मम्** — अधर्मलाई; **धर्मम्** — धर्म; **इति** — यस्तो; **या** — जो; **मन्यते** — सोँच्दछ; **तमसा** — भ्रमद्वारा; **आवृता** — ढाकिएको; **सर्वअर्थान्** — सम्पूर्ण वस्तुलाई; **विपरीतान्** — गलत दिशामा; ( **विपरीत दिशामा** ); **च** — पनि; **बुद्धिः** — बुद्धि; **सा** — त्यो; **पार्थ** — हे पृथापुत्र; **तामसी** — तमोगुणी।

**हे पृथा पुत्र! अज्ञानको अन्धकार र भ्रमका अधीनमा परेर धर्मलाई अधर्म र अधर्मलाई धर्म मान्ने तथा सधैँ गलत दिशातिर जान प्रयत्न गर्ने बुद्धिलाई तामसी बुद्धि भन्दछन्।**

**तात्पर्य :** तामसी बुद्धिले जहिले जुन दिशामा काम गर्नुपर्ने हो त्यो नगरेर सधैँ उल्टो दिशामा काम गर्दछ। यस्तो बुद्धिले जो वास्तविक धर्म होइन त्यसलाई धर्म मानेर स्वीकार्दछ र वास्तविक धर्मलाई बहिष्कार गर्दछ। तमोगुणी मानिस सामान्य व्यक्तिलाई महात्मा ठान्दछ र महात्मालाई सामान्य व्यक्ति ठान्दछ। तिनीहरू सत्यलाई असत्य मान्दछन् र असत्यलाई सत्य मानेर स्वीकार गर्दछन्। यसरी सम्पूर्ण क्रियाकलापमा तिनीहरूले गलत मार्गको अनुसरण गर्दछ। त्यसैले तिनीहरूको बुद्धिलाई तामसी भनिएको हो।

**धृत्या यया धारयते मनः प्राणेन्द्रियक्रियाः ।**
**योगेनाव्यभिचारिण्या धृतिः सा पार्थ सात्त्विकी ॥ ३३ ॥**

**धृत्या** — सङ्कल्पद्वारा; **यया** — जसले; **धारयते** — धारणगर्दछ; **मनः** — मनको; **प्राण** — प्राणका; **इन्द्रिय** — र इन्द्रियहरूका; **क्रियाः** — क्रियाकलापहरूलाई; **योगेन** — योगाभ्यासद्वारा; **अव्यभि-चारिण्या** — अखण्डित; **धृतिः** — सङ्कल्प; **सा** — त्यो; **पार्थ** — हे पृथापुत्र; **सात्त्विकी** — सतोगुणी हो।

**हे पार्थ! त्यो सङ्कल्पलाई सात्त्विक भनिन्छ जो अखण्ड हुन्छ, जसद्वारा योगाभ्यास अचल भएर धारण गरिन्छ र जसले मन, प्राण र इन्द्रियहरूका क्रियाकलापलाई नियन्त्रण गर्दछ।**

**तात्पर्य :** योग परमात्मालाई जान्ने एउटा साधन हो। सङ्कल्पका साथ आफ्ना मन, प्राण र इन्द्रियहरूका क्रियाकलापलाई परमात्मामा एकाग्र गरेर स्वयम् आफू पनि दृढतापूर्वक परमात्मामा नै स्थिर रहने व्यक्ति कृष्णभावनामा संलग्न हुन्छ। यस प्रकारको धारणा वा सङ्कल्पलाई सतोगुणी सङ्कल्प भनिन्छ। **अव्यभिचारिण्या** शब्द यहाँ अत्यन्त अर्थपूर्ण छ। यसले के सङ्केत गरेको छ भने, कृष्णभावनामा संलग्न रहेको मानिस कहिल्यै पनि अरू कुनै क्रियाकलापद्वारा विचलित हुँदैन।

**यया तु धर्मकामार्थान् धृत्या धारयतेऽर्जुन ।**
**प्रसङ्गेन फलाकाङ्क्षी धृतिः सा पार्थ राजसी ॥ ३४ ॥**

**यया** — जसद्वारा; **तु** — तर; **धर्म** — धार्मिकता; **काम** — इन्द्रियतृप्ति; **अर्थान्** — आर्थिक विकास; **धृत्या** — सङ्कल्पद्वारा; **धारयते** — धारण गर्दछ; **अर्जुन** — हे अर्जुन!; **प्रसङ्गेन** — आसक्तिका कारणले; **फल-आकाङ्क्षी** — कर्मफलको इच्छुक; **धृतिः** — धारणा (सङ्कल्प); **सा** — त्यो; **पार्थ** — हे पृथापुत्र; **राजसी** — रजोगुणी हो।

**तर हे अर्जुन्! जुन धारणाले गर्दा मानिस धर्म, अर्थ र कामको प्रतिफलमा लिप्त रहन्छ, त्यो धारणा राजसी हो।**

**तात्पर्य :** जो व्यक्ति धार्मिक वा आर्थिक क्रियाकलापका कर्मफलमा सधैँ इच्छुक हुन्छ, इन्द्रियतृप्ति नै जसको एकमात्र चाहना हुन्छ र त्यसैमा जसको मन, प्राण तथा इन्द्रियहरू संलग्न छन्, त्यस्तो धारणा भएको व्यक्ति रजोगुणी हो।

**यया स्वप्नं भयं शोकं विषादं मदमेव च ।**
**न विमुञ्चति दुर्मेधा धृतिः सा पार्थ तामसी ॥ ३५ ॥**

यया — जसद्वारा; **स्वप्नम्** — सपना; **भयम्** — डर; **शोकम्** — शोक; **विषादम्** — खिन्नता; **मदम्** — मोह (मात); **एव** — निश्चय नै; **च** — पनि; **न विमुञ्चति** — त्याग्दैन; **दुर्मेधा** — दुर्बुद्धि; **धृतिः** — सङ्कल्प; **सा** — त्यो; **पार्थ** — हे पृथापुत्र !; **तामसी** — तमोगुणी हो।

**हे पार्थ! जुन सङ्कल्प सप्ना, डर, शोक, खिन्यता र मोहभन्दा माथि उठ्न सक्दैन त्यस्तो बुद्धिविहीन सङ्कल्प तामसी वा तमोगुणी हो।**

**तात्पर्य :** यसबाट सतोगुणी व्यक्तिले सपना नै देख्दैन भन्ने निष्कर्ष निकाल्नु हुँदैन। यहाँ स्वप्नको अर्थ धेरै सुत्नु वा निदाउनु हो। मानिस सतोगुणी होस् वा रजोगुणी होस् वा तमोगुणी, सपना सबैले देख्दछन्। सपना एउटा प्राकृतिक घटना हो। तर जसले आफूलाई अतिनिद्राबाट बचाउन सक्दैन, जसले भौतिक विषयभोगको अहङ्कारलाई हटाउन सक्दैन, जो सधैँ भौतिक जगत्माथि प्रभुत्व कायम गर्ने सपना देखिरहन्छ, र जसका प्राण, मन र इन्द्रियहरू यसैमा संलग्न छन्, त्यस्ता व्यक्तिलाई तामसी धारणा भएको मानिन्छ।

**सुखं त्विदानीं त्रिविधं शृणु मे भरतर्षभ ।**
**अभ्यासाद्रमते यत्र दुःखान्तं च निगच्छति ॥ ३६ ॥**

**सुखम्** — सुख; **तु** — तर; **इदानीम्** — अहिले; **त्रिविधम्** — तीन प्रकारका; **श्रृणु** — सुन; **मे** — मबाट; **भरतऋषभ** — हे भरत श्रेष्ठ; **अभ्यासात्** — अभ्यासद्वारा; **रमते** — भोग्दछ; **यत्र** — जहाँ; **दुःख** — दुःखको; **अन्तम्** — अन्त्य; **च** — पनि; **निगच्छति** — प्राप्त गर्दछ।

**हे भरतश्रेष्ठ! अब मबाट तीन प्रकारका सुखका बारेमा सुन, बद्ध जीव अभ्यासद्वारा प्रथमतः ती सुखहरूमा रमाउँदछ र कहिलेकाहीँ तिनैद्वारा ऊ सबै प्रकारका दुःखको अन्त्यसम्म पनि पुग्दछ।**

**तात्पर्य :** बद्ध जीव बारम्बार सांसारिक सुख भोग गर्ने प्रयास गर्दछ। यसरी ऊ 'चर्वित चर्वण' अर्थात् एकपटक चपाएको वस्तुलाई फेरि चपाउने काम गर्दछ, तर कहिलेकाहीँ यस्तै प्रकारका भोगअन्तर्गत महान्आत्माको सत्सङ्ग पाएर ऊ सांसारिक बन्धनबाट मुक्त हुन पुग्दछ। अर्को शब्दमा बद्ध जीव सधैँभरि कुनै न कुनै प्रकारका इन्द्रियभोगमा लागेको हुन्छ तर जब सत्सङ्गद्वारा उसले यो बारम्बार दोहोरिइरहने एउटै वस्तु हो भन्ने बुझ्दछ, त्यस समय आफ्नो

वास्तविक कृष्णभावनाप्रति ऊ जागृत हुन्छ अनि कहिले ऊ यसरी नै बारम्बार दोहोरिइरहने तथाकथित सुखबाट मुक्त पनि हुन पुग्दछ।

**यत्तदग्रे विषमिव परिणामेऽमृतोपमम् ।**
**तत्सुखं सात्त्विकं प्रोक्तमात्मबुद्धिप्रसादजम् ॥ ३७॥**

यत् — जो; **तत्** — त्यो; **अग्रे** — सुरुमा; **विषम् इव** — विष जस्तै; **परिणामे** — अन्त्यमा; **अमृत** — अमृत; **उपमम्** — जस्तै; **तत्** — त्यो; **सुखम्** — सुख; **सात्त्विकम्** — सतोगुणी; **प्रोक्तम्** — भनिन्छ; **आत्म** — आफ्नो; **बुद्धि** — बुद्धिको; **प्रसादजम्** — प्रसन्नताबाट उत्पन्न।

**जो सुरुमा विषजस्तो लागे पनि अन्त्यमा अमृत समान हुन्छ र मानिसलाई आत्मसाक्षात्कारका लागि उठाउँदछ त्यस्तो सुखलाई सात्त्विक सुख भनिन्छ।**

**तात्पर्य :** आत्मसाक्षात्कारको विकासमा लागेको मानिसले मन र इन्द्रियहरूलाई नियन्त्रण गर्न र मनलाई आत्मामा एकाग्र गर्नका लागि धेरै विधिनियमहरूको पालना गर्नु पर्दछ। यी विधिहरू अत्यन्त कठिन छन्, विषजस्तै नमिठा छन् तर यी नियमहरूको पालनमा कोही सफल भयो र त्यो दिव्य स्थिति प्राप्त गऱ्यो भने उसले वास्तविक अमृतको पान गर्न थाल्दछ र ऊ जीवनमा रमाउँदछ।

**विषयेन्द्रियसंयोगाद्यत्तदग्रेऽमृतोपमम् ।**
**परिणामे विषमिव तत्सुखं राजसं स्मृतम् ॥ ३८॥**

**विषय** — इन्द्रियका विषयहरूको; **इन्द्रिय** — इन्द्रियहरू; **संयोगात्** — संयोगबाट; **यत्** — जुन; **तत्** — त्यो; **अग्रे** — सुरुमा; **अमृत-उपमम्** — अमृतजस्तै; **परणामे** — अन्त्यमा; **विषम्-इव** — विष जस्तै; **तत्** — त्यो; **सुखम्** — सुख; **राजसम्** — रजोगुणी; **स्मृतम्** — मानिन्छ।

**विषयसँग इन्द्रियहरूको सम्पर्क हुँदा इन्द्रियहरूबाट जुन सुख प्राप्त हुन्छ र जुन सुख सुरुमा अमृतजस्तो भए पनि अन्त्यमा विषजस्तो दुःखदायी हुन्छ, त्यो रजोगुणी सुख हो।**

**तात्पर्य :** जब युवक र युवतीको मिलन हुन्छ, युवकका इन्द्रियहरूले उसलाई युवतीतिर हेर्न, उसलाई स्पर्श गर्न र ऊसँग सम्भोग गर्न प्रेरित गर्दछन्। सुरुमा इन्द्रियहरूका लागि यो घटना अत्यन्त आनन्ददायक हुन्छ तर अन्त्यमा वा केही समयपछि यो विषजस्तो लाग्न थाल्दछ। अनि तिनीहरू अलग अलग हुन्छन् वा तिनीहरूमा पारपाचुके हुन्छ। अनि शोक हुन्छ, चिन्ता वा खिन्नता हुन्छ।

यस्ता सुख सधैँ रजोगुणी हुने गर्दछ। इन्द्रिय र विषयको संयोगबाट हुने सुख सधैँ दुःखको कारण बन्दछ, त्यसैले जुनसुकै तरिकाले पनि यसबाट बच्नु पर्दछ।

**यदग्रे चानुबन्धे च सुखं मोहनमात्मनः ।**
**निषलस्यप्रमादोत्थं तत्तामसमुदाहृतम् ॥ ३९ ॥**

यत् — जो; **अग्रे** — सुरुमा; **च** — पनि; **अनुबन्धे** — अन्त्यमा; **च** — पनि; **सुखम्** — सुख; **मोहनम्** — मोहमय; **आत्मनः** — आफ्नो; **निष** — निद्रा; आलस्य — अल्छीपन; **प्रमाद** — र मोह; **उत्थम्** — उत्पन्न भएको; तत् — त्यो; **तामसम्** — तमोगुणी; **उदाहृतम्** — भनिन्छ।

**जुन सुख आत्मसाक्षात्कारप्रति अन्धो छ, जो सुरुदेखि अन्त्यसम्म मोहकारक छ र जो निद्रा, आलस्य र मोहबाट उत्पन्न हुन्छ त्यो तामसी सुख हो।**

**तात्पर्य :** निद्रा र आलस्यमा सुखको अनुभव गर्ने मानिस निश्चय नै तमोगुणी हो र जसलाई कसरी काम गर्नु पर्दछ र कसरी गर्नुहुन्न भन्ने जानकारी छैन, त्यो पनि तमोगुणी हो। तमोगुणी व्यक्तिका लागि हरेक कुरा भ्रमपूर्ण वा मोहमय हुन्छ। त्यहाँ न सुरुमा सुख हुन्छ न अन्त्यमा नै हुन्छ। रजोगुणी व्यक्तिका लागि सुरुमा कुनै प्रकारको क्षणिक सुख हुन सक्दछ र अन्त्यमा दुःख हुन सक्दछ तर तमोगुणी व्यक्तिका लागि सुरु र अन्त्य दुवैमा केवल दुःख मात्रै हुन्छ।

**न तदस्ति पृथिव्यां वा दिवि देवेषु वा पुनः ।**
**सत्त्वं प्रकृतिजैर्मुक्तं यदेभिः स्यात्त्रिभिर्गुणैः ॥ ४० ॥**

**न** — छैन; **तत्** — त्यो; **अस्ति** — छ; **पृथिव्याम्** — पृथ्वीमा; **वा** — अथवा; **दिवि** — उच्च लोकमा (स्वर्गमा); **देवेषु** — देवताहरूमा; **वा** — अथवा; **पुनः** — फेरि; **सत्त्वम्** — अस्तित्व; **प्रकृतिजैः** — भौतिक प्रकृतिबाट उत्पन्न; **मुक्तम्** — मुक्त; **यत्** — जो; **एभिः** — इनका प्रभावबाट; **स्यात्** — होस्; **त्रिभिः** — तीन; **गुणैः** — प्रकृतिका गुणहरू।

**यो लोकमा होस् वा स्वर्गमा देवताहरूका बीचमा होस्, प्रकृतिका तीन गुणहरूबाट पूर्णरुपले मुक्त जीव कोही पनि छैन।**

**तात्पर्य :** सारा ब्रह्माण्डभरि भएको प्रकृतिका तीन गुणहरूको सम्पूर्ण प्रभावलाई भगवान्‌ले यहाँ सारांशमा भन्नुभएको छ।

**ब्राह्मणक्षत्रीयविशां शूद्राणां च परन्तप ।**
**कर्माणि प्रविभक्तानि स्वभावप्रभवैर्गुणैः ॥ ४१ ॥**

**ब्राह्मण** — ब्राह्मणहरूको; **क्षत्रीय** — क्षत्रीयहरूको; **विशाम्** — वैश्यहरूको; **शूद्राणाम्** — शूद्रहरूको; **च** — तथा; **परन्तप** — हे शत्रुविजेता; **कर्माणि** — क्रियाकलापहरू; **प्रविभक्तानि** — विभाजित छन्; **स्वभाव** — तिनका आफ्ना स्वभावबाट; **प्रभवैः** — उत्पन्न; **गुणैः** — प्रकृतिका गुणहरूद्वारा।

**ब्राह्मण, क्षत्रीय, वैश्य र शूद्रहरू प्रकृतिका गुणअनुसार र तिनका आफ्नै स्वभावबाट उत्पन्न गुणहरूद्वारा विभाजित छन्।**

**शमो दमस्तपः शौचं क्षान्तिरार्जवमेव च ।**
**ज्ञानं विज्ञानमास्तिक्यं ब्रह्मकर्म स्वभावजम् ॥ ४२ ॥**

**शमः** — शान्तिमयता; **दमः** — आत्म नियन्त्रण; **तपः** — तपस्या; **शौचम्** — पवित्रता; **क्षान्तिः** — सहनशीलता; **आर्जवम्** — इमानदारिता (सरलता); **एव** — निश्चय नै; **च** — तथा; **ज्ञानम्** — ज्ञान; **विज्ञानम्** — विज्ञान (विवेक); **आस्तिक्यम्** — धार्मिकता; **ब्रह्म** — ब्राह्मणको; **कर्म** — कर्तव्य; **स्वभावजम्** — आफ्नै स्वभावबाट उत्पन्न।

**शान्तिमयता, आत्मसंयम, तपस्या, पवित्रता, सहनशीलता, इमानदारिता, ज्ञान, विज्ञान र धार्मिकता यी ब्राह्मणका स्वाभाविक गुण हुन्, जसद्वारा ब्राह्मणले काम गर्दछन्।**

**शौर्यं तेजो धृतिर्दाक्ष्यं युद्धे चाप्यपलायनम् ।**
**दानमीश्वरभावश्च क्षात्रं कर्म स्वभावजम् ॥ ४३ ॥**

**शौर्यम्** — वीरता; **तेजः** — शक्ति; **धृतिः** — धैर्य (सङ्कल्प); **दाक्ष्यम्** — उद्यमशीलता; **युद्धे** — युद्धमा; **च** — तथा; **अपि** — पनि; **अपलायनम** — नभाग्नु वा विमुख नहुनु; **दानम्** — दान वा उदारता; **ईश्वर** — नेतृत्वको; **भावः** — स्वभाव; **च** — तथा; **क्षात्रम्** — क्षत्रीयको; **कर्म** — कर्तव्य; **स्वभावजम्** — आफ्नो स्वभावबाट उत्पन्न भएको।

**वीरता, शक्ति, सङ्कल्प, उद्यमशीलता, युद्धमा उत्साह, उदारता र नेतृत्व यी क्षत्रीयकर्मका स्वाभाविक गुण हुन्।**

**कृषिगोरक्ष्यवाणिज्यं वैश्यकर्म स्वभावजम् ।**
**परिचर्यात्मकं कर्म शूद्रस्यापि स्वभावजम् ॥ ४४ ॥**

**कृषि** — हलो जोत्नु; **गो** — गाईको; **रक्ष्य** — संरक्षण; **वाणिज्यम्** — व्यापार; **वैश्य** — वैश्यको; **कर्म** — कर्तव्य; **स्वभावजम्** — आफ्नो स्वभावबाट उत्पन्न भएको; **परिचर्या** — सेवा; **आत्मकम्** — बाट युक्त; **कर्म** — कर्तव्य; **शूद्रस्य** — शूद्रको; **अपि** — पनि; **स्वभावजम्** — स्वभावबाट उत्पन्न।

**कृषि, गाईपालन, व्यापार, यी वैश्यहरूका स्वाभाविक कर्म हुन् र शारीरिक परिश्रम र अरूको सेवा शूद्रका स्वाभाविक कर्म हुन्।**

**स्वे स्वे कर्मण्यभिरतः संसिद्धिं लभते नरः ।**
**स्वकर्मनिरतः सिद्धिं यथा विन्दति तच्छृणु ॥ ४५ ॥**

**स्वे स्वे** — आफ्नो आफ्नो; **कर्मणि** — कर्ममा; **अभिरतः** — संलग्न; **संसिद्धिम्** — पूर्णता; **लभते** — पाउँदछ; **नरः** — मानिसले; **स्वकर्म** — आफ्ना कर्ममा; **निरतः** — लागेको; **सिद्धिम्** — पूर्णता; **यथा** — जसरी; **विन्दति** — प्राप्त गर्दछ; **तत्** — त्यो; **श्रृणु** — सुन।

**आफ्ना-आफ्ना कर्मका गुणहरूको अनुसरण गर्दै गएमा हरेक व्यक्तिले सिद्धि प्राप्त गर्दछ। कृपया ती कर्महरू कसरी गरिन्छन् भन्ने कुरा अब तिमीले मबाट सुन।**

**यतः प्रवृत्तिर्भूतानां येन सर्वमिदं ततम् ।**
**स्वकर्मणा तमभ्यर्च्य सिद्धिं विन्दति मानवः ॥ ४६ ॥**

**यतः** — जसबाट; **प्रवृत्तिः** — उत्पत्ति भएको छ; **भूतानाम्** — सम्पूर्ण प्राणीहरूको; **येन** — जसद्वारा; **सर्वम्** — सबै; **इदम्** — यो; **ततम्** — व्याप्त छ; **स्वकर्मणा** — आफ्नो कर्तव्यद्वारा; **तम्** — उसलाई; **अभ्यर्च्य** — पूजा गरेर; **सिद्धिम्** — पूर्णता; **विन्दति** — पाउँदछ; **मानवः** — मानिसले।

**आफ्नो स्वभावअनुसारको कर्मद्वारा सम्पूर्ण प्राणीहरूका उद्गमस्रोत तथा सर्वव्यापक भगवान्को अर्चना गरेर मानिसले सिद्धि पाउँदछ।**

**तात्पर्य** : पन्ध्रौँ अध्यायमा भनिएअनुसार सम्पूर्ण जीवात्मा परमेश्वरका सूक्ष्मतम अंश हुन्। यस प्रकार परमेश्वर सम्पूर्ण प्राणीका प्रारम्भविन्दु हुनुहुन्छ। वेदान्तसूत्रमा पनि **जन्माद्यस्य यतः** भनेर यसको पुष्टि गरिएको छ। त्यसैले परमेश्वर प्रत्येक प्राणीका प्रारम्भकर्ता हुनुहुन्छ। *भगवद्गीताको* सातौँ अध्यायमा भनिएअनुसार भगवान् आफ्ना बहिरङ्गा र अन्तरङ्गा यी दुई शक्तिहरूद्वारा सर्वव्यापक हुनुहुन्छ। त्यसैले मानिसले शक्तिहरूसहितका भगवान्को अर्चना गर्नु पर्दछ। सामान्यतया वैष्णव भक्तहरू अन्तरङ्गा शक्तिसहित भगवान्को अर्चना गर्दछन्। बहिरङ्गा शक्ति अन्तरङ्गा शक्तिको

विकृत प्रतिविम्ब हो। बहिरङ्गा शक्ति जगत्को पृष्ठभूमि हो, तर परमेश्वर परमात्माका रूपमा आफ्नो पूर्णअंशको विस्तार गरेर सर्वत्र अवस्थित हुनुहुन्छ। उहाँ सबै स्थानमा सम्पूर्ण देवताहरूका, सबै मानिसहरूका, सारा जनावरहरूका परमात्मा हुनुहुन्छ। अतः मानिस परमेश्वरकै अंश भएको हुनाले परमेश्वरप्रति आफ्नो सेवाभाव समर्पित गर्नु उसको कर्तव्य हो। हरेक व्यक्ति कृष्णभावनाले परिपूर्ण भएर भगवान्को भक्तिमा संलग्न हुनु पर्दछ। यस श्लोकमा यही कुरा बताइएको छ।

प्रत्येक व्यक्तिले आफूलाई इन्द्रियहरूका स्वामी 'हृषीकेश' द्वारा नै कुनै विशेष किसिमको व्यवसायमा नियुक्त गरिएको हो भन्ने सोच्नु पर्दछ। र आफू संलग्न रहेका कर्मको फलद्वारा भगवान् श्रीकृष्णको अर्चना गर्नु पर्दछ। यदि कसैले कृष्णभावनाभावित भएर सधैँ यसरी नै सोच्दछ भने परमेश्वरका कृपाले ऊ हरेक वस्तुप्रति पूर्णतया सजग हुन्छ। त्यही नै जीवनको पूर्णता हो। *भगवद्गीताको* १२.७ मा भगवान् भन्नु हुन्छ— **तेषामहं समुद्धर्ता** अर्थात् "यस्तो भक्तलाई उद्धार गर्ने जिम्मा म स्वयम् लिन्छु।" यही नै जीवनको सर्वोच्च पूर्णता हो। जुनसुकै व्यवसायमा लागेका भएपनि त्यसद्वारा भगवान्को सेवा गरिरहे त्यसले जीवनमा सर्वोच्च सिद्धि पाउँदछ।

**श्रेयान् स्वधर्मो विगुणः परधर्मात्स्वनुष्ठितात् ।**
**स्वभावनियतं कर्म कुर्वन्नाप्नोति किल्बिषम् ॥ ४७॥**

**श्रेयान्** — श्रेष्ठ छ; **स्वधर्मः** — आफ्नै व्यवसायमा; **विगुणः** — अपूर्ण किसिमले सम्पन्न; **परधर्मात्** — अर्काको व्यवसायभन्दा; **सु-अनुष्ठितात्** — राम्रोसँग गरिएको; **स्वभावनियतम्** — स्वभावअनुसार तोकिएको; **कर्म** — काम; **कुर्वन्** — सम्पन्न गर्दै; **न-आप्नोति** — पाउँदैन; **किल्बिषम्** — पाप।

**राम्रोसँग सम्पन्न गरिएको अर्काको कर्म वा व्यवसायलाई अपनाउनुभन्दा त्रुटिपूर्ण तरिकाले गरिएको भए पनि आफ्नै कर्ममा लाग्नु राम्रो हुन्छ। आफ्नो स्वभावअनुसार निर्देशित कर्म कहिल्यै पनि पापबाट प्रभावित हुँदैन।**

**तात्पर्य :** *भगवद्गीतामा* मानिसका प्रवृत्तिपरक कर्तव्यको निर्देश गरिएको छ। पूर्ववर्ती श्लोकहरूमा ब्राह्मण, क्षत्रीय, वैश्य र शूद्रको कर्तव्य तिनीहरूको आफ्नै विशिष्ट स्वाभाविक गुणअनुरूप निर्देशित हुन्छ भनिएको छ। अर्काको काम-कर्तव्यको अनुकरण कसैले पनि गर्न हुँदैन। यदि कुनै मानिस स्वभावले शूद्रकर्मतिर आकृष्ट भएमा त्यसलाई ब्राह्मण कुलमा जन्मिएको भए पनि ब्राह्मण मान्न हुँदैन। यसरी मानिसले आफ्नो-आफ्नो स्वभावअनुसारको कर्म

गर्नु पर्दछ। भगवान्‌को सेवाका लागि गरिने कुनै पनि काम निन्दनीय हुँदैन। ब्राह्मणको प्रवृत्तिपरक कर्म निश्चय नै सतोगुण हो तर कोही स्वभावले सतोगुणी नभए त्यसले ब्राह्मणको प्रवृत्तिपरक कर्मको अनुकरण गर्नु हुँदैन। एउटा क्षत्रीय वा प्रशासकका लागि निषेध गरिएका धेरै कुरा छन्— क्षत्रीयले आफ्ना शत्रुहरू मार्नका लागि हिंस्रक पनि हुनु पर्दछ। र कहिलेकाहीँ कूटनैतिक कार्यका लागि झूटो पनि बोल्नु पर्दछ। एउटा क्षत्रीयले आफ्नो प्रवृत्तिजन्य कर्म छोडेर ब्राह्मणले गर्ने कार्यको अनुकरण गर्न खोज्नुहुँदैन।

मानिसले परमेश्वरलाई प्रसन्न पार्ने उद्देश्यले कार्य गर्नु पर्दछ। उदाहरणका लागि अर्जुन क्षत्रीय थिए। उनी अर्का विपक्षी दलसँग युद्ध गर्न सङ्कोच मानिरहेका थिए तर यस्तो युद्ध भगवान्‌का लागि वा श्रीकृष्णका लागि गरिने भए त्यसमा पतित भइन्छ कि भन्ने डर मान्नुपर्दैन। त्यस्तै व्यापारका क्षेत्रमा पनि कहिलेकाहीँ व्यापारीले नाफा कमाउनका लागि धेरै झूटो बोल्नु पर्दछ। उसले त्यसो नगरे नाफा कमाउनै सक्दैन। कहिलेकाहीँ व्यापारीहरू भन्ने गर्दछन्— "ओ हो हजुर! म तपाईंका लागि नाफै नखाई दिंदैछु।" तर हामीले बुझ्नु पर्दछ व्यापारी नाफा नलिई रहनै सक्दैन। अतः यदि कुनै व्यापारीले "मैले नाफा लिएकै छैन" भन्छ भने त्यसलाई एउटा सामान्य झूट मान्नु पर्दछ। तर एउटा व्यापारीले "म यस्तो व्यवसायमा लागेको छु, जहाँ झूटो नबोली हुँदैन, त्यसैले म यो व्यवसाय छोडिदिन्छु र ब्राह्मणको व्यवसाय अपनाउछु" भन्ने सोच्नु हुँदैन। शास्त्रले यस्तो अनुमति दिंदैन। यदि मानिसले आफ्नो कर्मद्वारा भगवान्‌को सेवा गरिरहेको छ भने त्यो क्षत्रीय होस्, वैश्य होस् वा शूद्र केही फरक पर्दैन। ब्राह्मणहरूले पनि विभिन्न प्रकारका यज्ञहरू गर्ने क्रममा कहिलेकाहीँ पशुहरूलाई मार्नुपर्ने हुन्छ, किनभने यदाकदा त्यस्ता यज्ञहरूमा पशुबलि दिने गरिन्छ। त्यसै गरी एउटा क्षत्रीयले आफ्नो क्षत्रीयोचित कर्म गर्ने क्रममा शत्रुलाई मारे ऊ पापको भागी हुँदैन। तेस्रो अध्यायमा यी विषयहरूमाथि स्पष्ट र विस्तारपूर्वक व्याख्या भइसकेको छ। जसअनुसार प्रत्येक मानिसले यज्ञका लागि अर्थात् भगवान् विष्णुका लागि कर्म गर्नु पर्दछ। व्यक्तिगत इन्द्रियतृप्तिका निमित्त गरिने कुनै पनि कार्य बन्धनका कारण बन्दछन्। निष्कर्ष के हो भने, हरेक व्यक्तिले आफूले आर्जन गरेका गुणअनुसारको कर्ममा संलग्न हुनु पर्दछ र परमकारण परमेश्वरका सेवाका लागि नै कर्म गर्ने निश्चय गर्नु पर्दछ।

**सहजं कर्म कौन्तेय सदोषमपि न त्यजेत् ।**
**सर्वारम्भा हि दोषेण धूमेनाग्निरिवावृताः ॥ ४८ ॥**

**सहजम्** — सँगसँगै उत्पन्न भएका; **कर्म** — कर्म; **कौन्तेय** — हे कुन्तीपुत्र!; **स-दोषम्** — दोषले युक्त; **अपि** — यद्यपि; **न त्यजेत्** — त्याग्न हुँदैन; **सर्व-आरम्भाः** — सम्पूर्ण उद्यम; **हि** — निश्चय नै; **दोषेण** — दोषले; **धूमेन** — धूवाँले; **अग्निः** — आगो; **इव** — जस्तै; **आवृताः** — ढाकिएका छन्।

**हे कुन्तीपुत्र! दोषपूर्ण नै भए पनि आफ्नो स्वभावका साथमा उत्पन्न भएको कर्मलाई परित्याग गर्न हुँदैन, किनभने जुनसुकै उद्यम पनि धूवाँले आगो ढाकिए जस्तै दोषले ढाकिएका हुन्छन्।**

**तात्पर्य :** बद्ध जीवनका सम्पूर्ण कर्महरू प्रकृतिका गुणहरूद्वारा दूषित हुन्छन्। ब्राह्मणले पनि त्यस्तो यज्ञ गर्नुपर्ने हुन्छ, जहाँ अनिवार्य रूपले पशुहरूको वध गरिन्छ। त्यसै गरी जति नै पवित्र भए पनि क्षत्रीयहरूले शत्रुसँग लडाइँ गर्नु पर्दछ। ऊ यो कामबाट पर जान सक्दैन। त्यसरी नै एउटा व्यापारीले, ऊ जतिसुकै पवित्र किन नहोस्, व्यापारमा रहिरहनका लागि कहिलेकाहीँ आफ्नो नाफा लुकाउने गर्नु पर्दछ वा कालोबजारमा व्यापार चलाउनु पर्दछ। यी कुराहरू आवश्यक छन्। मानिस यस्ता कुराबाट बच्न सक्दैन। यसै गरी एउटा खराब मालिकको सेवामा लागेको शूद्रले खराब काम हो भन्ने जान्दा जान्दै पनि मालिकको आज्ञानुसार त्यस्तो काम गर्नुपर्ने हुन्छ। यी यस्ता दोषहरू हुँदाहुँदै पनि मानिसले शास्त्रनिर्देशित आफ्नो कर्तव्य गर्नै पर्दछ, किनभने ती कामहरू उसका आफ्नै स्वभावजन्य हुन्छन्।

यहाँ एउटा अति राम्रो उदाहरण दिइएको छ— अग्नि पवित्र हो तैपनि त्यहाँ धूवाँ हुन्छ, तैपनि धूवाँले आगोलाई अपवित्र पार्दैन। आगोमा धूवाँ हुन्छ तैपनि आगोलाई सबैभन्दा पवित्र तत्त्व मानिन्छ। कसैले क्षत्रीय भएर पनि क्षत्रीयवृत्तिलाई छाडेर ब्राह्मणवृत्ति अपनाउने चाहना गर्न सक्दछ तर त्यो ब्राह्मणवृत्तिमा पनि कुनै अरुचिकर काम नहोला भन्ने विश्वास उसलाई दिन सकिँदैन। यसबाट के निष्कर्ष निस्कन सक्दछ भने, यस भौतिक जगत्मा प्रकृतिका संक्रमणबाट पूर्णरूपले मुक्त हुन कोही पनि सक्दैन। यस सम्बन्धमा अग्नि र धूवाँको उदाहरण अत्यन्त उपयुक्त छ। जाडोको समयमा आगोबाट कोइला झिक्दा कहिलेकाहीँ धूवाँले आँखा र शरीरका अन्य भागमा पीडा उत्पन्न गराउन सक्दछ र त्यस्तो पीडादायक स्थितिमा पनि आगो तापिन्छ, आगोको उपयोग गरिन्छ। अतः कसैले पनि केही बाधक तत्त्व आए भनेर आफ्नो स्वभावजन्य वृत्तिलाई त्यागिदिनु हुँदैन, बरु कृष्णभावनामा रहेर आफ्नो स्वाभाविक व्यवसायिक वृत्तिद्वारा भगवान्‌को सेवा गर्न दृढप्रतिज्ञ हुनु पर्दछ। यही नै पूर्णताको विन्दु हो। भगवान्‌लाई प्रसन्न पार्नका लागि यदि कुनै स्वाभाविक वृत्तिजन्य कार्य गरिन्छ भने त्यस्ता विशिष्ट व्यवसायिक कार्यमा

रहेका सम्पूर्ण दोषहरू स्वतः शुद्ध हुन्छन्। जब कर्मफलहरू शुद्ध हुन्छन् वा जब ती भक्तिका साथमा सम्बद्ध हुन्छन् त्यस समय मानिसले आफूलाई आफूभित्र हेर्न सक्ने हुन्छ र यही नै आत्मसाक्षात्कार हो।

**असक्तबुद्धिः सर्वत्र जितात्मा विगतस्पृहः ।**
**नैष्कर्म्यसिद्धिं परमां संन्यासेनाधिगच्छति ॥ ४९ ॥**

**असक्तबुद्धिः** — अनासक्त बुद्धि भएको; **सर्वत्र** — सबैतिर; **जितात्मा** — मनमाथि नियन्त्रण भएको; **विगत स्पृहः** — सांसारिक चाहना नभएको; **नैष्कर्म्यसिद्धिम्** — निष्कर्मताको सिद्धि; **परमाम्** — परम; **संन्यासेन** — संन्यासद्वारा; **अधिगच्छति** — प्राप्त गर्दछ।

**कुनै पनि किसिमको भौतिक भोगको वास्ता नगर्ने आत्मसंयमी तथा अनासक्त व्यक्तिले संन्यासको अभ्यासद्वारा कर्मफलबाट मुक्तिको सर्वोच्च अवस्था प्राप्त गर्न सक्दछ।**

**तात्पर्य :** आफूलाई "म सधैँ भगवान्‌को अंश हूँ" भन्ने ठान्नु र त्यसैले "मलाई मेरो कर्मको फल भोग्ने अधिकार छैन" भन्ने सोच्नु नै सही संन्यास हो। मानिस परमेश्वरको अंश भएकाले उसले गरेका कर्मको फल पनि परमेश्वरद्वारा नै भोगिनु पर्दछ। यो नै वास्तविक कृष्णभावना हो। कृष्णभावनाभावित भएर काम गर्ने व्यक्ति नै सही अर्थमा संन्यासी हो। **म वास्तवमा परमेश्वरकै लागि काम गर्दैछु** भन्ने मानसिकता बनाउन सकेमा मानिस सन्तुष्ट हुन सक्दछ। यस प्रकार ऊ कुनै पनि भौतिक वस्तुप्रति आसक्त हुँदैन। उसलाई भगवान्‌को सेवाबाट प्राप्त हुने दिव्य आनन्दबाहेक अरू कुनै वस्तुबाट पनि आनन्द नलिने बानी परिसकेको हुन्छ। संन्यासी आफ्ना पूर्वजन्मका कर्मको फलबाट मुक्त भएको मानिन्छ तर कृष्णभावनामा रहेको व्यक्तिले तथाकथित संन्यास ग्रहण नगरेर पनि जीवनको त्यो पूर्णतालाई स्वतः प्राप्त गर्दछ। यस्तो मानसिक अवस्थालाई योगारूढ वा योगको सिद्ध अवस्था भनिन्छ। तृतीय अध्यायमा **यस्त्वात्मरतिरेव स्यात्** भनेर के पुष्टि गरिएको छ भने, जो आफैँमा सन्तुष्ट छ त्यसलाई कुनै पनि किसिमको कर्मफलको डर हुँदैन।

**सिद्धिं प्राप्तो यथा ब्रह्म तथाप्नोति निबोध मे ।**
**समासेनैव कौन्तेय निष्ठा ज्ञानस्य या परा ॥ ५० ॥**

**सिद्धिम्** — सिद्धि (पूर्णता); **प्राप्तः** — प्राप्त गरिएको; **यथा** — जसरी; **ब्रह्म** — परमेश्वर; **तथा** — त्यसरी नै; **आप्नोति** — प्राप्त गर्दछ; **निबोध** —

बुझ्ने प्रयास गर; **मे** — मबाट; **समासेन** — संक्षेपमा; **एव** — निश्चय नै; **कौन्तेय** — हे कुन्तीपुत्र; **निष्ठा** — अवस्था; **ज्ञानस्य** — ज्ञानको; **या** — जो; **परा** — दिव्य (अलौकिक)।

**हे कुन्तीपुत्र! यसरी कर्म गरेर यस्तो सिद्धि पाएको व्यक्तिले कसरी परमसिद्ध अवस्था, ब्रह्मलाई अर्थात् ज्ञानको सर्वोच्च स्तरलाई प्राप्त गर्न सक्दछ, यो म संक्षेपमा भन्दछु, तिमीले बुझ।**

**तात्पर्य :** भगवान्का लागि आफ्नो प्रवृत्तिजन्य कर्तव्यमा संलग्न रहेर मात्रै पनि मानिसले कसरी जीवनको सर्वोच्च परिपूर्ण अवस्था प्राप्त गर्न सक्दछ भन्ने कुरा भगवान्ले अर्जुनलाई बताउँदै हुनुहुन्छ। परमेश्वरको सन्तुष्टिका लागि आफ्नो कर्मको फल त्याग गर्नाले मात्र मानिसले ब्रह्मको परमअवस्था प्राप्त गर्दछ। यही नै आत्मसाक्षात्कारको विधि हो। ज्ञानको वास्तविक सिद्धि भन्नु नै शुद्ध कृष्णभावना प्राप्त गर्नु हो, जसको व्याख्या तलका श्लोकहरूमा पनि गरिएको छ।

**बुद्ध्या विशुद्धया युक्तो धृत्यात्मानं नियम्य च ।**
**शब्दादीन् विषयांस्त्यक्त्वा रागद्वेषौ व्युदस्य च ॥ ५१ ॥**
**विविक्तसेवी लघ्वाशी यतवाक्कायमानसः ।**
**ध्यानयोगपरो नित्यं वैराग्यं समुपाश्रितः ॥ ५२ ॥**
**अहंकारं बलं दर्पं कामं क्रोधं परिग्रहम् ।**
**विमुच्य निर्ममः शान्तो ब्रह्मभूयाय कल्पते ॥ ५३ ॥**

**बुद्ध्या** — बुद्धिले; **विशुद्धया** — पूर्णतया निर्मल; **युक्तः** — लागेको; **धृत्या** — धैर्यपूर्वक; **आत्मानम्** — अन्तस्करणलाई; **नियम्य** — संयमित गरेर; **च** — पनि; **शब्दादीन्** — शब्द आदि; **विषयान्** — इन्द्रियका विषयहरू; **त्यक्त्वा** — त्यागेर; **राग** — आसक्ति; **द्वेषौ** — घृणा; **व्युदस्य** — एकातिर पन्छाएर; **च** — पनि; **विविक्त-सेवी** — एकान्तबास गर्दै; **लघु-आशी** — अल्पहारी हुँदै; **यत** — वशमा राखेर; **वाक्** — वाणीलाई; **काय** — शरीरलाई; **मानसः** — मनलाई; **ध्यान-योग-परः** — समाधिमा लीन; **नित्यम्** — चौबीसै घण्टा; **वैराग्यम्** — वैराग्यलाई; **समुपाश्रितः** — आश्रय लिएर; **अहङ्कारम्** — झूटो अभिमान; **बलम्** — झूटो शक्ति; **दर्पम्** — झूटो घमण्ड; **कामम्** — काम (वासना); **क्रोधम्** — क्रोध (रिस); **परिग्रहम्** — भौतिक वस्तुको सङ्ग्रह; **विमुच्य** — त्यागेर; **निर्ममः** — स्वामित्वको भावनारहित; **शान्तः** — शान्तिपूर्ण; **ब्रह्मभूयाय** — आत्मसाक्षात्कारका लागि; **कल्पते** — योग्य छ।

**आफ्नो बुद्धिद्वारा निर्मल भएर धैर्यपूर्वक मनलाई नियन्त्रण गर्दै इन्द्रियतृप्तिका सबै विषयहरूलाई त्यागेर, राग र द्वेषबाट मुक्त भएर जो एकान्त स्थलमा निवास गर्दछ, जो अल्प आहार गर्दछ, शरीर, मन र वाणीशक्तिलाई जसले नियन्त्रण गर्दछ, जो सधैँ समाधिमा रहन्छ, जो विरक्त छ, अहङ्कार, बल, घमण्ड, काम, क्रोध, भौतिक वस्तुको सङ्ग्रह र झूटो स्वामित्वभावबाट जो मुक्त छ अनि जो शान्त छ, त्यस्तो व्यक्ति निश्चय नै आत्मसाक्षात्कारको स्थितिमा आरूढ हुन्छ।**

तात्पर्य : बुद्धिद्वारा निर्मल भएको व्यक्तिले आफूलाई सतोगुणमा स्थापित गर्दछ। यसरी नै मानिस मनलाई नियन्त्रण गरेर सधैँ समाधिस्थ हुन पुग्दछ। ऊ इन्द्रियतृप्तिका विषयहरूप्रति आसक्त हुँदैन र आफ्ना क्रियाकलापमा राग र द्वेषबाट मुक्त हुन्छ। यस्तो अनासक्त व्यक्ति एकान्त स्थलमा बस्न रुचाउँदछ। ऊ आवश्यकताभन्दा बढी खाँदैन, र उसले आफ्ना शरीर र मनका क्रियाकलापमाथि नियन्त्रण कायम गर्दछ। उसमा झूटो अभिमान हुँदैन, किनभने उसले आफूलाई शरीर ठान्दैन। ऊ विभिन्न भौतिक पदार्थहरू ग्रहण गरेर शरीरलाई बढी मोटो र बलियो बनाउन पनि चाहँदैन। उसमा शरीर नै आत्मा हो भन्ने भावना नहुने हुनाले उसले कहिल्यै घमण्ड गर्दैन। भगवान्‌का कृपाले प्राप्त भएका प्रत्येक वस्तुबाट ऊ सन्तुष्ट हुन्छ र इन्द्रियतृप्तिको अभावमा कहिल्यै रिसाउँदैन। न उसले इन्द्रियका विषयहरू आर्जन गर्ने प्रयत्न नै गर्दछ। यसरी जब ऊ झूटो अहङ्कारबाट पूर्णतया मुक्त हुन्छ र सम्पूर्ण भौतिक वस्तुहरूप्रति अनासक्त हुन्छ, त्यो अवस्था नै ब्रह्मसाक्षात्कारको अवस्था हो। त्यस अवस्थालाई ब्रह्मभूत अवस्था पनि भनिन्छ। जब मानिस जीवनको भौतिक धारणाबाट मुक्त हुन्छ त्यस समय ऊ शान्त हुन्छ अनि उसलाई उत्तेजित गराउन सकिँदैन। *भगवद्गीताको* २.७० मा यसको वर्णन यसरी गरिएको छ—

*आपूर्यमाणमचलप्रतिष्ठं समुद्रमापः प्रविशन्ति यद्वत् ।*
*तद्वत्कामा यं प्रविशन्ति सर्वेस शान्तिमाप्नोति न कामकामी ॥*

अर्थात्, जसरी निरन्तर नदीहरू प्रवेश गरिरहँदा पनि र सधैँ भरिभराउ रहँदा पनि समुद्र शान्त नै देखिन्छ, त्यसै गरी इच्छा-आकाङ्क्षाका अनवरत वा निरन्तर प्रवाह चलिरहँदा पनि विचलित नहुने व्यक्तिले शान्ति प्राप्त गर्न सक्दछ तर यस्ता इच्छाहरूको तृप्तिका निमित्त निरन्तर प्रयत्नशील रहनेले त्यो शान्ति पाउन सक्दैन।

**ब्रह्मभूतः प्रसन्नात्मा न शोचति न काङ्क्षति ।**
**समः सर्वेषु भूतेषु मद्भक्तिं लभते पराम् ॥ ५४ ॥**

**ब्रह्मभूतः** — ब्रह्मसँग एक भएर; **प्रसन्न आत्मा** — पूर्णतया प्रसन्न; **नशोचति** — शोक गर्दैन; **न काङ्क्षति** — चाहना गर्दैन; **समः** — समान भावले; **सर्वेषु** — सबैप्रति; **भूतेषु** — जीवात्माप्रति; **मत्भक्तिम्** — मेरो भक्ति; **लभते** — प्राप्त गर्दछ; **पराम्** — दिव्य।

**यसरी दिव्य स्थितिमा अवस्थित व्यक्तिले तुरुन्तै परमब्रह्मको अनुभूति गर्दछ र पूर्णतया आनन्दित हुन्छ। उसले कहिल्यै शोक पनि गर्दैन र कुनै वस्तुको चाहना पनि गर्दैन। उसले हरेक जीवात्माप्रति समभाव राख्दछ। त्यस अवस्थामा उसले मेरो शुद्ध भक्ति प्राप्त गर्दछ।**

**तात्पर्य :** ब्रह्मभूत अवस्था वा ब्रह्मसँग एकाकार हुने अवस्था नै निराकारवादीहरूको अन्तिम लक्ष्य हो। तर साकारवादी वा शुद्ध भक्तहरू योभन्दा अझ अगाडि गएर शुद्ध भक्तिमा संलग्न हुनु पर्दछ। यसको अर्थ भगवान्को शुद्ध भक्तिमा लागेका मानिसले यस्तो मुक्तिको अवस्था वा ब्रह्मभूत अवस्था वा ब्रह्मसँग एकाकार हुने अवस्था पहिले नै प्राप्त गरिसकेका हुन्छन् भन्ने हो। ब्रह्म वा परमेश्वरसँग एकाकार नभई कसैले पनि उहाँको सेवा गर्न सक्दैन। परमज्ञानका अवस्थामा सेव्य र सेवकका बीच अन्तर हुँदैन तैपनि उच्चतर आध्यात्मिक भावमा यो अन्तर विद्यमान रहन्छ।

शारीरिक अवधारणाको बुद्धिका अवस्थामा मानिस इन्द्रियतृप्तिका लागि काम गर्दछ, त्यसैले त्यहाँ दुःख हुन्छ तर अध्यात्मिक जगत्मा मानिस शुद्ध भक्तिमा संलग्न हुन्छ, त्यसैले त्यहाँ दुःख हुँदैन। कृष्णभावनामा लागेका भक्तहरूका निमित्त शोक गर्नुपर्ने र चाहना गर्नुपर्ने कुनै विषय हुँदैन। ईश्वर पूर्ण भएकाले ईश्वरको सेवा वा कृष्णभावनामा संलग्न व्यक्ति पनि आफैँमा पूर्ण हुन्छ। ऊ सम्पूर्ण फोहोर सफा गरेर निर्मल तुल्याइएको नदीजस्तो हुन्छ। शुद्ध भक्तमा भगवान् श्रीकृष्णबाहेक अरू कुनै विचार नउठ्ने हुनाले ऊ स्वभावतः सधैँ प्रसन्नचित्त हुन्छ। उसले कुनै भौतिक क्षति हुँदा शोक पनि गर्दैन र कुनै लाभका लागि इच्छा पनि गर्दैन, किनभने ऊ भगवद्भक्तिले परिपूर्ण भएको हुन्छ। उसमा सांसारिक भोगको इच्छा हुँदैन, किनभने प्रत्येक जीवात्मा परमेश्वरका सूक्ष्म अंश हुन् र त्यसैले जीवात्मा भगवान्का शाश्वत सेवक हुन् भन्ने उसले जानेको हुन्छ। उसले यस संसारमा न कसैलाई आफूभन्दा उच्च र न कसैलाई आफूभन्दा निम्न देख्दछ। यी उच्चस्थिति र निम्नस्थिति भन्ने कुरा क्षणिक हुन् र यस्ता क्षणिक वस्तुहरूको उदय र अस्तसँग भक्तको कुनै सरोकार हुँदैन। उसका लागि सुन र ढुङ्गो समान हुन्छन्। यो ब्रह्मभूत अवस्था हो र शुद्ध भक्तहरूले यो अवस्था अत्यन्त सजिलोसँग प्राप्त गर्दछन्।

त्यस अवस्थामा पुगेका भक्तका लागि परमब्रह्मसँग एकाकार हुने विचार वा पृथक् व्यक्तित्वको विलयजस्ता कुरा तुच्छ वा नारकीय स्तरका प्रतीत हुन्छन्। तिनका लागि स्वर्गलोक प्राप्त गर्ने कुरा सपनाको कल्पनाजस्तो हुन्छ र इन्द्रियहरू दाँत भाँचिएका सर्पजस्ता लाग्दछन्। जसरी दाँत भाँचिएका सर्पसँग कुनै डर हुँदैन त्यसै गरी स्वतः नियन्त्रित भएका इन्द्रियहरूबाट पनि कुनै डर हुँदैन। भौतिकताले ग्रस्त व्यक्तिका लागि मात्र यो संसार दुःखमय छ तर भक्तका लागि सम्पूर्ण संसार आध्यात्मिक जगत्जस्तो छ वा वैकुण्ठतुल्य छ। यस ब्रह्माण्डका सबैभन्दा महान् व्यक्तित्व पनि भक्तका लागि एउटा कमिलाभन्दा बढी महत्त्वको हुँदैन। यो अवस्था भगवान् चैतन्यका कृपाले प्राप्त गर्न सकिन्छ, जसले यस युगमा शुद्ध भक्तिको प्रचार गर्नुभयो।

**भक्त्या मामभिजानाति यावान् यश्चास्मि तत्त्वतः ।**
**ततो मां तत्त्वतो ज्ञात्वा विशते तदनन्तरम् ॥ ५५ ॥**

**भक्त्या** — शुद्ध भक्तिद्वारा; **माम्** — मलाई; **अभिजानाति** — जान्न सक्दछ; **यावान्** — जति; **यःच अस्मि** — म जस्तो छु; **तत्त्वतः** — साँचो अर्थमा; **ततः** — त्यसपछि; **माम्** — मलाई; **तत्त्वतः** — तात्त्विक रूपले; **ज्ञात्वा** — जानेर; **विशते** — प्रवेश गर्दछ; **तदनन्तरम्** — त्यसपछि।

**केवल भक्तिद्वारा मात्रै मानिसले म (भगवान्) लाई यथार्थ रूपमा बुझ्न सक्दछन्। यस प्रकारको भक्तिद्वारा पूर्णरूपले मेरै (भगवान्को) भावनामा भावित भएको व्यक्ति भगवद्धाममा प्रवेश गर्न सक्दछ।**

**तात्पर्य :** भगवान् श्रीकृष्ण र उहाँको अंशविस्तारलाई मानसिक कल्पनाद्वारा बुझ्न सकिँदैन, न अभक्तले नै उहाँलाई बुझ्न सक्दछन्। यदि कसैले भगवान्लाई बुझ्न चाहन्छ, भने उसले शुद्ध भक्तको समुचित मार्गनिर्देशनमा रहेर शुद्ध भक्तिको अभ्यास गर्नु पर्दछ, अन्यथा भगवान्सम्बन्धी सत्य उसका लागि सधैँ लुकेको वस्तु हुनेछ। पहिल्यै *भगवद्गीताको* ७.२५ मा भनिएको छ — **नाहं प्रकाशः सर्वस्य** — अर्थात्, भगवान् सबैका अगाडि प्रकाशित हुनु हुन्न। मानसिक कल्पना तथा विद्वत्ताले मात्रै ईश्वरलाई बुझ्न सकिँदैन। यथार्थमा कृष्णभावनामा संलग्न भएको व्यक्तिले मात्रै भगवान् श्रीकृष्ण को हुनुहुन्छ, भन्ने बुझ्न सक्दछ। यसमा विश्वविद्यालयका उपाधिहरू सहयोगी हुँदैनन्।

कृष्णको विज्ञानलाई पूर्णतया बुझेको मानिसले नै भगवान् श्रीकृष्णको धाम वा आध्यात्मिक राज्यमा प्रवेश गर्न सक्दछ। ब्रह्मभूत हुनुको अर्थ आफ्नो स्वतन्त्र पहिचान नै गुमाउनु होइन। जहाँ भक्ति छ वा जहाँ जहिलेसम्म भक्तिको अस्तित्व हुन्छ त्यहाँ भगवान् हुनै पर्दछ, भक्त पनि हुनै पर्दछ र भक्तिको

विधि पनि हुनै पर्दछ। मुक्ति भइसकेपछि पनि यस्तो ज्ञानको विनाश हुँदैन। मुक्तिको अर्थ शारीरिक अवधारणाको बुद्धिबाट मुक्ति पाउनु हो। आध्यात्मिक जीवनमा पनि ठीक त्यही अन्तर विद्यमान रहन्छ, त्यही पृथकता त्यहाँ हुन्छ तर कृष्णभावनामा **विशते** अर्थात् ममा प्रवेश गर्दछ, यस भनाइले अद्वैतवादी सिद्धान्तको समर्थनमा जीव निराकार ब्रह्मसँग एकाकार हुन्छ भन्ने अर्थ दिन खोजेको होइन, भुलेर पनि यस्तो सोच्नु हुँदैन। '**विशत**' को अर्थ जीव आफ्नो अलग पहिचानसहित भगवान्‌को सङ्गत पाउन र उहाँको सेवामा संलग्न हुन भगवद्धाममा प्रवेश गर्दछ भन्ने हो। उदाहरणका लागि एउटा हरियो रङ्गको चरा हरियो रूखमा रूखसँग एक हुन भनेर होइन रूखको फल खान भनेर त्यहाँ प्रवेश गर्दछ। निराकारवादीहरूले प्रायः नदीहरू बग्दै समुद्रमा पुगेर समुद्रमै समाहित भएको उदाहरण दिने गर्दछन्। निराकारवादीहरूका निमित्त यो एउटा सुखको स्रोत हुन सक्दछ तर साकारवादीहरू समुद्रमा प्रवेश गरेर पनि जलचर प्राणीजस्तै त्यहाँ आफ्नो अलग अस्तित्व बनाइराख्न चाहन्छन्। समुद्रको अलि गहिराइमा प्रवेश गर्ने हो भने त्यहाँ हामी धेरै प्राणीहरू फेला पार्न सक्दछौँ। समुद्रको सतही जानकारी मात्र पर्याप्त छैन। मानिसलाई समुद्रका गहिराइमा रहने जलचर जीवात्माहरूका बारेमा पनि जानकारी हुनु पर्दछ।

भक्त आफ्नो शुद्ध भक्तिका कारणले, भगवान्‌का दिव्य गुणहरू र ऐश्वर्यहरूसँग यथार्थ रूपमा परिचित हुन सक्दछ। एघारौँ अध्यायमा भनिएको छ— केवल भक्तिद्वारा मानिसले भगवान्‌लाई बुझ्न सक्दछ। त्यही कुराको पुष्टि यहाँ पनि गरिएको छ। केवल भक्तिका माध्यमले मानिसले भगवान्‌लाई जान्न सक्दछ र भगवान्‌का धाममा प्रवेश गर्न सक्दछ।

भौतिकवादी अवधारणाबाट मुक्त भएर ब्रह्मभूत अवस्थालाई प्राप्त गरिसकेपछि भगवान्‌का बारेमा गरिएको श्रवणद्वारा भक्ति प्रारम्भ हुन्छ। भगवान्‌का बारेमा श्रवण गर्नासाथ ब्रह्मभूत अवस्था स्वतः विकसित हुन्छ अनि लोभ तथा कामजस्ता भौतिक संक्रमणहरू नष्ट हुन्छन्। हृदयबाट काम र इच्छा लुप्त हुँदै गएपछि भक्त भगवान्‌का सेवामा अझ बढी अनुरक्त हुन्छ, र यस्तो अनुरक्तिद्वारा ऊ भौतिक संक्रमणबाट मुक्त हुन्छ। जीवनको त्यो स्तरमा पुगेपछि उसले परमेश्वरलाई बुझ्न सक्दछ। यसको उल्लेख भागवत्‌मा पनि छ। मुक्त भएपछि पनि भक्तिका प्रक्रिया वा दिव्य सेवाहरू चलिरहन्छन्। वेदान्तसूत्रले पनि **आप्रयाणात् तत्रापि हि दृष्टम्** (४.१.१२) यस भनाइबाट यसको पुष्टि गर्दछ। यसको अर्थ हो— मुक्ति प्राप्त गरिसकेपछि पनि भक्तियोगको प्रक्रिया चलिरहन्छ। *श्रीमद्भागवत्‌मा* वास्तविक भक्तिमय मुक्तिको जुन परिभाषा दिइएको छ त्यसअनुसार जीवात्माले आफ्नो अस्तित्वमा

तथा आफ्नो स्वाभाविक वा वैधानिक स्थितिमा पुनः स्थापित हुनु पर्दछ। बद्ध अवस्थाको चर्चा पहिल्यै भइसकेको छ। प्रत्येक जीवात्मा परमेश्वरको खण्ड अंश हो, त्यसैले उसको मौलिक स्वरूप भनेको परमेश्वरको सेवा गर्नु हो। मुक्तिपछि पनि यो सेवा कहिल्यै रोकिंदैन। सही मुक्ति भन्नु नै जीवनसम्बन्धी गलत अवधारणाबाट मुक्ति पाउनु हो।

**सर्वकर्माण्यपि सदा कुर्वाणो मद्व्यपाश्रयः ।**
**मत्प्रसादादवाप्नोति शाश्वतं पदमव्ययम् ॥ ५६ ॥**

सर्व — सबै; **कर्माणि** — कर्महरू; **अपि** — यद्यपि; **सदा** — सधैँ; **कुर्वाणः** — गर्दै; **मत्-व्यपाश्रयः** — मेरा संरक्षणमा; **मत्प्रसादात्** — मेरा कृपाले; **अवाप्नोति** — प्राप्त गर्दछ; **शाश्वतम्** — नित्य; **पदम्** — धाम; **अव्ययम्** — अविनाशी।

**मेरा शुद्ध भक्तहरू मेरा संरक्षणमा रहेर सबै प्रकारका कार्यहरू गर्दै मेरा कृपाले नित्य तथा अविनाशी धाममा पुग्दछन्।**

**तात्पर्य :** मत् व्यपाश्रय शब्दले भगवान्को संरक्षणमा भन्ने अर्थ बुझाउँदछ। भौतिक कल्मषबाट मुक्त हुनका लागि शुद्ध भक्तले भगवान् वा उहाँका प्रतिनिधिस्वरूप गुरुका निर्देशनमा रहेर कर्म गर्दछ। शुद्ध भक्तका लागि समयको कुनै सीमा छैन। ऊ सधैँ, चौबीसै घण्टा र शतप्रतिशत परमेश्वरका निर्देशनमा क्रियाशील रहन्छ। यसरी सधैँ कृष्णभावनामा संलग्न हुने भक्तप्रति भगवान् अत्यन्त दयालु बन्नु हुन्छ। सबै किसिमका कठिनाइहरू हुँदाहुँदै पनि अन्त्यमा ऊ दिव्य धाम अर्थात् कृष्णलोकमा पुग्दछ। त्यहाँ उसको प्रवेश सुनिश्चित छ, यसमा कुनै शंका छैन। त्यो परमधाममा कुनै परिवर्तन छैन, त्यहाँ हरेक वस्तु नित्य छन्, शाश्वत छन्, अविनाशी छन् र ज्ञानमय छन्।

**चेतसा सर्वकर्माणि मयि संन्यस्य मत्परः ।**
**बुद्धियोगमुपाश्रित्य मच्चित्तः सततं भव ॥ ५७ ॥**

**चेतसा** — बुद्धिद्वारा; **सर्वकर्माणि** — सबै किसिमका कर्महरू; **मयि** — ममा; **संन्यस्य** — अर्पण गरेर; **मत्परः** — मेरा संरक्षणमा; **बुद्धियोगम्** — भक्तिमय क्रियाकलापको; **उपाश्रित्य** — आश्रय लिएर; **मत्चित्तः** — मेरो चेतनामा; **सततम्** — चौबीसै घण्टा; **भव** — होऊ।

**सम्पूर्ण कार्यका लागि ममा नै निर्भर होऊ, सधैँ मेरै संरक्षणमा कर्म गर। यस प्रकारको भक्तिमा रहेर मप्रतिको पूर्णतया चेतनाले युक्त होऊ।**

**तात्पर्य :** कृष्णभावनामा क्रियाशील रहने व्यक्तिले संसारको स्वामीजस्तो बनेर काम गर्दैन। उसले सेवकले जस्तै पूर्णतया परमेश्वरका अधीनमा रहेर काम गर्नु पर्दछ। सेवकको कुनै निजी स्वतन्त्रता हुँदैन। उसले केवल स्वामीको आदेशअनुसार काम गर्दछ। सेवकले परमस्वामीको काम गर्ने हुनाले उसलाई त्यस कार्यबाट हुने लाभ र हानिले प्रभावित पार्दैन। उसले भगवान्‌को आदेशलाई मानेर पूर्ण श्रद्धाका साथ आफ्नो कर्म पूरा गर्दछ। यहाँ कसैले तर्क गर्न सक्दछ, अर्जुनले भगवान् श्रीकृष्णको व्यक्तिगत निर्देशनमा रहेर काम गरेका थिए तर अहिले श्रीकृष्ण उपस्थित नभएको समय कसरी काम गर्ने ? यदि कसैले श्रीकृष्णले यस पुस्तकमा दिनुभएका निर्देशनअनुरूप तथा श्रीकृष्णका प्रतिनिधिहरूको मार्गनिर्देशनअनुरूप कार्य गर्दछ त्यसले पनि ठीक त्यही फल प्राप्त गर्दछ।

यस श्लोकमा प्रयोग भएको संस्कृत शब्द **'मत्पर'** अत्यन्त महत्त्वपूर्ण छ। यसले के सङ्केत गर्दछ भने, कृष्णभावनाभावित भएर भगवान् श्रीकृष्णलाई सन्तुष्ट पार्ने काम गर्नुबाहेक मानव जीवनको अर्को लक्ष्य छैन र त्यसरी काम गर्दा केवल श्रीकृष्णको बारेमा चिन्तन गर्दै सोच्नु पर्दछ— **"म विशेष रूपले यो कार्य गर्नका लागि श्रीकृष्णद्वारा नियुक्त भएको छु"**। यसरी काम गर्दागर्दै उसलाई स्वाभाविक रूपले भगवान् श्रीकृष्णको चिन्तन हुन थाल्दछ। यो पूर्ण कृष्णभावना हो। तर कसैले पनि मनोमानी तरिकाले केही काम गरेर त्यसको फल भगवान्‌लाई अर्पण गर्ने काम गर्नुहुन्न। यस किसिमको कार्य कृष्णभावनामा रहेर गरिने भक्तिभित्र पर्दैन। मानिसले भगवान् श्रीकृष्णको आदेशअनुसार काम गर्नु पर्दछ, यो अत्यन्त महत्त्वपूर्ण विषय हो। श्रीकृष्णको त्यो आदेश गुरु-शिष्यपरम्परामार्फत प्रामाणिक गुरुबाट प्राप्त हुन्छ। त्यसैले गुरुको आज्ञालाई जीवनको प्रमुख कर्तव्यका रूपमा लिनु पर्दछ। यदि कसैले प्रामाणिक गुरु पनि पाएको छ र उनको आज्ञाअनुसार काम पनि गरेको छ उसका लागि कृष्णभावनामा जीवनको पूर्णता प्राप्त गर्नु सुनिश्चित हुन्छ।

**मच्चित्तः सर्वदुर्गाणि मत्प्रसादात्तरिष्यसि ।**
**अथ चेत्त्वमहंकारान्न श्रोष्यसि विनङ्क्ष्यसि ॥ ५८ ॥**

**मत्** — मेरो; **चित्तः** — चेतनमा; **सर्व** — सबै; **दुर्गाणि** — बाधाहरू; **मत्प्रसादात्** — मेरो कृपाद्वारा; **तरिष्यसि** — पार गर्नेछौ; **अथ** — तर; **चेत्** — यदि; **त्वम्** — तिमी; **अहङ्कारात्** — अहङ्कारले; **नश्रोष्यसि** — सुन्दैनौ भने; **विनङ्क्ष्यसि** — नष्ट हुनेछौ।

**यदि तिमी मेरो चेतनामा ( कृष्णचेतनामा ) आए भने मेरा कृपाले बद्ध**

**जीवनका सम्पूर्ण विघ्नबाधाहरूलाई पार गर्नेछौ। यदि अहङ्कारवश यस्तो चेतनामा रहेर काम गर्दैनौ र मेरा बारेमा सुन्दैनौ भने तिमी नष्ट हुनेछौ।**

**तात्पर्य :** पूर्णतया कृष्णभावनाभावित व्यक्ति आफ्नो अस्तित्वका लागि कर्म गर्ने विषयमा अनावश्यक तरिकाले उद्विग्न हुँदैन। सम्पूर्ण चिन्ताहरूबाट मुक्त हुने यो महान् स्वतन्त्रतालाई मूर्खहरू बुझ्न सक्दैनन्। कृष्णभावनामा रहेर काम गर्नेहरूका निमित्त भगवान् श्रीकृष्ण अत्यन्त घनिष्ठ मित्र बन्नु हुन्छ। उहाँ सधैँ आफ्ना मित्रको सुविधाप्रति ध्यान दिनु हुन्छ। भगवान्लाई प्रसन्न पार्न जसले आफ्ना चौबीसै घण्टाको समय भक्तिमय कार्यमा लगाउँदछ त्यसलाई उहाँले आत्मदान (आफूले आफ्नै दान गर्ने) गर्नु हुन्छ, त्यसैले मानिस देहात्मबुद्धिको झूटो अहङ्कारद्वारा प्रभावित हुन हुँदैन। मानिसले आफूलाई प्रकृतिको नियमबाट मुक्त वा काम गर्नका लागि स्वतन्त्र ठान्नु हुन्न। जीव पहिलेदेखि नै कठोर भौतिक नियमका अधीनमा छ। तर कृष्णभावनाभावित भएर कर्म गर्दा ऊ मुक्त हुन्छ र भौतिक व्याकुलताहरूबाट पनि मुक्त हुन्छ। मानिसले सावधानीपूर्वक के पनि बुझ्नु पर्दछ भने, कृष्णभावनामा सक्रिय नरहेमा जन्म र मृत्युको सागरमा आउने भौतिक हुरीबतासमा उसले आफैँलाई पनि हराउने छ। बद्ध जीवात्माले के गर्नु हुन्छ र के गर्न हुँदैन भन्ने वास्तविकता बुझेको हुँदैन तर कृष्णभावनामा रहेर कर्म गर्ने मानिस कर्म गर्न स्वतन्त्र हुन्छ, किनभने त्यसरी गरिएको प्रत्येक कर्म भगवान् श्रीकृष्णद्वारा प्रेरित र गुरुद्वारा अनुमोदित हुन्छ।

**यदहंकारमाश्रित्य न योत्स्य इति मन्यसे ।**
**मिथ्यैष व्यवसायस्ते प्रकृतिस्त्वां नियोक्ष्यति ॥ ५९ ॥**

**यत्** — यदि; **अहंकारम्** — अहङ्कारको; **आश्रित्य** — आश्रय लिएर; **न योत्स्य** — युद्ध गर्दिन; **इति** — यस प्रकार; **मन्यसे** — सोच्दछौ; **मिथ्याएष** — यी सबै झूटो हो; **व्यवसायः** — सङ्कल्प; **ते** — तिम्रो; **प्रकृतिः** — प्रकृतिले; **त्वाम्** — तिमीलाई; **नियोक्ष्यति** — लगाउँदछ।

**यदि तिमी मेरो निर्देशनअनुसार काम गर्दैनौ र युद्ध गर्दैनौ भने तिमी गलत दिशातिर निर्देशित हुनेछौ। तिम्रो स्वभावले तिमीलाई युद्धमा लगाउने छ।**

**तात्पर्य :** अर्जुन एउटा सैनिक थिए र क्षत्रीय स्वभाव लिएर जन्मेका थिए। त्यसैले युद्ध गर्नु उनको स्वाभाविक कार्य थियो। तर झूटो अहङ्कारवश उनी गुरुलाई, हजुरबुबालाई र मित्रहरूलाई मारेर पापको भागी हुनेछु भनेर

डराइरहेका थिए। वास्तवमा आफू नै आफ्ना कर्मका मालिक भएजस्तै गरी उनले त्यस्ता कर्मका राम्रा र नराम्रा प्रतिफलको निर्देशन आफूले गरिरहेको ठानेका थिए। उनले स्वयम् भगवान् त्यहाँ उपस्थित हुनुहुन्छ र उहाँले युद्ध गर्ने उपदेश दिइरहनुभएको छ भन्ने बिर्सेका थिए। यही नै बद्ध जीवको विस्मरणशीलता हो।

के राम्रो हो र के नराम्रो हो भन्ने कुराको निर्देशन स्वयम् भगवान्ले दिनु हुन्छ। मानिसले जीवनको पूर्णताका लागि केवल कृष्णभावनाभावित भएर काम गर्नु पर्दछ। परमेश्वरले जस्तै आफ्नो भाग्यको निर्णय गर्न अरू कसैले पनि सक्दैन। त्यसैले सबैभन्दा राम्रो बाटो परमेश्वरबाट निर्देशन लिएर सोहि अनुसार काम गर्नु हो। भगवान् वा भगवान्का प्रतिनिधिस्वरूप गुरुको आज्ञालाई कसैले पनि उपेक्षा गर्न हुँदैन। मानिसले बिनाहिच्किचाहट भगवान्को आज्ञा पालन गर्नु पर्दछ, त्यसले उसलाई सम्पूर्ण परिस्थितिहरूमा सुरक्षित राख्दछ।

**स्वभावजेन कौन्तेय निबद्धः स्वेन कर्मणा ।**
**कर्तुं नेच्छसि यन्मोहात्करिष्यस्यवशोऽपि तत् ॥ ६० ॥**

**स्वभावजेन** — तिम्रो आफ्नो स्वभावबाट उत्पन्न; **कौन्तेय** — हे कुन्तीपुत्र!; **निबद्धः** — बद्ध (बाँधिएको); **स्वेन** — तिम्रो आफ्नै; **कर्मणा** — क्रियाकलापले; **कर्तुम्** — गर्नका लागि; **न-इच्छसि** — चाहँदैनौ; **यत्** — जो; **मोहात्** — मोहद्वारा; **करिष्यसि** — गर्नेछौ; **अवशः** — अनिच्छाले; **अपि** — पनि; **तत्** — त्यो।

**हे कौन्तेय! अहिले तिमी मोहमा परेर मेरो निर्देशनअनुसार जुन काम गर्न मानिरहेका छैनौ त्यही काम तिम्रो आफ्नो स्वभावबाट उत्पन्न कर्मका वशमा परेर गर्न बाध्य हुनेछौ।**

**तात्पर्य :** परमेश्वरको निर्देशनमा रहेर काम गर्न स्वीकार नगर्ने व्यक्ति तिनै गुणहरूद्वारा कर्म गर्न बाध्य बनाइन्छ, जुन गुणमा ऊ स्थित हुन्छ। प्रत्येक व्यक्ति प्रकृतिका गुणहरूका विशेष संयोजनको वशीभूत भएर त्यसै अनुसार कर्म गरिरहन्छ। तर जो स्वेच्छाले परमेश्वरका निर्देशनका अधीनमा रहेर कर्ममा संलग्न हुन्छ त्यो गौरवान्वित हुन्छ।

**ईश्वरः सर्वभूतानां हृद्देशेऽर्जुन तिष्ठति ।**
**भ्रामयन्सर्वभूतानि यन्त्रारूढानि मायया ॥ ६१ ॥**

**ईश्वरः** — परमेश्वर; **सर्वभूतानाम्** — सबै प्राणीहरूका; **हृत्-देशे** — हृदयस्थलमा; **अर्जुन** — हे अर्जुन; **तिष्ठति** — बस्नु हुन्छ; **भ्रामयन्** — भ्रमण

गराउँदै (घुमाउँदै); **सर्वभूतानि** — सम्पूर्ण जीवात्मा; **यन्त्र** — मसिनमा; **आरूढानि** — चढ; **मायया** — भौतिक शक्तिका अधीनमा।

**हे अर्जुन! परमेश्वर हरेकका हृदयमा विराजमान हुनुहुन्छ र भौतिक शक्तिबाट बनेको यन्त्रजस्तो शरीरमा चढेर सबै जीवात्मालाई आफ्नो मायाद्वारा घुमाइरहनु भएको छ।**

**तात्पर्य :** अर्जुन सर्वज्ञ थिएनन् — युद्ध गर्ने कि नगर्ने भन्ने निर्णय उनको सीमित स्वविवेकमा निर्भर थियो। भगवान् श्रीकृष्णले भन्नुभएको थियो — जीवात्मा नै सर्वेसर्वा होइन। भगवान् अर्थात् स्वयम् श्रीकृष्ण अन्तर्यामी परमात्माका रूपमा हरेकका हृदयमा बसेर जीवात्मालाई निर्देशन दिइरहनु हुन्छ। शरीर परिवर्तनपछि जीवले पूर्वजन्ममा गरेका कर्महरू बिर्सन्छ तर परमात्मा पूर्वकर्मका ज्ञाताका रूपमा उसका सम्पूर्ण क्रियाकलापको साक्षी बनेर भूत, भविष्य र वर्तमानमा उपस्थित रहनु हुन्छ। त्यसैले प्राणीहरूका सम्पूर्ण क्रियाकलाप परमात्माद्वारा निर्देशित हुन्छन्। जुन जीवात्मा जुन कुरा पाउनयोग्य हुन्छ त्यसले त्यही कुरा प्राप्त गर्दछ, जुन परमात्माको निर्देशनमा प्रकृतिले बनाएको भौतिक शरीरद्वारा बहन गरिएको हुन्छ। जसलाई जुन किसिमको शरीरमा स्थापित गरिन्छ त्यसले त्यही शरीरको स्थिति अनुकूल रहेर काम गर्नु पर्दछ। छिटो दोडने मोटरकारमा बसेको व्यक्ति ढिलो दोडने मोटरमा बसेको व्यक्तिभन्दा छिटो हिँड्छ, यद्यपि जीव अर्थात् चालक एउटै किन नहोस्। यसै गरी परमात्माका आदेशले प्रकृतिले कुनै विशेष जीवात्माका लागि विशेष शरीरको व्यवस्था गर्दछिन्, जसका माध्यमबाट जीवले आफ्ना पूर्वजन्मको चाहनाअनुरूप काम गर्न सक्दछ। जीवात्मा स्वतन्त्र छैन। कसैले पनि आफूलाई भगवान्बाट स्वतन्त्र ठान्नु हुँदैन। जीवात्मा सधैँ परमेश्वरको नियन्त्रणका अधीनमा छ। त्यसैले भगवान्को शरणमा पर्नु नै मानिसको कर्तव्य हो। त्यही नै आगामी श्लोकको उपदेश हुनेछ।

**तमेव शरणं गच्छ सर्वभावेन भारत ।**
**तत्प्रसादात्परां शान्तिं स्थानं प्राप्स्यसि शाश्वतम् ॥ ६२ ॥**

**तम्** — उहाँको; **एव** — निश्चय नै; **शरणम् गच्छ** — शरणमा जाऊ; **सर्व भावेन** — सबैतिरबाट; **भारत** — हे भारत!; **तत्प्रसादात्** — उहाँको कृपाले; **परम्** — दिव्य; **शान्तिम्** — शान्ति; **स्थानम्** — धाम; **प्राप्स्यसि** — पाउने छौ; **शाश्वतम्** — नित्य।

**हे भारत! तिमी पूर्णरूपले उहाँको शरणमा जाऊ, उहाँको कृपाद्वारा तिमीले दिव्य शान्ति र परमशाश्वत धाम प्राप्त गर्नेछौ।**

**तात्पर्य :** अतः जीवात्मा प्रत्येकका हृदयमा विराजमान भगवान्‌का शरणमा समर्पित हुनु पर्दछ र उहाँले उसलाई यस भौतिक जगत्‌का सबै किसिमका कष्टहरूबाट छुट्कारा दिनु हुन्छ। यस प्रकारको शरणागतिले उसलाई यस जीवनका सबै कष्टहरूबाट मुक्ति दिने मात्र नभएर अन्त्यमा परमेश्वरसम्म पुऱ्याउँदछ। वैदिक साहित्य (ऋग्वेद १.२२.२०) मा **तद्विष्णो परमं पदम्** भनेर त्यो दिव्य जगत्‌को वर्णन गरिएको छ। सम्पूर्ण सृष्टि नै ईश्वरको राज्य हो र प्रत्येक भौतिक वस्तु वास्तवमा आध्यात्मिक हुन् तैपनि **'परमम् पदम्'** शब्दले विशेष गरी त्यो शाश्वत धामलाई जनाउँदछ, जसलाई आध्यात्मिक आकाश वा वैकुण्ठ भनिन्छ।

*भगवद्गीताको* पन्ध्रौँ अध्यायमा भनिएको छ—**सर्वस्य चाहं हृदि सन्निविष्टः** अर्थात्, भगवान् हरेकका हृदयमा विराजमान हुनुहुन्छ अतः मानिस हरेकका हृदयमा निवास गर्ने परमात्माका शरणमा जाओस् भन्नुको अर्थ भगवान् श्रीकृष्णका शरणमा परोस् भन्ने हो। श्रीकृष्णलाई अर्जुनले पहिले नै ब्रह्मका रूपमा स्वीकार गरिसकेका छन्। दशौँ अध्यायमा उहाँलाई **"परमब्रह्म, परमधाम"** का रूपमा स्वीकार गरिसकिएको छ। अर्जुनले श्रीकृष्णलाई भगवान्‌का रूपमा र सबै प्राणीहरूका परमधामका रूपमा मानेका छन्। यसमा उनको निजी अनुभव मात्र नभएर नारद, असित, देवल, व्यास जस्ता महापुरुषहरू पनि प्रमाणका रूपमा हुनुहुन्छ।

**इति ते ज्ञानमाख्यातं गुह्याद्गुह्यतरं मया ।**
**विमृश्यैतदशेषेण यथेच्छसि तथा कुरु ॥ ६३ ॥**

**इति** — यस प्रकार; **ते** — तिमीलाई; **ज्ञानम्** — ज्ञान; **आख्यातम्** — भनियो; **गुह्यात्** — गोपनीयभन्दा पनि; **गुह्यतरम्** — अझ गोपनीय; **मया** — मद्वारा; **विमृश्य** — चिन्तन-मनन गरेर; **एतत्** — यो; **अशेषेण** — पूर्णरूपले; **यथा** — जस्तो; **इच्छसि** — चाहन्छौ; **तथा** — त्यस्तै; **कुरु** — गर।

**यस प्रकार मैले तिमीलाई गोपनीयभन्दा गोपनीय ज्ञान भने। यसलाई पूर्णतया चिन्तन-मनन गर र त्यसपछि जे इच्छा लाग्दछ त्यही गर।**

**तात्पर्य :** भगवान्‌ले अर्जुनलाई ब्रह्मभूत अवस्थासम्बन्धी ज्ञान पनि पहिला नै दिइसक्नुभयो। ब्रह्मभूत अवस्थामा रहेको मानिस प्रसन्नचित्त हुन्छ। ऊ कहिल्यै शोक पनि गर्दैन र कुनै वस्तुको चाहना पनि गर्दैन। गोपनीय ज्ञानले गर्दा यस्तो अवस्था हुन्छ। भगवान् श्रीकृष्णले परमात्मासम्बन्धी ज्ञान पनि भन्नुभयो। यो ब्रह्मज्ञान अर्थात् ब्रह्मको ज्ञान पनि हो तर यो त्योभन्दा श्रेष्ठ छ।

यहाँ प्रयोग गरिएको **यथेच्छसि तथा कुरु** अर्थात् "तिमीलाई जे मन

लाग्छ त्यही गर" यो भनाइले के सङ्केत गर्दछ भने, ईश्वरले जीवात्माको सानो स्वतन्त्रतामाथि कुनै हस्तक्षेप गर्नु हुन्न। मानिसको जीवनको अवस्थालाई विकसित बनाउने सबै उपायहरूको व्याख्या भगवान्ले *भगवद्गीतामा* गर्नुभएको छ। भगवान्ले अर्जुनलाई दिनुभएको सर्वश्रेष्ठ उपदेश हो— **अर्जुन! तिमी आफ्नै हृदयमा विराजमान रहेको परमात्माको शरणमा जाऊ।** ठिक ठिक विवेचनाद्वारा मानिस परमात्माको आदेशअनुसार काम गर्न सहमत हुनु पर्दछ। यसले व्यक्तिलाई मानव जीवनको सर्वोच्च सिद्धि वा कृष्णभावनामा निरन्तर अवस्थित हुन सहयोग पुऱ्याउँदछ। भगवान्ले अर्जुनलाई प्रत्यक्ष रूपमा युद्ध गर्ने आदेश दिँदैहुनुहुन्छ। भगवान्मा शरणागत हुनु जीवका लागि सबैभन्दा हितकर विषय हो, परमेश्वरका लागि हितकर होइन। शरणागत हुनुभन्दा पहिल्यै बुद्धिले सकेसम्म यस विषयमा चिन्तन-मनन गर्ने स्वतन्त्रता मानिसलाई छ। भगवान्को उपदेश ग्रहण गर्ने सबैभन्दा राम्रो उपाय पनि यही हो। यस्तै उपदेश भगवान् श्रीकृष्णका प्रामाणिक प्रतिनिधिस्वरूप आध्यात्मिक गुरुबाट पनि प्राप्त हुन्छ।

**सर्वगुह्यतमं भूयः शृणु मे परमं वचः ।**
**इष्टोऽसि मे दृढमिति ततो वक्ष्यामि ते हितम् ॥ ६४ ॥**

**सर्वगुह्यतमम्** — सबैभन्दा बढी गोपनीय; **भूयः** — फेरि; **शृणु** — सुन; **मे** — मबाट; **परमम्** — परम; **वचः** — उपदेश; **इष्टः असि** — तिमी प्रिय छौ; **मे** — मलाई; **दृढम्** — अत्यन्त; **इति** — यस प्रकार; **ततः** — त्यसैले; **वक्ष्यामि** — भन्दैछु; **ते** — तिम्रो; **हितम्** — हितका लागि।

**तिमी मेरा अत्यन्त प्रिय मित्र भएको हुनाले तिम्रो हितका लागि म तिमीलाई सबैभन्दा गोपनीय ज्ञान वा परमउपदेश दिँदैछु, त्यो सुन।**

**तात्पर्य :** भगवान्ले अर्जुनलाई पहिले गोपनीय ज्ञान (ब्रह्मज्ञान) दिनुभयो अनि त्योभन्दा अझ गोपनीय ज्ञान (हरेकका हृदयमा विराजमान रहने परमात्मासम्बन्धी ज्ञान) दिनुभयो र अहिले ज्ञानको सबभन्दा गोपनीय भाग अर्थात् भगवान्मा शरणागत हुने ज्ञान दिँदै हुनुहुन्छ। नवौँ अध्यायको अन्त्यमा उहाँले भन्नुभएको छ— **मन्मना भवः** अर्थात् 'सधैँभरि मेरै चिन्तन गर'। *भगवद्गीताको* उपदेशको सारमाथि जोड दिनका लागि यहाँ ठिक त्यही उपदेश दोहोऱ्याउनुभएको छ। यो सार केवल भगवान् श्रीकृष्णका अत्यन्त प्यारा, शुद्ध भक्तहरूले मात्र बुझ्दछन्, सर्वसाधारणले बुझ्दैनन्। यो नै समग्र वैदिक साहित्यमा सबैभन्दा महत्त्वपूर्ण उपदेश हो। यस सम्बन्धमा भगवान् श्रीकृष्ण जे

भन्दै हुनुहुन्छ, त्यो ज्ञानको अत्यन्त सारभूत अंश हो र यसको पालन अर्जुनले मात्र होइन सबै जीवात्माले गर्नु पर्दछ।

**मन्मना भव मद्भक्तो मद्याजी मां नमस्कुरु ।**
**मामेवैष्यसि सत्यं ते प्रतिजाने प्रियोऽसि मे ॥ ६५ ॥**

**मत्-मनाः** — मेरा विषयमा सोच्ने; **भव** — होऊ; **मत्-भक्तः** — मेरो भक्त; **मत्-याजी** — मेरा उपासक; **माम्** — मलाई; **नमस्कुरु** — नमस्कार गर; **माम्** — मसँग; **एव** — निश्चय नै; **एष्यसि** — आउने छौ; **सत्यम्** — साँचो हो; **ते** — तिमीलाई; **प्रतिजाने** — प्रतिज्ञा गर्दछु; **प्रियः** — प्यारा; **असि** — छौ; **मे** — मेरा।

**सधैँभरि मेरो चिन्तन गर, मेरो भक्त बन, मेरो पूजा गर, मलाई नमस्कार गर। यसो गर्नाले तिमी मसँग आउने छौ। तिमी मेरा अत्यन्त प्रिय मित्र भएकाले तिमीलाई म यो वचन दिन्छु।**

**तात्पर्य :** मानिस भगवान्‌को शुद्ध भक्त बन्नु पर्दछ, सधैँ भगवान्‌कै चिन्तन गर्नु पर्दछ र भगवान्‌का लागि काम गर्नु पर्दछ। यो नै ज्ञानको सबैभन्दा गोपनीय अंश हो। व्यवसायिक ध्यानी हुनु हुँदैन। सधैँ कृष्णको चिन्तन गर्ने अवसर प्राप्त भइरहने किसिमले जीवनलाई ढाल्नु पर्दछ। मानिसले सधैँ आफ्ना सम्पूर्ण दैनिक क्रियाकलापहरू श्रीकृष्णसँग सम्बन्धित हुने किसिमले गर्नु पर्दछ। चौबीसै घण्टा भगवान् श्रीकृष्णको चिन्तन गर्न सकिने किसिमले मानिसले आफ्नो जीवनलाई व्यवस्थित तुल्याउनु पर्दछ। यस प्रकार शुद्ध कृष्णभावनामा रहने जुनसुकै व्यक्ति निश्चित रूपले भगवान् श्रीकृष्णको धाममा फर्किनेछ र त्यहाँ उसले साक्षात् श्रीकृष्णको सान्निध्य प्राप्त गर्नेछ। यो भगवान्‌को प्रतिज्ञा हो। अर्जुन श्रीकृष्णका प्रिय मित्र भएका हुनाले ज्ञानको यो अत्यन्त गोपनीय अंश उनलाई भनिएको हो। अर्जुनका चरणचिन्हको अनुसरण गर्ने जुनसुकै व्यक्ति पनि श्रीकृष्णको प्रियपात्र बन्न सक्दछ र अर्जुनले जस्तै सिद्धि पाउन सक्दछ।

यी शब्दहरूले मानिसले आफ्नो मनलाई भगवान् श्रीकृष्णमा एकाग्र गराउनु पर्दछ भन्ने कुरामा जोड दिन्छन्। हातमा बाँसुरी लिनुभएका भगवान् श्रीकृष्णको स्वरूप दुई भुजाधारी छ, शिरमा मयुरपङ्ख धारण गर्ने सुन्दर अनुहार हुनुभएका श्रीकृष्णको शरीर श्याम वर्णको छ। ब्रह्मसंहिता र अन्य साहित्यमा पनि श्रीकृष्णको वर्णन पाइन्छ। भगवान्‌को मौलिक स्वरूप श्रीकृष्ण हो र मानिसले आफ्नो मनलाई श्रीकृष्णमै स्थिर गर्नु पर्दछ। ईश्वरका अन्य रूपहरूतिर ध्यान लगाउनु आवश्यक छैन। भगवान्‌का धेरै रूपहरू छन्,

जस्तै — विष्णु, नारायण, राम, बराह आदि तर भक्तले अर्जुनका सामु उपस्थित रूपमै अर्थात् भगवान् श्रीकृष्णमा नै आफ्नो मन केन्द्रित गर्नु पर्दछ। श्रीकृष्णका रूपमा मनलाई एकाग्र पार्नाले ज्ञानको अत्यन्त गोपनीय अंश निर्मित हुन्छ र यही ज्ञान अर्जुनमा प्रकट भयो, किनभने अर्जुन भगवान् श्री कृष्णका अत्यन्त प्रिय मित्र थिए।

**सर्वधर्मान् परित्यज्य मामेकं शरणं व्रज ।**
**अहं त्वां सर्वपापेभ्यो मोक्षयिष्यामि मा शुचः ॥ ६६ ॥**

**सर्वधर्मान्** — धर्मका सबै प्रकारहरू; **परित्यज्य** — त्यागेर; **माम्** — मेरो; **एकम्** — एकमात्र; **शरणम्** — शरणमा; **व्रज** — जाऊ; **अहम्** — म; **त्वाम्** — तिमीलाई; **सर्व** — सबै; **पापेभ्यः** — पापहरूबाट; **मोक्षयिष्यामि** — उद्धार गर्दछु; **मा शुचः** — चिन्ता नगर।

**सबै प्रकारका धर्महरूलाई त्यागेर मेरा शरणमा आऊ, म तिमीलाई सम्पूर्ण पापकर्महरूबाट उद्धार गर्दछु, नडराऊ।**

**तात्पर्य :** भगवान्ले विभिन्न प्रकारका ज्ञान र धर्मका विधिहरूको वर्णन गर्नुभयो, जस्तै — परमब्रह्मसम्बन्धी ज्ञान, परमात्मासम्बन्धी ज्ञान, सामाजिक जीवनका विभिन्न अवस्था र व्यवस्थासम्बन्धी ज्ञान, संन्यास जीवनसम्बन्धी ज्ञान, अनासक्ति, मन तथा इन्द्रिय नियन्त्रण, र ध्यानसम्बन्धी ज्ञान इत्यादि। उहाँले धेरै किसिमले विभिन्न प्रकारका धर्मको वर्णन गर्नुभयो। अब *भगवद्गीताको* सारांश प्रस्तुत गर्दै भगवान् भन्नु हुन्छ — अर्जुन! तिमीलाई भनिएका सम्पूर्ण विधिहरू छोडिदेऊ र केवल मेरा (कृष्णका) शरणमा आऊ। यो शरणागतिले तिमीलाई सम्पूर्ण पापकर्मबाट बचाउने छ।" यसरी स्वयम् भगवान्ले अर्जुनलाई रक्षा गर्ने वचन दिनुभयो।

सातौँ अध्यायमा सधैँ पापकर्महरूबाट मुक्त भएको व्यक्तिले मात्रै भगवान् श्रीकृष्णको पूजा गर्न सक्दछ भनिएको थियो। त्यसैले यहाँ कसैले सम्पूर्ण पापकर्मबाट मुक्त नभई शरणागतिको प्रक्रिया अपनाउन पनि सक्दैन भन्ने सोच्न सक्दछ। यस किसिमको शंकाका लागि यहाँ के भनिएको छ भने — सबै पापकर्महरूबाट मुक्त नभएको भए पनि श्रीकृष्णप्रति शरणागतिको प्रक्रियाले मात्रै ऊ ती पापबाट स्वतः मुक्त हुन्छ। आफूलाई पापबाट मुक्त बनाउनका लागि उसले अरू कठिन प्रयासहरू गर्नुपर्ने कुनै आवश्यकता छैन। मानिसले बिनाहिच्किचाहट भगवान् श्रीकृष्णलाई सम्पूर्ण जीवात्माका परमरक्षक ठान्नु पर्दछ र श्रद्धा र प्रेमका साथमा उहाँको शरण पर्नु पर्दछ। हरिभक्ति विलास (११.६७६)मा श्रीकृष्णमा शरणागत हुने विधिको वर्णन यसरी गरिएको छ —

*आनुकूल्यस्य सङ्कल्पः प्रातिकूल्यस्य वर्जनम् ।*
*रक्षिष्यतीति विश्वासो गोप्तृत्वे वरणं तथा ।*
*आत्मनिक्षेप कार्पण्ये षड्विधा शरणागतिः ॥*

भक्तियोगअनुसार जुन धार्मिक सिद्धान्तले अन्त्यमा भगवद्भक्तितिर डोऱ्याउँदछ त्यस्तो धर्मलाई मात्र मानिसले अपनाउनु पर्दछ। सामाजिक व्यवस्थामा कसैले आफ्नो अवस्थाअनुसार आफ्नो निजी व्यवसायिक कर्म गर्न सक्दछ तर आफ्नो कर्तव्य पालन गर्दै यदि ऊ कृष्णभावनासम्म आइपुग्न नसके उसका सम्पूर्ण कर्म व्यर्थ हुन्छन्। जुन कर्मले कृष्णभावनाको पूर्ण अवस्थामा पुऱ्याउँदैन त्यस्ता कर्मबाट बच्नु पर्दछ। भगवान् श्रीकृष्णले सबै परिस्थितिमा सबै किसिमका कठिनाइहरूबाट रक्षा गर्नु हुन्छ भन्ने कुरामा विश्वस्त हुनु पर्दछ। जीवन निर्वाह कसरी गर्ने होला भनेर सोचिरहनुपर्ने आवश्यकता छैन। त्यसको रेखदेख श्रीकृष्णले गर्नु हुन्छ। मानिसले आफूलाई सधैँ असहाय ठान्नु पर्दछ र जीवनमा गरिने प्रगतिको एकमात्र आधार श्रीकृष्ण हुनुहुन्छ भन्ने ठान्नु पर्दछ। आफूलाई पूर्णतः कृष्णभावनाभावित बनाएर गम्भीरतापूर्वक भगवद्भक्तिमा लगाउनासाथ मानिस भौतिक प्रकृतिका सम्पूर्ण संक्रमणहरूबाट तत्काल मुक्त हुन्छ। धर्मका विविध प्रक्रियाहरू र ज्ञानको विकास तथा यौगिक ध्यान आदिद्वारा शुद्धीकरण गर्ने विविध विधिहरू छन् तर जो भगवान् श्रीकृष्णका शरणमा परेको छ उसले यति धेरै विधिहरू अपनाउनु पर्दैन। श्रीकृष्णमा शरणागत हुनाले मात्रै ऊ समयलाई अनावश्यक नष्ट गर्नबाट बच्दछ। यसरी मानिस तत्काल प्रगति गर्न सक्दछ र सबै किसिमका पापकर्मबाट मुक्त हुन सक्दछ।

मानिस भगवान् श्रीकृष्णको सुन्दर छविद्वारा आकर्षित हुन्छ। उहाँ सर्वाकर्षक हुनुभएकाले उहाँलाई कृष्ण भनिएको हो। श्रीकृष्णको सर्वशक्तिमान् व्यक्तित्व र सौन्दर्यबाट आकर्षित हुने मानिस भाग्यमानी हो। विभिन्न प्रकारका आध्यात्मवादीहरू छन्, तीमध्ये कुनै निराकार ब्रह्मदर्शनमा अनुरक्त छन् कोही परमात्मा स्वरूपप्रति आकर्षित छन् तर जो भगवान्‌को साकार रूपप्रति आकर्षित हुन्छ र योभन्दा बढी जो अझ साक्षात् भगवान् श्रीकृष्णप्रति आकर्षित हुन्छ, त्यो नै सबैभन्दा सिद्ध अध्यात्मवादी हो। अर्को शब्दमा पूर्ण भावमा गरिने कृष्णभक्ति नै ज्ञानको सबैभन्दा गोपनीय भाग हो र यो नै सम्पूर्ण *भगवद्गीताको* सार हो। कर्मयोगीहरू, अनुभवी दार्शनिकहरू, योगीहरू र भक्तहरू सबैलाई अध्यात्मवादी भनिन्छ तर तीमध्ये जो शुद्ध भक्त छन् तिनीहरू नै सर्वोत्तम हुन्छन्। यहाँ **मा शुच** यी विशिष्ट शब्दहरू प्रयोग गरिएका छन्, जसको अर्थ हुन्छ नडराऊ, सङ्कोच नमान, चिन्ता नगर। यी शब्दहरू अत्यन्त अर्थपूर्ण छन्, सबै किसिमका धार्मिकपथहरूलाई कसरी त्याग गर्न सकिन्छ र कसरी

एकमात्र भगवान् श्रीकृष्णका शरणमा जान सकिन्छ भन्ने चिन्ता मानिसमा हुन सक्दछ तर यस्तो चिन्ता निरर्थक हो।

**इदं ते नातपस्काय नाभक्ताय कदाचन ।**
**न चाशुश्रूषवे वाच्यं न च मां योऽभ्यसूयति ॥ ६७ ॥**

इदम् — यो; **ते** — तिमीद्वारा; **न** — होइन; **अतपस्काय** — तपस्या नगर्नेलाई; **न** — होइन; **अभक्ताय** — अभक्तका लागि; **कदाचन** — कुनै समयमा; **न** — छैन; **च** — पनि; **अशुश्रूषवे** — भक्तिमा नलागेका व्यक्तिलाई; **वाच्यम्** — भन्नका लागि; **न** — होइन; **च** — पनि; **माम्** — मप्रति; **यः** — जो; **अभ्यसूयति** — द्वेष गर्दछ।

**असंयमीलाई, अभक्तलाई, भक्तिमा संलग्न नभएकालाई र मेरो द्वेष गर्नेलाई यो गोपनीय ज्ञान कहिल्यै नभन्नू।**

**तात्पर्य :** जसले धार्मिक विधिको अनुष्ठान गरेको छैन, जसले कहिल्यै कृष्णभावनामा रहेर भक्तिको अभ्यास गरेको छैन, जसले शुद्ध भक्तको सेवा गरेको छैन, जसले श्रीकृष्णलाई केवल एउटा ऐतिहासिक व्यक्तित्व मात्रै मान्दछ वा जसले श्रीकृष्णको महानताप्रति द्वेष गर्दछ, त्यस्ता मानिसहरूलाई ज्ञानको यो अत्यन्त गोपनीय अंश भन्न हुँदैन। कहिलेकाहीँ के पाइन्छ भने, भगवान् श्रीकृष्णको ईर्ष्या गर्ने आसुरी स्वभावका मानिसहरूले पनि भिन्न प्रकारले श्रीकृष्णको पूजा गरिरहेका हुन्छन् र व्यवसाय चलाउनका लागि भिन्न किसिमले *भगवद्गीताको* प्रवचन गर्ने पेशा अपनाएका हुन्छन् तर वास्तविक रूपमा श्रीकृष्णलाई बुझ्न चाहनेले *भगवद्गीताका* यस्ता व्याख्या वा भाष्यबाट बच्नु पर्दछ। वास्तवमा विषयी वा कामासक्त मानिसले *भगवद्गीताको* प्रयोजन बुझ्न सक्दैन। कुनै व्यक्ति त्यस्तो कामासक्त पनि छैन र वैदिक शास्त्रहरूमा भनिएका नियमहरू दृढतापूर्वक पालन पनि गरिरहेको छ तर यदि ऊ भक्त छैन त्यसले पनि भगवान् श्रीकृष्णलाई बुझ्न सक्दैन। यदि कसैले आफूलाई श्रीकृष्णको भक्तका रूपमा प्रस्तुत गर्दछ तर कृष्णभावनाभावित क्रियाकलापमा संलग्न हुँदैन त्यस्ताले पनि श्रीकृष्णलाई बुझ्न सक्दैनन्। भगवान् श्रीकृष्णसँग ईर्ष्या गर्ने पनि धेरै व्यक्ति छन्, किनभने श्रीकृष्णले *भगवद्गीतामा* "म नै परमपुरुष हुँ, मभन्दा ठुलो र म बराबरको पनि कोही छैन" भन्नुभएको छ। त्यसैले धेरै व्यक्तिहरू श्रीकृष्णसँग द्वेष गर्दछन्। त्यस्ता व्यक्तिलाई पनि यो *भगवद्गीता* भन्न हुँदैन, किनभने तिनीहरूले यो बुझ्न सक्दैनन्। श्रद्धाहीन व्यक्तिले *भगवद्गीता* र श्रीकृष्णलाई बुझ्नु सम्भव छैन। शुद्ध भक्त बनेका आधिकारिक व्यक्तिबाट श्रीकृष्णलाई नबुझीकन *भगवद्गीताको* टीका लेख्ने प्रयास गर्नु हुँदैन।

**य इदं परमं गुह्यं मद्भक्तेष्वभिधास्यति ।**
**भक्तिं मयि परां कृत्वा मामेवैष्यत्यसंशयः ॥ ६८ ॥**

**यः** — जो; **इदम्** — यो; **परमम्** — अत्यन्त; **गुह्यं** — गोपनीय रहस्य; **मत्** — मेरो; **भक्तेषु** — भक्तहरूमा; **अभिधास्यति** — भन्दछ; **भक्तिम्** — भक्ति; **मयि** — ममा; **पराम्** — दिव्य; **कृत्वा** — गरेर; **माम्** — मलाई; **एव** — निश्चय नै; **एष्यति** — पाउँदछ; **असंशयः** — बिना शंका।

**जसले भक्तहरूलाई यो परमरहस्य भन्दछ त्यसले शुद्ध भक्ति प्राप्त गर्दछ र अन्त्यमा मेरो धाममा फर्किन्छ।**

**तात्पर्य** : साधारणतया भक्तहरूका बीचमा मात्र *भगवद्गीताको* विवेचना गर्नु पर्दछ भन्ने गरिन्छ, किनभने अभक्तहरूले न भगवान् श्रीकृष्णलाई बुझ्न सक्दछन् न *भगवद्गीतालाई*। जसले श्रीकृष्णलाई उहाँ जस्तो हुनुहुन्छ त्यही रूपमा र *भगवद्गीतालाई* पनि जस्ताको तस्तै स्वीकार गर्दैनन् तिनीहरू मनोमानी तरिकाले *भगवद्गीताको* व्याख्या गर्ने प्रयत्न गरेर अपराधको भागी नबनून्। जो श्रीकृष्णलाई भगवान्का रूपमा स्वीकार गर्न तयार छ त्यसले मात्र *भगवद्गीताको* व्याख्या गर्नु उचित हुन्छ। यो भक्तहरूको मात्र विषय हो, दार्शनिक चिन्तकहरूको होइन। जसले गम्भीरतापूर्वक *भगवद्गीतालाई* जस्ताको तस्तै प्रस्तुत गर्ने प्रयत्न गर्दछ त्यसले भक्तिमा प्रगति गर्नेछ र त्यो व्यक्ति शुद्ध भक्तिमय जीवनका स्तरमा पुग्नेछ। यस किसिमको शुद्ध भक्तिको फलस्वरूप ऊ निश्चित रूपले आफ्नो घर भगवद्धाममा फर्किन्छ।

**न च तस्मान्मनुष्येषु कश्चिन्मे प्रियकृत्तमः ।**
**भविता न च मे तस्मादन्यः प्रियतरो भुवि ॥ ६९ ॥**

**न** — होइन; **च** — तथा; **तस्मात्** — त्योभन्दा; **मनुष्येषु** — मानिसहरूमा; **कश्चित्** — कुनै; **मे** — मलाई; **प्रिय-कृत्-तमः** — अत्यन्त प्रिय; **भविता** — हुनेछ; **न** — न त; **च** — तथा; **मे** — मलाई; **तस्मात्** — ऊ भन्दा; **अन्यः** — अर्को; **प्रियतरः** — भन्दा प्यारो; **भुवि** — यस जगत्मा।

**यो संसारमा मेरा लागि ऊभन्दा प्रिय अर्को सेवक छैन, र पछि कहिल्यै पनि ऊभन्दा प्रिय अर्को हुनेछैन।**

**अध्येष्यते च य इमं धर्म्यं संवादमावयोः ।**
**ज्ञानयज्ञेन तेनाहमिष्टः स्यामिति मे मतिः ॥ ७० ॥**

**अध्येष्यते** — अध्ययन गर्नेछ; **च** — पनि; **यः** — जसले; **इमम्** — यो; **धर्म्यम्** — पवित्र; **संवादम्** — वार्तालाप; **आवयोः** — हामी दुईको; **ज्ञान** —

ज्ञानको; **यज्ञेन** — यज्ञद्वारा; **तेन** — ऊद्वारा; **अहम्** — म; **इष्टः** — पूजित; **स्याम्** — हुनेछु; **इति** — यस प्रकार; **मे** — मेरो; **मतिः** — विचार छ।

**साथै म के घोषणा गर्दछु भने, जसले हामी दुईबीचको यो पवित्र वार्तालापको अध्ययन गर्दछ त्यसले आफ्नो बुद्धिद्वारा मेरो पूजा गर्दछ।**

**श्रद्धावाननसूयश्च श्रृणुयादपि यो नरः ।**
**सोऽपि मुक्तः शुभाँल्लोकान्प्राप्नुयात्पुण्यकर्मणाम् ॥ ७१ ॥**

**श्रद्धावान्** — श्रद्धालु; **अनसूयः** — द्वेषरहित; **च** — तथा; **श्रृणुयात्** — सुन्दछ; **अपि** — निश्चय नै; **यः** — जो; **नरः** — मानिस; **सः** — त्यो; **अपि** — पनि; **मुक्तः** — मुक्त भएको; **शुभान्** — पवित्र; **लोकान्** — लोकहरूमा; **प्राप्नु-यात्** — प्राप्त हुन्छ; **पुण्यकर्मणाम्** — पुण्यात्माहरूको।

**यसलाई जसले ईर्ष्यारहित र श्रद्धायुक्त भएर सुन्दछ त्यो व्यक्ति सम्पूर्ण पापकर्महरूबाट मुक्त हुन्छ र पुण्यात्माहरू निवास गर्ने पवित्र लोकमा पुग्दछ।**

**तात्पर्य** : यस अध्यायको ६७ औँ श्लोकमा भगवान्‌ले भगवान्‌सँग द्वेषभाव गर्ने व्यक्तिलाई *भगवद्‌गीता* सुनाउन स्पष्ट रूपले निषेध गर्नुभएको छ। अर्को शब्दमा *भगवद्‌गीता* केवल भक्तहरूका लागि हो। तर कहिलेकाहीँ यस्तो पनि हुन्छ— कुनै भगवद्‌भक्त खुला कक्षामा प्रवचन गरिरहेको हुन्छ र त्यहाँ सबै शिक्षार्थी भक्त हुँदैनन्। यस्तो अवस्थामा त्यस्ता भक्तहरूले किन खुल्ला कक्षा चलाउँदछन्? यसको व्याख्या यहाँ यसरी गरिएको छ— हो, त्यहाँ सबै भक्त हुँदैनन् तैपनि धेरैजसो मानिसहरू भगवान् श्रीकृष्णका द्वेषी हुँदैनन्। तिनीहरू श्रीकृष्णलाई भगवान्‌का रूपमा श्रद्धा गर्दछन्। यदि यस्ता मानिसहरूले प्रामाणिक भक्तहरूबाट भगवान्‌सम्बन्धी चर्चा सुन्न पाए त्यसको फलस्वरूप तिनीहरू तत्काल सम्पूर्ण पापकर्मबाट मुक्त हुन्छन् र पछि तिनीहरू यस्तो पवित्र लोकमा जान्छन् जहाँ पूर्णतया पुण्यात्माहरूको मात्र निवास हुन्छ। अतः शुद्ध भक्त बन्ने प्रयास नगर्ने व्यक्तिहरूले पनि *भगवद्‌गीताको* श्रवणले मात्रै पुण्यकर्मको फल पाउँदछन्। यसरी भगवान्‌का शुद्ध भक्तले हरेकलाई आफ्ना सम्पूर्ण पापकर्महरूबाट मुक्त हुने र भगवान्‌को भक्त बन्ने अवसर प्रदान गर्दछ। सामान्यतया पापपूर्ण कर्मबाट मुक्त भएका पुण्यात्माहरूले अत्यन्त सहज तरिकाले कृष्णभावनालाई ग्रहण गर्दछन्। यहाँ प्रयोग भएको **पुण्यकर्मणाम्** यो शब्द अत्यन्त अर्थपूर्ण छ। यसले वैदिक साहित्यमा उल्लेख भएका अश्वमेघ यज्ञजस्ता महान् यज्ञ सम्पादन गर्ने कार्यलाई सङ्केत गरेको छ।

जो पुण्यात्माहरू भक्ति सेवामा संलग्न छन् तर शुद्ध भक्त बनिसकेका छैनन्, तिनीहरूले महाराज ध्रुवले अध्यक्षता गरेको ध्रुवलोक प्राप्त गर्दछन्। ध्रुव, भगवान्‌का महान् भक्त हुन् र उनको आफ्नै एउटा विशिष्ट लोक छ, जसलाई ध्रुव तारा पनि भनिन्छ।

**कच्चिदेतच्छ्रुतं पार्थ त्वयैकाग्रेण चेतसा ।**
**कच्चिदज्ञानसंमोहः प्रणष्टस्ते धनंजय ॥ ७२ ॥**

**कच्चित्** — के; **एतत्** — यो; **श्रुतम्** — सुनिएको; **पार्थ** — हे पृथापुत्र; **त्वया** — तिमीद्वारा; **एकाग्रेण** — पूर्ण एकाग्रतासाथ; **चेतसा** — मनद्वारा; **कच्चित्** — के; **अज्ञान** — अज्ञानको; **संमोहः** — मोह (आकर्षण); **प्रणष्टः** — नाश भयो; **ते** — तिम्रो; **धनंजय** — हे धनका विजेता (अर्जुन)।

**हे पार्थ, हे धनञ्जय! तिमीले एकाग्र चित्तले यो ज्ञान सुन्यौ ? के अब तिम्रो अज्ञान र मोह नाश भयो ?**

**तात्पर्य :** भगवान्‌ले अर्जुनका गुरुको अभिनय गरिरहनुभएको थियो। त्यसैले अर्जुनले सही अर्थमा सम्पूर्ण *भगवद्गीता* बुझे कि बुझेनन् भनेर सोध्नु उहाँको कर्तव्य थियो। नबुझेको भए आवश्यकताअनुरूप सम्पूर्ण *भगवद्गीता* वा यसको कुनै अंशलाई पुनः व्याख्या गर्न भगवान् तयार हुनुहुन्थ्यो। वास्तवमा कसैले पनि भगवान् श्रीकृष्णजस्ता प्रामाणिक गुरु वा उहाँका प्रतिनिधिबाट *भगवद्गीताको* व्याख्यान सुन्न पाएमा तिनका सम्पूर्ण अज्ञान समाप्त हुनेछन्। *भगवद्गीता* कुनै कवि वा उपन्यासकारद्वारा लिखित साधारण ग्रन्थ होइन, यो भगवान्‌द्वारा भनिएको वाणी हो। भगवान् श्रीकृष्ण वा उहाँका कुनै प्रामाणिक आध्यात्मिक प्रतिनिधिबाट यो उपदेश सुन्न पाउने भाग्यमानी मानिस अवश्य नै एउटा मुक्तआत्मा बनेर अज्ञानको अन्धकारदेखि बाहिर निस्कन्छ।

अर्जुन उवाच

**नष्टो मोहः स्मृतिर्लब्धा त्वत्प्रसादान्मयाच्युत ।**
**स्थितोऽस्मि गतसन्देहः करिष्ये वचनं तव ॥ ७३ ॥**

**अर्जुन उवाच** — अर्जुनले भने; **नष्टः** — नाश भयो; **मोहः** — मोह (भ्रम); **स्मृतिः** — स्मरण शक्ति (ज्ञान); **लब्धा** — फेरि पाएँ; **त्वत् प्रसादात्** — हजुरका कृपाले; **मया** — मैले; **अच्युत** — हे अच्युत; **कृष्ण**; **स्थितः** — अवस्थित; **अस्मि** — छु; **गत** — हटेको; **सन्देहः** — सम्पूर्ण सन्देह; **करिष्ये** — पूरा गर्नेछु; **वचनम्** — आदेश; **तव** — हजुरको।

**अर्जुनले भने — हे कृष्ण! हे अच्युत! मेरो मोह नष्ट भयो, हजुरका कृपाले मैले फेरि मेरो स्मृति प्राप्त गरेँ। म अहिले दृढ छु, शंकारहित भएको छु र हजुरको आदेशअनुसार काम गर्न तयार छु।**

**तात्पर्य :** जीवको मौलिक स्वरूप भनेको भगवान्‌को आदेशअनुसार कर्म गर्नु हो। यहाँ अर्जुनले जीवको प्रतिनिधित्व गरिरहेछन्। जीव आत्मानुशासित हुनु पर्दछ। श्रीचैतन्य महाप्रभु भन्नु हुन्छ — भगवान्‌को नित्य सेवक बन्नु नै जीवको वास्तविक अवस्था हो। यो सिद्धान्तलाई बिर्सिएर जीवात्मा भौतिक प्रकृतिका बन्धनमा पर्दछ, तर परमेश्वरको सेवा गरिरहेमा ऊ ईश्वरको मुक्त दास बन्दछ। जीवात्माको वैधानिक स्थिति भन्नु नै सेवक बन्नु हो। उसले या मायाको सेवा गर्दछ या परमेश्वरको। परमेश्वरको सेवामा लागेको छ भने ऊ सामान्य अवस्थामा हुन्छ, र बहिरङ्गा शक्ति मायाको सेवा गर्ने इच्छा गरेमा ऊ निश्चय नै बन्धनमा पर्दछ। मायामा हुँदा जीवले भौतिक जगत्‌को सेवा गरिरहेको हुन्छ। ऊ आफ्ना कामना र वासनाले बाँधिएको हुन्छ, तैपनि आफूलाई संसारको मालिक ठानिरहेको हुन्छ। यसैलाई भन्छन् **माया**। जब मानिस मुक्त हुन्छ, उसको मोह पनि समाप्त हुन्छ, र ऊ स्वेच्छाले भगवान्‌का शरणमा पर्दछ, अनि भगवान्‌का इच्छानुसार कर्म गर्दछ। जीवात्मालाई फँसाउने मायाको अन्तिम प्रहार वा अन्तिम पासो 'म ईश्वर हूँ' भन्ने धारणा हो। जीवात्माले जब "म बद्धजीव होइन अब त म ईश्वर हूँ" भन्ने सोच्न थाल्दछ, त्यस समय ऊ प्रति बुद्धिहीन हुन्छ अनि "म ईश्वर भएको भए कसरी सन्देहग्रस्त हुन सक्थेँ" भन्नेसम्म पनि सोच्न सक्दैन! उसले विचार नै गर्दैन। त्यसैले यो मायाको अन्तिम पासो हो। वास्तवमा मायाशक्तिबाट मुक्त हुनका लागि भगवान् श्रीकृष्णलाई बुझ्नु पर्दछ, र उहाँकै आदेशअनुसार काम गर्न सहमत हुनु पर्दछ।

यस श्लोकमा प्रयोग भएका **मोह** शब्द अत्यन्त महत्त्वपूर्ण छ। मोह ज्ञानको विरोधी हुन्छ। वास्तवमा सही ज्ञान भन्नु नै हरेक जीवात्मा ईश्वरको नित्य सेवक हुन् भन्ने बुझ्नु हो तर आफूलाई त्यो स्थितिमा रहेको सोच्नुभन्दा जीवात्मा "म कसैको सेवक होइन, म त यस संसारको मालिक हूँ" भन्ने सोच्न पुग्दछ, किनभने ऊ भौतिक प्रकृतिमाथि आफ्नो स्वामित्व कायम गर्न चाहन्छ। यस मोहलाई भगवान्‌का कृपाले वा शुद्ध भक्तका कृपाले जित्न सकिन्छ। यसरी मोह हटेपछि मानिस कृष्णभावनामा रहेर कर्म गर्न सहमत हुन्छ।

भगवान् श्रीकृष्णको आदेशअनुसार कर्म गर्नु नै कृष्णभावना हो। बहिरङ्गा शक्तिका विषयबाट मोहित बद्ध जीव, प्रत्येक वस्तुका स्वामी पूर्ण ज्ञानमय परमेश्वर नै सबैका सही मालिक हुनुहुन्छ भन्ने जान्दैन। भगवान्

आफ्ना भक्तलाई जे पनि दिन सक्नु हुन्छ। उहाँ हरेकका मित्र हुनुहुन्छ तर आफ्ना भक्तहरूप्रति विशेष झुकाव राख्नु हुन्छ। उहाँ नै यस भौतिक जगत् र सम्पूर्ण जीवात्माका नियन्त्रक हुनुहुन्छ। उहाँ अक्षय वा अनन्त कालका पनि नियन्त्रक हुनुहुन्छ र उहाँ सम्पूर्ण ऐश्वर्य र सम्पूर्ण शक्तिहरूले परिपूर्ण हुनुहुन्छ। भगवान्‌ले भक्तका हातमा आफैँलाई पनि सुम्पिदिनु हुन्छ। जसले भगवान्‌लाई जान्दैन, त्यो मोहका वशमा पर्दछ र ऊ भक्त बन्न सक्दैन बरु मायाको दास बन्न पुग्दछ। तर यहाँ अर्जुन भगवान्‌बाट *भगवद्गीता* सुनेर सम्पूर्ण मोहबाट मुक्त भएका छन्। श्रीकृष्ण आफ्ना मित्र मात्र नभएर भगवान् हुनुहुन्छ भन्ने उनले बुझे। उनले यथार्थ रूपमा श्रीकृष्णलाई बुझे। अतः *भगवद्गीताको* अध्ययन गर्नु भनेको यथार्थ रूपमा श्रीकृष्णलाई बुझ्नु हो। पूर्ण ज्ञान पाएपछि मानिस स्वतः भगवान् श्रीकृष्णका शरणमा जान्छ। यो युद्ध जनसङ्ख्याको अनावश्यक वृद्धिलाई घटाउने श्रीकृष्णको योजना हो भन्ने बुझेपछि अर्जुन श्रीकृष्णका इच्छाअनुसार लडाइँ गर्न तयार भए। उनले भगवान्‌को आदेशअनुसार युद्ध गर्नका लागि फेरि आफ्ना अस्त्र—धनुष-वाणहरू हातमा लिए।

सञ्जय उवाच

**इत्यहं वासुदेवस्य पार्थस्य च महात्मनः ।**
**संवादमिममश्रौषमद्भुतं रोमहर्षणम् ॥ ७४ ॥**

**सञ्जय उवाच**—सञ्जयले भने; **इति**—यस प्रकार; **अहम्**—मैले; **वासुदेवस्य**—श्रीकृष्णको; **पार्थस्य**—अर्जुनको; **च**—पनि; **महात्मनः**—महापुरुषहरूको; **सम्वादम्**—वार्तालाप; **इमम्**—यो; **अश्रौषम्**—सुनेँ; **अद्भुतम्**—आश्चर्यजनक; **रोमहर्षणम्**—रोमाञ्च हुने।

**सञ्जयले भने—यस प्रकार मैले भगवान् श्रीकृष्ण र अर्जुन यी दुई महापुरुषहरूको वार्तालाप सुनेँ र त्यो अत्यन्त अद्भुत सन्देशले मेरो शरीर रोमाञ्चित भइरहेछ।**

**तात्पर्य :** *भगवद्गीताको* प्रारम्भमा "कुरुक्षेत्रको युद्ध मैदानमा के भयो?" भन्दै धृतराष्ट्रले आफ्ना सचिव सञ्जयसँग सोधेका थिए। आफ्ना महान् गुरु व्यासका कृपाले सञ्जयका हृदयमा युद्धक्षेत्रको सम्पूर्ण दृश्य प्रकट भएको थियो। यसरी सञ्जयले युद्धक्षेत्रका मूल विषयको वर्णन गरे। त्यो वार्तालाप अद्भुत थियो, किनभने दुईवटा महान् आत्माका बीच यति महत्त्वपूर्ण वार्ता पहिले कहिल्यै पनि भएको थिएन र पछि पनि हुनेछैन। यो आश्चर्यजनक

थियो, किनभने भगवान्ले स्वयम् आफू र आफ्नो शक्तिका बारेमा जीवात्मारूप महान् भक्त अर्जुनलाई यो भनिरहनुभएको थियो। यदि हामीले श्रीकृष्णलाई बुझ्नका निमित्त अर्जुनका चरणचिन्हको अनुसरण गर्‍यौँ भने हाम्रो जीवन सुखी र सफल हुनेछ। सञ्जयलाई यसको अनुभूति भयो र जसरी उनले यसलाई बुझ्दै गए त्यसै गरी यो वार्ता धृतराष्ट्रलाई सुनाउँदै गए। अब के निष्कर्ष प्राप्त भयो भने, भगवान् श्रीकृष्ण र अर्जुन जहाँ जहाँ हुनुहुन्छ, विजय पनि त्यहीँ हुन्छ।

**व्यासप्रसादाच्छ्रुतवानेतद्गुह्यमहं परम् ।**
**योगं योगेश्वरात्कृष्णात्साक्षात्कथयतः स्वयंम् ॥ ७५ ॥**

**व्यासप्रसादात्** — व्यासदेवका कृपाले; **श्रुतवान्** — सुनेको; **एतत्** — यो; **गुह्यम्** — गोपनीय; **अहम्** — मैले; **परम्** — परम; **योगम्** — योग; **योग-ईश्वरात्** — योगका ईश्वरबाट; **कृष्णात्** — श्रीकृष्णबाट; **साक्षात्** — प्रत्यक्ष रूपले; **कथयतः** — भन्दै गरेको; **स्वयंम्** — आफैँ।

**व्यासका कृपाले मैले यी अत्यन्त गोपनीय वार्ताहरू योगेश्वर भगवान् श्रीकृष्णबाट प्रत्यक्ष सुनेँ। श्रीकृष्ण स्वयम् अर्जुनसँग यी कुरा भन्दै हुनु हुन्थ्यो।**

**तात्पर्य :** व्यास सञ्जयका गुरु थिए र व्यासका कृपाले गर्दा सञ्जयले भगवान्लाई बुझ्न सकेको कुरा उनी यहाँ स्वीकार गर्दछन्। यसको अर्थ हो श्रीकृष्णलाई सोझै बुझ्ने प्रयास नगरेर गुरुका माध्यमबाट बुझ्नु पर्दछ। गुरु एउटा पारदर्शी माध्यम हुनुहुन्छ, हुनत आफ्नै अनुभव अझ प्रत्यक्ष हुन्छ। यही नै गुरु-शिष्यपरम्पराको रहस्य हो। गुरु प्रामाणिक भएमा गुरुबाटै *भगवद्गीताको* प्रत्यक्ष श्रवण गर्न सकिन्छ। अर्जुनले यसरी नै सुनेका थिए। संसारभरि धेरै योगीहरू छन् तर श्रीकृष्ण ती सबै योगी र योगविधिहरूका स्वामी हुनुहुन्छ। *भगवद्गीतामा* स्पष्टसँग श्रीकृष्णको उपदेश वर्णित छ। उहाँ भन्नु हुन्छ— "मेरा शरणमा आऊ" जसले यस्तो गर्दछ त्यो सर्वश्रेष्ठ योगी हो। छैटौँ अध्यायको अन्तिम श्लोकमा **योगिनामपि सर्वेषाम्** भनेर यसको पुष्टि गरिएको छ।

नारद भगवान् श्रीकृष्णका प्रत्यक्ष शिष्य र व्यासका गुरु हुनुहुन्छ। त्यसैले व्यास अर्जुन जत्तिकै प्रामाणिक हुनुहुन्छ, किनभने हो गुरु-परम्परामा हुनुहुन्छ। सञ्जय व्यासका प्रत्यक्ष शिष्य हुन्। अतः व्यासका कृपाले सञ्जयका इन्द्रियहरू शुद्ध भए र उनले भगवान् श्रीकृष्णलाई प्रत्यक्ष देख्न र सुन्न

सके। श्रीकृष्णबाट प्रत्यक्ष सुन्न सक्नेले यो गोपनीय ज्ञानलाई बुझ्न सक्दछ। गुरुपरम्परामा नआउने मानिसले श्रीकृष्णको कुरा सुन्न सक्दैन। त्यसैले उसको ज्ञान सधैँ अपूर्ण रहन्छ। *भगवद्गीतालाई* बुझ्ने कुरामा पनि यही नियम लागू हुन्छ।

*भगवद्गीतामा* कर्मयोग, ज्ञानयोग र भक्तियोग आदि सम्पूर्ण योगविधिहरूको वर्णन गरिएको छ। भगवान् श्रीकृष्ण यस्ता सम्पूर्ण योगहरूका स्वामी हुनुहुन्छ। जसरी श्रीकृष्णलाई प्रत्यक्ष बुझ्न पाएको हुनाले अर्जुन अत्यन्त भाग्यमानी मानिन्छन्, त्यसै गरी व्यासका कृपाले सञ्जयले पनि श्रीकृष्णलाई प्रत्यक्ष सुन्न सके। वास्तवमा श्रीकृष्णबाट प्रत्यक्ष सुन्नुमा र श्रीकृष्णबाट व्यासजस्ता प्रामाणिक गुरुमार्फत प्रत्यक्ष रूपले सुन्नुमा कुनै अन्तर छैन। गुरु व्यासदेवका प्रतिनिधि मानिनुहुन्छ। त्यसैले वैदिक चलनअनुसार आफ्नो गुरुको जन्मदिवसमा शिष्यहरूद्वारा गरिने उत्सवलाई व्यासपूजा भनिन्छ।

**राजन् संस्मृत्य संस्मृत्य संवादमिममद्भुतम् ।**
**केशवार्जुनयोः पुण्यं हृष्यामि च मुहुर्मुहुः ॥ ७६ ॥**

**राजन्** — हे राजा; **संस्मृत्य** — सम्झेर; **संस्मृत्य** — सम्झेर; **सम्वादम्** — सन्देश (वार्ता); **इमम्** — यो; **अद्भुतम्** — आश्चर्यजनक; **केशव** — भगवान् श्रीकृष्णको; **अर्जुनयोः** — र अर्जुनको; **पुण्यम्** — पवित्र; **हृष्यामि** — हर्षित हुन्छु; **च** — पनि; **मुहुःमुहुः** — बारम्बार।

**हे राजन्! जब म बारम्बार भगवान् श्रीकृष्ण र अर्जुनका बीच भएको यो अद्भुत तथा पवित्र वार्तालापलाई सम्झन्छु, प्रतिक्षण गद्गद् हुँदै हर्षविभोर हुन्छु।**

**तात्पर्य :** *भगवद्गीताको* ज्ञान अत्यन्त अलौकिक छ। भगवान् श्रीकृष्ण र अर्जुनबीच भएको यो वार्तालापसँग परिचित हुने व्यक्ति धर्मात्मा बन्दछ र उसले यस्तो वार्तालापलाई भुल्न सक्दैन। यही नै आध्यात्मिक जीवनको दिव्य अवस्था हो। अर्को शब्दमा भन्दा जसले सही स्रोतबाट वा प्रत्यक्ष श्रीकृष्णबाट *भगवद्गीता* श्रवण गर्दछ त्यसले पूर्ण कृष्णभावनामृत प्राप्त गर्दछ। कृष्णभावनाको फलस्वरूप मानिस अत्यधिक प्रबुद्ध हुन्छ र केही समयका लागि मात्र नभएर उसका जीवनका प्रत्येक क्षण आनन्दमय भएर बित्दछन्।

**तच्च संस्मृत्य संस्मृत्य रूपमत्यद्भुतं हरेः ।**
**विस्मयो मे महान् राजन् हृष्यामि च पुनःपुनः ॥ ७७ ॥**

**तत्** — त्यो; **च** — पनि; **संस्मृत्य** — सम्झिएर; **संस्मृत्य** — सम्झिएर; **रूपम्** — रूप; **अति** — अत्यन्त; **अद्भुतम्** — आश्चर्यजनक; **हरेः** — भगवान् श्रीकृष्णको; **विस्मयः** — आश्चर्य; **मे** — मेरो; **महान्** — महान्; **राजन्** — हे राजन्; **हृष्यामि** — हर्षित भइरहेछु; **च** — पनि; **पुनःपुनः** — बारम्बार।

**हे राजन्! भगवान् श्रीकृष्णको अद्भुत रूप सम्झेर म झन् झन् आश्चर्यचकित हुन्छु र बारम्बार हर्षित हुन्छु।**

**तात्पर्य :** यस्तो लाग्दछ, सञ्जयले पनि व्यासका कृपाले गर्दा भगवान् श्रीकृष्णले अर्जुनलाई देखाउनु भएको विराट स्वरूपको दर्शन पाएका थिए। निःसन्देह भन्ने गरिन्छ— भगवान् श्रीकृष्णले यस्तो रूप योभन्दा पहिला कहिल्यै पनि देखाउनुभएको थिएन। यो केवल अर्जुनलाई मात्र देखाइएको थियो तैपनि अर्जुनलाई विराट रूप देखाउँदा अरू केही महान् भक्तहरूले पनि यसको दर्शन पाएका थिए र तीमध्ये एकजना व्यास पनि हुनुहुन्छ। व्यास भगवान्‌का एक महान् भक्त हुनुहुन्छ र उहाँ श्रीकृष्णका एक शक्तिशाली अवतार पनि मानिनुहुन्छ। यो कुरा व्यासले आफ्ना शिष्य सञ्जयसँग प्रकट गर्नभयो। सञ्जय पनि अर्जुनलाई देखाइएको श्रीकृष्णको त्यो अद्भुत रूप सम्झेर बारम्बार आनन्दित भइरहेका थिए।

**यत्र योगेश्वरः कृष्णो यत्र पार्थो धनुर्धरः ।**
**तत्र श्रीर्विजयो भूतिर्ध्रुवा नीतिर्मतिर्मम ॥ ७८ ॥**

**यत्र** — जहाँ; **योगेश्वरः** — योगका स्वामी; **कृष्णः** — भगवान् श्रीकृष्ण; **यत्र** — जहाँ; **पार्थः** — पृथाका छोरा; **धनुःधरः** — धनुषवाणधारी; **तत्र** — त्यहाँ; **श्रीः** — ऐश्वर्य; **विजयः** — विजय (जित); **भूतिः** — विलक्षण शक्ति; **ध्रुवा** — निश्चित; **नीतिः** — नैतिकता; **मतिःमम** — मेरो विचार।

**जहाँ योगेश्वर भगवान् श्रीकृष्ण हुनुहुन्छ र जहाँ परमधनुर्धारी अर्जुन छन्, निश्चय नै त्यहाँ ऐश्वर्य, विजय, अलौकिक शक्ति र नैतिकता रहन्छन् भन्ने मेरो विचार छ।**

**तात्पर्य :** धृतराष्ट्रको जिज्ञासासँगै *भगवद्गीताको* शुभारम्भ हुन्छ। उनी भीष्म, द्रोण र कर्णजस्ता महान् योद्धाहरूले सहायता गरिएका आफ्ना छोराहरूको विजयप्रति आशावादी थिए। विजय आफ्नै पक्षमा हुनेछ भन्ने आशा उनको थियो। तर युद्धक्षेत्रको दृश्यको वर्णन गरिसकेपछि सञ्जयले धृतराष्ट्रलाई भने, "राजन् तपाईं आफ्नो विजयका कुरा सोचिरहनुभएको होला तर मेरा विचारमा जहाँ भगवान् श्रीकृष्ण र अर्जुन उपस्थित हुनुहुनेछ, सम्पूर्ण शुभ र सौभाग्यको निवास त्यहीं हुनेछ।" सञ्जयले सीधै भनिदिए— धृतराष्ट्रले

आफ्ना पक्षको विजयको आशा नगरे हुन्छ। विजय निश्चय नै अर्जुनका पक्षको हुनेछ, किनभने त्यहाँ भगवान् श्रीकृष्ण हुनुहुन्छ। श्रीकृष्णले अर्जुनका लागि सारथीको पद स्वीकार गर्नु पनि उहाँको अर्को ऐश्वर्य प्रदर्शन थियो। श्रीकृष्ण सम्पूर्ण ऐश्वर्यले पूर्ण हुनुहुन्छ। वैराग्य तीमध्ये एक हो। यस्ता वैराग्यका धेरै उदाहरणहरू छन्, किनभने भगवान् श्रीकृष्ण वैराग्यका पनि स्वामी हुनुहुन्छ।

वास्तवमा युद्ध दुर्योधन र युधिष्ठिरका बीचमा भएको थियो। अर्जुन आफ्ना जेठा दाजु युधिष्ठिरका तर्फबाट लडिरहेका थिए। श्रीकृष्ण र अर्जुन युधिष्ठिरका पक्षमा भएकाले युधिष्ठिरको विजय निश्चित थियो। युद्धले संसारमा कसको शासन चल्दछ भन्ने निर्णय गर्नु थियो। सञ्जयले राज्यशक्ति युधिष्ठिरका हातमा जान्छ भन्ने भविष्यवाणी गरे। यहाँ अर्को एउटा भविष्यवाणी पनि भयो—त्यो के हो भने, युद्धमा विजय प्राप्त गरेपछि युधिष्ठिर झन् झन् वैभवशाली हुँदै जानेछन्, किनभने उनी केवल पुण्यात्मा र पवित्र मात्र थिएनन् साथै कडा नैतिकवादी पनि थिए। उनले आफ्नो जीवनभरि कहिल्यै झूटो बोलेनन्।

यस्ता धेरै अल्पज्ञ मानिसहरू पनि छन् जसले *भगवद्गीतालाई* युद्ध मैदानमा दुईजना मित्रहरूका बीचमा भएको छलफलको विषय मात्र ठान्दछन्। कोही भन्न सक्दछन्—यस्तो ग्रन्थ शास्त्र हुन सक्दैन। कुनै मानिसहरू श्रीकृष्णले अर्जुनलाई युद्ध गर्न प्रेरित गर्नुभएको हो, यो अनैतिक कार्य हो भनी विरोध पनि गर्न सक्दछन् तर स्थितिको वास्तविकतालाई हेर्दा *भगवद्गीता* नैतिकताको सर्वोच्च उपदेश हो भन्ने कुरा स्पष्ट देखिन्छ। नौ अध्यायको चौतीसौँ श्लोकमा परमनैतिकताको उपदेशको चर्चा गर्दै भनिएको छ—**मन्मना भव मद्भक्तः** मानिस भगवान् श्रीकृष्णको भक्त हुन पर्दछ र सम्पूर्ण धर्मको सार श्रीकृष्णको शरणमा पर्नु हो—**सर्वधर्मान् परित्यज्य मामेकं शरणं व्रज**। *भगवद्गीताको* उपदेशले धर्म र नैतिकताका परमविधिको निर्माण गर्दछ। अरू सम्पूर्ण विधिहरू शुद्धिकारक हुन सक्दछन् र परमविधिसम्म लैजाने माध्यम हुन सक्दछन् तर गीताको अन्तिम उपदेश भने सबै धर्म र नैतिकताको अन्तिम शब्द वा सार वचन हो र त्यो सार हो भगवान् श्रीकृष्णको शरणागति। यही नै अठारौँ अध्यायको निष्कर्ष हो।

*भगवद्गीताबाट* हामी के बुझ्दछौँ भने, दार्शनिक चिन्तन तथा ध्यान आत्मानुभूति गर्ने एउटा विधि हो तर भगवान श्रीकृष्णमा पूर्णतः शरणागत हुनु सर्वोच्च सिद्धि हो। यही नै *भगवद्गीताको* उपदेशको सार हो। सामाजिक जीवनको व्यवस्थाअनुसार र धर्मका विविध धाराअनुसार यज्ञ अनुष्ठानको

मार्ग ज्ञानको गुह्य (रहस्यपूर्ण) मार्ग हुन सक्दछ। धार्मिक अनुष्ठानहरू गुह्य (रहस्यपूर्ण) हुन् भने ध्यान र ज्ञानको विकास झन् गुह्यतर (अझ रहस्यपूर्ण) हुन् र पूर्णतया कृष्णभावनायुक्त भक्तिमा रहेर भगवान् श्रीकृष्णका शरणमा पर्नु गुह्यतम वा सर्वोत्तम रहस्यपूर्ण उपदेश हो। यही नै अठारौँ अध्यायको सार हो।

*भगवद्गीताको* अर्को विशेषता भगवान् श्रीकृष्ण नै वास्तविक सत्य हुनुहुन्छ भन्ने देखाउनु हो। परमसत्यको अनुभूति तीन रूपमा हुन्छ— निराकार ब्रह्मका रूपमा, अन्तर्यामी परमात्माका रूपमा र अन्त्यमा भगवान् श्रीकृष्णका रूपमा। परमसत्यको पूर्ण ज्ञान भन्नु नै भगवान् श्रीकृष्णको पूर्ण ज्ञान हो। श्रीकृष्णलाई बुझ्नसक्नु मूल ज्ञान हो भने ज्ञानका अन्य सबै शाखाहरू त्यसै ज्ञानका विभाग र उपविभागहरू मात्र हुन्। भगवान् श्रीकृष्ण दिव्य हुनुहुन्छ, किनभने उहाँ सधैँ आफ्नी अन्तरङ्गा शक्तिमा अवस्थित रहनु हुन्छ। जीवात्मा उहाँकै शक्तिका अभिव्यक्ति हुन्। ती दुई वर्गमा विभाजित छन्— नित्यबद्ध र नित्यमुक्त। यस्ता जीवहरू असङ्ख्य छन् र ती सबै श्रीकृष्णका मौलिक अंश हुन्। भौतिक शक्ति चौबीस विभाग वा तत्त्वमा प्रकट हुन्छ। सृष्टि शाश्वत समयद्वारा प्रभावित हुन्छ र बहिरङ्गा शक्तिद्वारा यसको सृजना र संहार हुन्छ। यो विश्व ब्रह्माण्ड बारम्बार प्रकट हुने र अप्रकट हुने अर्थात् दृश्य र अदृश्य हुने गर्दछ।

*भगवद्गीतामा* पाँचवटा प्रमुख विषयवस्तुको चर्चा गरिएको छ। ती हुन्— भगवान्, भौतिक प्रकृति, जीव, शाश्वत काल र सबै प्रकारका कर्म। यी सबै भगवान् श्रीकृष्णमा निर्भर छन्। परमसत्यसम्बन्धी सम्पूर्ण धारणाहरू निराकार ब्रह्म, अन्तर्यामी परमात्मा र अरू दिव्य अनुभूतिहरू भगवान्का ज्ञानका श्रेणीमा अन्तर्निहित छन्। सतही रूपमा हेर्दा भगवान्, जीव, प्रकृति र काल भिन्दाभिन्दै जस्ता लाग्दछन् तर कुनै पनि वस्तु ब्रह्मदेखि भिन्न छैनन्। यति हुँदाहुँदै पनि ब्रह्म सधैँ सम्पूर्ण वस्तुहरूदेखि भिन्न हुनुहुन्छ। भगवान् चैतन्यमहाप्रभुको दर्शनको नाम हो **अचिन्त्य भेदाभेद**। यो दर्शनको पद्धति परमसत्यको पूर्ण ज्ञानबाट निर्मित छ।

जीव आफ्नो मूल अवस्थामा शुद्ध आत्मा हो। ऊ परमात्माको एउटा परमाणु अंशजस्तो हो। यसरी भगवान् श्रीकृष्णलाई सूर्यसँग तुलना गर्न सकिन्छ र जीवलाई सूर्यको प्रकाशसँग। किनभने जीवात्माहरू श्रीकृष्णका तटस्था शक्ति हुन्। त्यसैले भौतिक शक्ति वा आध्यात्मिक शक्तिका सम्पर्कमा आउने प्रवृत्ति तिनीहरूमा हुन्छ। अर्को शब्दमा भन्दा जीव भगवान्का दुईवटा शक्तिका बीचमा अवस्थित छ। उसको सम्बन्ध भगवान्को पराशक्तिसँग पनि भएकाले उसमा आंशिक स्वतन्त्रता हुन्छ। यही स्वतन्त्रताको सदुपयोग

गरेर ऊ श्रीकृष्णको प्रत्यक्ष आदेशअन्तर्गत पर्दछ। यसरी जीवले आह्लादिनी शक्तिअन्तर्गत आफ्नो सामान्य अवस्थालाई प्राप्त गर्न सक्दछ।

यस प्रकार *श्रीमद्भगवद्गीता* ग्रन्थअन्तर्गत 'उपसंहारः संन्यासको पूर्णता' शीर्षक अठारौँ अध्यायको भक्तिवेदान्त तात्पर्य समाप्त भयो।

## परिशिष्ट

# लेखक परिचय

**कृष्णकृपाश्रीमूर्ति श्रीमद् ए.सी. भक्तिवेदान्त स्वामी प्रभुपाद**को जन्म १८९६ ई. मा भारतको कोलकाता नगरमा भएको थियो। आपना गुरुमहाराज **श्रील भक्तिसिद्धान्त सरस्वती**सँग १९२२ ई. मा कोलकातामा उहाँको पहिलो भेट भएको थियो। श्रील भक्तिसिद्धान्त सरस्वती त्यस समयका सुप्रसिद्ध धर्म-तत्त्व-वेत्ता अनुपम प्रचारक, विद्वान् र भक्त आचार्य हुनु हुन्थ्यो। उहाँले चौसट्ठीवटा गौडीय मठहरूको स्थापना गर्नुभएको छ। उहाँले यी सुशिक्षित नवयुवक (भक्तिवेदान्त स्वामी) लाई निकै मन पराउनुभयो साथै वैदिक ज्ञानको प्रचारका लागि जीवन उत्सर्ग गर्ने प्रेरणा पनि दिनुभयो। यसरी श्रीभक्तिवेदान्त स्वामी प्रभुपाद श्रील भक्तिसिद्धान्त सरस्वतीका विद्यार्थी बन्नुभयो। यसको एघार वर्षपछि अर्थात् १९३३ ई. मा प्रयाग (इलाहाबाद) मा प्रभुपादले विधिवत् दीक्षा ग्रहण गरेर उहाँको प्रिय शिष्य बन्नुभयो।

श्रील भक्तिसिद्धान्त सरस्वतीले पहिलो भेट (१९२२)मा नै श्रीप्रभुपादलाई अङ्ग्रेजी भाषाका माध्यमबाट वैदिक ज्ञानको प्रचार गर्ने अनुरोध गर्नुभएको थियो। पछिका वर्षहरूमा प्रभुपादले *श्रीमद्भगवद्गीताको* टीका लेख्नुका साथै गौडीय मठका कतिपय कार्यहरूमा सहयोग पुऱ्याउने काम गर्नुभयो। १९४४ ई. मा श्रीप्रभुपादले कसैको आर्थिक सहयोगबिना नै कोलकाताबाट एउटा अङ्ग्रेजी पाक्षिक पत्रिका प्रकाशित गर्न थाल्नुभयो। रचना-सम्पादन, पाण्डुलिपि टंकण (टाईपिङ) र मुद्रण सामग्रीको समेत व्यवस्था उहाँ आफैँले गर्नुहुन्थ्यो। यसरी पत्रिका छापेर पाठकहरूलाई एक-एक प्रति निःशुल्क वितरण गर्नुहुन्थ्यो। पत्रिकालाई बचाइराख्न उहाँले ठुलो सङ्घर्ष गर्नुपऱ्यो। सङ्घर्षकै परिणामस्वरूप पत्रिका प्रकाशित भइरह्यो; सुरु भएदेखि कहिल्यै बन्द भएन। अब उहाँका शिष्यहरूद्वारा संसारका ३१ भाषाहरूमा उक्त पत्रिका देश-विदेशबाट प्रकाशित हुनथालेको छ। उहाँको विद्वत्ता र भक्तिको कदर गरेर गौडीय वैष्णव समाजले १९४७ ई. मा उहाँलाई 'भक्तिवेदान्त' उपाधिद्वारा विभूषित र सम्मानित गऱ्यो। सन् १९५० मा उहाँ चौवन्न वर्षको उमेरमा गृहस्थ जीवन त्यागेर वानप्रस्थी हुनुभयो। त्यसपछि उहाँले आफ्नो अधिकांश समय अध्ययन र लेखनमा लगाउन थाल्नुभयो। त्यसपछि श्रीप्रभुपाद पवित्र तीर्थ वृन्दावनमा आएर अत्यन्त साधारण परिस्थितिमा राधादामोदर मन्दिर (एक मध्यकालीन ऐतिहासिक मन्दिर)मा बस्न थाल्नुभयो। त्यहाँ उहाँले गहिरो

अध्ययन र लेखनमा संलग्न रहेर केही वर्ष बिताउनुभयो। सन् १९५९ मा उहाँले सन्यास ग्रहण गर्नुभयो। यही राधा दामोदर मन्दिरमा नै उहाँले १८ हजार श्लोकसङ्ख्या भएको *श्रीमद्भगवद्को* सहित विस्तृत भाष्य लेख्न थाल्नुभयो। यो नै उहाँका जीवनको अत्यन्त महत्त्वपूर्ण ग्रन्थ मानिन्छ। उहाँले "अन्य लोकको सजिलो यात्रा" नामक ग्रन्थ पनि त्यही समयमा लेख्नुभएको हो। *भागवत्का* तीन खण्डहरू प्रकाशित भएपछि १९६५ ई. मा आफ्ना गुरुको सदिच्छा र उद्देश्य पूर्ण गर्न उहाँ संयुक्तराज्य अमेरिका पुग्नुभयो। त्यसपछि उहाँले भारतीय दर्शन तथा धर्मसँग सम्बन्धित अनेक ग्रन्थहरूको प्रामाणिक, भाष्य र सङ्क्षिप्त अध्ययन आदि प्रस्तुत गर्दै ६ दर्जनजति पुस्तकहरू लेख्नुभयो।

सन् १९६५ मा एउटा मालबाहक पानीजहाजद्वारा न्यूयोर्क पुग्दा उहाँ लगभग बिखर्ची हुनुहुन्थ्यो। भनिन्छ, त्यस समय उहासँग मात्र ४० रूपैयाँ बाँकी थियो। त्यहाँ अत्यन्त कष्टपूर्ण अवस्थामा एक वर्ष बिताएपछि १९६६ को जुलाईमा त्यहीँ नै उहाँले अन्तर्राष्ट्रिय कृष्णभावनामृत संघ (International Society for Krishna Consciusness-ISKCON)को स्थापना गर्नुभयो। १४ नोभेम्बर १९७७ ई. मा कृष्णबलराम मन्दिर वृन्दावनमा उहाँको देहावसान हुनुभन्दा अघि नै उहाँको कुशल मार्ग-निर्देशनमा विश्वभरिमा खुलेका १०० भन्दा बढी मन्दिरहरू, आश्रमहरू, गुरुकुल विद्यालयहरू र यस्तै संस्थाहरू तथा कैयौँ कृषिकेन्द्रहरूको सङ्गठित स्वरूपद्वारा यो इस्कोन एउटा बृहत् विश्वसंस्थाको रूपमा खडा भइसकेको थियो।

सन् १९६८ मा श्रील प्रभुपादद्वारा प्रयोगको रूपमा वैदिक समाजको आधारमा पश्चिमी भर्जिनियाको पहाडी इलाकामा **(New Vrindavan)** "नयाँ वृन्दावन"को स्थापना भयो। एक हजार एकडभन्दा पनि बढी भूभागमा रहेको यो समृद्ध नयाँ वृन्दावनको कृषिक्षेत्रबाट प्रोत्साहित भएर उहाँका शिष्यहरूले संयुक्तराज्य अमेरिका तथा अन्य देशहरूमा पनि यस्तै अनेक समुदायहरूको स्थापना गरेका छन्। १९७२ ई. मा श्रील प्रभुपादले 'डल्लास, टेक्सास' मा गुरुकुल विद्यालयको स्थापना गरेर पश्चिमी देशहरूमा प्राथमिक र माध्यमिक शिक्षामा वैदिक प्रणालीको सूत्रपात गर्नुभयो। त्यसपछि उहाँकै निर्देशनमा उहाँका शिष्यहरूले सम्पूर्ण विश्वमा १० भन्दा बढी गुरुकुल विद्यालयहरू खोलेका छन्। यी सबै विद्यालयहरूमध्ये जेठो विद्यालय हो श्रीवृन्दावनधामस्थित-"भक्तिवेदान्त स्वामी गुरुकुल"।

श्रील प्रभुपादले श्रीधाम मायापुर पश्चिम बङ्गालमा एउटा विशाल अन्तर्राष्ट्रिय केन्द्र निर्माण गर्ने प्रेरणा दिनुभएको छ। यहीँ नै वैदिक साहित्यको अध्ययन गर्ने एउटा सुनियोजित संस्थानको योजना गरिएको छ, जो लगभग

पूरा भइसकेको छ। वृन्दावनमा श्रीकृष्णबलराम मन्दिर र अन्तर्राष्ट्रिय अतिथि भवनको निर्माण भइसकेको छ। यो एउटा त्यस्तो केन्द्र बन्न पुगेको छ, जहाँ पश्चिमी मुलुकका मानिसहरू वैदिक संस्कृतिको मूलभूत स्वरूपसँग परिचित हुन सक्दछन्। मुम्बईमा पनि श्रीराधारास-बिहारीजीको मन्दिरका रूपमा एउटा विशाल सांस्कृतिक तथा शैक्षणिक केन्द्रको विकास भएको छ। यसबाहेक भारतका अन्य सबै महत्त्वपूर्ण ठाउँहरूमा हरे कृष्ण मन्दिर निर्माण गर्ने योजना छ।

श्रील प्रभुपादको सबैभन्दा ठुलो योगदान उहाँका ग्रन्थरत्नहरू हुन्। देश-विदेशका अनेक आधिकारिक विद्वान्हरूले उहाँका ग्रन्थहरूको प्रामाणिकता, गम्भीरता र स्पष्टताको मुक्तकण्ठले प्रशंसा गरेका छन् साथै उहाँका ग्रन्थहरू संसारका कैयौँ विश्वविद्यालय एवं महाविद्यालयका उच्चस्तरीय पाठयक्रममा पनि समावेश भएका छन्। उहाँका ग्रन्थहरू विश्वका सयभन्दा बढी भाषाहरूमा रूपान्तरित भइसकेका छन्। सन् १९७२ मा केवल प्रभुपादका ग्रन्थहरू प्रकाशित गर्न स्थापना भएको "भक्तिवेदान्त बुक ट्रष्ट" **(BBT)** भारतीय धर्म तथा दर्शनका क्षेत्रमा विश्वको सबभन्दा ठुलो प्रकाशन संस्था बन्नपुगेको छ। यस ट्रष्टको एउटा अत्यधिक आकर्षक प्रकाशन हो — श्रीचैतन्यचरितामृतको प्रकाशन। मूल बङ्गाली ग्रन्थको अङ्ग्रेजी र भाष्य प्रस्तुत गरिएको यो ग्रन्थ १७ खण्डमा छ, जुन प्रभुपादले केवल १८ महिनाको अवधिमा तयार पार्नुभएको थियो।

यसरी १९६५ देखि १९७७ सम्मको १२ वर्षको समयावधिमा उहाँले आफ्नो वृद्धावस्थाको कत्ति वास्ता नराखी व्याख्यान र पर्यटन गर्दै विश्वका छःवटा उपमहाद्वीपको १४ पटक परिक्रमा गर्नुभयो। यति व्यस्त कार्यक्रम हुँदाहुँदै पनि श्रील प्रभुपादको उर्वर लेखनी अविरल गतिले चलि नै रह्यो। उहाँका ग्रन्थहरूको सङ्ग्रह वैदिक धर्म-दर्शन, साहित्य र संस्कृतिको एउटा यथार्थ पुस्तकालय नै बन्नपुगेको छ।

# सन्दर्भ ग्रन्थसूची

*श्रीमद्भगवद्गीता* सम्पूर्ण वैदिक वाङ्मयको सारसंक्षेप हो त्यसैले यसका मूल श्लोकहरूको तात्पर्य पनि वैदिक साहित्यद्वारा परिपुष्ट छ। विशेषतः यसमा दिइएका उद्धरणहरू निम्नलिखित ग्रन्थहरूबाट उद्धृत गरिएका छन् ।


१. अथर्ववेद
२. अमृतविन्दु उपिनषद्
३. ईशोपिनषद्
४. उपदेशामृत
५. ऋग्वेद
६. कठोपिनषद्
७. कूर्मपुराण
८. कौषीतकी उपनिषद्
९. गर्ग उपनिषद्
१०. गीता माहात्म्य
११. गोपाल-तापनी उपनिषद्
१२. चैतन्य-चरितामृत
१३. छान्दोग्य उपनिषद्
१४. तैत्तिरीय उपनिषद्
१५. नारायण उपनिषद्
१६. नारद पञ्चारात्र
१७. नारायणीय
१८. निरुक्ति (कोश)
१९. नृसिंहपुराण
२०. पद्मपुराण
२१. पराशर स्मृति
२२. पुरुषबोधिनी उपनिषद्
२३. प्रश्न उपनिषद्
२४. बृहदारण्यक उपनिषद्
२५. बृहद् विष्णुस्मृति
२६. बृहन्नारदीय पुराण
२७. ब्रह्म-संहिता
२८. ब्रह्म-सूत्र
२९. भक्तिरसामृत सिन्धु
३०. महा उपनिषद्
३१. माध्यन्दिनायन श्रुति
३२. मुण्डक उपनिषद्
३३. मोक्ष धर्म
३४. योग-सूत्र
३५. वराहपुराण
३६. विष्णुपुराण
३७. वेदान्त-सूत्र
३८. श्रीमद्भागवत
३९. श्वेताश्वतर उपनिषद्
४०. सात्त्वत तन्त्र
४१. सुबल उपनिषद्
४२. स्तोत्ररन्त
४३. हरिभक्तिविलास

# श्लोकानुक्रमणिका

## अ

## आ

## द

## ध



## न

## प

## ब

## भ



## म

## र



## ल

## स

## ह



## क्ष

## ज्ञ

भगवद्गीता विश्वभरी नै भारतको आध्यात्मिक ज्ञानको मणिको रूपमा प्रसिद्ध छ। भगवान् श्रीकृष्णद्वारा आफ्ना घनिष्ठ मित्र अर्जुनलाई भन्नुभएको सारले युक्त सात सय श्लोकहरूले आत्मसाक्षात्कारको विज्ञानको लागि निश्चित मार्गदर्शन गर्दछ। वास्तवमा मानिसका आवश्यक स्वभाव, उसको परिवेश र अन्ततः भगवान् श्रीकृष्णसँग उसको सम्बन्धको विषयमा रहोस्योद्घाटन गर्ने यस समान अन्य कुनै ग्रन्थ छैन।

कृष्णकृपामूर्ति श्री श्रीमद् अभयचरणारविन्द भक्तिवेदान्त स्वामी प्रभुपाद (तस्विरमा) विश्वका अग्रगण्य वैदिक विद्वान् र शिक्षक हुनुहुन्छ र उहाँ भगवान् श्रीकृष्ण स्वयम्द्वारा प्रारम्भ गरिएको पूर्णतया आत्मसिद्ध आध्यात्मिक अविच्छिन्न गुरु-शिष्य परम्पराको प्रतिनिधित्व गर्नुहुन्छ। भगवद्गीताका अन्य संस्करणहरू भन्दा भिन्न यसमा उहाँले भगवान् श्रीकृष्णका गम्भीर सन्देशलाई कुनै पनि प्रकारको मिश्रण र आफ्ना निजी प्रेरित भावना रहित यथारूप प्रस्तुत गर्नुभएको छ।



ISBN 978-93-88883-29-0
90000 >


9 789388 883290

